# वेदमा विज्ञान

भाग १





वैज्ञानिक समालोचना

vedicBhela
veda and bigyan



# नारायण घिमिरे

## वेदमा विज्ञान प्रकाशन टिप्पणी:

 तनहुँ बन्दीपुरमा जन्मेका घिमिरे दुई दशकदेखि प्रवासी नेपालीको रूपमा क्यानडामा बरिष्ठ खाद्य तथा औषधि वैज्ञानिकको रूपमा कार्यरत छन्। ब्रह्माण्डीय चेतनाबाट उत्पन्न मानव चेतना र भौतिक देह ब्रह्माण्ड चेतनामा नै फर्कने वैदिक दर्शनभित्र रहेका जीवन निर्माण, जीवनयापन र जीवनको समाधिसँग सम्बन्धित हरेक तहका गतिविधिहरूको सूक्ष्म वैदिक र वैज्ञानिक विश्लेषणमा उनी लागिपरेका छन्। वेदमा विज्ञानको वैज्ञानिक समालोचना भाग १ कृति क्रियोल नेपाली भाषामा प्रकाशित गरी पाठकसम्म पुर्याउन पाउँदा क्यानेडियन वैदिक हेरिटेजले सन्तोषको अनुभव गरेको छ। साथै, लेखकलाई धन्यवाद दिँदै, पाठकहरूसँग संस्थाको तर्फबाट कृतज्ञता समेत व्यक्त गर्न चाहन्छ।






vedicBhela
veda and bigyan



Canadian Vedic Heritage





**मूल्यः** निःशुल्क (डिजिटल प्रति)।

**वेदमा विज्ञान भाग १**

# वैज्ञानिक समालोचना

नारायण घिमिरे

ISBN: ९७८-१-७३८१५६९-०-०

**प्रकाशकः क्यानेडियन वैदिक हेरिटेज।**



॥ श्री गणेशाय नमः ॥









॥ श्री गणेशाय नमः ॥




जीवनसाथी

प्रिय

कल्पनालाई

सप्रेम समर्पण



॥ श्री गणेशाय नमः ॥




# विषय सूची





॥ श्री गणेशाय नमः ॥








॥ श्री गणेशाय नमः ॥








॥ श्री गणेशाय नमः ॥








॥ श्री गणेशाय नमः ॥







# वेदमा विज्ञान किन ?

जब तपाईँ धर्म र अधर्मको कुरा गर्नु हुन्छ तब तपाइ लाई यो कुरा त्यो मानिस आस्तिक कि नास्तिक भनेको भन्ने लाग्छ होला। वेदको गहिराइमा पुगेर हेर्दा त्यो कुरा होइन। धर्म भनेको प्रकृतिमैत्री रहेर, सबैलाई समान सम्झेर, यो संसार मेरो मात्र होइन सारा चराचरको हो भन्ने अनुभूति गरेर अहिंसा पूर्ण नैतिक कार्यमा आफूलाई संलग्न गराउने कर्म गर्नु हो।

यथार्थमा भन्ने हो भने प्रकृतिको नियम सङ्गत आफ्नो कर्म गर्नु लाई धर्म भन्दछ। जसको तपाइले गरेको कार्य भन्दा उक्त कार्यको नियत प्रदान हुन्छ।





॥ श्री गणेशाय नमः ॥







दुर्घटना वाट चोट लागेको मानिसलाई निको गर्न डाक्टरले अप्रेसन गर्दा मान्छे लाई दुख्छ, बच्चा जन्माउने क्रममा स्त्री लाई पिडा हुन्छ। तर त्यसको नियत अहिंसा युक्त त छदै छ, तरिका समेत प्राकृतिक नियम मैत्री हुने गर्दछ। त्यसैले एक डाक्टर र एक आमाको त्यो कर्म साहसिक धर्म कर्म हो।

त्यसो भए यो आस्तिक - नास्तिक भनेको के हो भन्ने प्रश्न फेरी आउँछ। आफ्नो घरको कागती, बेसार, अदुवार तिते पाती चिया नचिन्ने आयातित चिया कफीको पारखी बनेको हामीलाई नास्तिक (Hertodox) र आस्तिक (Orthodox) भनेर ईश्वर मान्ने (Theist) र ईश्वर नमान्ने (Atheist) भन्ने पश्चिमा विचार भनेको भनी अनजानमै बोली













दिने गर्दछौ। अर्को तरीका वाट फरक तर्क पेस गर्ने गर्दछन्। जुन अत्यन्त ठुलो भ्रम (Blunder) हो। त्यसो हैन।

सिद्धान्त **नबुझेर** सामाजिक लेखक र वरिष्ठ साहित्यकार बनेका हरूले जो यो लोक (This World) र परलोक Trans-cendental World) हुन्छ भन्ने विश्वास गर्दछन्ति आस्तिक र नगर्ने नास्तिक भनी लेखने गरेको भेटिन्छ। यस दुनियाँ बाहिर समेत केही छ भन्ने आस्तिक र छैन भन्ने नास्तिक भन्ने गरेको भेटिन्छ। दुर्भाग्यवश त्यो पनि सही होइन।

यथार्थमा आस्तिक र नास्तिक शब्द वेद संग सम्बन्धित छ। वैदिक समयमा वेदलाई शब्द प्रमाण मान्ने गरिन्थ्यो। अर्थात् वेदमा भएका कुरा सत्य भनी









फेरी प्रमाणित गरिरहन नपर्ने सत्य कुरा ठानिन्थ्यो। अकाट्य सत्य मानिन्थ्यो। त्यसैको आधारमा कुनै कुरा सत्य रहेको नरहेको बारे वेद के भन्छ भनेर खोजिन्थ्यो।

जो व्यक्ति वेदको कुरालाई अन्तिम सत्य ठान्दछन्, वेदको कुरालाई शब्द प्रमाण मात्र सकिनेमा विश्वास राख्दछन् उनीहरूलाई आस्तिक भनिन्छ। जो वेद लाई अन्तिम सत्य मान्दैनन्, वेदको कुरालाई शब्द प्रमाण मात्र सकिनेमा विश्वास राख्न सक्दैनन् उनीहरूलाई नास्तिक भनिन्छ।

वैदिककालको निकै लामो समय सम्म पृथ्वीमा हाम्रो समाज आस्तिक रह्यो। कालान्तरमा समाजले वेदको मर्म विपरीत समान चिज कुनैको राक्षसी करण र कुनैको देवत्व करण जस्ता व्याख्याले









जन्माएको असहज परम्परा स्विकार्न सकेन। गरिएका व्याख्या यदि वेदका सन्देश हुन् भने वेदको सबै कुराहरू लाई यथास्थितिमै हुबहु शब्द प्रमाण मात्र सकिनेमा समाज विश्वस्तहुन सकेन। त्यसको विरोधमा मूलतः तिन विचार धारा जन्मियो।

ऋषि बृहस्पतिको दर्शनमा आधारित चार्वाक दर्शन, महापुरुष महावीरको (जम्मा २४ त्रिशङ्करमा अन्तिम त्रिशङ्कर) जैन र महापुरुष बुद्धको बुद्ध दर्शन। यी तिन दर्शनले तत्कालीन वेदका व्याख्या लाई यथा स्थितिमै हुबहु शब्द प्रमाणको रूपमा स्विकार्दैन।

जैनदर्शन पछि दुई फक्लेटा भयो। श्वेतांबर र दिगम्बर। बौद्ध समेत दुई ठुलो परम्परा हीनयान र महायानमा विभाजित भयो। त्यसपछि फेरी बुद्ध दर्शनमा १९५६ मा अर्को नयाँ तेस्रो






परम्परा (बिसौँ शताब्दीको डा.अंबेडकरको मध्यम वाट) जन्मियो। त्यो थियो पुनर्जीवित रूप नवयान।

तत्कालीन समयमा विकल्पमा प्रस्तुत दर्शनहरूमा तात्त्विक रूपमा धेरैमा अधिक समानता रहेता पनि चार्वाक दर्शन अलि फरक थियो। जस अन्तर्गत जसरी हुन्छ आफ्नो जीवनलाई मोज मस्तीमा लिप्त गराऊ, जिऊ भन्ने दर्शनको विकास गरिएको छ। यसले हाम्रो यो जीवन भन्दा पहिले पनि कुनै जीवन थिएन। मरेपछि पनि सबै सकियो भन्ने मान्दछ।

सुरुवाती चरण जैन र बुद्ध दर्शनमा प्रस्ट अवधारणा आउन नसक्नु स्वाभाविकै थियो। सुरुवातमा जैन र बुद्ध दर्शनमा जीवन बारे अत्यन्त विरोधाभास कुराहरू रहे। कति कुराहरूको गलत प्रयोग भयो।








नयाँ मान्यता अनुरूप वेदको नजीकैको तर सुधारिएको केही फरक दर्शन प्रतिपादन गरियो। तत्कालीन समयमा वैदिक संरचनागत मान्यताको खिलाफमा नै फरक तिन दर्शन अघि आएकोले तिनीहरूले वेदलाई हुबहु शब्द प्रमाणको रूपमा स्विकार्न सम्भव थिएन। वेदलाई हुबहु शब्द प्रमाण नमान्ने ती सबै दर्शनहरू नास्तिक मानिए।

कालान्तरमा वेदको गहिरो अध्ययन पश्चात् नास्तिक दर्शनमा रहेका कतिपय कुराहरू वेदमा नै उल्लेख रहेको सङ्केतहरू मानिसहरूले भेट्टाउन थाले। नयाँ व्याख्या हुन गयो। वेदका राम्ररी उत्खनन नभएका पक्षलाई फरक फरक छ सिद्धान्तमा टुक्राएर हेर्न सकियो। जसले गर्दा वेदमा भएका कुरा प्रमाणको रूपमा लिन सकिने तर त्यसको भनाइहरू जे








भनिएको रहेछ त्यो अनुरूप बुझ्न सक्नु पर्ने निष्कर्ष निक्लियो। जस अनुसार वेदलाई पुनः गहिराइमा पुगेर त्यसको गहिरा पक्षमा चिन्तन गरियो।

जस अनुरूप सांख्य (Sāṅkhya) दर्शन र योग (Yog) दर्शन, न्यायदर्शन (Episte-mology ज्ञान मीमांसा) र वैशेषिक दर्शन (Metaphysics तत्त्व मीमांसा, अध्यात्मविज्ञान, आत्मतत्त्वज्ञान), तथा मीमांसा (सामूहिक कार्यको वा यज्ञको विस्तृत विवेचना) र वेदान्त (Vedanta उपनिषद, वेदको अन्तिम भाग, वेदको सार) गरी आपसमा सम्बन्धित छ दर्शन मिलाएर वेदको गहिरो ज्ञान समाजमा ल्याइयो। जस अन्तर्गत वास्तवमै वेदका कुरा प्रमाणको रूपमा लिन सकिने कुरा पुनः पुष्टि गरियो।









उल्लेखित छ वटा दर्शनलाई जब तपाईँ एकै ठाउँमा जोड्नुहुन्छ त्यसलाई षट् (छ वटा) दर्शन भनिन्छ। त्यही षट् दर्शनलाई श्रुति मानियो। सनातन संस्कृति वा दर्शन भनियो। सनातन संस्कृति वा दर्शन अन्तर्गत हुने सनातन मैत्री कर्मलाई सनातन धर्म भनियो। जसलाई पछि हिन्दु धर्म नाममा व्यापक प्रचार गरियो। सनातन धर्मको व्याख्या गर्ने नियतमा विभिन्न स्मृतिहरूको समेत रचना गरी त्यसलाई समाजमा पुऱ्याइयो।

तिनै स्मृतिहरूमा कालान्तरमा सामाजिक स्वार्थ, अहङ्कार र प्रतिशोध साध्ने अवसर अवसरको लागि, आफूलाई कुलीन वर्गमा परिवर्तन गर्ने भित्री कुनियतले आफ्नो स्वार्थ सिद्धि गर्न सहज गर्ने सन्देशहरू असल सन्देशका पुरिया भित्र समावेश










गरी समाजमा सम्प्रेषण गर्ने काम भयो। वेदको मान्यता विपरीतको आपराधिक पाखण्ड जस्तैः जातपात, कुल, घराना, लिङ्ग, सानो ठुलो आदिको नाममा समाजमा फुट गर्ने र राज गर्ने तथा सामाजिक शोषण संस्थागत गर्ने गर्ने उपायको रूपमा समेत दुरुपयोग हुन थाल्यो।

यसो हुनुको पछाडि निकै गम्भीर कारणहरू छन्। वैदिक कालमा अक्षरमा लेख्ने चलन थिएन। सबै कुराहरू मन्त्र वा सूत्रको रूपमा बनाएर पुस्तान्तरण गरियो। घोकेर सम्झेर हस्तान्तरण गरिने सूत्र निकै कम शब्दमा बनाउनु जरुरी थियो। जसमा गहिरो अर्थ दिने ऋचा उपयोग हुन्थ्यो। जुन सर्वधारणको ज्ञानले बुझ्न सहज भएन। त्यसलाई डिकोड गरी व्याख्या जरुरी हुन्थ्यो।













ऋचाहरू तुलनात्मक रूपमा छोटो वाक्य वा वृत्ति (टीका) हुने भएकाले टीकाको अर्थ स्पष्ट गर्नका लागि रचना गरिएका कथा वा व्याख्याहरूलाई टिप्पणी लेख्नु (भाष्य) भनिन्छ। मन्त्र वा सूत्रको व्याख्या गर्न थप सरल भाष्य र टीकाहरू उपयोग गर्न जरुरी थियो। त्यसै गरियो।

त्यसै अनुरूप जटिल रूपको उपनिषद् (वेद व्यास), अलि सहज सूत्रको रूपको महर्षि बद्रयनको (वेद व्यास) ब्रम्ह्सुत्र र सहज भाषाको गीता (वेद व्यासको) अस्तित्वमा देखिए। त्यस बाहेक अन्य निकै विवादित बन्न पुगेका मनुस्मृति, गरुड पुराण प्रेत कल्प आदि समेत रचना गरिए।

निकै विवादित बन्न पुगेका कतिपय ग्रन्थ हाम्रो समाजमा अधिक वाचन हुने ग्रन्थ समेत बने।











तिनीहरु सहज रूपमा बुझ्ने ग्रन्थ बन्यो। भाषामा थिए। असली वैदिक ज्ञानका गीता र वेद भने सर्वसाधारणको लागि बुझ्न अलि असहज प्रकृतिका थिएनन्। जसले गर्दा तिनीहरूको सन्देश समाजका अलि कम जाने परिस्थिति बन्यो।

मन्त्र वा सूत्रको रूपमा बनाएर पुस्तान्तरण हुँदै आएको टीका तथा तिनको छोटो व्याख्या रुपी भाष्यको डिकोड चुनौती पूर्ण थियो। ठिक त्यही बिन्दुमा भएका टिप्पणी गत व्याख्याहरूमा नियत खराब रहँदा विवाद युक्त व्याख्याहरू गरिए। विषयको चुरो नबुझी सीमित संस्कृतको ज्ञानको आधारमा भएका अनुमानित अर्थले दिने अनर्थ समाजमा सम्प्रेषण गरिए। फलतः त्यसका वास्तविक अर्थको व्याख्या हुँदै गर्दाको समयमा













समेत अर्थ सही लागे नलागेको बारे अधिक शङ्काको रूपमा हेरिने अवस्था बन्यो। यस्ता परिस्थितिले एकै टीकाको फरक फरक व्याख्याहरू आउनुको कारक बन्यो।

यस कमजोरी लाई पश्चिमा मेसिनरिको संकेत अनुरुप आफ्नो कलम घुमाइ दिने सामाजिक लेखक र वरिष्ठ साहित्यकार बनेकाहरूले सनातन विरुद्ध आगो उकेल्ने अवसरको रूपमा सदुपयोग गरे। वेदको 'व' समेतको ज्ञान नभएकाहरूको अन्दाजमा वेद विपरीतका कुराहरू वेदको भनाइ भन्दै समाजमा पुग्यो। एक अर्थमा समाज माइथोलोजि ग्रस्त बन्यो।

अनुमानको भरमा समाजमा चलेको माइथोलोजिको अतिरञ्जना झन्डै ४० वर्ष नेपाली साहित्य, शिक्षा र





॥ श्री गणेशाय नमः ॥





सामाजिक चेतना सम्प्रेषण गर्ने माध्यमहरूमा एकाधिकार अधिपत्व जमाउन सफल रहेका प्रगतिवादी भनिएका भुईँफुट्टा वर्गको सनातन माथि निरन्तर गुलेली प्रहार गर्ने मट्याङ्ग्रा बने।

सम्पूर्ण सनातनीहरूको मकैबारी एक्लैले फाँडी दिन सक्ने महिषासुर अवतारमा आफूले आफूलाई अनुभूति गर्ने प्रगतिवादी गनिएको केही भुईँफुट्टा वर्गको अहङ्कारले उनीहरू वैज्ञानिक तथ्यको ज्ञाता रहेको दाबी गरेको देखिन्थ्यो। पापी पेट र दाना पानीको जोहोको लागि आएको खराब नियतका माइथोलोजि युक्त अतिरञ्जनाहरू वारेको भ्रम चिर्ने कार्य स्वयं वैदिक समुदाय वाट समेत खासै गरिएन।

त्यसैको नतिजाले वेदमा रहेका अविद्या र विद्याका









ज्ञानबाट हाम्रो समाजलाई वञ्चित मात्र गरेन आफ्नै रैथाने ज्ञान, सीप र उच्च उद्यमशीलताको सम्भावनालाई समेत नेपाली युवा र उद्यमीको पहुँच वाट निकै पर धकेली दियो। विदेशी ज्ञान, उत्पादन र प्रविधिको मुलुक एकाधिकार बजारमा रूपान्तरित हुन पुग्यो। जिउँदो युवा वर्ग आफ्नै मुलुकमा निराश बनेर अधिक सङ्ख्यामा विदेश पलायन हुने वातावरण जन्मियो।

वेदका कुराहरू यथार्थमा सत्य छन्। आजको दिन सम्म आइपुग्दा समेत विज्ञानले वेदका कुराहरू परीक्षण गरेर सत्य रहे नरहेको यकिन गर्न सक्ने क्षमता विकास गर्न सकेको छैन। विज्ञानले आफ्नो क्षमता त्यो हद सम्म विकास नगर्दा सम्म हामी हाम्रो अनुभूति मार्फत सत्य रहेको महसुस गरिरहेको








वैदिक भनाइहरू आफ्नो अनुभवको आधारमा नै सत्य रहेको मान्न पर्ने अवस्थामा छौ।

विज्ञानले बिस्तारै आफ्नो क्षमता विकास गर्ने क्रममा विकसित भएको क्वान्टम मेकानिक्सले विज्ञानमा नयाँ मोड दिन सकेको छ। एक पछि अर्को गर्दै, वैदिक सनातनीहरूले आशा गरे भन्दा तिव्र गतिमा वेदका कुराहरू विज्ञानले सत्यको नजिक रहेको को प्रमाणित गरी दिन थालेको छ।

क्वान्टम मेकानिक्सले उजागर गरेका नयाँ नयाँ तथ्यको ज्ञानले हामीलाई समेत वेदका मन्त्र वा सूत्रले यथार्थमा यसो भनेको रहेछन् भनी नयाँ सिराबाट बुझ्न र व्याख्या गर्न थप सरल बनाइ रहेको छ। भाष्य र टीकाहरूका अन्तर्यमा पुगेर उपयोग गरी नयाँ तरिकाले व्याख्या गर्न अब हामी वेदमा









विज्ञानको सहारा लिन सक्ने हदमा पुग्न सकेका छौ।

**आदरणीय मित्रहरू,**

मलाई मेरो वेदमा विज्ञानको यात्रा त्यति सहज छैन। वेदमा विज्ञानको क्षेत्र र मार्गमा निकै धेरै समय, शक्ति, साधन र श्रोतको जरुरत पर्दछ। तपाईँहरूको आशीर्वादले मैले मेरो हालको आम्दानीको मात्र २५% खर्च गरी आफ्नो गुजारा गरेर ७५% यस कार्यमा लगाएरै भए पनि मैले प्राप्त गरेको कुराहरू निःशुल्क तपाईँहरू समक्ष ल्याउन कोसिस गरेको छु। त्यसमा म ईश्वर प्रति धन्य छु। आभारव्यक्त गर्दछु। म यो काममा लागि निरन्तर लागि रहने प्रतिज्ञा समेत गर्दछु।

वेदमा विज्ञानको काममा भएको विरोधमा मलाई




कुनै आपत्ति छैन। मलाई निरुत्साहित गर्न आउने साथीहरू संग पनि म नाराज हैन। मात्र हैरान छु। परमात्मा कै कृपाले होला, मलाई मेरो अत्यन्त नजिकका मानवरुपी साक्षात् देवी तथा देवहरू, यथार्थमा हाम्रा पनि र राम्रा पनि आफन्तहरुको नबोलेर नै निकै ठुलो मनोवैज्ञानिक प्रेरणा दिई रहेका छन्।

निरुत्साहितगर्न आउने साथीहरूले दिने हैरानीले कहिले कहीँ अनुसन्धान गर्न जरुरी हुने एकान्त र एकाग्रता लाई मार्ने रहेछ। त्यसैले त्यस्तो प्रयास लाई रोक्न सामाजिक सञ्जालको प्रयास, फोनकल, इमेल बेवास्ता गर्ने गर्दै मेरो काम अघि बढी रहेको छ। मेरो साधन र श्रोतले भ्याए सम्म म अवश्य यो वेदमा विज्ञानको पाटोको थप उत्खननमा लाग्ने नै





छु। जति सक्छु गर्ने छु। भेटेको कुराहरू तपाईहरू सामु जस्तो भेटैं त्यस्तै राखिदिने छु। यो क्रममा ईरर इन द जजमेन्टका करण मेरो लेखाइ र बुझाइमा कुनै गल्ती वा कमजोरी भएको रहेछ भने तिनीहरू लाई हाम्रा नयाँ पुस्ताले पक्कै पक्डिएर सुधार गर्ने नै छन्। त्यसैले त्यो बारे म अधिक चिन्तित रहेको छैन।

## वेदमा विज्ञान अभियान

वेद र अन्य प्राचीन वैदिक ग्रन्थहरूले ज्ञानलाई स्वतन्त्र रूपमा फैलाउने पर्ने जरुरी रहेको तथ्यलाई जोडदिएको भेटिन्छ। राज्यले आफ्नो आर्थिक अवस्था जस्तो भए पनि शिक्षा सबैलाई निःशुल्क







उपलब्ध गराउनु पर्ने कुरा उल्लेख गरेको छ। तलका केही श्लोकहरूले ज्ञानलाई निःशुल्क रूपमा उपलब्ध होस् र फैलाउने अवस्था सृजना गरियोस भन्ने विचारलाई समर्थन गर्छन्।

**आ नो भद्राः क्रतवो यन्तु विश्वतः ।।**

**।। ऋग्वेद १.८९.१।।**

सबैतिर वाट शुभ विचारहरू आउन देऊ।

यस श्लोकले ज्ञानमा सबैको सार्वभौमिक साझेदारी र जरुरतको पक्ष पोषण गर्दछ। जसले समाजको हितका लागि सहज ज्ञान फैलाउन पर्ने जरुरत हुने विचारधारा लाई प्रोत्साहन दिन्छ।

**विद्यां चाविद्यां चयस्तद्वेदोभयं सह ।**













**अविद्यया मृत्युं तीर्त्वाविद्ययामृतमश्नुते।।**

**।। ईशोपनिषद्, मंत्र ११ ।।**

भौतिक विज्ञानका (अविद्या) साथसाथै अध्यात्म विज्ञान (विद्या) जान्ने व्यक्तिले शारीरिक, मानसिक तथा आध्यात्मिक ऊर्जा मन (आत्म) शुद्धतामा प्रभावकारी रूपमा उपयोग गरी मृत्युको भयबाट बाहिर निस्केर मुक्ति प्राप्त गर्न सक्दछ।

**विद्यां चाविद्यां चयस्तद्वेदोभय सः ।।**

**।। तैत्तिरीय उपनिषद १.११.३ ।**

ज्ञान र अज्ञान दुवैलाई जानेपछि अज्ञानताले मृत्युको भयलाई पार गर्न र ज्ञान द्वारा अमरत्व प्राप्त गर्न सम्भव हुन्छ।











माथिको दुवै श्लोक एकै हुन्। यो श्लोकले ज्ञानको महत्त्व र अज्ञानलाई परास्त गर्न ज्ञानको भूमिकामा जोड दिएको छ। विज्ञानको ज्ञान विना ज्ञानको चुरोमा पुग्न नसकिने प्रस्ट गर्दै यो श्लोकले प्रत्यक्ष रूपमा भौतिक विज्ञानका (अविद्या) साथसाथै अध्यात्म (विद्या) ज्ञानलाई विस्तृत रूपमा फैलाउनुपर्ने अनिवार्यताको कुरालाई जनाउँछ।

**अन्नदानं परं दानं विद्यादानमतःपरम् ।**

**अन्नेन क्षणिकातृप्तिर्यावज्जीवं च विद्यया ॥**

**॥सुभाषितम् ॥**

भोजन दान उत्तम दान हो भने विद्या दान सर्वोत्तम दान हो।

कारण: खानाले क्षणभरको लागि सन्तुष्टि मिल्छ।













विद्याले जीवन भर सन्तुष्ट हुने उपाय सिकाउने गर्दछ।

नोट: तलब र शुल्क लिएर गरिने सेवा दान होइन। व्यापार हो। त्यो पनि उत्तम हो। विद्याको अर्थ अविद्या (विज्ञान) र आत्म ज्ञान (अध्यात्म विद्या समेतको ज्ञान) जस्तै वैदिक ज्ञान जस्ता ज्ञानको कुरा गर्दछ।

ज्ञानको दान सबैभन्दा ठुलो दान हो भन्ने अवधारणा उही शब्दावलीमा नभेटिए पनि वैदिक र उत्तर वैदिक ग्रन्थहरूको धेरै ठाउँमा यो कुराको उल्लेख भएको पाइने भएकोले यसलाई सुभाषितम् अर्थात् अत्यन्त गहन र सत्य कुरा भनी प्रचलनमा आएको हितोपदेश मान्दछ। तलका यस्ता केही सन्दर्भहरूले माथि उल्लेखित सुभाषितम् विचार प्रतिबिम्बित







गर्छ।

**मुण्डक उपनिषद् (१.१.३):**

**द्वे विद्ये वेदितव्ये परा चापरा च।**

दुई प्रकारका विद्याहरू अनिवार्य छ। उच्च आध्यात्मिक आत्मा ज्ञान (वैदिक / आध्यात्मिक विद्या) र अर्को व्यवहारिक विज्ञान (सांसारिक अविद्या)।

यस श्लोकले भौतिक ज्ञान विनाको आध्यात्मिक ज्ञानको नतिजा अनैतिक हुने प्रस्ट गर्छ। भौतिक ज्ञानले इन्द्रिय सुख देला तर जीवनको उद्देश्य पहिल्याउन सक्दैन। अहिंसा र नैतिक मूल्य कायम गर्ला भन्ने निश्चित गर्दैन। परोपकार र सामाजिक न्यायको पक्षमा हुने निश्चय हुँदैन।







अर्कोतर्फ आध्यात्मिक ज्ञान प्राप्तिको अनिवार्य पुर्बधार भनेको भौतिक ज्ञान विज्ञान हो। भौतिक ज्ञान विज्ञान विनाको अध्यात्म पाखण्ड हो। वेदको सन्देशले दिने मान्यता विपरीतको कार्यलाई पाखण्ड भनिछ। पाखण्ड ज्ञानले ज्ञानीलाई समाजको परजीवी बनाउने गर्दछ। आफ्नो भौतिक जीविकोपार्जनको लागि उ कि त परिवारको, कि समाजको वा कि राज्यको परजीवी बन्दछ।

जुन भ्रष्टाचारको पहिलो खुड्किलो बन्दछ। त्यसले ज्ञानी भनिएका व्यक्तिलाई आफ्नो भौतिक सुखको लागि कि इमोसनल, कि धार्मिक, कि आध्यात्मिक वा कि सामाजिक र राजनैतिक बिचौलिया रूपको अत्याचारी; अर्काको हक, अधिकार, रूप, यौवन र सम्पत्तिको बलात्कारी व्यक्तित्वको रूपमा विकास






गरिदिने उच्च सम्भावना रहन्छ।

यसको अर्थ हो व्यक्तिमा विज्ञान र वेद दुवैको ज्ञान अनिवार्य छ। वैराग्य र विज्ञान लाई 'वेदमा विज्ञान' ले जोडदछ।

विज्ञानले भौतिक ज्ञान, सीप, प्रविधि र भौतिक संवृद्धि जस्ता अविद्या दिएर व्यक्तिलाई आत्मा निर्भर गर्दछ। अध्यात्म र आत्मा ज्ञानले उद्देश्य उन्मुख जीवन, नैतिकता, अहिंसा, धन्यता र करुणा जस्ता अविद्यालाई विद्याको रूपमा परिवर्तन गरिदिने तत्त्व थपिदिन्छ। त्यसैले वेदमा विज्ञानजस्ता ज्ञानको समाजमा सर्वत्र उपलब्धताको अनिवार्यता भएको हो।

**छान्दोग्य उपनिषद् (७.१.२):**











**यदेव विद्यया करोति श्रद्धयोपनिषदा तदेव वीर्यवत्तरंभवति।**

जुन जुन कर्महरू ज्ञान, अनुभूति, विश्वास र ध्यान पूर्वक गरिन्छत्यो अधिक प्रभावकारी मात्र होइन अत्यधिकअर्थपूर्ण समेत हुन्छ।

यस ऋचाले सबै प्रकारका कर्महरूमा उक्त कर्मको विषय बस्तु वारेको गहिरो ज्ञान (विद्या) ले त्यसको उपयोगिता (मूल्य) र प्रभावकारिता (शक्ति) थप्ने हुनाले विद्यालाई हरेक कर्मको रूपान्तरणकारी शक्ति भनी पहिचान गरेको छ।

**भगवद गीता (अध्याय ४, श्लोक ३३):**

**श्रेयान्द्रव्यमयाद्यज्ञाज्ज्ञानयज्ञः परन्तप।**

समाजमा भौतिक वस्तुको दानको भन्दा ज्ञानको







दानको सदैव उत्कृष्ट प्रभाव कारिता हुने गर्दछ।

यस श्लोकमा कृष्णले अर्जुनलाई भन्नु हुन्छ कि ज्ञानको दान (ज्ञान यज्ञ) कुनै पनि भौतिक भन्दा अधिक श्रेष्ठ हुनेगर्दछ।

**महाभारत (अनुशासन पर्व ९३.४६):**

**न विद्यया विद्यते किञ्चित्।**

विद्या भन्दा उच्च जीवनमा अरूकेही हुँदैन।

यस श्लोकले भनिरहेको छ कि ज्ञानसबै उत्तम सम्पत्ति हो।

**बृहदारण्यक उपनिषद् (४.४.२२):**

**तमोऽसि मा ज्योतिगमय।**

अन्धकार अर्थात् अज्ञान (संस्कृतको पहिलो अक्षर











**अ**) वाट प्रकाश (भर्गो ज्योति) अर्थात् ज्ञानको (संस्कृतको अन्तिम अक्षर **ज्ञ**) यात्रामा आफ्नो जीवनसमर्पित गर।

यो ऋचाले मानिस आफ्नो सम्पूर्ण जीवन भर अज्ञान (अन्धकार) बाट ज्ञान (प्रकाश) तर्फको यात्रामा रहनु पर्ने जरुरतको प्रस्ट गर्दछ। यसले वेद र विज्ञान जस्ता ज्ञान मानिसको जीवनको हरेक क्षणमा अत्यन्त जरुरी पर्ने ज्ञान रहेको कुराको पुष्टि गर्दछ।

यसरी समग्रमा वैदिक उपनिषद, उत्तर वैदिक ग्रन्थहरू र वेदका विज्ञान र ज्ञान सबैकोअन्तिम निचोडको रूपमा देखिएको आधारभूत विचारले ज्ञान हरेक लाई हरेक समयमा चाहिने सबैभन्दा मूल्यवान् सम्पत्ति रहेकाले त्यसको उपहार यो









संसारमा एक व्यक्तिले गर्नसक्ने कुनै पनि किसिमका भौतिक सम्पत्तिहरू भन्दा उच्च मूल्यको रूपान्तरणकारी प्रभाव दिने विषय हो भनी यकिन गर्दछ।

त्यसैले हरेकले वेदमा विज्ञान जस्ता ज्ञान समाजमा निःशुल्क सर्वत्र व्याप्त गर्न सहयोग गर्न उपयुक्त हुने छ। सकिन्छ भने त्यसमै आफ्नो दानको लागि उपलब्ध रहेको धन लगाउनु सर्वोच्च दान हुने छ भन्ने वेदले मानेको छ। साथै वेदको चुरो मान्यतामा विद्याको उपलब्धता आर्थिक क्षमतामा निर्भर नहुने बनाउन समेत सक्नेहरू लाई यो पुण्य कार्यमा आफ्नो क्षमता भित्र सीमित रहेर आफूलाई उपयुक्त लागेको मात्रामा खर्चन र उदारता पूर्वक यस्ता ज्ञानलाई फैलाउन केही जिम्मेवारी लिन समेत भद्र









आग्रह गरेको देखिन्छ।

डिजिटल वेदमा विज्ञान पुस्तक यिनै सन्देशहरू वाट प्रभावित अभियानको सानो रूप हो।

# वेदमा विज्ञानको औचित्य

ऋग्वेद, यजुर्वेद जस्ता वैदिक श्रुतिको हरेक उल्था वा व्याख्या अत्यधिक विवादास्पद विषय बन्ने गर्छ। त्यसका आफ्नै कारण छन्। प्राप्त सीमित अनुवादमा वेदमा उल्लिखित मन्त्रहरू सर्वसाधारणले बुझ्ने भाषामा उल्था वा भावार्थ खुल्ने गरी जब व्याख्या गरिन्छ तब त्यस विषयमा ज्ञानराख्ने विद्वान् वर्गको समीक्षाको क्रममा विवादको घेरामा तानिन्छन् ।

हरेक व्यक्तिमा वैदिक श्रुतिहरूको बुझाइमा फरक










फरक अवधारणा विकास हुनु र उनीहरूको धारणामा निजी मान्यताको भावनात्मक तथा आध्यात्मिक पक्ष समेत समीक्षाका क्रममा मिसिन पुग्नुले अनुवाद वा व्याख्याको पूर्णताको हदको सम्बन्धमा उक्त प्रकारका जटिलता निम्त्याउने गरेकोछ ।

पहिलो त ऋग्वेद जस्ता वैदिक श्रुतिहरूको जोसुकैले जस्तोसुकै अनुवाद वा व्याख्या गरे पनि उक्त कृति पूर्ण हुन नसक्ने धरातलको मनन गर्नु जरुरी देखिन्छ। दोस्रो अनुवादकले बुझ्न सकेको विषयको गम्भीरताले यसमा भूमिका खेल्छ । तेस्रोमा ज्ञान र विज्ञानको कसीमा सम्बन्धित विषय वस्तु बारे अनुवादकको समझ के छ त्यो महत्वपूर्ण हुन्छ । त्यसका साथै अनुवादकमा समय, काल, परिस्थिति













जन्य विषय सन्दर्भ र आजको समयको सन्दर्भको समेत मूल्यांकन गरी प्रस्तुत गर्ने बहुआयामिक ज्ञान र क्षमताले प्रचुर भूमिका खेल्ने छ। जब यी वास्तविकता मनन गरी वैदिक श्रुतिहरूको अनुवाद वा व्याख्या गरिएका स्मृति तयार गर्न सकिन्छ तब मात्र यसले पाठकमा धेरै न्याय गर्न सक्छ। पाठकको जिज्ञासा केही हद सम्म शान्त गर्न सक्ने छ।

विगतमा ऋग्वेदलाई विभिन्न दृष्टिकोणबाट अनुवाद गरिएको भेटिन्छ। औपचारिक दृष्टिकोण (Ritualistic Approach) बाट हुने गरेका अनुवाद मध्य युगमा (Medieval) लोकप्रिय थियो जहाँ संस्कृतको प्रत्येक शब्दलाई भावार्थ दिने गरी समग्र भावार्थ निकालेर अनुवाद गरिएको छ।









प्रत्येक शब्दको अर्थ लगाएर अनुवाद गरिएको हाल उपलब्ध मध्ययुगीन अनुवाद सयाना एक कमेन्टरी हो । सयाना कमेन्टरीले हरेक शब्दको कतिपय अवस्थामा १० भन्दा बढी फरक फरक अर्थ दिने गरी ऋग्वेदको उल्था गरिदिएको भेटिन्छ। जस्तै संस्कृतको 'गो' शब्दको अर्थ पृथ्वी, गाई, प्रकाशको किरण, सूर्य, बौद्धिकता आदि इत्यादि भाव लाग्ने गरी अनुवाद गरिएको छ।

भाषा विज्ञान आफ्नो अनुभूति अर्कोमा व्यक्त गर्ने सहज उपाय रहेकोले भाषाको ज्ञान भएकाले भाषिक दृष्टिकोण (Linguistic Approach) बाट ऋग्वेद जस्ता वैदिक श्रुतिहरूको अनुवाद भएको र तिनै अनुवाद बजारमा पुगेको देखिन्छ। भाषिक दृष्टिकोणको अनुवाद हाल साल निकै धेरै









प्रयोगमा आएको देखिन्छ । तुलनात्मक भाषिक विधि जसमा शब्द शब्दहरूको समकक्षी अर्थ लगाएर अर्थको समग्र अर्थ निकाल्ने र बुझ्न कोसिस हुने गर्दछ। तुलनात्मक भाषिक अनुवादका आधारमा भाषा ज्ञान भएका अनुवादकले बारे ज्ञान नभएको भाषा विद्धलाई कोडेड भनाइको अर्थ ठिक संग पहिचान गर्न सक्ने खुबीमा सीमितता दिने रहेछ। हैसियत अनुरूपको अनुमानित अर्थ आउने गरी वेदको आंशिक वा अपूर्ण अर्थ दिने प्रकृतिको अनुवाद वा व्याख्यारूपी स्मृति बजारमा पुग्न त्यसले योगदान दिने रहेछ।

फलतः फगत भाषा ज्ञान मात्र रहेको आधारमा अल्पज्ञान र बुद्धिको प्रयोग मार्फत अनुवाद गरी बजारमा उपलब्ध भएका भावार्थ पूर्ण रूपमै










अनुमानका भरमा कोरिएका, निजी विचार लादिएका लेखोटका रूपमा सीमित हुन पुग्ने रहेछ। यसरी पूरा गरिएका कृतिहरूबाट एकातर्फ वेदका यथार्थ ज्ञानहरू पाउनबाट समाज वञ्चित बन्ने रहेछ भने अर्को तर्फ संस्कृतमा लेखिएका वैदिक ज्ञानको गहिराइ बारे समाजमा यथार्थ सूचना सम्प्रेषण हुन रोकिने रहेछ।

यो प्राविधिक असहजता हाम्रो समाजले समयमै पहिचान गर्न नसक्दा वैदिक ज्ञानको चरम अवमूल्यन हुन पुग्यो । वेदका स्मृतिहरू पाउन योग्य उचित न्याय पाउन बाट वञ्चित बन्यो । भाषिक दृष्टिकोण विधि प्रयोग गरेर हाल उपलब्ध अनुवाद मध्ये अधिकतम पढिने कृतिहरूमा म्याक्स मुलर र राल्फ ग्रिफिथद्वारा लिखित स्मृति हुन पुगे। म्याक्स













मुलर र राल्फ ग्रिफिथ द्वारा लिखित दुवै स्मृतिहरू वेदको गहन ज्ञानलाई अवमूल्यन गरी वेद बारे वैदिक समाजमा नकारात्मक भावना विकास गर्ने नियतमा तत्कालीन खुफिया एजेन्सीहरूको नियोजित स्वार्थ अनुरूपको अभियान रहेको कुरा कालान्तरमा खुलासा हुन पुग्यो। यस्ता कुरामा वैदिक ज्ञान बारे चासो राख्ने व्यक्तिहरूको ध्यान पुग्न नसक्दा वेदका विद्याहरूले दिने वैज्ञानिक पाटो वाट फाइदा लिन वैदिक समाज चुक्न पुगेको देखिन्छ।

विगतमा केही विद्वानले व्याकरणात्मक दृष्टिकोण (Grammatical Approach) बाट समेत वेदको भावार्थ वा सारतत्व निकाल्न प्रयास गरे। पाणिनिको (Panini) व्याकरणको (Grammer) दृष्टिकोण र यसका (Yaska)







द्वारा संश्लेषित पारम्परिक संस्कृत शब्दकोश निरुक्तमा (Nirukta) उल्लिखित शब्दहरूको व्युत्पत्ति (Etymologyof the words) समेतलाई ख्याल गरी संस्कृत भाषामा लेखिएको वेदको मन्त्रहरूलाई अनुवाद गरी वेदको भावार्थ प्रस्ट्याउने कोसिस समेत गरियो ।

व्याकरणात्मक दृष्टिकोण भाषिक दृष्टिकोणभन्दा अत्यधिक परिष्कृत हुने भएकाले व्याकरणात्मक दृष्टिकोणको अनुवाद ज्यादा यथार्थको नजिक पुगेर भावार्थ दिने गर्छ, दियो नै । व्याकरणात्मक दृष्टिकोणबाट तयार भएको कृतिमा आर्य समाजले प्रकाशित गरेको स्वामी दयानन्दद्वारा तयार गरिएको भावार्थलाई मुख्य मानिन्छ ।

संस्कृत व्याकरणको धेरै शास्त्रीय शब्दको संलग्न









रहेको छ। वैदिक श्रुतिहरूमा उल्लेखित शब्दहरूको लगभग शून्यकै हाराहारीमा अन्य भाषामा हुबहु सम्पूर्ण भावार्थ दिन सक्ने शब्दहरू उपलब्ध रहेको भेटिन्छ। जसले भाषाको ज्ञानको आधारमा हुने अनुवादको एक जटिलताको पक्ष उजागर गर्दछ। दुर्भाग्यवश अन्य भाषाका जस्तै बिजुली, टेलिग्राफ, एयरसिप, आणविक फ्युजन जस्ता कतिपय शब्दहरू गहिरो अर्थ राख्ने शास्त्रीय शब्दको व्याकरणात्मक दृष्टिकोणको अनुवादले हैन, विषयवस्तुको उत्पत्ति र अस्तित्वको ज्ञानको आधारको सन्दर्भलाई जोडेर निकाल्न सक्दा मात्र जनजिब्रोको भाषामा वेदको भावार्थले दिन सम्भव हुने अवस्था थियो ।

विद्वत वर्गमा हाल सम्म स्थापित विश्वास अनुरूप






वेद कुनै ऐतिहासिक दस्तावेज मात्र नरहेर प्राकृतिक संरचनाको निर्माणको र नियमित सञ्चालनको नियमहरू उल्लेखित प्राकृतिक विज्ञानको ज्ञान रहेको ग्रन्थ हो। त्यहाँ उल्लेखित विषय वस्तुले सृष्टिको सम्पूर्ण भौतिक (Physics) कुराहरूको प्राकृतिक नियमहरू बारे कुरा गर्दछ। विज्ञानको सम्पूर्ण क्षेत्रको ज्ञान र अवधारणाको सैद्धान्तिक व्याख्या गर्दछ। जसलाई अविद्या भनिन्छ। अविद्याले भरपुर ऐतिहासिक श्रुतिहरूका गहिरा अर्थ बोकेका शास्त्रीय शब्दहरू आधुनिक क्वान्टम फिजिक्सको अवधारणा बाहिरिए पछि आधुनिक विज्ञानको नयाँ शब्दावलीले दिने व्याख्याहरू वेदका अविद्याका व्याख्याहरू संग मिल्न गएको भेटिएको छ। पछिल्लो समयमा यसरी मिल्न पुगेका वेद र











विज्ञानका समकक्षी भावार्थको पहिले अनुवादित अनुवादहरूमा समेटिने स्थिति समेत रहेन। ऐतिहासिक श्रुतिहरूका ऐतिहासिक अनुवादहरू आधुनिक विज्ञानको एजमा पुग्दै गर्दा हाम्रा लागि पर्याप्त समेत रहेनन् ।

विज्ञानले विकास गरेका नयाँ आविष्कार सँगै प्रयोगमा ल्याएको नयाँ - नयाँ शब्दावलीको वेदको समकक्षी शब्दावली पहिचान गर्न र सम्बन्धित विषयवस्तुको सन्दर्भको त्यसको समभाव दिने आशयको मन्त्रमा अन्तर्निहित रहेका ज्ञान समाजमा प्रस्ट संग राख्न पर्ने जरुरत समेत हुन पुग्यो। जसका लागि वेदका मन्त्रको वैज्ञानिक अवधारणा र दृष्टिकोणको भावार्थ व्यवहारिक रूपमै निकै गहिरो संग पहिल्याउन जरुरत पर्दथ्यो। बौद्धिक











दिवालिया पन लिएर वेद र आधुनिक विज्ञानका समकक्षी अर्थ दिने शब्दको खोजी गरी वेदको अनुवाद गर्ने कार्य सम्भव थिएन। गरिएन । विगतमा यदि त्यसो गरिएकै भए पनि आजको नयाँ सूचनाको समयमा त्यस त्यति ठुलो अर्थ समेत रहने अवस्था रहने थिएन।

आधुनिक विज्ञानको नयाँ सूचनाको पहुँचमा तत्कालमा रहेको सीमितताका कारण भाषिक दृष्टिकोण भन्दा अत्यधिक परिष्कृत रहेको व्याकरणात्मक दृष्टिकोणको अनुवादले समेत वेदको अवधारणालाई आधुनिक विज्ञानको सन्दर्भको बुझाइ समेतलाई जोडेर प्रमाण सहित समाजमाप्रस्ट सँग पस्कन सकेको भेटिएन। जुन निकै चुनौती पूर्ण समेत देखियो।













वेदको गहन सार अर्थ मनोवैज्ञानिक तथा आध्यात्मिक प्रकृतिको छ। श्रीअरबिन्दो द्वारा गरिएको अनुवादलाई वेदको मनोवैज्ञानिक दृष्टिकोणको अनुवाद मात्र सकिन्छ। आफ्नो आफ्नो निजी चेतना स्तरमा कसैले वेदको कुनै पक्षलाई महसुस गर्छन् भने कसैले आफ्नो समय परिस्थिति सान्दर्भिक रहने गरी वेदको सही अनुवाद गर्न सक्छन्। निकै ठूलो संख्याका सामान्य व्यक्ति भने वेद केवल पढ्नका लागि मात्र वेद बनिरहेको हुन सक्दछ।

हाम्रोमा केही कर्मकाण्डी गुरुबाले वेदका श्लोक वाचन गरे सिधै स्वर्ग पुगिन्छ भनी छरेको भ्रममा भविष्यको उज्ज्वल स्वर्गको आसमा धरै सनातनमा विश्वास गर्ने भक्तहरूले आफ्नो वर्तमानलाई नरक











बनाइरहेका भेटिन्छ।

वेदको श्लोक वचन गर्ने कुरा हैन। त्यसको अर्थ बुझेर जसरी विज्ञानले साइकल देखि मोटर, जहाज, रकेटसम्म बनाएर मानव जीवन सहज बनाउन सक्यो त्यसरी नै वेदमा रहेका तिनै सम्बन्धका ज्ञानको सदुपयोग वाट विज्ञानले हाल गरे भन्दा अधिक विकास गर्ने सैद्धान्तिक कुराहरू वेदमा रहेको बारे उनीहरू सचेत हुन् सकेका छैनन्। वेदमा कस्तो कस्तो विज्ञानका सिद्धान्तहरू लेखिएका छन् त्यो बारे आज सम्म कुनै निकाय वाट समेत समाजमा सामान्य सूचना दिने प्रयास समेत भएन। वेदको ज्ञान बुझ्ने, मनन गर्ने र त्यसको सदुपयोगबाट नयाँ नयाँ आविष्कार गरी मानवसहित सम्पूर्ण जगतको विकासगर्ने कडी थाहा पाउने र उपयोग गर्ने अवसर













वाट आजसम्म पनि हाम्रो समाज वञ्चित बनिरह्यो।

जसरी सुगाले मीठो भाषामा गोपी कृष्णको भन्छ त्यसरी नै पण्डित र संस्कृतका गुरु कहलिएका ठूलो संख्याका हाम्रा कर्मकाण्डी गुरुबाहरूले अर्थ नबुझे पनि वेदका श्लोकहरू भट्याउने र आफ्नो सीमित भाषा ज्ञानको सहजता भित्र खेलेर सन्दर्भ बाहिरको एक–दुई मीठा कथा जोडेर वेदका आशय विपरीतका वेदका सार समाजमा वाचन गर्दै हिंडी दिएकाले वेद अस्तित्वमा रहेको सूचना बचाउने काम भने गर्‍यो।

स्वघोषित महागुरु, ज्ञानी, युगद्रष्टा जस्ता पदवी सहित सवार रहने कतिपय ब्रह्म राक्षसको भूमिकाका व्यक्तिहरूको बदनियतपूर्ण आशय भरिएका कतिपय पुस्तक, रचना, लेख दर्शन वा











ग्रन्थहरू हाम्रो आफ्नै ज्ञान बजारमा वेदको ज्ञानको हुर्मत लिने काम गरिदियो। तिनै कुकृतिहरूको अध्ययनका आधारमा कतिपय युवामा वेद माथिको सम्मानमा नै प्रश्न चिह्न खडा गरिदिने भूमिका खेली दियो।

श्रीअरबिन्दो (Sri Aurobindo) ले ऋग्वेदको मनोवैज्ञानिक दृष्टिकोणबाट गरेको पूर्ण अनुवाद मात्र गरेका छैनन् समाजमा वेद अध्ययन गर्ने नयाँ पुस्तालाई वेदमा रहेको एकै मन्त्रको समेत विभिन्न पक्षले फरक फरक अनुभूति गर्न सक्ने प्रमाण प्रस्तुत गरिदिए। वेदको यथार्थ उजागर गर्न र वेदलाई न्याय गर्ने नियत बोकेको श्री अरबिन्दोको 'द हिम्स टु द कस्मिक फायर The Hymns to the Mystic Fire' नामक मनोवैज्ञानिक दृष्टिकोणको













अनुवादमा समेत वैदिक ज्ञान र आधुनिक क्वान्टम विज्ञानको भौतिक गहिराइका पक्ष लेखनका समयका कारण अटाउन पाएन।

संसारका निकै धेरै मानिसले राम्रो भनी सह्राउने वेदका अनुवादमा सुजाय घोषद्वारा लिखित ऋग्वेद फर ले म्यान (साधारण मानिसका लागि ऋग्वेद) र पण्डित विद्यालंकारको होली वेद (पवित्र वेद) पर्छ। संस्कृतमा केही शब्द थाहा भएको पाठकलाई यी दुई कृतिले वेदको ज्ञान प्राप्तिमा सहजता थपिदिने छ।

परम्परागत रूपमा वेदको अध्ययन र यसबारे आफ्नो धारणा बनाउन माथिका कृतिहरू सहयोगी रहे तापनि आजको दिनसम्म आइपुग्दा वेदका हरेक मन्त्रहरू कुनै न कुनै रूपमा विज्ञानको प्रमाणित र











अझै खोजिमा नियमित रहेका बहुआयामिक सिद्धान्तहरूको संस्कृत भर्सन रहेको प्रतीत दिन वेद आज सम्म सफल बनिरहेको छ। जुन निकै चाख लाग्दो विषय हो।

आजको युग कर्म युग हो। जबसम्म वेदका सैद्धान्तिक अवधारणालाई भौतिक विषय वस्तु सँग जोडेर त्यसको चुरो ज्ञानलाई पैसामा बदल्ने गरी उद्यमीकरण गरी इनोभेसनको हदसम्म पु¥याउन सकिँदैन तबसम्म यो ज्ञानतर्फ संसारको ध्यान तानिने छैन। वेदको ज्ञानको उपयोगिताका लागि तथा सम्पूर्ण जगतको उत्थानका लागि वेदमा रहेको विज्ञान, ज्ञान र वैराग्य एक आपसमा जोड्न जरुरी छ। जसका लागि वैज्ञानिक दृष्टिकोणको वेदको अनुवादले ठूलो भूमिका खेल्न सक्ने छ । त्यही













सन्दर्भमा वेद र विज्ञानको प्रसंग खोतल्ने महत्वपूर्ण कडीका रूपमा वेदमा विज्ञान अभियान देखापरेको हो । आउनुहोस् हामी सबै मिली हाम्रा नयाँ पुस्ताको लाभको खातिर वेदमा विज्ञान अभियानमा सहकार्य गरौँ।

## वेद र विज्ञान मनोविज्ञान

पहिले मानव, दानव, राक्षस र देवता बारे केही कुरा गरौँ। जन्म, मृत्यु र पुनर्जन्मको चक्रको अधीनमा रहनु पर्ने जीव भएता पनि चेतनाको स्तर सबै जीवित प्राणीभन्दा उच्च रहेको प्राणीलाई मानव भनिएको छ। प्राणी मध्येमा सबै भन्दा सुद्ध चेतनशक्ति बोकेकोले प्रकृति द्वारा मानिसहरूलाई धर्म (धार्मिकता), अर्थ (धन र संवृद्धि), काम










(इच्छा र यौन) र मोक्षको (मुक्ति) न्याय सङ्गत रूपमा उपयोग गर्ने जिम्मेवारी तोकिएको छ । मानिसमा उपलब्ध आध्यात्मिक ज्ञान र मुक्ति (मोक्ष) प्राप्त गर्ने क्षमताको सदुपयोग वाट ब्रह्माण्ड लाई सम्पूर्ण चराचरहरूको लागि अनुकूल राख्ने नैतिक जिम्मेवारी लिएर मानिस अस्तित्वमा रहेको छ। तपाइको शरीर र मन मस्तिष्क चेतना (आत्मा) संग मिलेर सम्पूर्ण तपाइको निर्माण हुने गर्दछ। हामी मानव भएकाले त्यो बारे अरू धेरै केही भन्नु परेन ।

वेद अनुसार, दानव, राक्षस र देवता आचरण र भूमिकामा भिन्नता भएका जीवित शक्तिहरू हुन्। दैत्यहरूको समूहमा पर्ने असुरहरूको सन्तान दानवहरू सम्पत्ति र भौतिक सुखमा अति इच्छुक












सांसारिक मोह अधिक बोकेका शक्तिशाली जीवित शक्तिहरू हुन्। व्यवहारमा अत्यन्त ठुलो अहङ्कार, महत्त्वाकाङ्क्षा र इन्द्रियको सुखको नियतले ग्रस्त दानवहरू आफूमा रहेको इन्द्रिय सुख र अहङ्कारको नकारात्मकता प्राप्तिमा नियमित ज्ञानको खोजीमा रहने तत्वको रूपमा वेदमा उल्लेख भएको छ। यो तथ्यले दानवहरू मेरुदण्डमा रहने स्नायु प्रणाली वा मेरुदण्डको मस्तिष्क संग सम्बन्धित शक्ति भन्ने बुझिन्छ।

राक्षसहरूलाई प्रायः क्रूर, हिंस्रक र विध्वंसकारी शक्तिका रूपमा वेदमा चित्रण गरिएको छ। यिनीहरू अधर्ममा लिप्त, नियम विहीन र पापी क्रियाकलापमा संलग्न हुन्छन्। राक्षसहरूको उद्देश्य भनेको देवताहरूको मार्गमा बाधा पुऱ्याउनु र









समाजलाई नकारात्मक दिशामा धकेल्नु हो। यिनीहरू दुष्ट प्रवृत्तिका कारण देवताहरूको शत्रु मानिन्छन्। प्राकृतिक नियमको सिद्धान्त अनुरूप शरीरमा नियमित गतिशील रहने सञ्चालन ऊर्जाको विपरीत त्यसमा अवरोध ल्याउने शक्ति लाई राक्षस भनेर वेदमा सङ्केत गरिएको छ। वेदका अनुसार यिनीहरू रोग प्रतिरोधी शक्ति कमसल तुल्याउन सक्रिय रहने, रोग र विषाक्तता निम्त्याउने मस्तिष्कको गतिविधिमा नियमित अवरोध निम्त्याउने शक्ति हो।

देवताहरूलाई वेदमा सकारात्मक र धर्मशील शक्तिका रूपमा चित्रण गरिएको छ। यिनीहरू सृष्टिको पालन, संरक्षण र मानिसहरूलाई धर्मको मार्गमा लैजानमा केन्द्रित हुन्छन्। देवताहरू सत्कर्म,









सच्चाई र ईश्वरीय शक्तिको प्रतीक मानिन्छन्। यिनीहरू ऋतमा (सत्यको नियम) चल्छन् । मानव सभ्यता र प्रकृतिको संरक्षणका लागि जिम्मेवार हुन्छन्। वेदका अनुसार देवताहरू स्नायु प्रणाली र समग्र स्वस्थ निर्माणका सकारात्मकऊर्जा र उत्साह थप्ने सकारात्मक ऊर्जाको समग्र रूप हो जसमा रोग प्रतिरोधी क्षमता र समग्र सुखका पक्ष समेत समावेश हुने गर्दछ।

देवताहरू जतिकै शक्तिशाली देवताहरूको विरोधी शक्ति दानव हो।तिनीहरू प्रायः देवहरूलाई चुनौती दिन्छन्। दानवको कारण देवताहरू पथ भ्रष्टहुन वाट रोकिन्छन्। त्यसैले ब्रह्माण्डीय सन्तुलनको विशेष भागको रूपमा दानवहरू अस्तित्वमा छन् ।

मानव शरीरको पोषणको हकमा मानव पोषण र




संवर्द्धनमा सहयोगी शक्ति देवताको रूपमा चिनिन्छ। पोषण र संवर्द्धनको विपरीत शक्ति दानव हुन्। अधिक पोषण र सुविधाले विकास गर्ने नैतिक विहीन मैमत्तता निर्माण गर्ने विषको नियन्त्रणमा उपयोगमा आउने औषधीय ऊर्जा तत्त्व भने दानव ऊर्जा तत्त्व नै हुने गर्दछ।

जीवमा नकारात्मक मनोविज्ञान विकास गर्ने, दुख दिने, बिमार आदि मार्फत सताउने द्वेषपूर्ण आचरण लिएको, आफ्नो आकार र रूप नियमित परिवर्तन गर्ने क्षमता बोक्ने अक्सर नर भक्षी प्रवृत्तिका गुण भएको शक्तिलाई राक्षस भनिएको छ। दानव प्रायः देवताको विपरीत शक्ति हुन् भने राक्षस जीवको जीवितता मैत्री शक्तिको विपरीत शक्ति हुन्। राक्षसहरूलाई सामान्यतया उग्र र क्रूर





प्राणीकोरूपमा चित्रण गरिने गरिन्छ। उनीहरूले मानव कर्म तथा अनुष्ठानहरूमा बाधा पु¥याउने, मानिसहरूलाई हानि गर्ने गर्दछ । मानव रक्षामा सकारात्मक भूमिका खेल्ने देवताहरूको विरोधमा राक्षसहरू सक्रिय हुने हुँदा उनीहरूलाई देवताहरूको पनि विरोधीको रूपमा चित्रण गरिन्छ। अराजकता र दुष्टताको प्रतीक मानिने राक्षसहरू मानव शरीरकोहकमा रोग प्रतिरोधात्मक शक्तिको विपरीत शक्ति हुन्। हानिकारक कीटाणु, रोगाणु, इन्जाइम हर्मोन अवरोधक आदि तथा दबिएको आत्मबल जस्ता चिजहरू वैदिक जीव विज्ञान अन्तर्गतका राक्षसहरू हुन्। यिनीहरूले शरीरमा रोग प्रतिरोधात्मक शक्ति अत्यधिक हुनका कारण शरीरमा हुने जोखिम







नियन्त्रणमा सहयोग गर्दछन् भने न्यून रोग प्रतिरोधात्मक शक्तिको समयमा व्यक्तिको जीवन नै सकिदिने जोखिमको समेत निर्माण गरिदिने गर्दछन्।

आधुनिक औषधि विज्ञानको हिसाबमा भूतलाई डिप्रेसन र प्रेतलाई एङ्गाइटि सँग तुलना गर्न सकिन्छ। विज्ञानका अनुसार मानसिक अवस्थाहरू व्यक्तिको सोच र आत्मा बलको अवस्था सँग सम्बन्धित हुने गर्दछ जहाँ व्यक्तिको मूल खोज मानसिक शान्ति हुने गर्दछ। वेदले आफ्नो अलमलिएका अधुरा इच्छाका कारण असन्तुष्ट रहेर संसारमा अड्किएका शान्ति नपाएका व्यक्तिका आत्माहरू लाई भूत भनेको छ। मेडिकल विज्ञानको अनुसार डिप्रेसन यस्तो अवस्था हो जहाँ व्यक्ति













मानसिक रूपमा अड्किएको, असहाय र असन्तुष्ट महसुस गरेको हुन्छ। आफ्ना पुराना घटनाहरूको प्रभावमा अड्किन पुगेर, पुराना अनुभूतिका पीडाहरूले थिचेका कारण जीवनमा अग्रसर हुन कठिनाइ भोगिरहेको महसुस डिप्रेसनमा हुने गर्छन्। जसको प्रयास एक प्रकारको प्राप्त गर्न नसकिएको शान्तिको खोजी नै हुने गर्दछ।

अशान्त, अस्थिर र त्रासदायी अवस्थामा रहेर आफूलाई र अरूलाई दुःख दिने प्रवृत्ति लाई वेदमा प्रेत भनिएको छ। एङ्गाइटिको अवस्थामा व्यक्ति निरन्तर चिन्ता, त्रास र अशान्तिको अवस्थामा हुन्छ। आफ्नो भविष्य प्रति अत्यधिक चिन्तित हुनको कारण विकसित भएको डरले एङ्गाइटि देखिनुको कारण हुने गर्दछ। जसरी प्रेतहरू अशान्त











र अशान्तिपूर्ण ऊर्जा प्रवाह गर्छन् त्यसरी नै एङ्झाइटिको समयमा व्यक्ति अशान्त, डरले जकडिएको र अस्थिर मानसिक अवस्थामा रहन्छ।

भूतलाई आफ्नो मानस पटलमा रहेको पुराना घटनाहरू, अधुरा इच्छाहरू वा अपूर्णता जनाउने शक्तिको रूपमा वेदमा परिचित गराइएको छ। जुन आधुनिक मेडिकल साइन्सले परिभाषित गरेको डिप्रेसनको समयमा देखा पर्ने लक्षण हो। डिप्रेसन आफैमा विगतमा अड्किन बाध्य रहेर विकसित मानसिक कमजोरी हो। प्रेत भने अनिश्चित भविष्यको कारण विकसित डरका कारण निरन्तर तनावमा रहेर बाँचिरहेको अवस्थामा हो, जसलाई मेडीकल्ली एङ्झाइटिको रूपमा डाइग्नोस गर्ने गरिन्छ। एङ्झाइटिमा मानिसले निरन्तर चिन्ता र













डरको अनुभव गर्छ, जसले गर्दा उसले मानसिक अशान्ति भोग्नु पर्दछ।

वैदिक दृष्टिकोणमा पिचास र डङ्किन दुवैलाई नकारात्मक, अशुभ वा अधर्मी आत्माहरूको रूपको नकारात्मक मानसिक ऊर्जा पैदा गर्ने शक्तिको रूपमा चित्रण भएको छ। वेदमा जब शरीरले चेत गुमाउन जान्छ त्यसलाई मृत सामान शरीर मान्दछ। रातमा सक्रिय हुने र मानव शरीरमा वा जीवनमा त्रास फैलाउने अत्यन्त घृणित, अति क्रूर र विध्वंसकारी आत्मबल शक्ति पिचासको रूपमा वैदिक अवधारणामा चित्रण भएको पाइन्छ। मानिसहरूको मन र शरीरलाई नियन्त्रण गर्न सक्षम भएर प्रायः राक्षसी वा अशुभ कार्य गराउने भूत, प्रेत, वा राक्षसहरूको सहयोगीका रूपमा काम गर्ने











स्त्री गुणको शक्ति लाई डङ्गकिन (डाकिनी) भनिएको छ। पिचास र डङ्गकिनको गुण सिजोफ्रेनिया वा सिभियर डिप्रेसन र बाइपोलार डिसअर्डर वा हिस्ट्रोनिक पर्सनालिटी डिसअर्डर भनिने मानसिक रोगहरूको लक्षणहरू सँग मिल्दछ।

सिजोफ्रेनिया (Schizophrenia) को रोगमा व्यक्तिले वास्तविकता र भ्रम बिच फरक छुट्टाउन सक्दैन। अनावश्यक आवाजहरू सुन्ने, अनौठो दृश्यहरू देख्ने आदि कारण वाट व्यक्ति अनियन्त्रित डर र त्रासको सिकार हुन्छ। मानिसमा त्यस्तै प्रकारको नियन्त्रित डर, अशान्ति र भ्रम पैदा भएको अवस्था लाई पिचासले  दुख दिएको भनिन्छ। जुन सिजोफ्रेनियाको रोगीले अनुभव गर्ने गुण हो।













सिभियर डिप्रेसन (गम्भीर डिप्रेसन) हुँदा व्यक्ति निराश, डरयुक्त र आफ्नो जीवनप्रति असन्तोष महसुस गर्छ। जसका कारण उसले आफूलाई बाह्य संसारबाट टाढा राख्छ। पिचासहरूको आत्मालाई समेत संसारमा अलमलिएको एक्लिएको आत्मा भन्ने गरिन्छ।

बाइपोलार डिसअर्डर (Bipolar Disorder) को रोगमा व्यक्ति एकै चोटि धेरै उच्च ऊर्जा र जोसमा पुग्दछ अनि फेरी अचानक गहिरो निराशा वा उदासीनताको अवस्थामा जान्छ। डङ्गकिनको शक्ति लाई मानिसको मानसिक र भावनात्मक स्थितिमा ठुलो उतारचढाव ल्याउन भूमिका खेल्ने शक्तिको रूपमा चर्चा भएको छ। जुन बाइपोलार रोगीको मनोवृत्ति हो। हिस्ट्रोनिक पर्सनालिटी डिसअर्डर







(Histrionic Personality Disorder) को समयमा व्यक्तिले अर्को व्यक्तिको अत्यधिक ध्यानाकर्षण चाहन्छ। त्यसको लागि आफ्नो वरिपरि नाटक वा ड्रामा सिर्जना गर्छ। डङ्किनले समेत मानिसलाई नियन्त्रणमा राखेर व्यक्तिको ध्यान आफूतर्फ खिच्ने स्त्री शक्तिको रूपमा चित्रण गरिएको छ। हिस्ट्रोनिक पर्सनालिटी डिसअर्डर रोगमा पीडितले अस्वाभाविक रूपमा आफूलाई प्रकट गर्न र नियन्त्रण गर्न खोज्ने गुण डङ्किनको चरित्रको गुण संग मिल्दछ।

तपाइले जे खानु हुन्छ त्यस वाट तपाइको भौतिक शरीर निर्माण हुन्छ। तपाइले जे सोच्नु हुन्छ त्यसले तपाइको आत्मबल निर्माण गर्दछ। तपाइको चेतना निर्मित आत्मा बल तपाइको मनोविज्ञान निर्माण र










सञ्चालन संग सम्बन्धित हुने गर्दछ। देवता अर्थात् सकारात्मक शक्तिको श्रोत तपाइको भौतिक शरीर र मनोविज्ञान निर्माण संग सम्बन्धित छन्। सकारात्मक मनोविज्ञान निर्माण र त्यसको नियमितता कायम गर्ने शक्तिको ठिक विपरीत ध्रुवमा काम गर्ने शक्तिलाई पिशाच भनेर चिनिन्छ।

साङ्केतिक रूपमा श्मशान स्थल र मानव बस्तीको लागि परित्याग गरिएका ठाउँहरूमा मानिसलाई सताउने शक्तिको रूपमा चित्रण गरिने पिशाच शब्द मानव फिजियोलोजीमा मनोविज्ञान सम्बन्धका रोगका कारक को रूपमा जोडेर हेर्ने गरिन्छ। मनोविज्ञान सम्बन्धका गडबडीहरू र कमजोर आत्मबलले दिने रोगहरू निम्त्याउन पिशाचहरू जिम्मेवार त हुन्छ नै । मानिसको मनोविज्ञानले









सिर्जित गर्ने भूत, प्रेतजस्ता काल्पनिक अनुभूतिका कारण तथा मनोवैज्ञानिक रोग आदिले दिने प्रकृतिको रोगमा समेत पिचासको भूमिका रहने गर्दछ। औषधि विज्ञानको विना औषधि औषधि गर्ने अल्पकालीन उपचाररुपी प्लेसिबो इफेक्टको लागि परम्परागत रूपमा पिचास मन्छाउन धामी, झाँक्रीर मन्त्र पाठ, पूजा, मन्तर्ने आदि गर्ने गरिन्छ। दीर्घकालीन उपचारमा भने अध्यात्म, ध्यान र आयुर्वेदिक उपचारको सहारा लिने गरिन्छ ।

दैवीप्राणी वा देवताहरू प्रकृति, संसार र ब्रह्माण्डीय संरचना सन्तुलनको क्रमका विभिन्नपक्षहरू सँग सम्बन्धित शक्ति हुन् । ब्रह्माण्डमा प्राकृतिक नियमको सिद्धान्त निर्माणगर्ने (वेद लेखन) र त्यसलाई पालन गराउने (धर्म) व्यवस्थापन गर्ने









शक्ति नै देवताको रूपमा चिनिन्छ। देवतालाई प्राणीहरूको कल्याणकारी शक्ति मानिएता पनि समग्र चराचरहरूको अस्तित्व कायम गर्दै ब्रह्माण्डको कल्याणमा लाग्ने देव शक्तिको भूमिकामा मानव कल्याण र अस्तित्वको रक्षा जस्ता विषयहरू समेत पर्दछन् । मानव परम्परामा विभिन्न संस्कार, अनुष्ठानर बलिदानहरू आदिमा पूजा सम्मान मार्फत साङ्केतिक पहिचान गर्ने र देव शक्तिको भूमिकाको लागि धन्यता व्यक्त गर्ने गरिन्छ। जम्मा ३३ कोटी अर्थात् ३३ प्रकारमा रहेको हरेक प्रकारको देवताको विशिष्ट कार्यहरू रहेको ठानिन्छ। मानव फिजियोलोजीको सन्दर्भमा मानिस लाई जीवित राख्न, समग्र स्वस्थ सन्तुलित राख्न र नियमित रूपमा सुचारु गर्न देव शक्तिको प्रमुख भूमिका रहने गर्दछ।








मेरो गोत्र कश्यप हो । कश्यप ऋषिले दक्षका १३ छोरीहरूसँग विवाह गरे। जसमध्ये अदिति, दितिर दनु मुख्य चर्चामा आउँछन्। कश्यपका दनु तर्फका छोराहरूलाई दानव भनिन्छ। दिति तर्फका छोराहरू दैत्य भए । अदिति तिरका छोराहरू आदित्य अर्थात् आदित्य–देवदेवता भनिए । मानव मुख्य बीज छोराको शुक्राणु रहेकाले त्यो बीजको विस्तारको पहिचानका लागि परम्परागत रूपमा छोराहरू बारे चर्चा भेटिन्छ । यसको अर्थ छोरीहरूको मान्यता नरहेको होइन । यो सन्दर्भमा चर्चा जरुरी नभएको मात्र हो। त्यति बेला डिएनए परीक्षण गर्ने विधि थिएन। नारीले भनिदिएको भरमा बाबुको यकिन गर्नु जरुरी हुन्थ्यो ।

त्यो सन्दर्भमा समेत बीजको फैलावटको यकिन









गरिने गोत्र प्रविधि वैज्ञानिक नै मान्नुपर्छ। दानव र दैत्य सदैव उनीहरूका सौतेनी भाइ देवहरू सँग युद्धमा होमिए। देवहरू सदैव सत्यको पक्षमा उभिएकाले सुर मानियो। विपरीत पक्षमा रहनेलाई असुर मार्गी भनियो ।

त्यसैले दानव र दैत्यलाई असुरहरू भनेर चिनिन थालियो । दानव र दैत्यहरूमा रहेको असुर प्रवृत्तिले मुक्त सत्यमार्गी प्रवृत्ति बोकेका देवहरू सुरका रूपमा चिनिए। वास्तवमा सुरहरू असुरहरूका दाजु भाइ नै हुन्, सौतेनी नालका।

असुर प्रवृत्तिको अर्को पक्ष हो दैत्य नालको राक्षस। सुकेश नामका दैत्यले गन्धर्व छोरी देववती सँग विवाह गरे। तिनीहरूका तीन उत्कृष्ट बच्चा जन्मिए। तीमध्येको एक सुमाली थिए। सुमालीले यक्ष








राजकुमारी थाटकासँग विवाह गरे । उनीहरूका धेरै छोरीमध्येकी एक छोरी हुन् कैकसी।

कैकसीको विवाह पुलस्त्य मुनि (ऋषि) को छोरो विश्रवासँग भयो। कैकेसी र विश्रवाबाट रावण, कुम्भकर्ण, विभीषण, खर, शूर्पणखा जन्मे । ती सबै असुर प्रवृत्तिका थिए ।

उनीहरू राक्षसको नामले संसारभर चिनिए। प्रवृत्तिगत रूपमा राक्षसलाई अधर्मीका रूपमा वर्णन गरिएकोछ। अर्कालाई यातना दिन पाउँदा यिनीहरूलाई अति रमाइलो लाग्छ।

राक्षसशब्द संस्कृतको चुरो शब्द संरक्षणबाट आएको हो। यसले अभिप्राय विपक्षीको प्रतिरोध शक्ति माथि संक्रमण गरी उनीहरूलाई नियन्त्रणमा









लिने अनि विजय प्राप्त गर्ने युद्ध नीति पर्छ।

यिनीहरूसँग आफ्नो विपक्षीलाई वशमा पार्ने जादु, भ्रममा पार्ने कला र सुन्दर सपना देखाएर फसाउन सक्ने कला हुन्छ। तिनै गुणका कारण यिनीहरूले आफ्नो विपक्षीलाई आफ्नो पक्षमा पार्न सम्भव हुन्छन्।

कतिपय राक्षसहरू नियतगत रूपमा नै दुष्टता युक्त हुने गर्दैनन्। जस्तै राक्षस भए तापनि यक्ष / यकास (Nature Sprit & Bhuta) नैतिक रूपमा सही, न्यायसंगतनै थिए ।

बैगुनी दानवहरू र दैत्यहरू प्रवृत्तिगत रूपमा असुरहरू सदैव शक्तिको भोका, भौतिकवादी, आकारको हिसाबमा तुलनात्मक रूपमा ठूलो










आकारका, प्रभावको हिसाबमा प्रभावशाली, विशेष सामर्थ्य युक्त र बृहत् रूपमा आफ्नो शक्ति फैलाउन सक्ने क्षमता बोकेको हुन्छन् । यिनीहरू हमेसा हानिकारक रूपमा प्रस्तुत हुँदैनन् । अवसर कुरेर बस्ने, शक्ति प्राप्तिको अवसर र मौका पर्दा सक्रिय रहने स्वभाव बोकेका अवसरवादी हुन्छन्।

असुर नियतगत रूपमा नै दुष्ट हुने गर्दैनन् । जस्तै असुर राजा भए तापनि महाबली नैतिकरूपमा सही, न्यायसंगत र सद्गुणयुक्त धर्मी राजा थिए ।

प्रत्येक मिर्गौलाको माथिपट्टि एउटा सानो संरचना टाँसिएर बसेको हुन्छ । जसलाई एड्रेनल ग्रन्थि भनिन्छ। सामान्यतः तिनै दुई एड्रेनल ग्रन्थिहरूले हार्मोन नामका रसायन निकाली नसामा बगेको रगतमा छोड्छ । पाचन जस्तै शरीरका विभिन्न









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



भागमा हुने कार्यमा सहयोगी हुने अर्को प्रकृतिको रसायनलाई इन्जाइम भनिन्छ ।

पाचनका इन्जाइमहरू प्यान्क्रियाज, आमाशय र सानो आन्द्रामा उत्पादन हुन्छन्। मुखमा सेलिबरी ग्रन्थिले निकाल्ने ¥याल पनि पाचन इन्जाइम नै हुन् । जसले खाना मुखमा चपाउने क्रमदेखि त्यसलाई पचाउन सजिलो हुने गरी टुक्रा पार्न सुरु गर्छ । हार्मोन र इन्जाइम दुवै निश्चित प्रकारका प्रोटिन नै हो ।

वेदले हाम्रो शरीरमा शरीरका गतिविधि सञ्चालनमा सहयोग गर्ने जस्तैः पाचन रसहरूका रूपमा रहेको अम्लीय पदार्थ र क्षारीय पदार्थ, इन्जाइम, हार्मोन, माइक्रोबायोम शक्ति र अन्य शरीरले उत्पादन गर्ने ऊर्जा तत्व लाई अग्नि भन्ने गर्छ । उक्त अग्निको







सहयोग बाट नै खानको सारतत्वहरू शरीरलाई चाहिने स्थानमा चाहिने समयमा चाहिने रूपमा आपूर्ति हुने गर्छ ।

इन्जाइमहरूले मानव शरीरमा रासायनिक प्रतिक्रियाको गति बढाउन मद्दत गर्छ । इन्जाइम जैविक उत्प्रेरक हुन् । तिनीहरूले उत्प्रेरणा दिएर जैविक प्रतिक्रिया नियमित पार्छन्। हर्मोनहरू उत्प्रेरक होइनन् । तिनीहरू केवल जैविक रासायनिक प्रतिक्रिया आरम्भ गरिदिने काम गर्छन्।

इन्जाइमहरूले शरीरमा जैविक प्रतिक्रियाहरूलाई तीव्र बनाउँछन्, जस्तै पाचन प्रक्रियामा। हर्मोनहरू रासायनिक सन्देश वाहकका रूपमा कार्य गर्छन्, जस्तै कुनै अङ्गको वृद्धि, मेटाबोलिज्म, तथा मनोभावनाको नियन्त्रणमा खेलिने भूमिका। वैदिक






बुझाइमा, शरीर विभिन्न ऊर्जाहरू तथा तत्त्वहरूको संयोजनको समग्र रूप हो, जसलाई प्राण र सूक्ष्म शक्तिहरूले नियन्त्रण गर्छन्। आधुनिक वैज्ञानिक अवधारणामा, हर्मोन मस्तिष्क नियन्त्रित प्रोटिनले बनेका रासायनिक सन्देशवाहक भएकाले वैदिक अवधारणा अनुसार शरीरको आन्तरिक प्रणालीलाई नियन्त्रण गर्न प्राणले उत्पन्न गर्ने अग्नि शक्तिलाई हर्मोन भनिएको स्पष्ट हुन्छ।

आधुनिक वैज्ञानिक अवधारणा अनुसार, शरीरभित्र भौतिक पदार्थहरूलाई एक रूपबाट अर्को भौतिक रूपमा परिवर्तन गर्न सक्रिय रहने जैविक प्रतिक्रियाहरूलाई तीव्र बनाउने प्रोटिनले बनेका रासायनिक पदार्थहरू इन्जाइम हुन्। जस्तै पाचन प्रक्रियामा पाचन कार्यलाई सक्षम बनाउन सक्रिय





रहने पेप्सिन। वैदिक अवधारणामा, तिनीहरूलाई अग्नि, अर्थात् शरीरको आन्तरिक प्रणाली (जस्तैः पाचन) निर्मित गर्ने ऊर्जा भनिन्छ।

पाचन अग्निले भोजनलाई सानो-सानो भौतिक रूपको पोषण कणमा रूपान्तरण गर्ने कार्यलाई तीव्र बनाउँछ। जैविक प्रतिक्रियाहरूलाई उत्प्रेरित गरेर पोषक तत्त्वहरूको विघटन र अवशोषणलाई सहजीकरण गर्दछ। मस्तिष्क नियन्त्रित रासायनिक सन्देश वाहक भए तापनि, पदार्थहरूको भौतिक रूपान्तरण र शरीरका कार्यहरूलाई सक्षम बनाउने अग्नि शक्ति शरीरको आन्तरिक प्रणाली निर्मित ऊर्जा रहेकोले यिनीहरु आधुनिक विज्ञानको इन्जाइम भनिएको स्पष्ट हुन्छ।

सारमा, हर्मोनलाई प्राणको अग्निको रूपमा बुझ्न









सकिन्छ, जसले शरीरको आन्तरिक प्रणालीलाई नियन्त्रण गर्दछ। इन्जाइम भने शरीरको आन्तरिक प्रणाली निर्मित शरीरका विभिन्न कार्य प्रणालीहरूमा सक्रिय अग्निको रूपमा बुझ्न सकिन्छ, जसले पदार्थहरूको रूपान्तरण र शरीरका आन्तरिक प्रणाली कार्यहरूलाई सक्षम बनाउँछ।

इन्जाइमहरू वा हर्मोनहरू आवश्यकता भन्दा धेरै वा थोरै हुँदा, त्यसले शारीरिक कार्यहरूमा अवरोध निम्त्याउँछ। इन्जाइमहरू धेरै हुँदा अत्यधिक वा तीव्र जैविक प्रतिक्रिया हुन्छ, जसले असन्तुलन निम्त्याउँछ, जस्तै अत्यधिक पाचन क्रियाले कोषहरूमा क्षति पुऱ्याउँछ। इन्जाइमहरू थोरै हुँदा महत्त्वपूर्ण प्रक्रियाहरू, जस्तै पाचन वा मेटाबोलिज्म, सुस्त हुन्छन्, जसले पोषणको अभाव









वा विकृति वा रोगहरू निम्त्याउँछ, जस्तै ल्याक्टेज एन्जाइमको कमीले ल्याक्टोज असहिष्णुता उत्पन्न हुन्छ।

हर्मोनहरू धेरै हुँदा अंगहरू अत्यधिक उत्तेजनामा आउँछन्, जस्तै अत्यधिक थाइराइड हर्मोनले हाइपरथाइराइडिज्मको विकास गर्दछ। हर्मोनहरू थोरै हुँदा कार्य सक्रियता कम हुन्छ, जस्तै कम थाइराइड हर्मोनका कारण हाइपोथाइराइडिज्म हुन्छ। इन्सुलिनले रगतमा चिनीको मात्रा नियन्त्रण गर्न महत्त्वपूर्ण भूमिका खेल्छ। अपर्याप्त इन्सुलिन उत्पादन वा इन्सुलिन प्रतिरोधले मधुमेह निम्त्याउँछ, जसले थकान, तौल वृद्धि, तिर्खा लाग्ने, र संवेदनशील अंगहरूको कार्य विफलता जस्ता समस्याहरू निम्त्याउन सक्छ। एस्ट्रोजेनको हर्मोन













उच्चस्तरमा हुँदा रगत जम्ने र हृदयाघात हुने गर्छ। एस्ट्रोजेनको अधिकतामा थाइरोइड डिस-फङ्सन समेत हुन सक्छ।

एन्जाइमहरू वा हर्मोनहरूको असन्तुलनले गम्भीर स्वास्थ्य समस्या निम्त्याउन सक्छ, जसलाई पुन: सन्तुलन गर्न औषधीय हस्तक्षेप आवश्यक हुन सक्छ। आफ्नो नियन्त्रणमा रहँदा सम्म, शरीरले आफ्नो उपचार आफै गर्दछ।

चाहिने मात्राको हार्मोनलाई हामी आफ्नो आफ्ना आदरणीय पात्र गुरुवर वा प्रिय ज्ञात अज्ञात पात्रहरूबाट प्राप्त आशिष र शुभ कामनाको फलका रूपमा लिन्छौं। ठिक्क मात्राको इन्जाइम सत्कर्मबापत धर्ममा रहेबापत मिलेको ईश्वरको वरदान सम्झन्छौं।









वैदिक चुरो मान्यतामा हार्मोनको कमी सेवा भावको अभाव तथा हार्मोनको अधिकता अर्कालाई हानि पु¥याए बापतको चित्त दुखाइको परिणाम हुने गर्दछ। जुन मनोवैज्ञानिक छ। सत्कर्म संग सम्बन्धित हुने गर्दछ। इन्जाइमको कमी धर्म भावको अभाव तथा इन्जाइमको अधिकता अधर्म बापतको श्रापको फल मान्छौँ। जुन प्रकृति मैत्री खानपान र जीवन शैली संग सम्बन्धित हुने गर्दछ।

आज नेपाल लगायत विश्वका धेरै देशले लागू गरेको शिक्षा प्रणालीले मानिसको जीवनको अस्तित्व शरीर मृत हुनासाथ सकिने विश्वास गर्छ। शरीर भित्रको आत्माको अस्तित्व नै स्विकार्दैन। वैदिक दर्शन र वैदिक सिद्धान्तमा आधारित प्रणालीको विश्वासमा कुनै प्राणीको शरीरको विनाशले उस भित्रको










जीवित प्राणी अथवा जीवात्मा नष्ट नहुने कुरा स्विकार्दछ। मान्दछ।

कुनै जीवित आत्माले नयाँ शरीर प्राप्त गर्नु भनेको त्यो आत्माको नयाँ जीवन सुरु भएको हुँदैन । वैदिक दर्शनको मान्यतामा हाम्रो हालको शिक्षा प्रणाली जुन तत्व ज्ञानको आधारमा विकास भएको छ त्यसको जगको रूपमा रहेको तत्व ज्ञानको मूल तत्व नै भ्रमपूर्ण छ। शिक्षा प्रणालीको जग नै नक्कली विश्वास माथि उभिएको छ।

जति वेला हाम्रो छिमेकी मुलुक भारतमा बेलायती सरकारको उपनिवेश थियो, त्यसबेला लर्ड मकाउले भारतका लागि नियन्त्रण बोर्डको आयुक्तमा नियुक्त पाए। उनले भारतवर्षको ज्ञानको जग, संस्कृति, अर्थ व्यवस्था र राजनीति मामिलाको गहिरो









अध्ययन गरे। चीनका जनतालाई लागू पदार्थको दुर्व्यसनमा फसाएर आफ्नो काबुमा राखे जस्तो गरी भारतमा लामो समय राज गर्न त्यहाँ वेदको प्रभावले विकास गरेको सचेत नागरिकका कारण सम्भव हुने छैन भन्ने निष्कर्ष निकाले।

वेदले शिक्षित समाजलाई फुटाऊ र राज गरको अवस्थामा पुग्न नसकिने गहिरो तथ्य बुझेका उनले भारतको वैदिक शिक्षा प्रणालीलाई जसरी पनि जतिसक्दो चाँडो धराशायी पार्न जरुरी भएको निचोड निकाले ।

सोही योजना अन्तर्गत भारत वर्षको वैदिक ज्ञानको जग र सभ्यता जसरी पनि धराशायी गर्ने जिम्मेवारीका साथ १९३४ देखि उनी भारतको सर्वोच्च परिषद्को सदस्य भएर भारत आए। मात्र









चार वर्षको बसाइमा उनले भारतमा नयाँ राष्ट्रिय शिक्षा प्रणाली विकास गर्न र लागू गर्न सफल भए। भारतीय शिक्षा प्रणालीमा आपराधिक संहिता समावेश गरिएको नयाँ राष्ट्रिय शिक्षा प्रणालीलागू गर्न उनी सफल बने ।

संक्षिप्तमा उसको नीतिमा जम्मा जम्मीपाँच वटा कुरा राखिए । त्यसको लागी अंग्रेजी वर्णमालाको ए, बी र सी शब्द चयन गरियो। जसमा तेस्रो अक्षर 'सी' लाई उनी सी–सी–सी गरी तीन पटक भन्थे। पहिलो 'सी'को अर्थ वर्ग र सहशिक्षा (caste & co–education), दोस्रोक्लब (Club) र तेस्रो अदालत (Court)भन्ने थियो । तीन 'सी' को सहारामा उनको भारतीय शिक्षा प्रणालीलाई नष्ट गर्ने योजना लागु गरियो।








भारत वर्षमा ब्रिटिस औपनिवेशिक नीतिको सन्दर्भमा A – प्रशासन (Administration) नीति अन्तर्गत भारतको विशाल र विविध जनसङ्ख्यालाई शासित गर्न अत्यधिक केन्द्रीकृत ब्रिटिस प्रशासनिक संरचना स्थापना गरियो। ब्रिटिस अधिकारीहरू प्रमुख राखेर भारतीय सिभिल सेवाको निर्माण गरियो। स्थानीय शासनका महत्त्वपूर्ण पदहरूमा ब्रिटिस अधिकारीहरू राखियो। B – नोकर शाही (Bureaucracy) नीति अन्तर्गत भारतीय क्षेत्रहरूमा ब्रिटिस नियन्त्रण सुनिश्चित गर्न एक बलियो नोकर शाही संरचना परिचालित गरियो। जसको सिभिल सेवामा अधिकांश ब्रिटिसहरू थिए। सबैतिर ब्रिटिस प्रभुत्व कायम हुने गरी नीतिहरू निर्माण गरी लागू गरिए।









C – व्यापार (Commerce) नीति अन्तर्गत ब्रिटिसको फाइदाको लागि भारतलाई ब्रिटिस उद्योगहरूको कच्चा पदार्थको स्रोत र ब्रिटिस वस्तुको बजारको रूपमा विकास गरियो। यी नीतिहरूले भारतको सम्पत्तिमा ब्रिटिस अर्थतन्त्रको विकास सुनिश्चित हुने होम चार्जेज (Home Charges) जस्ता लुट प्रणाली लागु गरियो। C – संस्कृति (शिक्षा) अन्तर्गत "रगत र रङ्गमा भारतीय, तर विचार, नैतिकता र बौद्धिकतामा अङ्ग्रेज" भन्ने वर्ग सिर्जना गर्ने उद्देश्य राखियो। अङ्ग्रेजी शिक्षा उत्तम भन्ने भ्रम अन्तर्गत पश्चिमी करण गरिएको अभिजात वर्ग उत्पादन गरियो। जसले ब्रिटिस शासनलाई सहयोग गर्ने र परम्परागत गुरुकुल शिक्षा प्रणालीलाई घृणा गर्ने गर्दथ्यो। C – नियन्त्रण








(Control by Divide and Rule) अन्तर्गत ब्रिटिसहरूले भारतीयहरू बिच "फुट हाल र शासन गर" भन्ने रणनीति अपनाए। भारतीयहरू बिच एकता कायम हुन नदिन भारतको धार्मिक, भाषिक र सामाजिक पृष्ठभूमिको विविधताको फाइदा उठाएर आपसी तनाव र विभाजन सिर्जना गरियो। विशेष गरी हिन्दु र मुसलमानहरू बिचको विभाजनमा अधिक चासो राखियो। जसले पछि १९४७ मा भारतलाई विभाजनको हद सम्म पुऱ्यायो।

धनीर गरिब वर्गमा विभक्त रहेको शिक्षा प्रणाली जसले जातपातका आधारमा समाजमा चरम अत्याचार लाद्न सकियोस्, उनीहरूको शासन गर्न लाखौँ जना बीच पुग्न सक्ने गरी पद र पैसामा बिक्ने









र आफ्नो चरम शोषणमा सहजीकरणगर्ने दोभासेको विकास गर्न सकियोस्। भारतीय रगत भएको तर विचार, नैतिकतामार बौद्धिक रूप अंग्रेजी शासकको होमा हो मिलाउने लठैत वर्गको विकास गर्न सकियोस्। अंग्रेजीलाईसरकारी तथा अदालतहरूको आधिकारिक भाषा बनाइयो। शिक्षाको आधिकारिक माध्यमका रूपमा अंग्रेजी लागू गरियो। वेदको विरुद्धको शिक्षा जबरजस्त लादियो।

सजाय हुने पुलिस थाना, अन्य कचहरी र अदालतमा उनैका लठैतहरू अनिवार्य अनुवादक रहने गरी न्याय सम्पादन गरियो। मुलुकको ज्ञानको आधार र शिक्षा प्रणालीलाई उनीहरूको राजकाज कालमा सम्पूर्ण रूपमा नष्ट गरियो।




# आर्थिक, सांस्कृतिक र सामाजिक अतिक्रमणको कथा

आज भन्दा मात्र १००० वर्ष अघि ३० प्रतिशत हिस्सा ओगट्ने भारत वर्षको सबै भन्दा सम्पन्न मुलुक थियो। एङ्गस म्याडिसनको अनुमान (Angus Maddison's Estimate) अनुसार १ सिई (CE) देखि २००३ सिई (CE) सम्मका प्रमुख विश्व अर्थतन्त्रहरूको विश्वको जिडिपीमा रहेको विश्वव्यापी योगदानको डाटा अनुसार १८ औं शताब्दीको प्रारम्भसम्म, चीन र भारत कुल जिडिपी (GDP) उत्पादनको आधारमा दुई ठुला





अर्थतन्त्रहरू थिए।




Source: https://commons.wikimedia.org/wiki/File:Share_of_Global_GDP.gif#

माथिको ग्राफको एक्स एक्सिसमा रहेको गैर-रैखिक स्केलमा देखिएको तथ्याङ्कले भारत र चीनको







तत्कालीन प्रभुत्वलाई देखाउने गर्दछ। अक्सफोर्ड विश्वविद्यालयको प्रेस, विश्व अर्थव्यवस्था आइ - २०३० एडि (AD) को रूपरेखा, २६१, म्याडिसन ए (२००७) मा प्रकाशित डाटा तालिका अनुरूप हामीले एक हाम्रो आफ्नै परम्परागत संवृद्धि बारे अत्यन्त महत्त्व पूर्ण सूचना लिन सक्दछौ।

त्यो के हो भने तत्कालीन भारत वर्ष भित्रको मानिने नेपाल खण्डको स्वतन्त्र मुलुक नेपालको आज भन्दा मात्र १००० वर्ष अघि ३० प्रतिशत हिस्सा ओगट्ने भारत वर्षको सबै भन्दा सम्पन्न मुलुक थियो।

जिडिपीले (GDP) कुनै पनि देशको कुल उत्पादन र बिक्री वारेको जानकारी दिन्छ। उदाहरणको लागि यदि कुनै देशको कुल उत्पादन (GDP) १०० मूल्य रुपियाँ छ। यदि त्यो मुलुकको कुल उत्पादन १००













रुपियाँमा ७० रुपियाँ आफ्नै दैनिकीको लागि खर्च गर्दछ भने त्यो मुलुकको आफ्नो जिडिपी १०० हुन्छ भने आफ्नो जिडिपीको ७० प्रतिशत उसले आफ्नै उपभोगमा खर्च गरेको हुन्छ। कुल उत्पादन र कुल खर्चको फरक ३०% वाट त्यो मुलुकको अन्य खर्च, लगानी र बचत आदिको जोहो हुने गर्दछ।

आज भन्दा मात्र १००० वर्ष अघि विश्वको कुल उत्पादनको ३० प्रतिशत हिस्सा ओगट्ने भारत वर्षको सबै भन्दा सम्पन्न मुलुक थियो नेपाल। नेपालमा प्रशस्त विज्ञान, प्रविधि, सिप, ज्ञान र उद्यमशीलता विना पक्कै सम्भव थिएन।

समय क्रममा हामीले हाम्रा पुस्ताको मात्र एक हजार वर्ष पहिलेको परम्परागत ज्ञान, सिप र प्रविधि लाई नियमित गर्न नसक्नु र हामी अर्काको नक्कलमा भुलेर











आफ्नो लोभलाग्दो संवृद्धि लाई नियमित गर्न चुकेको प्रस्ट हुन्छ।

यो आधारमा हामीले के यकिनका साथ भन्न सक्दछौ भने मात्र एक हजार वर्ष पहिले नेपालमा प्रशस्त विज्ञान, प्रविधि, सिप, ज्ञान र उद्यमशीलता विकसित भएर अस्तित्वमा थियो।

समय क्रममा हामीले हाम्रा पुस्ताको मात्र एक हजार वर्ष पहिले सम्म अविच्छिन्न रहेको परम्परागत ज्ञान, सिप र प्रविधि लाई समेत नियमित गर्न सकेनौ। हामी अर्काको नक्कलमा भुलेर आफ्नो लोभलाग्दो संवृद्धि लाई नियमित गर्न चुकेको यसले प्रस्ट गर्दछ।

यो किन र कसरी भयो ? यसको उत्तर खोज्न हाम्रो













लागि अत्यन्त जरुरी छ। हामीले हाम्रा पुर्खाले वैदिक काल देखि आजको दिन सम्म विकसित गरेको विज्ञान र प्रविधि तथा तिनको उपयोग वाट भएको औद्योगीकरणको विनाश विगतमा कसरी सम्भव पारियो भन्ने बारे बुझ्न

लर्ड म्याकाउलेको २ फेब्रुअरी १८३५ मा बेलायती संसद्मा प्रस्तुत भारत वर्षको आफ्नो भ्रमण वारेको बयानले (नेपालीमा उल्था सहित) प्रस्ट गर्दछ।

लर्ड म्याकाउलेको बेलायती संसद्ममा बयान (२ फेब्रुअरी १८३५)

“हालै मैले भारतको लम्बाइ र चौडाइको सम्पूर्ण यात्रा पुरा गरैं। मेरो भ्रमणको क्रममा मैले त्यो देशमा एउटा पनि भिखारी र चोर भेटिन।







असाधारण गुणहरू र उच्च नैतिक मूल्य बोकेका उक्त मुलुकका मानिसहरू देखेर मलाई यो विश्वास भयो कि; जब सम्म त्यहाँ स्थापित रहेको आध्यात्मिक र सांस्कृतिक सम्पदालाई हामीले ध्वस्त पार्न सक्के छैनौ, तव सम्म हामीले त्यो देशलाई आफ्नो कब्जामा लिन सक्के छैनौ।

त्यसैले म यो प्रस्ताव गर्दछु कि त्यस मुलुकमा स्थापित आध्यात्मिक र सांस्कृतिक सम्पदाको अधारलाई पूर्ण रूपमा ध्वस्त गर्न त्यस राष्ट्रको बलिष्ठ मेरुदण्ड बनेर रहेको त्यहाँको पुरानो शिक्षा प्रणाली, आध्यात्मिक र सामाजिक संस्कृतिलाई हाम्रोले प्रतिस्थापन गरौँ। भारतीयहरूले यो सोचूँन कि विदेशी सबै कुरा र अङ्ग्रेजी भाषा उनीहरूको भन्दा उत्कृष्ट छ। त्यसो हुन् सक्दाको विश्वासले











तिनीहरूले आफ्नो आत्मसम्मान गुमाउने छन्।

उनीहरूलाई आफ्नो परम्परागत मूल संस्कृतिवाट निकै पर धकेल्न सकिने छ। आत्मा सम्मान गुमाएका उनीहरूको देश हाल हामीले चाहेजस्तै, हाम्रो वास्तविक गुलाममा परिवर्तित बनिसकेको हाम्रो नियन्त्रणको राष्ट्र बन्ने छ।



"I have travelled across the length and breadth of India and I have not seen one person who is a beggar, who is a thief such wealth I have seen in this country, such high moral values, people of such caliber, that I do not think we would ever conquer this country, unless we break the very backbone of this nation, which is her spiritual and cultural heritage and therefore, I propose that we replace her old and **ancient education system**, her culture, for if the Indians think that all that is foreign and English is good and greater than their own, they will lose their selfesteem, their native culture and they will become what we want them, a truly dominated nation".

Lord Macaulay's Address to the British Parliament on 2nd Feb 1835











I have travelled across the length and breadth of India and I have not seen one person who is a beggar, who is a thief such wealth I have seen in this country, such high moral values, people of such caliber, that I do not think we would ever conquer this country, unless we break the very backbone of this nation, which is her spiritual and cultural heritage and therefore, I propose that we replace her old and ancient education system, her culture, for if the Indians think that all that is foreign and English is good and greater than their own, they will lose their self-esteem, their native culture and they will become what we want them, a truly dominated nation.

Lord Macaulay's Address to the

British Parliament on 2nd Feb 1835.

२ फेब्रुअरी १८३५ मा लर्ड म्याकाउले गरेको ब्रिटिस संसद्को सम्बोधन।

मात्र ८०० वर्ष अघि अक्फोर्डले अघि सारेको आधुनिक अर्थशास्त्र र समाज शास्त्रको विषाक्त जहरको इन्जेक्सन भारत हुँदै हाम्रो समाजमा समेत यत्र तत्र छरियो।













गुरु बाट शिक्षकको पदवी भिरेकाहरु मार्फत यसको निकै ठुलो दुरुपयोग गरियो। परम्परागत ज्ञान, संस्कृति र अध्यात्मको पक्षधरलाई हाम्रै पाठशाला, स्कुल, कलेजका गुरुबाट शिक्षकमा परिवर्तन बनेका सचेत वर्ग मार्फत जङ्गली, अज्ञानी, पाखे र रुढीवादीको ट्याग लगाउन थालियो।

यो थियो भारतको कुरा।

नेपालभने कहिल्यै कसैको उपनिवेश भएन। तर, यहाँका शासक भने विदेशीको सदैव प्यादा वने। उपनिवेश नबनेरैपारिको काउली खाएर वारि शासन गर्नेले यता पनि नयाँ शिक्षा लागू गरे। वर्ग, जात, राज्यसञ्चालनमा समूह स्वार्थ लादने लठैत समूहमार्फत राज्य सञ्चालन भयो ।







बिकुवा शिक्षा र न्याय प्रणाली परिचालित बने । वैदिक ज्ञान, हाम्रा रैथाने सीप, ज्ञानर प्रविधिको जरादेखि उखेल्ने काम गरिए। कृषि र व्यापारमा परनिर्भरता विकास गरी मुलुकलाईविदेशी उत्पादनको एकाधिकार भएको बजार र उपभोक्ताका रूपमा परिवर्तन गरियो। पछि भारत बाट अंग्रेज हटे ।

हाम्रा शासकमा विदेशीहरूको जति ठूलो हनुमान बन्न सक्यो त्यति लामो समय शासनमा रहने प्रतिस्पर्धा बन्यो। आजको दिनमा आइपुग्दा न हाम्रो शिक्षा प्रणाली हामीलाई सहयोगी रह्यो न हाम्रोआफैँले कर तिरेर जनताको नोकर हुनुपर्ने कर्मचारीतन्त्र हाम्रो रह्यो न न्यायका लागिअदालत नै हाम्रो आफ्नो बन्न सक्यो।








जनताको नोकर रहनुपर्ने कर्मचारीतन्त्र मालिक बनेर जनता तर्साउने घुसखोर बने । अफिस जागिर खानजाने थलो, कामगर्दा त पावरवालाको भए ओभरटाइम, तागतहीन जनताको काम भए घुस चाहिने अघोषित संस्कार बन्यो।

ज्ञान वा अविद्या रहेको तर नैतिकता च्युत पाठ्यक्रम मार्फत हाम्रो समाजमा आजको दिन सम्म नियमित भइरहेको विष वमनले हाम्रा आफ्नै धेरै सन्ततिहरू नेपाली बाउँका अङ्ग्रेजी औलाद बने।

तिनै संस्थाका सो कल्ड आधुनिक, वैज्ञानिक भनिएका सचेत वर्ग भनिएका हरुको हातमा हाम्रो राजनीति पुग्यो, शासन व्यवस्था पुग्यो, पत्रिका र सम्पूर्ण सामाजिक वितृष्णा मार्फत मुलुकलाई धराशायी गरेर मुलुकलाई विदेशी उत्पादन, बिचार








र रणसङ्ग्रामको कठपुतली मुलुकमा परिवर्तन गरियो।

समय क्रममा भारत भने बिस्तारै उपनिवेश वादको घन चक्कर वाट आफूलाई मुक्त गर्दै विकसित मुलुक बन्ने प्रतिस्पर्धामा पुग्दै गर्दा हाम्रोमा जान युद्धको नाममा निम्तिए विद्रोहको तारो समेत त्यसका नेताहरूले सनातन संस्कार लाई धुलोमा मटाउनेमा रहन पुग्यो। जसलाई अगस्त १४, २००७ मा तत्कालीन नेकपा माओवादीका विदेश विभाग हेर्ने केन्द्रीय समिति सदस्य कृष्ण बहादुर महराले अमेरिकी दूतावासका राजदूत न्यान्सी पावेल लाई माओवादीको तर्फबाट लेखेको पत्रले पुष्टि गर्दछ।

अगस्त १४, २००७ मा तत्कालीन नेकपा माओवादीका विदेश विभाग हेर्ने केन्द्रीय समिति









सदस्य कृष्ण बहादुर महराले अमेरिकी दूतावासका राजदूत न्यान्सी पावेललाइ नेपाल मामला बारे उल्लेख गर्दै अमेरिकी सरकारलाई नेपाली माओवादीको तर्फवाट नयाँ सम्बन्ध विकासका लागि आह्वान गरी लेखेको पत्रले धेरै कुरा सङ्केत गर्ने छ।

पाठकको सुविधाको लागि अङ्ग्रेजीमा लेखेको पत्रको अनौपचारिक नेपालीमा अनुवाद यस्तो छ।

Ambassador Nancy Powell

U.S. Embassy

Kathmandu, Nepal










राजदूत न्यान्सी पावेल

अमेरिकी दूतावास

काठमाडौँ, नेपाल

August 14, 2007

अगस्त १४, २००७

Dear Ambassador Powell,

प्रिय राजदूत पावेल,

Namaste, and welcome to Nepal.

नमस्ते, नेपालमा स्वागत छ।













It is our sincere desire that your tenure in Nepal will be satisfying and productive. We hope that during your time of service here you will see substantial changes towards peace and justice across our land.

नेपालमा तपाईको कार्यकाल सन्तोषजनक र फलदायी होस् भन्ने हाम्रो हार्दिक इच्छा छ। हामी आशा गर्दछौं कि तपाईको सेवा अवधिमा तपाईले हाम्रो देशमा शान्ति र न्यायको दिशामा उल्लेखनीय परिवर्तनहरू देख्नुहुनेछ।

We are very hopeful that with your arrival there will be a new







beginning in the relationship between the U.S. Government and CPN-M. We feel that it was unfortunate that a dialogue between us was not obtained with your predecessor.

तपाईँको आगमन अमेरिकी सरकार र नेकपा माओवादीबिचको सम्बन्धमा नयाँ सुरुवात हुनेछ भन्नेमा हामी पूर्ण आशावादी छौँ। तपाईँका पूर्ववर्तीसँग हामी बिचको वार्ता हुन नसकेकोमा हामी दुर्भाग्यपूर्ण महसुस गरिरहेको छौ।

As for the past, on February 13, 1996, after we had exhausted every avenue, we knew of to bring about











a substantial change to the Nepal Government, we organized a revolution against a corrupt Monarchy.

नेपालको शासन व्यवस्थामा ठुलो परिवर्तन ल्याउन हामीले जाने बुझेको सबै उपायहरू समाप्त भएको अनुभूति गरेपछि विगतको १३ फेब्रुअरी, १९९६ वाट हामीले भ्रष्ट राजतन्त्र विरुद्ध क्रान्ति गर्‍यौं।

The Brahmin Hindu politicians and government leaders had been uncaring of the plight of the common people.

ब्राह्मण हिन्दु राजनीतिज्ञ र सरकारमा रहेका











नेताहरूले आम जनताको दुर्दशाप्रति बेवास्ता गरिरहे।

An understanding of the fate of the common Nepali people has been clearly pointed out by Professor Dor Bahadur Bista in his book "Fatalism & Development".

आम नेपाली जनताको भाग्यको बुझाइलाई प्राध्यापक डोरबहादुर विष्टले आफ्नो पुस्तक 'नियतिवाद र विकास' मा स्पष्ट रूपमा औंल्याएका छन्।

He shows how Nepal has little future while it is ruled by Brahmin













Hindu teaching.

उनले नेपालमा ब्राह्मण हिन्दु शिक्षाले शासन गर्दा सम्म नेपालको भविष्य कसरी सीमित हुने छ भनी प्रस्ट पारेका छन्।

Incidentally, for writing and saying such things, he paid for it when in 1995 he disappeared from a bus coming from West Nepal in the middle of the night.

संयोगवश, त्यस्ता कुराहरू लेखे र बोले बापत सन् १९९५ मा मध्यरातमा पश्चिम नेपालबाट आउँदै गरेको बसबाट मध्य रातमा बेपत्ता हुनु पर्ने मूल्य उनले चुकाउनु पऱ्यो।







I would like to point out that even though the revolution is substantially over, still the Congress Party and others refused to change the constitution to allow individuals to freely choose their own religion.

म उल्लेख के गर्न चाहन्छु भने क्रान्ति पर्याप्त मात्रामा सकिए पछि पनि व्यक्तिले आफ्नो धर्म स्वतन्त्र रूपमा रोज्न पाउने अधिकार दिनको लागि काँग्रेस पार्टी र अरूले संविधानमा संशोधन गर्न अस्वीकार गरे।

This is just one point that indicates that we must continue to be vigilant and strong.











यो एक मुख्य सन्दर्भ हो जसले सङ्केत गर्दछ कि हामी अझै नियमित सतर्क र बलियो हुन आवश्यक छ।

Our goal is to see the Monarchy completely removed from Nepal.

हाम्रो लक्ष्य राजतन्त्रलाई नेपालबाट पूरै हटाएर बिदा गर्नु हो।

Otherwise, our country will continue to be governed by corrupt politicians, who according to their Hindu teaching, are deserving of all the fruits of the land.

अन्यथा, हाम्रो देशमा भ्रष्ट राजनीतिज्ञहरूले







नियमित शासन गरिरहने छन्। हिन्दु शिक्षाको विशिष्ट व्याख्या मार्फत आफ्नो भ्रष्ट राजनीतिक कार्यहरूलाई जायज करार गरिरहनेछन्।

May I mention that we are aware that we have not been able to meet all of the expectations that your predecessor had.

म यो पनि उल्लेख गर्न चाहन्छु, हामी यो कुरामा सचेत छौँ कि, तपाईंका पूर्ववर्ती समकक्षीहरूले गरेका सबै अपेक्षाहरू हामीले पूरा गर्न सकेनौँ।

However, after 10 years of warfare to change everything and everyone in such a diverse and widespread







organization is not easy and takes time.

यथार्थमा, १० वर्षको युद्धले विकास गरेको विविध र फराकिलो सङ्गठनमा संलग्न रहेका सबै व्यक्ति र सबै कुरामा परिवर्तन गर्न सजिलो थिएन। समय लाग्यो।

For instance, not long ago, a few YCL cadres took it upon themselves to pelt Ambassador Moriarty's vehicle with rocks.

उदाहरणका लागि, केही समय अघि वाईसीएलका केही कार्यकर्ताहरूले राजदूत मोरियार्टीको गाडीलाई ढुङ्गाले हानेका थिए।






This was an embarrassing event for our organization.

यो हाम्रो पार्टीको लागि एक लज्जास्पद घटना थियो।

These cadres were neither instructed to do so, nor did we expect this action to come from our people. Nevertheless, it did. Please accept our apologies.

ती कार्यकर्ताहरूलाई न त त्यसो गर्न निर्देशन दिइएको थियो। न त हामीमा हाम्रा कार्यकर्ताहरू बाट यस्तो कर्म हुने अपेक्षा नै थियो। तैपनि, त्यसो गरियो। त्यस कार्यको लागि कृपया हाम्रो तर्फबाट






माफी स्वीकार गर्नुहोस्।

During the Revolution we found ourselves faced with many difficult situations.

क्रान्तिको क्रममा हामीले धेरै जटिल परिस्थितिहरूको सामना गर्नु पर्‍यो।

One of them was when we discovered that two U.S. Embassy employees were seeking to collect information about the CPN-M leadership.

ती मध्ये एक त्यो घटना थियो जसमा हामीले अमेरिकी दूतावासका दुई कर्मचारीले नेकपा-



माओवादीको नेतृत्व बारेका जानकारीहरू सङ्कलन गर्न खोजिरहेको कुरा पत्ता लगायौँ।

Whether they were doing this of their own accord, or whether it was at the instigation of pro-Monarchy forces we do not know.

उनीहरूले यो आफ्नो स्वेच्छाले गरिरहेका थिए वा राजतन्त्रका समर्थक शक्तिहरूको उक्साहटमा यो काम भइरहेको थियो, त्यो हाम्रो जानकारीमा थिएन।

However, since we were at war, the situation seemed to be very serious.

कारण जे सुकै रहेता पनि, तत्कालीन समयमा











युद्धमा रहेको हामीहरूको लागि यो परिस्थिति निकै गम्भीर देखिन्थ्यो।

At the time, we felt that their spying on the Maoist leadership had to be curtailed and they were killed by the CPNM cadres.

हामीले त्यति बेला माओवादी नेतृत्वमाथिको जासुसी गरिएको महसुस गरेका थियौँ। त्यसै बिच उल्लेखित प्रकृतिका जासुसी गतिविधिहरू रोक्न वा सीमित गर्न आवश्यक रहेको एक निर्णय लिइयो। जसको आधारमा जासुसीमा संलग्न व्यक्ति वा समूहलाई नेपाल कम्युनिस्ट पार्टी माओवादीका सदस्यहरूले मारेका थिए।







Perhaps this incident was seen to be an attack on the U.S. Government, but that was not the case.

सायद यो घटनालाई अमेरिकी सरकार माथिको आक्रमणको रूपमा हेरिएको हुन सक्दछ, तर वास्तविक यथार्थ त्यस्तो थिएन।

We are sorry that you lost two of your employees in such a manner and I wanted to enlighten you on the circumstances that led to it.

हामी दुःखी छौँ कि तपाईँहरूले आफ्नो दुई कर्मचारीहरू त्यसरी गुमाउनु भयो। त्यस्तो परिस्थितिहरू कसरी उत्पन्न हुन पुगे भन्ने बारे म









तपाईँलाई प्रस्टीकरण दिँदै छु।

Let me assure you that such an incident will not be repeated in the future.

म तपाईँलाई भविष्यमा यस्तो घटना दोहोरिने छैन भन्ने विश्वास दिलाउन चाहन्छु ।

We have very strictly instructed out cadres that under no circumstances are any U.S. citizens or Nepalese working at the U.S. Embassy to be targeted.

हामीले कुनै पनि परिस्थितिमा अमेरिकी दूतावासमा काम गर्ने अमेरिकी नागरिक वा नेपालीलाई लक्षित











नगर्नका लागि हाम्रा कार्यकर्ताहरूलाई कडा निर्देशन दिएका छौँ।

Consequently, I was greatly alarmed this Spring when our party received information from a reliable intelligence source.

त्यसको लगतै, यही वसन्तमा (स्प्रिङ सिजन) भरपर्दो खुफिया स्रोतबाट हाम्रो पार्टीले प्राप्त गरेको सूचनाले म धेरै चिन्तित बने।

We were informed of a Palace plan to kill high level U.S. Embassy officials and have it blamed on CPN-M cadres.













अमेरिकी दूतावासका उच्च तहका अधिकारीहरूलाई मार्ने र नेपाल कम्युनिस्ट पार्टी माओवादीका कार्यकर्ताहरूलाई दोष थोपर्ने दरबारको योजनाको बारेमा हामीलाई जानकारी दिइएको छ।

The Palace is adept at disseminating false stories about CPN-M and I knew that if this plot were successfully carried out it would be impossible for us (to) prove that we were not involved.

दरबार नेकपा-माओवादीको बारेमा झूटा कथाहरू फैलाउन माहिर छ। मलाई यो थाहा छ कि, यदि यो षड्यन्त्र सफलतापूर्वक सम्पन्न भएको खण्डमा त्यसमा हामी संलग्न छैनौँ भनेर प्रमाणित गर्न हाम्रा







लागि असम्भव हुनेछ।

Such an event would have greatly strengthened the pro-Monarchy forces and, not to mention the tragic loss of life, could have been a great set-back for the revolution.

यस्तो घटनाले राजतन्त्र समर्थक शक्तिहरूलाई धेरै बलियो बनाउने छ। त्यसले निम्त्याउने जीवनको दुःखद क्षतिको उल्लेख नगरी भन्नु पर्दा क्रान्तिको लागि अत्यन्त ठुलो धक्का पुग्न सक्छ।

It is difficult for us to give more precise information about the incident without disclosing the









identity of our intelligence source.

यो सन्दर्भमा हाम्रो गुप्तचर स्रोतको पहिचानको खुलासा नगरी घटनाको बारेका थप र सटीक जानकारी दिन हामीलाई कठिन छ।

To doubly insure that such a tragedy did not occur, we immediately gave strict instructions to our cadres not to harm any U.S. citizens or U.S. Embassy officials.

त्यस्तो सूचनाको प्राप्ति सँगै यस्तो दुःखद घटना नदोहोरियोस् भनी हामीले हाम्रा कार्यकर्ताहरूलाई कुनै पनि अमेरिकी नागरिक तथा अमेरिकी दूतावासका कर्मचारीहरूलाई कुनै पनि हानि







नोक्सानी नपुऱ्याउन पुनः कडा निर्देशन दिएका छौ।

In closing, may I say that the CPN-M Party goals remain committed to multiparty democracy, human rights and full religious freedom.

अन्त्यमा, म नेकपा-माओवादी पार्टीका लक्ष्यहरू बहुदलीय प्रजातन्त्र, मानव अधिकार र पूर्ण धार्मिक स्वतन्त्रता प्रति प्रतिबद्ध छन् भनी भन्न चाहन्छु।

As we proceed towards that goal, we want to develop a good diplomatic relationship with the US.











हामी हाम्रो त्यो लक्ष्यमा अघि बढ्दै जाँदा हामी अमेरिकासँग राम्रो कूटनीतिक सम्बन्धको विकास गर्न चाहन्छौं।

In that regards, the CPN-M is always willing to talk to U.S. government officials at any level and in any place.

यस सन्दर्भमा, नेकपा माओवादी जहिले पनि अमेरिकी सरकारका अधिकारीहरूसँग जुनसुकै तह र स्थानमा वार्ता गर्न इच्छुक छ।

Again, Ambassador Powell, a warm welcome to Nepal.

पुनः राजदूत पावेल, तपाईँलाई नेपालमा हार्दिक











स्वागत छ।

Sincerely Yours,

तपाईको भवदीय,

Mr. Krishna Bahadur Mahara

Member of Central Committee, CPN-M

Kathmandu, Nepal.

श्री कृष्ण बहादुर महरा

केन्द्रीय समिति सदस्य, नेकपा माओवादी

काठमाडौं, नेपाल ।

स्रोत: विकिलिक्स - २०२३-१०-१० मा वेब मार्फत प्राप्त अभिलेख।













https://wikileaks.org/plusd/cables/07KATHMANDU1572_a.html

(नेपाल मामला: अमेरिकी राजदूतलाई नेपाली माओवादीको पत्र: नयाँ सम्बन्धका लागि आह्वान।)

फलतः आज हामी लगातार तेस्रो पटक सबैभन्दा नकारात्मक भावना अधिक भेटिने मुलुकमा दर्ज हुन पुगी रहेको छौ। आफ्नै परम्परागत मूल संस्कृतिबाट निकै पर धकेलिएका हामी बिच आफ्नो आत्मा सम्मान नष्ट भएको छ। विदेशी चाकरहरुको शासन अन्तर्गत उनीहरूले चाहेजस्तै हाम्रा शासकहरू उनीहरूको वास्तविक गुलाममा परिवर्तित बनिसकेका छन्। हाम्रो मुलुक सम्पूर्ण रूपमा विदेशीको नियन्त्रणको राष्ट्र बनेको छ।







हाम्रा अमूल्य वेद र परम्परागत विज्ञान जसको आडमा आज संसारले चमत्कार गर्न सकिरहेछ, त्योहाम्रो आफ्नै बौद्धिक र समाजको चेतनशील वर्ग र जनताको सेवक गनिएका वर्गको चरम उपेक्षार दमनमा पर्‍यो। हामी सङ्गठित जालसाजीमा पारियो ।

आज तपाईं हाम्रो घर भाँडिएको छ । हाम्री हजुरआमा चार वर्षकी नातिनीलाई मन्दिर लिएर जानुहुन्छ। वैदिक परम्परा अनुसार झुटो नबोल्नू, आफ्नो अन्तरात्माको आवाज सुन्नू, सत्यको जहिले जित हुन्छ, सम्पूर्णप्राणीको शरीरमा ईश्वरको अंश आत्मा छ। कसैलाई अन्याय अत्याचार नगर। मन नदुखाऊ । अर्काको कमाइ नखानू । आफ्नो कमाइको केही भाग अनिवार्य समाज सेवामा











लगाउनू अनि ठूलो ज्ञानी मान्छे बन्नू भनेर दिनहुँ भन्नुहुन्छ।

पारिको काउली खाएर वारिको शासन गर्नेको निर्देशनमा चलेको शिक्षा प्रणालीले विज्ञानले ईश्वरनहुने कुरा भन्छ, तिम्रीआमा र हजुर आमा ज्ञानबुद्धि केही नभएका अज्ञानी हुन् भन्ने पाठ घोकाउँछ। साधनको जोहोगर्न सिकाउँदैन, मात्रखर्च गर्न सिकाउँछ। सीप सिकाउँदैन, खर्च गर्ने उपाय र आकांक्षा बढाउँछ।

प्राविधिकज्ञान सिकाउँदैन, सैद्धान्तिक दर्शन थोपर्छ । सम्पूर्ण शक्ति लगाएर वैदिक ज्ञान र वैदिक विज्ञानमा भरोसा गर्ने उनैको आमा र हजुरआमा विरुद्ध जति विद्रोह गर्न सक्यो त्यति क्रान्तिकारी र जति क्रान्तिकारी बन्यो त्यति समाजको ठूलो मान्छे











हुने गहिरो छाप छोडिदिन्छ।

हाम्रा वेद र उपनिषद्हरूमा धर्मशास्त्र, कामशास्त्र, मोक्षशास्त्र, खाना, लत्ताकपडा, आवास, शिक्षा, स्वास्थ्य, यात्रा, चाडपर्व, रक्षा, कानुन, सेवा, विवाह, व्यापार इत्यादिबारे अथाह ज्ञानको खजाना छ। नाति, हाम्री नातिनीलाई क्रान्तिकारीबन भन्ने तपाईं हाम्रो शिक्षा प्रणालीले स्कुल र कलेजमा व्यवस्था गरेको शिक्षा प्रणालीमा बिरलै विद्या र अविद्याको ज्ञान भएका शिक्षक र शिक्षिका भेटिन्छ ।

हाम्रो समाज सुधारक, हाम्रा बालबच्चाको भविष्य उज्ज्वल बनाउने जिम्मा पाएका हाम्रा स्कुल र कलेजका गुरुबा – गुरुआमाहरू शिक्षक पदवीमा विभूषित हुँदै गर्दा 'अँध्यारोबाट उज्यालोको













यात्रामा' हाम्रा मुलुकका कर्णधारलाई डो¥याउने गुरुबा–गुरुआमा बन्नुपर्नेमा उनीहरूको भूमिका परिस्थितिले 'सिल्ली क्षेत्रको कर्मचारी'अर्थ दिने शिक्षकको रुपमा सीमित पारिदिएको छ ।

तपाईं हामीले सोच्नुपर्ने बेला भएको छ कि किन हाम्रा वैदिक ज्ञानका ३२ वटा विज्ञानका विभाग र ६४ प्रकारका कलाका ज्ञान हाम्रा आजका हाम्रै शैक्षिक संस्थानका पाठ्यक्रममा अटाउन सकिरहेको छैन ।

हाम्रो समाजलाई विभेदकारी भनी आरोप लगाउने अंग्रेजी नयाँ शिक्षाका हाम्रा आफ्नै उत्पादनलाई सुदामा जस्ता अत्यन्त गरिब ब्राह्मण र श्रीकृष्ण दुवै उज्जैनको सान्दीपानीजीको आश्रममा एउटै गुरुकुलका उत्पादन हुन् भन्ने ज्ञान छैन। त्यो कसरी











सम्भव बन्यो त्योबारे सोच्ने किन कोही देखिएन।

वेदले महिलाको चरम अन्याय गर्छ भन्ने हाम्रा समाजका विद्वतम वर्गलाई यो यथार्थ थाहा छैन कि वेदका श्रुतिहरू अस्तित्वमा ल्याउन भूमिका खेल्ने २३० जति ऋषि मात्र हैन २४ ऋषिका समेतछन्। वेद बाहेक अन्यत्र कुनै पनि पवित्र धार्मिक ग्रन्थको निर्माणमा यति ठूलो संख्यामा नारीहरू सहभागी भेटिँदैन। अन्तको हकमा त एकै जना मात्र समेत भेटिन मुस्किल पर्छ ।

जातपात बारे विचार गर्दा पुरातन संस्कृत ऋग्वेदको ‘पुरुष सुक्तम पद’ मा पहिलो पटक ‘वर्ण’को उल्लेखभएको पाइन्छ। पुरुषको अर्थ आदिम प्राणी हो। आदिम प्राणी आफैँमा केटा वा केटी के हो भनी नछुट्टिने तेस्रो लिंगी (दुवै शक्ति नेगेटिभ र













पोजिटिभ यथार्थमा न्युट्रल पनि) एक आदिम मानव (शिव शक्ति) लाई जनाउँछ।

वैदिक विज्ञानमा नृत्यरूपी कम्पन अथवा शिवशक्ति रूपी कम्पन शक्ति लाइ विज्ञानमा भौतिक निर्माणको नियमित कम्पनमा रहने सूक्ष्म तत्त्व क्वान्टम पार्टिकल भनेर चिनिन्छ। क्वान्टम पार्टिकल निर्माण हुने कम्पन शक्तिको सार तत्त्वलाई वैदिक विज्ञानले चेतना भनेको छ । कसैले व्यक्तिको चेतना लाई आत्मा र ब्रह्माण्ड चेतनालाई परमात्मा भन्ने गर्दछन्। चेतना बाट सारा ब्रह्माण्डको निर्माण भएको छ। तेस्रो लिंगी आदिम मानवको आत्मबलिदान मार्फत नर वा छोरो मानिसको गुण अधिक भएको (जीवन्त शक्ति बीजयुक्त) र नारी वा छोरी मान्छेको अधिक गुण भएको (ग्रहण र











उत्पादनशील डिम्ब शक्तियुक्त) मानवको विकास भएको बताएको छ।

वेदान्त दर्शनमा परा र अपरा विद्याको सन्दर्भ आउँछ। जहाँ अपरा विद्या भौतिक संसारलाई बाँच्न र बुझ्नको लागि आवश्यक विद्या हो। परा विद्या भनेको त्यस्तो ज्ञान हो जसले व्यक्तिलाई उच्चतम आध्यात्मिक सत्य र मुक्ति मार्ग तर्फ लैजान्छ। मुण्डका उपनिषद्मा उल्लेख भए अनुरूप साँचो ज्ञान अर्थात् ब्रह्मको ज्ञानपरा विद्या हो। ब्रह्म ज्ञान बाहेकको अन्य सबै ज्ञानहरू अपरा विद्या अन्तर्गत पर्दछ। अस्तित्वको अस्थायी, परिवर्तनशील पक्षहरूका विषय अपरा विद्या हुने गर्दछ।

अपरा विद्या अन्तर्गत विज्ञान, कला, शिल्प, अनुष्ठान र वेदको अध्ययन आदि विभिन्न विषयहरू













समावेश हुनेगर्दछ। अपरा विद्याको लक्ष्य सांसारिक मामिलामा ज्ञान र दक्षता प्राप्त गर्नु, अनुष्ठानहरू सञ्चालन गर्नु र भौतिक र सामाजिक कर्तव्यहरू पूरा गर्नु हो। अपरा विद्या चक्रीय जीवन पद्धति भित्र जीविको पार्जन गर्ने कर्म गर्नकोलागी महत्त्वपूर्ण हुन्छ तर त्यसमा आध्यात्मिक मुक्तिको पथबारेको ज्ञान समावेश हुँदैन।

पराविद्या आत्माको प्रकृति र ब्रह्म सँगको आत्माको एकरूपता तथा परम अपरिवर्तनीय वास्तविकतावारेको सत्य ज्ञान लिन उपयोगमा आउँछ। परा विद्यामा मुक्ति (मोक्ष) प्राप्तिको आध्यात्मिकज्ञान समावेश छ। आत्मको परमात्मासँग मिलन मार्फत एकता प्राप्त गर्न भौतिक जीवनको दायरा बाहिरको पक्षहरू परा विद्यामा









समावेश छ । परा विद्या वारेको ज्ञान मुख्यतया उपनिषादहरूमा पाइन्छ। उपनिषादहरू वास्तविक सत्य र मुक्ति मार्ग तथा आत्मको प्रकृतिको अन्वेषण गर्ने दार्शनिक ग्रन्थहरू हुन्।

अन्नमयकोष (भौतिक शरीर), प्राणमयकोष (जीवन्त शक्ति आत्मा), मनोमय कोष (वैचारिक वा मस्तिष्क), विज्ञानमयकोष (चेतनशीलता वा कन्ससनेस) र आनन्दमय कोष (धन्यपन वा ब्लिसफुल) गरी पाँच प्रकारकोकोष निर्मित शरीरको अपरा र परा प्रकृति शक्तिबीच पुलका रूपमा रहेर संयोजन गर्ने काम 'पुरुषशक्ति' ले गर्दछ। जहाँ पुरुष भनेर लोग्ने मान्छे भनेको हैन। पुरुषको अर्थ "व्यक्तिगत आत्मा" अथवा जीवको चेतना भन्ने हुन्छ।









ब्रह्माण्डमा व्याप्त सम्पूर्ण चेतना वा ब्रह्माण्डको आत्मालाई पुरुष भनिन्छ। ब्रह्माण्ड अस्तित्वमा आउनुको परम कारण र सामग्री जसबाट सबैकुरा उत्पन्न हुन्छ र तिनीहरू अन्ततः विघटन भएर त्यसैमा मिलन हुन्छ त्यो शक्ति ब्राह्मण हो। ब्राह्मण कुनै गुण र रूप नहुने एक अपरिवर्तनीय वास्तविक अस्तित्व हो जुन अनन्त, शाश्वतर सर्वव्यापी रहन्छ । अद्वैत वेदान्तले व्यक्तिको आत्मा र ब्रह्माण्डको आत्मा बिचको भेद एक भ्रम अर्थात् मायाको कारण हुने कुरा गर्दछ। व्यक्तिको आत्मा ब्रह्माण्डको आत्माको सानो अंश हो। जुन ब्रह्माण्ड आत्माको अटुट संसर्गमा रहने गर्दछ । व्यक्तिको आत्मा अन्ततः ब्रह्माण्ड आत्मामा गएर मिल्दछ । वर्ण प्रणालीको जातपात बारे वेदको प्रस्ट अवधारणा










भेटिन्छ ।

ऋग्वेद र भगवद गीता जस्ता पवित्र ग्रन्थहरूमा पेसा र गुणको आधारमा समाजमा उपलब्ध व्यक्तिको व्यवसाय लाई निश्चित समूहहरूमा वर्गीकृत गरी वर्ण प्रणालीको निर्माण भएको छ । उक्तवर्ण प्रणाली अन्तर्गत समाजमा उपलब्ध पुजारीहरू र विद्वान पेसालाई ब्राह्मण, योद्धा र शासक पेसालाई क्षेत्रीय, कृषि र व्यापार पेसालाई वैश्य, श्रमिकर सेवा प्रदायक पेसालाई शूद्र गरी चार भिन्न समूहहरूमा वर्गीकृत भएको थियो ।

वर्ण प्रणाली अन्तर्गत व्यक्तिको व्यवसाय लाई सैद्धान्तिक रूपमा विभाजन गर्न व्यक्ति कुनपरिवारमा जन्मेको हो त्यो नभएर व्यक्तिले आफ्नो स्वभाव र क्षमताको आधारमा कुन समूहको













पेसामा आफूलाई संलग्न गर्दछ भन्ने उल्लेख गर्न भएको थियो ।

**भगवदगीतामा कृष्ण भन्नु हुन्छः**

**चातुर्वर्यं मया सृष्टं गुणकर्मविभागशः ।**

**तस्य कर्तारमपि मां विद्धयकर्तारमव्ययम् ॥**

**॥भगवद गीता अध्याय ४, श्लोक १३ ॥**

Based on qualities and actions, nature has created four varnas of man. Prakriti, the creator of the varna system, is pure and ever lasting (immutable non-doer).

गुण र कर्मका आधारमा प्रकृतिले मनुष्यको चार





वर्ण बनाएको छ। वर्ण व्यवस्थाको रचयिता प्रकृति अकर्ता र अविनाशी हुने गर्दछ ।

ऋग्वेद संहिताको पुरुष सूक्त११ र १२ मा तलका कुराहरू उल्लेख छः

**ब्राह्मणोऽस्य मुखमासीद्बाहू राजन्यः कृतः ।**

**ऊरू तदस्य यद्वैश्यः पद्भ्यां शूद्रो अजायत ॥११ ॥**

The Brahmana (spiritual wisdom ability) is like His mouth; the Kshatriya (military and administrative skills) are like His arms; the Vaisya (business and trade skills) are like His thighs; and the Sudra (work and support skills) are





like His feet.

ब्रह्माण्डपुरुषको अस्तित्व बारेमा चर्चा गर्दा आध्यात्मिक ज्ञानको कुशलता युक्त ब्राह्मणले उहाँको मुखको, सैन्यर प्रशासनिक सीप युक्त क्षेत्रीयले उहाँको हातको, व्यवसाय र व्यापार कुशलता युक्त वैश्यले उहाँको तिघ्राको र कर्म र सेवामा कुशलता युक्त शूद्रले उहाँको मुख्य आधारको (खुट्टाको) भूमिकाको प्रतिनिधित्व गर्दछ।

**चन्द्रमा मनसो जातश्चक्षोः सूर्यो अजायत ।**

**श्रोत्राद्वायुश्च प्राणश्च मुखादग्निरजायत ॥ १२ ॥**

**॥ ऋग्वेद १०.९०.१२ पुरुष सूक्त ॥ यजुर्वेद ३१.११ ॥**



The Moon represents his mind, showing the cosmic mind. The Sun represents self and awareness, showing his eyes. Indra describes the power to grasp and act, and Agni, or cosmic willpower, stands for his mouth. Air represents his vital energy.

चन्द्रमा ब्रह्माण्डीय मनको सङ्केत हो । जसले उसको मनको प्रतिनिधित्व गर्दछ । सूर्य उसको आँखा हो, जसले आत्म र जागरूकताको प्रतिनिधित्व गर्दछ । इन्द्रले आपसी सन्तुलन कायम गर्ने तथा कर्म गर्ने शक्तिको प्रतिनिधित्व गर्दछ। ब्रह्माण्डीय इच्छा शक्तिको रूपमा जानिने अग्निले उसको मुखको











प्रतिनिधित्व गर्दछ। उसको जीवन्तताको ऊर्जा शक्तिको प्रतिनिधित्व भने वायुले गर्दछ ।

वैदिक दर्शन अनुसार हरेक व्यक्तिले जन्मँदैमा कुनै न कुनै विशेष खुबी लिएर जन्मेको हुन्छ। आफ्नो विशेष खुबीको क्षेत्रमा उसलाई निकै चासो रहने हुँदा सम्बन्धित क्षेत्रको ज्ञान र अनुभवको आधारमा उसले आफूलाई त्यस क्षेत्रमा विशिष्ट कुशलता प्राप्त गर्न सक्दछ।

वैज्ञानिक ढङ्गले प्रस्ट गर्दा फरक फरक मात्रामा सत्व गुण, रजो गुण र तमो गुणको संयोजन गरी प्रकृतिले आफ्नो विशेष सिर्जनाको रूपमा फरक फरक व्यक्तिको सिर्जना गर्दछ।

त्यो क्रममा हरेक व्यक्तिले अन्य भन्दा भिन्न अति











निश्चित विशिष्ट गुण लिएर संसारमा जन्मेको हुन्छ। जस अनुसार सत्त्व गुण हाबी भएको व्यक्ति ब्राह्मण पेसामा सफल बन्दछ। तिनीहरू विद्या, अध्यात्म, पूजा, पाठ, आराधना आदिमा अधिक झुकाव राख्दछन्। रजोगुणको अधिक प्रभुत्व हुने गरी सत्वगुण मिश्रित व्यक्तिहरू शासक तथा योद्धाको गुणको हुने गर्दछन्। यस्ता व्यक्तिको प्रशासन र व्यवस्थापन सँग सम्बन्धित काममा अधिक रुचि हुने हुँदा उनीहरू क्षेत्रीय पेसामा सफल रहने अधिक सम्भावना हुन्छ।

रजो गुण र तमोगुण समान रूपमा मिश्रित व्यक्ति कृषि र व्यावसायिक काममा अधिक चासो लिने हुँदा उनीहरूको लागि वैश्य पेसामा सफल पेसा रहने सम्भावना रहन्छ। तमोगुण अधिकता रहने गरी













तमो गुण र रजोगुण व्याप्त व्यक्ति नोकरी र मजदुरीमा अधिक निपुण हुन्छन्। तमो गुणको अधिकता रहेको वर्ग समाजमा उपलब्ध शूद्र व्यवसायमा अधिक सफल हुने सम्भावना रहन्छ।

व्यक्तिको गुण नियमित अध्ययन, तालिम र कामको अनुभवले समेत परिवर्तन गर्ने सकिने हुँदा प्राकृतिक रूपमा फरक प्रकृतिको गुण रहेको व्यक्ति समेत अन्य व्यवसायमा पनि सफल हुन सम्भव रहन्छ। तर सर्व श्रेष्ठ बन्न सक्दैन।

वर्ण प्रणाली अन्तर्गत भएको वर्गीकरण कुन परिवारमा जन्म भएको हो भन्ने कुरामा नभएर जन्मगत रूपमा उसले जुन गुणको संरचना, चासो र प्रकृति लिएर जन्म लिएको छ उसलाई उसको चासो र खुबीको क्षेत्रमा हुर्कने वातावरण दिन सक्दा









ब्रह्माण्डले उसलाई उक्त क्षेत्रको उत्कृष्ट योग्य मानवको रूपमा पाउन सक्ने छ भन्ने सिद्धान्तमा आधारित छ।

जुन ब्रह्माण्ड लाई सम्पूर्ण चराचरहरुको लागि उपयुक्त वासस्थान बनाउन अत्यधिक उपयोगी हुन सक्दछ। त्यसको आधारमा वर्ण व्यवस्था उसलाई कर्म गर्नको लागि निश्चित पेसा छान्न सहयोग गर्ने उद्देश्यमा निर्मित छ।

गीतमा कृष्णद्वारा मानिसहरूमा अन्तर्निहित हुने प्राकृतिक गुणहरू र चासोले निर्माण गर्ने क्षमताको आधारमा उचित कर्म पहिचान गर्न वर्ण प्रणाली अन्तर्गत सृष्टिको सुचारु गर्नाका खातिर चार वर्णको समेत व्यवस्था भएको कुरा उल्लेख छ। प्रत्येक वर्णको जिम्मेवारी र कर्तव्यहरू निरन्तर रूपमा









सुचारु हुन सक्दा मात्र समाजमा एकै साथ नियमित सम्पन्न हुनुपर्ने सबै कार्यहरू सम्पूर्ण रूपमा सहज सम्पन्न गर्न सम्भव रहने सुनिश्चितताको लागि प्रकृतिले डिजाइन मार्फत नै फरक फरक विशेष गुण भएका व्यक्तिहरूको जन्म दिने कुरा उल्लेख छ।

जस अन्तर्गत ब्राह्मणहरूलाई वेदहरूको विद्या र विज्ञानको अविद्या अध्ययन गराउने, सिकाउनेर दक्ष बनेपछि धार्मिक अनुष्ठानहरू गर्ने र समाजलाई आध्यात्मिक रूपमा मार्गदर्शन गर्ने जिम्मेवारी दिने चलन थियो।

भूमिको रक्षा र शासन गर्ने जिम्मेवारी क्षत्रियहरुको थियो । वैश्यहरू कृषि, व्यापारर व्यापारमा संलग्न हुन्थे। जबकि शूद्रहरूले विभिन्न प्रकारका श्रमहरू








द्वारा अन्य तीन वर्णहरू वा स्वरोजगारीले विकास गर्ने रोजगारीको अवसरमा आफूलाई समाहित गरी आफ्नो खुबी अनुरूप सेवा उपलब्ध गराउन सम्भव बन्दथ्यो।

हरेक समाजमा निजी वा सामूहिक कार्य सञ्चालनका लागि निश्चित निश्चित गतिविधि सञ्चालन हुनु जरुरी छ। व्यक्तिको कुनै विशेष क्षेत्रको दखल, अनुभव, विज्ञता र विगतमा कुशल कार्य सम्पादन गरेको आधारमा विभिन्न पद सिर्जना गरिन्छ। एक व्यक्ति जो सँग अनुसन्धान र विकास सम्बन्धमा अधिक चासो छ, नीतिगत अवधारणा र रणनीतिक योजना बन्न दक्ष बन्दथ्यो त्यो पदलाई ब्राह्मण भनियो।

तत्कालीन समयमा आज सैद्धान्तिक अनुसन्धान गर्ने वैज्ञानिक, दार्शनिक, समाजमा जनचेतना फैलाउने









गुरु वा शिक्षक, योजना विद् तथा वेदका सैद्धान्तिक ज्ञानहरू समाजमा पु¥याउने समाज सुधारकहरूको पद हो ब्राह्मण। कार्यान्वयन र सञ्चालनका लागि मार्गनिर्देशन गर्ने नेतृत्व प्रधान गर्ने पद वा वर्ण क्षेत्रीय थियो। राष्ट्र प्रमुख, सेना, प्रहरी, कानुनकर्मी, न्याय सम्पादन कर्ता आदि जस्ता काम पर्दथे।

नाफा–घाटाको मूल्यांकन गर्ने, नाफा हुने बाटो तर्फ गतिविधि लैजाने, धन सम्पत्ति व्यवस्था गर्ने, सर सापटी लिनेदिने, उद्योगधन्दाचलाउने र नाफा–घाटाको उचित वितरण गर्ने राज्यको उच्च शासनमा, रक्षा, शान्ति सुरक्षामा वा स्वरोजगार उद्यम व्यवसायमा संलग्न वर्ण थियो वैश्य वर्ण।













साबिकका कार्य वा योजनामा कार्यक्षेत्रमा खटिएर काम गर्ने वर्ग जसलाई हाल कामदार वा फिल्डका कर्मचारी वर्ग भनिन्छ, तिनीहरूको वर्ण शूद्र भनेर उल्लेख गरिएको छ। जसमा सैद्धान्तिक अनुसन्धानका आधारमा इनोभेसनमा संलग्नरहने प्रयोगात्मक अनुसन्धानका वैज्ञानिक, विज्ञ, प्राविधिज्ञ, टेक्निसियन, डाक्टर, नर्स, प्राविधिक तथा अन्य क्षेत्रका कर्मचारी वा कामदार पर्छन् ।













वेद परम्परागत विज्ञान हो। यसमा संसारको संरचना र अस्तित्व बारे र त्यसको परिचालनको प्राकृतिक सिद्धान्त बारेमात्र कुराहरू भेटिन्छ। त्यहाँ तल्लो माथिल्लो स्तरको मानव भनी कुनै जात पात वा भेदभाव रहेको कल्पना गर्नु पनि वेदको सामान्य ज्ञान नभएको प्रमाण हो।

विज्ञानले जात पातको नाममा मानिसको भेदभाव गर्दछ कसैले भने कस्तो सुनिएला। यथार्थमा वेदको कुरा पनि त्यही हो। वेदले न त भेदभाव स्वीकार्छ न त्यस्तो कुनै भेदभावको संकेत वेदमा भेटिन्छ। वेदको सारतत्त्व बारे फरक फरक विधामा फरक फरक तरिकाले प्रस्तुति गर्न सम्भव हुन्छ। किनकि प्राकृतिक नियमको सिद्धान्त सबै विधामा लागू हुन्छ। तर त्यो कुन विधामा कसरी लागू भइरहेको





॥ श्री गणेशाय नमः ॥





छ त्यसलाई बुझ्न त्यही विषय वस्तुको अवधारणा अर्थात् विज्ञानको ज्ञान लिएर मात्र वेद पढ्नु पर्ने वेदको राय छ। वैदिक कालको अविद्या बारेको ज्ञान अथर्व वेदमा रहेको छ।

अनुसन्धानहरूले वेदमा उल्लेख भएका तथ्य र सिद्धान्तहरू क्वान्टम विज्ञानले आफ्नो अनुसन्धानको क्षमताको दायरा सम्म गर्न सकेको अनुसन्धानमा प्राय सबै नै सत्य रहेको तर्फ सङ्केत गरेको भेटिन्छ।

पुरातन संस्कृत भाषामा ऋग्वेदको उल्लेख भएको पुरुष सूक्तमको पुरुषको अर्थ आदिम प्राणी हो। त्यसको अथर्ववेद अनुरूपको व्याख्या अनुसार केटा वा केटी भनी प्रस्ट लिङ्ग नछुट्टिएको नेगेटिभ र पोजेटिभ दुवै चरित्र नदिने न्युट्रल चार्ज भन्ने लाग्दछ। आदिम मानवलाई शिव शक्तिको रूपमा









हेर्दा यसलाई निष्पक्ष अवलोकन कर्ताको हदमा हेर्न सकिन्छ। एक अवलोकन कर्ता जो निष्पक्ष छ तर त्यो विना कुनै अणु वा परमाणुको अस्तित्व सम्भव छैन। मानव अस्तित्वको तहमा "आत्मा" ले उक्त आदिम मानवको भूमिका खेल्ने तथा आत्मबलिदान मार्फत जीवन्त शक्ति "बीज" धारण गर्ने गुण भएको लाई छोरो वा पुरुष तथा बीजको "ग्रहण र उत्पादन शील डिम्ब युक्त" उर्वरताको शक्ति ग्रहण गरी 'छोरी' नारीको रूपमा अस्तित्वमा रहेको व्याख्या गर्न सकिन्छ। अथर्ववेदको अवधारणामा आदिम अस्तित्व सूक्ष्म कणहरूको (क्वान्टम पार्टिकल) नृत्य रूपी कम्पनको अनगिन्ती वेभ (WEB) निर्मित संरचना हो। जसको सन्तुलित कम्पनहरू निष्पक्ष अवलोकन कर्ताको परावर्तित भूमिकामा रहेको






हुन्छ।

निष्पक्ष अवलोकन कर्ता रूपी वेभ (WEB) संरचनाको निर्माणमा परमाणुहरूको समेत ब्राह्मण, क्षत्रिय, वैश्यर शूद्र रूपी भूमिका वा कार्य रहन्छ। जसलाई तिनीहरूको वर्ण भन्ने गरिन्छ।

जस अनुसार खाली वा आकाश रूपी केन्द्रीय बिन्दु जसलाई केन्द्र मानेर अन्य वर्ण आफ्नो वृत्ति अनुरूप कम्पनमा रहन्छन् त्यो आवृत्तिलाई मुखार बिन्दु अर्थात् मुख भन्दै ब्राह्मण वृत्ति वा पेशा भनिएको छ। जसबाट शब्दको उत्पत्ति हुन्छ। जसले न्युक्लियसको पोजेटिभ चार्ज युक्त न्युट्रोनलाई केन्द्रित स्थानमा समग्र सन्तुलन कायम गर्न बाँधेर राख्ने शक्तिको भूमिका खेल्दछ।











नेगेटिव वृत्तिको इलेक्ट्रोनलाई न्युक्लियस केन्द्रित रहेर घुम्न केन्द्रमा पोजेटिभ वृत्तिको प्रोटोनको जरुरत पर्दछ। जसले केन्द्रको न्युट्रोन संग टासिएर आफु सन्तुलित हुने र बाहिर परिधिमा घुम्ने नेगेटीव वृत्ति रूपी इलेक्ट्रोनलाई समेत अणुको दायरामा बाँधेर राख्ने काम गर्दछ। जसले गर्दा समग्र अणुको सुरक्षा सम्भव हुन्छ। शरीरको पाखुराले जस्तो समग्र सुरक्षामा काम गर्ने वृत्ति वा प्रोटोन वृत्तिलाई क्षेत्रीय वर्ण वा क्षेत्रीय पेशा भनिएको छ।

केन्द्रित ब्राह्मण वृत्ति, सुरक्षामा वा प्रोटोन वृत्तिको क्षेत्रीय वर्णलाई इलेक्ट्रोन लाई घुम्नको लागि घुम्ने पथ वा अर्बिटको निश्चय गर्ने वृत्ति लाई वैश्यको वृत्ति भनियो। शरीरको साँप्राको जस्तो समय अनुरूप इलेक्ट्रोनको कर्म दिशा निश्चित गर्ने भूमिकामा वैश्य







रहेको छ।

परमाणुको अस्तित्वमा रहँदा विभिन्न अर्बिटमा घुमेर परमाणुको समग्रता पुरा गर्ने इलेक्ट्रोनले परमाणुबाट अणु बन्ने क्रममा सहअस्तित्व, सहकार्य र कोक्रिएसन मार्फत आफ्नो घुम्ने पथ वा अर्बिटलाईपथ पुन: क्यालिब्रेसन मार्फत सफल पार्ने सेवा वृत्तिलाई शूद्र वृत्ति वा शूद्र पेशा भनिएको छ। सूक्ष्मतम परमाणुको सन्तुलित संरचनाको रूपमा रहेको अति सूक्ष्मतम क्वान्टम पार्टिकलहरूको "क्वान्टम युनिफाइड फिल्ड" लाई संज्ञानात्मक रूपमा नाच्दै गरेको शिव "नटराज" मार्फत अभिव्यक्त गरिएको छ।

वेदको अर्थमा शूद्र वृत्ति वा शूद्र पेशा अन्तर्गत जन सेवाका पदहरू डाक्टर, इन्जिनियर, प्राविधिक,








वैज्ञानिक, नर्स, सम्पूर्ण श्रमजीवी र जस्ता विशिष्टतम सेवा क्षमताका पेशाहरू पर्दछ। वेदले आफ्नो मेहनतको कमाइमा मात्र बच्ने र अर्काको श्रमको कमाई खानु पर्दा आफैलाई धिक्कार्ने वर्ण वा शूद्र वृत्ति वा शूद्र पेशाको उच्च मूल्याङ्कन गर्दछ।

त्यसैले वैदिक परम्परामा विश्वकर्माको कथा भेटिन्छ। जहाँ शूद्र वृत्ति वा शूद्र पेशा अन्तर्गत दिव्य स्रष्टा र नवप्रवर्तकको भूमिका रहेको उल्लेख छ। समाजका सिर्जनात्मकता, कौशल, र कुशलताको आत्मालाई शूद्र पेशाले मूर्त रूप दिन्छ। जसरी विश्वकर्माको विरासतलाई हरेक वर्ष कारीगरहरू र शिल्पकारहरूले विश्वकर्मा पूजा गर्दछन। जसलाई सेवा प्रदायकहरूको योगदानको उच्च सम्मान गर्ने, उनीहरूको कर्मका कारण मानव जातिलाई प्राप्त






सफलताको लागि धन्य बन्ने आशीष लिने उत्सवको रूपमा लिने गरिन्छ। वेदले विश्वकर्मालाई सेवा प्रदायक पेशा रहेको र स्वयंभुव मनुलाई पहिलो मनु अर्थात् मानवको रूपमा चिन्दछ। ब्रह्माण्डको संरक्षण र नियमित सञ्चालनमा यी दुबैको परिपूरक भूमिका रहेको उल्लेख छ।

वेद परम्परागत विज्ञान हो। यसले संसारको संरचना र अस्तित्व बारे प्राकृतिक सिद्धान्तबारे मात्र कुरा गर्छ। त्यहाँ कुनै जातपात वा तल्लो माथिल्लो स्तरको मानव भनी न त भेदभाव छ न त्यसलाई स्विकार्छ नै। हिन्दु देवता रामको प्रिय हनुमान, महाभारत लेख्ने वेदव्यास आज तपाईंले जसलाई दलित भन्नुहुन्छ त्यो वर्गको पेसामा संलग्न रहेको परिवारबाट आएको कुरा किन हाम्रो समाजले थाहा











पाएन?

नत नारी र पुरुषबीच वेदमा कुनै भेदभाव गरेको भेटिन्छ। यो हुँदै नभएको भाउतो कसले के प्रयोजनले वेद माथि खन्यायो? हामीले यो भ्रम चिर्न किन प्रयास गरेनौँ ? योपनि सोच्नुपर्ने दिन आएको छ ।

वेदमा शिव र पार्वती बीच कुनै विभेद छैन। शिवको प्यारी श्रीमतीका रूपमा रहेकी पार्वती र शिव दुवै मिलेर हिरण्य गर्भ अथवा यो सारा ब्रह्माण्ड सिर्जना भयो। शिव र पार्वती एक आपसमा छुट्याउन सकिने कुरै छैन। शिव–पार्वती दुवै हरेक चिज निर्वाण र नष्ट गर्ने सर्वोच्च शक्ति हुन्। जब शिव–पार्वतीमा उँचोनिचो छैन भने श्रीमान्–श्रीमतीमा समेत विभेद छैन भन्ने त्यहीँबाट पुष्टि हुन्छ।









वैदिक कालका २४ नारी जसले ऋषिकाका रूपमा वेदका पदहरू बनाएका थिए । तिनीहरूको नाम रोमसा, लोपामुद्रा, अपला, कद्रु, विस्ववारा, घोसा, जुहू, वगाम्भ्रिनी, पौलोमी, जरिता, श्रद्धाकामायानी, उर्वशी, सारंगा, यामी वा यमुना, इन्द्राणी, सावित्री, देवजामी, नोधा, अक्रिष्टभाषा, सिकटानिवावरी, गौपायना, मैत्रेयी, गार्गी वाचक्नवी (वेदवती) थियो । वेद जस्ता श्रुतिका वाणीहरू जम्मा गर्न र त्यसलाई ऋचाका रूपमा परिवर्तन गरीसार संग्रह गर्न अन्य कम्तीमा ३५ जना महान् नारी ऋषिका र देवीको देन छ। उनीहरू सबैको नाम र उनीहरूले गरेको काम वेदमै उल्लेख छ ।

निरुक्त ४/२२ मा अदितिको नाम उल्लेख छ। अदिति निकै गहन कामसमेत स्वतन्त्ररूपमा एक्लै









सम्पन्न गरी सबैलाई छक्क पार्ने क्षमताकी थिइन्। यजुर्वेद ८/४३ ले अघन्याँको नाम उल्लेख गरेको छ। यजुर्वेद ११६/४ ले उल्लेख गर्ने बृहती अत्यन्त विशाल हृदयकी थिइन्। उनको सबैलाई समेटेर लैजाने गुण अत्यन्त मूल्यवान् थियो ।

जसले जतिसुकै दुखित बनाउँदा पनि आफ्नो उद्देश्य प्राप्ति गरि छाड्ने उनको बानीले महत्वपूर्ण कार्यहरू फत्ते गर्न तत्कालीन समयमा सहज बन्यो। यजुर्वेद ११/६४ मा चन्द्राको नाम उल्लेख छ। उनको अत्यन्त नैतिक र धार्मिक प्रवृत्ति वेदको ऋचाहरू सम्पादनमा अत्यन्त फलदायी बन्यो। अथर्ववेद १४/१/४७ मा उल्लेख भएकी देवकाम अत्यन्त धार्मिक र ज्ञानी थिइन् । अथर्ववेद १४/१/४७ र यजुर्वेद ४/२३ ऋषिका देवीको नाम उल्लेख छ।




उनमा रहेको विशाल दैविक ज्ञानले वेदका ऋचाहरू संकलन सहज बन्यो।

यजुर्वेद ११/६४ ले ध्रुवाको नाम उल्लेख गर्छ । अत्यन्त कर्मठ र लागेको काम जसरी पनि सम्पन्न गरी छाड्ने ध्रुवाको बानीले श्रुतिका वाणीहरू लयबद्ध र क्रमबद्ध गर्न निकै ठूलो भूमिका खेल्यो। यजुर्वेद ८/४३ मा उल्लेख भएकी हव्य भेला तथा समारोह आह्वान गर्न र व्यवस्थापनमा पोख्त थिइन्।

यजुर्वेद ८/४३ ले इदाको नाम छ। उनी सबैको प्रिय पात्र थिइन्। जसले सबैलाई एकापसमा नजिक ल्याउन सहयोग पुऱ्याउने गर्दथ्यो। ज्योताको बारे पनि यजुर्वेद ८/४३ मा लेखिएको छ । उनीमा बृहत् ज्ञानको भण्डार रहँदा रहँदै अत्यन्त प्रखर ज्ञान वाचक समेत थिइन्। सबैको प्रिय पात्र बन्न सक्ने





काम्याको नाम समेत यजुर्वेद ८/४३ मा उल्लेख छ।

अथर्ववेद १२/१/२९ मा नाम उल्लेख गरिएको क्षमा आफैँमा अत्यन्त सहनशील, करुणाकी धनी र धैर्यवान् नारी थिइन्। उक्त चरित्रले विशाल ज्ञानको भण्डारणको संयोजनमा ठूलो भूमिका पुगेको थियो। यजुर्वेद ८/४३ मा माहीको नाम उल्लेख गर्छ। माही अत्यन्त सहज रूपमा कामको संयोजन गर्ने क्षमता राख्दथिन्।

सबैले उच्च आदर तथा सम्मान गर्ने मीनाको नाम निरुक्त ३/२१/२ मा देखिन्छ। अथर्ववेद १४/१/५९ मा कसैलाई पनि आफ्नो प्रतिस्पर्धी वा दुष्मनका रूपमा नलिने भद्र र शालीन छोरी मान्छे लाई नारी भनी सम्बोधन गरिएको छ। तिनै देवीरूपी ऋषिका







नारीका कारण कालान्तरमा अब्बल चरित्रको प्रतिमूर्तिका रूपमा छोरी मान्छेलाई वैदिक संस्कृतिमा ससम्मान नारी नामले सम्बोधन हुन थालेको बुझिन्छ।

यजुर्वेद २२/२२ पुरणधिको नाम उल्लेख छ। जरुरतभन्दा धेरै करुणा तथा उदारवादी चरित्र बोकेकी पुरणधिकोभूमिका महान् कार्यसम्पन्न गर्न निकै सहजकारी बन्यो। यजुर्वेद ८/४३ मा उल्लिखित रत्नाको सबैको प्रिय रहेर कार्यसम्पन्नगर्ने भूमिका रह्यो। ऋग्वेद २/४१/१८ले उल्लेख गरेको रतवारि वा रतचित सत्यको महान् अन्वेषक तथा संग्रहकर्ता थिइन्। ऋग्वेद १०/१५९/३ ले उल्लेख गरेको सन्जया जरुरतको पूर्ति गर्न सक्ने स्रोत साधनयुक्त हुनुका साथै उच्च नैतिक सद्भाव र













भावना प्रकट गर्ने गुणकी थिइन् । यजुर्वेद २०/८४ मा उल्लेख भएकी सरस्वती उच्च प्राज्ञिक ज्ञानयुक्त थिइन् । यजुर्वेद ५/१२ ले संकेत गरेकी सिंही अत्यन्त साहसी थिइन् ।

अथर्ववेद १४/१/६४ ले उल्लेख गरेका शिवा अत्यन्त परोपकारी थिइन् । ऋग्वेदको ८/३३/९ र निरुक्तको ३/२१/२ ले उल्लेख गरेकी स्त्री नामकी छोरी मान्छे अत्यन्त नम्र तथा भद्र थिइन्। उनको अब्बल शालीन गुणको उपमा दिँदै कालान्तरमा वैदिक संस्कृतिमा छोरी मान्छेलाई स्त्रीसमेत भन्नेचलन चलेको देखिन्छ।

ऋग्वेद १०/८५/३७ मा उल्लिखित शिवतमा शब्दहरूको उत्तम चयन गरी प्रस्तुति दिन श्रेष्ठ थिइन् । यजुर्वेद ८/४३ ले उल्लेख गरेकी सुभगा अत्यन्त





मेहनती र भाग्यमानी समेत थिइन् । अथर्व वेद १४/२/७५ मा नाम लिइएको शुभदा उत्कृष्ट ज्ञानको खानी थिइन्। अथर्ववेद १४/२/२६ मा उल्लेख भएकी सुमंगली उत्तम आचरणकी थिइन्। अथर्ववेद १४/२/२६ कि सुशेवा स्वागत योग्य तथा मैत्रीपूर्ण सुखद वातावरण निर्माण गर्न अभ्यस्त थिइन् ।

अथर्ववेद १४/४/४७ मा उल्लेखित सुवार्चा भव्य तथा शानदार योजना निर्माणमा पोख्त थिइन् । अथर्ववेद १४/२/१८ ले उल्लेख गर्ने सुयामा उच्च आत्मनुशासनमा लिप्त थिइन्। अथर्ववेदकै १४/२/२७ कि सयोना सुन्दर र महान् विभूषण युक्त थिइन् । ऋग्वेद १०/८६/९–१० मा चर्चा गरिएकी विरिणी दुई अत्यन्त बहादुर र चर्चित वीर पुत्रहरूकी





माता थिइन् । यजुर्वेद ८/४३ ले चर्चा गरेको विश्रुता अत्यन्त अध्ययनशील तथा बृहत् क्षेत्रको विषय बस्तुको ज्ञाता थिइन् । ऋग्वेद १/७९/१ मा उल्लेख गरिएकी यशस्वती गौरवशाली बौद्धिक इतिहास बनाएकी पात्र थिइन्।

त्यस्तै निरुक्त ३/१५/१ मा उल्लेखित योषा योगको माध्यमबाट शरीरको निर्माण शक्तिलाई समेत नियन्त्रणमा लिन सक्ने प्रसन्न र श्रेष्ठ स्वभावकी जीवन र शाश्वत प्रकृतिको राम्रो ज्ञान राख्ने एक अध्ययनशील र बौद्धिक विज्ञ थिइन् ।

उत्कृष्ट वैदिक ग्रन्थहरू निर्माणको क्रममा अत्यन्त ठूलो संख्यामा नारीको सहभागिता भएको छ । त्यो हदको नारी सहभागिता दुनियाँको कुनै अन्य समाज वा वर्गको ग्रन्थ निर्माणका क्रममा भएको भेटिंदैन।







अन्यत्र नारी सहभागिता मात्र एक दुई मात्र देखुभयो भने त्यो नै निकै ठूलो कुरा हुने गर्छ। वैदिक परम्परामा नारी सदैव परिपूजित रहेको यथार्थ यसको इतिहासले पुष्टि गर्छ।

शुसुर्त नेपालको देवघाटमा र गौतम बुद्ध नेपालको लुम्बिनीमा जन्मिए। वेदव्यास तनहुँ कै व्यास गुफामा जन्मे। गुल्मी अर्घाखाँची क्षेत्रका पाणिनिको धेरै समय नेपालमा बित्यो ।

वैदिक कालमा संगीत र नृत्यमा संलग्न हुनेलाई गन्धर्व भन्ने गरिन्थ्यो । उनीहरूको शास्त्रीय संगीत राग, तालर लययुक्त हुन्थे। उनीहरूका रचनाहरू त्यतिमा मात्र सीमित थिएनन् । वैदिक समाजमा एकातर्फ सौन्दर्य शास्त्रमा पूरा ध्यान दिइने गरिन्थ्यो भने अर्कातर्फ तिनीहरू ध्वनिमा अत्यधिक पारंगत













रहन्थे। समग्र संरचनाको मूल आधार ध्वनि थियो। जब तपाईं राग, ताल, लय, सौन्दर्य र ध्वनिलाई एकै ठाउमा मिलाएर हेर्नुहुन्छ, त्यसले मानव जीवन विज्ञानको समग्र वैज्ञानिक संरचनाको प्रतिनिधित्व गर्छ ।

आजको आधुनिक विज्ञानले समेत मान्न बाध्य भएको वैदिक विज्ञानको निचोडमा मानव स्वास्थ्य कायम राख्न तथा सुधारका लागि सहजीकरण गर्न संगीतले मनोवैज्ञानिक आरोग्य प्राप्त गराउँछ। सौन्दर्यताले खुसी र धन्यता उपलब्ध गराउन सक्ने खुबी राख्छ। कर्णप्रिय ध्वनिको शारीरिक र मानसिक उपचार गर्ने चामत्कारिक क्षमता रहन्छ।

पछिल्लो समयमा क्वान्टम बायोकेमेस्ट्रीले मानव संरचनाका गहिरा पक्षहरू वैज्ञानिक समुदायलाई









बुझ्न सहयोग गरे पछि वैदिक कालका रचनाहरू मानवका लागि किन यति प्रिय हुन पुगेको रहेछ भन्ने वैज्ञानिक आधार उपलब्ध गराएर विज्ञानले गहिरो अनुभूति दिलाउन सकेको छ।

जसरी घिउ–घिउसँग र पानी–पानीसँग मिहिन भएर मिसिन्छ र मिसिए पछि बन्ने घोल सन्तुलित समेत रहन सक्छ त्यसरी नै हाम्रो शरीरको संरचना समेत बनेको छ । हाम्रा परम्परागत संगीत र नृत्यले त्यही भाव, आकारर गति देखाउन सक्दा हाम्रो सम्पूर्ण पाँच इन्द्रीय मात्र हैन, छैटौं इन्द्रिय पिनियल ग्ल्यान्ड (मतलब तेस्रो नेत्र) समेतले लिने अनुभूतिका कारण संगीत र नृत्य मनोवैज्ञानिक र शारीरिक हिलिङ वा उपचारको मध्यम बनेको रहेछ।

विज्ञानको आँखाबाट हेर्दा यहाँ सामान्यतया दुई









प्रकारका ध्वनिको भूमिका देखिन्छ । जसमा पहिलो हो स्ट्रकसाउन्ड वा आहत नाद। जब सिठी बजाइन्छ, गीत गाइन्छ, कुरा गरिन्छ वा एउटा चिजले अर्को चिजलाई ठोकिन्छ त्यहाँ घर्षणका कारण हुने कम्पनले ध्वनि उत्पन्न गर्छ। फरक फरक वस्तुको टकरावले फरक फरक कम्पन हुने गर्छ। जसले गर्दा आवाज समेत फरक फरक हुन्छ। वाद्य यन्त्रहरू (हाम्रा बाजाहरू) ले टकरावको माध्यमबाट आवाजहरू ‘आहत नाद’ निकाल्ने गर्छन्।

दोस्रो हो, अनस्ट्रक साउन्ड अर्थात् अनाहत नाद। जुन प्रकृतिको ध्वनि हो । सजिलो गरी बुझ्नका लागि यसको उदाहरणमा हाम्रो आफ्नै शरीरको भित्री आवाज हो। मुटुको धड्कन, सासको आवाज। पाचन प्रक्रियाको आवाज हो। जसलाई




हामी गट साउन्ड समेत भन्छौँ। जीवित मानव प्रणालीका तीन मुख्य अनस्ट्रक साउन्डमा मुटुको आवाज, श्वासको आवाज र पेटको आवाज पर्छन्।

तिनीहरूको आवाजमा भएको परिवर्तनको पहिचान मार्फत मानिसका रोगको पहिचान हुन सक्ने बारे वेदमा चर्चा भेटिन्छ । आजको औषधी विज्ञानले त्यस्ता विभिन्न प्रख्यात विधि विकास गरिसकेको पनि छ। हामी आफैँले समेत अनुभूति गर्न सक्ने मुटु र श्वासको आवाज ढुकढुक, स्वाँ–फ्वाँ आदिको सरल हर्मोनिक्समा रहन्छ।

हामीले अनुभूति गर्न सक्ने ढुकढुक र स्वाँ–फ्वाँको मुटु र श्वास मिली बनेको आवाजको सरल हर्मोनिक्स प्रकृतिको हार्मोनीसँग मिल्ने गर्छ। स्वस्थ र खुसी व्यक्तिमा मुटु र श्वासको आवाज नियमित र





लयबद्ध रूपमा तल र माथि गरि रहन्छन् । जब तपाईं यी दुई सरल आवाजको संयुक्त संयोजन गरिदिनु हुन्छ, नियमित रूपमा लयबद्ध हुने गरी एउटा तरंग दिने सिनुसोइडल (लयबद्ध) ध्वनि उत्पादन हुन पुग्छ। जुन वास्तवमा हाम्रो मुटु र श्वासको आधार ध्वनि हो।

स्वस्थ र सन्तुष्ट शरीरको मस्तिष्क–दिमाग–आत्मा संयोजित आवाज त्यसैलाई भनिन्छ। शास्त्रीय संगीतमा बजाइने तानपुराले सोही आवाज उत्पादन गरिरहेको हुन्छ। त्यसैले त त्यो मोहनी लाग्ने गरी आनन्ददायक महसुस हुन्छ। हाम्रो पेटको आवाज भने त्यति सजिलो वा सरल रेखामा बताउन मिल्ने प्रकृतिको रहन्न । यथार्थमा यो आन्द्राको गर्भमा लुकेको सोनिक प्रक्रियाको विभिन्न ध्वनि मिलेर







बनेका ध्वनिको संयुक्त एसेम्लीका रूपमा निर्माण प्रक्रिया मार्फत निर्मित आवाज हो।

जब तपाईं आफ्नो मुखमा पञ्चामृत हाल्नुहुन्छ, नैवेद्यका केरा, स्याउ, सुन्तलार बेलाउती ग्रहण गर्नुहुन्छ, तिनीहरू पिउने, चपाउने र निल्ने जस्ता प्रक्रियापूरा गरेर आन्द्रा भित्र पुग्छन्। त्यहाँ हुने अम्लीय र क्षारीय पाचन प्रक्रिया, ठूलो आन्द्रामा रहेका अत्यन्त ठूलो संख्याका गट माइक्रो-बायोम भनिने हामीलाई फाइदा गर्ने लाखौं जीवाणुका सक्रिय गतिविधिले पाचन प्रक्रिया चल्छ।

मुख देखि गुदद्वार सम्म पुग्दै गर्दा त्यहाँका शरीरका विभिन्न अंग प्रत्यंगका गतिविधिका आवाज, रसायन, इन्जाइम, हर्मोन र विभिन्न सारतत्व निर्माण र विखण्डनको कम्पन समेत संयोजित हुन पुग्छ।













त्यहाँ हुने हरेक क्रिया तथा प्रतिक्रियाको आफ्नै कम्पन हुने गर्छ । जुन एकापसमा मिलेर समग्र कम्पन निर्मित ध्वनि पैदा हुने गर्छ। फरक फरक समय र अवस्थामा तिनीहरूको प्रकृति फरक रहन सक्छ।

मानव पेटमा आन्तरिक स्नायु प्रणाली (Enteric nervous system- ENS) हुन्छ, जसलाईप्रायः "दोस्रो मस्तिष्क" भनिन्छ। पाचन प्रणालीको भित्तामा करिब ५० करोड सङ्ख्याको न्युरोनको रूपमा हुने दोस्रो मस्तिष्कले मरुतहरुको निगरानीमा अग्नि तत्वको सहयोगमा पाचन नियन्त्रण र सो सम्बन्धका जटिल गतिविधिहरू समन्वय गर्ने र मस्तिष्कमा ऊर्जाको अभाव र उपलब्धता तथा सुरक्षा अवस्थाबारे सूचना पठाउने











काम गर्दछ। करिब ८६ अर्ब न्युरोनहरू हुने मस्तिष्कको तुलनामा निकै सानो हुने भएता पनि पेटमा भएका न्युरोनहरूले आन्द्राहरूको गतिविधि, पाचन गर्ने ईनजाइमहरूको स्राव र विभिन्न निर्देशन तथा तनाव आदिको सामना गर्ने गर्दछन्।

पाचन प्रक्रियालाई सहज पार्न १०० ट्रिलियन माइक्रोव अर्थात् शरीरको गतिविधि मैत्री माइक्रोबायोम भनिने सूक्ष्मजीवीहरू सक्रिय रहन्छन्। तिनीहरूलाई उनीहरूको जरुरत अनुरूपको खानेकुराको समेत हामीले हाम्रो खाना वाट नै आपूर्ति गर्नु पर्ने हुन्छ। उनीहरूले आफ्नो खाना प्राप्त गर्न नसक्दा र वातावरण सहज नहुँदा समेत निश्चित प्रकारका कम्पन निकाल्ने गर्छन्। हाम्रो पेटमा रहने हाम्रा लागि लाभदायी ती













ब्याक्टेरियाले सयौँ न्युरोकेमिकल हाम्रो आन्द्रामा उत्पादन गर्ने गर्छन्।

आन्द्रामा हुने लाभदायक माइक्रोबायोमले आन्द्रामा धेरै प्रकारका मेटाबोलाइटहरू उत्पादन गर्ने गर्दछ। जस्तै सर्ट-चेन फ्याटी एसिड (एसीटेट, प्रोपीयोनेट, ब्यूटाईरेट), ग्यासहरू (हाईड्रोजन, मिथेन, कार्बन डाईअक्साइड), मोडीफाइड पित्त रस (सेकेण्डरी बाइल एसिड), एमिनो एसिडको डेरीभेटिबहरु (इन्डोल र फिनाइल एसिटेट), भिटामिनहरू (भिटामिन के, फोलेट, बायोटिन) र पोलिफेनोलका मेटाबोलाइटहरू (युरोलिथिन) आदि। सर्ट-चेन फ्याटी एसिडको जस्तै ब्यूट्रेटले आन्द्राको भित्तालाई बलियो बनाउने, दुखाइ कम गर्ने र भत्किएका कोषहरू मर्मत गर्ने वा फेर्ने काममा मद्दत गर्छ।







ग्यासहरू जस्तै मिथेनले आन्द्राको गतिलाई प्रभाव पार्छ। सेकेण्डरी बाइल एसिडले बोसो पचाउन र दर्द नियन्त्रणमा मद्दत गर्छ। एमिनो एसिडको डेरीभेटिब जस्तै इन्डोलले आन्द्राको पर्खाललाई बलियो बनाउने र आन्द्राको मस्तिष्क स्वास्थ्यमा सुधार गर्ने काम गर्छ। माइक्रोबायोमले बनाउने भिटामिन के जस्ता महत्त्वपूर्ण भिटामिनहरूले रगत जमाउन र कोशिकाको मर्मत गर्न सहयोग पुऱ्याउँछ। पोलिफेनोल मेटाबोलाइटहरू जस्तै उरोलिथिन एन्टिअक्सिडेन्ट र एन्टी इन्फ्लामेटरि प्रभावहरू दिने गुनको हुन्छ। जुन तन्तु (टिस्युहरू) को मर्मत र हृदय सम्बन्धी स्वास्थ्यमा सुधारमा अनिवार्य हुन्छ।

यसरी आन्द्रामा हुने लाभदायक माइक्रोबायोमले











बनाउने मेटाबोलाइटहरूले आन्द्राको स्वास्थ्य, दर्द र पिडा नियन्त्रण, रोग प्रतिरोधात्मक क्षमता निर्माण, आन्द्राको मस्तिष्क स्वास्थ्य सुधार लगायतका शरीरको पोषण, स्व-उपचार र स्वास्थ्य निर्माणमा सहयोग पुऱ्याउने गर्दछन्।

आन्द्राको मस्तिष्कको (गट ब्रेन) स्वास्थ्य सुधार गरेर मात्र हाम्रो मस्तिष्कले आधारभूत कुरा सिक्ने, शारीरिक प्रक्रिया सञ्चालन गर्ने, आफ्नो स्मरणमा विषयवस्तु कैद गर्ने र मुड अथवा मानसिक अवस्थाको निर्माण गर्ने जस्ता नियमित कार्य सहज गर्ने वातावरण बन्ने गर्दछ।

आन्द्रामा पाइने ब्याक्टेरियाहरूले मुडलाई नियन्त्रण गर्ने हर्मोनहरू र न्यूरोट्रान्समिटरहरूको उत्पादनमा समेत भूमिका हुन्छ जसलाई गट-ब्रेन एक्सिस











भनिन्छ। मुड र मानसिक स्वास्थ्यलाई प्रभाव पार्ने त्यस्ता प्रमुख न्यूरोट्रान्समिटर र रसायनहरूमा सेरोटोनिन, डोपामिन, गामा-अमिनो-ब्युटिरिक एसिड (गाबा), एसेटाइलकोलाइन, कोर्टिसोल आदि छन्। शरीरको करिब ९०% सेरोटोनिन (हेप्पी - खुसी हर्मोन) आन्द्रामा उत्पादन हुन्छ। जसले मुड, चिन्ता, खुसी र पाचन प्रक्रियालाई नियन्त्रण गर्छ।

आन्द्रामा पाइने ब्याक्टेरियाहरूले डोपामिन उत्पादनमा समेत योगदान गर्छन् जसले प्रेरणा, इनाम (आहा- रिवार्ड) र आनन्द दिन्छ। तिनीहरूले मस्तिष्कलाई शान्त बनाउन र चिन्ता कम गर्न मद्दत गर्ने गामा-अमिनोब्युटिरिक एसिड (GABA) तथा सिकाइ, स्मरण शक्ति र मुड नियमनमा भूमिका













खेल्ने एसेटाइल कोलाइनको उत्पादनमा समेत भूमिका रहन्छ। तनावको वेला उत्पन्न हुने कोर्टिसोल मुख्य रूपमा एड्रिनल ग्रन्थिमा उत्पादन हुन्छ।

तनावको समयमा तनाव क्रिया नियन्त्रण गर्न कोर्टिसोलको मात्रा घटाउने प्रतिक्रिया विकास गरी मुड र तनावको स्तरलाई अप्रत्यक्ष रूपमा असर गर्ने डिफेन्स सिस्टम नियमन गर्न समेत गट माइक्रोबायोमहरुको भूमिका हुन्छ।

व्यक्तिको मुड नियमन गर्ने रसायनहरू उत्पादन गर्न तथा उत्पादन प्रक्रिया वा नियमन प्रक्रिया प्रभावित गर्न आन्द्राका ब्याक्टेरियाहरूको भूमिका हुने हुँदा आन्द्राको मस्तिष्क स्वास्थ्य व्यवस्थापनमा गट माइक्रोबायोमहरुको महत्त्वपूर्ण भूमिका हुने गर्दछ।





॥ श्री गणेशाय नमः ॥





जसले चिन्ता कम गर्न, मुड सुधार गर्न, संज्ञानात्मक कार्यलाई समर्थन गर्न मद्दत गर्छ।

यसरी समग्र रूपमा शारीरिक र भावनात्मक स्वास्थ्यका लागि स्वस्थ आन्द्राको निर्माणमा गट माइक्रोबायोमहरुले भूमिका खेलेको हुन्छ।

वैदिक दर्शन अनुरूप आन्द्रामा पाइने माइक्रोबायोमको मेटाबोलाइटहरू र मुडलाई नियन्त्रण गर्ने हर्मोनहरू र न्यूरोट्रान्समिटरहरूको उत्पादन शक्ति लाई मरुत अर्थात् क्वान्टम कण (वायु र सूक्ष्म जीव परा ऊर्जा) सँग तुलना गर्न सकिन्छ जसले अग्निको परिवर्तनकारी पाचन कार्य गर्ने क्षमतामा सहायता पुऱ्याउँछ। जसरी मरुतले अग्निलाई भोजन पचाउन र मेटाबोलिजम प्रक्रियामा सहयोग पुऱ्याउँछ, त्यसरी नै आन्द्राका









माइक्रोबायोमका मेटाबोलाइटहरूले पाचन प्रक्रियामा सहायता गर्छन्, भोजनलाई टुक्रा टुक्रा गरी विघटन गर्छन्, पोषक तत्त्वहरूको अवशोषणमा सहयोग गर्छन् र आन्द्राको समग्र स्वास्थ्य कायम राख्न भूमिका खेल्दछन्।

मरुतले माइक्रोबियल क्रियाहरूको समेत किन प्रतिनिधित्व गर्छ भने यसले अग्निको क्षमतालाई बढवा दिन्छ र शरीरको पाचन शक्तिलाई प्रभावकारी बनाउँछ। वैदिक परम्परामा मरुतले खेल्ने भूमिका जस्तै, माइक्रोबायोमले व्यक्तिको मुड नियमन गर्ने रसायनहरू उत्पादन गर्न तथा उत्पादन प्रक्रिया वा नियमन प्रक्रिया प्रभावित गर्न मद्दत गर्छ।

आन्द्राको मस्तिष्क र गट फिलिङ्ग निर्माणमा मरुतको भूमिका आधुनिक वैज्ञानिक








दृष्टिकोणअनुसारको आन्द्राको माइक्रो बायोम सँग मिल्दोजुल्दो छ। त्यो भन्दा पनि अत्यन्त चाख लाग्दो कुरा के छ भने गट माइक्रो बायोमहरु शरीरका होइनन्। प्रकृति वाट आन्द्रा भित्र आएका सूक्ष्म जीव हुन् र तिनका मेटाबोलाइट समेत प्राकृतिक सूक्ष्म कण हुन्। मरुत समेत प्रकृतिको नियम नियमन गर्ने रुद्र सेना भनिने प्रकृतिका सूक्ष्म तर प्रभावशाली शक्ति हुन्। यसरी प्राचीन वैदिक बुझाइको मरुत भनेको आधुनिक सूक्ष्म जीव विज्ञानले पहिचान गरेको शरीरको गट र अन्य माइक्रोबायोमहरु हुन् जुन अग्निको कार्य सहज गर्न नियमित क्रियाशील रहन्छन् भन्न सकिन्छ।

बदलिँदो परिस्थिति र पर्यावरणीय अवस्थाका कारण आज हामीले खाने खाना र हामी रहने वातावरण









परिवर्तन भएको छ। यसले हाम्रो गटको (GUT Health) स्वस्थ र वातावरणमा समेत परिवर्तन ल्याएको छ।

जसले गर्दा हाम्रो पेटको आवाजमा समेत नियमित तर बिस्तारै परिवर्तन हुने गरेको छ। लामो समयमा पेटको आवाजको प्रकृतिमा ठूलो परिवर्तन हुने र भिन्नता हुने निश्चित छ। जसले हाम्रो पेटको मस्तिष्क भनिने दोस्रो मस्तिष्कको प्रकृतिमा परिवर्तन गरी हाम्रो गति विधि र बानी ब्यहोरामा नियमित परिवर्तन हुने क्रम जारी राख्ने छ। जुन सकारात्मक हुन नसक्दा सम्पूर्ण जगतको लागि अनिष्ट कर हुने हुँदा हामीले आफ्नो खानपान, जीवन शैली र सोचमा प्रकृति मैत्री गुण र अहिंसाको नियत निर्माण गर्न अनिवार्य बनेको छ।








शरीर–दिमाग–मस्तिष्क–आत्मा चक्रमा महसुस हुने आनन्दमा संगीतको मात्र ५–१० प्रतिशत भूमिका रहने गर्छ। जब हामी सङ्गीत सुन्छौँ, मस्तिष्कले उत्पादन गर्ने न्यूरोट्रान्समिटरहरू र हर्मोनहरूका कारण हामीले आराम र आनन्दको अनुभव गर्दछौ। सङ्गीतका कारण मस्तिष्कको रिवार्ड सिस्टममा (इनाम प्रणाली) मस्तिष्कको भेन्ट्रल टेगमेंटल क्षेत्र (VTA) मा उत्पादन हुने डोपामिन रिलिज हुन् पुग्दा हामीले आनन्दको अनुभव गर्दछौ।

त्यस्तै पिट्यूटरी ग्रन्थिबाट निस्कने एन्डोर्फिनहरूले शारीरिक पीडा कम गर्दै हामीलाई उत्साहको अनुभूति गराउने गर्दछ। आन्द्रा र मस्तिष्कमा उत्पादन हुने सेरोटोनिनले हाम्रो मुडलाई नियन्त्रण गर्दै शान्तिको अनुभूति प्रदान गर्छ। यसरी समग्रमा










सबै रसायनहरूको भूमिकाले सङ्गीत सुन्दै गर्दा हामी आराम, आनन्द र रोमाञ्चकारी भावको अनुभूति गर्ने गर्दछौ।

जब तपाईं सन्तुलित वैदिक आहार खानुहुन्छ उक्त सन्तुलित वैदिक आहारले तपाईंका साथ साथै गट माइक्रोबायोमका लागि जरुरी हुने आहार समेत उपलब्ध गराउँछ । आफूलाई मनपर्ने कुरा हुँदा ‘आहा’ को अनुभूति दिने डोपामिन समेत पेटमा उत्पादन हुन्छ। गट माइक्रोबायोमको आवश्यकता पूर्ति भएर चाहिँदो मात्रामा हेप्पी बेली निर्माण गर्ने सार तत्त्वहरू उत्पादन हुन सक्दा आन्द्राको मस्तिष्कलाई हामीले सन्तुष्ट राख्न सक्दछौ। जुन सन्तुष्टिको पहिलो आधार खुढ्किलो हुने गर्दछ।

हाम्रो शरीरको कुरा गर्दा शरीर र मस्तिष्कको सम्बन्ध











बारे बुझ्नु पर्ने हुन्छ। शरीर एउटा मिसिनको भूमिकामा हुँदै गर्दा मस्तिष्क त्यसको इन्जिनको भूमिकामा हुने गर्दछ। इन्जिन ठिक भए मात्र तपाइको यन्त्र यानेकि मिसिन राम्रो चल्दछ। तर त्यो इन्जिन चल्नको लागि तपाईँलाई इन्धन चाहिन्छ।

न्युरोसाइन्सको हिसाबमा त्यो इन्धन भनेको डोपामिन हो। तपाइको मनमा प्रेम जगाउने करुणा जगाउने केमिकल। जब तपाई कुनैकर्म गर्नु हुन्छ र त्यो कर्ममा तपाइको ध्यान पुरा लागिरहेको छ भने तपाईँलाई विगतको बारे सोच्ने र चिन्तित हुने स्थिति (डिप्रेसन) पनि हुँदैन।भविष्यको असुरक्षाको चिन्ता (एनजाइटि) पानी आउँदैन।

तपाईँको कर्म आनन्द संग चलेको हुन्छ। किनकि













तपाइको दिमागले त्यति बेला त्यहाँ डोपामिन बनाइरहेको हुन्छ। डोपामिन तपाइको कर्म बापतको पुरस्कारको रूपमा हुन्छ। तपाइको इन्जिन नयाँ जस्तै चलेको अनुभूति हुन्छ।

जसरीइन्धन नभएर मिसिन चल्दैन त्यस्तै उचित डोपामिन बिना तपाई केही गर्न सक्नु हुन्न। काममा न त ध्यान हुन्छ। काम गर्न खोज्दा पनि तपाईँलाई बेचैनी आउँछ।

तपाइको शरीरमा डोपामिन धरै भयो भने पनि तपाइले काममा फोकस भएर आफ्नो कर्म पुरा गर्न सक्नुहुन्न। काम सक्ने हतारो र हतासो मनस्थितिले काम बिग्रन्छ। त्यो बेला तपाइको अधिक भएको डोपामिन लाई नियन्त्रण गर्नु पर्ने हुन्छ।











तपाइको दिमागमा अधिक डोपामिन लाई नियन्त्रण गर्ने काम अर्को केमिकल सेराटोनिनले गर्ने गर्दछ। सेराटोनिनले तपाइको मिसिन इन्जिनमा जरुरत अनुरूप इन्धनदिएर तपाइलाई नियन्त्रित कर्म गर्न सहयोग गर्छ।

यदि तपाइमा सेराटोनिनको कमी भयो भने तपाई तपाइको मन जे मा गइरहेको छ त्यसैमा अत्यधिक लगावविकास भएर त्यो बिना जिउनै नसक्ने जस्तो बेचैनी हुने र त्यसैको एडिक्सन विकास गरि दिन्छ। तपाई अत्यन्त भद्दा र जङ्गली बन्नु हुन्छ।

तपाई अत्यन्त बेचैनी हुने स्थिति आउँदा तपाइको त्योबेचैनी गतिलाई इमर्जेन्सी ब्रेक लगाउने र रोक्ने काम तपाइको दिमागमा रहेको गाबा र अमिगडेला जस्ता मस्तिकका न्युरोनहरुले मिलेर तपाइमा













तत्काल डर उत्पन्न गर्दछ। त्यसलाई प्यानिक अट्याक भन्ने गरिन्छ। जसले गर्दा तपाइको ध्यान अन्यत्र जान्छ।

त्यो बाहेक अक्सिटोसिन, कोर्टिसोल, र टेस्टोस्टेरोन हर्मोनहरूले हाम्रो शरीरका भावनात्मक, शारीरिक र प्रजनन स्वास्थ्यमा ठुलो भूमिका खेलेको भेटिन्छ।

हाइपोथालामसमा उत्पादन हुने र पिट्यूटरी ग्रन्थिबाट बाहिर निस्कने अक्सिटोसिनले सामाजिक सम्बन्ध, आपसीविश्वास जगाउने, सुत्केरी हुन् सहयोग गर्ने र स्तनपान लाई सहज पार्दछ।

एड्रिनल ग्रन्थिबाट उत्पादन तनावको वेला तनाव नियन्त्रणगर्न पैदा हुने कोर्टिसोलले शरीरको मेटाबोलिज्म, रगतमा चिनीको मात्रा, रोग







प्रतिरोधात्मक क्षमता तथा जलनको नियन्त्रण गर्छ।

पुरुषको अण्डकोष र नारीको डिम्बाशयमा बन्ने टेस्टोस्टेरोन कामेच्छा लाई प्रोत्साहन गर्ने, मांसपेशीको वृद्धि गर्ने यौनतागत बढाउने काम गर्दछ।

हाम्रो शरीरका हर्मोनहरूले शरीरमा गर्ने व्यवहारको लागि तिनीहरूलाई नियमित ऊर्जा चाहिन्छ।

हाम्रो शरीरमा जम्मा नौ वटा दुलाहरू हुन्छन्। ती दुलाहरू शरीरको प्रकृति संग फरक फरक सम्पर्क स्थापना गर्ने केन्द्रको रूपमा काम गर्दछ।

हामीले खाने खाना, लिने हावा, सोच्ने सोचले दिने आत्मा बल आदिले मात्र नभएर प्रकृति वाट तिनै नौ दुला केन्द्रित फरक फरक प्रकृतिको नव दुर्गारुपी











नौ शक्ति शरीरले नियमित प्राप्त गर्दछ।

दुवै सूक्ष्म जीव र सूक्ष्म अणु निर्मित त्यो शक्ति नौको समूहमा एकत्रित भएको फरक फरक सेनाको रूपमा हुन्छ। जसलाई वेदमा मरुत गण भनिएको छ।

तिनै मरुत गण प्रकृतिको प्रतिनिधिको रूपमा शरीर लाई नियमित रूपमा जीवित राख्न सक्रिय हुने गर्दछ। वेदमा १८० भन्दा अधिक मरुत गणको पहिचान भएको छ।

यिनीहरूलाई रुद्र सेना भनिन्छ। यिनीहरूको काम शरीरको इन्जिन र इन्जिनको इन्धन तथा अन्य पाट पुर्जा रुपी इन्जाइम, हार्मोन र प्रतिरक्षा प्रणालीहरू अग्नि अर्थात् उपयुक्त ऊर्जाको साथमा









स्वतन्त्र रहेर काम गर्दैगर्दा आउने अवरोध लाई हटाउने र स्वतन्त्र काम गर्न दिने सेनाको भूमिका खेल्नु रहेको कुरा वेदमा उल्लेख छ।

जसको गहिरो ज्ञान राख्न सक्दा स्नायु प्रणाली, मनोविज्ञान र आर्टिफिसियल इन्टेलीजेंसको क्षेत्रमा काम गर्न हामीलाई ठुलो सहयोग पुऱ्याउने छ।

हेप्पी बेली (Happy Belly) हामीलाई आनन्द अनुभूतिका लागि पहिलो मुख्य आधार बन्ने गर्छ। जब पेट भोको रहेको हुँदैन, स्वस्थ, वैदिक वा अर्गानिक, सन्तुलित भोजन आहार बनेको हुन्छ, मन र तन समेत स्वस्थ रहेको हुन्छ, त्यो बेलामा सुनेका संगीत, भजन, प्रार्थना, योग, ध्यान वा हितैषीसँग हुँदै गरेको भलाकुसारी सबैले तपाईंलाई आनन्द दिन्छ।









शरीर भित्र नै आन्तरिक रूपमा उत्पन्न हुने र पिट्युटरी ग्रन्थीहरूमा भण्डार हुने पेन किलर वा तनाव नियन्त्रण गर्ने न्युरोकेमिकल इन्डोरफिन जब तपाईं कमेडी कार्यक्रमहरू हेर्ने, भिडियो हेर्ने, रातो खुर्सानी खाने, तितोडार्क चकलेट खाने, हाँस्ने, समूहमा योग गर्ने, अकुपन्चर गर्ने आदि गतिविधिमा सामेल बन्नुहुन्छ तब पिट्युटरी ग्रन्थीबाट बाहिर निस्किएर तपाइका शरीरमा भएका दर्द, मनमा भएका पिडा सबै मारेर, बिर्साएर तपाइलाई आनन्द महसुस गराउने गर्दछ। वैदिक अनुभवले त्यसो हुनुमा सक्रिय रहने शक्तिहरूलाई सोम रस तत्त्व भन्ने गर्दछ। जुन भौतिक, मनोवैज्ञानिक र आध्यात्मिक प्रकृतिको सबै प्रकारको सुखानुभूति को अनुभूति गराउन भूमिका खेल्ने आनन्द तत्त्व, आनन्द ज्ञान र






आनन्द अनुभूति सबै हो।

दिनभर दैनिक गतिविधिमा व्यस्त रहने हाम्रो जीवन प्रकृतिमा भएको अन्य जीवित जीव जस्तै प्राकृतिक नियमसँग तालमेल सहित कार्य गरिरहेको हुन्छ। रातको समयमा हाम्रो शरीर आन्तरिक मर्मत सम्भार, सफा सुग्घर तथा आफूलाई पुनः जीवन दिने कार्यमा केन्द्रित रहन्छ।

कोषहरूको नियमित गतिविधिबाट पैदा भएका शरीर भित्रका विषाक्त पदार्थ तन्तुहरूबाट बाहिर फाल्ने यही समय राम्रो समय बन्छ। पाचन प्रणालीमा हुने मेटाबोलिजमका शरीरलाई जरुरी नहुने सहउत्पादन समेत यसै समयमा सुरक्षित रूपमा बाहिर फाल्नका लागि तयार गरिन्छ। यी सबै गतिविधिले बिहान सबेरै पेट खाली गर्ने नित्य कार्य











सञ्चालन पूर्वको तैयारी समेत पुरा गरेको हुन्छ।

हामीले जडीबुटीका नाममा खाने त्रिफला जुन हर्रो, बर्रो र अमलाको तीन फल मिश्रित चुर्ण हो, त्योहाम्रो आन्द्राको गट माइक्रोबायोमको उत्कृष्ट खाना रहेको हालै अनुसन्धानले प्रमाणित गरिदिएको छ। हाम्रा पूजा आजामा खाइने सबै नैवेद्यले समेत त्रिफला हाराहारीको भूमिका मात्र खेल्दैन, शरीरमा अपुग भएको गट माइक्रोबायोमको आपूर्ति समेत गर्ने विज्ञानबाटै प्रमाणित भएको छ ।

हामीले घरमा बनाएर खाने दहीमा ल्याक्टोवेसिलसको विभिन्न प्रजातिका अत्यन्त फाइदाकारी फेर्मेन्टम, एसिडोफिलस, कन्फुसस र ल्याक्टिस स्ट्रेन भेटिएको छ। यसले पेटमा थपिदिने





आश्चर्यजनक माइक्रोबियल विविधताले शरीरको दर्द घटाउने, टाइप–२ मधुमेह नियन्त्रण गर्ने र मोटापनको जोखिम समेत घटाउने गरेको प्रमाणित भएको छ। उच्च रक्तचाप नियन्त्रण गर्न तिनै प्रोबायोटिक्सको महत्वपूर्ण भूमिका हुने गर्दछ।

जब पेटमा माइक्रोबायोमको कम विविधता देखिन्छ, तब फर्मिक्युटस र ब्याकटेरियोडेङ्ख को रेसियो बढेको भेटिन्छ। एसिटेट र ब्युटाइरेट बनाउने ब्याक्टेरियाको संख्या घटिरहेको हुन्छ। बढिरहेको हुन्छ। त्यसो हुँदै गर्दा ल्याकटेट बनाउने ब्याक्टेरिया अनपेक्षित रूपमा बढेकोले मानिस कुनै न कुनै पाचन संग सम्बन्धित र तिनका कारण उत्पन्न बनेका रोगको समस्यामा पर्ने गरेको देखिन्छ ।

जस्तै अटिजम हुने बालकमा पेटमा





माइक्रोबायोमको कम विविधता रहेको भेटिन्छ। फाइलेम फिर्मिक्युटस चिन्ता जनक रूपमा घटेको र ब्याकटेरियोडेङ्ख अधिक बढेको हुन्छ। त्यसमा पनि क्लसट्रिडियम परफ्रिन्जिन प्रायः अधिक बढेको भेटिन्छ । मधुमेहको रोगीमा फिर्मिक्युटस चिन्ताजनक रूपमा घट्ने र ब्युटाइरेटको कमी रहने गर्छ।

टाइप–२ मधुमेहमा फेकली–ब्याकटेरियम प्रौसनिटिजी को अधिकता रहने गर्छ। कुपोषित बालकमा ब्याकटेरियोडेङ्ख र फिर्मिक्युटस दुवै अधिक बढेको हुन्छ। महिला यौनाङ्गमा ल्याक्टोबेसिलस रामनोसस र ल्याक्टोबेसिलस रिउटेरीको संख्या धेरै हुँदा दोजिया हुँदा दुःख दिने ब्याक्टेरिया भजिनिटिको संक्रमण नियन्त्रण गर्न सहज हुने







गर्दछ।

हरेक स्वस्थ नारीको यौनाङ्गमा हुने ल्याक्टोबेसिलस ग्यासेरी र ल्याक्टोबेसिलस जेनसिनी नामक प्राकृतिक माइक्रोबायोमले योनांगको सुरक्षा गरिरहेको हुन्छ । ग्रामीण तथा पहाडी भेगमा बसोबास गर्ने मानिसमा प्रचुर मात्रामा ब्याकटेरोडिएट र न्यून प्रोटियोब्याक्टेरिया भेटिन्छ। सहरी भागमा बस्नेमा अधिक फर्मिक्युटस र प्रोटियोब्याक्टेरिया रहने गर्छ।

अध्ययनले राम्ररी भिजेको कुश–पानीको ब्याक्टेरिया र फंगस जीवाणुरोधी क्षमता हुने देखाउँछ। जुन उमालेर काटेको र घाउ भएको ठाउँ सफा गर्न उपयोगी भेटिएको छ। परम्परागत रूपमा कुशको लेदोबाट बनाइने लेपन घामको विकिरणले













छालालाई पु¥याउने हानिविरुद्ध प्रयोग गरिएको प्रमाण पनि भेटिएका छन्। पूजा आजामा हामीले प्रयोग गर्ने दुबो आँखाको समस्या, पिसाब पोल्ने, जिउ बाँउडिने, घाउ निको पार्ने जस्ता धेरै रोचक उपचारमा प्रयोग हुने जडीबुटीका रूपमा लिइन्छ ।

दुबोको पेस्ट बनाएर छालामा सिधै दल्दा लुतो, दाद, घमौरा र चिलाउने छालाको रोग निको हुने आयुर्वेदको मान्यता छ। दुबोमा हुने हेक्जाडिकानोइक एसिड र इथरका इस्टरहरू पाल्मेटिक एसिडमा आधारित इस्टर हुन्। जसको उत्कृष्ट एन्टिअक्सिडेन्ट क्षमताले आन्द्रामा क्यान्सर सेलको उत्पन्न हुन र बढ्न रोक्ने गर्छ।

दुबोको जुस व्यावसायिक रूपमै बिक्री हुने गर्छ। हरियो दुबो, दुबोको एक्स्ट्रेकका अलावा सुकेको





दुबो र त्यसको धुलो पनि खाने गरिन्छ। दुबो अन्य रोग जन्य समस्या जस्तै पायल्स, आँखाको संक्रमण, छालाको बिबिरा, लुतो, घमौरा तथा डन्डीफोर आदि उपचारमा प्रयोग भइरहेको छ ।

शरीरको तन्तुहरूमा रहने बोसोले तन्तुहरूले नियमित काम गर्ने क्रममा वा खाना पाचन हुने क्रममा पैदा भएका तर नियमित प्रक्रिया मार्फत शरीरबाट बाहिर फाल्न नसकेका कचरा पदार्थ कैद गरी राख्छ। त्यसले आफ्नो क्षमताले भ्याएसम्म ती कचराबाट शरीरका मुख्य अंगहरू हानि हुनबाट जोगाउँछ। जब शरीरमा त्यस्ता कचरा धेरै जम्मा हुन्छ तब तिनै विभिन्न रोगका चुरो कारण बनिदिन्छन्।

तन्तुहरूमा जमेका विषाक्त तत्व शरीर बाहिर





निकालेर शरीरलाई भित्रैबाट स्वस्थ बनाउने डिटोक्सिफिकेसन प्रक्रिया आयुर्वेदको पञ्चकर्म विधिमा समेटिएको छ । यो विधिमा घिउयुक्त खाना खान दिइन्छ । छाला भित्रको तन्तुहरूमा रहने बोसोले सोसेर राखेको विषाक्त पदार्थ दैनिक घिउले शरीरको मालिस गरी तन्तु बाट सोसेर छाला सम्म पु¥याउने, मसाज पछि स्टिम थेरापी प्रविधिबाट पानीको बाफले नुहाउने र छालाको सतहमा पुगेको विष शरीर बाहिर पु¥याउने गरिन्छ।

गौमाताको गहुँतबारे अमेरिकामा धेरै वटा प्याटेन्ट दर्ता छ (U.S.Patents No# 6410059 and 6896907)। गाईबाट लिइएको पाँच प्रमुख पदार्थ गाईको मूत्रको डिस्टिल अर्क, दूध, घिउ, दही र पास्चराइज गोबर सामेल पञ्चगव्यमा धेरै विकार







विरुद्धका औषधीय गुण छन्। औषधीय उद्देश्यका लागि जडीबुटीका साथ हुने यसको प्रयोगले व्यक्तिलाई बुडौली हुन बाट रोक्ने कायाकल्प शक्ति निर्वाण गर्ने विधिमा उपयोगी हुने गर्दछ।

काउप्याथी उपचारका नाममा पञ्चगव्यबाट मानव चिकित्सा हुने गर्दछ। रोगाणु र विषाणु मुक्त गरी निर्माण भएको पञ्चगव्यको सारतत्व औषधीय मात्र छैन, मानव माइक्रोबयोमको स्रोतका रूपमा समेत उपयोगमा आउँछ।

परम्परागत आयुर्वेदिक ग्रन्थ चरकसंहिता, सुश्रुतसंहिता र गदनिग्रहमा पञ्चगव्यबाट प्राप्त पदार्थको औषधीय अनुप्रयोग बारे धेरै सुझाव भेटिन्छ। तिनै सुझावका आधारमा वैज्ञानिक परीक्षण मार्फत आयुर्वेदमा र आधुनिक औषधी













विज्ञानमा मानव स्वस्थ विकारमा उपचार हुने धेरै औषधी बनेका छन्। जस्तै क्यान्सर, ल्युकोडर्मा, हाइपर लिपिडेमिया, बाथरोग, रेनल डिसअर्डर, डाइटरी डिसअर्डर, गैस्ट्रोइन्टेस्टाइनल ट्र्याक डिसअर्डर, एसिडिटी, दम र एड्स जस्ता रोगको उपचारका लागि गौमूत्रको प्रयोग भइरहेको छ।

महाभारतका अनुसार पञ्चामृत क्षीर सागर मन्थनको समयमा पैदा हुन गएको सामग्री थियो । पञ्च भनेको पाँच र अमृत भनेको बढौली लाग्न नदिने सारतत्व युक्त भनिएको हो ।

यो स्थानीय गाईको दूध पाँच चिया चम्चा, स्थानीय गाईको घिउ दुई चिया चम्चा, स्थानीय गाईको घरेलु दही एक चिया चम्चा, स्थानीय मौरीको मह एक चिया चम्चा र शुद्ध मिश्री वा सखर एक चिया









चम्चाको अनुपातमा मिसाएर बनाइन्छ।

बढीमा एक–दुई चम्चा दैनिक पञ्चामृत पिउँदा शरीरको प्रतिरक्षा शक्तिको सुधार गर्न, शारीरिक ऊर्जामा सुधार गर्ने टनिकका रूपमा, भावनात्मक र मानसिक स्वास्थ्यलाई बढावा दिन, छालाको औरा वा चमकपन बढाउन, कपालको रङ सुधार गरी चिल्लो पार्न, ब्रेनटानिकका रूपमा बुद्धिमत्ता, स्मरण शक्ति बढाउन, चनाखोपन वृद्धि र रचनात्मक क्षमताहरू विकास गर्न सहयोग गर्ने गर्दछ।

भारत वर्षको आमाको दूधमा भएका तागतको गुण बोकेको पञ्चामृत प्राकृतिक अमृतका तत्वहरू समावेश रहेका विभिन्न टनिक वा पुष्टकारी वर्गका खाना तथा पेय हो। कतिपय अवस्थामा बास्नाका लागि इलायची (सुकुमेल) र तुलसीसमेत हालिने






वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे


पञ्चामृत मानव जातिको इतिहासमा आजसम्म थाहा भएकामा सबैभन्दा पुरानो सिन्बायोटिक खाना हो। जसमा प्रिबायोटिक अथवा माइक्रोबयोमको खाना र प्रोबायोटिक अथवा हाम्रो शरीरलाई चाहिने माइक्रोबयोमहरू हाम्रो शरीरको जरुरत अनुरूप पूर्ति गर्ने उत्कृष्ट औषधीय क्षमता बोकेको प्रसाद वा पेय वा खाना हो।

वैकुण्ठ भनेको कुनै किसिमको भय, संशय, चिन्ता वा कुण्ठा नभएको ठाउँ, अकाल, अभाव र अपूर्णता नभएको ठाउँ हो। एक व्यक्तिको लागि आमाको हृदय बाहेक अन्यत्र त्यस्तो ठाउँ पाउने सम्भावना अत्यन्त न्यून हुन्छ।

सम्झनुस जतिबेला तपाईं सानो हुनुहुन्थ्यो, तपाईं आमाको एका पट्टिको दूध चुसेर खाँदै गर्दा एउटा








हात आमाको चोलोको तुनामा र अर्को हातले आमाको लामो केशमा तान्दै बुबु पिउनु हुन्थ्यो। त्यतिनै बेला तपाईंको एउटा गोडाले आमाको छाती र अर्कोले आमाको अर्को स्तनमा लात हानिरहेको हुन्थ्यो।

पटक पटक कुहेलिएर, छातीमा लात खाएर त्यसैमा रमाएर तपाईंलाई माया गरी गरी एउटा दूधबाट अर्को दूधमा घरी घरी तपाइको मुन्टो फेरी फेरी पुऱ्याएर तपाईंलाई पेटभरि दूध खुवाउने तागत बोकेकी तपाईंकी आमा तपाईंको वैकुण्ठ हैन र?

दूधको महासागर जसलाई क्षीर सागर भनिन्छ त्यसको सारतत्व संकेत गर्दा आमाको दूधरूपी पञ्चामृतको सम्झना गरिन्छ। विष्णुको (मुक्तिनाथ) बासस्थान वा विष्णु लोकको पोषण सामग्रीको









प्रतीकका रूपमा तपाईं हाम्रा मन्दिरमा पोसिलो गुनिलो प्रसादका रूपमा हामी पञ्चामृत ग्रहण गर्छौं।

आज हामी यहाँ पनि समस्यामा परेका छौँ। हाम्रो आफ्नै बालक जसलाई हामीले दिनरात केही नभनेर पढायौँ, भएको गोरु, बाख्रा बेचेर उच्च शिक्षा दियौँ, उसले हाम्रो परम्परागत ज्ञान न त कहिल्यै पढ्यो, न हाम्रो परम्परागत ज्ञानमा सामान्य रूपमा के रहेछ भन्ने बुझ्ने समेत कोसिस गर्ने वातावरण नै पाइरहेको छ। जब देखि ऊ स्कुल जान थाल्यो उसलाई हाम्रो परम्परागत ज्ञानमा सबै रूढिवादी कुरीति भनियो। त्यसलाई उसले त्यसभित्र के रहेछ भन्ने समेत नहेरी, नसोधी रूढिवादी कुरीति नै भएको निचोडमा पुगेको छ। आज ऊ ठूलो मान्छे भएको छ। चिल्लो










कार चढेर पनि हिँड्छ।

उसकी हजुर आमा जब अपच भएर बिरामी पर्नुहुन्छ, तब सुकेको अदुवा, पिपला, ज्वानो, शिधेनुन, जिरा, हिङ बराबर मिसाएर पिस्नु हुन्छ । तीन ग्राम (तीन मासा) देखि छ ग्राम (छ मासा वा ४८ लाल) सम्मको खुराक बनाएर खाँदा तंग्रिहाल्नु हुन्छ।

बडेहाकिम बनेको नाति घरमा हुँदा भने हजुर आमालाई सो बिमारी लागिहाले सारै सकस पर्छ। घरको घरेलु ओखतीलाई नचाहिने रूढिवादी ओखती भनेर बडेहाकिम बनेको नातिले खान दिंदैन। बजारबाट सेन्थेटिक ओखती र पचाउने दबाइ भनी क्याप्सुल हालेको माइक्रोबायोम बोकेर ल्याउँछ । त्यो मात्र खान भन्छ। प्यारो नाति













बल्लबल्ल घर आएको छ, केही भन्दा मन दुख्ला। हजुर आमा नातिलाई केही भन्न सक्दिनन्। उसले औषधीले ठिक भएको छ भनी सोध्दा, ठिकै होला बाबु केही दिन लाग्ला नि भन्छिन्। हालत बिग्रेको लुकाउँछिन्। जब नाति बाटो लाग्छ, आफ्नै ओखती खाने बित्तिकै भने हजुर आमा तंग्रिहाल्छिन्। हजुर आमा तङ्ग्रिएको खबर पाउँदा नाति केटो आफूले लगिदिएको ओखतीले सन्चो भएकोमा गर्व गर्दै खुसी मनाउन सहरको एक भट्टीमा अनारको तीन पाने पिउन पुग्छ। यो आज हाम्रो घरघरको कथा बनेको छ ।

महात्मा गान्धिले १९३० मा हिन्दी नवजीवन पत्रिकामा राम राज्यबारे छापिएको लेख ‘स्वराज और रामराज्य’मा राज्यमा कस्तो कर व्यवस्थामा





हुनुपर्छ भनी लेख्ने गर्नु हुन्थ्यो। जस अनुसार सूर्यवंशी रामको कर नीति पनि वेदको अवधारणाको सूर्यले अपनाउने नीति अनुरूप हुनुपर्ने गान्धिको राय आउने गर्दथ्यो। जस अनुसार सेवा प्रदायकका रूपमा सरकार सूर्यको प्रकाश जस्तो होस्, बिना भेदभाव सबै नागरिकको दैलोमा उसको सेवा पुगोस् भनिएको हुन्थ्यो। कर उठाउने सवालमा सूर्यको तापबाट सञ्चालित बादल जस्तो बनोस्। धेरै पानी भएको समुद्रबाट धेरै बाफ र सुक्खा रहेको ठाउँबाट नगण्य बाफ खिचोस्।

सूर्यले बाफका रूपमा लिएको पानी जस्तो हुने गरी कर उठाउँदा कसैलाई थाहा नहोस्, मतलब मर्का नपरोस्। धनी, महाजन, मनोरञ्जन र विलासीका हिरा, मोती, मदिरा, महँगा गाडी आदिमा धेरै कर





लागोस्। उक्त पैसाबाट मुलुकको विकास होस्। गरिब जनतामा कर हैन, अनुदान पुगोस् । सरकारले दिने योजना वा अनुदान बादलले गर्ने बर्सात जस्तो रहोस्। सबैले थाहापाउने र जनता खुसी हुने गरी अत्यन्त जरुरत रहेको जंगलमा अधिक र महासागरमा नगण्य बर्सियोस्।

१९९४ मा मनमोहन अधिकारी सुनसरीको धरान क्षेत्रबाट मेम्बर अफ पार्लियामेन्टमा उठ्दा चुनाव प्रचारका क्रममा विद्यार्थीका रूपमा धरान रहेका बेला मलाई समेत भेट्न बोलाउनु भएको थियो। भेट हुँदा मैले उहाँलाई तनहुँ तिर त कम्युनिस्टहरूले ६० वर्ष पुगेपछि जनतालाई गोलि ठोकी मार्छ भन्छन्। मेरो स्कुलिङ नै यस्तो भयो कि झापाको कम्युनिस्ट भनेसी डर लाग्छ भनेँ।





उक्त कुरा उहाँले सिरियस्ली लिएर माथिको बापुको कथा सुनाएर हामी तिनै कुरा बहुदलीय जनवादबाट पूरा गर्ने मिसनमा यो राजनीतिमा छौँ भन्नु भयो। त्यसैले हाम्रो चिह्न हेर 'सूर्य' छ! भनेको हिजै जस्तो लाग्छ । उक्त कुरा हामी संसदीय व्यवस्थाको उपयोग गरी बलपूर्ण फड्को मारी पूरा गर्छौं समेत भन्नु भएको थियो। केहि पछि उहाँ नै प्रधानमन्त्री बन्नुभयो ।

केपीओली गृह र भरतमोहन अधिकारी अर्थमन्त्री बन्नुभो । त्यस बेलाको 'आफ्नो गाउँ, आफैं बनाऊँ' भन्ने र बूढाबूढीलाई भत्ता दिने कार्यक्रम देखे पछि उहाँको ऊक्त कुरा चुनावी हैन, सिरियस रहेको अनुभुति भएको थियो। मनमोहन अधिकारीले आफ्नो नीति पूरा लागू गर्न भ्याउनु भएन । छिट्टै









नौ महिनामै सरकारबाट बिदा गरियो ।

केपीओली प्रधानमन्त्री बनेको समयसम्म आइपुग्दा परिस्थिति भने त्यता समेत धेरै पातलिएको छ। वेदान्तले चुरेको संरक्षण गर भन्छ । हामी चुरे फुटाएर गिट्टी, बालुवा बेच्ने नीति बनाउँछौँ। त्यो चुरेमा गाँजा, हेम्प, असुरो, धयेरी, तितेपाती, सिउँड़ी, टिमुर, कन्टकारी, भलायो, चरीअमिली जस्ता खेती गर्दा त्यहाँबाट आउने गिट्टी, बालुवा भन्दा लाखौं धेरै आम्दानी मात्र हुन्न, पर्यावरण पनि जोगिन्छ भन्ने प्रस्ट छ। गाँजा, हेम्पले भूक्षय हुन वाट रोकेर चुरेको संरक्षण गर्दछ। हामी गाँजा प्रतिबन्ध गरिरहेका छौ। गाँजा कानुनी गर्न धरै उत्साही नहुन भन्ने प्रधानमन्त्रीको तह बाट उर्दी जारी गरिरहेका छौ।






प्राकृतिक संरचना माथिको मानव दोहनले मानव अस्तित्व नै सिध्याउने जोखिम दिनेछ भन्ने वेद र विज्ञानले यकिनका साथ भनिरहेको छ। हाम्रो दिमागमा कालीगण्डकी डाइभर्सन जस्ता सानो फाइदामा मुलुक कंगाल बनाउने विचार र योजना कसैले हालिदिन्छ। हामी क्षणिक लाभका लागि त्यसैको पछि लाग्छौं। यसको उपचार के ? यसको उपचारमा वेद र विज्ञानको एकै निचोड भेटिन्छ। नदी नाला र पर्यावरणले दिने फाइदा अतुलनीय हुन्छ।

महिला गर्भवती भएको सोह्रौँ दिन आसपासमा एम्ब्रोइनिक तन्तुबाट न्युरल प्लेट बनी मानिसको स्नायु प्रणाली विकास हुन थालेको भेटिने गरेको बताउँछ न्युरोसाइन्स । त्यसको दुई–चार दिनभित्रै










न्युरल ग्रोभको स्पष्ट स्केच विकास हुँदै एक्काइसौं दिन पुग्दा नपुग्दा न्युरल ग्रोभ न्युरल प्लेट सँग जोडिँदै न्युरल ट्युब बनिसक्छ। न्युरल ट्युबको अगाडिको भागबाट टाउकोमा हुने अगाडिको, बीचको र पछाडिको मस्तिष्क बन्छ भने बाँकी मेरुदण्ड भित्रको स्पिनल कर्ड बन्ने गर्छ। मात्र सात हप्ता पुग्दा नपुग्दा मस्तिष्कको तीनै भागको तीव्र विभाजन हुने क्रम सुरु हुने र सशक्त स्नायु प्रणालीको विस्तारको अभियान सुरु हुने गर्छ।

एक अनुमानमा बालबालिकामा स्नायु प्रणाली विकास हुने क्रममा प्रत्येक मिनेट कम्तीमा दुई लाख ५० हजार न्युरोनको कोषिका बन्ने गर्छ। बच्चा जन्मेको दुई वर्ष सम्म यो तीव्र विकासक्रम जारी रहन्छ। यही दुई वर्ष भित्र मानिसको जीवनभर हुने











दिमागको वृद्धिको ८० प्रतिशत वृद्धिहुने गर्छ। प्रत्येक सेकेन्ड सेकेन्डमा बन्ने न्युरोनको स्वस्थ र तन्दुरुस्ती त्यो न्युरोनको विभाजन भएर बन्ने अन्य न्युरोनको सुरक्षित भविष्यको निर्णायक हुने गर्छ। गर्भवती महिलाको मानसिक र शारीरिक स्वस्थ तथा तन्दुरुस्तीले उक्त न्युरोन विभाजनलाई पूर्ण रूपमै प्रभावित गर्ने गर्छ । तीन वर्षको हुँदा ९० प्रतिशत बन्ने दिमाग पाँच वर्षको हुँदा लगभग पूर्ण रूपमा बनिसकेको हुन्छ।

समाजबाट बालकले सिक्ने, आफ्नो अनुभूति र अनुभवका आधारमा आधारभूत मान्यताको जग बसाल्ने काम पाँच देखि १८ वर्षको उमेरमा हुने गर्छ। यही उमेरमा अनुशासन र नैतिक शिक्षाबारे मान्यता विकास गर्ने मुख्य प्रभाव खेल्छ।













हाम्रो आजको वैज्ञानिक प्रविधि र नैतिकता अनि करुणा विहीन भ्रष्ट शिक्षा र त्यसका विषय वस्तुले हाम्रा विद्यार्थीहरूमा पथ भ्रष्ट मनोविज्ञान विकास गर्न सहयोग गरिरहेको छ। बच्चाले पाउनुपर्ने शिक्षाको अवसर पाइरहेको छैन। हाम्रो हालको खाडल यति गहिरो बनेको छ कि हाम्रा परम्परागत गुरुकुल पद्धतिको शिक्षा लागू नगरी उक्त खाडल पूरा हुन निकै कठिन पर्ने देखिएको छ। मुलुकको हरेक शिक्षालयमा रोबोटिक गुरुकुल स्थापना र मुलुकवासीमा वेदमा विज्ञानको अभियान मार्फत सचेत नगर्दा सम्म मुलुकको समृद्धि असम्भव प्रायः रहेको देखिएको छ।







# वर्ण प्रणाली

वैज्ञानिक ढङ्गले प्रस्ट गर्दा फरक फरक मात्रामा सत्वगुण, रजोगुण र तमोगुणको संयोजन गरी प्रकृतिले आफ्नो विशेष सिर्जनाको रूपमा फरक फरक व्यक्तिको सिर्जना गर्दछ।

त्यो क्रममा हरेक व्यक्तिले अन्य भन्दा भिन्न निश्चित अति विशिष्ट गुण लिएर संसारमा जन्मेको हुन्छ। जस अनुसार सत्त्वगुण हाबी भएको व्यक्ति ब्राह्मण पेसामा सफल बन्दछ। तिनीहरू विद्या, अध्यात्म, पूजा, पाठ, आराधना आदिमा अधिक झुकाव राख्दछन्। रजोगुणको अधिक प्रभुत्व हुने गरी सत्वगुण मिश्रित व्यक्तिहरू  शासक तथा योद्धाको गुणको हुने गर्दछन्। यस्ता व्यक्तिको प्रशासन र











व्यवस्थापन सँग सम्बन्धित काममा अधिक रुचि हुने हुँदा उनीहरू क्षेत्रीय पेसामा सफल रहने अधिक सम्भावना हुन्छ।

रजोगुण र तमोगुण समान रूपमा मिश्रित व्यक्ति कृषि र व्यावसायिक काममा अधिक चासो लिने हुँदा उनीहरूको लागि वैश्य पेसामा सफल पेसा रहने सम्भावना रहन्छ। तमोगुण अधिकता रहने गरी तमोगुण र रजोगुण व्याप्त व्यक्ति नोकरी र मजदुरीमा अधिक निपुण हुन्छन्। तमोगुणको अधिकता रहेको वर्ग समाजमा उपलब्ध शूद्र व्यवसायमा अधिक सफल हुने सम्भावना रहन्छ।

व्यक्तिको गुण नियमित अध्ययन, तालिम र कामको अनुभवले समेत परिवर्तन गर्ने सकिने हुँदा प्राकृतिक रूपमा फरक प्रकृतिको गुण रहेको व्यक्तिसमेत अन्य







व्यवसायमा पनि सफल हुन सम्भव रहन्छ ।तर सर्व श्रेष्ठ बन्न सक्दैन ।

वर्ण प्रणाली अन्तर्गत भएको वर्गीकरण कुन परिवारमा जन्म भएको हो भन्ने कुरामा नभएर जन्मगत रूपमा उसले जुन गुणको संरचना, चासो र प्रकृति लिएर जन्म लिएको छ उसलाई उसको चासो र खुबीको क्षेत्रमा हुर्कने वातावरण दिन सक्दा ब्रह्माण्डले उसलाई उक्त क्षेत्रको उत्कृष्ट योग्य मानवको रूपमा पाउन सक्ने छ भन्ने सिद्धान्तमा आधारित थियो ।

जुन ब्रह्माण्ड लाई सम्पूर्ण चराचर हरुको लागि उपयुक्त वासस्थान बनाउन अत्यधिक उपयोगी हुन सक्दथ्यो । त्यसको आधारमा वर्ण व्यवस्था उसलाई कर्म गर्नकोलागि निश्चित पेसा छान्न सहयोग गर्ने






उद्देश्यमा निर्मित थियो ।

गीतमा कृष्णद्वारा मानिसहरूमा अन्तर्निहित हुने प्राकृतिक गुणहरू र चासोले निर्माण गर्ने क्षमताको आधारमा उचित कर्म पहिचान गर्न वर्ण प्रणाली अन्तर्गत सृष्टिको सुचारु गर्नाका खातिर चार वर्णको समेत व्यवस्था भएको कुरा उल्लेख छ ।

प्रत्येक वर्णको जिम्मेवारी र कर्तव्यहरू निरन्तर रूपमा सुचारु हुन सक्दा मात्र समाजमा एकै साथ नियमित सम्पन्न हुनुपर्ने सबै कार्यहरू सम्पूर्णरूपमा सहज सम्पन्न गर्न सम्भव रहने सुनिश्चितताको लागि प्रकृतिले डिजाइन मार्फत नै फरक फरक विशेष गुण भएका व्यक्तिहरूको जन्म दिने कुरा उल्लेख छ ।

जस अन्तर्गत ब्राह्मणहरूलाई वेदहरूको विद्या र



विज्ञानकोअविद्या अध्ययन गराउने, सिकाउने र दक्ष बनेपछि धार्मिक अनुष्ठानहरू गर्ने र समाजलाईआध्यात्मिक रूपमा मार्गदर्शन गर्ने जिम्मेवारी दिने चलन थियो।

भूमिको रक्षा र शासन गर्ने जिम्मेवारी क्षत्रियहरूको थियो। वैश्यहरू कृषि, व्यापार र व्यापारमा संलग्न हुन्थे। जबकि शूद्रहरूले विभिन्न प्रकारका श्रमहरू द्वारा अन्यतीन वर्णहरू वा स्व-रोजगारीले विकास गर्ने रोजगारीको अवसरमा आफूलाई समाहित गरी आफ्नो खुबी अनुरूप सेवा उपलब्ध गराउन सम्भव बन्दथ्यो।

कसैको कोखमा जन्मेर हैन कर्मले मात्र मानिस ब्राह्मण गुणी बन्न सक्छ।







जन्मले मानिस जो सुकेको कोखमा जन्मेको किन नहोस्, जन्मँदा हरेक व्यक्ति शूद्र चेतनाको हदमा रहेर शूद्र जन्मन्छ।जब उसले (जुन सुकै क्षेत्रको हुन सक्छ) अध्ययन आरम्भ गर्दछ त्यसलाई महान् संस्कार सिके पछिको उसको दोस्रो जन्म मानिन्छ। दोस्रो जन्ममा आफ्नो खुबी र क्षमता विस्तार गरी जब उ आफ्नो इलममा लाग्दैन वा समाज र राष्ट्र सेवाको राजकाजमा लाग्दैन, सामान्य मजदुरीको क्षेत्रमा नै रमाएर आफ्नो चेतना सामान्य काम चलाऊ कै अवस्थामा राख्दछ, कम सिप र ज्ञानभए पुग्ने शूद्र चेतना पर्याप्त हुने पेसा रोज्दछ भने उसको पेसा शूद्र हुन्छ। जब मानिस आफ्नो खुबी र क्षमताले आफूलाई व्यापारमा संलग्नगर्छ उ वैश्य गुणी हुन्छ। समाज र राष्ट्रको सुरक्षा र



सञ्चालनमा कुशल पार्दछ उ क्षेत्रीयगुणी बन्दछ।

उसले ती कुनै पनि क्षेत्रमा जाँदैन, आफूलाई वेद, विज्ञान जस्ता विषयमा पारङ्गत गरी ज्ञानी र विद्वान बन्छ, परम र परम ब्रह्मालाई जान्दछ, ब्रह्मरूप लिन्छ र आफ्नो ज्ञान अनुरूप अध्यापन, सल्लाह, हितोपदेश आदि जस्ता ज्ञान गुनको क्षेत्रमा संलग्न हुन आफूलाई दक्ष गर्दछ तब ऊ ब्राह्मण गुणी बन्छ। यथार्थमा 'सत्य ज्ञानको ज्ञाता" वा ब्राह्मणत्व प्राप्त गर्नेकुरा ज्ञानको विभिन्न चरणहरूको रूपको एक चरण हो। कुनै कसैको जातवा परिवारमा जन्म भएर त्यो ब्राह्मण हुने होइन। ब्राह्मण हुन् ब्राह्मणकै नस्ल अनिवार्य हुने बिचार बोकेको मानिस उ अझै शूद्रकै तहमा रहेको तर आफूलाई ब्राह्मण कोखमा जन्मिएको ले ब्राह्मण











रहेको मनोवैज्ञानिक भ्रममा बाँचेको मान्नु पर्छ। उनीहरूलाई गाली नगर्नुस्। माया गरेर वेदको ज्ञान लिन सल्लाह दिनु उपयुक्त हुन्छ।




ऋग्वेदका अनुसार विश्वकर्मा नै मूल रूपमा सर्वोच्च देव शक्ति इन्द्र र सूर्यको विशेषताको रूपमा जन्मे। सांसारिक रित अनुरूप नै जसरी हरेक अबोध बालक जन्मँदा अत्यन्त कम शूद्र चेतना लिएर जन्मन्छ त्यसरी नै विश्वकर्माको समेत जन्मे। समय क्रममा व्यावहारिकता, सिप, प्रविधि र ज्ञानको नियमित प्राप्त गरी विश्वकर्माले आफ्नो चेतनालाई नियमित वृद्धि गर्दै ब्राह्मण चेतनाको रूपमा विकास गर्न सके। आजको सम्पूर्ण मानव जातिको पिता रहेका विश्वकर्मा को संसारकै पहिलो इन्जिनियर रहेका थिए।

जसरी शरीरमा रोग लाग्दछ मनमा पनि त लाग्दछ। शरीरको ओखतीमुलो र उपचार भए जस्तै मनको पनि ओखती मुलो र उपचार हुन्छ। यहाँ कुरा पेसाको हो। मानिसको हैन। मानिस त सबैको एकै श्रोतको आत्मा निर्मित हुने हुँदा प्रकृतिकोलागि







आफ्नो सन्तान सबै बराबर र जो झन् कमजोरछ उ त झन् प्यारो, मायालु र सधैं उसैको माया मनमा उठ्ने हुन्छ। वेदको जात पातको सम्बन्धको निचोड यही हो। कर्म, आचरण, र संस्कारले व्यक्तिलाई साँचो ब्राह्मणत्व प्राप्त गर्न सक्षम बनाउँछ। चाहे उसको जन्म कुनै पनि जात वा परिवारमा किन नहोस्। यसलाई पुष्टि गर्न ऐतरेयऋषि, ऐलूषऋषि, सत्यकामजाबाल, राजापृषध, रथोतर, विश्वामित्र लगायतकाधेरै उदाहरणहरू लिन सकिन्छ। जसले कर्म र आचरणको आधारमा ब्राह्मणत्व प्राप्त गरेका थिए। यसले यो देखाउँछ कि जन्मले होइन, बरु कर्म,आचरण, र संस्कारले व्यक्तिको असली पहिचान निर्धारण गर्दछ। साथैव्यक्ति आचरण र कर्मको आधार उच्च वर्णबाट व्यक्तिको निम्न वर्णमा











समेत पुग्दछ।

मानिस कर्मले काबिल बन्ने र त्यसै अनुरूप उसमा विभिन्न गुणहरूको विकास हुने प्राकृतिक नियमको सिद्धान्त हो। कुनै व्यक्ति सामन्त वा विशेष परिवारमा जन्मेको मात्र कारणले पूज्य वा ज्ञानी हुँदैन, न त कुनै सो-काल्ड ब्राह्मण भनिएको परिवारमा जन्मेकै आधारमा ब्राह्मण हुन्छ। हाम्रो समाज आज सनातनी दम्भले कसरी स्वयं सनातन संस्कृतिलाई नष्ट गर्ने दिशामा अग्रसर छ। कुनै बाहुनको जात र थरमा जन्मेको मात्र आधारमा कोही ब्राह्मण हुँदैन। जति सत्य यो हो, त्यत्ति नै सत्यके हो भने आफ्नो कर्म, आचरण, र संस्कारले जो कोही पनि ब्राह्मण बन्न सक्छ।

ऐतरेय ऋषि, एक जना अपराधी दासका पुत्र भए





पनि कर्म, आचरण र संस्कारबाटउच्च कोटीको ब्राह्मण बने र ऐतरेय ब्राह्मण र ऐतरेय उपनिषादको रचना गरे। यसैगरी, ऐलूष ऋषि, जो दासीका पुत्र थिए, चरित्रहीन जुआरी थिए, तर पछि गुरुको शरणमा बसेर गहिरो अध्ययन गरे र ऋग्वेदका ज्ञाता बने (ऐतरेय ब्राह्मण २.१९)। सत्यकाम नाम राखेकी जाबालको पितृत्वको ठेगान थिएन। यौवनावस्थामा जाबालले धेरै पुरुषसँग यौन सम्बन्ध राखिन् । उनले पनि कर्म र आचरणको माध्यमबाट ब्राह्मणत्व प्राप्त गरिन (छान्दोग्य उपनिषद)। त्रिशङ्कु राजा हुन् तर कर्म, आचरणबाटै चाण्डाल बने भने विश्वामित्र, जो स्वयं क्षत्रिय थिए, ब्राह्मणत्व प्राप्त गरे। कबीरजीले जातको ठेगान नभए पनि रामानन्द गुरुलाई गुरु माने र पछि गुरुलाई पनि जातको कुनै महत्व





नभएको बोध भयो। यी सबै उदाहरणहरूले कर्म, आचरण र संस्कारले व्यक्तिको वास्तविक पहिचान निर्धारण गर्छ भन्ने कुरा पुष्टि गर्छ।

राजा दक्षका पुत्र पृषधले आफ्नो आचरण, कर्म, र चरित्रको कारणशूद्रको रूपमा चिनिएका थिए, तर तपस्याबाट परिवर्तन भई मोक्ष प्राप्त गरे (विष्णु पुराण४.१.१४) । राजा नेदिष्टका पुत्र नाभाग कर्म र आचरणले वैश्य भए, तर उनका सन्तानहरू क्षत्रिय नै रहे (विष्णु पुराण ४.१.१३) । नाभागका पुत्र धृष्टले पनि कर्म, आचरण, र संस्कारबाट ब्राह्मणत्व प्राप्त गरे, यद्यपि उनका छोराहरू क्षत्रिय कर्ममा रहिरहे (विष्णु पुराण ४.२.२)।

श्रीमद्भागवत महापुराणमा राजपुत्र अग्निवेश्यको पनि कर्म, आचरण, र संस्कारको माध्यमबाट



ब्राह्मणत्व प्राप्त भएको उल्लेख छ। रथोतर र हारित जस्ता क्षत्रिय पुत्रहरूले पनि कर्म, आचरण, र संस्कारबाट ब्राह्मणत्व प्राप्त गरे (विष्णुपुराण ४.३.५)। शौनक ऋषिका पुत्रहरू आचरण र संस्कारको भिन्नताका कारण ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र बने (वायु पुराण, विष्णुपुराण र हरिवंश पुराण)।

मातङ्ग, जो चाण्डाल पुत्र थिए, उनले पनि कर्म, आचरण, र संस्कारबाट ब्राह्मणत्व प्राप्त गरे। यस्तै, ऋषि पुलस्त्यका नाति रावण तथा राजा रघुका पुत्र प्रवृद्ध कर्म र आचरणका कारण राक्षस बने। यी सबै उदाहरणहरूले कर्म, आचरण, र संस्कारको महत्त्वलाई उजागर गर्छन्, जसले जन्मको आधारमा नभएर व्यक्तिको वास्तविक पहिचान र सामाजिक








स्थान निर्धारण गर्छ। वेद ब्यास,वशिष्ठ ऋषि,आजका स्वामी प्रपन्नाचार्य, योगी नरहरिनाथ कोहीपनि ब्राह्मण जातमा जन्मेका थिएनन्।

पहिलो व्यक्ति जो मानिसको रूपमा जन्मे उनी विश्वकर्मा पेसा कर्मी थिए। विश्वकर्मा देवलाई सृष्टि निर्माण गर्ने देवता मानिन्छ। जसले सम्पूर्ण ब्रह्माण्डको निर्माण गरेको विश्वास गरिन्छ। यस परिप्रेक्ष्यमा, सबै मानव जातिलाई विश्वकर्माका सन्तानको रूपमा हेर्ने सकिन्छ। यदि जन्मले सबै आफ्नो जात हुने भए सबै मानव एकै जातका हुन् जरुरी छ। अर्को कुरा आफ्नै मानस पुत्री सरस्वती संग प्रेममा पर्ने विवाह गर्ने ब्रह्मा ज्ञानमा उत्तम रहे। काममा उत्तम रहेपनि नैतिक धरातलमा विधानमा रहन नसकेकोले विष्णु र महेश्वर, स्वयम






सरस्वतीको पूजा हुने गर्दा, ब्रह्मा संसारको सृष्टिकर्ता भए पनि धार्मिक परम्पराहरूमा उनको पूजा सीमित मात्रामा हुन्छ। स्वयम्भुव र विश्वकर्माको भने व्यापक पूजा हुन्छ।

सामाजिक यथार्थता स्वीकार्य सक्ने क्षमता मात्र सनातनमा छ। त्यसैले सनातन उत्कृष्ट छ। अर्को कुरा शान्ति, सुरक्षा, न्याय आदि भगवानका कार्य क्षेत्र मानिन्छ। आत्मा ज्ञान विना स्वयम भगवान समेत आफ्नो जीवन वाट मुक्त हुन सम्भव हुँदैन। मुक्ति प्राप्तिको स्वयम भगवान समेत मानव चोला लिएर जन्मिएर, उत्तम पुण्य कर्म गरी आत्मा ज्ञानी भए पछि मात्र मुक्ति प्राप्त गर्न सक्ने अवधारणा देखिन्छ।मानिसलाई आफ्नो पिडा वाट मुक्त गर्ने नियतमा विकसित रहेको वेदमा त्यही अवधारणा











अनुरूप मन्दिर पूजाको खासै उल्लेख रहेको छैन। मन्दिर पूजा मार्फत छूत अछुतको मानव मानव बिचमा उँचो निचोको अवधारणा लाध्ने अपराधको कहीँ कतै वेद अनुरूप स्वीकार्य रहेको देखिँदैन। वेदमा भेटिने यज्ञमा छूत अछुतको अवधारणा कहीँ कतै भेटिँदैन।

यज्ञ भनेको शरीरको साङ्केतिक कर्म स्थलको साङ्केतिक पूजन प्रक्रिया हो। यज्ञ आत्मा ज्ञान लिन आफ्नै अन्तर्मनको यात्रा तर्फ लाग्न हरेक व्यक्ति लाई प्रेरित गर्ने सामूहिक सामाजिक कार्य हो। यज्ञ जीवनको अनुभूति लिने धेरै उपाय मध्येको एक उपाय हो। कुनै पनि पवित्र कार्य वा कर्तव्यको पुरा गर्ने कर्म लाई यज्ञ भनिन्छ। जसले अरूलाई लाभ पुर्‍याउँछ। समाज कल्याणका लागि समर्पित हुन्छ।











गीताले पनि यज्ञलाई कर्म (कर्तव्य) र निस्वार्थ सेवाको रूपमा परिभाषित गरेको छ। कुनै पनि कार्य जुन निस्वार्थ, समाज वा मानवताका लागि समर्पित हुन्छ, त्यो यज्ञ हो। उदाहरणको रूपमा विद्या यज्ञ (ज्ञानको प्रसार गर्ने कार्य), प्राण यज्ञ (जीवन रक्षा गर्ने वा परोपकारका कार्यहरू) र तपस्याको रूपमा गरिने तप, उपवास आदि यज्ञ हुन्।

वेदको मान्यतामा हरेक मानिस जन्मँदा शूद्र हुन्छ। जीवनको सिकाइ,भोगाइ, अनुभूतिर ज्ञानले उसलाई बिस्तारै वैश्य, क्षत्रिय,र ब्राह्मण तहमा पुग्न योग्य, ज्ञानी मानव बनाउँदै जान्छ। उसको पेसा अर्थात् करियर भने उसको ज्ञानको स्तर र कर्मको रोजाइमा निर्भर गर्दछ। यसै अनुसार,आफ्नो जीवनमा ऊ शूद्र, वैश्य, क्षत्रिय,वा ब्राह्मण पेसामा













आफूलाई समाहित गर्न पुग्दछ।

परम्परागत रूपले मानिसका फरक-फरक पेशाको वर्गीकरणलाई समाजमा "फुटाएर राज गर" भन्ने नियतले पछि जातपातको रूपमा छूत-अछूतको वर्ण व्यवस्था लाद्ने पाखण्ड भयो। वेदको मान्यता विपरीतका कुरालाई वेदको कुरा भनेर समाजमा भ्रम छरिने कार्यलाई वेदले पाखण्ड भनेर परिभाषित गरेको छ। वेद विरोधी कार्यलाई पनि पाखण्ड भनेर नै परिभाषित गरिन्छ।

स्कन्द पुराण र मनुस्मृतिमा रहेको संस्कृतको भनाइ:

**जन्मना जायते शूद्रः**

**संस्काराद् द्विज उच्यते।**

**वेदपाठाद् भवेद् विप्रः**











**ब्रह्म जानाति ब्राह्मणः ।।**

**नेपालीमा यसको अर्थ:**

जन्मले सबै शूद्र हुन्छन्,

संस्कारले द्विज (वैश्य) बन्दछन् ।

वेदको अध्ययनले विप्र (क्षत्रिय) हुन्छन्,

र ब्रह्म ज्ञानले ब्राह्मण बन्दछन् ।

अर्थ:

जन्मले शूद्र: सबै मानिस कम ज्ञान भए पनि अपार सम्भावनासहितजन्मन्छ ।

संस्कारले वैश्य: विज्ञान, सीप, रप्रविधिको ज्ञाता बन्छ ।

वेदको अध्ययनले क्षत्रिय: विज्ञान र अध्यात्मको













ज्ञाता,सुरक्षा विशेषज्ञ बन्दछन् ।

ब्रह्म ज्ञानले ब्राह्मण: आत्मज्ञान प्राप्त गरेका मार्गदर्शकबन्दछन् ।

**प्रश्न: के विप्र भनेको क्षत्रिय हो?**

विप्रको प्रस्ट अर्थ क्षेत्रीय / क्षत्रिय हुँदैन। त्यो अर्ध सत्य अनुवाद हुने छ। अव प्रश्न उठ्छ कि ! माथि अनुवादमा किन त्यसरी भनिएको होला ?

वैदिक साहित्यमा मैले विप्र शब्दका विभिन्न अर्थहरू पाइरहेँ। विप्रलाई कुनै पनि गहिरो ज्ञान राख्ने विद्वान व्यक्तिको रूपमा पनि लिइन्छ। जसले आध्यात्मिक वा शास्त्रीय ज्ञानमा प्रवीणता हासिल गरेको छ, त्यस्तो व्यक्तिलाई पनि विप्र भनिन्छ। त्यसै गरी, कुनै पनि विषयमा गहिरो ज्ञान राख्ने ज्ञानी व्यक्तिलाई













पनि विप्र भनिन्छ। धार्मिक कार्यहरूमा संलग्न भएका ब्राह्मण पुरोहितलाई पनि विप्र भनिन्छ। समग्रमा, विप्र शब्दले ज्ञानी, विद्वान, र धार्मिक तथा शास्त्रीय ज्ञान भएका व्यक्तिलाई जनाउँछ। वेद र शास्त्रहरूको ज्ञानमा पारङ्गत ब्राह्मणलाई विप्र भनिन्छ।

त्यस्ता ब्राह्मण जो व्यवहारिकतामा बढी केन्द्रित छन्, विशेष गरी विज्ञान, कला, इञ्जिनियरिङ्ग, सङ्गीत, युद्ध र प्रशासनिक कौशलमा दक्ष छन् र वैराग्यबाट केही टाढा रहेका छन्, तिनलाई विप्र भनिन्छ। तिनीहरू विद्या र अविद्याको क्षेत्रमा व्यवहारिक रूपमा समर्पित छन् र आत्मज्ञान प्राप्त गरेपछि पनि वैराग्यमा नलागेर आफ्नै दैनिक व्यवसायमा संलग्न रहेका छन्।













वैदिक वर्ण प्रणाली भित्र आएपछि क्षत्रिय भन्नाले योद्धा र शासक वर्गलाई जनाउँन थालेको देखिन्छ। उनीहरूको जिम्मेवारी समाजमा सुरक्षा, शासन र न्याय कायम राख्नमा सीमित भएको देखिन्छ। सुरक्षा भनेको केवल भौतिक, सामाजिक, राजनैतिक, मानसिक र मनोवैज्ञानिक मात्र नभएर धार्मिक र आध्यात्मिक पक्षसँग पनि सम्बन्धित हुन्छ। त्यसको लागि ब्राह्मण तहको ज्ञान भएका व्यक्तिको पनि आवश्यकता हुन्छ, तर वैराग्यमा नभई।

त्यसैले, केही सन्दर्भहरूमा, विशेष गरी क्षेत्रीय परम्परा उल्लेख गर्दा, कुनै व्यक्तिले उच्च स्तरको आध्यात्मिक ज्ञान र नैतिक आचरण प्राप्त गरेको छ भने, चाहे तिनीहरू जुनसुकै वर्णका हुन्,









तिनीहरूलाई पनि "विप्र" भनिएको पाइन्छ।

परम्परागत रूपमा क्षत्रिय रहेका राजा र शासकहरू, जो ज्ञानी र आध्यात्मिक झुकाव राख्थे, तिनीहरूलाई पनि विप्र भनेर चिनिन थालेको देखिन्छ। यस अर्थमा, ऋचामा विप्र क्षेत्रीय सन्दर्भमा प्रयोग भएको हो। शब्दको शाब्दिक अर्थ भन्दा प्रयोग भएको सन्दर्भको भावार्थ उल्लेख गरिएको हो।

# ब्रह्म राक्षसबाट सचेत रहन आग्रह

ऋग्वेद ८/३३/१९ मा लेखिएको छ:

**अ॒धः पंश्यस्व॒ मोपरिं संत॒रां पांद॒कौ हंर ।**









**मा तें कशप्ल॒कौ दृंश॒न्त्स्त्री हि ब्र॒ह्मा ब॒भूविंथ ॥**

**॥ ऋग्वेद ८/३३/१९ ॥**

तिजको अवसरमा वेदका प्रकाण्ड विद्वान भनी चिनिने केही व्यक्तिहरू वाट प्रवचनको रूपमा आएको उक्त ऋचाको व्याख्या यस प्रकार छ।

“हे नारी तिमीले ठाडो शिर गरेर उँभोतिर हेर्ने होइन। शिर नुहाएर तल हेर। नारीले ठाडो शिर गरेर अभिमान गरेको सुहाउदैन। तिमीले तिम्रो अनुहार र साप्राहरु तिम्रा पति बाहेक अरुलाई देखाउनु उचित होइन। तिमी घरकी कोठीमा सिमित स्वामिनी हौँ। त्यसैले अभिमान नराखी तिमीलाई जस्तो गरि रखिएको छ त्यसरी नै चुपचाप जीवन यापन गर।“




सोही प्रवचन पश्चात् गुरुजीहरूको व्याख्या यस प्रकारले सार्वजनिक रूपमा आएको छ।

“यो अत्यन्त महत्त्वपूर्ण मन्त्र मार्फत वैदिक ऋषिहरूले घरको कोठरीको स्वामीमा सिमित हुने कर्म लिएर आएको नारि शालीनता रहित तथा अभिमानी रहित जीवनमा रहनु पर्दछ भन्दै नारीहरू लाइ सरल र नोकर रहेर जीवन यापन गर्न सल्लाह दिएका छन्। नारी हरु खुसी मनाउंदै गर्दा वैदिक ऋचाहरुले हाम्रो धर्म, संस्कृति, परम्पराहरूको मर्यादा ननाघ्न आदेश गरेको छ। आनन्द प्राप्ति पुरुष मात्रको साझा लक्ष हो। घृणावादीका लागि भने यो ऋचाको कुराले निकै पोल्छ। तर धार्मिक गृहस्थी जीवनमा विश्वास गर्ने स्वास्नी मान्छेका लागि यो अत्यन्त महत्वपूर्ण संदेश हो।“





ऋग्वेद ८/३३/१९ ऋचाको अर्थ बुझ्न ऋचा कुन सन्दर्भको कुरा बताउन लेखिएको हो भन्ने बुझ्न जरुरि हुन्छ। ऋग्वेद ८/३३/१९ को देवता इन्द्र हुन्। यो मन्त्रको ऋषि मेधातिथि काण्व हुन्। वैदिक ऋषि वा सन्तको नाम कण्वलाई वैदिक साहित्यमा चलायमान सुन्दर रथहरू गुड्ने प्रक्रियाको रूपमा प्रयोग गरिन्छ, जसले विभिन्न देवताहरूको कार्यलाई जनाउँछ।

यसमा मुख्यत: इन्द्र (आत्मबलका देवता), अग्नि (निर्माणका लागि आवश्यक शक्तिको स्रोत, जस्तै: पाचन क्रिया मार्फत शक्ति उत्पादन गर्नु, ठूलो अणुहरूलाई साना अणुहरूमा तोड्ने प्रक्रिया अर्थात् क्याटाबोलिजम, साना अणुहरूबाट ठूलो अणुहरू निर्माण गर्ने प्रक्रिया अर्थात् एनाबोलिजम, प्रतिरक्षा







प्रणाली निर्माण आदि), र मरुतहरू (विनाशको शक्ति, जस्तै: म्याक्रोफेज र न्युट्रोफिल्स जस्ता प्रतिरक्षा कोषहरू मार्फत अवाञ्छित कणहरू, ब्याक्टेरिया, मरेका वा क्षतिग्रस्त कोषहरू, र अन्य बाहिरी अनावश्यक पदार्थहरूलाई घेरेर बाहिर फाल्ने फागोसाइटोसिस प्रक्रिया; आफ्नै क्षतिग्रस्त वा अनावश्यक घटकहरूलाई विघटन गरी पुन: उपयोग गर्ने ऑटोफ्याजी प्रक्रिया; क्यान्सर बन्न सक्ने क्षतिग्रस्त वा खतरनाक कोषहरूलाई हटाउन कोषहरूले आफैँलाई नष्ट गर्ने एक व्यवस्थित र नियन्त्रित एपोप्टोसिस प्रक्रिया; कोषहरूले अनावश्यक सामग्री वा फोहोर उत्पादनहरूलाई कोषको झिल्ली बाहिर निकाल्ने एक्सोसाइटोसिस प्रक्रिया आदि) को क्रमबद्ध सामूहिक कार्यलाई













जनाउँछ।

यस ऋचाको छन्द अनुष्टुप हो। ऋचामा ३२ अक्षरको छन्द जसमा चार पद र प्रत्येक पदमा ८ अक्षर हुन्छ त्यसलाई अनुष्टुप् छन्द भनिन्छ। ऋचाको अर्थ बुझ्ने क्रममा अनुष्टुप छन्दले एक भन्दा धेरै शक्तिको संयुक्त सहकार्य वारे बोलिएको सन्देस तर्फ इंकित गर्दछ।

जप गर्दा यो मन्त्रको स्वर गान्धार हो। जप भनेको कुनै पनि सिदान्त कसरि व्यवहारमा लागु गर्ने भन्ने निर्देशिका हो।

व्यवहारमा गान्धार शब्द सात स्वर (सप्तक) संगीत स्केलको तेस्रो स्वरलाई जनाउँछ। मतलब सात स्वरहरू - सा, रे, गा, म, प, ध, नी मध्येमा गान्धार









"गा" स्वर हो जसको आफ्नै विशेष ध्वनि, आवृत्ति र भावनात्मक अभिव्यक्ति हुन्छ। त्यसैले संगीत लाइ गाना भनिएको हो। यो संगीतको चुरो हो।

व्यवहारिकतामा ऋचाको मूल सन्देशले व्यक्तिको व्यक्तित्वमा आफ्नो सांस्कृतिक, आध्यात्मिक परम्परागत सिप, कला र क्षमताको धरोहर अभिवृद्दी गर्ने आन्तरिक क्षमताको प्रस्फुटन हुने कार्य तर्फ संकेत गर्दछ।

ऋग्वेद ८/३३/१९ को शब्द शब्दको सामान्य अर्थ यस्तो हुन्छ:

अ॒धः (adho) - अन्तर्मुखी भएर तल आफु भित्र

पं॑श्यस्व (pashyassva) - ध्यान पुर्वक हेर

मोपरिं (mopari) - माथिको बाहिरी संसार,










शरीरको बाहिरी आवरणमा

संत॒रां (santarām) - तल, माथि, वोरी परि, अगाडी, पछाडी

पा॑द॒कौ (pādakau) - हिँड डुल गर्ने (मन चलाउने समेतको अर्थमा)

ह॑र (hara) - स्थिर राख (चञ्चल हुन् छोडेर ध्यान स्थिर राख भन्ने अर्थमा)

मा (mā) - त्यसो नगर (अनुशासित बन भन्ने अर्थमा)

तें (te) - तिम्रो लागि

कशप्ल॒कौ (kashaplako) - तप अर्थात् तपस्या रुपी स्व-अनुशासनमा बाँध्ने दृढ सङ्कल्प रुपी वस्त्र





दृंशन्त्स्त्री (drishantsstrī) - प्रकृति वा नारी रुपी उत्पादकत्व युक्त क्षमताले परिपूर्ण शक्तिको रूपमा प्रकट हुने

हि (hi) - अवस्थाको को निस्सन्देह निश्चितता दिन्छ।

ब्रह्मा (brahma) - ब्रह्माण्डको सृजनात्मक शक्तिको प्रदायक शारीरिक, मानसिक, मनोवैज्ञानिक तथा आध्यात्मिक ज्ञान तथा अनुभूति मार्फत मुक्ति प्राप्तिको अवसर

बभूविंथ (babhuvitha) - तिमीलाई प्राप्ति हुन्छ।

ऋग्वेद ८/३३/१९ को भावार्थ: “जब तिमी आफ्नो ध्यान पूर्ण रूपमा आफू भित्रको अन्तरआत्मामा




वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे


केन्द्रित गरेर ध्यानको गहिराइमा पुग्न सक्छौ, तब तिम्रो बाहिरी संसार र आवरणले (इन्द्रियगत अनुभूति) तिमीलाई विचलित गर्न सक्दैन। अविचलित ध्यानले तिम्रो सोच र मनलाई स्व-नियन्त्रणमा राखेर तिमीले आफूलाई आफ्नो स्व-अनुशासनमा बाँध्न सक्छौ। यसो गर्न सक्दा तिम्रो आफ्नै आत्मबल, अग्निशक्ति र मरुतगण शक्तिको आपसी सहकार्यले तिमीलाई मुक्ति प्राप्तिको लागि अनिवार्य पूर्वाधारको रूपमा जरुरि हुने शारीरिक, मानसिक, मनोवैज्ञानिक तथा आध्यात्मिक ज्ञानको प्राप्ति तथा त्यसको अनुभूति गर्न आवश्यक पर्ने सृजनात्मकताले (जसलाई प्रकृति शक्ति वा नारी रूपी उत्पादकत्व क्षमताको शक्ति भनिन्छ) तिमीलाई भरिपूर्ण बनाइदिनेछ। सो अवसरको

क्रमिक, क्रमबद्ध, व्यवहारिक सदुपयोग मार्फत तिमी आफ्नो जीवनको उद्देश्य प्राप्तिको सत्मार्गमा सहज अघि बढ्न सक्नेछौ।“

पवित्र वेदको सन्देस मनखुसी गलत रुपमा गलत व्यख्या गर्नुले समाजमा वेद प्रति घृणा फैलाएको छ। वेदले भन्दै नभनेको र वेदले वर्जित गरेका कुराहरू वेदको भनाइ भनेर समाजमा पुगेको छ। जुन वेद प्रति घृणा फैलाउने सामाजिक अपराध हो। वैदिक सनातन धर्मको सुरक्षा चुनौती यस्ता प्रकारका कच्चा व्याख्याहरूले थपिदिने हुँदा यस्ता ब्रह्म राक्षसी कार्यहरू रोकिन जरुरी छ।





# नयाँ पुस्ता र वेद

जव सम्म हामी संसारमै प्रतिस्पर्धा गर्न सक्ने ज्ञान, सीप र प्रविधिको पहुँच गाउँघरमै रहेर अध्ययन अध्यापन गर्ने नेपालका भविष्यका कर्णधार हाम्रा बालबच्चा सम्म पु¥याउन सक्दैनौं तब सम्म मुलुक सर्वांगीण विकास सहित अघि बढ्ने छैन ।

दुनियाँमा विज्ञानले मारेको आश्चर्यजनक फड्कोसहित धनी र गरिब राष्ट्रबीच विज्ञान र प्रविधिमा रहेको पहुँच र ज्ञानको दूरीले कुनै एक मुलुकमा रहेका बालकलाई अर्को मुलुकमा रहेका बालकको भन्दा ज्ञान र सीपमा सहज पहुँच मिलिरहेको छ । ज्ञान र सीपमा सहज पहुँच पुग्दैमा विकसित मुलुकमा हुर्केका बच्चाहरू अविकसित







मुलुकमा हुर्केबढेका बच्चाभन्दा धेरै तिक्ष्ण र कामयाबी बनिरहेको अवस्था भने छैन ।

विकसित मुलुकमा स्कुल स्तरको दस जोड दुई शिक्षा प्राप्त गरिसकेपछि रोजगारीको अभाव रहेमा मात्र उच्च शिक्षा विद्यार्थीको रोजाइमा पर्ने गरेको छ। नेपाल जस्ता अविकसित र अल्प विकसित मुलुकमा रोजगारी प्राप्तिका लागि उच्च शिक्षामा होमिने प्रवृत्ति देखिन्छ सबै विकसित, अर्धविकसित र अविकसित मुलुकमा रहेका सैद्धान्तिक प्रकृतिका उच्च शिक्षा, प्राविधिक शिक्षा र प्राविधिक तालिम दिने संस्थाहरू अबको नयाँ पुस्ताको अत्यन्त जरुरी स्वरोजगारको अवसर जुटाउनका लागि जरुरी रहेको प्राविधिक ज्ञान र सीप उपलब्ध गराउन असमर्थ बनिरहेका छन्।













आजविश्वकै उत्कृष्ट दाबी गरिने तालिम केन्द्रहरू पश्चिमी मोडलका छन्। ज्ञान (Knowledge) सिकाउने ती केन्द्रहरू बजार प्रतिस्पर्धाले व्यवसाय उत्कृष्ट बन्छ भन्ने अवधारणा आत्मसात गरेका छन्। स्वरोजगार योजना सुरु गर्न बुद्धिको (Wisdom) आवश्यकता हुन्छ । तालिम केन्द्रमा धेरै थरीका ज्ञान प्राप्त गरिरहेका विद्यार्थी अनुभवकोअवसरबाट प्राप्त हुने बुद्धिको विकास हुने अवसरबाट भने प्रायः वञ्चित बनिरहेका भेटिन्छन्।

आजको बजार हेरेर शिक्षण संस्थाहरूले उपलब्ध गराउँदै आएको रोजगारमूलक जनशक्ति उत्पादन कार्यक्रमका उपजहरू बजारमा उपलब्ध कृत्रिम बुद्धिमत्ता (Artificial Intelligence) युक्त रोबोटसँग प्रतिस्पर्धामा उत्रन नसकेर बेरोजगार







बनिरहेका छन्। एआई, बिगडाटा र रोबोटका कारण आज उपलब्ध धेरै काम भविष्यमा मेसिनले गर्ने छन्। विकसित नयाँटेक्नोलोजीले धेरै सफल व्यक्ति, चाखलाग्दा रोजगारीका अवसर सिर्जना हुने छन्।

वल्ड इकोनोमिक फोरमले सन् २०१७ तिर सार्वजनिक गरेको प्रतिवेदनले हाल संसारभर प्राथमिक तहमा पढिरहेका बालबालिकामध्ये ६५ प्रतिशतले हाल बजारमा उपलब्ध नै नभएका क्षेत्रमा रोजगारी गर्नेछन् भनी यकिन गरिदिएको छ । आजको १० वर्ष पछाडि हामीले हाल स्कुलमा पढाइरहेका बच्चाहरू के काम गर्नेछन् भन्ने संसारलाई नै अन्दाज नभइसकेको अवस्थामा कस्तो शिक्षा उनीहरूका लागि जरुरी छ भन्ने उत्तर






वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे


विज्ञानसँग छैन। स्कुलहरूसँग ‘यो शिक्षा त कसो काम नलाग्ला र!’ भनी हचुवाको पाठ्यक्रम पढाउनुको विकल्प छैन ।

एकातर्फ हार्वर्ड विश्वविद्यालय जस्ता तालिम केन्द्र छन्। विशाल तथा बृहत् वस्तु वा सेवाको उत्पादनको काममा आउने प्रकृतिका बृहत्तर ज्ञान भएका जनशक्ति पैदा गरिरहेको छ । परिवर्तित बजार माग पूर्ति गर्न सक्षम बजारमा उपलब्ध रहने भोलिका इनोभेटिब उद्योगहरू कस्टम डिजाइनमा आधारित उच्च प्रभावकारिता दिने ससाना उद्यमका क्लस्टरका रूपमा रहने छन् । जसरी रकेटको इन्जिन जडित ट्याक्टरले निश्चित दुर्घटना निम्ताउँछ, त्यस्तै बृहत्तर ज्ञान भएका जनशक्तिबाट ससाना उद्यमका क्लस्टर सञ्चालन हुने अवस्था






रहन्न।

अन्य विश्वविद्यालय र तालिम केन्द्रका उत्पादनहरू बजारका हिजोका सीप, ज्ञान र प्रविधिबारे जानकार त हुने छन् तर तत्कालीन बजारको माग पूर्ति गर्ने व्यावसायिक बुद्धिमत्ता समेतमा निपुण रहनेमा शंका गर्ने ठाउँ छ।

हार्वर्ड, येल जस्ता युनिभर्सिटीले धेरै मानिसको सफलताको कथा देखाएर आफ्ना विद्यार्थीलाई कसरी सफल हुने भन्ने तालिम दिन थालेको निकै धेरै भयो। अर्काको सफलताको कथाबाट विद्यार्थी सजिलै सफल हुने अनुमान उद्यमशील जीवनका आधारभूत कठिन भन्दा कठिन चुनौती पार गर्ने कडी बन्न सकेन। अर्काको असफलता र असफलताले सिकाएको अनुभूति न सँगालिएको











शिक्षण प्याकेजले संसारमा उथलपुथल दिने शिष्यहरू दिन सकेन।

कुनै पनि काम जब सुरु गर्नु हुन्छ तब पहिलो दिनको पहिलो चोटि बाटै त्रुटिरहित पूर्णता सहित गर भन्नेहरू सिद्धान्तमा मात्र आकर्षक बने । गल्ती गर्ने भएर नै हामी मानिस भएका हौँ। जीवनमा गरिएका गल्तीबाट सफल हुने तरिका र आत्मविश्वास प्राप्त हुन्छ । गल्ती गर्न हैन, गल्तीबाट सिक्न नसकेर पुनः त्यही गल्ती दोह¥याउने मूर्खताबाट बच भन्ने मन्त्र बोकेकाले बजारमा खलबलीपूर्ण सफलताको नतिजा दिन सफल बने।

परम्परागतरूपका वस्तु वा सेवाको बिक्रीको नियतले स्थापित गरिएका व्यवसाय बदलिंदो बजार माग अनुरूप आफूलाई बदल्दै स्थायी रूपमा व्यवसाय





॥ श्री गणेशाय नमः ॥





सञ्चालन गर्ने नियतमा व्यवसायबाट विस्थापित बने। बिक्री प्रवद्र्धन मार्फत वस्तु वा सेवाको बजारीकरण सिकाउने शिक्षा पद्धति व्यवसाय प्रवद्र्धनका लागि आपसी विश्वास, आत्मीयता र भावनात्मक सम्बन्ध विकासमा गर्नुपर्ने विचारको स्कुल बोकेका शिक्षा पद्धति सामु पुड्को साबित भए।

भनिन्छ बिहानीले दिनको संकेत गर्छ । भोलिको हाम्रो पुस्ताको रोजाइ यकिन नै गरिरहन नसक्दा पनि के हुनेछ भन्ने लगभग संकेत भने हामीलाई प्राप्त छ। स्कुलमा रमाउने हाम्रो आउँदो पुस्ताआजको कागज र सिद्धान्तमा सीमित हुने ज्ञानमा जकडिएको तालिम प्रविधिमा अल्झिने र रमाउने छैनन्। आफ्नो मन, वचनर कर्म आफूले









छानेको व्यवसायको सफलताका लागि एकीकृत र समर्पित बन्ने छन् ।

नयाँ युग कृत्रिम बुद्धिमत्ताको (Artificial Intelligence) युग हुँदै छ । त्यो युग जहाँ मानिसको पहुँचमा पुगेका सम्पूर्ण गुणबाट प्राप्त गर्न सकिने फाइदाहरू मेसिनको प्रयोग बाट समाजले लिन सक्नेछ । नयाँ युग जहाँ कसैले अर्का ले भन्दा चाँड़ो नयाँ सिद्धान्त वा प्रविधि पढ्ने वा हेर्ने अवसर पाएकै भरमा अर्को भन्दा बुद्धिमान वा ज्ञानी कहलिने अवस्था रहने छैन ।

न कुनै विद्यालय वा विश्वविद्यालयमा पुगेर अध्ययन गर्ने अनुकूलता मिलेकै भरमा पढेको मानिस विद्वान् वा बौद्धिक र अनुकूलता नमिलेको व्यक्ति अज्ञानी वा अबुझ हुने अवस्था कायमनै रहिरहने छ ।








पब्लिक डोमेनमा रहेका किताबी, कागजी, इन्टरनेट र विज्ञानको ज्ञानलाई मेसिनको सहयोगमा सजिलै मानिसको दिमाग र जरुरत हुने स्मार्ट डिभाइसलाई सहजै उपलब्ध हुने युग हुने छ भोलिको आर्टिफिसियल इन्टेलिजेन्सको (एआई) नयाँ युग ।

प्रत्येक नयाँ प्रविधिले नयाँ सामाजिक समस्या र अरू बढी मानवीय गुणको जरुरत हुने प्रकृतिका मानव जनशक्तिको माग गर्नेछ । एआई युगको मानिसको जीवनशैली कम समय काम गर्ने र धेरै समय हिँडडुलर भ्रमणमा खर्चिने प्रकारको हुनेछ ।

सबैको हित, स्वस्थ प्रतिस्पर्धाको संस्कृति र स्वअस्तित्वको स्वीकार्य समेटिएको नीतिगत अवधारणाभित्र रहेरअर्काको असफलताबाट सिकेर दीर्घकालीन सफलताको सिद्धान्त पहिल्याइने छ ।









सुरुमा नौलोक्षेत्रमा असफलता हात लाग्नेछ । हरेक असफलता नयाँ उद्यमहरूसिर्जना गर्ने व्यावसायिक उत्कृष्टता भित्र्याउने कडी बन्नेछ। विज्ञानका ज्ञानका (Knowledge) उपलब्धिहरू एआईभित्र अटाउने छन्। रोजगारीमूलक मानवीय बुद्धिको (Wisdom) लागि वेद जस्ता ज्ञानको सहयोग लिइने छ ।

## वेदमा विज्ञानको भूमिका

प्राकृतिक विज्ञानमा भौतिक शास्त्र भनेर चिनिने फिजिक्स पदार्थ, ऊर्जा र प्रकृतिको आधारभूत शक्तिहरूको अध्ययन गर्ने विधा हो। फिजिक्सले ब्रह्माण्डका सानो कण देखि ठुला आकाशगङ्गाहरू








आदिको निर्माण र सह अस्तित्व माथि आधारभूत शक्तिहरूले व्यवहार कस्तो हुने गर्दछ भनी चासो लिने गर्दछ। जस्तै: न्युटनको गतिको नियमको आधारमा खट्टाले किक हानिएको फुटबलको प्रक्षेपण बारे भविष्यवाणी गर्न न्युटनको गतिको नियम सहयोगी बन्दछ।

प्राकृतिक विज्ञान अन्तर्गत कै भौतिक विज्ञानको एक शाखाको रूपमा रहेको क्वान्टम भौतिकी भनेर चिनिने क्वान्टम फिजिक्स भने पदार्थको परमाणु र उप-पारमाणविक स्तरहरूका निर्माण सामग्रीहरूको रूपमा भेटिने फोटोन, इलेकट्रोनर सूक्ष्म शक्तिहरू (क्वार्क, लेप्टोन, ग्लुवोन, फ़ेर्मिओन बोसोन, फ्लेभर आदि) को व्यवहार र अन्तरक्रिया वारेको ज्ञान लिनमा केन्द्रित हुन्छ। उदाहरणको लागि क्वान्टम









फिजिक्सले डबल-स्लिट प्रयोग मार्फत इलेकट्रोन जस्ता कणहरूले एकै समयमा तरङ्ग र कण दुवैको विशेषताहरू प्रदर्शन गर्न सक्ने खुबी राख्दछ भन्ने ज्ञान दिन्छ। जस्तै: इलेकट्रोनहरू डबल-स्लिट मार्फत यात्रा गर्ने क्रममा अवलोकन कर्ताको लागि त्यसले आफ्नो कणको रूप प्रदर्शनगर्दछ र अवलोकन कर्ता नहुँदा त्यसले आफूलाई तरङ्गको रूपमा देखाउने व्यवहार गर्दछ भन्नेक्वान्टम फिजिक्सले यकिन गर्न सकेको छ।

विज्ञानमा चासो राख्ने हरूलाई क्वान्टम फिजिक्स मेटाफिजिक्सको दर्शनको ज्ञान विना अपुरो र अधुरो बनिदिन्छ। दर्शनको एक शाखाको रूपमा रहेको मेटाफिजिक्सलाई अध्यात्म संग तुलना गर्न सकिन्छ। अध्यात्म लाई फिजिक्स संग जोडी हेर्दा








त्यसलाई क्वान्टम मेटाफिजिक्स भन्न सकिन्छ। जसले प्राकृतिक विज्ञानको अस्तित्व, आधारभूत प्रकृति बारे अन्वेषण गरी त्यसको बारे अन्तिम सत्यको उजागर गर्न प्रयास गर्दछ। भौतिक विज्ञानको आजको दायरा भन्दा बाहिरका जिज्ञासाहरू जस्तै ब्रह्माण्डको उद्देश्य, चेतनाको प्रकृति आदि जस्ता मेटाफिजिकल पक्ष क्वान्टम मेटाफिजिक्सको सन्दर्भ हो। जस अन्तर्गत मेटाफिजिकल पक्षहरू जस्तैः स्थान, दिशार समयको प्रकृति; ईश्वरको (परमात्मा) अस्तित्व, आत्माको अस्तित्व, चेतना, माया, अहङ्कारर जीवनको सम्भावना जस्ता विषयहरूमा चासो लिएर खोजी गर्ने गरिन्छ।

समग्रमा भौतिक शास्त्रले अवलोकन योग्य घटना र









भौतिक ब्रह्माण्ड (जस्तै, गुरुत्वाकर्षण) लाई नियन्त्रित गर्ने नियमहरूको अध्ययन गर्दछ। क्वान्टम फिजिक्सले माइक्रोस्कोपिक स्तरहरूमा कणहरूको व्यवहारको अन्वेषण गर्दछ। जस अन्तर्गत गैर-सहज प्रकृतिका कणहरूको भौतिक वास्तविकताको प्रकृतिको चरित्र वारेका (जस्तै, कणतथा तरङ्गका द्वैत चरित्र) नियमहरूको अध्ययन हुने गर्दछ। मेटाफिजिक्स अन्तर्गत भने अनुभवजन्य विज्ञान जस्तैः भौतिक वास्तविकताको प्रकृति भन्दा बाहिरको अस्तित्व र वास्तविकताको (अद्वैत) बारेका आधारभूत प्रश्नहरूकोअनुसन्धान गर्दछ। त्यसका सिद्धान्तहरूको नियमहरूको अध्ययन गर्दछ।

वेद र विज्ञान बारे चर्चा गर्दा आजका हाम्रा नयाँ पीढी सम्म पुग्न नसकेको सदियौँ देखि नियमित










चलिरहेको सांसारिक यथार्थ बारे चर्चा गर्नु अनिवार्य हुन्छ। जुन कुरा हाम्रा विज्ञानका विज्ञ भनिएका ठुलो सङ्ख्यामा रहेका वर्गको दिमागमा त घुस्न सकेको देखिँदैन नै, स्वयम आफूलाई वेदका गुरु ठानिरहेकाहरूमा पनि त्यो बारे कुनै महसुस भइरहेको भेटिँदैन। आज सम्मको इतिहासमा जब जब कुनै वैज्ञानिकले वेद वा वेदमा आधारित स्मृतिहरूको गहिराइमा भनिएका ज्ञानहरूको नियतको जानकारी प्राप्त गरे तव वेदको ज्ञानले उक्त वैज्ञानिकको विज्ञानको यात्रालाई सहज गर्ने पथ प्रदर्शन गरेको अनुभूति दियो।

उक्त वैज्ञानिक परीक्षण शालामा रहेर आफ्नो नयाँ खोज बारे अनुसन्धानमा एकाग्र रहँदा उसले पहिचान गरेको हाइपोथेसीस सत्य हुने













सम्भावनाको रहेको वा नरहेको भन्ने मानसिक स्तरमा यकिन गर्न अर्थात् मनोवैज्ञानिक भेलिडेसन गर्न वेदको ज्ञानले अत्यधिक सहयोग गरेको अनुभूति गऱ्यो। वेदले दिएको सङ्केत वाट उत्साहित बनेको वैज्ञानिक परीक्षणको आफ्नो प्रारम्भिक हाइपोथेसिसको मान्यता र प्रोटोटाइपलाई रियल टाइम भनिने व्यवहारिक यथार्थ जब उसले परीक्षण गऱ्यो तव उसले आफ्नो अनुसन्धानले सकारात्मक नतिजा पाउन सकेको अनुभूति र विश्वासमा भेटियो। वेदको समेत ज्ञान बारे सचेत रहेर हाइपोथेसिसको र प्रोटोटाइप परीक्षणको चक्र वाट गुज्रिएर सफल बनेपछि मात्र वैज्ञानिकको अनुसन्धान प्रमाणित वैज्ञानिक सिद्धान्त सिद्धान्तको रूपमा प्रतिपादन भएको विज्ञानमा नयाँ









सिद्धान्तको रूपमा दर्ज गर्न विज्ञान सफल बनेको देखिन्छ।

यसरी सांसारिक यथार्थमा आज बजारमा भन्ने र सुनिने गरिएको जस्तो गरी विज्ञानले बेदलाइ होइन बरु वेदले विज्ञानलाई जन्म दिन र त्यसको मान्यता लाई प्रमाणित गर्न ठुलो भूमिका खेलिरहेको छ। आजको दिन सम्म समेत मानव अस्तित्व र ब्रह्माण्डको परम वास्तविकताको मेटाफिजिकल प्रश्नमाआफ्नो क्षमता विस्तार गर्न नसकेको विज्ञानको खोजमा लागेका निकै धेरै वैज्ञानिकहरू यही यथार्थ संग परिचित रहेकाले मानव अस्तित्व र ब्रह्माण्डको परम वास्तविकताको पक्ष उजागर गर्ने सम्भावना बोकेको क्वान्टम मेटाफिजिकल पक्ष बारे अत्यन्त धेरै चासो लिने गरेको भेटिन्छ।









२० औँ शताब्दीको सुरुतिर उप-पारमाणविक कणहरूको (क्वान्टम मेकानिक्स) खोजी गर्ने क्रममा विज्ञानले भेट्टाएको ठोस निचोडहरूले कुनै पनि पदार्थको कणहरू न्युटनले बताए जस्तो समय र स्थानमा निश्चित स्वरूपमा रहने बस्तु होइन रहेछ भनी प्रमाणित गरिदिएर भौतिक विज्ञानको जग नै गलत आधारमा उभिएको प्रस्ट गरिदियो। पदार्थको कणहरू निश्चित समय र स्थानमा निश्चित अवलोकन कर्ताको लागि भौतिक रूपमा देखिने तर अवलोकन कर्ताको अनुपस्थितिमा एक तरङ्गको स्वरूपमा हुने वैज्ञानिकहरूले भेटे। यस प्रकारको नयाँ तथ्य बुझ्न सकेका वैज्ञानिकहरू र भौतिक विद्हरू विज्ञानको प्रयोग गरी वा नगरी आफूले नियमित देख्ने गरेको संसारको भौतिक रूप उक्त संसारको वास्तविकता










होइन रहेछ भन्ने प्रस्ट बने। कारण त्यो त जीवको चेतनाले प्रक्षेपण गरेको निश्चित स्वरूपमा देखिने कृत्रिम वास्तविकता रहेछ भन्ने विज्ञानले नै उनीहरूलाई प्रमाणित गरेर देखाई दियो।

अवलोकन कर्ताको रूपमा रहेको मानिसको चेतना कुनै पनि पदार्थको परम वास्तविकता बुझ्न नसक्ने हदमा रहेकोले भौतिक संसारको दायरा भित्र मात्र त्यसले आफ्नो अनुभूतिमा एक कृत्रिम वास्तविकता तैयार गर्ने रहेछ भन्ने वैज्ञानिकहरू र भौतिक विद्हरू लाई प्रस्ट गरिदियो। जुन विचारधारा वैदिक ग्रन्थहरूमा उल्लेख भएको दर्शन र अवधारणा संग हुबहु मिल्दछ।

जसले भन्दछ कि माया रुपी संसारको स्वरूप इन्द्रियको सीमित दायरा भित्रको अपूर्णता भित्र













सीमित रहने गर्दछ। परम वास्तविकता समय र स्थान भन्दा बाहिर रहने गर्दछ।

परम वास्तविकता संसारको भौतिक दायरा भन्दा बाहिर अवस्थित छ। इन्द्रियको क्षमतामा आधारित रहने बुद्धिको शक्तिले संसारको रूप प्रदर्शन गर्दछ। संसारको भौतिक रूप अनुभूति गराउने बुद्धि शक्तिको उपयोगमा भर पर्ने वैज्ञानिक प्रयोगहरूको क्षमता संसारको भौतिक दायराबाहिर जान सक्दैन।

निश्चितसमय, स्थान र इन्द्रियको दायरा भन्दा बाहिरको परम वास्तविकता बुझ्नको लागि बुद्धिमत्ताको वैज्ञानिक उपयोग गरी चेतनाले भौतिक दायरा भन्दा बाहिर अवस्थित वास्तविकताको पहिचान गर्न जरुरी छ। जुन वैदिकज्ञान मार्फत सम्भव छ। क्वान्टम फिजिक्स पछिको क्वान्टम










मेटाफिजिक्सको यात्रा समेत अव त्यही दिशामा मोडिई रहेको छ। परम वास्तविकताको अनुभूतिको क्षणमा मानिसले सत, चित र आनन्दको अनुभूति गर्दछ। यथार्थमा वेद ले विज्ञानको जन्म दिन र वैज्ञानिकले पहिचान गरेको हाइपोथेसिसलाई मनोवैज्ञानिक भेलिडेसनगर्न ठुलो भूमिका खेलिरहेको छ।

क्वान्टम फिजिक्सको डबल-स्लिट एक्सपेरिमेन्टले तपाई हामीलाई भनेको एउटा गहिरो पक्ष के हो भनेकुनै पनि बस्तु निर्माण गर्ने सूक्ष्मतम कणको अस्तित्व सम्भावनाहरूको बादलमा फैलिएररहेको हुन्छ। जुन यहाँ, त्यहाँ र सर्वत्र अवस्थित हुन सक्छ। जब त्यसलाई अवलोकन गर्ने प्रयास हुन्छ, अवलोकन कर्ताको प्रक्षेपणमा त्यो भौतिक रूपमा








वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



देखा पर्दछ। भौतिक रूपमा देखा परेता पनि त्यसको स्वभाव द्वैत चरित्रको हुन्छ। हरेक बस्तुको परम वास्तविकता भने अद्वैत रहन्छ। जसको अन्तिमरूपलाई शक्तिको नामकरण गरिएको छ। जुन एक रूप वाट अर्कोमा सहज परिवर्तन हुन सक्दछ। परिचालित पनि रहन सक्दछ। अपचालित समेत रहन सक्दछ।

ईशोपनिषदमा ईश्वरीय कण भनिने ब्रह्माण्डको आधारभूत ऊर्जाको प्रकृति वारेको व्याख्या भेटिन्छ। यसले जीव र प्रकृति, कर्म वा कर्मको प्रकृति, पाप, पुण्य, मुक्ति, कर्तव्य, निष्काम कर्म, ज्ञान, अज्ञान, तिनीहरूको सम्बन्धको मात्र कुरा गर्दैन तिनीहरूले समग्रतामा मानव अनुभूतिमा दिने पीडा र दुःखबाट बच्ने उपायको बारेमा समेत चर्चा





॥ श्री गणेशाय नमः ॥

गर्दछ। यस उपनिषद्लाई "इसा" नाम दिनुको पछाडि यसको पहिलो श्लोक "इसा" शब्दबाट सुरु हुनुको कारणले हो। "इसा" को अर्थ ईश्वरीय कण अर्थात चेतना हो। ईश्वरीय कण ब्रह्माण्डमा ब्रह्माण्ड चेतनाको रूपमा अवस्थित छ। ईशोपनिषदमा ईश्वरको कणको पहिचान गर्ने र त्यस बारेमा आफूलाई सुसूचित गरी आफूलाई ज्ञानी र सन्तुष्ट राख्ने धेरै तरिकाहरूको बारेमा चर्चा भेटिन्छ।

The Ishopanishad explains the nature of God's particle, called Ishwar, which is the fundamental energy of the universe. It talks about Jiv and Prakriti, the nature of karmas or actions, pap, punya,





mukti, duties, nishkaam karmas, knowledge, ignorance, their correlation, and the method to avoid pains and sorrows. This Upanishad is named"Isha" because its first verse starts with the word "Isha" meaning God's particle. Just as God's particle is present throughout the universe, this Upanishad discusses God's particle in many ways.

**ईशोपनिषद् - १**

**ईशा वास्यमिदं सर्वं यत्किञ्च जगत्यां जगत्।**

**तेन त्यक्तेन भुञ्जीथा मा गृधः कस्यस्विद्धनम् ॥**

Everything in the universe is changing and moving. Energy (God's particle) is present in everything. Utilise what the universe offers with a sense of detachment. Be content and avoid greed. Remember, money, power and property never stick to anyone forever.

ब्रह्माण्डका हरेक चीजहरू नियमित रूपमा परिवर्तनशील र गतिशील छन् । ऊर्जा (ईश्वरीय कण वा तत्त्व) वाट सबै चीजहरू निर्मित छन् । ब्रह्माण्डले तपाइलाई प्रदान गरेको कुरा वा अवसर लाई अ-





लगावको भावनाका साथ उपयोग वा ग्रहण गर्नुहोस् । जे प्राप्त भइरहेको छ त्यसलाई स्विकार्न सिक्नुहोस् ।लोभबाट टाढा रहनुहोस् । याद राख्नुहोस् कि पैसा, सम्पत्ति र शक्ति सदैव कसैसँग टाँसिएर रहिरहँदैन ।

ऋग्वेदकोनासदीय सूक्त:ले संसारको सृष्टिको वर्णन गर्दछ ।

**नासंदासीन्नो सदांसीत्तदानीम्**
**नासीद्रजो नो व्योमापरो यत् ।**
**किमावंरीवः कुह कस्य शर्मन्नंभः**
**किमांसीद्गहंनंगभीरम् ॥१ ॥**

There was nothing, neither



existence nor non-existence, no matter or space. What covered it? Where did it come from? What was its purpose? What protected it? What created the dense, deep cosmic liquidity (space plasma), and how?

सृष्टिको पहिले त्यहाँ न त कुनै अस्तित्व थियो। न त त्यो अस्तित्व विहीनको अवस्थाको नै थियो ।त्यहाँ न त पदार्थ थियो। न कुनै पदार्थ रहन जरुरी हुने खाली स्थान आकाश नै थियो। त्यो एका एक कसरी ढाकियो वा भरियो? त्यसरी भरिने र ढाकिने चिज कहाँ थियो र त्यहाँ कहाँ वाट आयो ? त्यसको उद्देश्य के थियो? त्यसलाई के ले संरक्षण गऱ्यो? त्यहाँ








भरिएको बाक्लो र गहिरो ब्रह्माण्डीय तरलता (स्पेस प्लाज्मा) को निर्माण के वाट कसरीसम्भव भयो?

**न मृ॒त्युरा॑सीद॒मृतं॒ न तर्हि॒ न रात्र्या॒ अह्न॑**
**आसीत्प्रके॒तः ।**

**आनी॑दवा॒तं स्व॒धया॒ तदेकं॒ तस्मा॑द्धा॒न्यन्न प॒रः**
**किञ्च॒नास॑ ॥२ ॥**

There was neither death nor immortality (lifelessness) and nothing to separate night from day (timelessness). That One existed enclosed in nothingness (formlessness); it came from nothing (void). There was only




"that One (consciousness)"and no other.

त्यहाँ न त मृत्यु थियो। न अमरता नै (जीवन विहीनता) निर्जीवता। रातलाई दिनबाट अलग गर्ने केही पनि थिएन (समय विहीनता)। त्यो एक शून्यतामा (आकार विहीनता) रहेको अस्तित्व थियो। जुन शून्यमा (अस्तित्व विहीनता) अवस्थित थियो। त्यहाँ केवल "त्यो एक चिज (चेतना)" थियो। अरू केही थिएन।

**तमं आसीत्तमंसा गूळ्हमग्रेऽप्रकेतं संलिलं सर्वमाइदं।**

**तुच्छ्येनाभ्वपिंहितं यदासीत्तपंसस्तन्मंहिना जांयुतैकं ॥३ ॥**





Darkness-lessness (space-lessness) was covered bydarkness (time-lessness). All this darkness-lessness was hidden intelligence inthe form-lessness of cosmic liquidity (universal consciousness). And ‘that One’was enclosed in nothing. The power of expression (the willingness of expressionfrom non-existence to existence form) arose from 'that One'.

अन्धकार-विहीनता (आकाश विहीनता) लाई अन्धकार (समय-विहीनता) द्वारा ढाकिएको थियो। सबै अन्धकार-विहीनता ब्रह्माण्डीय तरलताको

(विश्वव्यापी ब्रह्माण्ड चेतना) रूप विहीनता रुपी बुद्धिमत्ता थियो। 'त्यो एक चिज (चेतना)' केहीमा बन्द थिएन। स्वतन्त्र सर्वत्र थियो। अव्यक्तको व्यक्त हुने चाहनाको शक्ति (अस्तित्व विहीनता बाट अस्तित्वमा अभिव्यक्त हुने इच्छा शक्ति) 'त्यो एक चिज (चेतना)' बाट प्रकट भयो।

**कामस्तदग्रे समवर्तताधि मनसो रेतः प्रथमं यदासीत्।**

**सतो बन्धुमसति निरविन्दन् हृदि प्रतीष्यां कवयोमनीषा ॥४॥**

A desire arose from thecosmic mind, and the first seed of existence appeared. In this mind, filledwith





desires, the primal seed emerged. Looking deeply into their hearts, the wisecould see the connection between what exists and what does not.

विश्वव्यापी ब्रह्माण्ड चेतना बाट एउटा उत्पन्न भएको इच्छा शक्तिको कारण ब्रह्माण्डको अस्तित्वको निर्माण गर्ने पहिलो बीज देखा पर्‍यो। असीमित चाहना र मनोकामनाले भरिएको उक्त बीजले सामूहिक मनको रूप लियो। बुद्धिमानहरूले प्राकृतिक हृदयको गहिराइमा के अवस्थित छ र के छैन र तिनीहरूको बिचको सम्बन्ध के छ भनी अनुभूतिगर्न सक्दछ।

**तिरश्चीनो विततो रश्मिरेषामधः स्विदासी**







दुपरिंस्विदासी त् ।

रेतोधा आंसन्महिमानं आसन्त्स्वधा

आवस्तात्प्रयंतिःपुरस्तांत् ॥५ ॥

The emergence of powerful forces from the primal seed spread out in a network of lines crossing each other, connecting and holding together all energies above and below. The strong powers combined with the fertile troops create a dynamic interaction where strength operates below and impulse works above. This network of interconnected lines, or grid,













holds all seeds and powerful energies, encompassing the small(microcosmic) forces within and the large (macro) above.

असीमित चाहना र मनोकामनाले भरिएको आदिम मूल बीजबाट एकले अर्कालाई क्रस गर्ने रेखाहरूको नेटवर्कको रूपमा शक्तिशाली ऊर्जाहरूको निर्माण भयो। यसरी निर्मित नजिकैका माथि र तल रहेका सबै ऊर्जाहरूलाई सामूहिक रूपमा जोड्दै आपसी अन्तरक्रिया गर्ने नियमित रूपमा परिवर्तनशील र गतिशील शक्तिको सञ्जालको सिर्जना भयो। जसले आपसमा अन्तर सम्बन्धित रेखाहरू र ग्रिडहरूको शक्तिशाली शक्तिशाली नेटवर्कको निर्माण गऱ्यो।

नेटवर्ककोरूपमा विकसित शक्तिशाली उक्त





नेटवर्कले चेतनाको बीज समाहित ठुला (म्याक्रो-कस्मिक)र साना (माइक्रो-कस्मिक) ब्रह्माण्डीय संयन्त्रको निर्माण गरिदियो।

**को अ॒द्धा वे॑द॒ क इ॒ह प्र वो॑च॒त्कुत॒ आजा॑ता॒ कुत॑ इ॒यंविसृ॑ष्टिः।**

**अ॒र्वाग्दे॒वा अ॒स्य वि॒सर्ज॑ने॒नाथा॒ को वे॑द॒ यत॑ आब॒भूव॑ ॥६ ॥**

No one could say or know when and where the creationof the prominent (macro-cosmic) and small (micro-cosmic) cosmic mechanismsbegan or where the creation would end. After the









creation of the macro-cosmicand micro-cosmic mechanisms came the creation of Shaktis (gods) associated withthe origin of living beings.

ठुला (म्याक्रो-कस्मिक) र साना (माइक्रो-कस्मिक) ब्रह्माण्डीय संयन्त्रहरूको निर्माण कहिले र कहाँबाट सुरु भयो तथा सृष्टि कहाँ पुगेर समाप्त हुन्छ भनेर कसैले भन्न वा जान्न सक्नेअवस्था थिएन। म्याक्रो-कस्मिक र माइक्रो-कस्मिक संयन्त्रहरूको निर्माण भएपछि जीवको अस्तित्वको उत्पत्ति संग सम्बन्धित रहेका शक्तिहरूको (देवताहरू) निर्माण भयो।

**इ॒यं वि॒सृ॑ष्टि॒र्यत॑ आब॒भूव॒ यदि॑ वा द॒धे यदि॑ वा॒ न।**







**यो अ॒स्याध्य॑क्षः पर॒मे व्यो॑म॒न्त्सो अ॒ङ्ग वे॑द॒ यदि॑ वा॒ न वेद॑ ॥ ७ ॥**

The Shaktis (gods) connectedto the origin of living beings has perfected creation. Whether or not and howthe Conscious Shakti (God's Particles) will function to maintain the universedepends on its role. Consciousness (God's Particles) is the supreme power thatcreates, operates, and destroys the universe.

जीवको अस्तित्वको उत्पत्ति संग सम्बन्धित शक्तिहरूले (देवताहरू) सृष्टि निर्माणलाई पूर्णता दिएको छ। चेतन शक्ति (वा ईश्वर) जसबाट यो










सृष्टि भएको हो। यसको नियमित रूपमा कसरी सञ्चालन हुने वा नहुने त्यो कुरा अन्ततः चेतन शक्तिको भूमिकाले नै निश्चय गर्ने गर्दछ। ब्रह्माण्ड निर्माणको सर्वोच्च शक्ति चेतना (वा ईश्वर) नै यसको मूल सञ्चालन कर्ता र विनाश कर्ताको भूमिकामा रहेको छ।

# बुद्धिविलास र क्रिएटिभिटी

बुद्धिविलास मात्र गरेको भरमा आफूलाई संसारकै अब्बल सम्झने कतिपय भुइँफुट्टा वर्ग रचनात्मकता सिकाउन सकिने कुराहैन भन्ने गरेको भेटिन्छ। आफूमा क्रिएटिभिटीका लागि जन्मजात प्राकृतिक देनका रूपमारहेको दुनियाँलाई बताउँदै हिंड्ने त्यो









वर्ग न त वेद न त विज्ञानले नै पुष्टिगर्ने गरी अप्रत्यक्ष रूपमा समाजको आफू अब्बल रचनात्मक व्यक्ति भएको पुष्टि गर्नलागेको देख्दा भने धेरैलाई भित्रभित्र हाँसो उठ्छ होला ।

आजको प्रमाणित यथार्थता के होभने रचनात्मकता सीपहरू सिक्न सकिन्छ र सिकाउनसमेत सकिन्छ। यथार्थमा मानिसले सिकेरर सिकाइएर नै प्राप्त गर्छ।

के व्यक्तिले क्रिएटिभिटी सिक्ने र सिकाइने कुरो हो भनी गरिएको ७० भन्दा धेरै अध्ययनले निकालेको एकै प्रकारको निचोडले भन्छ कि व्यावहारिक रूपमा राम्रोसँग डिजाइन गरिएको प्रशिक्षण कार्यक्रमले लक्षित जनसंख्यामा रचनात्मकता पैदा गर्न सक्छ । यथार्थमा रचनात्मकता एक सीप हो ।









जसलाई विकसित गर्न र निश्चित प्रक्रिया मार्फत व्यवस्थित समेत गर्न सकिन्छ । पहिला ज्ञानको आधार तयार गर्ने, तयारी ज्ञानको आधार मिहिन रूपमा सिक्नका लागि जरुरत हुने अनुशासन सिक्ने र सोच्ने तरिकामा विशिष्टता हासिल गर्ने तरिका सिकेर आफ्नो सम्बन्धित विषय वस्तुमा रचनात्मकता विकास गर्न सकिन्छ ।

हामी प्रयोग गरेर, अन्वेषण गरेर, अनुमान गरेर, सोधेर, कल्पनाशक्ति प्रयोग गरेर र जानकारी संश्लेषण गरेर रचनात्मक हुन सिक्छौँ । चुरो कुरो के हो भने रचनात्मकता सीपहरू सिक्न सकिन्छ। तर, हालको स्कुल र विश्वविद्यालयको सोली जस्तो सबैलाई एकैडोकोमा हाली पढाउने लेक्चर वा बुद्धिविलास गरिएका भरमा आएको लेख, रचना,










किताब वा आख्यान वा व्याख्यानबाट होइन ।

बुद्धिविलासी भनेको विभिन्न किताब पढेको, अर्काले बताएको कुरा सुनेको, ब्रिफिङ लिएको, लिटरेचर रिभ्यु गरेको, छलफल गरेको वा पत्रिका आदि सम्पादन गरेको तथा गुगलसर्च गरेका भरमा छाँटिने दर्शन आदि कुरा नै हुन् ।रचनात्मक सीपका लागि रचनात्मक रप्रभावकारी प्रशिक्षण त रहन वा नरहन सक्छ तर व्यक्तिले रचनात्मक सोच प्रक्रियाहरूसिकेर त्यसको लागू गर्न अनिवार्य हुन्छ। त्यो पनि निश्चित अनुशासनको दायरामा रहेर।

आज संसारले महसुस गरेको यथार्थ के हो भने बुद्धिविलास गरिएका भरमा आएको लेख, रचना, किताब, आख्यान वा व्याख्यान अध्ययन गरी तपाईंको दिमागले बनाउने अवधारणा तपाईंको









वेदमा विज्ञान  अथर्ववेदाचार्य  नारायण घिमिरे



दिमागका लागि प्रदूषित फोहर हो। भारतीय सिरियल क्राइम पेट्रोल वा भूतको मुभीले दिमागमा थपिदिने नकारात्मकताको हैसियतकै नकारात्मकता बुद्धिविलासका भरमा आएका लेख, रचना र पुस्तक वा ग्रन्थले व्यक्तिमा थपिदिने हुँदा तिनीहरू आजको विश्वविद्यालय जस्तै एक व्यक्तिमा जन्मजात रहेको रचनात्मकता नष्टगर्न उद्यत रहन्छन।

रचनात्मकता, वृद्धि र परिवर्तनका सिद्धान्तलाई एकीकृत गर्ने रूपान्तरणको प्राकृतिक प्रक्रियाको सिद्धान्त प्रतिपादन गर्ने जर्ज ल्यान्डले सन् १९६८ मा तीन देखि पाँच वर्षसम्मका हेड स्टार्ट कार्यक्रममा भर्ना भएका एक हजार ६०० बालबालिकामा रचनात्मकताको परीक्षण गरे ।

नासाले आफ्नो नयाँ इनोभेटिब इन्जिनियर र











वैज्ञानिक छनोट गर्दा उपयोग गर्ने क्रिएटिभिटीको परीक्षण गर्ने विधि प्रयोग गरेर जर्ज ल्यान्डले बच्चाहरूको रचनात्मकताको परीक्षण गरेका थिए । उनले तिनै बच्चा १० वर्ष र १५ वर्षको उमेरमा पुग्दा उनीहरूमा पुनः रचनात्मकताको परीक्षण गरेका थिए । त्यसको परिणाम अचम्मलाग्दो आयो ।

*पाँच वर्षको उमेरमा परीक्षणको नतिजाः ९८ प्रतिशत*

*१० वर्ष उमेरका बीचको परीक्षणको परिणामः ३० प्रतिशत*

*१५ वर्ष उमेरका बीचको परीक्षणको परिणामः १२ प्रतिशत*

*त्यसपछि विश्वविद्यालयको स्तरसम्म पुगेर दुई लाख ८० हजार वयस्कमा समान परीक्षण गरियो।*

*वयस्कको परीक्षणको नतिजा दुई प्रतिशत मात्र थियो।*

यो परीक्षण र यसपछि विश्वविद्यालयको स्तर सम्म पुगेर गरिएका धैरै समकक्षी मापनले हाम्रा स्कुल र













विश्वविद्यालयमा शिक्षक वा प्रोफेसरहरूले हाम्रा बच्चाहरूमा रचनात्मकता थपिरहेका छैनन्। उल्टो त्यस्ता संरचना हाम्रा बच्चाहरूको रचनात्मकताको हत्या गर्ने स्थल बनिरहेको यथार्थ प्रमाण सहित बाहिरिएको हो।

जब हामी रचनात्मकताको कुरा गर्छौं तब हामीले हाम्रो गुरुकुल शिक्षाको शक्तिको सदुपयोग गर्न सिक्नु पर्छ । जब हामी स्वअध्ययनबाट केही रचनात्मक हुन चाहन्छौँ भने बुद्धि विलासका भरमा आएको संगीत, साहित्य र गीत वा कविताबाहेकका लेख, रचना, किताब, आख्यान वा व्याख्यान आदिबाट आफूलाई पृथक् राख्न जरुरीहुन्छ । वेद र विज्ञानमा आधारित व्यावहारिक विज्ञानका विषयवस्तुतर्फ ध्यान दिनुजरुरी हुनेछ ।











हाम्रो आफ्नो सन्दर्भको प्रयोजनमा कुरा गर्दा वैज्ञानिक रूपमै पुष्टि भएको माथिको अनुसन्धान र अवधारणाकोचुरो कुरो के हो भने मुलुकको विकासका लागि चाहिने इनोभेसन आज मुलुकमा च्याउसरि खुलेका विश्वविद्यालय जस्ता संरचना न त कहिल्यै सक्षम थिए न भविष्यमा हुने छन्। त्यसका लागि रैथाने सक्षमता, वैज्ञानिक रूपमा आधुनिकीकरण गरिएको परम्परागत ज्ञान, सीप र प्रविधिमा आधारित इनोभेटिब आइडिया इन्कुवेसनकोअवधारणायुक्त इनोभेसन केन्द्रहरू जरुरी पर्नेछ। मुलुकको शिक्षा प्रणाली रचनात्मक पार्न भने हाम्रो परम्परागत गुरुकुल शिक्षाको चुरो मर्म, वेद र विज्ञान जस्ता रचनात्मक कृति तथा पहिचान भएका तथ्यको सहयोगको जरुरत हुने छ।









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



वेद र विज्ञान बारे चर्चा गर्दा आजका हाम्रा नयाँ पीढी सम्म पुग्न नसकेको सदियौँ देखि नियमित चलिरहेको सांसारिक यथार्थ बारे चर्चा गर्नु अनिवार्य हुन्छ। जुन कुरा हाम्रा विज्ञानका विज्ञ भनिएका ठुलो सङ्ख्यामा रहेका वर्गको दिमागमा त घुस्न सकेको देखिंदैन नै, स्वयम आफूलाई वेदका गुरु ठानिरहेकाहरूमा पनि त्यो बारे कुनै महसुस भइरहेको भेटिंदैन।

आज सम्मको इतिहासमा जब जब कुनै वैज्ञानिकले वेद वा वेदमा आधारित स्मृतिहरूको गहिराइमा भनिएका ज्ञानहरूको नियतको जानकारी प्राप्त गरे तव वेदको ज्ञानले उक्त वैज्ञानिकको विज्ञानको यात्रालाई सहज गर्ने पथ प्रदर्शन गरेको अनुभूति दियो।





॥ श्री गणेशाय नमः ॥





उक्त वैज्ञानिक परीक्षण शालामा रहेर आफ्नो नयाँ खोज बारे अनुसन्धानमा एकाग्र रहँदा उसले पहिचान गरेको हाइपोथेसीस सत्य हुने सम्भावना रहेको वा नरहेको भन्ने मानसिक स्तरमा यकिन गर्न अर्थात् मनोवैज्ञानिक भेलिडेसन गर्न वेदको ज्ञानले अत्यधिक सहयोग गरेको अनुभूति गऱ्यो।

वेदले दिएको सङ्केत वाट उत्साहित बनेको वैज्ञानिक परीक्षणको आफ्नो प्रारम्भिक हाइपोथेसिसको मान्यता र प्रोटोटाइप लाई रियल टाइम भनिने व्यवहारिक यथार्थ जब उसले परीक्षण गऱ्यो तव उसले आफ्नो अनुसन्धानले सकारात्मक नतिजा पाउन सकेको अनुभूति र विश्वासमा भेटियो।

वेदको समेत ज्ञान बारे सचेत रहेर हाइपोथेसिसको र प्रोटोटाइप परीक्षणको चक्र वाट गुज्रिएर सफल









बनेपछि मात्र वैज्ञानिकको अनुसन्धान प्रमाणित वैज्ञानिक सिद्धान्त सिद्धान्तको रूपमा प्रतिपादन भएको विज्ञानमा नयाँ सिद्धान्तको रूपमा दर्ज गर्न विज्ञान सफल बनेको देखिन्छ।

यसरी सांसारिक यथार्थमा आज बजारमा भन्ने र सुनिने गरिएको जस्तो गरी विज्ञानले बेदलाइ होइन बरु वेदले विज्ञानलाई जन्म दिन र त्यसको मान्यता लाई प्रमाणित गर्न ठुलो भूमिका खेलिरहेको छ।

आजको दिन सम्म समेत मानव अस्तित्व र ब्रह्माण्डको परम वास्तविकताको मेटाफिजिकल प्रश्नमा आफ्नो क्षमता विस्तार गर्न नसकेको विज्ञानको खोजमा लागेका निकै धेरै वैज्ञानिकहरू यही यथार्थ संग परिचित रहेकाले मानव अस्तित्व र ब्रह्माण्डको परम वास्तविकताको पक्ष उजागर गर्ने








सम्भावना बोकेको क्वान्टम मेटाफिजिकल पक्ष बारे अत्यन्त धेरै चासो लिने गरेको भेटिन्छ।

# वैज्ञानिक ज्ञान र वैदिक ज्ञान

जब हामी कुनै वस्तुलाई हेर्छौँ, त्यसको लेखाजोखा लम्बाइ, चौडाइ, उचाइ, तौल, शक्ति, गति, तातोपनलगायतका कुराबाट राख्ने गर्छौँ । महसुस भने वस्तुको रङ, स्वाद, गन्ध, ध्वनि, छुँदा प्राप्त हुने अनुभव आदिबाट हुने गर्छ ।विज्ञानले विषयवस्तुलाई भौतिक मापदण्डका आधारमा बुझ्ने गर्छ ।

विज्ञानमा व्यक्तिले महसुस गर्ने वस्तुको प्रकृति परीक्षणका बखत प्रतिपादित सिद्धान्तको









स्वीकार्यको मूल्याङ्कनमा उपयोग भइरहेको हुन्छ। सिद्धान्त प्रतिपादन र परीक्षणपश्चात् स्थापित हुने निष्कर्षमा भने अटाउने गर्दैन । फलतः भौतिक मापदण्डभन्दा अनुभव र महसुस मार्फत ज्यादा स्वीकार्य हुने उत्कृष्ट वैज्ञानिक विधाहरू जस्तै ज्ञान, प्रतिभा, साहित्य, कला र सङ्गीत आदिलाई स्वयम् विज्ञानले कला भनेर सीमित परिभाषाको दायरामा कोचिदिएको छ ।

वैज्ञानिक ज्ञान परीक्षणमा खरो उत्रेको प्रमाणित ज्ञान हो। विचारलाई प्रयोगात्मक परीक्षणद्वारा प्रमाणित गरिएपछि विचार वैज्ञानिक ज्ञान बन्छ । सर्वस्वीकार्य हुने गर्छ। विचारको उत्पत्ति कसरी हुन्छ, विचार वैज्ञानिक बनिसकेपछि सर्व स्वीकार्यताको अनुभूति मानिसमा कसरी हुन्छ










आदिबारे ज्ञान भने राख्दैन विज्ञान।

संस्कृतमा वेद शब्दको अर्थ ज्ञान भन्ने हुन्छ। वैदिक ज्ञानलाई आध्यात्मिक प्रकृतिको ज्ञान मानिन्छ । जुन अनुभव र अनुभूतिबाट प्राप्त हुन्छ। वैज्ञानिक रूपमा पुष्टि नहुँदा नहुँदै पनि आध्यात्मिक ज्ञान व्यक्ति र समाज दुवैको जीवन्त अनुभवको माध्यमबाट मानिसले अनुभूति गर्छ।

विज्ञानले वस्तुको वास्तविक उपस्थितिको बोध गराउँछ। वैदिक ज्ञानले वस्तुको उपस्थितिले दिने अनुभूतिको अनुभवबारे सचेतना दिलाउँछ । वस्तुको मापन गर्न सकिने सूचनाको अध्ययन गर्ने गर्छ विज्ञान। वैज्ञानिक सूचनालगायत वस्तुको उक्त समयमा अर्को वस्तुको सन्दर्भको सूचना, सूचनाको प्रकृति र तत्कालीन सन्दर्भको अर्थ र प्रभावबारे













जानकारीको समेत हेक्का राख्ने गर्छ वैदिक ज्ञानले ।

पाकेको आँपको वास्तविकता भनेर विज्ञानले त्यसको कडापन, नरमपन, तौल, सङ्ख्या, लम्बाइ, चौडाइ, रसिलो पन जस्ता गुण आदि मापन गर्छ । मापनका लागि भौतिक औजारको प्रयोग गर्छ । वैदिक ज्ञानले आँपको रङ, स्वाद, छाम्दा महसुस हुने नरमपन, बास्ना आदिबारे हामीलाई अनुभूति गराउँछ । जसका लागि हाम्रा इन्द्रियहरू र चेतना उपयोगमा आउँछन्।

वैदिक सूचनामा उक्त समयमा आँपको रङ, रसिलोपन तपाईंको आँखाअगाडि घुमेको चित्र, तपाईंले महसुस गर्नुभएको बास्ना, आँप खाने इच्छा र चाखिहेर्दा अनुभूति भएको गुलियो, अमिलोपन आदिले तपाईंमा छाडेको असरको अनुभूतिबाट प्राप्त











अनुभवको समेत लेखाजोखा राख्ने गर्छ ।

मानिसले अनुभूतिबाट प्राप्त गर्ने अनुभवलाई मानिस कुन अवस्था र सन्दर्भबाट गुज्रिरहेछ त्यसको निकै ठुलो असर हुने गर्छ । उदाहरणका लागि, यदि उक्त समयमा तपाईँ भर पेट आँप खाइसकेर बस्नुभएको अवस्था छ भने तपाईँलाई त्यो आँपको न त बास्नाले लोभ्याइरहेको न त खाने इच्छा नै जागेको अवस्थासमेत हुन सक्छ। यस अर्थमा अनुभूतिका साथसाथ सन्दर्भसमेत महत्त्वपूर्ण हुने ठानी तिनीहरूको सूचना राख्ने गर्छ वैदिक ज्ञान। सबैलाई समग्रमा कन्ससनेस वा चेतना भनिएको छ।

विज्ञानले कुनै पनि वस्तुबारे हामीलाई पहिचान गराउन निकै ठुलो सहयोग गर्छ । वैदिक ज्ञानले उक्त वस्तुले हाम्रो निजी र सामाजिक जीवनमा













पु¥याउन सक्ने प्रभाव, विभिन्न सन्दर्भको महत्त्व, मूल्य तथा अर्थको जटिलतम सूचनाबारे हामीलाई सचेत पारिदिन्छ ।

आजको कटिङ ऐज दुनियाँको सैद्धान्तिक र व्यावहारिक अनुसन्धान विज्ञान र वैदिक ज्ञान नियमित जरुरतका विषय बनेका छन्। जब अनुसन्धान निकै गहिरो र जटिल मोडमा पुग्छ, वैदिक ज्ञानले राख्ने सूचनाको लेखाजोखा बाट अनुसन्धानकर्ता तुलनात्मक रूपमा निकै चाँडो अनुसन्धानको निचोडमा पुग्ने गरेको भेटिन्छ । विज्ञानको क्षेत्रमा लागेका नयाँ पुस्ताका लागि वैदिक ज्ञान नयाँ सुवर्ण अवसर हो। जुन कुरा आजको हाम्रो नयाँ पुस्तासँग पुग्न सकिरहेको छैन, पु¥याउन जरुरी छ।









वेद, उपनिषद् र पुराण आदिबारे जान्न पहिले श्रुति र स्मृतिबारे जान्नु जरुरी छ। शास्त्रको सुरुवात बिन्दुबारे जानकारी नरहेको परम्परागत रूपमा सुन्दै वा सञ्चारित हुँदै आएको शास्त्रलाई श्रुति भन्ने गरिन्छ। जस्तै वेद र उपनिषद्हरू श्रुति हुन्। यो विश्वास गरिन्छ कि वेदको ज्ञान अलौकिक हो।

वेद कुनै व्यक्तिको सम्झना वा लेखनद्वारा तयार गरिएको नभई द्रष्टा सन्त तथा ऋषिहरूले समय क्रममा सिधै ब्रह्मबाट प्राप्त ज्ञान परम्परागत रूपमा लिपिबद्ध हुँदै शास्त्रको स्वरूपमा विकसित बनेको हो। ऋग्वेद, सामवेद, यजुर्वेद र अथर्ववेद गरी चार वटा वेद अस्तित्वमा छन् । वेद जस्ता अलौकिक ज्ञान अध्ययनबाट विकसित मानव अन्तर ज्ञानको उपयोग गर्दिँदै व्यक्तिको सम्झना वा लेखनद्वारा









तयार गरिएको शास्त्रलाई स्मृति भनिन्छ। जस्तै वेदाङ्ग, उपवेद, उपाङ्ग, धर्म सूत्र, पुराण, रामायण, महाभारत आदि सबै स्मृति हुन् ।

वेदमा कुनै पनि संस्कृति विरोधी, समाज विरोधी, दर्शन वा धर्म विरोधी कुण्ठा, ईर्ष्या, कुटिलता, घृणा वा तिरस्कार छैनन्। छ त व्यक्तिगत र समाजको समेत लाभ पुग्ने जीवनको अर्थ, अस्तित्व लगायतका व्यावहारिक ज्ञानको विषय। अर्को मुख्य चुरो कुरा वेद कुनै अमुक संस्कृतिको वा धर्मको ग्रन्थ हैन। यथार्थमा हिन्दु, जैन र बुद्ध जस्ता संस्कृति र दर्शनमा वैदिक ज्ञानको निकै प्रगाढ प्रभाव भेटिन्छ ।

वेदको आधिकारिक प्रयोगात्मक ज्ञान र अवधारणा जान्न र मनन गर्नका लागि वेदको अध्ययन जरुरी छ। वेदको न त अध्ययन न त मनन गरेका कतिपय








धर्मगुरुले वेदका व्यावहारिक, आधिकारिक र प्रमाणिक ज्ञानबाट विचलित गलत सूचना सञ्चार गरिदिंदा अक्सर वेद विवादास्पद बन्दै सामाजिक सर्व स्वीकार्यता गुमाउँदै गएको भेटिन्छ।

वेदपश्चात् प्रचलनमा ल्याइएका स्मृति शास्त्रमा वेदको मर्मको निरन्तरता रहेको भनी वेदका बारे जिज्ञासा राखिंदा, स्मृति शास्त्रहरूको उद्धरण गरी जवाफ फर्काउने हाम्रो गलत प्राक्टिसले वेदलाई विवादास्पद बनाइदिएको छ।

धार्मिक भक्तिको नाममा गुरु आशक्ति अभिवृद्धि गर्ने नियतमा वेदमा उल्लेख गरिएको भन्ने दुहाइ दिंदै नियमित उपाङ्ग, धर्म सूत्र, रामायण, महाभारत, पुराणहरू पाखण्डी पूर्ण वाचन गरिने, वाचन गर्ने धर्मगुरुहरू अद्वितीय, अभिजात, ईश्वरको









दूत हुने धारणाले सामाजिक स्वीकार्यता प्राप्ति वेदप्रति नयाँ पुस्ताको विकर्षण हुनुको प्रमुख कारक बनिदिएको छ।

वैदिक ज्ञान यथार्थमा मानिसको दैनिक सोच र कर्मलाई व्यक्तिगत तथा सामाजिक उत्थानको दिशानिर्देशका खातिर उपलब्ध उत्कृष्ट व्यावहारिक ज्ञान हो । व्यक्ति र समाजको लाभ पुग्ने गरी निजी तथा सामाजिक गतिविधि कार्यान्वयनमा नभई नहुने व्यावहारिक सोचको विकास गर्न जरुरी हुने पूर्वाधार उपलब्ध गराउँछ वैदिक ज्ञानले भन्ने यथार्थता आजसम्म पनि हाम्रो समाजमा पुगिरहेको भेटिन्न।

वेदको यथार्थता हाम्रो समाजमा वाचन गरिने र सुनाइनेभन्दा निकै भिन्न भेटिन्छ। नितान्त निजी र










सामाजिक जीवनका व्यावहारिक पक्ष र सुदृढ मानव जीवन याँपनमा अर्थ राख्ने स्वस्थता, खानपान, तन्दुरुस्ती, अर्थशास्त्र, राजनीति, संस्कृति आदि सबै पक्षको व्यावहारिक ज्ञान समावेश छ वैदिक ज्ञानमा।

आजको दिनमा मानिसको जीवनयापनलाई उल्लेखनीय रूपमै सरलीकृत पार्न सफल बनेको विज्ञान, आगामी पुस्ताको रोजाइ र आवश्यकताको पूर्ति गर्न जरुरी पर्न गएको सीप, ज्ञान र प्रविधि पहिल्याउन वैदिक ज्ञानको सहारा लिँदै छ। यसै प्रयोजनका लागि विज्ञानले मानवीय बुद्धि, मन र सचेतनाको भौतिक वस्तुसँगको सम्बन्धको सिद्धान्त प्रतिपादन गर्नेतर्फ समय खर्चिरहेको छ। प्रकृति, समय र भौतिक वस्तुको चेतनासँगको सान्दर्भिकता













विकास गर्न अब वैदिक ज्ञानको उपयोग गरिनुपर्ने बेला आएको छ । जुन हाम्रो रैथाने परम्परागत कुशलता र कार्यशैलीको ग्लोबल समृद्धिका लागि उच्च जरुरत महसुस गरिएको अवस्था हो।

# वेद र सामाजिक कुरीति

सामान्य भाषामा वेदको अर्थ ज्ञान हो । वेदलाई पुरातन ज्ञान विज्ञानको अथाह भण्डार मानिन्छ। वेदलाई श्रुति मानिन्छ। हाम्रो समाजमा वेदसँगै अन्य स्मृतिबारे पनि पटकपटक चर्चा हुने गर्छ। जानकारहरू श्रुति र स्मृतिका सम्बन्ध बुझ्न रुखको उदाहरण दिने गर्छन्। एउटा रुखलाई तपाईं उल्टो गरेर हेर्दा देखिने आकृतिले श्रुति र स्मृतिका





सम्बन्धको प्रतिविम्बझल्काउँछ। एउटा जरा माथि र टुप्पो तल रहेको पिपलको रुख जहाँ जरालाई रुखको एक मात्रस्रोत मानिन्छ त्यो ब्रमाण्ड, ज्ञान र चेतनाको मूल शरीर हो। उक्त जरामा चारहाँगाहरू ऋग्वेद, यजुर्वेद, सामवेद र अथर्ववेद छन्। ती चारहाँगा र जरा सम्पूर्णलाई वेद वा श्रुति मानिन्छ।

चार भागका रहेको वेदमा मान्छेका हरेक समस्याको समाधान छ। ब्रह्मा, देवता, ब्रह्माण्ड, ज्योतिष, रीतिरिवाज, तर्क, कानुन, चिकित्सा, शल्यचिकित्सा, प्रविधि, गणित, रसायन, औषधी, प्रकृति, खगोल, भूगोल, सामाजिक नियम, इतिहास, मिलिटरी, मार्सल आर्ट, सैन्य रणनीति र राजनीति आदि सबै विषय संगृहीत छ।

द्रष्टा सन्त तथा ऋषिहरूले ब्रह्माण्डबाट प्राप्त ज्ञान





लिपिबद्ध हुँदै वेद जन्मिएको हो। ऋग्वेद, सामवेद, यजुर्वेद र अथर्ववेद गरी चार वटा वेद श्रुतिका रूपमा अस्तित्वमाभेटिन्छ। वेद जस्ता अलौकिक ज्ञानको अध्ययनबाट मानिसमा विकसित अन्तरज्ञानको उपयोग गर्रिंदैलेखनद्वारा स्मृतिहरू जस्तै वेदांग, उपवेद, उपांग, धर्मसूत्र, पुराण, रामायण, महाभारत आदि तयार गरिए।

लेखिएका स्मृतिहरू कतिपय वेदको मर्म अनुरूपका छन्। तर, कतिपय भनेकसैको निहित चासो पूर्ति गर्ने नियतले बाहिर आए। कुनै शासक, वर्ग वा पेसेवरसमुदायको प्रायोजित रूपमा निहित स्वार्थ पूर्ति गर्ने प्रयोजनमा स्मृतिहरू समाजमा वितरण गरिएर वेदको भावना विपरीतका सामाजिक कुरीतिहरू वेदमाथि नै सामाजिक विकर्षण पैदा





गर्नेकारक बनेको देखिन्छ।

# वैदिक ज्ञान र व्यावसायिक उत्कृष्टता

वैदिक ज्ञान हाम्रा हाम्रो रैथाने परम्परागत कौशल र कार्यशैली हो। वैदिक ज्ञानले दिने कौशल हाम्रो आगामी पुस्ताको आवश्यकता पूर्ति गर्न सक्षम व्यावसायिक उत्कृष्टता प्राप्त गर्न अनिवार्य जस्तै बनिसकेको खबर नेपाली व्यवसायीबीच एउटा नयाँ आश्चर्यको विषय बन्न सक्छ। संस्था वा निकायको संस्थागत स्मृतिमा रहेका उत्कृष्ट ज्ञान, विज्ञान र प्रविधिको सहयोगमा संसारमै आफ्नो









लोभलाग्दोसंस्थागत कुशलता स्थापित गरिरहेका अन्तर्राष्ट्रिय जगतका हालका व्यावसायिक घरानाका लागि यो खबर न त कुनै आश्चर्यको न पुनः प्रमाणित गरिरहनुपर्ने विषय बनेको दशकौं बनिसकेकोछ।

मानव सभ्यताको विकास सँगै मानिसले नियमित नयाँ नयाँ कुशलताको प्राप्तिबाट विकास कार्य सुचारुगरी समयसापेक्ष व्यावसायिक उत्कृष्टता हासिल गर्दै आएको हो। या त स्वसंवेदनामा या निजी तथा सामाजिक इच्छाको पूर्तिको माध्यमबाट आनन्द प्राप्त गर्न जरुरी हुने ज्ञान, वस्तु वा सेवाको उत्पादन र पूर्तिमा सहयोगी हुने सक्षम व्यवसाय पहिचान, छनोट र सञ्चालन गरी व्यावसायिक घरानाले मानिस र समाजलाई उत्कृष्ट ज्ञान, वस्तु वा सेवा पूर्ति गर्ने गरेको वर्षौं भइसक्यो।




हजारौँ वर्षदेखि आफ्ना व्यावसायिक कुशलताले तत्कालीन विकासशील इच्छा पूरा गर्दै आजको अवस्थामा आइपुगेको हो मानिस । आउने हजारौँ वर्षका लागि जरुरी हुने व्यावसायिक उत्कृष्टताको खोजी अभियानमा पनि मानिस सुचारु रूपमै लागिपरेको छ ।

कुनै पनि कार्यमा उत्कृष्टता पाउनु भनेको त्यस कार्यमा सिद्धता प्राप्ति हो । आफ्नो काम वा कर्मप्रति लगनशील र प्रतिबद्धरहेर मानिसले उत्कृष्टता वा पूर्णता हासिल गर्न सक्छ भन्ने मान्यता निकै पुरानो हो। विज्ञानको सहयोगमा मानिस आफ्नो काम वा कर्मप्रति कसरी लगनशील र प्रतिबद्ध बन्न सक्छ भनी विभिन्न समयमा विभिन्न व्यावहारिक सिद्धान्त र मान्यता विकास भएको छ।









वैदिक ज्ञानमा उत्कृष्टता वा सिद्धता प्राप्तिलाई ईश्वरको प्राप्ति मानिएको छ । उदाहरणका लागि भागवत गीताका अनुसार परमेश्वर प्राप्त गर्ने सरल तरिका भनेको आफ्ना सबै काममा उत्कृष्टता ल्याउनु हो।

विज्ञानले उपलब्ध मध्ये उच्चतम सम्भावना बोकेको क्षमताको स्तरलाई उत्कृष्टता मान्ने गर्छ । स्वधर्ममा रहनु र आत्म आचारमा विचलन हुन नदिई व्यवसायको मूल्य र मान्यताको परिधिभित्र रहनुलाई गुणस्तर युक्त समीकरण भनिन्छ। तत्कालीन परिस्थितिको व्यवाहारिकतामा सम्भव हुने उच्चतम विन्दुको गुणस्तर युक्त समीकरणलाई उत्कृष्टता मान्ने गर्छ वैदिक मान्यता ।

ऋग्वेदका अनुसार उत्कृष्टताको प्राप्तिका लागि







व्यवसायमा संलग्न व्यक्ति बीच साझा दृष्टि, सार्वभौम भाइचारा, समुचित समृद्धिको नियतबोकेको व्यावसायिक तथा नैतिक नियमहरू अवलम्बन गरिनुपर्छ ।व्यावसायिक उद्देश्य प्राप्तिका लागि गरिने हरेक प्रयासलाई व्यवसायले अनिवार्य मानवताको प्रतीकका रूपमा ग्रहण गर्नुपर्छ। व्यवसाय सञ्चालनबाट प्रत्यक्ष र अप्रत्यक्ष रूपमा प्रभाव पु¥याउने कर्मचारी, ग्राहक, आपूर्तिकर्ता, सेयर धारक, छिमेक, समाज र अन्य सबै हित धारकपक्षको उचित र प्रासंगिक आवश्यकता र चासोको सन्तोषजनक र सन्तुलित समाधान खोज्न सक्षम नीति अवलम्बन गर्नु जरुरी छ ।

उत्कृष्ट व्यवसायले आफ्नो मानव संसाधनको सम्भावित दक्षताको पूर्ण सदुपयोगमा सदैव ध्यान





*वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे*


केन्द्रित गरेको हुन्छ। मानव संसाधनको सशक्तीकरण, सीप मानकीकरण, साझा मूल्य विकास, आपसी भाइचारा र विश्वासको प्रवद्र्धनको माध्यमबाट मानव संसाधनको दक्षताको अधिकतम सदुपयोग गर्न सकिने स्थिति रहन्छ। व्यवसायभित्र क्षमतावान्, मेहनती र कर्मनिष्ठ मानव संसाधनको उच्च कदर हुने तथा कामचोर प्रवृत्ति पूर्ण निरुत्साही हुने प्रणाली स्थापित हुनु जरुरी हुन्छ। गुणस्तरयुक्त समीकरण तथा दक्ष र नैतिक मानव संसाधनविना व्यवसायबाट दूरगामी लाभ, आनन्द र समृद्धिको आसगर्नु अचम्मलाग्दो अप्राकृतिक महत्वाकांक्षा हो।

अनुसन्धानलाई विज्ञानले विभिन्न तहमा राखेर हेर्छ। एकेडेमिक वा सैद्धान्तिक खोज, जसमा आउने









सम्भावित निष्कर्ष के मा सदुपयोग गर्ने भन्ने सोचाइ हुँदैन । अर्को पहिचान गरिएको समस्या सुल्झाउने उद्देश्यले गरिने एप्लाइड वा व्यावहारिक खोज । सफलता प्राप्त गरेका सबै व्यावहारिक अनुसन्धानका नतिजा हाताहाती प्रतिफल दिने प्रकृतिका वा तत्काल व्यवसायीकरण गर्न सकिने अवस्थाका रहन्नन् ।

कतिपय अवस्थामा व्यावहारिकअनुसन्धानका नतिजा व्यवसायीकरण गर्न त सकिने तर इच्छाएको स्तरका प्रतिफल दिने अवस्थाका भेटिन्नन् । नेपालमा एकेडेमिसिएन र टेक्नोक्र्याटले अब्बल भनी दाबी गर्ने पब्लिक–प्राइभेटपार्टनरसिप मोडलको लगभग एक हजार डलर मूल्य बराबरको व्यावहारिक अनुसन्धानको निष्कर्षलाई












व्यवसायीकरण गर्न एकदेखि १० मिलियन डलरसम्म लाग्छ । तैपनि त्यो व्यवसायीकरणले लगानी उठाउँछ भन्ने निश्चितता दिँदैन । उक्त परिमाणको खर्च न आजको दैनिक परिवर्तनशील बजार प्रणालीले धान्न सक्छ न त विश्वमै व्यावहारिक छ ।

विज्ञानले बौद्धिक ज्ञानको प्रगाढ प्रभावमा विकसित गरेको को–क्रिएसन अथवा स्वअस्तित्वको मोडलबाट एक हजार डलर मूल्य बराबरको व्यावहारिक अनुसन्धानको निष्कर्षलाई एक हजार डलर मूल्य हाराहारीकै लगानीमा व्यवसायीकरण गर्न सक्षम अवस्थाको सिर्जना गर्न सकेको छ। त्यसरी सक्षम बनेका संस्थालाई इन्नोभेटिभ कम्पनीका नाममा चिन्न सकिन्छ। विज्ञानले यो









अवधारणालाई लिन–सिक्स–सिग्माकल्चर भनी चित्रण गर्ने गर्छ। जुन उत्कृष्ट व्यावसायिक घरानाका लागि जरुरी हुने गुणस्तरयुक्त समीकरणका लागि बौद्धिक ज्ञानले सुझाएको व्यावहारिक निचोड नै हो।

गुणस्तर युक्त समीकरणमा सुझाए जस्तै लिन–सिक्स–सिग्मा कल्चरमा क्रस फङ्गसनल टिमको सहभागितामूलक स्वअस्तित्वको मोडलले तत्कालीन अवस्थामा उपलब्ध मध्ये सबैभन्दा सस्तो तर सबै भन्दा उच्च गुणस्तरमा अनुसन्धान कानिष्कर्षलाई व्यवसायीकरण गर्ने ग्यारेन्टी गर्छ। कुनै पनि प्रोसेसको नन–भ्यालुएडेड अथवा गुणस्तरीय सेवा वा उत्पादन दिने नियतमा कुनै महत्व नरहेको गतिविधि वा व्यक्तिलाई प्रोसेसबाट









बिदा गर्ने प्रविधिलाई 'लिन' भनिने गर्छ। वस्तु वा सेवाको डिफेक्टिभ (कमसल) उत्पादन नै पैदा हुन नसक्ने गरी व्यवसायको गतिविधिलाई गुणस्तरीय डिजाइन बाट नै नियन्त्रण गर्ने काइदालाई सिक्स–सिग्मा भनेको छ ।

एक अनुमानमा आज नेपालमा उत्कृष्ट पब्लिक–प्राइभेट पार्टनरसिप मोडल लागू गरी सञ्चालनमा रहिरहेको विश्वास गर्ने व्यावसायिक घरानाको प्रत्येक एक मिलियन सञ्चालन खर्चमा कम्तीमा दुई लाख नन–भ्यालुएडेड दायित्व वा जरुरी नै नरहेको गतिविधिमा खर्च रहिरहेको छ । भनिन्छ सरकारी र अर्धसरकारी स्वमित्वको व्यवसायमा उक्त खर्च आधा मिलियनभन्दा माथि छ । व्यवसायलाई तथ्यमा आधारित रहेर आउँदो पुस्ताको आवश्यकता










अन्दाज गर्न सक्षम बनाउने र नयाँ पुस्ताको मागले परिवर्तनगर्ने बजार मागकै परिधिमा आफ्नो सेवा र उत्पादनको परिवर्तनमा रहनुपर्ने हाम्रा व्यावसायिक घरानाहरू हालकै सञ्चालन खर्चमा रहेका नन–भ्यालुएडेड गतिविधि र प्रणालीले थपेको अनावश्यक दायित्वका कारण अन्तर्राष्ट्रिय बजार प्रतिस्पर्धामा खरो उत्रन सकिरहेका छैनन् ।

आफ्नो कारोबार सञ्चालनमा रहेका नन–भ्यालुएडेड दायित्वको पहिचान गरी त्यसबाट छुटकारा लिन र बदलिँदो बजार मागअनुसार आफ्ना व्यवसायका सेवा तथा उत्पादनलाई परिवर्तन गर्न सक्षम बनाउन हाम्रा ठूला व्यावसायिक घरानाले संसारमै लोभलाग्दो संस्थागत कुशलता स्थापना गर्न सकिरहेका अन्तर्राष्ट्रिय व्यावसायिक घरानाहरूले













जस्तै वैदिक ज्ञान र कुशलताबाट प्राप्त गर्न सकिने व्यावसायिक उत्कृष्टतातर्फ ध्यान पु¥याउन सान्दर्भिक बनेको छ ।

# अध्यात्मको सामुन्ने पुड्को बनेको छ विज्ञान

आज आफ्नो वास्तविकता सँग हामी आफै हजारौ हजार कोस टाढा रहनुमा विज्ञानको निकै ठूलो हात छ । जब विज्ञानले प्रतिपादित गरेको सामान्य सिद्धान्तबाट भौतिक कुराहरू हामीले जे देख्छौँ, त्यसेरी नै चल्ने गरेको प्रमाणित हुँदै गयो, मानिस विज्ञानप्रति मोहित बनेको भेटिन्छ । जब जब









विज्ञानका नयाँ सूत्रहरू प्रतिपादित हुँदै गए, संसारले नयाँ नयाँ विकासका फड्काहरू लिँदै गयो । मानिस विज्ञानप्रति झन् मोहित हुने क्रम बढ्दै गयो । विज्ञानले प्रतिपादित गर्दै गरेको नयाँ नयाँ सिद्धान्तबाट आएका नयाँ नयाँ यथार्थ मानिस माझ आउँदै गर्दा बिस्तारै हाम्रो आदिकालदेखि मानिसले स्वीकार्दै आएका तथ्यहरू सही रहेको प्रमाणित हुने क्रम अघि बढ्दै जाँदा विज्ञान अध्यात्मको सँघारमा पुगेर भने पूरै अलमलमा परेको प्रस्ट महसुस गर्न सकिन्छ ।

तर्कका आधारमा सिद्धान्त बनाउने र सिद्धान्तको व्यावहारिक परीक्षण गरी हेर्दा सफल भेटिए त्यही सफलतालाई व्यवसायीकरण गर्दै विकासको नयाँ उचाइमा पुग्ने विज्ञानको तरिका विज्ञानको पहिचान









भएदेखि आजसम्म बदलिन सकेको छैन। वैज्ञानिक विचारधाराको नयाँ तथ्यको खोजी गर्ने संसारमा स्थापित प्रक्रिया सुरुमा जुन बिन्दुमा सुरु भएको थियो आज पनि त्यही छ। जसमा मानिसले तर्कका आधारमा सिद्धान्त बनाउछ। ती सिद्धान्तहरूलाई व्यावहारिक परीक्षण गर्छ । ती परीक्षणहरूबाट प्राप्त नयाँ सूचनाका आधारमा फेरि तर्कहरू विकास गर्छ। नयाँ तर्कहरूका आधारमा पुनः सिद्धान्त बनाई व्यावहारिक परीक्षण गर्छ । ती परीक्षणबाट प्राप्त नयाँ सूचना फेरि तर्कबाट नयाँ सिद्धान्त बनाएर परीक्षण गर्ने काम सुचारु गरिरहन्छ । तबसम्म गरिरहन्छ जबसम्म उसको मनमा आएका जिज्ञासाको उसले उत्तर भेट्दैन।

आज चाहे एक से एक वैज्ञानिक गनिएकाहरू हुन्










वा संसारका ठूला कहलिएका रिसर्च वा इनोभेसनका अखडा नै किन नहुन्, उनीहरूको काम गराइको पारा, प्रकृति वा तर्क गर्ने क्षमतामा १९–२० फरक होला । तर, ती सबैले आज सम्म जानेको, बुझेको र गरिरहेको नयाँ तथ्यको खोजी गर्ने प्रक्रिया मात्र यही नै रहिआएको छ ।

सुन्दा अचम्म लाग्ला तर तपाईं हामी सबैले जानेको र महसुस गरेको कुरा के हो भने हुबहु त्यही तरिकाबाट प्रत्येक बच्चाले जन्मेपछि हातखुट्टा चलाउन, घस्रिन, हिँड्न र दौडन सिक्छ। संसारलाई पलपल अवलोकन गरी संसारबारे आफ्नो अनुभूति र मान्यता विकास गर्छ। यसको मतलब के हो भने आजको वैज्ञानिक अनुसन्धान भनेको आफ्नो मनमा जिज्ञासा पैदा हुँदा त्यसको













उत्तर खोज्न हामीले जुन प्रक्रियाबाट हिँड्न सिक्यौं वा जुन प्रक्रियाबाट साइकल चलाउन सिक्यौं अथवा जुन प्रक्रियाबाट कपुरी क लेख्न सिक्यौँ, त्यही प्रक्रिया अपनाउनु हो । फरक मात्र यति हो, जतिबेला हामी बालक हुन्छौँ र हिँड्न खोज्छौँ त्यतिबेला हामी संसारलाई वास्ता गर्दैनौँ । काम गर्दै सिक्दै गर्छौं । प्राकृतिक सफलताको व्यावहारिक भ¥याङ उक्लन्छौँ। प्रायः सफल बन्छौँ ।

उमेर पुगेपछि आफ्नो अनुभव भन्दा अर्काको कुरामा ज्यादा भर पर्छौं । काम गर्दै हैन, मात्र पढेर सिक्न खोज्छौँ। काममा लगन कम दिँदै अप्राकृतिक प्रगतिको अपेक्षा गर्छौं । नतिजा, प्रायः असफल बन्छौँ। असफलतामा निराश बन्छौँ । त्यसको अपजस आफ्नो आत्मा रतिका लागि अर्कालाई









थोपरेर अर्को नयाँ पेसा खोज्छौँ । फेरि फरक सन्दर्भमा उही यात्रा पुनः दोहो¥याउँछौँ । सबैभन्दा चुरो कुरो हाम्रो हालका स्कुल र विश्वविद्यालयले हामीलाई त्यसै गर्न अभिप्रेरित गरिरहन्छन् ।

आज हाम्रा सम्पूर्ण शैक्षिक संस्था, स्कुल र विश्वविद्यालय हाम्रा विद्यार्थीलाई खानाबाट मानिसले शरीरका लागि चाहिने इनर्जी प्राप्त हुन्छ भन्ने शिक्षा दिइरहेका छन् । विज्ञानले पहिचान गरे अनुरूप हामीले श्वासप्रस्वासबाट लिने अक्सिजन मानिसको पहिलो र मुख्य इनर्जीको स्रोत हो । मानिसको शरीरको सम्पूर्ण प्रणाली सञ्चालन गर्न र तन्दुरुस्त राख्न अक्सिजनले मुख्य इन्धनको भूमिका निभाउने गर्छ । विज्ञानका अनुसार शरीरको निर्माण र सञ्चालनका लागि जरुरी हुने दैनिक ऊर्जामा हावा









(अक्सिजन) वाट ८३%, पानी वाट ११% र खाना वाट ६% ऊर्जा शरीरले प्राप्त गर्ने गर्दछ। वेदमा रहेको विज्ञान जब बुझियो त्यस पछि मात्र विज्ञानले यो गहिराइको ज्ञान प्राप्त गरी प्रमाणित गर्न सक्यो। अक्सिजनले हाम्रो शरीरलाई आफ्नै वृद्धि गर्ने क्षमता प्रधान गर्छ। शरीरको तन्तुमा विकास हुने हानिकारक रेडिकल्स हटाउने, वातावरणबाट शरीरभित्र पुग्ने बिखालु पदार्थलाई निष्क्रिय तुलाउने, एनेरोबिक ब्याक्टेरिया, परजीवी र भाइरस आदिलाई मार्ने र शरीरबाहिर पठाउन अक्सिजनको भूमिका रहन्छ । त्यसैले अक्सिजनले हाम्रो रगतलाई डिटक्सिफाई गर्छ भनिएको हो ।

हाम्रो शरीरले हामीले खाएको खानालाई पचाएर ग्लुकोज बनाउँछ। उक्त ग्लुकोजलाई रगतले






तन्तुतन्तुमा रहेको कोषिकामा पु¥याउने गर्छ । कोषिकामा रहेको माइकोकोन्ड्रियामा उक्त ग्लुकोजले एडिपीलाई एटिपीमा परिवर्तन गर्दै शरीरका लागि चाहिने इनर्जी उत्पादन गर्छ। दैनिक रूपमा सामान्यतया वयस्क पुरुषलाई जरुरी हुने १५०० क्यालोरी र वयस्क महिलालाई १२०० क्यालोरी इनर्जी जरुरत हुन्छ । विज्ञानका अनुसार सामान्यतया शरीरलाई आफ्नो तीन प्रकृतिका गतिविधिका लागि शक्तिको जरुरी पर्छ । शरीरको तापक्रम व्यवस्थापन गर्न र जीवित राख्ने जस्ता आधारभूत कार्य सञ्चालन (बीएमआर द्यःच्) गर्न लगभग ७० प्रतिशत इनर्जी खर्च हुन्छ। जसमा रक्तसञ्चार, श्वासप्रश्वास, मुटु, फोक्सो, कलेजो, मिर्गौला, दिमाग आदि स्वचालित गतिविधि पर्छन्











। शरीरको अन्य भौतिक गतिविधिमा लगभग २० प्रतिशत र ५ देखि १० प्रतिशत पाचन प्रक्रियामा खर्च हुने मानिन्छ ।

शरीरलाई दैनिक चाहिने इनर्जी पूरा भइसकेपछि कोषिकामा पुग्ने अनावश्यक ग्लुकोज नपचाई कि त बोसोका रूपमा परिवर्तन गरी सञ्चय गर्नुपर्ने हुन्छ कि त बाहिर कुनै तरिकाबाट फाल्नु जरुरी हुन्छ। कोषिकामा हुने मेटाबोलिजममा अक्सिजनबाट ९० प्रतिशत इनर्जी आउने हुँदा शरीरको दैनिकीलाई जरुरीभन्दा बढी हुन जाने कोषिकामा पुगेको मात्र एक ग्राम ग्लुकोज खर्च गर्न मानिसले लगभग १५ मिनेट हिंड्नुपर्ने हुन्छ।

विज्ञानले आजसम्म औपचारिक रूपमा मानिसको भौतिक शरीरलाई मात्र चिनेको छ वा पहिचान










गर्छ। भौतिक शरीर सम्पूर्ण रूपमै प्रकृतिबाटै आउँछ र अन्ततः सबै प्रकृतिमै फर्कन्छ।

पिताले प्रकृतिबाट लिएको हावा, पानी, खाद्य अखाद्य आदिबाट बनेको वीर्य र माता श्रोतले सोही स्रोतबाट लिएको पदार्थबाट गर्भाशयमा बनाएको डिम्बको गर्भाधानबाट बनेको भ्रूण प्रकृतिबाट प्राप्त पदार्थहरूको संकलित थुप्रोका रूपमा मानवलगायत जीवहरूको भौतिक शरीर बन्ने र हुर्कने गर्छ। जीवित रहँदा प्रकृतिबाट विभिन्न तत्व जस्तै, मिनरल, पानी, लवण, खाना, हावा आदि जोगाड गरी शरीरको सञ्चालन र वृद्धि हुने गर्छ ।

त्यस्तै मुख्यतः पाँच अंग ठूलो आन्द्रा (गुदद्वार), मृगौला (पिसाब), फोक्सो (श्वास), कलेजो (विषादी) र छाला (पसिना) मार्फत प्रकृतिबाट











जम्मा गरेको तत्व भिन्न रूपमा शरीरले प्रकृतिमा फिर्ता गर्ने गर्छ । जीवित रहँदासम्म मूर्त शरीर र प्रकृतिबीच यस्तो किसिमको लेनदेन चलिरहन्छ । जसका लागि इनर्जी जरुरी हुन्छ ।

शरीरको मृत्युपश्चात् शरीरमा ब्याक्टेरिया आदिको संक्रमणबाट शरीरको फ्रमेन्टेसन हुने र पानी तथा कार्बनडाइअक्साइड बन्दै प्रकृतिमै फर्कने र बचे खुचेको शरीरमा ब्याक्टेरिया पछि मोल्ड, इस्ट अनि सुलसुले किरा आदिको संक्रमणमार्फत मांश पदार्थ र हड्डी आदि कुहिने र डी–मिनीरलाइजेसनमार्फत मिनिरलहरू प्रकृतिमै फर्कन्छ।

अन्ततः शरीरले प्रकृतिबाट जम्मा गरेको कुराहरू प्रकृतिमै बिस्तारै सबै नै फिर्ता गर्ने गर्छ । इनर्जी न त पैदा नै हुनेछ न त नष्ट नै । यो त मात्र एक











रूपबाट अर्को रूपमा परिवर्तन हुने गर्छ भन्ने सिद्धान्त यहाँ पूर्ण रूपमै लागू हुने गर्छ ।

तर्कका आधारमा सिद्धान्त बनाउने र सिद्धान्तको भौतिक रूपमै व्यावहारिक परीक्षण गरिहेर्दा सफल भेटिए मात्र त्यसलाई सही ठम्याउने विज्ञानले हाम्रो भौतिक शरीरको प्रकृतिसँगको लेनदेनमा आधारित जन्म, जीवन र मृत्यु आदि तथ्यहरू केही हदसम्म बनेको छ । शरीरमा सन्तान वृद्धिको क्षमता राख्ने वीर्य बन्दै गर्दा अभौतिक पदार्थ (आत्माको) भौतिक पदार्थमा हालसम्म बुझ्न नसकिएको प्रक्रियाबाट संयोजन भई भौतिक पदार्थमा जीवन दिने तर उक्त जीवन भौतिक पदार्थ निर्मित स्थूल शरीर नमर्दा सम्मको विन्दुसम्म मात्र जोडिइरहने अनि मृत्युको विन्दुमा पुनः हालसम्म बुझ्न नसकिएको प्रक्रियाबाट













वियोजन हुनेबारे विज्ञानले कुनै भेउ पाउन सकिरहेको छैन ।

मस्तिष्कमा आउने तर्क र तर्कले पैदा गर्ने सिद्धान्तलाई विचार भनी नामकरण गर्दै गर्दा आत्मा, चेतना र मन जस्तै विचार पनि अभौतिक तत्व हो भनी मान्ने विज्ञानले यी अभौतिक तत्वका उपजहरू कसरी भौतिक प्रकृतिको वचन, कर्म, गति, ध्वनि, प्रकाश र अन्य शक्ति उत्पादन गर्न सक्षम बनिरहेका छन् भन्ने पहिचान गर्नसमेत सकिरहेको छैन ।

तर्कका आधारमा सिद्धान्त बनाउने र सिद्धान्तको भौतिक परीक्षण गरी अघि बढ्नुलाई आफ्नो सम्पूर्ण चरित्र बनाएको विज्ञानले आफ्नो मस्तिष्कमा आउने ती तर्क कहाँबाट कसरी आयो त भन्ने यकिन गर्न





॥ श्री गणेशाय नमः ॥





सकिरहेको छैन । बोल्ने तालिम प्राप्त सुगाले 'गोपी किष्णको' भन्दै गर्दा मीठो स्वरले स्रोतालाई रोमाञ्चित गराइरहँदा त्सभित्रको अन्तर वस्तुको विशाल अर्थ र मर्म नबुझे पनि सुगाको जिन्दगी चले जस्तो सीमित दायरामा जकडिन पुगेको विज्ञानले विशाल जन समुदायलाई धेरै हदसम्म रोमाञ्चित गर्न भने सकिरहेको अवस्था हो ।

'इनर्जी न त पैदा नै गर्न सकिन्छ न त नष्ट नै, सकिन्छ त मात्र एक रूपबाट अर्को रूपमा परिवर्तन गर्न' भन्ने सिद्धान्त बोकेको विज्ञानले आफ्नो दैनिकीको न त उत्पत्तिको मुहान पहिचान गर्न सकेको छ न त अन्तिम गन्तव्य। भौतिक शरीर कहाँबाट आयो र कहाँ गयो भनी सम्पूर्ण चित्रण गर्न सकेको विज्ञान आध्यात्मिक प्रकृतिका आत्मा,









चेतना, मन, विचार, अहंकार, अनुभूति, रिस, माया, घृणा आदि कहाँबाट आउछ र कहाँ गएर समाप्त हुन्छ भन्ने सन्दर्भमा वास्तवमै अलमलमा जाकिएको छ।

अँध्यारो उज्यालोको विपरीत हैन, बरु अँध्यारो रहनु भनेको उज्यालोको अनुपस्थितिको अवस्था हो भन्ने अनुभूति लिन नसकेको विज्ञानले प्रकृतिमा इनर्जी कहाँबाट आयो र कहाँ जान्छ भन्ने उत्तर कहिल्यै भेटेन। तेसैले निचोड निकाल्यो 'इनर्जी न त पैदा नै गर्न सकिन्छ न त नष्ट नै । सकिन्छ त मात्र एक रूपबाट अर्को रूपमा परिवर्तन गर्न ।'

अनुसन्धानबाट प्राप्त भौतिक तथ्यमा आधारित भएर निचोड निकाल्ने माध्यमबाट विषयको समग्र अन्तरवस्तु पहिचान गरी निचोडमा पुग्ने विज्ञानको










तरिका वास्तवमै अपूर्ण छ। अध्यात्मको पूर्ण पहिचान र अनुभूति गर्नका लागि विज्ञानले आफूलाई यसको परम्परागत अनुसन्धानको घेराबाट माथि उठाउन जरुरी हुनेछ । किनकि आध्यात्मिक ज्ञान भनेको विज्ञानको विपरीतको अवस्था बारेको विद्या हैन । बरु आध्यात्मिक ज्ञान अन्तर्गतका धेरै विद्या मध्येको एक अविद्या मात्र हो विज्ञान। आध्यात्मिक ज्ञानमा संसारिक अस्तित्वदेखि सिर्जना सम्मको ज्ञान, ब्रह्माण्डको उत्पति र ब्रह्माण्डभित्रका गतिविधिको र तिनीहरूको संसारिक अस्तित्व, सिर्जना र ब्रह्माण्डसँगको संयोजनबारे ज्ञानहरू समेटिएका छन्।

अध्यात्मका अनुसार संसारिक अस्तित्व र तपाईं लगायत सम्पूर्ण विषयवस्तुको संसारिक अस्तित्वको













मुख्य र एक मात्र स्रोत भनेको कस्मिक कन्सियसनेस (Cosmic Conciousness) हो। जसलाई तत्पुरुष (वीर्य वा भ्रूण शक्ति) र नारीत्व (अण्ड) शक्ति भनिन्छ) । शिवशक्ति बनेको वास्तवमा पुरुष र नारी शक्ति भनिएको हो । प्रकृति भन्ने शब्द कालान्तरमा नारीका नाममा प्रचलनमा आएको देखिन्छ । जब पुरुष (male formless, colorless, choiceless, beyond attributes energy of passive awarness) प्रकृति (Productive female energy of active attributes of awarness with form, color and choice) सँग मिल्छ ब्रह्माण्डको (Conciousness) सिर्जना हुन्छ। जसरी





पुरुषको वीर्य महिलाको डिम्बसँग गर्भाशयमा मिल्न पुग्दा प्रकृतिको आज सम्मकै उत्कृष्ट उपहार जीवनको अस्तित्व सम्भव बनेको छ, त्यसरी नै प्रकृतिको गर्भबाट ब्रह्माण्डको जन्म हुन्छ । कस्मिक कन्सियसनेस संसारको एक मात्र इनर्जीको स्रोत रहेकाले अस्तित्वमा रहेको जीवन, पृथ्वी, ब्रह्माण्ड र शिवशक्तिबीच कन्सियसनेस (Conciousness) मार्फत जीवनभर सम्पर्क स्थापित हुन्छ ।

धैरै सूक्ष्म रूपमा हेर्दा हाम्रो सानो परिवारमा लोग्ने–स्वास्नीबीच माया, प्रेम, मोह, अहंकार, तिष्णा र घृणाको अन्तर सम्बन्ध हुन्छ। त्यति हुँदा हुँदै हाम्रो सन्तान, दरसन्तानको अस्तित्व सम्भव बनिरहेको छ । माया, मोह, अपेक्षा, उपेक्षा आदिको त्यान्द्रोमा पूर्ण रूपमा जोडिएर पारिवारिक साम्राज्य निरन्तर







चलिरहेको छ । बृहत् सन्दर्भमा समेत शिवशक्ति, पुरुष, प्रकृति, ब्रह्माण्डको र ब्रह्माण्डका प्रत्येक जीवत्माबीच कन्सियसनेस मार्फत सञ्चार स्थापित हुँदै सहअस्तित्व सम्भव बनेको छ ।

नेपालमा बोलिएका "जब विज्ञानको अन्त्य हुन्छ तब अध्यात्मको सुरु हुन्छ" भने गम्भीर भन्ने गम्भीर जाल साँची युक्त पाखण्डलाई ब्रह्मराक्षस रुपी सन्देशको रूपमा पहिचान गर्न नसक्दा विना अध्ययन प्रस्तुत गरिएको र स्थापित गर्न खोजिएको यस्ता फगत बकवास समाजको लागि वेद र विज्ञान दुवैको प्रगति रोक्ने जहरको खानि बनिरहने छ। वैदिक मान्यता अनुसार 'महिला–पुरुष सचेतन शक्ति' मार्फत 'प्रकृति' को कोखबाट 'ब्रह्माण्ड' को सिर्जना हुन गयो। ब्रह्माण्डभित्र रहेको पृथ्वीमा रहेका मानव







जातिले अनुसन्धानबाट प्राप्त भौतिक तथ्यमा आधारित भएर निचोड निकाल्ने र व्यावहारिक मार्गबाट सत्यको नजिक पुग्ने प्रयास गर्दैगर्दा विज्ञान क्षणिक रूपमा सीमित खण्ड भित्रको सीमित ज्ञानमा सुरुवातमा जकडिन पुग्यो। कालान्तरमा वेदमा रहेको विज्ञान बुझेको विज्ञानले सम्पूर्ण सांसारिक सहअस्तित्व तर्फ आफ्नो माटो मोड्यो। त्यो मार्गले विज्ञानलाई जीवात्मा उत्पत्ति र गन्तव्यको विन्दु र त्यो बाहिर समेतको विज्ञान प्रयोजन विहीन बनेर बिलाइरहेको तत्त्व ज्ञान दियो। जसले विज्ञानलाई नियमित सुधार मार्फत आफ्नो क्षमता बिस्तारमा लाग्ने पथ प्रदर्शन गरिदियो।

विज्ञानको आजसम्मको प्रगति र अलमललाई नियाल्दा उत्पत्ति देखि उत्पत्तिकै विन्दुसम्म आफ्नो













प्रयोजन स्थापित गर्ने विज्ञानको हालको प्रयास पूरा हुन भने निकै लामो समय कुर्नुपर्ने देखिन्छ । जबसम्म विज्ञान उक्त दुई विन्दुबाट आफूलाई बाहिर सम्म आफ्नो प्रयोजन स्थापित गर्न सक्ने छैन तबसम्म अध्यात्मको सामुन्ने विज्ञान धेरै पुड्को साबित भइरहने कुरामा संसारमा खासै कुनै विवाद भेटिन्न ।

**भौतिकतामा जीवन**

**फगत जिउनको लागि हुन्छ ।**

**उकाली ओरालीहरू जीवनका**

**दिन काटिदिने बहाना बन्दछ ॥**







अध्यात्मको दुनियाँमा जीवन

अनुभूतिको प्रयोगशाला हुन्छ ।

जीवनका प्रेम, करुणार अनुभूति

जीवन जिउने सहारा बन्दछ ॥

दाना मकैको भौतिकतामा

भुटिखाने अन्न बन्दछ ।

अनुभूतिमा अध्यात्मको

वीज भित्रको बोट बन्दछ ॥

असत्य छ भौतिकता











अनुभव पनि असत्य हो।

जीवन मिथ्या, जगतमिथ्या

माया, प्रेम, करुणामिथ्या ॥

अविद्याको गहिराइमा

भेटिनेछ विद्याको जग ।

आवरण भित्र असत्यको

भेटिनेछ सत्यको भवः॥











# शून्य र अनन्तता

दर्शन र गणित दुवैको जराको रूपमा वैदिक अवधारणामा शून्य र अनन्तताको अस्तित्व देखिन्छ। शून्य र अनन्तता वास्तविकताको विभिन्न पक्षहरूलाई प्रतिनिधित्व गर्ने अत्यन्त अन्तर सम्बन्धित अवधारणा हो। वैदिक ज्ञानको आधारको रूपमा रहेको अनन्तताको अस्तित्व बिना शून्यको कुनै प्रयोजन देखिँदैन। न त शून्य बिनाको अनन्तताको खासै भूमिका देखिन्छ।

आधुनिक विज्ञानले हाम्रो मनस्थितिमा छोडेको प्रभावका कारण मानिसलाई सामान्य रूपमा बुझ्दा शून्य मात्र खाली पनको रूपमा अनुभूति हुन्छ। जब कुनै चिजको अस्तित्व हुँदैन त्यसलाई शून्य भनिन्छ













भन्ने शून्य वादको परिभाषाले आधुनिक विज्ञानको गणित अन्तर्गत जरुरत हुने सामान्य आवश्यकताको समेत पूर्ति गर्न सकिरहेको छैन।

जस्तै आधुनिक विज्ञान अन्तर्गतको गणितमा शून्य लाई शून्यले भाग गर्दा कति हुन्छ भन्ने सामान्य प्रश्नको उत्तर उपलब्ध छैन। त्यसो त आधुनिक विज्ञानसंग अनन्त लाई अनन्तताले भाग गर्दा कति हुन्छ भन्ने समेतको उत्तर छैन। यथार्थमा कुनैपनि अङ्क लाई शून्य वा अनन्तताले भाग गर्दा उत्तर कति भन्ने समस्याको हल आधुनिक विज्ञानअन्तर्गत हाल सम्म विकसित कुनै पनि गणितले दिन सकेको छैन।

यदि शून्य मात्र शून्यता हुन्थ्यो भने यति सहज प्रश्नको उत्तर दिन गणितलाई त्यति ठुलो असहजता







पर्ने थिएन। यी कुराहरूको सहज हल वैदिक ज्ञानमा भेटिने गर्छ। वैदिक उत्तरलाई विज्ञानले समेत काट्न सकिरहेको अवस्था छैन। उल्टो आधुनिक विज्ञानले समेत आफूले हल गर्न नसकेको गणितको त्यो समस्या हल गर्न अल्पकालीन उपाय भन्दै हु-बहुवैदिक अवधारणा सापट लिएर 'शून्य लाई शून्यले भाग गर्दा' तथा 'अनन्त लाई अनन्तताले भागगर्दा, अनन्त हुने भन्दै आफ्नो गणितको समस्या समाधान गर्न उपायकोजोहो गरेको छ।

वैदिक दर्शन र अवधारणाको गहिराईमा शून्यले शून्य-वादको भन्दा निकै गहिरो अवस्था संकेत गर्दछ। शून्यले खालीपन भन्दा निकै परको गम्भीर स्थिति र गुणको प्रतिनिधित्व गर्दछ। एक पक्षवाट हेर्दा शून्यले निश्चित काल र परिस्थितिमा भएको







अव्यक्तता तथा अनुपस्थिति जनाउने गर्दछ। अव्यक्त गुण तथा नदेखिएका सबै सम्भावनाहरूको सङ्केत गर्नेअवस्था वा रूप व्यक्त गर्न शून्य वा शून्यता उपयोगमा आउँछ।

अर्को पक्ष वाट हेर्दा शून्यता लाई मानिसले आफ्नो अनन्त तर्फको यात्रा तय गर्न माध्यमको रूपमा लिने गरिन्छ। वैदिक ज्ञान अनुसार शून्य परम सम्भाव्यमात्र होइन यसै वाट सबै कुराको उत्पत्ति भएको छ।

अव्यक्त अवस्थामा रहेको सबै खाले विशेषताहरूको अभाव बिच अवस्थित रहेको सबै खाले सम्भावनाहरूको स्रोतको प्रतिनिधित्व गर्ने शून्यलाई वैदिक दर्शनमा सम्पूर्ण अस्तित्वमा अन्तर्निहित हुने चिज अर्थात् सब्सट्रेटमको रूपमा





बुझ्ने गरिन्छ। त्यही सब्सट्रेटम (Substratum)को अनन्त: निर्माणको सम्भावना बाट सम्पूर्ण ब्रह्माण्डको प्रकट सम्भव भएको निश्चय गरिन्छ।

प्रकृतिमा अस्तित्वमा रहेका सबै चीजहरू जसलाई पहिचान गर्नर नाम दिन सकिन्छ त्यसलाई वैशेषिक-सूत्रले पदार्थ (Substratum)भन्दछ। तिनै पदार्थहरूको गुण र अस्तित्वको आधारमा सम्पूर्ण ब्रह्माण्ड, प्रकृति र प्रकृति अन्तर्गतका सचेत र अचेत बस्तुहरूको अस्तित्व वारेको यथार्थको व्याख्या गर्ने प्रयास गरिन्छ। बौद्धिक विश्लेषणको आधारमा जान्न र नाम राख्न सकिने वैशेषिक-सूत्रको पदार्थको परिभाषाको नजिकको अङ्ग्रेजी शब्द बस्तुको चरित्रको क्याटागोरी (Catagory) हुने









गर्दछ। पदार्थलाई अङ्ग्रेजीमा भनिने शब्द सबसस्टान्स (Substance) को परिभाषा संग मिल्दैन।

वैशेषिक-सूत्र अनुसार अनुभवका आधारमा जान्न सकिने द्रव्य(पदार्थ), गुण, कर्म (क्रियाकलाप), सामान्यता(जेनेरालिटि), विशेष (विशेषता), समवाय (अन्तरनिहितता) र अभाव (अस्तित्व विहीनता) जस्ता बस्तुहरूको सात चरित्र पदार्थको मूल चरित्र हुने गर्दछ। हरेक चिजमा अन्तर्निहित हुने अनन्त र अविभाज्य पक्षलाई त्यस चिजको द्रव्यगुण भनिन्छ। सीमित र विभाजित हुने पक्षलाई द्रव्य (चिज) भनिन्छ। द्रव्य गुण भित्र पृथ्वी तत्त्व, जल तत्त्व, वायु तत्त्व, अग्नि तत्त्व, आकाश तत्त्व, काल (समय), दिशा, आत्मा तथा मन गरी नौ गुण








संलग्न हुने गर्दछ।

हामीमा हुने जागरूकता, चेतना, चेतन आत्म, चेतन बुद्धि वा शुद्ध चेतना आदिलाई संस्कृतमा चैतन्य भनिन्छ। चैतन्यको अर्थ सचेत ऊर्जा वा सचेत उत्साह हो। जसलाई हामी अङ्ग्रेजीमा कन्ससनेस (Conciousness) भन्ने गर्दछौ। प्रकृतिको आफ्नै चेतना हुने गर्दछ। त्यसलाई सामूहिक चेतना (Universal or Collective Conciousness) पनि भन्न सकिन्छ। जब सामूहिक चेतनाको केही अंश एक व्यक्ति अचेत वाट सचेत हुने क्रममा उसमा अन्तर्निहित भएको पाइन्छ त्यसलाई व्यक्तिको चेतना (Individual Conciousness) भन्ने गरिन्छ।

वैदिक अवधारणा अनुसार व्यक्तिको चेतना संग









मिलेर यी नौ गुणहरूले संसारको निर्माण गर्न महत्त्वपूर्ण भूमिका खेलिरहेका छन्। यिनीहरूले नै आफ्नै स्वतन्त्र अस्तित्व रहेको तत्त्वहरू निर्माणका कारक हुन्। ती मध्ये कुनै व्यक्त छन् त कुनै अव्यक्त। व्यक्त तत्त्वहरूलाई अङ्ग्रेजीमा सबसस्टान्स (Substances) भन्ने गरिन्छ। प्रकट भएका (व्यक्त) तत्त्व र ती तत्त्व निर्माण गर्ने व्यक्त क्वान्टम वेब-पार्टिकल (फ्लेभर, क्वार्क, न्युट्रीनोज, ग्लुओन, टाउ, फर्मिनोजआदि) आदि वाट अङ्ग्रेजीमा भनिने सब-सस्टान्स (सीमित र विभाजित हुने द्रव्य) को निर्माण भएको छ।

वैदिक अवधारणा अनुसार क्वान्टम वेब-पार्टिकल, पृथ्वी तत्त्व, जल तत्त्व, वायु तत्त्व, अग्नि तत्त्व, आकाश तत्त्व, काल (समय), दिशा, आत्मा, मन










तथा चेतनाआदि जस्ता समग्र निर्माणका आधार पदार्थ तथा तिनीहरूको समग्र गुणहरूलाई समुच्चयमा सबसट्राटम (Substratum) अर्थात् वैदिक पदार्थ भन्ने गरिन्छ।

अनन्तता लाई इन्फिनिटी अर्थात् अनन्त भन्ने गरिन्छ। अनन्तले अस्तित्वको असीमितताको अर्थ दिन्छ। वस्तुको सीमितता असीमितताको विपरीत अर्थ होइन। सीमितता निश्चित दायराको परिधिमा राख्न सकिने चिज हो। जुन इन्फिनिटी अर्थात् अनन्त भित्रकै भाग हुन सम्भव हुन्छ।

शून्य आफैमा केही पनि नभएको अवस्था जस्तो देखिने भएता पनि त्यो न त आकाश तत्व नै हो, न त सीमितता वा असीमितता वा कुनै अर्को सङ्केत वा अङ्कको विपरीत अर्थ दिने कुनै चिज हो। शून्य













समेत इन्फिनिटी अर्थात् अनन्त भित्र कै एक अंशको रूपमा रहन सम्भव हुन्छ।

वैदिक अवधारणामा अनन्त आफैमा एक अनन्तको अवधारणा हो जसले सबै सीमा र बाधाहरूलाई पार गर्दछ। अनन्तताले ब्रह्माण्ड (Cosmos), प्राकृतिक चेतना (Universal Conciousness) र प्रकृतिको असीम अस्तित्व (Natural Existence) आदि जस्ता कुराहरूको विशालतालाई चित्रित गर्दछ।

वैदिक दर्शनमा, शून्य र अनन्तता अत्यन्त घनिष्ठ रूपमा जोडिएको छ। शून्य अस्तित्वको यस्तो एउटा मोड हो जसले हरेक कुराको उत्पत्ति हुने बीजको भूमिका खेल्दछ। एउटा बिन्दु जहाँबाट अनन्तताको विस्तार हुने गर्दछ। हरेक प्रकारको शुद्ध सम्भाव्यता





(Pure Potentiality) को आदिम अवस्था (Primordial State) को रूपमा रहेर शून्यले असीम ब्रह्माण्ड प्रकट हुने सारा सम्भावनाहरूको जन्म दिने गर्दछ। अव्यक्त शून्य बाट व्यक्त ब्रह्माण्डको विशालता र असीमित विस्तार गरिदिन्छ।

शून्य अव्यक्तता लाई व्यक्ततामा परिवर्तन गर्ने रूपान्तरण (Transformation) को चुरो बिन्दु (Point of Transition) बनिदिन्छ। त्यसैले त शून्य लाई शून्यले भाग गर्दा अनन्त हुनपुग्दछ, जसरी अनन्तलाई अनन्तले भाग गर्दा अनन्त नै रहन्छ। जुनसुकै अङ्क लाई पनि शून्यले भाग गर्दा त्यसकोफल त्यसैले अनन्त नै हुने गर्दछ।

आधुनिक विज्ञान अलमलिएको क्षेत्रमा वैदिक





अवधारणाले उसको अलमल हटाइ दिएर गणितलाई समेत अर्थपूर्ण गरिदिन सकेको छ। अव्यक्तता लाई व्यक्ततामा रूपान्तरण गर्ने चुरो बिन्दु (Point of Transition) व्यक्तता लाई अव्यक्ततामा पुऱ्याउने मुक्ति मार्ग समेत बन्नसक्ने भएकोले तपस्या, योग र ध्यानजस्ता विषय तथा समाधिको उत्तम विकल्पमा शून्यको नै उपयोग गर्ने गरिन्छ।

शून्य र अनन्तता बिचको सम्बन्ध लाई अर्को सन्दर्भमा समेत व्याख्या गर्न सकिन्छ। शून्यले अव्यक्त र अद्वैत वास्तविकता लाई प्रतिनिधित्व गर्दछ। अनन्तताले विविध वास्तविकताको प्रकट गरिदिने गर्दछ। यी दुई चरम विपरीत सीमाहरू मिलेर क्रमिक प्रगति र नियमित अस्तित्वको





अभिव्यक्त गरिरहेको हुन्छ। जसले गर्दा विभिन्न तहका चेतनाका स्तरहरू समाविष्ट वास्तविकता र आयामहरूको निर्माण सम्भव भएको छ। हरेक सूक्ष्म किरणहरूको संयुक्त गठ जोडले सारा ब्रह्माण्ड चहकिलो बनाउने सूर्यको प्रकाशको निर्माणगरे जस्तै सम्बन्ध शून्य र अनन्तता बिच रहेको देखिन्छ।

माथि उल्लेखित कुराहरूलाई अत्यन्त सरल तरिका बाट समेत प्रस्टगर्न सकिन्छ। मानव शरीर विभिन्न कोशिका तथा अङ्ग प्रत्यङ्ग मिलेर बनेको हुन्छ। त्यसले समग्र मानिसको पहिचान दिन्छ। म, मेरो भन्दै आफ्नो पहिचान खोज्ने क्रममा मानिस अहङ्कारी बनी दिन्छ। मानिस भनेको के हो? मानिस हुन के हुनु अनिवार्य छ ? त्यसलाई एकचोटि मनन गरेर हेरौँ।









के मानिस हुन उ संग उसको हात हुन जरुरी छ? दुवै हात नभएको व्यक्ति लाई पनि त मानिस नै भनिन्छ। दुवै गोडा नभए पनि मानिस मानिस नै हुन्छ। दिमाग रहेनछ भने पनि उ मानिस नै रहन्छ। मुटु वा फोक्सो कृत्रिम राखेकै भए पनि मानिस मानिस नै हुन्छ। पुरै टाउको नभएको होला र पनि जीवित छ भने मानिस मानिस नै हुने छ।

हामीले निश्चित नामकरण गरेको जुन सुकै अङ्ग नहुँदा पनि मानिस मानिस नै गनिने रहेछ। केवल उ जीवित रहेको हुनु पर्‍यो। मानिस लासमा परिवर्तन भएको हुनु भएन। यसको अर्थ तपाइको शरीरको हरेक भाग पदार्थको गठ जोडले बनेको एक अङ्ग हो। सम्पूर्ण अङ्ग प्रत्यङ्गहरूको संयुक्तताले तपाइको पहिचान निर्माण गरेको छ। तपाइको










पहिचान पुरा गर्ने जुन सुकै अङ्ग नहुँदा समेत तपाईँको मानिसको रूपको अस्तित्व सम्भव हुने रहेछ ।

यदि तपाइको शरीर वाट ती सबै अङ्ग हटाइ दियो भने पक्कै तपाईँले मानिसको रूपको पहिचान गुमाउनु हुने छ । त्यो बेलामा तपाइको जीवित शरीर भित्र रहेको चेतना वा आत्मा तपाइको शरीर वाट मुक्त हुने छ । सामूहिक चेतना वा परमात्मामा विलीन हुने छ । तपाइको शरीरलाई मानिसको रूपको पहिचान दिलाउन तपाइको एक एक अङ्गको खासै अर्थ छैन । अर्थ शून्य जस्तै छ । तर समग्रमा सबै शून्य शून्य अर्थको लाग्ने अङ्गहरू मिलेर नै तपाइको आफ्नो समग्रमा मानव शरीरको अनन्त कोशिका निर्मित संरचनाको पहिचान बनाएको छ ।













मानिसको रूपमा पहिचान दिलाउन तपाइको शरीरको एक एक अङ्गको अर्थ शून्य जस्तै भएता पनि तपाइको शरीर जीवित रहन त्यसको भूमिका शून्य भने छैन । शून्य भन्दा फरक छ ।

समग्रमा त्यसले तपाइको भौतिक शरीर निर्माण गरिरहेको छ भने चेतना वा चेतन शरीर सँगको गठ जोडमा तपाइको शरीर जीवित शरीरको रूपमा अस्तित्वमा रहेको तपाइले महसुस गरी रहनु भएको छ । लगभग शून्यताको बिन्दु रुपी तपाइको हरेक चेतन शक्ति मिलेर बनेको असीमित चैतन्य शक्ति अन्ततः अनन्त कोशिका निर्मित शारीरिक संरचना संग मिलेर तपाईं लाई अनन्त अनुभव र अनुभूतिहरू दिलाउने सचेत जीवित संरचना दिने गर्दछ । स्थूल शरीरवाट तपाइको चेतना छुट्टिंदै गर्दा तपाइको











निजी चेतना अनन्त सामूहिक चेतनामा मिसिने गर्दछ। लगभग शून्यताको बिन्दुको रूपमा रहेको चेतनाको दीपले सामूहिक चेतना वा परमात्मामा विलीन हुने र अनन्तताको प्राप्ति गर्ने अवसर प्राप्त गर्दछ।

उल्लेखित यथार्थको ज्ञानले शून्य अर्थात् जिरो र अनन्त अर्थात् इन्फिनिटी बिचको अन्तर सम्बन्ध र तिनीहरू बिचको सम्बन्धको तपाइको निजी जीवनमा रहेकोभूमिका बारे केही कुरा अनुभूति गर्न तपाईँलाई पक्कै सघाउने छ।













# आत्मबल विना आरोग्य प्राप्ति सम्भव छैन

मानव जीवन निर्माण गर्न महत्त्वपूर्ण भूमिका खेल्ने कतिपय पक्ष सिधै मानव इन्द्रियहरूको मापनको दायरामा आउने गर्दछन भने कतिपय विभिन्न वैज्ञानिक उपकरणको सहयोग वाट मानव इन्द्रियहरूको मापनको दायरामा ल्याएर अनुभूति गर्न सम्भव बन्दछ। वैज्ञानिक मापनको क्षेत्रमा हाल कायमै रहेको प्राविधिक असक्षमताका कारण हामीले पहिचानगर्न र महसुस गर्न सकिरहेको जीवन जीवित राख्न अहम् भूमिका खेली रहेका विभिन्न निर्माण शक्तिका महत्त्वपूर्ण स्पेक्ट्रमहरु









विज्ञानको मापनको दायरा भित्र आउन सकेको छैन।

वैज्ञानिक मापन क्षमताको असक्षमताका कारण हामीले अनुभूति गर्ने तर वैज्ञानिक रूपमा प्रमाणित गर्न नसकिएको त्यस्ता तत्त्व हरूमा मूलतः अव्यक्त अभौतिक शक्ति निर्मित अवयवहरू पर्ने गर्दछन्।

मानव इन्द्रियहरूको मापनको दायरामा ल्याउन सकिएको ब्रह्माण्डको पदार्थहरु भौतिक पदार्थहरु हुन्। ब्रह्माण्डको सम्पूर्ण संरचनाको विशालताको तुलनामामानव इन्द्रियहरूको मापनको दायरामा आउने भौतिक पदार्थहरु अत्यन्त न्यून हुने गरेकोछ।

पदार्थको सुक्ष्म भौतिक रूप बारे अवलोकन गर्दा निश्चित बिन्दुमा पुगेर हरेक पदार्थमा मानव









इन्द्रियहरूको मापनको दायरामा नआउने अद्भुत शक्ति निर्मित तत्वको सर्बाधिक शुक्ष्म अभौतिक रुप भेटिन्छ। पदार्थको सर्बाधिक शुक्ष्म अभौतिक रुप ब्रह्माण्ड निर्मित सम्पूर्ण भौतिक गुणका तत्वहरुको निर्माणको आधार बनेर अस्तित्वमा रहेको भेटिन्छ। हरेक प्राकृतिक पदार्थ भौतिक र अभौतिक व्यक्त तथा अव्यक्त गुणका तत्वहरुको सारको गठ-जोड वाट बनेको हुन्छ।

पदार्थको सर्बाधिक शुक्ष्म अभौतिक रुप हामीले हेरेर वा छोएर महसुश गर्न सक्दैनौ। सर्वाधिक सूक्ष्म अभौतिक रूप निर्माणको ऊर्जा समेत हामीले हेरेरवा छोएर महसुस गर्न सक्ने दायरा भित्र पर्दैन। जसलाई चेतनाको शक्ति वाट अनुभूति गर्नसम्भव हुन सक्दछ।










चेतन शक्तिको उपयोग वाट अभौतिक पक्ष बारे अनुभूति लिने प्रक्रियालाई चिन्तन, मनन, मेडिटेसनवा ध्यान आदि भन्ने गरिन्छ।

मेटाफिजिक्सले हरेक जीवन जीवित राख्ने जैविक शक्ति बारे चर्चा गर्ने गर्दछ। निश्चित प्रकृतिको जीवन ज्युँदो राख्ने प्राकृतिक ऊर्जा लाई हामी आत्मा अर्थात् प्राण भन्ने गर्दछौ। आत्मा अर्थात् प्राण अव्यक्त अभौतिक चिज मात्र नरहेर शरीरजीवित राख्ने जिउँदो शरीरको अभिन्न मेटाफिजिकल पक्ष रहेको वैदिक अवधारणा भेटिन्छ।

मेटाफिजिकल पक्ष मेटाफिजिकल गुण निर्मित छ। कम्पन अर्थात स्पन्दनको (पल्स) रूपमा प्रकृतिमा अस्तित्वमा भेटिने मेटाफिजिकल गुण सम्पूर्ण ब्रह्माण्डको सार र जीवित बस्तुमा अन्तर्निहित हुने













अव्यक्त क्षमताको मूल श्रोतको रूपमा रहने ठानिन्छ।

जब हामी मेटाफिजिक्समा गहन चासो राखी त्यसको अध्ययन सुरु गर्दछौ तब हामी आफैले देखि रहेको र महसुस गरिरहेको भन्दा पृथक प्रकृतिको जीवनका विविध पक्षहरू अनुभूति गर्न थाल्दछौ। हामीले अनुभूति गरिरहेको चिज मात्र नभएर अनुभूति गर्नेपक्ष, अनुभूतिले पैदागर्ने आफ्नै अनुभवहरू समेत आफैमा मेटाफिजिकल चिज रहेको ज्ञान प्राप्त हुन्छ।

मेटाफिजिकल गुण तथा ऊर्जाको मापन गर्ने विज्ञानको उपकरण विकसितन बनिरहेको र त्यसलाई समर्थन हुने गरी आएको वैज्ञानिक सिद्धान्तहरू समेत विज्ञानको स्थापित मुख्य











अवधारणा अन्तर्गत नराखिएको कारण हिजोको अवस्थामा आफूलाई वैज्ञानिक पक्षधर ठान्ने कतिपय मानिसहरू चेतन शक्ति वाट आधि-भौतिक अर्थात् मेटाफिजिकल कुराहरूको अनुभूति लिन सकिँदैन भन्ने मान्यता राख्दथे। उनीहरूको विश्वास वैदिक अवधारणा र विश्वास सँग बाझिने गरेको भेटिन्थ्यो।

क्वान्टम फिजिक्सले भौतिक विज्ञानको सूक्ष्मतम क्षेत्रको मापन क्षमतामा विस्तार गरी विभिन्न तथ्यहरू उजागर गर्न सक्षम बनेको तथा क्वान्टम बायोकेमेस्ट्रीका वैज्ञानिक सिद्धान्तहरू समेत विज्ञानको मुख्य अवधारणाको रूपमा स्थापित बनेका कारण वैदिक अवधारणा सत्यताको नजिक रहेको रहस्य दिन प्रतिदिन उजागर हुन थाल्यो। त्यसले आधि-भौतिक पक्षको अस्तित्व रहने कुरा













सुन्न समेत नचाहने अधिकांश मानिसहरूको अवधारणामा समेत परिवर्तन ल्याउन थाल्यो। वैदिक अवधारणा तर्फ उल्लेखनीय रूपमै विश्वको ध्यान खिचिन थालेको भेटियो।

ध्वनि, स्पर्श, गन्ध, स्वाद र दृष्टि जस्ता सामान्य इन्द्रियहरू मार्फत सजिलैसँग अनुभव गर्न सकिने कुराहरू समेत वैज्ञानिक वास्तविकता नरहेको ठान्नु पर्ने विज्ञानको हिजोको बाध्यता बिच मेटाफिजिक्स वास्तविक होइन, हुन सक्दैन र त्यो मात्र सिउडो साइन्सको भ्रमको विविध पक्षरहेको अध्यापन सामग्री बनाएर दुनियाँलाई पढाउने गरेको विज्ञान आफै सामान्य इन्द्रियहरू मार्फत मेटाफिजिक्सको अनुभूति सम्भव हुने तथ्यहरू सत्यताको नजिक रहेको पुष्टि गर्न तर्फ लागेको भेटिन्छ।







अथर्ववेदको अवधारणा अनुरूप मानिस शारीरिक, मानसिक र आध्यात्मिक रूपमा स्वस्थ रहन जरुरी हुने अनिवार्य पूर्वाधारको रूपमा उसको आफ्नै शारीरिक, मानसिक र आध्यात्मिक स्व-उपचार क्षमता रहने गर्दछ। जुन उसको आफ्नै आत्मबल र आत्मा ज्ञान मार्फत परिचालित हुन्छ।

जीवनको सहज निरन्तरता कायम गर्न आफ्नो समस्या आफैले आन्तरिक रूपमा समाधान गर्न प्रतिबद्ध शरीरको आन्तरिक गुण तथा ऊर्जाको फिल्ड (तागत) लाई शरीरको हिलिङ्ग अर्थात् स्व-उपचार क्षमता भनिन्छ।जीवन यापनको क्रममा नियमित सञ्चालनमा रहने शारीरिक, मानसिक र आध्यात्मिक गतिविधिले नियमित रूपमा आन्तरिक संरचनागत, प्रणालीगत, गुणगत तथा








सोचगत प्रतिकुलता र असहजताहरू उत्पन्न गरिदिन्छ। जसलाई मानिसको आफ्नै स्व-उपचार क्षमताले नियमित नियन्त्रणमा लिएर सामान्य रूपमा फर्काउने गर्दछ। जसलाई शरीरको प्राकृतिक प्रतिरक्षा प्रणालीको भन्ने गरिन्छ।

प्राकृतिक प्रतिरक्षा प्रणालीले शरीरमा आइलागेका असहजताको समय, प्रकृति, हद र तत्काल उपचारको जरुरत अनुरूप अस्थायी वा स्थायी प्रकृतिको उपचारको उपायको अवलम्बन गर्ने गर्दछ। त्यसको लागि आन्तरिक हिलिङ्ग अर्थात् स्व-उपचार तागतको कुशलता पूर्वक उपयोग हुने गर्दछ। आफ्नो आन्तरिक समस्याको प्राकृतिक प्रतिरक्षा प्रणाली आफैले अल्पकालीन र दीर्घकालीन समाधान गर्न सक्रिय बन्दछ।








आन्तरिक ऊर्जा फिल्डले विद्यमान समस्याको समाधान गर्न सक्दा व्यक्तिले स्व-उपचार मार्फत सन्चो भएको महसुस गर्दछ। जीवन स्वस्थ रहने वा रोगी बन्नेबारे निर्धारण गर्ने आन्तरिक हिलिङ्ग ऊर्जा फिल्ड जीवन कल्याणको तथा रोगको उत्पत्ति दुवैको मुख्य कारक र स्रोत बन्ने गर्दछ। ऊर्जा फिल्ड सन्तुलित र शक्तिशाली राख्न खान पान, जीवन पद्धतिर आत्म ज्ञानको गहिरो भूमिका रहन्छ। आत्म ज्ञान र आध्यात्मिक सचेतनाले मन, आत्मा, उच्च-आत्मा लगायतका विषयको भित्री दिव्यता सम्म डोऱ्याउने गर्दछ।

हाम्रो परम्परागत मान्यतामा चेतनाको परीक्षण मार्फत विकसितर अनुभूतिको व्यावहारिकतामा प्रमाणित ज्ञानलाई चुरो ज्ञान अर्थात् ए-ज्ञान वा









अध्यात्म विज्ञान भनिन्छ। चेतना मार्फत फुरेका सोच रुपी परिकल्पनाका सिद्धान्तहरू लाई वैज्ञानिक प्रयोगशालाको परीक्षण वाट मापन गरी सत्य रहे न रहेको यकिन गरी व्यावहारिक रुपमा प्रमाणित गरिने ज्ञानलाई वि-ज्ञान भन्ने गरिन्छ।

विज्ञानको अर्थ विशिष्ट ज्ञान हो। जुन अविद्या अन्तर्गत पर्दछ। विद्याको सार बुझ्न र अनुभूति गर्न आधारभूत अविद्याको राम्रो ज्ञानको अनिवार्यता रहन्छ। अविद्या अन्तर्गतका विज्ञानले मापन गर्ने क्षमताको विकास बनेको हद सम्मको सम्पूर्ण पक्ष विज्ञान अन्तर्गत आउने हुँदा विज्ञान लाइ अविद्या भित्रको विशिष्ट ज्ञान भनिएको हो। जसले अविद्याको प्रत्यक्ष र प्रमाणित महसुश गर्ने अवसर दिने गर्दछ। अन्तर्मनमा त्यसको उपस्थिति र




प्रभावको गहिरो विश्वास दिलाउन भूमिका खेल्ने गर्दछ।

विज्ञान निर्मित वैज्ञानिक प्रयोगशालाको सीमित क्षमता भित्र मापन हुन सक्ने ए-ज्ञानको सिद्धान्तहरू मात्र वैज्ञानिक प्रयोगशालाहरूमा परीक्षण गर्न सम्भव हुने हुँदा विज्ञानले परीक्षण गर्ने विधि पहिचान नगरेको क्षेत्रको ज्ञान अवैज्ञानिक हुने गर्दैन। न त त्यो असत्य रहेको नै प्रमाणित भएको हुन्छ। ती ज्ञानहरू यथार्थमा सही रहेको वा नरहेको भनी विज्ञानको उपलब्ध क्षमताले यकिन गर्न नसकिएको ज्ञानको रूपमा रहने गर्दछ।

चलमल विहीन (तम गुण युक्त) प्रकाश रहित कालो अँधेरोको अवयव लाई वैदिक अवधारणाले आकाश भन्ने गर्दछ। आकाशको गर्वमा अव्यक्त रूपमा कैद





रहेको अव्यक्त अवयवको (अव्यक्त प्राकृतिक इच्छा शक्ति) व्यक्त हुने चाहनाले आकाशमा अप्रत्याशित चहलपहल (व्यक्त प्राकृतिक इच्छा शक्ति) प्रस्फुटित गरिदिन्छ। जुन चुलबुले प्रकृतिको रूपमा व्यक्त हुने गर्दछ। जसलाई हामी सामूहिक वा युनिभर्सलमन (Universal Mind) अर्थात् अव्यक्त प्राकृतिक सम्भावना भन्ने गर्दछौ। त्यही अव्यक्त प्राकृतिक सम्भावना रुपी मन ऊर्जा सङ्कुचित तथा रूपान्तरित भएर निश्चित विन्दुमा केन्द्रित रहेर बाक्लो गाडा पन निर्माण गरी मौलिक ऊर्जाको सार (Energy Affinity Point) मा रूपान्तरण हुने गर्दछ।

जसले व्यक्त "प्राकृतिक चेतना" को आधार तहको निर्माण गर्दछ। वायुमण्डलमा प्राकृतिक रुपमा







सर्वत्र उपलब्ध हुने सबै प्रकारको प्राकृतिक चेतनालाई सामूहिक चेतना (युनिभर्सल कन्ससनेस) भन्ने गरिन्छ। सामूहिक चेतना रूपमा एक रूप वाट अर्को रूपमा नियमित परिवर्तन हुन सक्ने क्षमता तथा गुण हुने गर्दछ। एक निश्चित प्रकृतिको सामूहिक चेतना निर्जीव रूप वाट जीवित रूपमा परिवर्तन हुने क्षमता राख्दछ। जीवित रूपमा परिवर्तन हुने चेतनाको आफूले बोकेको सूचनाको अनुभूति गर्ने क्षमता रहन्छ। यस्तो संवेदनाको गुण समेत राख्ने क्षमताको चेतना निर्जीव चीजहरूले सजिलै अवशोषित गरी आफ्नो निर्जीव अस्तित्व लाई सजिव वा जीवित अस्तित्वमा बदल्न सक्दछ।

चेतना भौतिक ब्रह्माण्डको सृजनाको मूल तत्त्व हो। ब्रह्माण्डको संरचना निर्माण हुने क्रममा ब्रह्माण्ड













निर्माण गर्ने पदार्थ भन्दा पहिले बौद्धिकता अर्थात् इन्टेलिजेन्स (व्यक्त प्राकृतिक इच्छा शक्ति) निर्माण भएको थियो । बौद्धिकता अर्थात् इन्टेलिजेन्स (व्यक्त प्राकृतिक इच्छा शक्ति) नै ब्रह्माण्डको संरचना निर्माण गर्ने पदार्थहरू निर्माण गर्ने एक कडीको रूपमा अस्तित्वमा आएको थियो।

मानिसहरूले आफ्नो शरीरलाई नै आफ्नो पहिचानको रूपमा लिने गर्दछ। ढिलो वा चाँडो आफ्नो शरीर नास हुने निश्चित रहेको बुझेको मानिसले आफ्नो शरीर नास हुने क्रममा उसको चेतना पनि लोप हुने विश्वास गर्दछ। पहिला शरीरले नै चेतना उत्पन्न गर्छ भन्ने विश्वास बोक्ने गरेको विज्ञान अनुरूप शरीर मर्दा चेतना पनि मर्छ भन्ने कुरा यकिन गर्नु स्वाभाविक नै थियो। तर यथार्थ त्यसो होइन।











त्यो भ्रम पूर्ण मान्यताको जगमा विकसित विश्वास हो। चेतनाले शरीरको निर्माण गर्ने हुँदा शरीर मर्दैमा चेतना समेत मृत्यु हुनेकुरा सत्य होइन। यथार्थमा चेतनाको मृत्यु सम्भव छैन। शरीरको मृत्यु हुँदा चेतना एकविचारको रूपमा अस्तित्वमा रहन्छ।

हामीले सामान्य रुपमा बुझ्ने गरेको स्थान (लोकेसन- दिसा), आकाश (स्पेस) र समय (टाइम) कुनै निश्चित वस्तु वा चीजहरू होइनन्। संवेदनाको गुण र क्षमता बोकेको चेतना शरीर संग संयोजन गर्ने मुख्य आधार हुन्।

अथर्व वेदको बुझाइमा तिनीहरु जीवहरूको संसार अनुभूति गर्ने उपकरणहरू हुन्। जसरी एउटा कछुवाले आफू सँगै आफ्नो शरीरको खपेटा बोकेर हिंड्ने गर्दछ त्यसरी नै खपेटा रुपी आवरणको









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



रूपमा स्थान (लोकेसन-दिसा), आकाश (स्पेस) र समय (टाइम) हरेक जीवको जीवित अस्तित्व संग नियमित जोडिएर रहेको हुन्छ। जिबनको कुनै बिन्दुमा त्यो सन्तुलित त्रिकोण जीवको शरीर संग बिच्छेद हुन पुग्दछ।

चेतना एक गैर-स्थानीय क्वान्टम कण निर्माण गर्ने सबै भन्दा सूक्ष्मतम ऊर्जा थैली हो जुन परा गुणको हुने गर्दछ। जसरी क्वान्टम वस्तुहरू फरक फरक समयमा फरक फरक स्थानमा रहने गैर-स्थानीय चरित्रका हुन्छन् चेतना पनि त्यस्तै गैर स्थानीय हुन्छ। केबल बक्सले स्याटलाइटको सिग्नलहरू प्राप्त गर्ने तरिका अनुरूप शरीरले चेतना प्राप्त गर्दछ।





॥ श्री गणेशाय नमः ॥







केबल बक्स जस्तो भौतिक वाहनको रूपमा रहेको शरीरको मृत्युमा चेतना समाप्त हुन सम्भव छैन। त्यसैले जीवको शरीर संग इलेक्ट्रिक सप्लाई सिस्टमको प्लगको पोजेटिव, नेगेटिब र न्युट्रल चार्ज बोकेको तिन पक्षीय तार जस्तै लाग्ने स्थान (लोकेसन-दिसा), आकाश (स्पेस) र समयको (टाइम) सन्तुलित त्रिकोण छुट्टिए पनि जीवको चेतन अस्तित्व कायम नै रहन्छ।

चेतना यथार्थमा समय, दिसा र आकाशको परिधि भन्दा बाहिर अवस्थित हुने गर्दछ। त्यो मानव शरीर भित्र वा बाहिर जहाँ पनि रहन सक्दछ। संसारमा एकै साथ विभिन्न ब्रह्माण्डहरू एकै साथ अवस्थित हुन सक्ने सम्भावना रहेकोले एक ब्रह्माण्डमा मृत













भएको शरीरको चेतना अर्को ब्रह्माण्डमा अस्तित्वमा रहन समेत सम्भव हुन्छ। उक्त समयमा चेतनालाई अर्को ब्रह्माण्डले अवशोषित गरेको हुन्छ।

त्यसको मतलब के हो भने मृत शरीर छाडेको चेतना सुरुङ यात्राको क्रममा नर्क वा स्वर्गमा पुगेर सकिने, आनन्द वा दुखमा फस्ने भन्ने हुँदैन। चेतना त्यही वा फरक ब्रह्माण्डमा असीमित समय सम्म जीवित अस्तित्वमा रहन सक्दछ। सामुहिक चेतना संग बिलिन भएर सामुहिक अस्तित्वको भागको रुपमा रहन पनि सक्दछ।

आफ्नो निर्जीव अस्तित्व लाई जीवित अस्तित्वमा परिवर्तन गरेको जिउँदो तत्त्वलाई नियमित रूपमा आफ्नो जीवित अस्तित्व कायम राख्न सामूहिक चेतनाको केही अंशको नियमित रूपमा जरुरत







पर्दछ। जीवन जीवित राख्न जीवित अस्तित्वमा कैद हुने सामूहिक चेतनाको अंश लाई प्राण ऊर्जा (ची-ऊर्जा) भन्ने गरिन्छ।

वैदिक साहित्यले सामूहिक चेतना लाई परमात्मा (परम-आत्मा) र जिउँदो तत्त्व भित्र समाहित बनेको परमात्माको अंशलाई आत्मा भन्दछ। प्राय: शान्त रहन नसक्ने गुण बोकेको आत्मा निर्माणको अभिन्न पक्ष मनको चुलबुले पनलाई चित्त भन्ने गरिन्छ।

शरीर, मन र आत्माको गठ जोडवाट जीवन बन्दछ। भौतिक शरीरको स्नायु तथा मस्तिष्कका न्युरोनहरुले सामूहिक चेतनाको अवशोषित गरी सम्पन्न गर्ने विशेष प्रकारको परिवर्तनले सामूहिक चेतनाको निश्चित अंश प्राणको रूपमा परिवर्तित भएर भौतिक शरीरलाई जीवित तुल्याउने गर्दछ।











जसले स्नायु तथा मस्तिष्कका न्युरोनहरूमा विलक्षण प्रतिभा र क्षमता उपलब्ध गराउँदछ। जसलाई बायो-नर्ब फोर्स भनिन्छ। त्यही बायो-नर्ब फोर्सको शक्ति लाई वैदिक साहित्यले चेतन शक्ति (कन्ससनेस) भन्ने गरेको छ।




शरीरले चेतन शक्तिको प्राप्ति मूलतः दुई उपाय वाट गर्ने गरेको देखिन्छ। पहिलोमा मस्तिष्कका न्युरोनहरुले सामूहिक चेतनालाई प्राण शक्तिको रूपमा परिवर्तन गरी आफूमा कैद गरी जीवनलाई









जीवित राख्दछ। दोस्रोमा सामूहिक चेतना हामीले पिउने पानी, खाने खाना र फेर्ने श्वास-प्रश्वासले आफूमा कैद गरी शरीर भित्र पुऱ्याउने गर्दछ।

खान पान भन्दा श्वास-प्रश्वास मार्फत हाम्रो शरीरले वातावरणको सामूहिक चेतना शरीर भित्र अत्यधिक मात्रामा आपूर्ति गर्दछ।

वैदिक सिद्धान्तको निचोडको सार अनुरूप खानपान भित्र कैद भएको सूर्यको ऊर्जा मार्फत ब्रह्माण्ड चेतनाले मानव चेतनामा ऊर्जा थपी रहेको हुन्छ। एक वैज्ञानिक अनुसन्धान अनुरूप शरीरको निर्माण र सञ्चालनमा उपयोग हुने सम्पूर्ण ऊर्जामा हावा अथवा अक्सिजन वाट ८३%, पानी वाट ११% र अन्य खाना वाट ६% आपूर्ति हुने गर्दछ।









ब्रह्माण्ड चेतनाले सूर्यको किरण रुपी फोटोन ऊर्जा मार्फत मानव चेतनालाई नियमित सचेतता उपलब्ध गराउने हुनाले त्यसलाई भर्गो ज्योतिको रूपमा चिनिन्छ। भर्गो ज्योतिलाई दैविक उज्यालो भनेर किन भनिएको हो भने त्यसले हाम्रो चेतना लाई दैविक चेतनामा रहेको ज्ञान अर्थात् सचेतताको उपलब्ध गराउने गर्दछ।

मनन चिन्तन जस्ता विषय वाट प्राप्त हुने अनुभूतिले महसुस गराउने गहिरो मननलाई दैविक उज्यालो भनी बुझिन्छ। त्यसैले गायत्री मन्त्रमा हामी यही "भर्गो ज्योति" को "परम दिव्य शक्ति" र त्यसको महत्त्व बारे गहिरिएर चर्चा गर्ने गर्दछौ। आध्यात्मिक अथवा धार्मिक सन्दर्भमा प्रयोग हुने परमात्माको दिव्य ज्योति वा पवित्र उज्यालो भनेर यही "दैविक






उज्यालो" को कुरामा केन्द्रित हुने गर्दछौ।

वेद र विज्ञान दुवैको सहयोगमा यो बारे विचरण गर्दा हरेक व्यक्तिले आफ्नो चेतनालाई सचेत राख्न हरेक पल उसलाई ब्रह्माण्ड चेतना मार्फत चैतन्य ऊर्जा आपूर्तिको जरुरी हुन्छ। ब्रह्माण्ड चेतनाको अंश निजी चेतनाको रूपमा रूपान्तरण हुने क्रममा त्यो भर्गो ज्योतिमा रूपान्तरण हुन्छ। यसरी रूपान्तरित भर्गो ज्योति हावा, पानी र खानामा अवशोषित रहेर व्यक्तिको आत्मा बल निर्माण गर्दै आत्मा बल मार्फत चेतनामा पुग्दछ। जसले व्यक्तिको आत्मा बललाई बलियो टेवा दिने काम गर्दछ। आत्मबल चेतन क्षमता नियमित सञ्चालनमा राख्न सफल बन्दछ।

यसरी व्यक्तिको आत्मबलले खाना मार्फत नियमित











प्राप्त गर्ने कूल भर्गो ज्योति रूपको चैतन्य ऊर्जाको ८३% हावा वाट, ११% पानी वाट र ६% को हाराहारीमा खाना वाट प्राप्त गरेको हुन्छ। त्यो बाहेक व्यक्तिको चैतन्यले सूर्य र चन्द्रको प्रकाश वाट खान वाट भन्दा दुई गुणा अधिक भर्गो ज्योति ऊर्जा सिधै अवशोषित गर्ने गर्दछ।

वेद र विज्ञानको आधारमा यसरी मानव जीवनलाई हेर्दा प्राणायाम, ध्यान जस्ता अक्सिजनको आपूर्ति गर्ने, शुद्ध हावा दिने गतिविधि, शुद्ध जल ग्रहणको समयमा र व्रतको समयमा ध्यान अधिक चिन्तन मननमा जाने र अधिक भर्गो ज्योति समेत उपलब्ध हुने गर्दा मानिसको जीवनको गुणस्तर वृद्धि र आफ्नो मनोवैज्ञानिक र वैचारिक क्षमतामा अधिक प्रभावकारिता थप्न मानिस सफल हुने गरेको







देखिन्छ। भोको पेटले मानिसलाई अत्यधिक धेरै पाठ पढाउने समेत गर्दछ।




यहि कारणले गर्दा शरीरको नियमित वृद्धि, मर्मत, संहार र परिचालनको क्रममा ध्वंस हुने तथा निर्माण हुने प्रक्रियामा पैदा हुने नयाँ संरचनाको लागि जरुरत पर्ने जीवन्त शक्तिको कमी हुन पाउँदैन। समग्र शरीर नियमित जीवित रहन सम्भव हुन्छ।











स्नायु प्रणालीको चेतना अथवा नर्ब-फोर्स (बायो-नर्ब फोर्स) लाई मानिसको आत्म बल (मनोवैज्ञानिक तागत) समेत भन्ने गरिन्छ। चेतन, अवचेतन र अचेतन तिनै अवस्थामा जीवको व्यवस्थापन स्नायुकोतागत (बायोनर्भस) अथवा चेतनाको क्षमताको हदले गर्ने गर्दछ। जहाँ चेतनाको क्षमताको हदले समग्र मानव स्मरण (आनुवंशिक, शारीरिक, मस्तिष्क, प्रतिरक्षा प्रणाली आदिको रूपमा सञ्चित स्मरणहरू) लाई जनाउने गर्छ।

शरीरमा स्नायु ऊर्जाले नियमित रूपमा विद्युतीय पल्सको (धड्कन) निर्माण गर्दछ। स्नायु तथा मस्तिष्कका न्युरोन हुँदै यात्रा गर्ने क्रममा विद्युतीयपल्सले चुम्बकीय क्षेत्रको (ह्युमन










म्यागनेटिजम) विकास गर्दछ। शरीर भर पैदा भएका विद्युतीय पल्स तथा चुम्बकीय ऊर्जाका संयुक्त फिल्डहरूकोसमग्रताले मानव इनर्जी फिल्डको निर्माण गर्दछ।

शरीरको अंश अंशमा, निश्चित भागमा र समग्र शरीरभर विकसित हुनजाने मानव इनर्जीफिल्डले व्यक्तिको शारीरिक, मानसिक, मनोवैज्ञानिक तथा आध्यात्मिक पक्ष सबल राख्ने स्व-हिलिङ्ग प्रणालीकोनिर्माण गर्दछ। जसलाई हामी स्नायु प्रणालीको उत्कृष्ट तागत अर्थात् शरीरको स्व-हिलिङ्गशक्ति भन्ने गर्दछौ।

समग्रमा हेर्दा व्यक्तिको आत्मा सँगै जोल्टिएर रहने मनको शरीरको स्व-हिलिङ्ग शक्ति निर्माणमा निर्णायक भूमिका रहेको भेटिन्छ। मन र चित्तले












पैदा गर्नेसकारात्मक वा नकारात्मक अपेक्षाको मानव समग्र स्वस्थमा प्रत्यक्ष हस्तक्षेपकारी भूमिकाहुने गर्दछ।

शरीरको हिलिङ्ग अर्थात् स्व-उपचार क्षमता बलिष्ठ हुँदा शरीर आफैले आफ्नो आन्तरिक समस्याको दीर्घकालीन समाधान तर्फ सक्रिय बन्छ। त्यसो हुन सक्दा तपाईँ लाई रोगले सङ्क्रमण गर्ने क्षमता राख्दैन। यसको लागि तपाइको शरीरलाई तपाइको आत्मबलको सहयोगको जरुरत पर्दछ। आत्मबलको सहयोगले मन लाई नियन्त्रित गरिदिने। आत्मबलको निर्माण गर्न शारीरिक स्वस्थता कायम गर्दै मानसिक र आध्यात्मिक रूपमा समेत आफूलाई स्वस्थ रउच्च मनोबल युक्त बनाउने।

चित्त अलि ठुलो गरेर गुनासो र ठुस्किने बानी









छोड्ने। आफूलाई सन्तुष्ट राख्ने। आफू सँग जे छ आफू जस्तो अवस्थामा छ त्यसैलाई स्विकारेर त्यसलाई आफ्नो जीवनको परीक्षा ठानेर सामना गर्ने। सन्तुष्ट र धन्य बन्ने। त्यसो गर्न सक्दा मात्र तपाइमा सकारात्मक सोच आउने छ। त्यही सकारात्मक सोचले बढाएको तपाइको आत्मा बलले तपाईँलाई खुसी र सुखी मात्र हैन निरोगी राख्ने समेत अचुक औषधि बनिदिन्छ।

वैदिक ज्ञानको निचोड अनुसार तपाई सँग निरोगी रहने यो बाहेक अर्को कुनै विकल्प छैन। किनकि चकचके बाँदर जस्तो चली रहने तपाइको चित्तले तपाइमा सदैव अव्यवहारिक अपेक्षाहरू जन्माउने गर्दछ। क्षमता विहीन अव्यवहारिक अपेक्षा र मेहनत विनाको फल प्राप्तिको आशा र लालचले









स्थायित्व विहीन उपलब्धि चाहत जन्माउने गर्दछ। त्यसले तपाइलाई पथ भ्रष्ट त पार्छ नै, तपाइको शरीरको स्व-उपचार क्षमतामा समेत रास ल्याउने र तपाइको सोचलाई विभिन्न मनोवैज्ञानिक रोगको घर बनाइ दिन्छ। यसरी विकसित मनोवैज्ञानिक रोग तपाइको भौतिक शरीरको अन्य रोगको रूपमा समेत विकसित हुन थाल्दछ।

जब तपाईँको मनले अव्यवहारिक अपेक्षाहरू गर्दछ, तपाई अत्यन्त सानो चित्त लिएर आफू पनि दुःख पाउनु हुन्छ र आफ्ना वरपरका लाई पनि तपाइको व्यवहारले सताउने परिस्थिति बन्छ। हिलिङ्ग अर्थात् स्व-उपचार क्षमता मार्फत तपाईँलाई स्वस्थ राख्ने तर्फ तपाइको शरीरले तपाइको वरपरको आफन्त र समाजको समेत सहयोग पाउँदैन।








तपाइको आफ्नै को सहयोग नपाएको तपाइको शरीर तपाइका आन्तरिक समस्याको अल्पकालीन समाधान तर्फ लाग्दछ।

समस्याको अल्पकालीन समाधान अन्तर्गत उत्पत्ति भएका र लागेका रोगको उपचार प्रक्रिया आदि पर्दछ। शरीर स्वस्थ राख्ने होइन कि शरीरको दर्द पूर्ण जीवनको आयु लम्ब्याउने उपायहरूको विकल्प खोज्न थाल्छ। त्यस्ता समाधानको उपायहरुले मूर्त रूप पाउन समेत तपाइलाई उपचारात्मक ओखती, थेरापी तथा अप्रेसन आदिको जरुरत पर्दछ। ओखती खाएरै बाँकी जीवन कटाउनु पर्ने जोखिम जन्मन्छ।

हाम्रा ऋषिहरू जस्तोसुकै आपत् विपथ आउँदा समेत आफ्नो आत्मबल निर्माणको लागि









आध्यात्मिक बने। आफ्नो मन र चित्त नियन्त्रण गरी आफ्नो शरीर लाई हिलिङ्ग मार्फत दीर्घकालीन उपचार गर्न सघाएर लामो सुखी र आनन्दित जीवन बिताउन सफल बने।

हाम्रा ऋषिहरूको पथ मनको भित्री कुना वाट चाहेमा तपाइले पनि अवलम्बन गर्न सक्नु हुन्छ। त्यसको लागि माथि वर्णन भएका वैदिक ज्ञानका चुरो वैज्ञानिक पक्षहरू वारेको ज्ञानले तपाईँलाई सहयोग पुर्‍याउन सक्दछ।

## सु:ख - दु :ख र आनन्द

सुख, दुख र आनन्द लाई सांख्य सिद्धान्तको दृष्टिमा बुझ्न जरुरी छ। तपाइको इन्द्रिय पाँच वटा हुने










गर्दछ। जब तपाइको पाँच इन्द्रिय मध्ये एकले सुखको अनुभूति गर्छ अनि त्यो सुखको आवृत्ति तपाइको तत्कालको अनुभूतिमा हाबी हुन पुग्दछ, त्यो समयमा तपाइले सुखको महसुस गर्नु हुन्छ।

सुखको अनुभूति गर्ने क्रममा तपाइको सुखको हद अनुभूतिको हद अनुरूप फरक हुने गर्दछ। तपाइले गर्ने हरेक कर्मको समयमा तपाइका पाँच इन्द्रिय र त्यसको अनुभूति गर्ने छैटौं पक्षले मनो-भौतिक केन्द्रमा दिने सुख वा दुखको सूचनाले त्यसको सुख वा दुखको हद निर्धारण गर्दछ। शास्त्रले उल्लेख गरे अनुरूप यसको लागि अत्यन्त सान्दर्भिक उदाहरण उमेर पुगेका जो कोही बिचको मनोरञ्जनको नियतमा हुने आपसी सहमतिको अहिंसा युक्त विशिष्ट यौन-लाप कर्म वा मनोवैज्ञानिक यज्ञ “सम्भोग” हुने













गर्दछ।

सम्भोगको बेला प्रियतमको स्वागत ध्वनी तपाइको कानले रङ्गिन रोमाञ्चको लागि तपाइको प्रियतमको सकारात्मक इच्छा वृत्तिको सूचनाको रूपमा तपाइको मनो-भौतिक केन्द्रमा पुऱ्याउने गर्दछ। प्रियतमको शारीरिक आकर्षण र सहयोगी बडी ल्याङ्गुईज मार्फत दर्साइएको हार्दिकता, सहयोगी सहवासको तैयारीको दृश्य प्रियतमको शरीरमा सञ्चार यौन आतुरता र सन्तुष्टि प्राप्तिको तिर्खा भावको आवृत्तिको दृष्टि तपाइको आँखा मार्फत मनो-भौतिक केन्द्रमा पुग्दछ। बढ्दो रक्तप्रवाह बिचको चर्म मार्फत हुने विद्युतीय स्पर्श वा टचको आवृत्तिले दिने रोमाञ्चकता छाला मार्फत मनो-भौतिक केन्द्रमा पुग्दछ। पाटनरको जिब्रो र









ओठ मार्फत तपाइको जिब्रोर ओठले प्राप्त गर्ने मनोरम क्रीडा स्वाद जिब्रो मार्फत मनो-भौतिक केन्द्रमा पुग्दछ। यौवन ग्रन्थिले उत्प्रेरित गरिदिने प्रियतमको यौन स्राव र फेरामोनको गन्ध तपाइको नाक मार्फत मनो-भौतिक केन्द्रमा नै पुगिरहेको हुन्छ।

यसरी हरेक जीवको जीवनको मनोवैज्ञानिक यज्ञ प्रकृतिको उत्कृष्ट मनो-भौतिक आशीर्वादको रूपमा रहेको छ। प्रकृतिमा अस्तित्वमा रहेको हरेक जीवले आफ्नो अस्तित्व प्रकृतिमा नियमित गर्न सहभागी हुन पर्ने प्रकृति प्रदत्त अनिवार्य जिम्मेवारी बहन गर्ने प्रक्रियामा सहभागी भए बापत प्रकृतिको अनुकम्पा वाट यो उच्च कोटीको पवित्र, सर्वत्र पूज्य तर गोप्य मन भौतिक आशीर्वादको रूपमा प्राप्त गर्ने क्षणिक









आनन्द रुपी पुरस्कारको रूपमा यसलाई वेद र विज्ञान दुवैले लिने गर्दछ।

यौन यज्ञ रुपी उपहार ठानिने अहिंसा युक्त यौन लापको समयमा जीवको मनो-भौतिक केन्द्रले एकै चोटि आफ्ना सबै इन्द्रियहरू मार्फत फरक फरक किसिमको तर सबै नै सकारात्मक सन्देश पाइरहेको हुन्छ। मनो-भौतिक केन्द्रका सम्पूर्ण सूचना संयन्त्र मार्फत मनोभावले एकै प्रकारको सकारात्मक हार्दिकता प्राप्तिको सूचना पाइरहेको हुन्छ।

सबै इन्द्रियहरू मार्फत एकै प्रकारको हार्दिकता प्राप्तिको सूचना मिलिरहेको अवस्थामा सम्पन्न भइरहेको क्रीडा यज्ञ दुवै पक्षको चाहना, सहकार्य, आपसी सहमतिको सक्रिय सहभागिता अनुरूप अत्यन्त सुरक्षित वातावरण बिच सम्पन्न हुने क्रममा








अनुभूति हुने स्खलनमा भौतिक जीवनमा प्राप्त गर्न सकिने सबैभन्दा उच्च सुखको (आयुर्वेदिक तथा वैदिक यौन कर्मको चरम सुखको अवस्था) अनुभूति जीवको मनो-भौतिक केन्द्रले गर्ने सौभाग्य प्राप्ति गर्दछ।

यसको अर्थ के हो भने वैदिक र वैज्ञानिक अवधारणा अनुरूप तपाईँको मनो-भौतिक केन्द्रमा सूचना दिने पाँच इन्द्रिय र छैटौँ पक्ष मार्फत प्राप्त सूचनाको सकारात्मकता अनुरूप तपाइले अनुभूति गर्ने सुख, रोमाञ्च र रोमान्सको हदको निश्चय हुने गर्दछ।

आनुवंशिक डिजाइन (Design) अनुरूप मनो-भौतिक केन्द्रको लागि उपलब्ध रहेको सूचना प्राप्त हुने जति धेरै श्रोत मार्फत सुख, रोमाञ्च र रोमान्सको









सूचना जीवको मनो-भौतिक केन्द्र लाइ प्राप्ति हुन्छ त्यति नै अधिक हदमा जीवले मनो-भौतिक सुखको अनुभूति गर्दछ।

उल्लेख क्रिडा अवस्थाको विपरीतको अबस्था भने असहजताको अबस्था हुने गर्दछ। असहजताको परिस्थिति बिच समान आत्म सम्मान स्थापित नभएको, हिंसा युक्त यौन संसर्ग कायम हुँदै गरेको जस्ता जीवको मनो-भौतिक केन्द्रमा सकारात्मक र नकारात्मक सूचनाहरू उपलब्ध हुँदै गरेको स्थिति रहन जान्छ। मनो-भौतिक केन्द्रमा प्राप्त नकारात्मक सूचनाको हद अनुरूप जीवले सुख वा दुखको अनुभूति गर्ने गर्दछ।

जस्तै असहमतिको यौन सम्पर्क, अन्य कुनै फाइदाको स्वार्थमा बहकिएर भएको यौन कुकर्म,










बलात्कार, वैवाहिक वा सामाजिक मान्यता प्राप्त असहमतिको यौनिक बलात्कार, समयको फाइदा उठाएर गरिएको हिंसा युक्त यौन दुष्कर्म आदिमा एक पक्षले सुख गुण हाबी रहेको सुखानुभूति गरिरहँदा अर्को पक्षले भने दुःखको अनुभूति लिई रहेको हुने सम्भावना अधिक हुन्छ।

भौतिक सुख अन्तर्गतको सर्वोकृष्ट सुखानु भूति दिने आयुर्वेदिक तथा वैदिक यौन कर्मको चरम सुखको अवस्थाको व्यक्तिको क्षमता अनुरूपको आफ्नै सीमितता हुने गर्दछ। निश्चित सीमितता पार गरिसके पछि उक्त आयुर्वेदिक यौन सुखानुभूति समेत दर्दको अनुभूतिमा परिवर्तन हुने गर्दछ। त्यो समयमा आपसी सहमति बिचको अहिंसा युक्त सम्भोगले समेत चरम स्खलन सुखलाई दर्दपूर्ण













अनुभूतिमा पुऱ्याउने गर्दछ।

त्यसको अर्थ के हो भने हरेक दुख वा सुखको अधिकताको भविष्य दुखानुभूतिमा पुगेर टुङ्गिने गर्दछ। वैदिक दर्शनमा "आनन्द" शब्दले आनन्द वा परम आनन्दलाई प्रतिनिधित्व गर्दछ। शारीरिक वा भौतिक सुखभन्दा पर रहेको आध्यात्मिक पूर्णता र पूर्ण खुसीको अवस्था भनेर "आनन्द" शब्दको परिभाषित भएको छ। यसको अर्थ आनन्द केवल एक क्षणिक भावना होइन। मानव चेतनामा अनुभव गरिने आनन्दको अवधि फरक हुन सक्छ। तर आनन्दको अवधि बढ्दै जाँदा त्यो दुखमा परिवर्तन हुँदैन।

ब्रह्माण्ड र मानव अस्तित्वको एक मौलिक पक्षको रूपमा हेरिने आनन्द तसर्थ भौतिक रूपमा प्राप्त हुने











चरम सुख वा चरम दुख आदि हुन सक्दैन। तर भौतिक सुख आनन्द प्राप्तिको लागि भने सहायक मात्र होइन अत्यन्त सहयोगी भने हुने गर्दछ। आनन्द के हो भन्ने कुरा गणितीय रूपमा प्रस्ट बुझ्ने कोसिसको लागि तलको केही गणितीय व्याख्या हेरौँ।

-९, -८, -७, -६, -५, -४, -३, -२, -१, ०, +१, +२, +३, +४, +५, +६, +७, +८, +९

माथिको नम्बरमा हरेक एक अङ्क छोडेर गरिएको घटाउले ऋणात्मकवा धनात्मक २ दिने गर्दछ। त्यो ऋणात्मक सङ्ख्या होस् वा धनात्मक सङ्ख्या। जस्तै तलहेरौँ। यो जायज पनि छ, किनकि त्यो बिचमा कुनै एक अङ्कको अस्तित्व र मापन हुने गर्दछ। त्यसको मापन अङ्क गणितको जोड वा घटाउमा













देखा पर्दछ। अस्तित्वले शब्द ब्रह्मको भूमिका खेल्दछ।

-९ -(-७) = -२

-४ - (-२) = -२

+ ९ - (+७)= + २

+ ४ - (+२)= + २

सामान्य विज्ञान अनुरूप हामी शून्य लाई केही पनि नभएको अस्तित्व विहीन अवस्था वा बस्तु मान्दछौ। तर पनि जब तपाई शून्य को अघि पछि हुने ऋणात्मक १ र धनात्मक एकको अङ्क गणितको जोड वा घटाउमा गर्नु हुन्छ त्यहाँ समेत ऋणात्मक वा धनात्मक २ आउने गर्दछ।











जस्तै तल हेरौँ।

-१ - (+१) = -२

+१ - (-१) = +२

यसको अर्थ के हो भने अङ्क गणितको हिसाबमा समेत जोड वा घटाउमा शून्य लाई केही पनि नभएको अवस्था रहेको मानिएता पनि त्यो अस्तित्व विहीन चिज भने होइन। अन्य अङ्क जस्तै शून्यको पनि अस्तित्व छ। त्यसको अस्तित्वको बृहत् अर्थ छ।

विज्ञानमा धेरै व्यवहारिकताको पक्ष गुणको पक्षको रूपमा लिने गरिन्छ।

शून्य एउटा यस्तो बिन्दु हो जसमा तपाईँ ऋणात्मक (तम गुण) र धनात्मक (सत्त्वगुण) दुवै तर्फ वाट













पुगिन्छ। शून्य आफै गुण प्रदायक अङ्क समेत हो। वैदिक मान्यता अनुरूप ऋणात्मक तर्फबाट (निराशा युक्त अहङ्कार) शून्यमा पुगिने प्रवृत्तिगत भूमिकालाई इनर्सिया वा तम गुण भनिन्छ। धनात्मक तर्फबाट (अहङ्कार) शून्यमा पुगिने प्रवृत्तिगत भूमिकालाई सत्त्व गुण भनिन्छ।

धनात्मक तर्फबाट पुगिने शून्य यथार्थमा धनात्मक शून्य (+०) हो भने ऋणात्मक तर्फबाट पुगिने शून्य यथार्थमा ऋणात्मक शून्य (-०) हो।

धनात्मक शून्य (+०) अहङ्कार विहीनता (Egolessness) हो भने ऋणात्मक शून्य (-०) निराश विहीनता (Frustrationlessness) को अवस्था हो। सासत्व सत्य ऋणात्मक शून्य (-०) र धनात्मक शून्य (+०) बिचमा रहन्छ। जसलाई





इन्फिनिटी वा पूर्णता भनेर चिनिन्छ। गणितमा यसलाई ∞ मार्फत सङ्केत गरिन्छ।

० = || -०, -∞, +∞, +० ||

वैदिक अवधारणा अनुरूप ∞ सङ्केतले व्यवहारिक रूपमा पूर्णता लाई जनाउने गर्छ। जसलाई संस्कृतको शब्द आदि मार्फत व्यक्त गर्ने गरिन्छ।जसलाई शब्द ब्रह्म भनिन्छ।

∞ = || -०, अ, आ, इ, ई......., क, का, कि ....., ख, खा, खि, खि......, ज्ञ, ज्ञा, ज्ञि, ज्ञी......., +० ||

**ॐ पूर्णमदः पूर्णमिदं पूर्णात् पूर्णमुदच्यते।**

**पूर्णस्यपूर्णमादाय पूर्णमेवावशिष्यते॥**





ॐ शान्तिःशान्तिः शान्तिः ॥ शान्ति पाठ, अथ ईशोपनिषत् ॥

अथ ईशोपनिषत् को शान्ति पाठ भन्दछः ॐ । ब्रह्माण्ड चेतनाले भरिपूर्ण बाहिरी संसार आफैमा पूर्ण छ। ब्रह्माण्ड चेतनाको अंश रुपी भित्री संसार (आत्मा) पनि पूर्ण छ। ब्रह्माण्ड चेतना रुपी पूर्णबाट पूर्ण नै प्रकट हुन्छ। अद्वैत र अनन्त पूर्ण ब्रह्माण्ड चेतना बाट भित्री चेतना रुपी पूर्ण (आत्मा) निकाल्दा त्यहाँ पूर्णनै बाँकी रहन्छ। ॐ । शान्ति, शान्ति, शान्ति।

शान्ति र सम्पूर्णताको कामना गर्दा प्रयोग हुने यस मन्त्रले दिएको गणितीय सूत्र अनुरूप हामीले अनुभूति गर्ने बाहिरी संसार पूर्ण छ। आन्तरिक संसारपनि पूर्ण नै छ। पूर्ण वाट अर्थात् इन्फिनिटी





वाट पूर्ण (अनन्त वा इन्फिनिटी) लिइए पछि पनि त्यहाँ पूर्ण नै बाँकी रहन्छ। दैवी चेतना अर्थात् ब्रह्माण्ड चेतनाको स्वरूप अद्वैत र असीमित हुने हुँदा यो जीवको आत्माको रूपमा रहँदा पनि र ब्रह्माण्ड चेतनाको स्वरूपमा (परमेश्वर) रहे पनि अनन्त वा इन्फिनिटी कै हैसियतमा रहन्छ।

यहाँ निर ख्याल गर्नु पर्ने कुरा के छ भने, कुनै पनि अङ्क लाई शून्यले भाग गर्दा भाग फल अनन्त वा इन्फिनिटी नै आउँछ। रहन्छ। अद्वैत दैवी चेतना अर्थात् ब्रह्माण्ड चेतनाको स्वरूप तसर्थ शून्य यथार्थमा तपाई हामीले सोचे जस्तो साधारण गुणको हुँदैन। छैन। यसको चर्चा शब्द ब्रह्म मार्फत मात्र दिन सकिन्छ।

कुनै पनि धनात्मक अङ्कले तपाइको अहङ्कार









(Ego), चिन्ता र असुरक्षा (Anxiety) भावको प्रतिनिधित्व गर्दछ। ऋणात्मक अङ्कले तपाइको हीनता वा दोष भाव (Depression) तथा दर्दको (Sorrow or Sufferings) पक्षको प्रतिनिधित्व गर्दछ।

ऋणात्मक वा धनात्मक अवस्था लाई शून्यले भाग गर्नुको अर्थ अहङ्कार (Ego), चिन्ता र असुरक्षा (Anxiety), हीनता वा दोष भाव (Depression) तथा दर्द (Sorrow or Sufferings) वाट ज्ञानको मध्यमले आत्मा ज्ञानको प्राप्ति मार्फत मुक्ति प्राप्त गर्नु नै हुनेछ। जसले आनन्द अर्थात् परम आनन्द तर्फको मार्ग प्रशस्त गर्दछ।

यो अभिव्यक्तिमा एकदमै गहिरो विचार छ। वैदिक




दृष्टिकोणमा ऋणात्मक वा धनात्मक अवस्थालाई शून्यले भाग गर्दा अहङ्कार, चिन्ता, असुरक्षा, हीनता र दुखका अनुभवहरूको रूपान्तरण हुन्छ। यी अवस्थाहरूको पहिचान गरेर र आत्मज्ञान प्राप्त गर्दा, व्यक्ति मुक्ति मार्गमा पुग्न सक्छ। आत्म ज्ञानले मनका भुलभुलैयामा सच्चा आनन्दको अनुभूति गराउँछ। यसले मानिसलाई बाह्य परिस्थितिहरूमा निर्भर नहुँदै आन्तरिक शान्ति र स्थिरता प्रदान गर्छ। अतः यो कुरा गर्न सकिन्छ कि आत्मज्ञानको माध्यमबाट प्राप्त मुक्ति, व्यक्ति भित्रको ऋणात्मक भावनाहरूलाई पार गर्दै साँचो आनन्दको मार्गमा अघि बढाउँछ। अर्को तर्फ व्यक्ति धनात्मक भावनाहरू पुग्दै गर्दा समेत अहङ्कार विकास गर्न दिंदैन। यसरी शून्यले भाग गर्नुको अर्थ केवल एक





गणितीय अभिव्यक्ति मात्र होइन, यसमा गहिरो आध्यात्मिक दर्शन समावेश छ।

यसरी हेर्दा सुख, दुख र आनन्दबिच अत्यन्त फराकिलो खाडल रहेको प्रस्ट बुझ्न सकिन्छ।

## संस्कृको जिरो सोचे भन्दा फरक

गणितमा शून्य संस्कृतले दिएको हो। संस्कृतले नै गुणन गर्ने विधि गणित लाई दियो। आर्यभट, ब्रह्मगुप्त र भास्कर द्वितीय जस्ता गणितज्ञहरूले अङ्कगणित, बीज गणितर सङ्ख्या प्रणालीमा महत्त्वपूर्ण सिद्धान्तहरू विकास गरे। जुन इस्लाम





विद्वानहरू मार्फत पश्चिमी देशहरू पुगेको थियो। त्यही सिलसिलामा गुणन गर्ने तरिका पनि पश्चिमी देशहरूले संस्कृत श्रोत वाट लिए। गणितमा गुणनको परिभाषा बुझ्न चर्चित शब्दकोशहरूमा उपलब्ध गणितको परिभाषा हेर्न जरुरी हुन्छ।

मेरियम-वेब्स्टर डिक्सनेरीको अनुसार गुणन भनेको कुनै सङ्ख्या लाई शून्यमा बारम्बार थप्ने प्रक्रिया हो। यो गणितीय नियमहरू अनुसार अन्य सङ्ख्याहरूमा (जस्तै, जटिल सङ्ख्याहरू, भेक्टरहरू, म्याट्रिक्सहरू) समेत लागु हुन्छ। अक्सफोर्ड लर्नर शब्द कोश अनुसार गुणन भनेको विभिन्न गणितीय सन्दर्भहरूमा आवश्यक हुने अङ्कगणितको आधारभूत कार्यहरू मध्ये एक प्रक्रिया हो जहाँ सङ्ख्याहरू लाई गुणन गरिन्छ।









ब्रिटानिका शब्दकोश अनुरुप गुणन भनेको कुनै सङ्ख्यालाई बारम्बार आफैँमा थप्ने प्रक्रिया हो। यसले कुनै कुरा वा सङ्ख्यामा वृद्धि जनाउन पनि प्रयोग हुन्छ। जस्तै क्यान्सर कोशिकाको अनियन्त्रित वृद्धि। क्याम्ब्रिज शब्दकोशको गुणनको परिभाषा अनुसार कुनै सङ्ख्यालाई आफूमा निश्चित सङ्ख्यामा पटक-पटक थप्ने प्रक्रिया हो।

जस्तै ५ लाई ५ ले गुणन गर्नु भनेको ५ लाई ५ संग ५ पटक जोड्नुभनेको हो। त्यो भनेको २५ हुन्छ। अर्थात् -५ लाई - ५ ले गुणा गर्नु भनेको -५ मा -५ लाई ५ पटक जोड्नु हो। त्यो भनेको +२५ हुने विश्वास गरिन्छ। किन कि माइनस लाई माइनस ले गुणा गर्दा प्लस हुन्छ। त्यो कसरी प्लस हुन्छ भन्ने प्रश्नको उत्तर हालको गणितले दिने गर्दैन। कारण








माइनसको माइनस संग गुणा गर्ने तरिका पश्चिमा मुलुकमा हाल व्याख्या गरिने गुणनको परिभाषा भित्र अटाएको छैन।

विज्ञानमा माइनस लाई माइनसले गुणा गर्दा प्लस कसरी हुन्छ भन्ने कुरा शब्दकोशको परिभाषाको अनुसार समेत मिल्दैन। किनकि -५ मा पाँच पटक -५ जोड्दा -५ +(-५) + (-५)+(-५)+(-५) गर्दा त (- २५) हुन्छ । तर यहाँ त +२५ हुने मानिन्छ।

हिसाबको परिभाषा वाट सोझै यसको उत्तर नपाउने भएपछि पश्चिमी गणितिज्ञहरु केही आध्यात्मिक सहारामा यसको उत्तर यसरी दिन कोसिस गरेको भेटिन्छ। जसमा भनिन्छ कि, नकारात्मक सङ्ख्याहरू लाई गुणन गर्दा सकारात्मकहरूको गुणन गर्दाको अवस्थाको भन्दा फरक दिशात्मक परिवर्तनहरू हुने









र त्यसमा बारम्बार सङ्ख्याहरू थपिने प्रक्रिया दोहरिने हुँदा त्यसको परिणाम नकारात्मकको सट्टा सकारात्मक आउँछ।

त्यसो हो भने -५ लाई -५ ले गुणा गर्दा पाँचको दिशात्मक परिवर्तनहरू हुने कुरा गुणनको परिभाषा सङ्गत छैन। हिसाब जस्तो विषयमा सबै ठाउँमा परिभाषा मिल्ने परिभाषा आउँदैन भने त्यसलाई सही परिभाषा मान्न सकिन्न। यसको अर्थ हो हामीले आज पनि हाम्रो विद्यालयमा गुणनको परिभाषा समेत सही पढाइ रहेका छैनौ। यो हबिगत हाम्रो मात्र होइन संसारकै विद्यालयहरूको हविगत हो।

शून्य वा जिरो, इन्फिनिटी, गुणन जस्ता कुरा संस्कृतले गणितलाई दिएकाले गुणन बारे संस्कृतको










अवधारणा के हो अव त्यो बुझ्ने कोसिस गरौँ।

ब्रह्मगुप्त द्वारा रचित ब्रह्मस्फुट सिद्धान्तमा शून्य र गुणा बारेको एक नियम उल्लेख गरिएको छ।

**शून्यं शून्येन बहुना गुणकंशून्यमेव स्यात्।**

जसको अनुवाद हुन्छ शून्यलाई शून्य वा कुनै पनि अन्य सङ्ख्या सँग गुणा गर्दा सधैं शून्य नै रहन्छ। यो श्लोकले शून्यसँग सम्बन्धित गुणनको आधारभूत नियमलाई स्पष्ट पार्दछ।

जुन गणितको एक महत्त्वपूर्ण अवधारणाको रूपमा स्थापना भयो।

माण्डूक्य उपनिषद माण्डूक्य कारिका, श्लोक ३.४६ र ३.४७ मा भनिएको छ:













**यदा न लीयतेचित्तं न च विक्षिप्यते पुनः।**

**अनिङ्गनमनाभासंनिष्पन्नं ब्रह्म तत्तदा॥ ४६॥**

**स्वस्थं शान्तंसनिर्वाणमकथ्यं सुखमुत्तमम्।**

**अजमजेन ज्ञेयेनसर्वज्ञं परिचक्षते॥ ४७॥**

श्लोक ४६ अनुसार, जब मनको ध्यान सांसारिक गतिविधि वाट हट्दछ र आफ्नो इच्छाहरू बाट विचलित हुँदैन तव यो शान्त हुन्छ। त्यसले कुनै प्रकट स्वरूपको अनुभूति गरिरहेको हुँदैन। त्यो समयमा मन ब्रह्मसँग एकाकार भइरहेको हुन्छ। श्लोक ४७ अनुसार, यसरी ब्रह्मसँग एकाकार भइरहेको मनलाई नै आत्मको अनुभूति बाट प्राप्त हुने सर्वोच्च आनन्द ठानिन्छ। त्यसैलाई मुक्ति प्राप्ति भनिएको हो। त्यसको स्वरूप वर्णन गर्न नसकिने







अजन्मा रुपी हुन्छ। त्यसैलाई सर्वज्ञ ब्रह्म भनिएको हो। किनकि यो कुनै अस्तित्वमा हुँदैन र आत्मा सँग एकाकार भएर मिलेको हुन्छ। त्यो ज्ञानको माध्यमबाट खोजिने र प्राप्त हुने वस्तु हो।

श्लोक ४६ अनुसार, मनलाई जब अनुशासनमा राख्न सकिन्छ त्यो न त गहिरो निद्राको जस्तो सबै कुरा बिर्सिने अवस्थामा पुग्दछ न त बाह्य वस्तुहरूबाट विचलित नै हुन्छ। त्यो भनेको मन शान्त हुनु हो। हावा नलागेको ठाउँमा राखिएको दियोको ज्वालाको प्रकाश जब कुनै बस्तुमा ठोकिएर परावर्तन हुन्छ, तव परावर्तित प्रकाशको कारण हाम्रो रेटिनामा बन्ने आकृतिको रूपमा हामी त्यो बस्तु लाई देख्ने गर्दछौ। यदि त्यहाँ रहेको बस्तु कालो छ र प्रकाश परावर्तन गर्दैन भने हामी त्यो बस्तु देख्न सक्दैनौ। त्यस्तै जब






हाम्रो मन शान्त हुन्छ, तव बाह्य गतिविधि र इन्द्रिय मार्फत जागृत इच्छाहरूबाट विचलित हुन सक्दैन। त्यो समयमा मन ब्रह्मसँग एकाकार भएको हुन्छ।

श्लोक ४६ भन्छ, श्लोक ४६ अनुसार मन ब्रह्मसँग एकाकार हुनु नै आनन्दको सर्वोच्च वास्तविकता हो जसलाई आत्मा ज्ञानद्वारा मात्र अनुभूति गर्न र पहिचान गर्न सकिन्छ। त्यो पूर्ण शान्तिको अवस्था हो। जहाँ सबै दुःखहरूको अन्त्य भएको हुन्छ। त्यो नै मुक्ति हो। जसलाई शब्दमा वर्णन गर्न सकिँदैन। अजन्मा" (ajñamā) को अर्थ "जन्म नलिएको" वा "न जन्मेको" हुन्छ। भौतिक अस्तित्व र सांसारिक अनुभवहरू भन्दा पर रहने "आनन्दको सर्वोच्च वास्तविकता" सबै वस्तुहरू बाट पूर्ण रूपमा फरक रहेकाले यसलाई अनुभूति मात्र गर्न सकिन्छ।





अजन्माले आत्माको (आत्मन्) शाश्वत स्वभावलाई जनाउँछ। सर्वोच्च आनन्द इन्द्रिय मार्फत नभएर अनुभव जन्य धारणाहरू मार्फत प्राप्त हुने चीज रहेकोले यसलाई अजन्मा भनिएको हो।

उल्लेखित अवस्थाको व्याख्या गर्न शून्य र शून्यातिशून्य जस्ता अवधारणाहरू शैव ग्रन्थहरूमा प्रयोग भएको छ। विज्ञान भैरवतन्त्र अन्तर्गत शून्यताको परम वास्तविकताको विशेषता उल्लेख छ। शिव भगवानको परम शून्यता रुपी अवतार भैरव जो इन्द्रिय र मन भन्दा पर, सबै इन्द्रियगत उपकरण हरूको प्रभाव बाहिर रहन्छन् त्यसलाई मनको दृष्टिकोणबाट शून्यताको स्थिति (शून्य) र वास्तविकताको दृष्टिकोण बाट पूर्णताको स्थितिको (इन्फीनिटि) अवस्था भनेर विज्ञान भैरव









तन्त्रमा चित्रित भएको छ।

वैदिक आध्यात्मिक र तत्व मीमांसा परम्पराहरूमा शून्यातिशून्य (Śūnyātiśūnya) एक यस्तो दार्शनिक अवधारणा हो जुन दुई शब्दहरूको संयोजन बाट बनेको छ। शून्य (Śūnya) जसको अर्थहुन्छ "रिक्तता," "खालीपन" वा "शून्यता"। अतिशून्य (Atiśūnya) जसको अर्थ हुन्छ "शून्यता भन्दा पर" वा "सर्वोच्च शून्यता" जसलाई इन्फिनिटीको साक्षात्कारको अबस्था भन्न सकिन्छ। दुवैलाई मिलाएर बनेको शून्यातिशून्य शब्द लाई "शून्यता भन्दा परको अवस्था" वा "सर्वोच्च शून्यता" को अर्थ दिन प्रयोग गरिन्छ। यो अवधारणाले साधारण रिक्तता, खालीपन वा शून्यको सामान्य बुझाइ भन्दा परको एउटा यस्तो




पारलौकिक अवस्था लाई सङ्केत गर्दछ जहाँ शून्यताको अवधारणा समेत विलीन हुन्छ। अस्तित्व र गैर-अस्तित्व मात्र होइन शून्यता र पूर्णता सँग सम्बन्धित सबै भेदहरू अर्थहीन हुन्छन्। अद्वैत बन्दछ।

लगभग ६२८ इस्वीको ब्रह्म गुप्तको प्रसिद्ध ग्रन्थ ब्रह्मस्फुट सिद्धान्तको १८ अध्यायमा बीज गणित सँग सम्बन्धित श्लोकहरू भेटिन्छ। जसमा भनिएको छ:

**समैकं खं समखं खमेकं खं समैकंखं समं खं समम्।**

**खं समे खं समखं समैकं खं चाप्येकंखमथ खं खमेकम्॥**





जहाँ समैकं खं को अर्थ कुनै धनात्मक सङ्ख्या शून्यमा जोड्दा त्यो सङ्ख्या जस्ताको तस्तै रहन्छ (उदाहरण $a + 0 = a$)। समखं खमेकंको अर्थ शून्यलाई शून्यमा जोड्दा परिणाम सधैं शून्य नै हुन्छ (उदाहरण $0 + 0 = 0$)। यसमा उनले यो कुरा स्थापित गरेका छन् कि कुनै सङ्ख्यामा शून्य थप्दा, उक्त सङ्ख्या अपरिवर्तित रहन्छ। शून्यमा शून्य थप्दा परिणाम सधैं शून्य हुन्छ।

ब्रह्मस्फुटसिद्धान्त को १८ अध्यायमा यो पनि उल्लेख छ:

**शून्यं शून्येनयुक्तं शून्यं** – शून्यमा शून्यजोड्दा शून्य नै हुन्छ।

**शून्यं शून्येनगुणितं शून्यं** – शून्यलाई शून्यसँग गुणा





गर्दा शून्य नै हुन्छ।

**शून्यं शून्येनविभक्तं शून्यं** – शून्यलाई शून्यबाट पृथक् गरिए शून्य नै रहन्छ।

**शून्यं शून्येनहारितं शून्यं** – शून्यलाई शून्यबाट घटाउँदा शून्य नै हुन्छ।

ब्राह्मस्फुटसिद्धान्तमालेखिएको छ:

**धनयोर्धनम्ऋणमृणयोःधनर्णयोरन्तरं समैक्यं खम्**

**ऋणमैक्यंच धनमृणधनशून्ययोः शून्ययोः शून्यम्**

जसको अर्थ हुन्छ:

धनयोर्धनम्: धनात्मकमा धनात्मक जोड्दा धनात्मक हुन्छ।

ऋणमृणयोः ऋणात्मकमा ऋणात्मक जोड्दा









ऋणात्मक हुन्छ।

धनर्णयोरन्तरं: धनात्मक लाई ऋणात्मक संग जोड्दा धनात्मक र ऋणात्मक बिचको भिन्नता बराबर हुन्छ।

समैक्यंखम्: जब धनात्मक र ऋणात्मक (धन तथा ऋण) बराबर हुन्छ तब त्यो शून्य बराबर हुन्छ।

ऋणमैक्यंच: धनात्मकमा धनात्मक धनात्मक नै हुन्छ।

धनमृणधनशून्ययोः ऋणात्मकमा ऋणात्मकले ऋणात्मक नै दिन्छ।

शून्ययोःशून्यम् : शून्यमा शून्य ले शून्य दिन्छ।

यसको अर्थके लाग्दछ भने दुई समान तर विपरीत








चिज अर्थात् धनात्मक (पक्ष) र ऋणात्मक (विपक्ष) को गठ जोड अर्थात् योगको अवस्था शून्य हो। जब तपाइको धन र ऋण बराबर हुन्छ तब त्यहाँ शून्यको उपस्थिति हुन्छ।

जसलाई गणितमा न्युटनको तेस्रो नियम भनी स्कुलहरूमा अध्यापन गराइने महाऋषि कणादको वैशेशिका सिद्धान्तले दिएको हरेक क्रियाको समान र विपरीत प्रतिक्रिया हुन्छ भन्ने सिद्धान्त स्थापित गर्ने अस्तित्वको रूपमा व्याख्या भएको देखिन्छ।

यसको अर्थ जिरो केही पनि नभएको, अस्तित्व विहीन कुरा होइन। धन र ऋण, क्रिया र प्रतिक्रिया बिचको सन्तुलनको अवस्था हो। स्वास्थ्यमा कफ, पीत र वातको सन्तुलनको अवस्था हो। गणितको सन्दर्भमा हरेक अङ्कको धनात्मक र ऋणात्मक दुवै










बराबरी सह-अस्तित्वमा रहेको अवस्था हो।

जसमा (+0 र -0), (+X र -X), (+Y र -Y), (+∞ र -∞) सबै अटेको हुन्छ।

जब तपाई प्लस र माइनको कुरा गर्नु हुन्छ त्यो बेलामा तपाइले हरेक चोटि तपाइको अङ्क लाई जिरो संग जोडेर मात्र आपसमा गुणा गर्नु अनिवार्य हुन्छ।

जब तपाइँ +५ र + ५ को गुणा गर्नु हुन्छ तव यथार्थमा तपाइले (०+५) र (०+५) को गुणन गर्नु हुन्छ। जब तपाइले दुइटा +५ नै भेट्नु हुन्छ। ५ र ५ को गुणन गुणनको नियम अनुरूप २५ आउने गर्दछ।

तर जब तपाई माइनसको गुणन गर्नु पर्ने क्षेत्रमा











प्रवेश गर्नु हुन्छ तव तपाईँ पश्चिमा गुणनको परिभाषा अनुरूप काम गर्न सक्नु हुन्न।

किन कि परिभाषामा नदिएको भए पनि पश्चिमा गणितिज्ञहरुको नयाँ दाबी अनुरूप माइनस को अर्थ डिरेक्सन चेन्ज भन्ने मान्दा समेत -५ वाट - ५ घटाउने क्रममा त्यहाँ फरक दिशाको कारण पहिलो घटाउ परिणाम जिरो आउँछ। दोस्रो -५, फेरी तेस्रो जिरो हुन्छ। यो श्रृङ्खला ५ पटक पुग्दा त -५ हुन जान्छ। तर पश्चिमा गणितिज्ञ व्यवहारिक रूपमा २५ आउने हुँदा २५ मान्नु पर्दछ भन्ने तर्क राख्दछन्।

भनिन्छ माइन इन्टु माइनस प्लस हुन्छ त्यसैले । तर कसरी ? त्यसको उत्तर उनीहरू संग छैन।

गुना जसले पहिचान गऱ्यो त्यही संस्कृत विज्ञहरू













संग यसको उत्तर छ। माथि व्याख्या भएको गणितको सिद्धान्तको अनुरूप +५ को समयमा तपाईँ लाई कुनै समस्या रहेन। पश्चिमा गुणनको परिभाषा त्यहाँ लागु भएको जस्तो लाग्दछ।

चुरो तपाइले - ५ लाई -५ संग घटाउने कुरामा आउँछ।

संस्कृत विज्ञहरू अनुसार घटाउनु वा जोड्नु भनेको त्यो सङ्ख्या लाई जिरो संग जोडेर पुरा गरिने कार्य हो। परिभाषा अनुरूप जिरोमा +५ जोड्दा +५ नै हुन्छ। गुणनमा समस्या रहेन। जिरो वाट कुनै चिज घटाउनु अर्थात् शून्यतामा नकारात्मकता घटाउने कार्यमा घटाउनु भनेको के हो ? त्यसमा रहेको परिभाषाको फिलोसोपिकल वा अवधारणाको पक्ष बुझ्न जरुरी छ।











५ को सन्दर्भमा जिरो (+५) र (-५) मिलेर बनेको हुन्छ। त्यो जिरो वाट तपाइले -५ घटाउनु त्यो भनेको +५ र -५ वाट -५ हटाउनु हो। त्यसो हुँदा त्यहाँ +५ बाकी बस्दछ। त्यसैले जब तपाईं ० - (-५) गर्नु हुन्छ त्यसले बाँकी रहन पुगेको +५ को फल दिन्छ। त्यसैले जब तपाई -५ लाई -५ ले गुणा गर्नु हुन्छ त्यहाँ अन्त त +५ र +५ कै गुणा जस्तै +२५ आउने गर्दछ।

यसरी संस्कृतको गुणनको परिभाषा प्लस र माइनस दुवै खाले गुणनमा लागु हुन्छ।

यसले हामीलाई के कुराको स्पष्ट सङ्केत गर्दछ भने, जब पश्चिमाहरूले संस्कृतबाट जिरो र गुणाको अवधारणा लिए, त्यसलाई आफ्नो बनाउन हतार गर्दै गर्दा त्यसको प्रमुख तत्व बुझ्न सकेनन्। अरू













कुरा त छोडौं, सामान्य गणनामा समेत उनीहरूको परिभाषाले प्राप्त हुने नतिजा सम्हाल्न सकेन। व्यावहारिकतामा आउने नतिजालाई पनि पुष्टि गर्न सकेन।

त्यसलाई समावेश गरेर परिभाषा दिन पनि पश्चिमाहरू असफल भए। अलिकति लुकाइएको पक्षलाई संसारले पत्याउने गरी प्रस्तुत गर्न सक्ने कलाको अभाव रह्यो। यसको स्पष्ट उत्तर संस्कृत सँग थियो र छ। अब संसारले यो अवधारणा लिएर आफ्नो गणितीय कमजोरी हटाई विद्यार्थीहरूलाई सही गणितीय सिद्धान्त अध्यापन गराउन आवश्यक भएको छ। हाम्रो परम्परा र इतिहास कति गर्व गर्न लायक छ भन्ने कुरा पनि यसले हामीलाई महसुस गराउने गर्दछ।







# शब्द गणितमा औँसी

वेद र विज्ञान बुझ्न वेद आधारित रहेको शब्द गणित बुझ्न जरुरी छ। तपाइले लेख्ने ०, १, २, ३, ...... ९ अङ्क मात्र गणित नभएर अ, आ .... अं, अः, क, ख, ................................. क्ष, त्र, ज्ञ। सबै नै गणितका अक्षर हुन् भन्ने बुझ्न जरुरी छ। विज्ञानमा ए वाट एपल वा स्याउ वाट सुरु हुने दर्शन जेड अर्थात् जेब्रामा पुगेर सकिन्छ। ए भनेको एलोन अर्थात् एक्लो पन समेत हुन्छ। जेड वाट जिरो अर्थात् शून्य पन समेत हुन्छ।

निक्खर काल रात्रिको एक्लो पन वाट शून्यता सम्म तपाई लाई विज्ञानले ल्याउन सक्ला। त्यस पछाडिको यात्राको लागि तपाईँलाई वैदिक दर्शनको











जरुरी हुन्छ। व्यवहारिक ज्ञानको दृष्टिले ए अर्थात् एनीमल वाट सुरु गरेर जेड अर्थात् जू अर्थात् चिडिया खानामा लगेर बन्देज गरिदिने ज्ञान-विज्ञान अध्यात्म र जीवन सुखको लागि इञ्जिनियरिङ्ग गरिएको ज्ञान मार्ग बन्न सकेन।

वैदिक शब्द गणितमा भने अ अर्थात् अज्ञान वाट ज्ञ अर्थात् ज्ञान सम्मको यात्रा तय हुने गर्दछ। तपाईँ लाई तपाइको जीवनमा अ वाट ज्ञ सम्मको यात्राको मार्गमा लैजाने तपाइका जीवनका सम्पूर्ण पात्र तपाइको पिता सरह हुन्।

त्यसैले हामी पिताको गुनको स्मरण गर्न कुशे औँसीको दिन रोज्ने गर्दछौ। तपाईँ अ अर्थात् अज्ञान वाट ज्ञ अर्थात् ज्ञान सम्मको यात्रा पुरा गर्दा सम्म यथार्थमा शून्य र एक बिचमा कति वटा अङ्क हुन्छ











भन्ने सम्म पत्ता लगाउने कुशलता प्राप्ति गरीसक्नु भएको हुन्न।

जस्तै तलको उदाहरणहरू हेर्नुहोस्

एक लाई एघारले भाग गर्नुस्

१/११ =०.०९०९०९०९०९०९०९ ...

नौले भाग गर्नुस्

१/९ =०.१ १ १ १ १ १ १ १ १ १ १ १ १ १ १ ...

एकसय एकले भाग गर्दा

१/१०१ = ०.००९९००९९००९९००९९ ...

उनान्सयले भाग गर्दा

१/९९ = ०.०१०१०१०१०१०१०१०१ ...













एक हजार एकले भाग गर्दा

१/१ ००१ =०.०००९ ९ ९ ०००९ ९ ९ ०००९ ९ ९ ...

नौसय उनान्सयले भाग गर्दा

१/९९९ =०.००१००१००१००१००१००१ ..

यसरी हेर्दा जिरो र एक बिच कति वटा सङ्ख्या हुन्छ भन्ने प्रश्नको उत्तर हो अनन्त अर्थात् इन्फिनिटी। जिरो र इन्फिनिटी दुवै मानक वैदिक ज्ञान वाट विज्ञानले सापट लिएर काम चलाएको हो।

तपाई जति सुकै अध्ययन गर्नुस् वा घोल्लिनु तपाईँ सँग ब्रह्माण्ड र जीवनको बारे सीमित ज्ञान मात्र भएको पाउनु हुनेछ। मात्र शून्य र एक बिचमा कति वटा अङ्क हुन्छ भन्ने सम्म पत्ता लगाउने कुशलता







तपाइमा विकास हुने छैन। यसको अर्थ हो सैद्धान्तिक वैज्ञानिक ज्ञान भन्दा विशाल व्यवहारिक वैदिक ज्ञान रहेको छ। व्यवहारिक वैदिक ज्ञानले तपाईँ लाई अर्कै अनन्त: को अस्तित्व रहेको तर्फ संकेत गर्छ।

उक्त अनन्त गणित र सिद्धान्त वाट हैन अनुभूतिले महसुस गराउने गर्दछ। जब तपाईँ यसमा विश्वास गर्नु हुन्छ तब मात्र आत्मा ज्ञानको प्रसङ्ग सान्दर्भिक हुन्छ। तर के आत्मा ज्ञान तपाइको जीवनको सम्पूर्ण यथार्थ हो त ? यसको समेत गणितीय रूपमा बुझ्न सम्भव छ।

यो कुरालाई केही समय थाती राखेर एक छिन लाई अरू दुई वटा गणितले बताउने शून्य र एक बिचका केही अचम्मका समीकरण हेरौँ।








जब तपाईँ गुगल सर्च गरी एक लाई (१० पावर १००+१) ले भाग गर्नु हुन्छ नतिजा यस्तो देखिन्छ:

१ /(१ ०^१०० + १ ) = ०.००००० ०००००
००००० ००००० ००००० ००००० ०००००
००००० ००००० ००००० ००००० ०००००
००००० ००००० ००००० ००००० ०००००
००००० ००००० ००००० ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९
९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९
९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९
९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९
९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९
९ ९ ९ ९ ९ ९ ००००० ००००० ००००० ०००००
००००० ००००० ००००० ००००० ०००००
००००० ००००० ००००० ००००० ०००००






००००० ००००० ००००० ००००० ०००००

००००० ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९

९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९

९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९

९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९

९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९

००००० ००००० ००००० ००००० ०००००

००००० ००००० ००००० ००००० ०००००

००००० ००००० ००००० ००००० ०००००

००००० ००००० ००००० ००००० ००००० ९ ९

९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९

९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९

९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९

९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९











९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९ ९...

त्यस्तै जब तपाईँ गुगल सर्च गरी एक लाई (१० पावर १००-१) ले भाग गर्नु हुन्छ नतिजा यस्तो देखिन्छ:

१ /(१ ०^१०० - १ ) = ०.००००० ०००००

००००० ००००० ००००० ००००० ०००००

००००० ००००० ००००० ००००० ०००००

००००० ००००० ००००० ००००० ०००००

००००० ००००० ००००१ ००००० ०००००

००००० ००००० ००००० ००००० ०००००

००००० ००००० ००००० ००००० ०००००

००००० ००००० ००००० ००००० ०००००

००००० ००००० ००००१ ००००० ०००००

००००० ००००० ००००० ००००० ०००००









००००० ००००० ००००० ००००० ०००००
००००० ००००० ००००० ००००० ०००००
००००० ००००० ००००१ ...

सकारात्मकता जोडिएको प्लस एक र नकारात्मकता जोडिएको माइनस एक मात्र जोड्न पछि आउने भागको नतिजा गणितीज्ञहरूको लागि चासो वर्द्धक हुन सक्दछ। वैदिक परम्परामा गणितको यो विशालता लाई सहजीकरण गरी व्यावहारिक बनाउनको लागि अक्षरहरूको विकास गरी प्रयोगमा आएको हो।

त्यसैले अक्षरहरू मिलेर बन्ने शब्द समेत लाई एक अनुशासित तवरले विभिन्न अर्थ दिने गरी व्याख्या गर्न मिल्ने र उच्चारण समेत गर्न सम्भव हुन पुग्यो। यही अनुशासनमा बाँधिएको शब्द युक्त भाषा









रहेकोले संस्कृत मोर्डन कम्प्युटर ईराको कम्प्युटर कोडिङ्को उत्कृष्ट विकल्प मध्येको एक भाषा हुन सक्यो।

अ, आ .... अं , अः, क, ख,................................ क्ष, त्र, ज्ञ आदिमा समेटिएको अक्षर हरूमा अ र आ बिचमा अनन्तः को ग्याप रहने गर्दछ। हरेक अक्षरको हकमा यो नियम लागु हुन्छ। त्यो शब्द गणितको यथार्थता हो। चुरो यथार्थ के हो भने अ र आ दुवै अनन्त छन्। अ आफै आ भन्दा ठुलो अनन्त हो। सबै अनन्त भएता पनि अक्षर हरूमा सबै भन्दा सानो अनन्त ज्ञ हो।

ज्ञ अर्थात् ज्ञानले ठुलो अनन्त अ अर्थात् अज्ञान वाट हाम्रो ग्रहण क्षमता अनुरूपको ज्ञ अर्थात् ज्ञानको










यात्रा सम्म हामीलाई पुऱ्याउने गर्दछ। ग्रहण क्षमता अनुरूपको ज्ञ अर्थात् ज्ञानको यात्रा पुरा गर्दा सम्म हामीमा अनन्त: अज्ञानता कायम नै रहन्छ।

जसलाई जब हामी आत्मा ज्ञान मार्फत महसुस गर्दछौ त्यसैलाई हामी मुक्ति प्राप्तिको बिन्दु मान्दछौ। जहाँ भनिएका यी सूचनाहरू थाहा हुनुको कुनै अर्थ हुँदैन। अन्तर आत्मा वाट अनुभूतिको र स्वीकार्यताको जरुरत पर्दछ।

अन्तर्मनको यसै यात्रा बिच एक बिन्दुमा हामी आफूले आफूलाई आफू हुनुमा धन्य महसुस गर्न पुग्दछौ। लोभ, मोह, अहङ्कार र शारीरिक सुख जस्ता विषयहरू आपसे आफ गौण रहेको अनुभूति गर्न थाल्दछौ। त्यसलाई ब्लिस अर्थात् चरम आनन्दको बिन्दु भनिन्छ।













ब्लिस अर्थात् चरम आनन्दको बिन्दुमा मानिस आफूमा जे छ त्यसैमा पूर्ण सन्तुष्ट रहने क्षमता र प्रवृत्तिको विकास भएको हुन्छ। उक्त बिन्दु पार गरी आफ्नो जीवन यापन गरेको मानिसले आध्यात्मिक जीवन बिताइरहेको भनिन्छ।

मातातिर्थ औँसीमा आमाको मुख हेर्ने र कुशे औँसीमा पिताको मुख हेर्ने वैदिक चलनको मूल सार आफ्ना माता पिता लाई आफूलाई अ अर्थात् अज्ञान वाट ज्ञ अर्थात् ज्ञान सम्मको यात्रा पुरा गर्न तपाइहरूको सहयोग पाएकोले मैले आत्मा ज्ञान प्राप्त गरी आध्यात्मिक जीवन जिउने अवसर मलाइ मिल्यो भनी धन्य हुन् वहाँहरूको दर्शन गर्ने दिन हो। जसले आध्यात्मिक जीवनमा जीवन भर रमाउन आफूलाई प्रेरित गर्ने गर्दछ। हामी आफूले





आफ्नो जीवनमा आफूलाई जिउँदै अनन्त: स्वर्गको अनुभूति दिलाउन सक्षम हुन्छौ ।

## वैदिक इञ्जिनियरिङ्ग

राम-सेतु ३० किलोमिटर लामो र ३ किलोमिटर चौडाइको देखिन्छ । रामेश्वरम मन्दिरको रेकर्ड अनुसार रामेश्वरममा भगवान् रामले शिव भगवानको प्रार्थना गरेर पुलको निर्माण कार्य सुरु गरेका थिए । राम सेतुमा भगवान् रामको समयमा ४८ किलोमिटर लामो पुल बनाइएको थियो ।

एडमको पुल भनी चिनिने उक्त पुल १४८० को तीव्र साइक्लोन अर्थात् भुमरीले नबिगार्दा सम्म समुद्र सतह माथि तैरिएको थियो । मूल तत्त्व चुनढुङ्गाको





शृङ्खला रहेर निर्मित उक्त पुलले भारतको तमिलनाडुको दक्षिण-पूर्वी तटमा रहेको पम्बन (Pamban Island) टापु (रामेश्वरम) र श्रीलङ्काको मन्नार (Mannar Island) द्विपलाई जोड्थ्यो ।

**ममममातुर्वरोदत्तोमन्दरेविश्वकर्मणा ।**

**औरसस्तस्यपुत्रोऽहंसदृशोविश्वकर्मणा ।।**

**।। वाल्मिकी रामायण ६.२२.४९ ।।**

**नचाप्यहमनुक्तोवःप्रब्रूयामात्मनोगुणान् ।**

**समर्थश्चाप्यहंसेतुंकर्तुंवैवरुणालये ।।**

**।। वाल्मिकी रामायण ६.२२.५० ।।**



**स्मारितोऽस्म्यहमेतेनतत्त्वमहामहोदधिः ।**

**काममद्यैवबध्नन्तुसेतुंवानरपुङ्गवाः ।।**

**।। वाल्मिकी रामायण ६.२२.५१ ।।**

नल भन्दछन्: मन्दार पर्वतमा विश्वकर्माले मेरी आमालाई वरदान दिनु भएको थियो कि म विश्वकर्माको छोराको रूपमा उहाँ संग भएको निर्माण क्षमता र कौशलता सहित जन्मने छु। म तिनै विश्वकर्माको छोरा हुँ।

मैले सागरको बारेको सबै यथार्थहरू मेरो स्मरणमा सुरक्षित राखेको छु। म समुन्द्रको सत्यता अर्थात् गुण, दोष बारेमा पूर्ण रूपमा सचेत छु। तत्कालीन अवस्थाको जरुरत बारे ज्ञान नहुँदा सम्म मैले त्यस कार्यलाई कसरी सिद्ध गर्ने भनी बताउन व्यवहारिक








थिएन। मलाई हाम्रो जरुरतको बारे अवगत भयो।

म वरुण गुणको (हल्का हावाको तैरने गुण) संयोजन मार्फत चट्टान निर्मित पुल बनाउन सक्दछु। मलाइ वानर सेनाका नेताहरूले पुल निर्माणका लागि आवश्यक पर्ने सामग्रीहरू जुटाउन र मैले बताए अनुरूप जोडनको लागि सहयोग गरिदिनुहोस्।

**ततोविसृष्टारामेणसर्वतोहरियूथपाः ।**

**अभिपेतुर्महारण्यंहृष्टाश्शतसहस्रशः ।।**

**।। वाल्मिकी रामायण ६.२२.५२ ।।**

त्यसपछि रामको द्वारा निर्देशित वानर सेनाका नेताहरू आफ्ना सयौँ र हजारौँको विशाल सङ्ख्यामा वनमा खुसीसाथ आवश्यक पर्ने सामग्रीहरू जुटाउन






फैलिए।

**तेनगान्नगसङ्काशाश्शाखामृगगणर्षभाः ।**

**बभञ्जुःवानरास्तत्रप्रचकर्षुश्चसागरम् ।।**

**।। वाल्मिकी रामायण ६.२२.५३ ।।**



Bridge as seen between India and Sri Lanka, from Space Shuttle Endeavour during STS-59, 16th April 1994. (National Aeronautics & Space Administration, http://eol.jsc.nasa.gov. Wikimedia Commons.)

Ram Setu (Rama Setu) is a chain of natural limestone shoals, connecting India and Sri Lanka. There is an ongoing debate if this structure is naturally formed or man-made







बलिष्ठ र ठुला वानरहरूले पहाडको उत्खनन गर्दै रुखको जराहरू निकालेर जम्मा गरी त्यसलाई समुन्द्र तट सम्म ल्याउने कार्य गरियो।

**तेसालैश्चाश्वकर्णैश्चधवैशैश्चवानराः ।**

**कुटजैरर्जुनैस्तालैस्तिलकैस्तिशैरपि ।।**

**।। वाल्मिकी रामायण ६.२२.५४ ।।**

**बिल्वकैस्सप्तपर्णैश्चकर्णिकारैश्चसुपुष्पितैः ।**

**चूतैश्चाशोकवृक्षैश्चसागरंसमपूरयन् ।।**

**।। वाल्मिकी रामायण ६.२२.५५ ।।**

वानरहरूले जम्मा गरेको साल, अश्व कर्ण, धव, बाँस, कुटज, अर्जुन, पाल मिरा, तिलक, त्रिशिरा,





वेल्व, सप्तपर्णीका रूख, कर्णिका फूल, आँप र अशोकका रूख आदिको संयोजन निर्मित संरचना समुन्द्रमा स्थापित गरियो।

**समूलांश्चविमूलांश्चपादपान् हरिसत्तमाः ।**

**इन्द्रकेतूनिवोद्यम्यप्रजह्रुर्वानरास्तरून् ।।**

**।। वाल्मिकी रामायण ६.२२.५६ ।।**

वानरहरूले कुनै जरा सहितका र केही जराविहीन रुखहरू मिलाएर इन्द्रको त्रिकोण आकारको इन्द्र ध्वज झन्डा जस्तै आकार बनाएर लाठीको सहायताले तिनीहरूबिच सन्तुलन कायम राखी ठुलो फराकिलो डुगाको रूपमा बुनेर समुद्रमा मिलाएर राखे।













**ताळानदाडिमगुल्मांश्चनारिकेळन्विभीतकान् ।**

**वकुलान्कदिरान्निम्बान्समाजह्रुस्समन्ततः ।।**

**।। वाल्मिकी रामायण ६.२२.५७ ।।**

पाल्मिरा, दाडिम, नरिवल, करिरा, बकुला र निम्बका रुखहरू बुनेर उनीहरूले समुन्द्रमा





फराकिलो डुगा माथिको तह निर्माण गरे।

**हस्तिमतान्महाकायाःपाषाणांश्चमहाबलाः।**

**पर्वतांश्चसमुत्पाट्ययन्त्रैःपरिवहन्तिच ।।**

**।। वाल्मिकी रामायण ६.२२.५८।।**

त्यसमाथि हात्ती जस्तै बलिया शरीर भएका वानरहरूले वरुण गुणका ढुङ्गाहरू पहाड र समुन्द्र वाट जम्मा गरेर निर्माण स्थलमा पुऱ्याए।

**प्रक्षिप्यमाणैरचलैस्सहसाजलमुद्दतम् ।**

**समुत्ससर्पआकाशमवासर्पत्ततस्ततः ।।**

**।। वाल्मिकी रामायण ६.२२.५९।।**

जब वरुण गुणका चट्टान लाई तलको दुई तहमा निर्मित संरचना संग जोडियो तब सम्पूर्ण संरचना









एकै चोटि पानी माथि तैरिएर उठ्यो र पानीको माथिल्लो तहमा फैलियो।

**समुद्रंक्षोभयामासुर्वानराश्चसमन्ततः।**

**सूत्राण्यन्येप्रगृह्णान्तिव्यायतंशतयोजनम् ।।**

**।। वाल्मिकी रामायण ६.२२.६०।।**

समुन्द्रमा यसरी तैरिएर जताततै फैलिएको संरचनाहरूलाई सबै मिलेर सय योजना चौडाइको हुने गरी डोरीले मिहिन रूपमा बुनेर कसिलो पारि छोटो समतल तैरिने संरचना निर्माण सम्भव बन्यो।

**नलश्चक्रेमहासेतुंमध्येनदनदीपतेः।**

**सतदाक्रियतेसेतुर्वानरैर्घोरकर्मभिः।।**

**।। वाल्मिकी रामायण ६.२२.६१।।**









यसरी इञ्जिनियरिङ्ग भएर ढुङ्गाको पुल बनाउने प्रविधिले सफलता पाए पश्चात् यही क्रमलाई पहिले बनेको संरचनामा त्यस्तै त्यसरी नै नयाँ छोटो छोटो भाग जोड्दै नियमित निर्माण कार्य अघि बढाउन नलले वानरहरू सँग मिलेर महासागरको बिचमा विशाल पुल निर्माण गर्ने कार्य सुरु गरे।

**दण्डानन्येप्रगृह्णन्तिविचिन्वन्तितथापरे।।**

**।। वाल्मिकी रामायण ६.२२.६२।।**

**वानरैश्शतशस्तत्ररामस्याज्ञापुरस्सराः ।**

**मेघाभैःपर्वताग्रैश्चतृणैःकाष्ठैर्बबन्धिरे ।।**

**।। वाल्मिकी रामायण ६.२२.६३।।**









प्रतिपादित मन्त्र अनुरूप कसैले लाठी, कोहीले काठ, कोहीले मूल संरचना आदि समातेर रामको आज्ञा अनुरूप कार्यमा (आफूलाई मानसिक र शारीरिक रूपमा तैयार गरी - तन्त्र) लामबद्ध सयौँ वानरहरूको रात दिनको सक्रिय सहभागीताकले पुल निर्माण (समुन्द्र पार गर्ने यन्त्र) कार्य सम्पन्न गरे।

यो कुरा जाग जाएरै हो कि पानीको भन्दा कम घनत्व भएको कुनै पनि ठोस पदार्थ पानीमा तैरनेछ। आर्किमिडीज सिद्धान्तमा व्याख्या गरिए अनुसार हेर्दा डुङ्गाको आकारको भारी देखिने निश्चित तौल भएको भारी सामग्री समेत यदि त्यसको







घनत्व पानीको घनत्व भन्दा कम रहेछ भने बोयन्सी (पानीले त्यसलाई माथि धकेल्ने चाप त्यसको तौल भन्दा कम भएमा) को कारणले तैरने गर्दछ। ज्वालामुखी विस्फोट हुने क्रममा पृथ्वीको १६०० डिग्री सेल्सियसको तातो गर्भ वाट पृथ्वीको





सतहको २५ डिग्री सेल्सियस पग्लिएको तातो म्याग्मा ग्यासहरू सँगै उच्च प्रेसरमा आइपुग्दा पनि संग सम्पर्कमा आएर चिसो बनी लावा बन्ने क्रममा लावा हावाको थैलीले भरिन्छ र चिसो हुन्छ।

अत्यन्त तीव्र गतिमा उच्च प्रेसर वाट न्यून प्रेसरमा पुगी चिम्सिने क्रममा आफ्नो सम्पूर्ण भोल्युमको (आयतनको) ६४ देखि ८५% सम्म प्वाल युक्त कडा चट्टान बनेको यो लावाको प्युमिस (Pumice) यति हल्का हुन्छ कि यो अत्यन्त कडा तर हल्का ढुङ्गा बन्दछ। जुन अक्सर गरेर पानीमा तैरिन्छ।

ठुला ठुला हल्का प्युमिसको टुक्राहरूलाई एक आपसमा जोडेर फराकिलो बनाउने हो भने पानीमा तिरेको काठको डुङ्गामा हिंडेर पानीको सतह पार गरे





जस्तै यसलाई अस्थायी पुलको रूपमा उपयोग गर्न सकिन्छ। लावाको प्युमिस यति कडा हुन्छ कि यो वर्षौं वर्ष सम्म पानीमा तैरन्छ।

निकै लामो समयमा यसलाई पानीले भिजाए पछि जलमग्न बने पछि मात्र यो पानीमा डुब्दछ। यो सम्पूर्ण रूपमा खण्डित भएर पानीमा घुलिन हजारौं हजार वर्ष लाग्न सक्छ।

लावाको प्युमिस जुन जुन स्थानमा ज्वालामुखी गयो त्यहाँ पाइन्छ। पानीमा तैरने भएकोले यो खोला नाला आदि मार्फत नदी हुँदै समुन्द्रमा पुग्दछ। समुन्द्रमा तैरिएर रहने यो ढुङ्गा समुन्द्र तट तथा ज्वालामुखी गएको स्थानमा भेटिन्छ।

हाम्रो प्रकृतिमा जता ततै भेटिने प्युमिसको









Pumice नाममा प्रख्यात प्राकृतिक रूपको "चट्टान" बालुवा बन्ने सिलिका निर्मित ठोस बस्तु हो जुन ज्वालामुखी फुट्ने समय ठुलो धक्काका साथ पृथ्वीको सतहमा पृथ्वीको तातो गर्भ वाट आउँछ र त्यहाँको चिसो पनले हतार हतार सेलाउने क्रममा परम्परागत रूपमा पानीमा तैरने ढुङ्गाको रूपमा परिवर्तन हुन्छ।

प्युमिस (Pumice) मुख्यतया सिलिकन डाइअक्साइड, केही एल्युमिनियम अक्साइड र ट्रेस मात्रामा अन्य अक्साइड हरू मिलेर बनेको ढुङ्गा हो।

राम सेतु बनाउने क्रममा सिमेन्ट विकसित भएको थिएन र त्यसको पानीमा तैरिने गुण पनि हुन्थेन।

त्यसैले तत्कालीन समयमा निर्माणको कम्पोजिट






सामग्रीको संरचना बनाउने चलन थियो।

जसमा जडानको लागि धुलो पारिएको पोलिएको चुनढुङ्गा, चाकु, गाँजाको बोट, पराल, बाँस, ऊन, घाँस लगायत विभिन्न जडीबुटी, तेल, गेडागुडी आदिको प्रयोग हुने गर्दथ्यो।

राम सेतुको निर्माणमा त्यस्ता वातावरण मैत्री वैदिक उपायहरू समेत प्रयोग भएको देखिन्छ। तत्कालीन समयमा घर आदि निर्माण हुने वैदिक प्लास्टरको निर्माणमा लगभग ३० % गाईको गोबर, कागतीको रस, गौर गम, जिप्सम बालुवा, सिलिकन दाइ अक्साइड र अन्य हर्बल प्राकृतिक चोप, दुध, धुलो, रसायन सामग्रीहरू समावेश हुने गर्दथ्यो।

तत्कालीन समयमा पुल समुन्द्रमा हालिएकोले







समुन्द्रको छालले तल, माथि, दायाँ, बायाँ सबै दिशामा लगातार पुललाई हाललाई दिने हुनाले पुल नबिग्रियोस् भनी निर्मित संरचना आफैमा सन्तुलित हुने गरी अङ्ग्रेजीको जेड अक्षरको आकारमा राम सेतुको पुल निर्माण भएको देखिन्छ।

जुन वैदिक कालिन ब्रिज इञ्जिनियरिङ्ग हो। यसरी तत्कालीन समयमा लामो पुल हाल्न सम्भव बनेको यथार्थ लाई हामीले नजर अन्दाज गर्नु हुँदैन।



# वैदिक इनोभेसन।

**वैदिक विद्याको (Vedic Knowhow) जगमा कसरी जन्मन्छ आधुनिक वैज्ञानिक इनोभेसनका (Scientific Innovation) अवधारणा ?**

आयुर्वेदको सिद्धान्तमा भेटिने स्वस्थ व्यक्तिको परिभाषाले भन्दछ:

**"समदोषः समाग्निश्च समधातु मलःक्रियाः।**
**प्रसन्नात्मेन्द्रियमनः स्वस्थइतिअभिधीयते॥"**

जसको अर्थ हुन्छ एक व्यक्ति जसको दोषहरू सन्तुलित छन्, जसको पाचन प्रक्रिया सन्तुलित छ, जसका तन्तुहरू सबल छन्, शरीरमा उत्पन्न हुने विकारहरू विसर्जन प्रणाली सामान्य छन् तथा











जसको इन्द्रियहरू तथा मनोविज्ञान (मन, चित्त, बुद्धि, अहङ्कार) आत्म केन्द्रित (आध्यात्मिक) रहन्छ उसलाई आनन्दले परिपूर्ण (Full of Bliss) स्वस्थ मानिस मानिन्छ।

आयुर्वेदको सिद्धान्तमा भएको स्वस्थ मानिसको अवधारणा लाई डब्ल्यूएचओले समेत स्विकार्न बाध्य छ। व्यक्तिको स्वस्थ अन्तर्गत डब्ल्यूएचओको मानसिक स्वास्थ्य अन्तर्गतको परिभाषा भन्दछ मानसिक रूपमा स्वास्थ्य मानिसको अवस्था भनेको व्यक्तिको त्यो अवस्था हो जति बेला उसलाई आफ्नो क्षमता महसुस हुन्छ, विषय बस्तु बारे राम्रो जानकारी राख्न सक्ने, आफ्नो काम राम्रो संग गर्न सक्ने तथा आफ्ना जीवनको तनावहरूको सामना गर्दै समुदायमा योगदान गर्न उसलाई सक्षम राख्ने











अवस्थामा उसलाई राख्दछ।

हरेक व्यक्तिमा बलिष्ठ तन (शरीर) उसलाई उपलब्ध मन्त्रको (मन = वैचारिक, त्र =उपयोग मार्फत लक्ष सम्पन्न गर्नु) सदुपयोग गर्ने क्षमता प्राप्तिको लागि अनिवार्य पूर्वाधार मध्येको सबै भन्दा महत्त्वपूर्ण पक्ष हो। शारीरिक बाहेक हामीलाई वैज्ञानिक रूपमा उपयोगी सिद्ध भएको शिल्प, कला, प्रविधिको आदिमा आधारित आफ्नो तन र मन् बाहेकको उपकरण समेत चाहिन्छ। जसलाई यन्त्र (यन = उपकरण, त्र = उपयोग मार्फत लक्ष सम्पन्न गर्नु) भनिन्छ।

यन्त्र र तन्त्र वेदको मन्त्रले देखाएको लक्ष प्राप्ति गर्ने उपाय हो। मन्त्र सैद्धान्तिक अवधारणा हो भने यन्त्र सैद्धान्तिक अवधारणा लाई व्यवहारमा उतार्ने विधि













र प्रविधि हो। त्यसको लागि व्यक्तिको तन वा शरीर लाई समेत सक्रिय र बलशाली राख्नु जरुरी हुन्छ। त्यस प्रयोजनमा तन्त्र विद्याको जरुरत हुन्छ।

लगभग ६ देखि ८ औँ शताब्दी इस्वी देखि अस्तित्वमा रहेको शैव धर्म शास्त्रमा आधारित तान्त्रिक (तन्त्र : तन = शरीर, त्र = उपयोग मार्फत लक्ष सम्पन्न गर्नु) कुण्डलिनी एउटा जटिल अवधारणा हो जसले हाम्रो तनमा (शरीर) प्राकृतिक रूपमै रहेको अत्यन्त महत्त्वपूर्ण तर निष्क्रिय शक्तिलाई जनाउँछ।

त्यसलाई "उत्तेजित" वा सक्रिय गर्न सक्दा व्यक्ति आफू शारीरिक रूपमा बलियो बनेको रूपान्तरणात्मक अनुभवहरू प्राप्त गर्दछ। जुन मूलतः आन्तरिक कम्पन उत्पन्न गरी आफ्नो तनलाई









बलिष्ठ गर्ने उपाय हो।

शाब्दिक रूपमा संस्कृत शब्द ज्योतिषले "प्रकाश विज्ञान" भन्ने अर्थ दिन्छ। तारा र ग्रहहरू बाट आउने प्रकाशको विकिरण र तिनीहरू बिचको संयोजन आदिले व्यक्तिको स्वस्थ र कल्याणमा पुऱ्याउने प्रभाव बारे को प्रभाव बारे वैदिक ज्योतिष विज्ञानले कुरा गर्दछ। तारा र ग्रहहरूको गति र स्थानको आधारमा तिनीहरू बिचको प्रकाशको विकिरणको संयुक्त प्रभावको व्याख्या गर्दै ज्योतिष विज्ञानमा व्यवहारिक अनुमान गर्ने गरिन्छ। मानव शरीर पाँच तत्त्व मिलेर बनेको हुन्छ भन्ने आयुर्वेदको सिद्धान्तमा ज्योतिष विज्ञान आधारित छ।

वैदिक ज्योतिषले पन्च महाभूत भनिने ती पाँच तत्त्व निर्मित हुँदै गर्दा जन्मको समय र स्थानमा आधारित









रहेर पाँच तत्त्व मध्ये कुन चाहिँ तत्त्व व्यक्तिको जीवनको शासक तत्त्व रहेर जन्मिएको छ त्यो यकिन गर्दछन्। त्यसैको आधारमा उनीहरूले मानिसको १२ राशि चिन्हहरू निर्माण गर्दछन्।

कुन व्यक्ति कुन राशिको हो त्यसको आधारमा उसको शासक तत्त्व यकिन हुन्छ। शासक तत्त्वले व्यक्तिमा विकास गर्ने गुणहरू प्रतिबिम्बित गरिदिन्छ। यकिन गर्ने गर्दछन्। व्यक्ति निश्चित उमेरमा रहँदा तारा र ग्रहहरूको गति र स्थान कहाँ थियो त्यस वारेको ज्ञानले प्रकाश विज्ञानले व्यक्तिमा पार्ने असर र त्यसको प्रभाव राशि चिन्ह अनुसार यकिन गर्न सकिन्छ। असर र त्यसको प्रभावको आधारमा त्यसले दिने फल निर्धारण गर्ने गरिन्छ। यसरी समग्र असर र प्राप्त फलको आधारले








व्यक्तिको व्यक्तित्व, लक्षणहरू प्रतिबिम्बित गरिदिन्छ।

उदाहरणको लागी मेष र सिंह राशि दुवैको प्रमुख तत्त्व अग्नि (फायर) हो। यी व्यक्तिहरूको अग्नि (फायर) स्वभावमा व्यक्तिको निश्चित उमेरमा तारा र ग्रहहरूको गति र स्थान कहाँ रहेको थियो भन्ने आधारमा तिनीहरूको प्रकाशको विकिरणको संयुक्त प्रभाव त्यति बेला कस्तो रहेको थियो हेरिन्छ। व्यक्तिको भविष्य बताउन समेत उक्त समयमा तारा र ग्रहहरूको गति र स्थान अनुरूप प्रकाशको विकिरणको संयुक्त प्रभाव कस्तो रहने र त्यस प्रभावको निश्चित प्रमुख तत्त्व युक्त शरीर भएको व्यक्तिमा के असर गर्ने र के नतिजा आउने भन्ने कुरा मार्फत भविष्य वाणी तय हुन्छ। जस्तै मेष र सिंह









राशिको अग्नि (फायर) तत्त्व संग त्यो प्रभावको अन्तरक्रियाको नतिजा अनुरूप जान्न मेष र सिंह राशिको व्यक्तिले जान्न चाहेको विषयको नतिजा यस्तो हुने छ भनी भविष्य वाणी गर्ने आधार ज्योतिषहरूलाई प्राप्त हुन्छ।

वैदिक ज्योतिषका अनुसार तौल बढ्ने र ग्रहहरूको प्रभाव बिचमा गहिरो सम्बन्ध छ। ग्रहहरूको प्रभावले व्यक्तिमा बोसो लाग्ने र अधिक तौल वृद्धि हुने गर्दछ। पाँचौं स्थानमा रहेको निश्चित ग्रहको भूमिकाले व्यक्तिको तौल वृद्धिका साथै बाँझोपनको समेत पैदा गर्ने समस्या दिने गर्दछ। बृहस्पतिको प्रभाव मानव बौद्धिकता बुद्धिमा हुने गर्दछ। हाम्रो शरीरमा बोसो लाग्ने कार्यमा बृहस्पतिको प्रभावको भूमिका हुन्छ। पाँचौं स्थानको बृहस्पति ग्रह वजन






वृद्धिमा जिम्मेवार हुन्छ भने छैटौँ स्थानको बृहस्पतिको प्रभाव वजन घटाउन सहयोगी बन्दछ। बृहस्पतिको खराब स्थानको प्रभाव अधिक तौल, मोटोपन निम्त्याउन हर्मोन परिवर्तन मार्फत शरीरको मेटाबोलिजम लाई अनुभूति हुने गरी असर गर्दै अधिक भोजन ग्रहण गर्ने र व्यक्तिलाई अल्छी बनाउन भूमिका खेल्दछ।

चन्द्रमाको प्रभाव पनि चिल्लो बढाउन सहयोगी गर्छ। तर सकारात्मक रूपमा। किनकि चन्द्रमाको प्रभावले विकसित गर्ने चिल्लो व्यक्ति लाई आकर्षक देखाउन भूमिका खेल्छ। व्यक्तिका परिपुष्ट गालाहरू मुलायम, नरम र चम्किलो छाला बनाएर थप आकर्षक र प्यारो बनाउने गर्दछन्। चन्द्रमा पहिलो, पाँचौं र नवौं स्थानमा रहँदा भने चन्द्रमाको










नकारात्मक प्रभाव पर्दछ। हिँड्ढा अलि ढिलो हिँड्ने, अल्छी पन बढाउने गर्दछ। अर्को तर्फ चन्द्रमा बलियो स्थानमा रहँदा मोटो भए पनि व्यक्तिले अधिक ऊर्जावान् र सक्रिय महसुस गर्दछ।

शरीरको मेटाबोलिज्म लाई असर गर्दै मोटोपना र अधिक तौल बढाउन जिम्मेवार रहेका ग्रहहरूको प्रतिकुल भूमिका न्यूनीकरणको लागि वजन घटाउने र जीवन स्वस्थ राख्ने केहि वैदिक ज्योतिषी उपायहरू यस प्रकारको छ।

हरेक ५ घण्टामा १ लिटर मनतातो पानी पिउने। बृहस्पतिलाई खराब बनाउन सक्ने पहेँलो नीलमणि रत्न नलगाउने। चन्द्रमा, शुक्र, बृहस्पति र मङ्गललाई सन्तुलित राख्न चिसो खानेकुरा नखाने।











बुध ग्रह लाई खुसी पार्न धेरै हरियो तरकारी अधिक खाने। शुक्र ग्रहलाई प्रसन्न पार्न अलिकति मेदोहर चूर्ण (गुगलु पाउडर) मनतातो पानीमा हालेर दिनको ३ पटक सेवन गर्ने।

बृहस्पतिको असर खराब गर्ने कुनै पनि प्रकारको सुनको गहना नलगाउने।

बृहस्पति बलवान गर्न सिल्भरको बेरुवा औँठी लगाउने।

गरिबलाई पहेँलो रङ्गको मिठाई दान गर्ने। हरेक खाना पछि ५ मिनेट "वज्रासन" मा बस्ने।

शरीरको वजन कम गर्न वैदिक मन्त्रमा मूलतः अग्नि गायत्री मन्त्र र दुर्गा मन्त्र जप गर्न सुझाइने गरिन्छ।













**ऊँ महाज्वालाय विद्महे अग्नि मध्याय धीमहि |**

**तन्नो: अग्नि प्रचोदयात || अग्नि गायत्री मन्त्र ||**

भावार्थ: ऊँ। मलाई महान् अग्निको ज्वालाको सान्निध्य ध्यान गर्न दिनुहोस्। हे अग्निको भगवान्, मलाई उच्च बुद्धिमत्ता प्रदान गर्नुहोस्। हे तेजस्वी अग्निको भगवान् मेरो मनलाई ज्ञानको उज्यालो दिनुहोस्।

**सर्वमङ्गलमाङ्गल्ये शिवे सर्वार्थसाधिके ।**

**शरण्ये त्र्यम्बके गौरि नारायणि नमोऽस्तु ते ||**

**|| दुर्गा मन्त्र ||**

भावार्थ: दुर्गा सारा संसारका जीवहरूको शुभ प्रदायक पवित्र र दैवी शक्ति हुन्। उनी सम्पूर्ण







चराचरहरूको उत्थानमा लाग्नेहरूको शुभ प्रदायक हुन्। उनको भूमिकामा तल्लीन रहेका (उनमा आत्मसमर्पण गरेका) हरूको उनले रक्षा गर्छिन्।

हिमाली राजाकी छोरी, त्रिलोककी माता गौरी माताको नामले समेत चिनिने दुर्गालाई मा बारम्बार नमन गर्दछु। पूजा गर्दछु।

वैदिक अवधारणा अन्तर्गत पाचन क्रिया राम्रो राख्ने मन्त्र समेत उपलब्ध छ।

**अगस्त्यं कुम्भकर्णं च शनिं च वडवानलम् ।**

**आहारपरिपाकार्थं स्मरेद् भीमं च पञ्चमम् ।।**

भावार्थ: भोजन ग्रहण गरिसके पछि ग्रहण गरेको आहारको राम्रो संग पाचन होस् भन्नको लागि अगस्त्य, कुम्भकर्ण, शनि, बडवाग्नि (दावानल) र











भीम गरी पाँच शक्तिको सदैव स्मरण गर्नु।

**अङ्गारकमगस्तिं च पावकं सूर्यमश्विनौ ।**

**यश्चैतान् संस्मरेन्नित्यं भुक्तं तस्याशु जीर्यते ।।**

भावार्थ: जो मानिसले खानको सन्दर्भमा मङ्गल, अगस्ति, अग्नि, सूर्य तथा अश्विनीकुमारको स्मरण गर्दछ उसले आफूले खाएको अन्न शीघ्र पचाउने तागत विकास गर्दछ।

माथि लेखिएको संस्कृत मन्त्रको नेपाली भाषामा गरिएको उल्था लाई शब्द कोषको शब्दार्थको ज्ञानको आधारमा प्राप्त हुने भाषाको ज्ञानले तथा अध्यात्म वा विद्याले तपाई हाम्रो जीवनमा यसलाई उपयोगी बनाउन सम्भव हुँदैन।











किनकि त्यो विद्याले हनुमान लाई "अलि ठुलो बाँदर" भन्ने मात्र उल्था गरिदिन्छ। जसले चिरञ्जीवी हनुमानको, कूटनीतिज्ञ हनुमानको, सैन्य कुशलता भएका हनुमानको तथा आयुर्वेद ज्ञाता हनुमानको समेत चरित्र बुझ्न समाजलाई सहयोग गर्दैन। बरु समाजमा यस्तो नचाहिने कुरो पनि गर्ने ? बाँदरले काहीँ उपचार गर्छ ? राजनीति गर्छ ? युद्ध लड्छ भन्ने प्रति प्रश्नको जन्म दिन्छ।

त्यस्तै वनार भनेको बाँदर भनिएको पनि होइन। 'व' अर्थात् वनमा बसोबास गर्ने 'नर' अर्थात् आदिम मानव भनिएको हो।

हाम्रा आजको पाराको सारतत्व बिर्सिएर हाम्रा विद्वान हरूबाट भएका वेदका ऋचा र मर्म बारेको व्याख्या सुनेर माथिको मन्त्र मार्फत न त वजन घट्ने













छ न त पाचन प्रक्रिया नै घट्ने छ।

यसको लागि उक्त मन्त्रमा भएको विज्ञान वा अविद्याको पक्ष जान्नु अनिवार्य छ। ऋचाले दिन खोजेको विद्याको सार बुझ्न जान्ने पर्ने प्रमुख आधारभूत अविद्या पक्षको ज्ञान हो। भौतिक पक्ष संग सम्बन्धित रहेको त्यो ज्ञान भौतिक विज्ञानको समझ वाट मात्र प्राप्त हुन्छ।

अविद्या पक्षको व्यवहारिक ज्ञानको डिकोडिङ्ग र अर्थ औषधि विज्ञानको ज्ञान र प्रविधिले प्रष्ट गरिदिने गर्दछ।

जब त्यो विधि र उपाय (मन्त्र) हामी उपयोग गर्न सक्दछौ तब हामीले आफ्नो शरीर (तन वा तन्त्र) लाई उपाय लगाएर (यन्त्र) ठिक गर्न सक्दछौ।





यसरी सन्तुष्ट बनेको शरीर र मन अब बल्ल अर्थ पूर्ण अध्यात्म वा विद्या प्राप्त गर्न सक्षम बनाउन सक्छौ।

तिन तहमा हुने यही वेदको ज्ञानको डिकोडिङ्गले मार्फत हामीले वैदिक इनोभेसन के हो र विद्या के हो भन्ने बुझ्न सक्दछौ।

यस वाट वेद र विज्ञान कति बेस्सरी एक आपसमा टाँसिएर बसेको कुरो रहेछ भन्ने कुरो बुझ्न पनि हामीलाई सहज हुन्छ।





# कर्मको फल

तपाईंलाई थाहा छ ? हाम्रो परम्परागत खानपानको नियममा मुख्य खानाको सुरुवात मसलादार खानेकुराबाट हुने गर्दथ्यो। अन्तिम मुख्य खाना गुलियो परिकार हुने गर्दथ्यो। अन्तिम खानापछि सौफ आदि मुख सफा गर्ने खाना हुन्थ्यो। बिहानै सबेरै उठेर नित्यकर्म पश्चात् हामी पहिले पूजा गर्ने, निधारमा टीका लगाउने, थोरै गुलियो पञ्चामृत पिउने र प्रसाद खाने काम हुन्थ्यो।

त्यसपछि बिहानीको तितो वा टर्रो पेय पदार्थ जस्तै, हर्बल पानी, तुलसी पानी, शीतल पानी, बेसार पानी आदि पिउने गरिन्थ्यो। बिहानको पेयसँग मालपुवा, जेरी पुरी आदि जस्ता हल्का केही खाने





पनि गरिन्थ्यो। त्यसपछिको पालो मुख्य खानाको हुन्थ्यो। मुख्य खानामा पहिला मसलादार खाना खाने त्यसपछि अन्त्यमा गुलियो खाना खाने परम्परा थियो। यो क्रम तय हुनुमा हाम्रो पुर्खाको वैदिक अनुसन्धान मुख्य आधार थियो।

बिहानको नित्यकर्म सकी पूजा गर्ने समय पुग्दा बिहानको नित्य कर्म आदिका लागि जरुरत हुने तागतका लागि लागि भनी शरीरले कलेजोमा जगेडा गरी राखेको खानाको सारतत्व खर्च हुन्थ्यो। त्यसलगत्तै तनाव दिने प्रकृतिको इन्जाइम बन्ने हुँदा कोर्टिसोलको बढेको मात्राले बिहानै दिने तनाव दिन भरको समय लोदर लगाइदिने सम्मको जोखिम युक्त हुन्थ्यो ।

पूजाका क्रममा हुने छोटो मेडिटेसन तनाव दिने









कोर्टिसोल उत्पन्न हुनबाट रोक्न र मन्त्र पाठ गर्दा टाउकोको क्षेत्रमा ध्वनिले दिने कम्पन हाम्रो नाकको नोसट्रिलमा नाइट्रिक अक्साइड उत्पादन गर्न दिन उत्प्रेरक बन्थ्यो । त्यसरी उत्पादन हुन पाएको नाइट्रिक अक्साइडलाई श्वासले फोक्सोमा पु¥याउने काम गर्दथ्यो।

फोक्सोमा पुगेको नाइट्रिक अक्साइडले शिराहरू फुलाउने मात्र हैन, रगतमा अक्सिजन घुलाउन सहयोग गर्दथ्यो। एल्भिओलाइहरूको बढेको सर्फेस एरियाले रगतमा कचराका रूपमा रहेको कार्बनडाइअक्साइड रगत बाहिर फाली रगतमा घुलनशील अक्सिजनको मात्रा बढाउन भूमिका खेल्थ्यो ।

नाइट्रिक अक्साइडकै कारण चिन्ता कम गर्ने, डर










घटाउने र जीवन प्रति आफ्नो धारणा सकारात्मकता बढाउने सेरोटोनिन, डोपामाइन, अक्सिटोसिन र एन्डोर्फिन जस्ता आनन्ददायी हार्मोन उत्पादन हुन सहयोग पुग्दथ्यो । बिहान पख शरीर स्फूर्त राख्न, मुड नियन्त्रण गरी विषय वस्तुमा ध्यान केन्द्रित गराउन र मानिसलाई रचनात्मक बनाउन यसले धेरै सहयोग पु¥याउने गर्दथ्यो। सकारात्मक सोचको बिहानीले दिउँसो र बेलुकीसम्म सकारात्मक प्रभाव जमाउने गर्दथ्यो। जीवन आनन्दित हुने धेरै सम्भावना बढाउने गर्दथ्यो।

पूजा पछि निधारमा टाँसेको टीकाले तपाईंको ध्यान निदार तिर घरी घरी तान्दथ्यो। जब तपाईंको ध्यान निधारमा केन्द्रित हुन्थ्यो, केन्द्रीय मस्तिष्क प्रणालीको चुरो चासो दुई आँखा बीचको केन्द्रको













भित्री भागमा पटक पटक केन्द्रित बन्दथ्यो। मस्तिष्क केन्द्रित उक्त विन्दु पिनियल ग्ल्यान्ड वा तेस्रो नेत्रको विन्दु हुने गर्दथ्यो। पिनियल ग्ल्यान्डमा केन्द्रीकृत हुने ध्यानले मानिसमा सदैव धन्य वा ब्लिसको अनुभूति दिलाउने गर्छ। हाम्रा पुर्खा ब्लिसको सहज अनुभूति गर्थे।

त्यसले लोभ, घृणा, निन्दा आदिको पक्ष घटाउनेर उपकारी ऋषिमनको अधिक विकास गर्दथ्यो। समाजमा सकारात्मकता धेरै नकारात्मकता थोरै देखिन्थ्यो। नियमित हुने दिनचर्याको ध्यान र मेडिटेसनले ब्लिसको मात्रा हद झन् उच्च बनाउने गर्दथ्यो। फलतः हाम्रा पुर्खाले सत्य युगको संस्कृतिको स्वाद चाख्न पाउँथे ।

त्यस पछिको परम्परागत खानपानको तरिकामा









मुख्य खानाको समय आउँथ्यो। जसको सुरुवात मसलादार खानेकुराबाट हुने गर्दथ्यो।जब तपाईं खाना खान मसलादार खाना छान्नुहुन्छ, मसलाले तपाईंको भोक जगाउने (एपेरिफको) काम गर्छ । पाचन प्रणालीलाई पाचन जुस पैदा गर्नसमेत प्रोत्साहित गर्छ। तपाईंकोपाचन प्रणाली सक्रिय र तयारी अवस्थामा आउँछ।

मसलादार चिजहरूले पाचन रसका रूपमा रहेको एसिड र बेसलाई मात्र सक्रिय पार्ने होइन, त्यसको सारतत्व प्रशोधन गर्ने र ती सारतत्व र खानाबाट आउने ऊर्जाको संयोजनबाट विभिन्न अंग प्रत्यंग बनाउने र शरीरले आफ्नो निर्माण र वृद्धिका क्रममा हुने त्रुटिको आफैंले सच्चाएर स्वउपचार समेत गर्दथ्यो। सम्पूर्ण पाचन र निर्माण क्रिया नै जागरुक









बन्थ्यो ।

तपाईंले मीठो गुलियो खाने बेलासम्म मसलादार चिजहरूले पाचन प्रक्रिया सहज र प्रभावकारी बनाइसक्ने हुँदा मिठाई वा कार्बोहाइड्रेटको तत्काल पाचन बाट बिहानीको तत्कालको शक्तिको जरुरत पूर्ति गरी दिन्थ्यो। पच्न बाँकी रहेको प्रोटिन, चिल्लो, मिनिरल, भिटामिन र फ्लेभोनोइड आदि लामो समय लिएर चतुरता पूर्वक पूर्ण रूपमा पचाउन र शरीरमा सोस्न प्रभावकारी भूमिका खेलिदिन्थ्यो ।

जब तत्कालको जरुरतको इनर्जी अल्पकालीन रूपमा पूर्ति हुन्थ्यो तब हाम्रा पुर्खाले खाना खाएर अघाएको समेत तुरुन्तै महसुस गर्न पाउँथे। उनीहरू शरीरलाई हानि हुने गरी थाहा नै नपाई आजको




जस्तो धेरै खाने सम्भावना कम रहन्थ्यो । जे सुकै कुरा पनि धेरै खाँदा विषाक्त हुने, बरु केही कम हुँदा जेनतेन शरीर आफैँले आफू लाई कमी भएका तत्वहरू निर्माण गरी वा जोगाड बाट तानतुन पारी व्यवस्थित गर्न सक्दथ्यो । कम्तीमा शरीर कम रोगी हुने गर्दथ्यो। कम आहार ओखती तुल्य बन्दथ्यो। शरीरको नियमलाई वैज्ञानिक रूपमा व्यवस्थापन गर्न कम आहारले निकै हदको सहयोग पु¥याएको थियो ।

यथार्थमा वैदिक परम्पराको देनका रूपमा आजको आधुनिक जीवनको टिकुली (टिका) लाउने, टोपी लाउने, बिहान तितो टर्रो चिया वा कफी बाट दैनिकी सुरु गर्ने चलन बसेको प्रस्ट छ। दिमागको एकाग्रता बढाउने, स्फूर्ति बढाउने बिहानको तितो





टर्रो चिया वा कफीको ज्ञानको स्रोत हाम्रो परम्परागत वैदिक रस ज्ञान नै थियो। आज क्लासिक भनिने भोजन गृहका खानाको मेनुमा पहिले भोक जगाउने एपेरिफ राख्ने, बीचमा स्न्याक्स वा चमेना चल्ने, लगत्तै मुख्य खाना दिने र त्यस पछि अन्त्यमा डाईजेस्टिव पेय, सौफ, जेठीमधु, पिप्ला र बोजो टोक्ने काम बाट खाना पचाउने आदिको ज्ञानको स्रोत परम्परागत वैदिक रस ज्ञान नै थियो ।

आधुनिक खानाको मेनुको इन्जिनियरिङ परम्परागत खानपानको प्रमाणित अनुभूतिको आधारमा भएको देखिए तापनि खानाको मेनुको महत्वपूर्ण इन्जिनियरिङ गर्ने कार्यको लागि परम्परागत खानपानको भूमिका देखिन्छ। पछिल्लो समयमा







इन्द्रिय सुख प्रधान स्वाद केन्द्रित खानपान परम्परागत खानपानको औषधीय खानपानको अवधारणा सँग संयोजित हुन नसकेकाले हाम्रो शरीरको इनर–इन्जिनियरिङ अमैत्री खानपानमा रूपान्तरित भएको देखिन्छ। जसका कारण आजका अत्यन्त आधुनिक क्लासिक रेस्टुरेन्ट भनिएका स्थानका खानाहरू समेत हाम्रो शरीरका लागि परम्परागत खाना र दिनचर्याको हदको प्रभावकारिता दिन बाट चुक्के गरेको भेटिन्छ।

हाम्रो खानपान हाम्रो इनर–इन्जिनियरिङ मैत्री बनि नसक्दा सम्म हाम्रो शारीरिक, मनोवैज्ञानिक र आध्यात्मिक विकासका लागि अत्यन्त प्रभावकारी खानको पूर्तिका लागि हाम्रा परम्परागत खाना नै













पहिल्याएर आफैंले बनाएर खानुको अन्य विकल्प उपलब्ध भएको देखिँदैन ।

# अध्यात्म जान्न ‘म’ लाई चिन्नुहोस्

वैदिक अवधारणामा भाग्यमानी भनेको के हो भन्ने व्याख्या गर्न एउटा चर्चित हिन्दी गीतको सहारा लिंदा सजिलो पर्छ। “किस्मत वालों को मिलता है प्यार के बदले प्यार”। मतलब जो भाग्यमानी छ उसलाई मात्र आफूले गरेको प्यारको बदलामा प्यार मिल्छ।

तपाईंले गर्ने प्यार तपाईंको निजी अधिकार हो।











तपाईंले प्यार गर्नु हुन्छ भन्दैमा अर्काले पनि तपाईंलाई प्यार गर्नुपर्छ भन्ने मान्यता कपट पूर्ण हो। किनकि अर्को व्यक्तिले कसलाई प्यार गर्ने वा नफरत गर्ने त्यो उसको नितान्त निजी विषय हो। कसैलाई प्यार गर्नु तपाईंको कर्म हो। तपाईंले प्यारको बदलामा प्यार पाउनु भयो वा घृणा नै पाउनु भयो भने पनि त्यो तपाईंकै कर्मको फल हो। जुन तपाइको नियन्त्रणको विषय होइन।

कुनै पनि कर्म वा लगानी विना अथवा थोरै लगानीबाट धेरै प्रतिफल पाउने घटनालाई भाग्यमानी सम्झने मान्यता वैदिक मान्यता होइन । तपाईं घरमा लोग्ने स्वास्नी हुनुहुन्छ र घरको निर्णयमा तपाईंको ५० प्रतिशत चल्छ भने तपाईं शत प्रतिशत आफ्नो अधिकारको उपयोग गरिरहनु भएको छ।













५० भन्दा माथि जति तपाईंको चल्छ, त्यो तपाईंको बल मिच्याइँ रहेको शास्त्रीय मान्यता छ ।

जब तपाईं कुनै कर्म गर्नु हुन्छ र त्यस बापत फल वा प्रतिफल प्राप्त गर्नुहुन्छ भने तपाईं वास्तवमै भाग्यमानी मानिस हो। यो व्यावहारिक यथार्थता हो। यति सानो सामान्य कुरा नबुझेरआज हामी हाम्रै परिवारलाई आफ्नो परिवार आफ्नो रहेको अनुभूति लिन सकिरहेका छैनौँ । आफ्नो निवासलाई आफ्नो मन बस्ने आरामदायी घर बनाउन सकिरहेका छैनौं। हामी आफ्नै घरमा बिरानो बनेर सामाजिक सञ्जालमा आफन्त खोज्न भड्किएको आत्मा सहित उपस्थित हुन्छौं। हामी आफ्नै घरका हाम्रा र राम्रा मोतीहरू सँग बोलचाल नै बन्द गरी बसेका छौँ । सामाजिक सञ्जालमा दसौं हजार साथी बनाएर









कसले लाइक गर्ला, कसले कमेन्ट गर्ला भन्दै जोखना हेरेर जीवन कटाइ रहन्छौं ।

प्रवासी जीवन आफैंमा अत्यधिक कष्टकर चरम सम्झौताको जीवन हो। आफ्नो भएको कमाएको साथीभाइ, समाज, प्रतिष्ठा र विश्वसनीयता सबैलाई तिलाञ्जली दिएर घर्केको उमेरमा राम्रो मेसो पाइनसकेको विदेशी परिवेशमा ग्राउन्ड जिरोबाट जीवनको पुनः सुरुवात गर्न पर्दा आइपर्ने संवेदनशील परिस्थितिको मुकाबिला गर्न वैदिक अध्यात्मको सहारा अत्यन्त प्रभावकारी बनेको भुक्तभोगीहरूले बताएको मैले धेरै सुनेको छु । मेरो भोगाइ पनि त्यस्तै रह्यो ।

वैदिक संस्कृत शब्द आत्मनलाई मानिसहरू आत्मा भनेर अनुवाद गरिदिन्छन् । आत्मन सम्बन्धको ज्ञान









तथा विज्ञानलाई समेत अध्यात्म, आध्यात्मिकता वा स्प्रीचुयालिटि भनेर अनुवाद गरिदिएको भेटिन्छ । यो अनुवाद कत्तिको सही हो, त्यो आफैंमा विवादास्पद छ । आज पनि धेरै मानिस यो तथ्यबाट अनभिज्ञ छन् कि ऋग्वेदभित्र आत्माको कुनै पनि अवधारणा अघि सारिएको छैन। ऋग्वेदका पदहरू पञ्च–महाभूत, पञ्च–कर्मेन्द्रिय (हात, खुट्टा, मुख, गुद्वार र प्रजनन अंग), पञ्च–ज्ञानेन्द्रिय (आँखा, कान, नाक, जिब्रो र छाला), इन्द्र र मनको चर्चा छ । पञ्च–महाभूतले प्रकृतिका मुख्य पाँच तत्व अग्नि (आगो), पृथ्वी, वायु (हावा), आकाश (ईथर) र जल (पानी) लाई जनाउँछ। मन, बुद्धि, चित्त र अहंकारलाई भने अन्तःकरण भनिन्छ । अङ्ग्रेजीको बुद्धि लाई वैदिक ज्ञानमा मन, बुद्धि र चित्त वृति










भनी ३ भागमा बाँडिएको छ। अनुभव र अनुभूति लाई अहंकार भन्ने गरिएको छ।

जीवविज्ञानको आँखाबाट मानव शरीरलाई नजिकबाट नियाँल्दा नियमित बाँच्न जरुरी हुने तापमान तथा अन्य ऊर्जालाई अग्नि वा आगो शब्दले अभिव्यक्त गर्छ। विभिन्न पदार्थबाट संयोजित शरीरको आकार दिने तत्व पृथ्वी तत्व हो । पृथ्वी तत्वमा अनगिन्ती तत्व समावेश हुन्छन्। सास फेर्न चाहिने हावा वायु तत्व हो। तरलता दिने तत्व जल वा पानी तत्व मानिन्छ। खाली स्थान जहाँ यी चार तत्व आफैं अटाउँछन् र आपसमा मिलेर काम गर्ने स्थान उपलब्ध हुन्छ, त्यो आकाश वा इथर हो ।

वैदिक चलन अनुसार पञ्च–महाभूत भनेर चिनिने













पाँच तत्वको मानव जीवनमा रहेको महत्वलाई मनन गरी सम्मान स्वरूप देवी वा देवको प्रतीकका रूपमा पूजा गरिन्छ। पृथ्वी तत्त्व लाई पृथ्वी देवी वा भूमि देवीको रूपमा पुजेर आराधना गरिन्छ। आराधनाको समयमा भूमि देवीले हामीलाई उपलब्ध गराउनु भएको स्थिरता, पोषण, जीवनको आधार र उत्पादकत्व बापत धन्यता व्यक्त गरिन्छ। जल तत्त्व लाई वरुण देवको रूपमा पुजिन्छ। जीवनदायी र शुद्धीकरणको उपलब्धता बापत जल देवता वरुण देव संग धन्य बनिन्छ। अग्नि देवतालाई अग्नि देवको रूपमा पुजिन्छ। ऊर्जा, शक्ति, रूपान्तरण र शुद्धीकरण जस्ता वैदिक यज्ञमा अग्नि देवले खेल्ने प्रमुख भूमिका बापत धन्य बनिन्छ। वायु देव हनुमान हुन्। जीवनको श्वास, गति तथा मरुतको









भूमिकाको लागि वायु देवता संग धन्य बनिन्छ। आकाश कुनै विशिष्ट देव नभए पनि शिव वा विष्णुको सम्बन्ध आकाश सँग रहने मानिन्छ। आकाश तत्त्वलाई सम्पूर्ण ब्रह्माण्डलाई समेट्ने स्थानको रूपमा लिइन्छ। जहाँ बाँकी चार तत्त्वहरू रहने गर्दछन्। दैनिक कर्ममा मात्र नभएर वैदिक धर्म र अनुष्ठानमा यी पञ्च तत्वलाई सृष्टिको मूल आधार मानिन्छ। तिनको सन्तुलन नै सम्पूर्ण जीवन र ब्रह्माण्डको अस्तित्वका लागि महत्त्वपूर्ण भूमिका खेल्ने महसुस गरी वैदिक पूजा र यज्ञहरूमा यी तत्त्वहरूसँग सम्बन्धित देवताहरूलाई सम्मान दिइन्छ। उनीहरू प्रति धन्य बनिन्छ।

पूजा गर्नुको अर्थ उनीहरूले आफूलाई लगाएको गुनको प्रशंसा गर्नु हो। उनीहरूको देनले आफ्नो









जीवनमा आएको सहजता बापत उनीहरू प्रति धन्य बन्नु हो। आफ्नो जीवनलाई सहज पु¥याउनेहरूसँग आफ्ना अन्य दुःखका कुरा समेत थुपार्ने वा अन्य माग राखी यो लेऊ वा ऊ देऊ भनी पुकार्नु वैदिक मान्यताको पूजा हुन सक्दैन। त्यो पूजाको नामको विकृति हुन जान्छ।

जीवनमा आफूले प्राप्त गर्ने हरेक फलको पछाडि आफ्नो संस्कार र कर्मको देन हुन्छ न कि पूजा आजाको। वैदिक मान्यतामा पूजा आजा कुनै फल प्राप्त गर्न अथवा आफ्ना अभावको पूर्तिका लागि गरिने कार्य होइन । त्यस विपरीत आफूसँग जे छ त्यसको महत्व महसुस गर्न र त्यसबापत आफैँलाई धन्य सम्झन आयोजना गरिने औपचारिक शुभकार्य हो । पञ्च–महाभूत अन्तर्गतको हरेक तत्वको








प्राकृतिक संरचना तथा हाम्रो शरीरमा उनीहरूको देनको प्रकृति अनुरूप अग्नि र वायुलाई देव (पुलिंग) मानिन्छ। जल र पृथ्वीलाई देवी (स्त्रीलिंग) ठानिन्छ। आकाश (ईथर) भने नेगेटिभ वा पोजेटिभ दुवै गुण नभएको न्युट्रल तेस्रो लिंगी अर्थात् आदिम शक्ति शिव–पार्वती मानिन्छ।

तपाईं वाल्मीकि रामायण वा व्यासको महाभारत गौण गरी हेर्नुहोस् । सतहीमा नरही गहिरिनूहोस् । त्यहाँ देवी र देव जस्ता शब्द आज हामीले अंग्रेजीमा महोदया र महोदय भन्न प्रयोग गर्ने मिस वा म्याडम वा सर जस्तै विशेषणका रूपमा उपयोग भएको महसुस गर्नु हुनेछ । सारमा देवी र देव जस्ता शब्द कुनै पनि सन्दर्भमा ईश्वर वा ईश्वरको प्रतिनिधि वा सर्वोच्च शक्ति संकेत गर्न प्रयोग भएको पाउनु हुने









छैन।

मानौँ, तपाईं कुनै काम गर्ने गर्नुहुन्छ। त्यो कामबाट तपाईं र तपाईंका नजिकका आफ्ना र प्रियतमको जीवन सहज बनेको छ । तपाईंकोजीवन सहज बनेको तपाईंसमेत विश्वास गर्नुहुन्छ । उक्त कामलाई तपाईं अत्यन्त मायासमेतगर्नुहुन्छ । उक्त परिस्थितिबीच तपाईंले नियमित पूरा गर्ने तपाईंको काम पूजा कर्म हो। जुन विन्दुमा तपाईंको काम पूजा कर्ममा परिवर्तन हुन्छ, त्योविन्दुबाट त्यो काम फगत कामका रूपमा नरहेर तपाईंको सोखमा परिवर्तित बनिसकेको हुन्छ। तपाईंको सोख पूरा गर्न तपाईंले पूरा गर्नुपर्ने तपाईंको जिम्मेवारीलाई तपाईंको धर्मभनिन्छ । धर्म भनेको कुनै व्यक्ति वा समुदाय वा विचार समूहको अमूक पथ होइन,










आफ्नो जिम्मेवारीलाई हरेक क्षण पूरागर्ने प्रतिबद्धतामा कायम रहनु हो भन्ने विचारले सुसज्जित हुनु अध्यात्म हो।

हरेक व्यक्तिको आत्मा परमात्माको एक अंश हो। जुन अनुभूति गर्न नसकिने निर्गुण हुन्छ। कसौडिमा पकाएको भात पाके नपाकेको त्यस वाट एउटा भातको सिता स्याम्पल निकालेर परीक्षण गरेर जसरी यकिन गर्न सकिन्छ त्यसरी नै परमात्माको एक अंश रहेको तपाइको आफ्नै आत्मा वारेको ज्ञान लिन त्यसलाई अर्थात् "म" को गुण पहिचान गर्ने आत्मा ज्ञान बुझेर अद्वैत निर्गुण परमात्माको वास्तविकता वोध गर्न सकिन्छ। त्यही परमात्माको अंश धारी तपाईं जब आफ्नै आत्मा स्वरूपलाई आत्मा ज्ञान मार्फत चिन्नु हुन्छ तव तपाईँलाई













तपाइको लिङ्ग अनुसार पहिचान गर्न वैदिक संस्कृतिमा देवी र देव शब्दले सम्बोधन गरिन्छ। वैदिक ग्रन्थहरूले शरीरका इन्द्रियहरूको सञ्चालकका रूपमा केन्द्रीय भूमिकामा रहेको सेन्ट्रल नर्वस सिस्टम वा केन्द्रीय मस्तिष्क प्रणालीलाई इन्द्र देवका रूपमा उल्लेख गरेका छन्। पञ्च–महाभूतलाई आफ्नो नियन्त्रणमा लिएर शरीरका विशिष्ट कार्य सम्पन्न गर्ने जिम्मेवारी प्राप्त इन्द्रदेवलाई देवहरूको (देवी र देव) पनि देवको संज्ञा दिन देवाधिदेव भनिने गर्छ ।

हाम्रो ‘मन’ के हो भन्ने चर्चा भने यजुर्वेद र उपनिषद्मा भेटिन्छ । शरीरमा सास वा प्राण रहनुलाई शरीर जिउँदो रहेको वा शरीरमा जीवन रहेको संकेतका रूपमा लिइन्छ । जति बेला व्यक्ति







गहिरो निद्रामा पर्छ तर सपना देखेको हुँदैन त्यो अवस्थालाई सुषुप्त अवस्था भनिन्छ । सुषुप्त अवस्थामा मानिस जीवित रहेको हुन्छ। उसको आफ्नै शरीरमा रहेको मस्तिष्क भने प्रभाव हीन रहेर दिमागको अनुपस्थिति बिच जीवन रहेको अनुभूति दिन्छ। निद्राबाट ब्युझिंदा आफू भुसुक्कै निदाएको, सुषुप्त अवस्थाबाट आफू गुज्रेको जानकारी दिमागलाई अनुभूति हुन्छ । त्यो चिज वा शक्ति केन्द्र जुन दिमाग सँग मिलेर काम गर्छ तर दिमाग भन्दा फरक देखिन्छ त्यसलाई 'मन' भनिएको छ।

शरीरमा सबै कुरा हुँदा हुँदै एउटा विन्दुमा शरीर मृत हुन्छ। मृत्युको विन्दु भन्दा केही क्षणअघि शरीरमा के थियो र शरीर जीवित रह्यो ? मृत्युको केही क्षण पछि के कुरा शरीरले गुमायो र भौतिक रुपमा उस्तै






रहँदा पनि शरीरले मृत्युवरण गर्नुप¥यो ? त्यो अर्को अचम्मको विषय छ । गहिरिएर विश्लेषण गर्दा तपाईंलाई यो महसुस हुन्छ कि जुन चिजलाई तपाईं आफू भनेर चिनाउनुहुन्छ त्यो तपाईंको पञ्च–महाभूत निर्मित शरीरभन्दा फरक छ। त्यो मस्तिष्क वा मन समेत होइन । शरीरमा सास रहनुलाई प्राण रहनु भनिने हुँदा शरीर जिउँदो रहँदा शरीरमा रहने प्राण अर्कै फरक चिज वा शक्ति केन्द्र रहेको अनुभूति हुन्छ। त्यो अनुभूति गरिएको फरक चिज वा शक्ति केन्द्रलाई वैदिक मान्यतामा आत्मा भनेर पहिचान गरिन्छ।

हामी देख्छौँ कि यो संसारमा कोही पनि अजम्मरी छैन। सबैको शरीर एक दिन मृत हुने र प्रकृतिमै विलीन भएर नष्ट हुने गर्छ । ती सबै यथार्थको







समीक्षा गर्दा आत्मा भनिएको जिनिस नै यथार्थमा हामीले आफूले आफूलाई ‘म’ भनी संकेत गर्ने चिज हो भन्ने अनुभूति हुन जान्छ । त्यो अजिबको ‘म’ भन्ने जिनिसबारे ज्ञान लिने प्रक्रियालाई आत्माबोध (ज्ञान) भनिन्छ ।

वैदिक संस्कृत शब्द अध्यात्म दुई फरक शब्दबाट बनेको ठानिन्छ । अध्ययन वा शिक्षा लिनु र आत्मन वा आफ्नो साँचो रूपको पहिचान गर्नु । चुरो अर्थमा बताउँदा उल्लेखित ‘म’ भन्ने अजिबको जिनिसबारे साँचो रूपको पहिचान वा जानकारी उपलब्ध गराउने ज्ञान तथा विज्ञान नै वैदिक मान्यताको अध्यात्म हो ।

वैदिक मान्यतामा पुरुषार्थ प्राप्तिलाई जीवनको मुख्य उद्देश्य मानिन्छ । जब जीवनका चार उद्देश्य प्राप्त













हुन्छ तब पुरुषार्थ प्राप्ति भएको ठानिन्छ। पुरुषार्थ प्राप्ति अन्तर्गत निर्धारित चार उद्देश्यहरु धर्म, कर्म, अर्थ र मोक्ष हुन् । निर्धारित चार उद्देश्यले जीवन भर उच्च नैतिक आचरणमा रहन र स्वधर्ममा रहेर आफ्नो कर्म सम्पन्न गर्ने अतुलनीय आत्मबल उपलब्ध गराउँछ।

समय र परिस्थिति अनुरूप आफ्नो जिम्मेवारी पूरा गर्ने क्रममा आफ्नो अन्तर आत्माले नैतिक रूपमा सही ठह¥याएको कर्ममा सहभागी हुने कार्य व्यावहारिक धर्म कार्य हो । कर्म एक संस्कृत शब्द हो। कर्मले प्रेम, इच्छा र आनन्द प्राप्तिको सोख परिपूर्ति गर्ने नियतले गरिने गतिविधिलाई जनाउँछ।

नैतिक बन्धनमा बाँधिएर आफ्नो इच्छा र आनन्द प्राप्तिको सोख पूरा गर्ने कार्य कर्म हो । वैदिक











मान्यतामा यौन व्यक्तिको प्रकृति प्रदत्त स्वतन्त्र र नैसर्गिक अधिकार हो। यौन कर्म अनिवार्य रूपमा हिंसा विहीन हुनुपर्छ। संलग्न व्यक्तिको आपसी इच्छा, चाहना र सहमतिमा यौन संसर्ग कायम रहनु पर्ने वैदिक मान्यताको आधारभूत अनिवार्यता हो। यौनलाई मानिसको काम–इच्छा र आनन्द प्राप्तिको सोख पूर्ति गर्ने साधनका अलावा प्रकृतिद्वारा निर्देशित आफ्नो सन्ततिको बीज सुचारुगर्ने जिम्मेवारी पूरा गर्न बच्चा जन्माउन समयोचित उपयोगमा ल्याउनुपर्ने विषयका रूपमा समेत लिने गरिन्छ।

जीवनको महत्वपूर्ण लक्ष्य मोक्ष प्राप्तिलाई ठानिन्छ। मोक्ष प्राप्तिको प्रयास साकार गर्न मानिसलाई भौतिक धन सम्पत्तिको आवश्यकता पर्छ। नैतिक













धर्ममा रहेर जीवनको नियमित गुजारा गर्न आफ्नै खुट्टामा आफैँ उभिनु व्यावहारिक अनिवार्यता हो । तसर्थ जीवनमा नैतिक सीमामा रहेर आफ्नो जीवनका जरुरत पूर्ति गर्न पर्याप्त धन प्राप्ति अनिवार्य ठानिन्छ। नैतिक जीवन जिउनका लागि पर्याप्त धन प्राप्ति अनिवार्य रहेको अवस्थामा धन प्राप्तिलाई आफ्नो जीवन सञ्चालन गर्ने जरुरत हुने माध्यमका रूपमा लिनुपर्ने तर धन प्राप्ति जीवनको अन्तिम उद्देश्यसँगै जोडिएको भने हुन नहुने वैदिक मान्यता छ ।

मोक्षलाई जीवनको परम लक्ष्य भनिन्छ। यसको अर्थ मुक्ति पाउनु भन्ने लाग्छ। लामो जीवनकालमा जीवन जिउने चक्र अनुरूप धर्म, कर्म, अर्थ जस्ता उद्देश्य पूर्ति गर्दै गर्दा वा गरिसक्दा सक्रिय सांसारिक











जीवनबाट उन्मुक्ति अथवा रिटायरमेन्ट लिएर जीवनको अन्तिम वर्षहरूमा आफ्नो क्षमता र हैसियत अनुकूल आफूलाई आत्म सन्तुष्टिदिने प्रकृतिको धर्म कर्म–उपकार वा सन्न्यास लिने आदि जस्ता कार्यहरू मोक्षकार्य अन्तर्गत राख्न सकिन्छ।

सांसारिक भौतिक बन्धनबाट आफूलाई मुक्त गर्दै आफ्नो विगत आफैंले पुनरवलोकन गर्ने, गल्ती कमजोरी आदि देखिएमा त्यसबापतको क्षतिपूर्तिका लागि प्रयास गर्ने, भएका गल्तीमा क्षमा माग्ने, जीवन र जगत लाई बुझ्ने र सकेको सामाजिक सहयोग गर्ने, समय आए पछि हाँसी खुसी सांसारिक जीवनबाट बिदा लिन मानसिक रूपमा तयार रहने कार्य आफ्नो शरीर जीवित रहँदाका मोक्ष प्राप्ति अन्तर्गतका गतिविधिहरू हुन् ।













सात्विक दिनचर्यामा रहने, इच्छुक व्यक्तिलाई आफूसँग भएका ज्ञान बाँड्ने, आफ्नो कारणले अर्काको जीवनमा खुसीदिन प्रयत्न गर्ने, आफ्ना कारण कुनै प्रकारको हिंसाहुन नदिने, आफ्नो कारणले अर्कालाई दुःख हुन नदिने, सत्कार्य र स्वधर्ममा हाँसी खुसी रहने जस्ता कुरा पनि मोक्ष अन्तर्गत पर्छ ।

जीवनलाई सात्विक मार्ग मार्फत खुसी र सुविधा पूर्ण बनाउने कार्य सत्कार्य कर्म हो। मोक्षको अर्थ आफ्नो अन्तरात्माको माध्यमबाट आफू र आफ्नो अस्तित्वको कारक लाई देख्नु हो। मानिससँग उसको आत्मा ऊ सँगै रहुन्जेल मात्र मानिस जीवित रहन्छ। हरेक मानिसको कर्मको साक्षीका रूपमा हुने उसको आत्माको जानकारीमा हुने कर्महरू सात्विक बनाएर







मात्र आत्माले मुक्ति पाउने विश्वास गरिन्छ । वैदिक मान्यतामा आत्माले पटकपटक जन्मने र मर्ने जीवन चक्रबाट गुज्रन नपर्ने अवसरको प्राप्तिलाई जीवनको अन्तिम उद्देश्य प्राप्तिको लागि लक्षित मुक्तिको प्राप्ति हो ।

## कर्म गर्नुस्, फलको आशा नगर्नुस्

भागवत गीताको अध्याय–२, पद ४८ मा श्रीकृष्णको एउटा महत्वपूर्ण वाणी भेटिन्छ। कर्म गर तर फलको आशा नगर। आफैँलाई तत्काल कुनै निश्चित फाइदा प्राप्त हुने अपेक्षा त्यागेर तपाईं











आफ्नो तत्कालीन कर्तव्य पूरा गर्दै अघि बढ्नुहोस् भन्ने नै यसको मूल भावार्थ हो। पूरै होस हवासमा आफ्नो दिमागको पूर्ण रूपमा सन्तुलित उपयोग गर्दै आफ्नो कर्तव्यमा नियमित रूपमा लीन हुनुलाई त्यागको भावनाको रूपमा गीतामा प्रस्तुत गरिएको भेटिन्छ।

‘कर्म’ शब्द सुन्ने बित्तिकै मानिसले सामान्य रूपमा लिने अर्थ सबैमा अवगत नै छ। यसको आध्यात्मिक अवधारणाबारे गहिरिएर हेर्दा तपाईं अलिकति फरक निचोडमा पुग्न सक्ने अवस्थामा पुग्नु हुनेछ । जीवनमा आइपर्ने केही महत्वपूर्ण विषयमा निर्णय लिनुपर्दा वैज्ञानिक रूपमा समेत प्रमाणित बनेका केही आध्यात्मिक अवधारणा तपाईंका लागि मूल्यवान् बन्न सक्छ ।











पहिलो कुरा कर्म भनेको कुनै पनि वस्तु वा सेवा वा पैसा जस्तो अन्य वस्तु वा सेवासँग आदानप्रदान गरिने एक्सचेन्जको विषय होइन। तपाईंका असल कार्यले तपाईंको जीवनको गुणस्तरमा कसरी असर पारिरहेको हुन्छ र यसमा तपाईंको भाग्यले कसरी काम गरिरहेको हुन्छ भन्ने यथार्थ अत्यन्त सूक्ष्म, धेरै जटिल र अधिक धेरै अर्थ पूर्ण रहने गर्दछ। यो अवधारणा केवल मानिसमा मात्र हैन, हाम्रो वातावरण वरिपरि रहेको सम्पूर्ण जीवजन्तुमा समेत लागू हुन्छ ।

हाम्रा वरिपरि रहेका बोट बिरुवा, जनावर, पानी, हावा, आगो र अन्य तत्व हरेकका आफ्नै धर्म हुने गर्दछ। जस अनुसार तिनीहरूको गुण निर्माण हुने र तिनीहरूले आफ्नो कर्म गर्ने गर्दछन्। सबै तत्व









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



मिलेर संयोजित रूपमा गर्ने समग्र सहकार्य कर्मले हाम्रो वातावरणको निर्माण भइरहेको हुन्छ । यस्तै आपसी सहकार्यमा सम्पादन भएका कर्मका फलका रूपमा फूल फुल्न पाउँछन् । चराहरू गाउने वातावरण बन्छ। तपाईं आफ्नो नजिकको आफ्नैलाई मेरी प्रिय वा प्यारे भनी पूर्ण सुरक्षित वातावरणको सदुपयोग गर्दै मायालु नजरले सम्मोहित भएर हेर्न, भावना साटासाट गर्न र लाडिन पाउनुहुन्छ। तपाईंको जीवनको हरेक पाइला सामान्य लाग्ने गरी असामान्य र रोमाञ्चक पूर्ण बनिदिन्छ। जीवन जिउनुको सार अनुभूति गर्ने अवसर मिल्छ ।

सजिलोका लागि कर्मलाई तीन प्रकारको कर्ममा विभाजन गरेर व्याख्या गर्न सकिन्छ ।





॥ श्री गणेशाय नमः ॥







पहिलो हो तत्कालको क्षणिक फलदिने कर्म। कर्म शब्दको मुख्य अर्थका रूपमा हामीले प्रायः बुझ्ने कर्म तत्कालको कर्म हो। तपाईंका आफ्नै निश्चित उद्देश्य वा लक्ष्य पूर्ति गर्ने आशयले प्रेरित रहेका नियोजित कार्यहरू जसको फल स्वरूप तपाईं निश्चित परिणामको आशा गरिरहनु भएको हुन्छ। यो जरुरी छैन कि ती अभिलाषा पूरा हुन्छन्। तर, उक्त कार्य बापत कार्य गरिरहेकै समय आसपास तपाईंले प्रतिक्रियाको महसुस गरिरहनु भएको हुन्छ। सम्भवतः परिणामको समेत तत्काल वा छोटो समय भित्रै महसुस गर्न पाउने सम्भावना देख्नुहुन्छ।

तत्कालको कर्म अन्तर्गत तुलनात्मक रूपमा नियोजित कर्म गर्ने, नगर्ने वा कसरी गर्ने आदि सम्बन्धका केही विकल्प तपाईं सँग रहने गर्छ ।













विकल्पमा तपाईंको आंशिक वा पूर्ण नियन्त्रण रहने स्थिति रहन सक्दछ। जस्तै, तपाईं आफ्नो बलेसीको सुर्कामा तुलसीको बिउ छर्दै हुनुहुन्छ । केही महिनामा तुलसीको बोट उम्रिएको र त्यही तुलसीको बोट आँगनको मठमा सार्ने क्रममा सारिएको तुलसी सहितको मठलाई साक्षी राखी आफ्नो प्रेमी रिडी–रुद्रवेणीकी भक्तिनी भनेर चर्चित कार्किनी आमाकी कान्छी छोरी रुसबिना सँगै विवाहको प्रस्ताव राख्दा रुसबिनाले प्रस्ताव स्विकारेको कल्पना गर्नुहुन्छ।

यहाँ तपाईंको कर्म तुलसी छर्ने हो। तपाईंको नियत ईश्वरमाथि धेरै भरोसा गर्ने तपाईंको प्रेमी रुसबिनालाई गरिने प्रेम प्रस्तावको साथी आफ्नै दैलामा रहेको तुलसीलाई बनाउनु रहेको छ।









प्रस्ताव रुसबिनाले औपचारिक मात्र नभएर मनै देखिको इमानदार प्रस्ताव सम्झिएर स्विकारून भन्ने तपाईंको उद्देश्य छ। भित्री चुरो आशय तुलसीलाई ईश्वरको रूप मान्ने रुसबिना तुलसीको बोटको उपस्थितिमा हुने प्रस्तावलाई ईश्वरकै इच्छा मानी स्विकार्ने छिन् । ईश्वरको अघि गरिएको वाचा पछि परिवर्तन हुँदैन भनी ठान्ने रुसबिनालाई पत्याउन यो उपयुक्त तरिका रहेको तपाइले सोच्नु भएको छ।

तपाईं तुलसीको मठ छेउको बलेसीको सुर्कामा तुलसीको गेडा छर्नुहुन्छ भने पक्कै तुलसी नै उम्रने आशा गर्न सकिन्छ । सम्भवतः महिना दिनमा तुलसी उम्रिएको पनि देख्न पाइन्छ। त्यहाँ कण्टकारी रोप्नुभयो भने कण्टकारी नै उम्रिने छ। जहाँसम्म तुलसी रोप्ने सुर्कामा रोपेको तुलसी उम्रने कुरा छ,









त्यो तटस्थ छ। हरेक साल तुलसी रोपिने सुर्कामा अन्य साल जस्तै यो साल पनि पक्कै उम्रने छ भनी भरोसा राख्न सकिन्छ।

तपाईं के रोप्नुहुन्छ, कसरी त्यसको स्याहार सुसार गर्नुहुन्छ, त्यो तपाईंमाथि निर्भर गर्छ। तपाईंको गतिविधिले तुलसीमा पार्ने सकारात्मक वा नकारात्मक असरमा तपाईंको आंशिक नियन्त्रण छ। रोपेको बिउ उम्रन्छ वा उम्रँदैन जस्ता पक्ष तपाईंको नियन्त्रण बाहिर छ । तर, मकै भुटे जस्तो तुलसीको बिउ पहिला भुट्नु हुन्छ र रोप्नुहुन्छ भने पक्कै त्यो भुटेको तुलसीको गेडा भने उम्रने छैन ।

यहाँ तपाईंले गरेको तत्कालको कर्म तुलसी छर्ने रहेको छ । तत्काल आशा गरिएको प्रतिफलमा छरेको तुलसी उम्रन प¥यो। हलक्क बढेपछिको




शुभमुहूर्तमा रुसबिना तपाईंको दैलाअगाडि आइपुग्नु पर्‍यो । उनी खुसी अवस्थामा रहेको हुनुपर्‍यो । प्रस्ताव गर्ने मौका मिल्नु पर्‍यो। उनले स्विकार्नुपर्‍यो। स्विकारेपछि उनको घर, आफन्त र तपाईंको पक्षको पनि सहमति चाहिने होला। सो नभए पनि कम्तीमा दुवै एक हुने निश्चयमा पुग्नुपर्‍यो। सोचिएको फलको वास्तविक प्राप्तिका लागि भने यस्ता धेरैकुरा मिल्नुपर्ने होला । थोरै पक्ष तपाईंको नियन्त्रणमा रहला । धेरै पक्ष भने निश्चयनै तपाईंको नियन्त्रण भित्रको पक्कै रहने छैन ।

कर्मको दोस्रो प्रकारमा सञ्चित कर्मलाई लिने गरिन्छ। यो पहिले नै बीजका रूपमा रहने कर्मका रूपमा हुन्छ। यसको फल अहिलेसम्म तपाईंले फलाउन वा महसुस गर्न सक्नुभएको छैन । मतलब





त्यहाँ उपस्थित छ । त्यो तपाईंको चाहना वा इच्छा अनुकूल वा प्रतिकूल जेसुकै पनि हुनसक्छ । तर, तपाईंले यसलाई हालसम्म अनुभव गर्न पाउनु भएको छैन। सञ्चित कर्मको सबै फल जीवनकालमा एकैचोटि आउने वा महसुस गर्ने प्रकृतिको हुने गर्दैन।

निर्जला एकादशी भनिने ज्येष्ठ शुक्ल एकादशीमा तपाईंले छर्दै गर्नुभएको तुलसीको बिउको बिरुवा परम्परागत मान्यता अनुरूप देवशयनी एकादशी भनिने हरिशयनी एकादशीका दिन तुलसीको मठमा रोप्ने तपाईंको औपचारिक योजना छ। तुलसी रोप्ने दिन देखि चार महिना चतुर्मास अवधि आरम्भ हुन्छ। धार्मिक एवं ज्योतिषी मान्यताका आधारमा चतुर्मास भर विवाह, व्रतबन्ध, प्रतिष्ठा जस्ता





मांगलिक कार्य गर्नुहुँदैन । यो अवधिभर तुलसीको पूजा गर्ने, भागवत आदि विष्णु माहात्म्यका ग्रन्थपाठ गर्ने परम्परा छ । यद्यपि सूर्य दक्षिणायन रहँदा सामान्यतया मांगलिक कार्य गरिँदैनन् । तर आँगनको मठमा रोपिएको तुलसीलाई भगवान् विष्णुको प्रियाका रूपमा पूजा गर्ने परम्परा छ।

रुसबिना तपाईंकी भाउजू निर्जलाकी फुपूको मामाकी नातिनी हुन्। हरिशयनी एकादशीमा जन्मिएकाले ईश्वरले निर्जला एकादशीमा बिउ राखेकी अप्सरा ठानी तपाईंको भाउजूकी हजुरआमाले तपाईंको भाउजूको नाम निर्जला राखिन्। रुसबिनाको आमालाई दुःख पर्दा निर्जलाको हजुर बुबाले लगाएको गुणका कारण तपाईंको भाउजूको जन्मदिन हरिशयनी एकादशीमा









हरेक वर्ष रुसबिना तपाईंको भाउजूलाई भेट्न आउँछिन्। आफ्नो ममीले तपाईंको भाउजूलाई पठाएको कुराउनी छोडेर जाने गर्दछिन्।

यस वर्षको देवशयनी एकादशीको दिन तपाईं भगवान् विष्णुको प्रिया तुलसी र तपाईंको प्रिया रुसबिनाको एकैसाथ पूजा गर्ने इरादामा हुनुहुन्छ । प्रेम प्रस्ताव मांगलिक कार्यमा समावेश हुने औपचारिक आमन्त्रण रहेकाले यो तिथि रुसबिनाले प्रेम प्रस्तावको गर्ने उत्तम तिथि मान्नेछिन् भन्ने तपाईंको यकिन छ। भाउजू निर्जलाले तपाईंको छिमेकी काकी मञ्जुसँग रुसबिनाका बुवाले रुसबिनाकी आमालाई आषाढ शुक्ल एकादशी वा देवशयनी एकादशीमा अर्जुन डाँडामा प्रेम प्रस्ताव गरेको रे भनेको तपाईंले सुन्नुभएको थियो।








करिब दुई हजार मिटर उचाइमा रहेको गुल्मीको एक डाँडामा बसेर पाँच पाण्डव मध्येका अर्जुनले शिवजीले ध्यान गरेर गीताको तत्व ज्ञान लिएकाले गुल्मीको लेकमा रहेको डाँडाको नाम अर्जुन डाँडाराखिएको रे। अर्जुनडाँडामा स्वच्छ हृदयले मागेको वरदान पुग्ने जनविश्वास भएकाले रुसबिनाकीआमा अर्जुनडाँडामा पूजा गर्न गएको मौका छोपी रुसबिनाका बुवाले हात समातेर मलाई स्वीकार भन्दाअनायास रुसबिनाकी आमाले रुसबिनाको बुवालाई अँगालो हाल्न पुगे पछि दुवैबीच विवाह हुने तय भएको रे भनेर भाउजूले भनेको घुइरो घुइरो रूपमा तपाईंले सुन्नुभएको थियो।

फलफूलको राजा ठानिने आँप प्राकृतिक रूपमा









असार–साउनमा पाक्ने गर्छ । पाल्पा जिल्लाको गोठादी–५ को तपाईंको हात्तील्हुङ (हात्तीढुंगा) नामक मगर गाउँमा डल्ले, सिन्दुरे, चिउरी, सबुजा, मालदह, दशहरी, बम्बै र सरिह जातका आँप फल्छन्। तपाईंको करेसाको विशाल कलकतिया आँप तपाईंका हजुर बुवाले आफू ३२ वर्षको हुँदा कोलकाता बाट ल्याएर रोप्नुभएको रे। पूरा पाल्पा जिल्लामै फलेको कलकतिया आँप भएको घर तपाईंको घरमात्र हो रे। तपाईंका हजुर बुवा बितेको आठ वर्षपछि मात्र कलकतिया आँप फाल्न सुरु गरेको थियो रे । तपाईंका बुवा आँप फलेकै साल फलेको आँपसमेत चाख्न नपाई बित्नु भएछ। अहिले आँपको बोटमा भर्खर चिचिला लागेको छ।

हरेक साल भाउजू निर्जलाको जन्मदिन हरिशयनी










एकादशी रहेको हप्ताबाट तपाईंको घरको आँप पाक्नसुरु गर्छ। भाउजूको जन्मदिनबाट मात्र पाकेको आँप टिप्न सुरु गरिन्छ। यो तपाईंको घरकोआफ्नै मौलिक चलन हो। बजारमा व्यापारीले आँप किन्न मागे पनि तपाईंको घरमा आँप बेच्ने चलन छैन। मात्र एक बोट आँप सबै गाउँलेलाई चाख्न पुग्छ । तपाईंले अत्यन्त मन पराउने रुसबिना तपाईंको घरमा फल्ने कलकतिया आँपको स्वाद भनेपछि हुरुक्क हुन्छिन्। हरेक साल तपाईंको भाउजूलाई कुराउनी लिएर आउने रुसबिनालाई पेटभर दूधमा मुछेको आँप खुवाएर झोला भरिआँप भरेर आमालाई दिनू भनी रुसबिनासँग पठाउने गर्दछिन् तपाईंकी भाउजू ।

यो साल तपाईं त्यही दिनको प्रतीक्षामा व्यग्र भएर













बसिरहनु भएको छ । पहिले तपाईंले न त कहिल्यै तुलसी छर्नु भयो । न तपाईंलाई धर्म कर्मका यस्ता कुरामा कुनै विश्वास र चाख नै थियो । गत साल मात्रै गाउँ आएका एक साधुलाई तेरो ईश्वर देखा, झुटो बोल्ने, ठगी खाने भनी तपाईंले ठुलो दुर्व्यवहार गर्नुभएको थियो । पल्लाघरे रातेले नछेकेको भए साधुले तपाईंको हातको रामधुलाइ भेट्ने थिए ।

आज तपाईंको घरभन्दा तीन गरा तल रहेको सार्वजनिक पिउने पानीको धारा बनाइदिने संस्थाका प्रमुख चन्दा दाता थिए ती साधु । तिनको नाम चक्रवर्ती श्री अमोद रहेको, उनी सर्वाधिक धनी मध्येका एक चर्चित वैज्ञानिक, युनिभर्सिटी अफ बृक्ले क्यालिफोर्निया, अमेरिकाका रिटायर्ड प्रोफेसर, वेद र अध्यात्मका गुरु रहेको समेत





॥ श्री गणेशाय नमः ॥



तपाईंले हाल सम्म मेसो पाउन सक्नुभएको छैन। यो साल तपाईंको प्यारी रुसबिनालाई प्रेम प्रस्ताव गर्ने क्रममा त्यही धाराबाट अम्खोरामा शुद्ध जल ल्याएर तुलसी र रुसबिनालाई छर्कने तपाईंको आफ्नो उद्देश्य प्राप्ति गर्ने योजना अन्तर्गतको गतिविधिमा परेको छ।

तपाईंको कर्मले ब्रह्माण्डमा विभिन्न किसिमका बिउ रोप्ने गर्छ। त्यसको प्रतिफल कुनै तत्काल प्राप्त हुन्छ। कुनै वर्षौंपछि, कुनै दसौं वर्षपछि फसल लाग्ने हुनसक्छ । कुनै कुनै पाँच सय वर्ष पछाडि नतिजा दिने वा फसल उपलब्ध गराउने हुन पनि सक्छ। तपाईंका हजुरबुवाको राम्रो कर्मको डोरीले जोडिएको चिनजान र सम्बन्धले एकातर्फ तपाईं लाई आफ्नो प्रेयसीसँग भेट गर्ने बहाना दिएको छ।











अर्कातर्फ उनलाई खुसी पार्ने फलका रूपमा तपाईंलाई आँप उपलब्ध भएको छ।

त्यो आँप, जुन न त रोप्ने तपाईंको हजुरबुवा न स्याहार सुसार गर्ने तपाईंको पिताजीले चाख्न पाउनु भयो। तपाईंकी भाउजूको कर्मले तपाईंले तपाईंको प्रियका के के अवधारणा छ, पारिवारिक पृष्ठभूमि के छ र के केपूर्वाधार पूरा गर्दा तपाईंको आफ्नो उद्देश्य प्राप्ति सहज बन्ने दिसामा अघि बढ्ने धेरै सम्भावना छ भन्ने ज्ञान तपाईंलाई सित्तैमा प्राप्त भइरहेको छ।

विगतमा नास्तिक तपाईं, आफ्नो मान्यता नमिल्ने आस्तिक रिटायर्ड प्रोफेसर माथि दुष्कर्ममा उत्रेको दुर्भाग्य पूर्ण इतिहास रहँदा रहँदै समाजको शुभ कर्मको फलका रूपमा त्यही सन्न्याँसीले











बनाइदिएको धाराको पानी तपाईंको महत्वपूर्ण काममा प्रयोजनमा आउन सम्भव भएको छ। तपाईंको विगत जे सुकै होस् तर अन्तिम समयमा आफ्नो मुटुमै बसेकी प्रियतमको प्रियवस्तुलाई आफ्नो समेत प्रियबनाउने तपाईंको चाहनाको प्रभावमा तपाईंले आफूमा ल्याउन सक्नुभएको परिवर्तन हेर्दा तपाईं कम्तीमा आफ्नो पक्षबाट आफूले चाहेको सुन्दर र आत्मीय भविष्यतर्फ उन्मुख बनिरहने कर्ममा भिडिरहेको आभास दिन्छ ।

भलै यसको पछाडि विविध पारिवारिक, सामाजिक र वातावरणीय पक्षका कर्महरू रहेका छन्, थिए र हुने छन्। तर, तपाईंका कर्महरू र तपाईंको आसपासको विषयवस्तुको कर्मको संयुक्त फल कुनै दिन पक्कै देखिने छ। मात्र समयको कुरा हो ।













फलको प्रकृति कस्तो हुने छ त्यो फरक कुरा हो । जुन वास्तवमा तटस्थ रहने गर्छ । तपाईंले टाउको फुटाए पनि नतिजा निष्पक्ष हुनेछ। फल तपाईंको चाहना अनुकूल हुन सक्छ वा प्रतिकूल पनि हुन सक्छ । अनुकूलता वा प्रतिकूलता तपाईंको पूर्ण नियन्त्रणमा छैन । फल प्राप्तिको अनुभूतिको अवसर कहिले निश्चय हुने भन्ने समेत टुंगो छैन, हुन पनि सक्दैन।

कर्मको तेस्रो कर्मका रूपमा तपाईंको भाग्यलाई लिइन्छ । जब कुनै पनि तत्कालको कर्म वा सञ्चितकर्मको फल प्राप्तिको समयमा त्यसको उपभोग गर्न पाउने पात्र तपाईं बन्न पाउनुहुन्छ, त्यसलाई तपाईंको भाग्यको प्रतीकका रूपमा लिइन्छ । त्यो समयमा तपाईं आफ्नो गन्तव्यमा पुग्नु







भएको महसुस समेत गर्न सक्नुहुन्छ। तपाईं कर्मको फल प्राप्त गर्ने भाग्यमानी बनिरहँदा तत्कालको कर्मको फल, सञ्चित कर्मको फल र भाग्य तिनै एकसाथ संयोजित रहन जरुरी हुन्छ। एकातर्फ तपाईंका विचारहरू, भावनाहरू, अनुभवहरू, हृदयको बुद्धिमत्ता आदि तपाईंको कर्म गर्न चाहने इच्छा पैदा गर्न, त्यसमा नियमित र अडिग रहन जिम्मेवार रहन्छन् । अर्कातर्फ एक निश्चित व्यक्ति र प्रवृत्तिका रूपमा तपाईं आफैँ र तत्कालीन समयको समग्रताको प्रतिफलका रूपमा तपाईं वरपरको हाल र विगतका गतिविधि वा वातावरण तपाईंले प्राप्त गरिरहेको फलको उपलब्धिको मुख्य कारक बनि रहेका हुन्छन्।

कर्मको सामान्य अर्थ हो कार्य । हरेक कार्यको











परिणाम हुन्छ । विभिन्न कार्यले विभिन्न परिणाम दिने गर्छन् । विभिन्न परिणामको समग्र प्रभावका रूपमा प्रतिफलको अनुभूति गर्न सकिन्छ। नियमित र सुचारु रूपमा भएका कार्यले दिने विविध प्रतिफलको समग्र रूपलाई मुख्य फलप्राप्ति ठानिन्छ। जुन आफैं एक नियमित सुचारु प्रक्रियाको एक पक्ष हो । जुन आफैँमा दिगो प्रकृतिको रहन सक्दैन।

संस्कृतको आधारभूत परिभाषा अनुसार कर्मको सार–अर्थ 'क्रिया' हुन्छ । हाम्रो हरेक क्रिया ऊर्जाको एउटा रूप हो । जब तपाईं कुनै क्रिया गर्नुहुन्छ तपाईंमा रहेको शक्ति कुनै न कुनै रूपमा अर्को व्यक्ति वा वस्तुमा सर्छ । त्यसको प्रतिक्रिया बापत केही तपाईं तर्फ आउला, केही जता सहज











हुन्छ उतै लाग्छ । अंग्रेजीमा एउटा सामान्य वाक्यांश छ– ह्वाट गोज अराउन्ड, कम्स अराउन्ड । अर्थात् तपाईंले जस्तो व्यवहार गर्नुहुन्छ, तपाईंलाई त्यस्तै प्रतिफल आइलाग्छ।

न्युटनको तेस्रो सिद्धान्तले पनि हरेक कार्यका लागि त्यहाँ एक समान तर विपरीत प्रतिक्रिया हुन्छ भनी गीताको सारलाई स्विकारेको छ । विज्ञानले स्विकारे अनुरूपको वेदको अवधारणा जब तपाईं शारीरिक बलको प्रयोग गर्नु हुन्छ तब त्यहाँ प्रतिक्रिया उत्पन्न हुन्छ । पैदा भएको शक्ति वा ऊर्जा कही पनि गायब हुन सक्दैन । मात्र एक रूपबाट अर्को रूपमा परिवर्तन भएको हुन्छ। यो कुरामा अब कुनै बहस हुने गर्दैन। सर्व स्वीकार्य बनिसक्यो । किनकि यसलाई विज्ञानलेआफ्नो सिद्धान्त भनेर स्वामित्व













लिइसकेको छ । जीवात्माको बल, चेतनाको बल, सोच वा विचारको बल, अहंकारको बल, प्रेमको बल, घृणाको बल आदि व्यवस्थापनको नियमबारे विज्ञान अझै अत्यन्त ठूलो निराशाजनक चरणमै छ। न फेद न पुच्छर केही पनि पहिल्याउन नसकेरअलमलिइरहेको छ। जे होस् विज्ञानले आजसम्म आफैँले पत्ता लगाएको नाममा स्विकार्न बाध्यभएको माथि उल्लिखित दुई वैज्ञानिक सिद्धान्तको प्रतिपादन पश्चात् वैदिक नियमको अवधारणामा विश्वव्यापी सहमति जुटेको मात्र सकिन्छ ।

सामान्य भाषामा बताउँदा हाम्रो जीवन एउटा निरन्तर संघर्षको गाथा हो। जसरी विगतमा एक राज्यले अर्को राज्य जित्ने उद्देश्यमा ठूला साना धेरै











लडाइँ हुने गर्दथ्यो। ब्याटल भनिने विभिन्न रणनीतिक आक्रमणमा कहिले सफलता हात लाग्दथ्यो त कहिले असफलता । जसले चातुर्य पूर्वक शक्तिआर्जन गर्दै अर्को राज्यसँग भएका असफल ससाना ब्याटलहरू बाट उठ्दै अघि बढ्न सफल बन्थ्यो, मुख्यमुख्य सामरिक महत्वका युद्ध आफ्नो पक्षमा पार्न सक्दथ्यो, विजयको माला पहिराउने अवसर उसैलाई मिल्दथ्यो । यथार्थमा युद्ध वा वार उसैले जितेको हुन्थ्यो। जितेको राज्य उसैले कब्जा गर्दथ्यो।

तपाईंको जीवनको मूल उद्देश्य समेत कुनै निश्चित ब्याटल जित्ने प्रकृतिको रहँदैन । अत्यन्त मूल्यवान् ब्याटलका नतिजा आफ्नो पक्षमा पार्दै सफलताको सिँढी उक्लनु तपाईंका तत्कालीन कर्तव्यहुन













आउँछ। तपाईंको दैनिक जीवन, व्यवहार, कारोबार र जीवनका सम्बन्धको हरेक पक्षमा यी कुरा लागू हुन्छन्। आफ्नो दैनिकीको ब्याटल तपाईंको पक्षमा रहनु/नरहनुमा तपाईंको समग्र सफलता प्राप्तिमा महत्वपूर्ण भूमिका रहन्छ। तर, निर्णायक भूमिका रहन्छ भनी सोच्नु वैदिक अवधारणा विपरीत ठानिन्छ। तपाईंले गर्ने दैनिक कर्ममा सफलता हात लागोस्न / लागोस् समग्रमा वार जित्ने तपाईंको जीवनको उद्देश्य सुचारु रहन जरुरी रहन्छ ।

किनकि असफलताबाट सिक्दै र सफलता बाट अनुभव सँगाल्दै तपाईं आफूलाई जीवनको उद्देश्य प्राप्तिको मार्गतर्फ उन्मुख गराउन सक्नुहुन्छ। आफ्नो दैनिक कर्मले सफलता प्राप्ति गरोस् वा नगरोस् तपाईंको धर्म आफ्नो युद्धकलालाई आफ्नो पूर्ण





क्षमतामा सदुपयोग गर्दै अघि बढ्नु हो। कर्म गर तर फलको आशा नगर भन्ने गीताको भनाइले तपाईंलाई आफ्नो जीवनलाई यही मार्गमा समर्पित गराउन प्रेरणा दिन्छ । जसलाई सफल व्यक्तिमा अनिवार्य रहने चरित्रका रूपमा समेत चित्रित गरिने गरिन्छ ।

## शिवजीको रूपको भावार्थ

हिजो विज्ञानले पदार्थलाई ठोस, तरल र ग्यासमा वर्गीकृत गरेर हेर्दथ्यो। विज्ञानमा ठोस, तरल, र ग्यासबाट फरक चौथो अद्वितीय विशेषताको पदार्थ प्लाज्मा पनि अस्तित्वमा रहेको थाहा भएको थियो। एक आयनित ग्यास जसमा स्वतन्त्र इलेक्ट्रोन र





आयनहरू हुन्छन्। त्यसले विद्युत् प्रवाह समेत गर्न सक्छ र चुम्बकीय क्षेत्रहरू सँग समेत प्रतिक्रिया गर्न सक्छ। प्रायः उच्च-ऊर्जा वातावरणमा भेटिने त्यो प्लाज्मा रूप तारा (सूर्य सहित), बिजुलीको चमक मानव निर्मित नियोन साइन र प्लाज्मा टिभीमा भेटिन्छ। अग्निको परिवर्तनशील गुण प्लाज्मा हो।

वैदिक पञ्च तत्वले पदार्थ र ऊर्जालाई सम्पूर्ण रूपमा त्यसको गुण तत्त्व बोधको तह सम्म पुगेर हेर्छ। त्यसलाई भौतिक र आध्यात्मिक पक्षहरू संग समेत जोल्टाएर मिसाएर कुरा गर्दछ। भौतिक तह सम्म मात्र सीमित रहेर कुरा गर्दा आधुनिक विज्ञानको ठोस पदार्थ सँग सम्बन्धित तम गुणको निश्चित आकार र आयतन हुने खनिजहरू, भौतिक वस्तुहरूको विशेषता वैदिक प्रणालीको पृथ्वी





तत्वको विशेषता हो। तरल पदार्थ जसले आफू जस्तो भाँडामा रह्यो त्यसैको आकार ग्रहण गर्छ, तर जस्तो भाँडामा रहे पनि त्यसको आयतन स्थिर रहन्छ त्यो गुण वैदिक तत्त्व "जल" को स्वभाव सँग मेल खान्छ। वैदिक अग्नि तत्वको अवधारणा नियमित रूपान्तरण हुने सक्रिय अवस्थामा रहेको ऊर्जा सँग सम्बन्धित छ। विज्ञानको अनुसार तातो आगोको ऊर्जाको रूपको गुण वैदिक परिप्रेक्ष्यमा अग्नि तत्त्व हो। अग्निले रासायनिक प्रतिक्रिया, ताप, विद्युत् र चुम्बकीय ऊर्जाको तत्त्व गुण समेतको कुरा गर्दछ। निश्चित आकार र आयतन नभएका आधुनिक विज्ञानका ग्यास तत्वहरू, बाफहरू वायु तत्त्व हुन् जसका अणुहरू निरन्तर गतिमा र कम्पनमा रहन्छन्।









आकाश तत्त्व आफैमा निकै चासोको विषय हो। सामान्य रूपमा आकाश तत्त्व गुण पन्च तत्वका आकाश बाहेकका चार तत्त्व आपसमा सहकार्य गर्न चाहिने स्थान वा माध्यमको रूपमा व्याख्या गरिन्छ। जहाँ सबै चीजहरू रहन सम्भव हुन्छ। यो भौतिक शास्त्रको स्थान र समयको अवधारणा सँग मिल्दछ। स्थान भित्र त्यसको दिशा (लोकेसन र डिरेक्सन) समेत समावेश हुने हुँदा आकाश आफैले भौतिक शास्त्रको स्थान - समय - दिशाको मान्यताको प्रतिनिधित्व गरेको प्रस्ट हुन्छ। वैदिक दृष्टिकोणमा, आकाश सबैलाई समेट्ने तत्त्व हो। माथि भनिएको पन्च तत्वका समग्र गुण यसको मुख्य गुण हो। वैदिक मान्यतामा आकाश तत्त्व नै दिव्य गुण तत्त्व हो। जसले पन्च तत्वलाइ आध्यात्मिक र




मनोवैज्ञानिक गुण संग समेत जोड्ने काम गर्दछ। आध्यात्मिक र मनोवैज्ञानिक गुण विना आत्मा ज्ञानको लागि जरुरी हुने अन्तर्मनको यात्रा सम्भव रहँदैन। हरेक पदार्थ र ऊर्जाको तत्त्व गुणमा आकाश तत्त्व साझा तत्वको रूपमा रहने गर्दछ। आकाश तत्त्व गुण बिना स्वयम ईश्वर अर्थात् प्रकृतिको नियमको समेत अस्तित्वमा रहन सम्भव नहुने वैदिक मान्यता छ।

वैदिक मान्यतामा रहेको आकाश तत्त्व गुणको मान्यता व्यवहारिक रूपमा सत्यको नजिक रहेको क्वान्टम विज्ञानको डबल स्लिट प्रयोगले पुष्टि गर्दछ। डबल स्लिट एक्सपेरिमेन्टको नतिजाले देखाउँछ कि इलेक्ट्रोन हरू कुनै अवलोकन कर्ताको उपस्थितिमा कणहरूको रूपमा देखिने गर्दछ। अवलोकन









नगरिएको अवस्थामा तिनीहरूले तरङ्गको व्यवहार देखाउने गर्दछन्। तिनीहरूको तरङ्ग जस्तो व्यवहार आध्यात्मिक र मनोवैज्ञानिक गुण प्रदान व्यवहार हुन् भने कण रुपी व्यवहार भौतिक अस्तित्वको गुण गुण प्रदान व्यवहार हुन्। जसले यो दुई रूप जोड्ने सेतुको काम गर्दछ। आध्यात्मिक र मनोवैज्ञानिक तत्त्व गुण रूपमा बोकेको दुई आकाश तत्त्व जस्तै आत्मा र आत्मा बिचको माया, प्रेम, घृणा वा स्मरण होस् वा आत्मा र परमात्मा बिचको बिचमा कुनै सम्पर्क सूत्र विनाको जोडाई आदि क्वान्टम इनट्यांङ्गलमेन्टको स्पुकीएक्सन जस्ता प्रक्रियाको सफल प्रयोगले अर्थ पूर्ण र सत्यको नजिक रहेको प्रस्ट गर्दछ। आकाशले सम्पूर्ण अस्तित्वलाई सम्भावनामा समेटेर राखेको अवधारणाको समेत





यसले पुष्टि गर्दछ।

परा र अपराको संयोगबाट संसार बनेको छ । परा भनेको जैविक चेतना हो। जुन प्राणी र वनस्पति दुवैमा हुन्छ। अपरामा पञ्चतत्व पृथ्वी, जल, आकाश, अग्नि र वायु तथा तीन सूक्ष्म तत्व मन, बुद्धि र अहंकार पर्छ । भौतिक शरीर अपरा प्रकृतिको पृथ्वी, जल, आकाश, अग्नि र वायु तत्व गुण बाट बनेको छ । तीन सूक्ष्म तत्व मन, बुद्धि र अहंकारलाई चेतनाले भौतिक शरीरसँग संयोजन गरेपश्चात् जीवित मानवको अस्तित्व सम्भव बन्छ। परा र अपराको संयोजनमाका लागि मूलतः परा वा जैविक चेतनाकै भूमिका रहने गर्छ । तसर्थ चेतनालाई ईश्वरीय तत्व वा शिव तत्वको नामकरण दिइएको छ।





पाँच प्रकारका साइकोएकटिव पदार्थ (mind-altering or psychoactive substances) ले मस्तिष्कलाई मनोवैज्ञानिक रूपमा गर्ने परिवर्तन बुझ्न सक्दा शिव तत्वको मनोवैज्ञानिक महत्त्व बारे जान सहज हुन्छ। रक्सी जस्ता डिप्रेसेन्ट (Depressants, Sedatives) मस्तिष्कको गतिविधिलाई ढिलो बनाउने गर्दछ जसले गर्दा व्यक्ति लाई आराम, शान्त, वा निन्द्राको महसुस गराउने गर्दछ। बढी रक्सी पिएपछि निर्णय क्षमता कमजोर हुने, सामाजिक चिन्ता मुक्त महसुस गराउने गर्दछ। सुर्ती जस्ता स्टिम्युलन्टले (Stimulants) मस्तिष्कको गतिविधिलाई बढाउँछ जसले गर्दा तपाई आफू झन् सतर्क, जागृत, र ऊर्जा वान बनेको महसुस गर्नु हुन्छ।



अस्थायी रूपमा तनाव समेत कम गर्ने सुर्ती सेवनले छिटै लत लाग्ने र दीर्घकालमा हानि दिने गर्दछ।

क्यानाबिनोइड्सले (Cannabinoids, गाँजा जस्ता) मस्तिष्कलाई अनौठो तरिकाले शान्त महसुस गराउने र अनुभूतिहरू परिवर्तन गर्ने गर्दछ। समय ढिलो भएको जस्तो लाग्ने, देखेको सुनेको चीजहरू वास्तविकता भन्दा फरक हुने र कहिलेकाहीँ भने अझै बढी सिर्जनात्मक सोचमा मग्न बनाउने गर्दछ। एलएसडी (Lysergic Acid Diethylamide), साइलोसाइबिन (Magic Mushroom), गाँजा (THC) जस्ता साइकेडेलिक्सले (Psychedelics, Hallucinogens) दृश्य र श्रवणमा तीव्र भ्रम वा हलुसिनेसन गर्ने, गहिरो सोचाइ जन्माउने र








वास्तविकता सँगको धारणामा परिवर्तन गरिदिने गर्दछ। जसले गर्दा संसारसँगको गहिरो सम्बन्धको अनुभूति हुने वा अनौठो सपना जस्तो अनुभव हुने समेत हुन् सक्दछ। उच्च मात्राको गाँजा (THC) जस्ता डिसोसिएटिभ्सले (Dissociatives) तपाईँलाई वास्तविकता वा आफैँबाट निकै टाढा रहेको अनुभूति गराउँछ। तपाई आफ्नै शरीर वा वरपरको वातावरण सँग छुट्टिएको महसुस गर्न सक्नु सक्छ। त्यसको पदार्थ जस्तै टिएचसी (THC) र टिएचसीको मात्रा अनुरूप हल्का देखि धेरै असहज अनुभूतिहरू गराउन सक्छ।

सबै साइकेडेलिक्स हरूले (Psychedelics, Hallucinogens) मस्तिष्कका न्यूरोट्रान्समिटर प्रणालीहरूमा परिवर्तन ल्याएर मानिसको धारणा,






संज्ञान र भावनाहरूमा गहिरो असर पार्छन्। साइकेडेलिक्सहरूले मस्तिष्कलाई गर्ने असर अनुरूप यिनीहरूलाई पनि यहाँ पाँच प्रकारका विभाजन गरेर हेर्न सकिन्छ। सेरोटोनर्जिक साइकेडेलिक्समा (Serotonergic Psychedelics, Classical Psychedelics) पर्ने एलएसडि, साइलोसाइबिन (म्याजिक मसरुम), डिएमटि (Dimethyltryptamine) र मेस्कालिन (Mescaline क्याक्टसमा पाइने) जस्ता मस्तिष्कको सेरोटोनिन 5-HT2A रिसेप्टर्स लाई सक्रिय गरेर धारणा र सोचमा परिवर्तन ल्याउने तत्त्व हुन्। जसले मानिसको दृष्टि, भावना र वास्तविकतामा परिवर्तन आएको अनुभव गराउने गर्दछ। डिसोसिएटिभ साइकेडेलिक्स








(Dissociative Psychedelics) अन्तर्गत पर्ने केटामाइन (Ketamine), पीसीपी (Phencyclidine) र डिएक्सएम (Dextro-methorphan) मा NMDA रिसेप्टर्स अवरुद्ध गरेर मस्तिष्कका भागहरू बिचको आपसी सञ्चारलाई रोक्ने तत्त्व हुन्छ। एम्पाथोजेन्स / एन्टाक्टोजेन्समा (Empathogens / Entactogens) पर्ने एमडिएमए (Ecstasy, MDMA - 3, 4 -Methylene - dioxy - methamp - hetamine) , एमडिए (MDA - 3, 4 - Methylene - dioxyam - phetamine) ले सेरोटोनिन, डोपामाइन र नोरेपिनेफ्रिन स्तर बढाएर गहिरो भावनात्मक सम्बन्ध, खुलापन, र उत्साहको अनुभूति गराउने






गर्दछ।

एन्टिकोलिनर्जिक डिलिरियन्टसमा (Anti-cholinergic Deliriants) पर्ने एट्रोपिन (Atropine) र स्कोपोलामाइनले (Scopolamine, धतुरोमा हुने) एसिटाइलकोलिन रिसेप्टर्स ब्लक गरेर भ्रम, स्मृति समस्याहरू र तीव्र भय उत्पन्न गराउँछ। त्यस्तै कप्पा-ओपिओइड रिसेप्टर एगोनिस्ट्समा पर्ने साल्भिनोरिन- ए ले कप्पा-ओपिओइड रिसेप्टर्स सक्रिय गरेर तीव्र रूपमा असामान्य हेलूसीनेसन् (unpleasant hallucinations) मार्फत दृष्टि र आफ्नो वारेको अवधारणामा परिवर्तन ल्याउँछ।

डिसोसिएटिभ साइकेडेलिक सेवनको कारण कतिपय अवस्थामा मानिसहरूले नियर-डेथ






अनुभवहरू (NDEs) पनि गर्दछन्। डिसोसिएटिभ साइकेडेलिक पदार्थहरू जस्तै केटामाइन, उच्च टिएचसीको मात्रा भएको गाँजा आदि पर्दछ। जसको सेवनमा आफ्नो वास्तविकता वाट आफू निकै पर रहेको, आफ्नै शरीर वाट आफ्नो आत्म टाढा भएको डिसोसिएट रहेको अनुभव गराउँछ। नियर-डेथ अनुभवहरूमा मानिसहरू आफू आफ्नो शरीरबाट अलग भएको र कहिलेकाहीँ बाहिरबाट आफैंलाई हेरेको, सुनेको र त्यहाँ भइरहेको गतिविधि देखिरहेको अनुभव हुनु लाई डिसोसिएटिभ असर भनिन्छ।

डिसोसिएटिभ साइकेडेलिक सेवनका केही साइकेडेलिक्स क्रियाकलापहरू समेत हुने गर्दछन्। जस्तै नियर-डेथ अनुभवहरूको बेला गहिरो शान्ति,

कसै संग सम्बन्धितताको अनुभूति (जस्तै बितेका आफ्नै प्रिय आफन्त सँगको मिलन), अलौकिक दिव्य दृश्यहरूको अनुभव आदि हुने गर्दछ। उदाहरणका लागि डाइमिथाइलट्रिप्टामाइन (DMT) जस्ता पदार्थहरूले नियर डेथ अवस्थाको अनुभूति सँग मिल्दोजुल्दो अनुभवहरू गराउन सक्छन्। जसमा देखिने अद्भुत दृश्यहरू र गहिरो भावनात्मक अन्तर्दृष्टि अचम्म लाग्दो हुन्छ। जस्तै: आफू शरीर बाहिर गएको अनुभव (डिसोसिएटिभ) हुने। उज्यालो प्रकाशका दृश्य वा सुरुङहरू (साइकेडेलिक) देखेको अनुभूति हुने। गहिरो शान्ति वा डरको तीव्र भावना विकास भएको अनुभव गर्ने। आफू रहेको भन्दा नितान्त फरक समय र स्थानमा रहेको अनुभूति गर्ने।





यसरी डिसोसिएटिभ्स (अलगावका कारण) वा साइकेडेलिक्स (जीवित, रहस्यमय अनुभवहरूका कारण) उत्पन्न हुने कतिपय अनुभवहरूमा कतिपय आध्यात्मिक सुख अनुभवहरू दिने प्रकृतिको समेत रहने गर्दछ। बाहिरी साइकोएक्टिव पदार्थको प्रयोग नगरी शरीर आफैले आफ्नो लागि नियमित रूपमा निर्माण गर्नेको आनन्द र आराम संग सम्बन्धित केमिकलहरू निर्माण गर्ने प्रक्रियालाई सहयोग पुर्‍याएर पनि जीवनमा मानिसले सुखी, खुसी, शान्त र आराम महसुस गर्न सक्दछ। त्यस्ता रसायनहरू बढाउने सजिला तरिकाहरूमा दौडिनु, पौडी खेल्नु, बाहिर खेल्न निस्कनु, हिँडडुल गर्नु, हल्का व्यायाम गर्नु आदि पर्दछ। यस्ता गतिविधि गर्दा निर्माण हुने एन्डोर्फिनले सहजताको महसुस



गराउने गर्दछ। हाँस्नु, साथीहरू वा परिवारसँग समय बिताउनु, अङ्कमाल गर्नु आदिले पनि यसमा सहयोग गर्छ। केरा, नट्ट जस्ता स्वस्थ खाना खाँदा मस्तिष्कमा डोपामिन र सेरोटोनिन जस्ता रसायनहरू बन्ने गर्दछ। जसले हामीलाई खुसी राख्दछ। केही समय घाममा समय बिताउनु, दुबोमा हिँड्नु, अरूको लागि राम्रो काम गर्नु, आफू संग के छैन होइन कि के छ त्यसमा गर्व गर्न सक्नु, खुसी हुनु, त्यसैमा धन्य बन्नु, गहिरो सास लिने, ध्यान गर्ने, आराधनामा बस्ने, पूजा गर्ने, हवन गर्ने जस्ता अभ्यासले ह्यापी केमिकलहरू निर्माण हुने गर्दछ। पर्याप्त सुत्नु र तनाव घटाउनुले शरीरमा स्वाभाविक रूपमा खुसीका रसायनहरूलाई राम्रोसँग काम गर्न मद्दत गर्ने गतिविधिहरू हुन्। उल्लेखित समग्र











गतिविधिहरू लाई वैदिक मान्यतामा आध्यात्मिक जीवन शैली मानिन्छ।

वैदिक दर्शनमा विनाशकका रूपमा चिनिने शिवको अवधारणा मस्तिष्क गतिविधि र मानव मनोविज्ञान सँग निकै गहिरो संग जोडिएको छ। मानिस कहिल्यै मर्दैन। उसको चेतना एक स्वरूप वाट अर्को स्वरूप बसाइ सर्दछ। तर पनि हरेक मानिस हरेक समय आफूलाई असुरक्षा महसुस गर्दछ। विशेष गरी मृत्युको डर र त्यसै संग सम्बन्धित चिन्ता डरको मूल कारक बन्दछ। कारण त्यसले उसको तत्कालीन भौतिक जीवनको अन्त्यको समेत प्रतिनिधित्व गर्छ। डर वारेको सूचना मस्तिष्कको एमिग्डालामा (amygdala) प्रशोधन हुने गर्दछ। विशेष गरी अस्तित्वगतको जोखिम सम्बन्धका डरहरू जस्तैः







मृत्युको डर, निरन्तरताको डर, सक्रियताको डर ।

शिवको विनाश सम्बन्धको नृत्य जीवन, मृत्यु र पुनर्निर्माणको निरन्तर प्रक्रिया संग सम्बन्धित छ। चलिरहेको जीवन विनाश गरेर नयाँ जीवनको सुरुवात गर्ने प्रक्रिया मात्र होइन मस्तिष्कमा रहेका पुराना विचारहरू विनाश गरेर नयाँ अनुभवहरू निर्माण प्रक्रिया पनि त्यसै संग सम्बन्धित पक्ष हो। शिवको ताण्डव नृत्य ब्रह्माण्डको गतिशील प्रवाह हो जहाँ सबै कुरा निरन्तर परिवर्तन भइरहेका हुन्छन् र नियमित सिर्जना, संरक्षण र विनाश हुने गर्दछ।

क्वान्टम फिल्डमा कणहरू निरन्तर परिवर्तनमा हुन्छन्, अस्तित्वमा आउँछन् र हराउँछन्। क्वान्टम मेकानिक्समा ब्रह्माण्डलाई विशाल ऊर्जाको क्षेत्रका रूपमा वर्णन गरिन्छ। जहाँ पदार्थ र ऊर्जा निरन्तर








अन्तरक्रिया गरिरहेका हुन्छन्। शिव नृत्य त्यही क्वान्टम वास्तविकताको निरन्तर गति र परिवर्तनको सङ्केत हो जहाँ ब्रह्माण्डका वेब फङ्गसनका सम्भावनाहरू कणका कम्पनहरू संग जडान भएका हुन्छन्। जसरी क्वान्टम कणहरू अवलोकन गर्दा कण अवस्थाहरूमा र नगर्दा वेब फङ्गसनका अवस्थाहरूमा रहन्छन् त्यसरी नै ब्रह्माण्डको निरन्तर रूपान्तरणलाई मस्तिष्कले नयाँ अनुभवहरू र पुनर्संरचनाहरू संग निरन्तर समायोजन गरिरहेको हुन्छ।

मस्तिष्कका न्युरोनहरू आपसमा जोडिने र तोडिने क्रम निरन्तर चलिरहन्छ। जसलाई न्यूरोप्लास्टिसिटी भनिन्छ। न्युरोन न्युरोन बिचको जोडाइको विनाश र सिर्जनाको प्रक्रिया शिवको विनाशक भूमिका सँग




मेल खान्छ। न्यूरोप्लास्टिसिटीको क्रममा न्युरोनले पुरानो वा अप्रासङ्गिक जानकारी नष्ट गरेर नयाँ कनेक्सन (neural pathways) निर्माण गर्दछ। जसको मूल उद्देश्य मस्तिष्कले नयाँ शिक्षा र कार्य पद्धति विकास गर्नु हुन्छ। स्मृतिहरू हिप्पोक्याम्पसमा (hippocampus) रहने गर्दछ। जहाँ मस्तिष्कको अनावश्यक स्मृतिहरू हटाएर महत्त्वपूर्ण स्मृतिहरू एकीकृत गरी सुरक्षित राख्ने गरिन्छ। विनाश र सिर्जनाको चक्रमा भएको स्मृतिहरूको विनाश गरी नयाँ स्मृतिहरूको सिर्जना गर्ने कार्य शिवको विनाशको नृत्यसँग मेल खान्छ।

ध्यानले मनलाई मृत्युको डरबाट शान्त गर्न मद्दत गर्छ। ध्यान गर्दा मस्तिष्क गहिरो आरामको अवस्थामा प्रवेश गर्छ। डरको लागि जिम्मेवार हुने





एमिग्डालाको गतिविधि ध्यानले सुस्त र संयम राख्ने हुँदा अहङ्कार र मृत्युको डर समाप्त हुने गर्दछ। शिवको नृत्यप्रति आफूलाई समर्पण गर्दाको समयमा समेत त्यही स्थिति पैदा हुने गर्दछ। क्वान्टम अवधारणामा, ध्यानले मस्तिष्कको गतिविधिलाई एक सम्यक् अवस्थामा (deep relaxation coherent state) ल्याउन मद्दत गर्न सक्छ। जसलाई ब्रह्माण्डको लय सँग मेल खाएको भनिन्छ।

जसरी शिवको भूमिका पुरानो लाई समाप्त गरेर नयाँ सिर्जना गर्नमा हुन्छ, मस्तिष्क समेत निरन्तर पुराना वा अप्रासङ्गिक विचारहरू, भावनाहरू र इन्द्रिय जानकारीको विनाश गरी नयाँले प्रतिस्थापन गरिरहेको हुन्छ। निर्णय र भावनात्मक नियमनको

जिम्मा लिने प्रिफ्रन्टल कोर्टेक्सले (prefrontal cortex) यस चक्रलाई ठिक त्यसरी नै नियन्त्रण गर्छ जसरी शिवको विनाश शक्तिले गर्दछ।

क्वान्टम मेकानिक्समा, शिवको विनाश लाई क्वान्टम वेभ फङ्गसनको कोल्याप्स सँग तुलना गर्न सकिन्छ, जहाँ वेभ फङ्गसन रुपी सम्भावित वास्तविकताहरू नष्ट हुन्छन् र कणरूपी विशेष वास्तविकता प्रकट हुन्छ। मस्तिष्कले समेत चेतनशीलता र अवलोकन मार्फत अनगिन्ती विचार र सम्भावनाहरू तर्फ प्रिफ्रन्टल कोर्टेक्स लाई केन्द्रित गरी विभिन्न सम्भावनाको जालो लाई निश्चित निर्णयमा रूपान्तरण गर्छ। निर्णय अनुरूप कर्म सञ्चालन हुने गर्दछ। जुन शिवको नृत्यले दिने सङ्केत संग हु-बहु मिल्दछ।





शिव तत्वबारे समाजलाई जानकारी दिन ऋषिहरूले हाम्रा लागि संकेतका रूपमा शिवको बृस्तृत चित्र कोरेका भेटिन्छ । उक्त चित्रमा रहेका विभिन्न संकेत मध्ये केही बारे यहाँ उल्लेख गर्ने प्रयास गरिएको छ।

## तेस्रो आँखा

शिवको निधारको तेस्रो आँखालाई भित्री आँखाका रूपमा दिमागकोआँखासमेत भन्ने गरिन्छ । बाहिरी संसार हेर्नका लागि मानिससँग आँखा हुँदै गर्दा आफूले देखेको, बुझेको, महसुस गरेका आधारमा कुनै पनि विषय वस्तुबारे निश्चयमा पुग्न हामीलाई विवेक वा अदृश्य आँखा उपलब्ध छ । शिवको निदारको तेस्रो आँखालाई त्यसैको प्रतीकका रूपमा लिने गरिन्छ। मस्तिष्कको बीचमा पछाडि पट्टि





पिट्युटरी ग्रन्थि भन्दा माथि अत्यधिक चार्जयुक्त सेरेब्रोस्पाइनल फ्लुइड (दिमागको तरल पदार्थ) डुबेर बसेको एउटा अंग जहाँ अन्य अंगको तुलनामा प्रति घन भोल्युममा अधिक रक्त–रस प्रवाहित हुनेगर्छ, त्यसलाई पिनियल ग्रन्थि भनिन्छ । पिनियल ग्रन्थिलाई शिवको तेस्रो अद्दश्य आँखाको प्रतीक मानिएकाले तेस्रो आँखालाई शिवको निधारको बीचमा राखिएको हो। पिनियल ग्रन्थिमा हुने पर्याप्त मात्राको रक्त प्रवाह मार्फत अक्सिजन र पोषण पुग्दछ। मूलतः शरीरको निद्रा- जाग्रत् चक्रलाई नियन्त्रण गर्ने मेलाटोनिन हर्मोनको उत्पादन गरी रगतमा दिने पिनियल ग्रन्थि वरपर सेरेब्रो स्पीनलफ्लुड (मेरुदण्डको मस्तिष्कको द्रव) बग्दछ जसले त्यसको सिरानीको काम गर्दै सुरक्षा









दिने र मेटाबोलिक कार्य हुँदा निस्कने फोहोर पिनियल ग्रन्थिबाट हटाउने काम गर्दछ। पिनियल ग्रन्थि शरीरमा सर्काडियन रिदम र हर्मोनल सन्तुलन कायम राख्न महत्त्वपूर्ण भूमिका खेल्छ।

सेरोटोनिन मेलाटोनिनको प्रारम्भिक रूप वा प्रिकरसर हो। एमिनो एसिड ट्रिप्टोफान बाट पिनियल ग्रन्थीमा सेरोटोनिन उत्पादन हुन्छ। पाइनियल ग्रन्थीले ईन्जाइमहरू एन-एसीटाईल ट्रान्सफरेज र हाइड्रोक्सिइनडोल - ओ - मीथाइल ट्रान्सफरेजको सहयोगमा जैव - रासायनिक प्रक्रियाबाट अँध्यारोको समयमा सेरोटोनिन लाई मेलाटोनिनमा रूपान्तरण गर्छ। पाइनियल ग्रन्थीमा मेलाटोनिनमा परिवर्तन भएको मेलाटोनिन फेरि सेरोटोनिन भने परिवर्तन हुँदैन।








जब हामी आफ्नो विचार, भावना र कार्य एकसाथ उच्चतम सहकार्यको विन्दुमा पंक्तिबद्ध गर्न सक्छौँ तब हामी आफूलाई उत्सुकता, उद्देश्य प्राप्ति र अर्थयुक्त जीवनले भरिपूर्ण गर्न सक्छौँ । उक्त कार्यमा हामीलाई सफल पार्न सहयोग गर्ने पिनियल ग्रन्थिलाई आत्माको केन्द्र वा सिट आफ सोल मानिन्छ। पिनियल ग्रन्थिका पिनेलोसाइट सेलहरूले सेरोटोनिनको उत्पादन गर्छ । अँध्यारो हुँदैगर्दा तथा मानिस निद्रामा रहँदा पिनियल ग्रन्थिले अधिक मात्रामा मेलाटोनिनको उत्पादन गर्छ । तपाईं आत्मीय सम्बन्धमा लीन हुँदा, धन्य महसुस गर्नुहुँदा, मेडिटेसन वा ध्यानमा रहँदा मेलाटोनिन सेरोटोनिनमा परिवर्तनहुन्छ।

वैदिक ध्यानमा पाइनियल ग्रन्थिलाई आज्ञा चक्रको









अवधारणासँग जोडेर "तेस्रो आँखा" मानिन्छ। आज्ञा चक्र आध्यात्मिक दृष्टि, अन्तर्ज्ञान, र आत्मज्ञानको केन्द्र ठानिने वैदिक र यौगिक परम्परामा ध्यानमार्फत यस ग्रन्थिलाई सक्रिय गर्दा व्यक्तिको चेतना, अन्तर्ज्ञान र उच्च स्तरको चेतना निर्माण हुने विश्वास गरिन्छ। पाइनियल ग्रन्थिले उत्पादन गर्ने मेलाटोनिनले निद्रा-जागरण चक्रलाई नियन्त्रण गर्न र सर्काडियन रिदमलाई कायम गर्न महत्त्वपूर्ण भूमिका खेल्ने हुँदा व्यक्तिको समग्र स्वास्थ्य, तनाव घटाउने र मनोभाव स्थिर राख्ने कार्यमा यसको प्रत्यक्ष प्रभाव हुने स्वाभाविक नै देखिन्छ। कतिपय अनुसन्धानले मेलाटोनिन ध्यानका अनुभवलाई अप्रत्यक्ष रूपमा सुधार गर्न, मानसिक स्पष्टता र भावनात्मक सन्तुलन वृद्धि गर्न










सहयोगी बनेको देखाएको छ। पाइनियल ग्रन्थिले डाइ - मिथाइल - ट्रिप्टामाइन (Dimethyl-tryptamine, DMT) निर्माण गर्ने र त्यसले व्यक्तिलाई हेलोसीनेटिङ्ग, रोमाञ्चकारी, सपनाका र मृत्युको निकट अनुभवहरू गर्न भूमिका खेल्ने गरेको अनुभव सुनाउने गर्दछन्।

मेलाटोनिनले निद्रा लगाउँछ भने सेरोटोनिनले तपाईंलाई खुसी, खुसी र धन्य बनाउँछ । जुन ब्लिसफुल अवस्था हो । वेदले बताएको र आधुनिक विज्ञानको क्वान्टम सिद्धान्तले प्रमाणित गरे अनुरूप सबै जीवको संरचनाको सबैभन्दा सूक्ष्म रूप नियमित गतिशीलतामा रहेको इलेक्ट्रोम्याग्नेटिक तरंगहो।

सबैभन्दा सूक्ष्म इलेक्ट्रोम्याग्नेटिक तरंगयुक्त













पदार्थलाई टुक्र्याउँदा केही पनि भेटिँदैन वा मात्र आकाश रहन्छ। अर्थात् शून्य हाता लाग्छ। यसरी हाम्रो जीवन शून्यबाट उत्पन्न भएर शून्यमा नै टुंगिने यथार्थको गहिरो ज्ञानदिने उद्देश्यले शिवको निधारमा संकेत स्वरूप तेस्रो आँखा राखिएको छ।

**डमरु**

ब्रह्माण्ड सुस्त गतिमा विस्तार हुने र खुम्चिँदै जाने नियमित प्रक्रियाबाट अस्तित्वमा रहने गर्छ। नियमित विस्तार हुने प्रक्रियाबाट ब्रह्माण्डको अन्त्य हुन्छ । फेरि संश्लेषण र विस्तार प्रक्रियाबाट ब्रह्माण्डको पुन निर्माण प्रक्रिया सुचारु हुन्छ । प्रकृतिको नियमित सिर्जना प्रक्रिया चलिरहन्छ। हाम्रो शरीरको मुटुको धड्कन एक सिधा रेखामा सीमित नरही कुनै निश्चित ताल वा रिदममा कहिले





तल र कहिले माथि गर्दै शरीरको नियमित सञ्चालन हुने गर्छ । संसारका हरेक जीवित र निर्जीव पदार्थहरूको निश्चित परिणाम र संरचनामा बाँधिएको ऊर्जाको उतार चढावबाट निर्माण, विगठन र पुनर्निर्माण सम्भव बनेको हुन्छ । द्वन्द्वात्मक चरित्रको मतलब पोजिटिभ र नेगेटिभ चार्जयुक्त सबैभन्दा सूक्ष्म संरचनाको उतार चढावबाट निर्माण र पुनर्निर्माणका लागि हुने विगठनको निर्माण प्रक्रियाको प्रतीकका रूपमा डमरुलाई लिइएको हो । डमरुको आकार नियाँलेर हेर्दा एक छेउमा फुकेको हुन्छ, बीचमा पुनः खुम्चिएको हुन्छ र फेरि अर्को छेउमा पुनः फुकेको हुन्छ । निर्माण, विगठन र पुनर्निर्माणको नियमित क्रमको संकेत गर्ने डमरुले यथार्थमा ब्रह्माण्डको





संरचना निर्माणको प्रतीकको संकेत दिन्छ ।

डमरुलाई ध्वनिको प्रतीकका रूपमा समेत लिइन्छ । ध्वनिको संरचना निश्चित तरंग निर्मित ऊर्जाबाट हुने गर्छ । संरचनागत रूपमा सम्पूर्ण ब्रह्माण्ड विभिन्न तरंगको संयुक्त सहकार्य बाट अस्तित्वमा रहेको हुन्छ । क्वान्टम भौतिक विज्ञानले समेत स्विकारेको यो तथ्यले सम्पूर्ण ब्रह्माण्ड संरचनागत रूपमा अन्ततः एकै प्रकारको अद्वैत तरंगका रूपमा पुगेर सकिन्छ । डमरुलाई ब्रह्माण्डको अद्वैत विचारधाराको प्रतीकका रूपमा समेत लिइन्छ ।

## घाँटीमा बेरिएको सर्प

निधन वा समाधिको अवस्थामा हामीसँग आफ्नै भन्ने केही रहँदैन। विभिन्न निर्माणको चरणमा







ब्रह्माण्डबाट प्राप्त गरेको कच्चा पदार्थहरू लिएर जम्मा भएको पदार्थ थुपारिएर निर्मित हाम्रो भौतिक शरीर समाधिको विन्दु पार गरेपछि औपचारिक विखण्डन उन्मुख हुने गर्छ । उक्त क्रममा शरीरमा थुपारिएर रहेका ब्रह्माण्डबाट प्राप्त सबै पदार्थ ब्रह्माण्डमै फिर्ता पठाउने प्रक्रियाको सुरुवात हुन्छ । चेतनाको भित्री आकाश भने समाधिको विन्दु पश्चात् पनि हामी सँगै रहन्छ। वास्तवमा समाधिको विन्दु पछि हामी चेतनाको भित्री आकाशमा मात्र सीमित हुन पुग्छौँ। जसलाई हामी कन्ससनेस वा चेतन शक्ति भन्छौँ। उक्त चेतन शक्तिको रूपलाई हामी शिवको असली रूपका रूपमा बुझ्ने गर्छौं । कुनै पनि भौतिक कार्य, क्रिया वा प्रतिक्रिया नरहने पूर्ण चेतनशीलताको अवस्थामा हामीमा आफ्नो सम्पूर्ण













क्षमताको सतर्कताको उपस्थिति रहन्छ । शिवको घाँटी वरिपरि सतर्क रहेर बेरिएको सर्प त्यही पूर्ण चेतन अवस्थाको सतर्कताको सम्झना गराउन राखिएको प्रतीक वा चिह्न हो ।

ध्यानको अवस्थामा मानिसले आँखा बन्द गरेको हुन्छ। ध्यान गरिरहेको मानिसलाई हेर्दा यस्तो भान पर्छ कि व्यक्ति सुतिरहेको छ । तर, ऊ निद्रामा हैन, उच्च सचेत अवस्थामै रहेको हुन्छ। मानिसमा ध्यानको समयमा अन्य समयमा भन्दा चेतनाको हदनिकै उच्च रहने यथार्थ अभिव्यक्त गर्नसमेत शिवको घाँटी वरिपरि बेरिएको चनाखोसर्पको उपस्थिति देखाइने गरिएको हो।

**त्रिशूल**





॥ श्री गणेशाय नमः ॥



जीवित अवस्थामा मानवको चेतनाको तीन अवस्था रहने गर्छ ।जाग्रत, सपना रनिद्रा (सुषुप्ति)। सत्व, रज र तमगुणको प्रतिनिधित्व गर्ने यो तीनै अवस्था भन्दा ईश्वरत्व उच्च स्थानमा रहन्छ।ईश्वरत्वलाई शिवका रूपमा बुझिने अवस्थामा शिवले त्रिशूल समातेको चित्रबाट ईश्वरत्व जाग्रत, सपना र सुषुप्तिको तीन गुणभन्दा फरक र उच्च चेतन अवस्थामा रहने संकेत दिन खोजिएको हो।

त्रिशूलमा त्रि शब्दको अर्थ तीनै अवस्थाको भन्ने लाग्छ। शूल शब्दले समस्या वा दुःख भन्ने अर्थ दिन्छ। समग्रमा त्रिशूल शब्दको अर्थ सबै किसिमका कष्टलाई नष्ट गर्ने तागत राख्ने अर्थमा सुझाइन्छ ।मानव जीवनसँग मूलतः तीन प्रकारका पीडा ठोकिन आइपुग्ने गर्छ ।स्थूल शरीरको आधी–











भौतिक (फिजिकल) पीडा, आध्यात्मिक (स्प्रिचुयल) तथा दैव, प्रकृति (भाग्य), भूतप्रेत (मनोवैज्ञानिक) आदि प्रकृतिको आधी–दैविक (इथरियल) पीडा ।शिवको हातमा रहेको त्रिशूलले ईश्वरत्व तीनै प्रकारका सम्पूर्ण दुःखबाट मुक्ति दिने हैसियत राख्ने क्षमताको प्रतीकका रूपमा लिइन्छ।

## चन्द्रमा

शिव मूर्तिको अर्ध चन्द्र शिवले समयलाई नियन्त्रण गर्ने सन्दर्भ संग जोडिएको छ। चन्द्रमाले आफ्नो आकार दिनदिनै परिवर्तन गर्छ, त्यसैले यसले समयको प्रवाहलाई जनाउँछ। चन्द्रमा लगाएर देखाउनुको अभिप्राय हो शिव समय भन्दा पर हुनु हुन्छ। समय बाट प्रभावित हुनुहुन्न। चन्द्रमाले नयाँ सुरुवात र नवीकरणलाई पनि जनाउँछ। जसरी







चन्द्रमा बढ्छ र घट्छ, जीवनमा पनि परिवर्तनको चक्र त्यस्तै हुन्छ। शिवले पुरानो नष्ट गरेर नयाँको लागि ठाउँ बनाउनु हुन्छ। चन्द्रमाले हामीलाई यस कुराको सम्झना दिलाउने गर्दछ। चन्द्रमाले शान्ति र स्थिरताको प्रतीक हो। चन्द्रमा मन र भावना सँग जोडिएको मानिन्छ। शिवको शिरमा रहेको अर्ध चन्द्रले मन र भावनाहरूमा नियन्त्रणको प्रतिनिधित्व गर्छ। शिव सधैँ शान्त र नियन्त्रणमा रहनु हुन्छ। शिवको मन र भावनाहरूमा पूर्ण नियन्त्रण छ।

**नदी**

शिर अथवा टाउकोलाई ज्ञानको भण्डारको प्रतीक मानिन्छ । हृदय वा मुटुलाई प्रेमको प्रतीक । नदीलाई प्रेमको प्रतीकका रूपमा इंगित गर्न मुटुबाटआएको देखाउने गरिन्छ । शिवको











आकृतिको सन्दर्भको नदीलाई शिवको टाउकोबाट बाहिर आउँदैगरेको देखाएर ज्ञानको प्रतीकका रूपमा प्रस्तुत गरिएको छ। नदीको प्रवाहलाई ज्ञान प्राप्तिको नियमित चरणका रूपमा ग्रहण गरिन्छ। नदीलाई समेत ज्ञानको प्रतीक ठानिन्छ। ज्ञानले मानिसको आत्मालाई शुद्ध पार्छ ।

सूर्यको तापको कारण समुद्रबाट बाफ उठेर बादल बनी पृथ्वीको उच्च भागमा बर्सिन पुगेको पानी आफ्नो मूल बासस्थान समुद्रमा मिसिने अभिप्रायले माथिबाट तलतल बहने गर्छ । भीमकाय ब्रह्माण्डको स्वरूपलाई सानो सानो गर्दै सबैभन्दा सूक्ष्म रूपसम्म पुगेर बुझ्न सक्दा मानिसले ब्रह्माण्डको निर्माण भएको सूक्ष्म पदार्थबारे अनुभूति लिन सक्छ । ब्रह्माण्डको सम्पूर्ण पदार्थ एकै सूक्ष्म







पदार्थद्वारा निर्मित रहेकाले त्यसको जानकारीले मानिसलाई आफ्नो गन्तव्य र जीवनको उद्देश्य पत्ता लगाउने बाटो पहिचान गर्न सहज हुन्छ । आफ्नो उद्देश्य प्राप्तिमाअविरल बहने नदी जस्तै ज्ञान प्राप्तिको अविरल यात्राबाट मानिसले आफ्नो अन्तरात्माको समेत ज्ञान प्राप्त गर्न सक्छ । निकै गहिरोमा पुगेर जीवनको यथार्थता महसुस गर्न सक्छ। शिवको टाउकोबाट बाहिर आउँदै गरेको नदीलाई त्यही ज्ञान प्राप्तिको उपायको प्रतीकका रूपमा राखिएको छ। मानव जीवनमा ज्ञान प्राप्तिको सिलसिला गतिशील र नियमित रहन्छ। ज्ञानको प्राप्तिले मात्र मानिसले स्वतन्त्र शुद्धता युक्त जीवन प्राप्त गर्न सम्भव हुन्छ। शिवको शिरलाई ज्ञान वा ईश्वरत्व युक्त ठानिएकाले ज्ञानको प्रतीकका रूपमा







नदीलाई राखिएको छ ।

## निलो शरीर

निलो भनेको सफा आकाशको रङ हो । आकाशलाई केही पनि नरहेको शून्यताको अवस्थामा लिइन्छ। शिवको असली रूप आकाश र रङ निलो दर्साउने अभिप्रायले शिवजीको शरीर निलो रङले पोतने गरिन्छ। आकाशले व्यापकता र अनन्तताको संकेत गर्छ ।किनकि आकाशको कुनै सीमा रहँदैन । सम्पूर्ण पदार्थ भित्र र बाहिर पनि खाली भाग वा आकाश रहने गर्छ। यसको कुनै आकार समेत रहँदैन। वास्तविक रूपमा शिवको कुनै शरीर हुँदैन। न शिव कहिल्यै कुनै व्यक्तिका रूपमा सीमित रहेर अस्तित्वमा रहे। शिव एक अथाह, असीम देवत्वको प्रतीकका रूपमा रहेको

दिव्यता हो भन्ने मानिसलाई बुझ्न सजिलो होस् भन्ने उद्देश्यले ऋषिहरूले एक कुशल चित्रकारले आफ्नो चित्रबाट भावना प्रकट गरे जस्तै शिवको रूप बनाएको देखिन्छ । गहिरिएर हेर्दा ज्ञानको समेत न त कुनै आकार हुने गर्छन न सीमितता। यसले ब्रह्माण्डको प्रत्येक र सबै कणभित्र खालीपन हुन्छ। उक्त खालीपनलाई संकेत गर्दै सारा संसार शिवले भरिएको छ, सम्पूर्ण ब्रह्माण्डमा शिवको उपस्थिति छ भनिन्छ।

**शिवलिंग**

लिंग शब्दको अर्थ पहिचान हो । एक प्रतीक जसको माध्यमबाट सत्य, तथ्य र वास्तविकताको पहिचान गर्न सकिन्छ । कुनै पनि वस्तुको छोपिएको वा नदेखिएको यथार्थ मूल्यवान् गुण





बुझ्न र पहिचान गर्न सहयोग गर्ने चिह्नलाई लिंग भनिन्छ। जस्तै जब बच्चा जन्मन्छ तब त्यो आफ्नो सन्तति पृथ्वीमा नियमित राख्ने गुणको सन्दर्भमा वीर्यदान गर्ने क्षमता युक्तको हो वा वीर्यको पालनपोषण गरी मानव रूपमा विकसित गर्ने खुबी युक्त डिम्बदान गर्ने खुबीको हो भन्ने पहिचान उसको शरीरको मात्र एउटा गुप्त अंशमार्फत पत्ता लाग्छ । जन्मने बित्तिकै पुलिंग वा स्त्रीलिंग पहिचान गरी बच्चा केटा हो वा केटी भनी यकिन लिइन्छ । त्यही कारणले जननेन्द्रियलाई लिंग भनिन्छ ।कपडा लगाएर छोपेरसमेत राखिन्छ ।

सृष्टिको संरचनाको मुख्य पदार्थ शिवलाई चिन्न पनि कुनै लिंगको सहायता लिन सक्दा सजिलो पर्छ । शिवको आफ्नै न त कुनै रूप हुने गर्छ न आकार।





एउटा चिह्न जसले पुरुष र महिलाको मिश्रणको अनुभूति वा पहिचान दिन्छ, त्यो नै शिवको लिंग हुनुपर्ने यथार्थ आफ्नो ठाउँमा छ । यो अर्थमा ऋषिहरूले महिला र पुरुषको दुवै अंग संयोजन गरेर शिवलिंगको परिकल्पना गरे। सूक्ष्मजीवको स्तरमा माइटोसिस, मियोसिस जस्ता प्रक्रिया पार गरी फरकफरक आनुवंशिक गुणको संयोजन गरी र विकसित जीवहरूमा सम्भोगपश्चात् जीवन सुरु हुने यथार्थलाई मनन गरी योनि माथि ठडिएको लिंग प्रतीककारूपमा शिवलिंग तयार भएको बुझिन्छ ।

शिवलिंगको संकेतमा पुरुष जननेन्द्रियको आसनका रूपमा स्त्री जननेन्द्रियको व्यवस्था गरिदिएर संसारमा आफ्नो सन्तति नियमित कायम गर्नु जीवमात्रको अन्य कर्तव्य जस्तै एक अनिवार्य कर्तव्य रहेको









समेत सूचना दिन खोजिएको छ ।ब्रह्माण्डको मौन, प्रकट नहुने निराकार, गतिशील तर सृष्टिका लागि जरुरी हुने दुवै स्त्री र पुरुष गुणको संयोजन रहेको संयुक्त शिवशक्तिको रूपको अभिव्यक्ति दिने प्रयोजनले शिव लिंगको आकृति बनाइएको छ ।ब्रह्माण्डको सृष्टिकर्ताको मूल सूक्ष्मस्वरूप मात्र एउटा रहेको संकेत गर्दैस्त्री–पुरुष दुवै गुण मिसिएर एकै भएको शिवलिंग निर्मित गरिएको हो । यो अर्थमा शिव कुनै अमूक वस्तु वा पदार्थ होइनन्, बरुपूर्ण सर्वोच्च चेतनाको समापनको प्रतीक हुन् भन्ने सूचना व्यक्त गर्न खोजिएको छ।

**साँढे**

शिवको अगाडि रहेको साँढे एक अनन्त प्रतीक्षाको प्रतीक हो। हरेक मानिसको जीवनमा अनन्तः










प्रतीक्षा गर्न सक्ने क्षमतालाई सबैभन्दा ठूलो सद्गुण मानिन्छ । मन्दिरमा प्रतीक्षामा बसेको साढे प्राकृतिक ध्यान वा मेडिटेसनको कुनैआसनमा बस्न र कुर्नु मात्र जान्ने तर प्रतीक्षा वा कर्मको फल भोलि नै आउँछ भन्ने हतारोमा रहेको देखिँदैन । उसको शरीरको हाउभाउले उसमा कुनै प्रतिफलको आशा वा अपेक्षा समेत रहेको आभास आउँदैन । ऊ मात्र कुर्दै छ । लाग्छ सम्पूर्ण जीवन भर पर्खिरहनका लागि तयार छ । अनन्तः कालसम्मका लागि पर्खिन सक्ने साँढेको गुणलाई ग्रहणशीलताको सारका रूपमा लिइन्छ । हरेक मन्दिरमा जाने शिव भक्तमा मन्दिर जानुभन्दा पहिले साँढेको जस्तो ग्रहणशीलताको सारगुण हुनुपर्छ । अटल प्रतीक्षा गर्ने सामर्थ अनिवार्य छ। कर्म गर्ने तर फलको आस













नगर्ने ग्रहणशीलता अनिवार्य रूपमा हुनुपर्छ।

पूजा र ध्यानबीचमा आधारभूत रूपमै निकै गहिरो फरक रहन्छ । प्रार्थना अथवा पूजा गर्दैगर्दा तपाईं परमेश्वरसँग आफ्ना मनका कुरा गर्न वा व्यक्त गर्न कोसिस गर्नुहुन्छ। ध्यान अथवा मेडिटेसन भने तपाईं ईश्वर वा शिव वा प्रकृतिलाई सुन्न इच्छुक बन्नुभएको अवस्था हो। ध्यान गर्दै गर्दा तपाईं मात्र तपाईंको अस्तित्वको कारण, उपस्थितिको प्रयोजन र उद्देश्यबारे कुरा सुन्न तयार हुनुहुन्छ । सृष्टिको उत्पत्तिको कारण, प्रकृति र उद्देश्यलाई सुन्न चाहनुहुन्छ ।

त्यहाँ तपाईंको आफ्नो भन्नु वा सुनाउन पर्ने केही हुँदैन, तपाईं मात्र सुन्न चाहनुहुन्छ। त्यसका लागि अटल प्रतीक्षा गर्ने ग्रहणशीलताको सार गुण







बोकेको साँढे जस्तो मात्र सतर्कता सहित ध्यानमा बसिरहने गुण तपाईंले विकास गर्नु जरुरी छ । चित्रमा साँढे सचेत छ, निद्रामा छैन, निष्क्रिय तरिकामा बसिरहेको देखिन्छ। लाग्छ, मात्र बसिरहेको छ । शिवको सामुन्ने ढुकेर रहेको साँढेको चित्रबाट ऋषिहरूले शिवभक्तमा शिवको ध्यान कसरी बस्नु अनिवार्य छ भन्ने ज्ञान दिन खोजेको देखिन्छ ।

**हिमालय पर्वत**

शिवजीको प्रिय बासस्थानका रूपमा हिमालयको मानसरोवरको शिखरलाई लिइन्छ। शिवजीको वास्तविक घर तथा समाधि स्थान समेत कैलाश पर्वतलाई नै मानिन्छ। कैलाशको भावार्थमा ‘त्यो स्थान जहाँ मात्र उत्सवहरू हुने गर्छ’ लाई बुझ्ने











गरिन्छ। श्मशान वा समाधि स्थलको भावार्थमा रिक्तता वा शून्यता महसुस गराउने एकान्तको शान्त स्थानलाई ग्रहण गरिन्छ । देवत्व वा दिव्यता दुवै शून्यता र उत्सवकोअवसरमा हामीसँगै रहन्छ । हरेक व्यक्ति आफैँमा सदैव शून्यता वा रिक्तता र उत्सव वा भरिपूर्णताको दुवै पक्ष युक्त रहने गर्छ ।

चित्रमा शिवजीसँगै कैलाश पर्वतलाई देखाएर शिवतत्वलाई ब्रह्माण्डको सम्पूर्ण उच्चताको केन्द्र वा अन्तिम गन्तव्य रहेको सूचना दिने प्रयास गरिएको हो । अत्यन्त विवेकी, चतुर र निष्पक्ष शिवतत्व सर्वाधिक शक्तिवान् अथवा अग्निमय रहने ठानिन्छ। हिमालको चिसो, शान्त वातावरणले दिने एकाग्रता, हिमालबाट बग्ने काली, मस्र्याङ्गी जस्ता नदीका कारण पैदा हुने कोमल भाव, सर्वोच्च उचाइमा









महसुस गर्न सकिने आरामदायी चिसोपन बीचको ग्रहणशीलता आदि ब्रह्माण्डको संरचनाको सर्वोच्च स्वामीबारे महसुस गर्न चाहिने आधारभूत मनोवैज्ञानिक गुणहरू हुन् भन्ने यथार्थ कैलाश पर्वतको चिह्न मार्फत सम्प्रेषण गर्न खोजिएको छ ।

**ओम नमः शिवाय**

ओम नमः शिवाय भनी उच्चारण गरिने मन्त्रलाई संसारमै रहेका मन्त्रहरू मध्ये एक अत्यन्त शक्तिशाली मन्त्र ठानिन्छ। यो मन्त्रले शरीरमा आन्तरिक ऊर्जा बनाउन र खाली स्थान वा आकाश तत्व बढाउन मद्दत गर्ने ठानिन्छ। ओम नमः शिवाय लगायतका तमाम मन्त्रको तीव्र आवाज अर्थात् तरंगहरूले मानिसमा चेतनाकोअभिवृद्धिमा प्रभावकारी मद्दत पु¥याउँछ । ओम नमः शिवायमा









रहेको ‘ओम’ ब्रह्माण्डको आवाज हो। ओमको अर्थ शान्ति र प्रेम हो। अन्य शब्दका अक्षर ‘न’, ‘म’, ‘शि’, ‘वा’, ‘य’ लेक्रमशः पृथ्वी, पानी, आगो, हावा रआकाश गरी पाँच वटा तत्व वा पञ्चतत्वलाई संकेत गर्छ। ब्रह्माण्डको सम्पूर्ण तत्व पञ्चतत्व निर्मित रहन्छन्।

जब तपाईं एकाग्र भएर ओमः जप गर्न थाल्नुहुन्छ, तपाईंले सबै कुराको अस्तित्व हराएको महसुस गर्न पाउनु हुन्छ। न सोच न सपना न कुनै अनुमान न कुनै धारणा न कुनै अपेक्षा तपाईंको मनमा उब्जन पाउँछ। एकान्तको कलकल पानी बगिरहेको खोला किनारको संगीतको भित्री रूपमा आफैं हराए जस्तै अन्य कसैले सुन्न नसक्ने तर आफैंले भने सद्भाव, आनन्द र धन्यताले भरिएको अनुभूति प्राप्त गर्न








पाउनुहुन्छ।

जब तपाईं ओम नमः शिवायको हरेक पदलाई फरक फरक रूपमा उच्चारण गर्नुहुन्छ, हरेक शब्दको सह-अस्तित्वको रहस्यमा प्रवेश गर्नुहुन्छ, त्यसमा अन्तर्निहित मौनताका खाली ठाउँहरूको अनुभव लिनुहुन्छ तब तपाईंमा फरक शक्तिको सञ्चारको अनुभूति हुन्छ । ध्वनिहरू बीच लयबद्ध रूपमा दोहोरिने खाली ठाउँ मिश्रित ध्वनिहरूको समग्र संयोजनले तपाईंलाई साँचो अर्थको भित्री संगीतको महसुस गर्ने अवसर प्राप्त गराउँछ । तपाईंले अनुभवकर्ताका रूपमा आफ्नो भित्री स्वयम लाई अनुभूति गर्न सक्नुहुन्छ ।

६ वटा अक्षरको अंश मिलेर बनेको यो मन्त्रले जुन प्रकारको कम्पन उत्पन्न गर्छ त्यसले शरीरको










कोषिकाको स्तरसम्म कम्पन पैदा गर्ने गर्छ ।शरीरका हरेक तन्तु समग्र रूपमा एकापसमा जोडिएर एकै लयको धुनमा कम्पन भइरहेकोअनुभूति गराउँछ। जब मन्त्रले पूरा वाक्य दोह¥याएर पटक पटक जप गरिन्छ, त्यसबेला जप गर्ने व्यक्तिले यसलाई संगीतभन्दा चर्को रूपमा सुन्न सक्छ। किनकि दोहो¥याई तेह¥याई जप गर्दैगर्दा दिमागले जपको वाक्यको कम्पन रफ्रिक्वेन्सी सँगै आफूलाई पूर्ण रूपमा सिंक्रोनाइज गरिसकेको हुन्छ।

पृथ्वीको कम्पन ७.८३ हर्ज हुने गर्छ । उक्त कम्पनसँगै हाम्रो जैविक प्रणालीको कम्पन समेत प्राकृतिक रूपमै ट्युन भएको हुन्छ। ओमलाई ब्रह्माण्डको आधारभूत आवाज मानिन्छ। ओम जप गर्दा हाम्रो शरीरबाट निस्कने ध्वनिको फ्रिक्वेन्सी









११०.७६, १७०.६६र २८९.१३ हर्ज हुने गर्छ। ११०.७६ हर्ज गामा–किरणको फ्रिक्वेन्सीको भाग रहेकालेयसले दिमागमा पुगेको गामा–ब्रेन–वेब पैदा गर्छ । गामा–ब्रेन–वेब अन्य भन्दा तेज गतिको फ्रिक्वेन्सीयुक्त २५ देखि १०० हर्जमा अस्सिलेट हुने गर्छ। फलतः यसलेदिमागको मानसिक गतिविधिमा सुधार ल्याउने, संज्ञानात्मक वृद्धि गर्ने, मानसिक विकृतिबाट मुक्ति दिलाउने, विषयवस्तुमा केन्द्रित हुने शक्ति बढाउने, सिक्ने क्षमता र सूचनाको प्रशोधन गर्ने क्षमता बढाउने गर्छ। साथै छोटो अवधिको स्मरण शक्तिको क्षमता अभिवृद्धि गर्ने र टाउको दुख्ने आदि रोगको रोकथाममा समेत सहयोग पु¥याउँछ ।

१७०.६६ हर्ज फ्रिक्वेन्सी १७४ हर्ज फ्रिक्वेन्सीको









ज्यादै नजिक देखिन्छ । जुन प्राकृतिक एनेस्थेटिकका रूपमा काम गर्ने हुँदा शारीरिक र ऊर्जागत रूपमा शक्तिको कायाकल्प गराउने र दुखाइ कम गर्न सहयोगी बन्ने बलियो आधार भेटिन्छ ।१७४ हर्ज फ्रिक्वेन्सी शरीरका अंगहरूलाई सुरक्षाको अनुभूति दिलाउने गुणका लागि समेत परिचित रहेकाले यसले चेतनाको हद वृद्धि गर्न आधारको विकास गर्ने परिस्थितिको पनि सिर्जना गर्छ। २८९ हर्ज फ्रिक्वेन्सी २५५ हर्ज फ्रिक्वेन्सीको नजिक देखिन्छ। २५५ हर्ज फ्रिक्वेन्सी बहुआयामिक क्षेत्रहरूमा जागरुकताको तहलाई सन्तुलित गराई चेतनाको विस्तारमा सहयोग पु¥याउने गर्छ। शरीरको ऊर्जाको वृद्धि गरी शरीरमा ऊर्जाको पुनःउपलब्धता मार्फत कायाकल्प गराउन सहयोग






पु¥याउँछ ।

ओम नमः शिवाय मन्त्र एकैसाथ जप्ने क्रममा हाम्रो जैविक प्रणाली कम्पन पृथ्वीको कम्पन ७.८३ हर्ज सँगै पूर्ण रूपमा सिंक्रोनाइज हुने गर्छ ।उक्त समयमा पृथ्वी र ब्रह्माण्डका सम्पूर्ण पदार्थसँग सिधा सम्पर्क कायम हुने गरीहाम्रो जैविक कम्पन संयोजित हुन सक्छ। जसले गर्दा ब्रह्माण्डका कम्पनमार्फत हामीब्रह्माण्ड सँगै सिधै जोडिन सम्भव हुन्छ। केही समयसम्मको लयबद्ध ओम नमः शिवायकोमन्त्र उच्चारणले हाम्रो शरीरको कम्पन र ब्रह्माण्डको कम्पनबीच हुने अन्तरघुलनका कारण हाम्रो स्नायु प्रणालीमा सकारात्मक ऊर्जासञ्चार गरिदिन्छ । जसले गर्दा रक्तचाप कम गर्न, मुटुको स्वास्थ्यमा सुधार ल्याउने देखि मनोवैज्ञानिक उपचारसम्म








सम्भव बनिरहेको भेटिन्छ । यो अर्थमा शिवको आकृतिमा अंकित ॐचिह्नले मानव जीवनमा मन्त्रोच्चारण र ध्यानको महत्वको विशेषता सम्झाउने प्रयत्नस्वरूप राखिएको बुझ्न सकिन्छ।

## नटराज वा नाचिरहेको शिव

पार्टिकल फिजिक्सले प्रमाणित गरे अनुरूप शरीरका सेलहरू एटम निर्मित छन्। एटमहरू आफूभन्दा एक लाख गुणा सानो प्रोटोन र न्युट्रोन रहेको न्युक्लिअस वरिपरी समय र स्थानका आधारमा गतिशील रहने इलेक्ट्रोन निर्मित छन्। प्रोटोन, न्युट्रोन, ग्लुवोनबाट बनेका छन्। जहाँ ग्लुवोन आफैं लगभग तीन वटा क्वार्क निर्मित छ। गतिशील क्वार्कलाई टुक्र्याउने हो भने तपाईं केही पनि भेट्नुहुन्न वा शून्य हाता लाग्नेगर्छ। पदार्थको










संरचनाको सबै भन्दा सूक्ष्म अस्तित्वमा मात्र निश्चित वेबनाचिरहेको देख्नुहुन्छ । त्यही तरंगहरूको विविधताको खेलबाट संरचना बन्दै भीमकायसंरचना बन्ने र नष्ट हुने प्रक्रिया हालसम्म गतिशील रहेको छ ।

वास्तवमा नथिङ वा शून्यबाट प्रारम्भ भएर एभ्रिथिङ वासम्पूर्णताको निर्माण हुने क्रमबीच हाम्रो जीवनको समेत निर्माण भएको छ । उक्तएभ्रिथिङ वा सम्पूर्णता जस्तै हाम्रो जीवनसमेत नथिङ वा शून्यमै पुगेर अन्ततः सकिनेनिश्चित रहेको भेटिएको छ । शून्यबाट गतिशीलताका रूपमा पैदा भएको हाम्रो जीवनअन्ततः शून्यमै सकिन्छ । जबसम्म अस्तित्वमा रहन्छ त नियमित गतिशीलताको अनिवार्यतारहन्छ । शिवको नटराज वा नाचिरहेको













स्वरूप यही यथार्थबोध होस् भन्नका लागि संकेतकारूपमा प्रस्तुत भएको छ । जुन यथार्थ आजको आधुनिक क्वान्टम विज्ञानले समेत एकपछिअर्को परीक्षणबाट यथार्थतायुक्त रहेको स्थापित गर्दै गएको छ ।

गतिशील तरंगहरू अस्तित्वमा रहन दुई विपरीत गुणका चार्जकोसहअस्तित्वको अनिवार्यता रहन्छ । जसलाई पुरुष तथा स्त्रीलिंग संयोजित शिव तत्वका रूपमा बुझ्ने गरिन्छ । आपसी द्वन्द्वात्मक सम्बन्ध प्राकृतिक सम्बन्ध हो। प्राकृतिक द्वन्द्वात्मक सम्बन्ध बीचको आपसी प्राकृतिक मिलन मार्फत अत्यन्त सूक्ष्म देखि भीमकाय र शक्तिशाली संरचनाको सम्पूर्ण निर्माण सम्भव रहन्छ भन्ने प्रमाण सहित मर्मस्पर्शी सूचना शिवतत्वले संसारलाई दिएको छ।











संसारका हरेक वस्तु निर्मित सबैभन्दा सानो कण ऊर्जायुक्त नृत्यको प्रदर्शनको गठजोड हो। जसलाई वेदले सारांशमा सम्पूर्ण ब्रह्माण्डमा समावेश रहेका पदार्थको निर्माण र विनाशको आधार नृत्यको प्रदर्शनको गठजोडको प्राकृतिक सुचारुपनमा आधारित रहेको भनी स्पष्ट पारेको छ।

# तत्त्व बोध

चरक भन्छन्:

**शरीर इन्द्रिय सत्त्व आत्म संयोगो धारीजीवितम् ||**

**अ. १/ श्लोक ४२||**

अर्थात् जीवन शरीर, इन्द्रिय, मन र चेतनाको













संयोजन हो।

सुश्रुत स्वस्थ व्यक्तिलाई यसरी परिभाषित गर्छन्:

**समा दोषःसमाग्निश्च समधातु मलक्रियाः|**

**प्रसन्न आत्मइन्द्रिय मनाः स्वस्थ इति अभिधीयते ||**

**अ.१५ / श्लोक ४१||**

सारांशमा, स्वस्थ व्यक्ति भनेको उसको दोष, धातु (संरचनात्मक इकाईहरू) र पाचन क्रियाले दिने उत्पादनको भूमिका सन्तुलनमा रहेको संरचना युक्त व्यक्ति हो। सुश्रुतको थप भनाइ अनुरूप चेतना, इन्द्रियर मनमा स्पष्टता हुनु पनि स्वस्थ अवस्थाका लागि आवश्यक छ।

यहाँ एक कुरा ध्यान दिनुहोस्। जीवित र निर्जीव भनिने सबैकुरा पञ्चभूत निर्मित पञ्चमहाभूत निर्मित







सूचनाका थैली हुन्। ती सबैले सूचना बोकेको हुन्छ। जसलाई म संग सूचना छ भन्ने ज्ञान वा बोध हुन्छ त्यो जीवित हुन्छ। जसलाई हुँदैन त्यो निर्जीव हुन्छ।

आफूमा सूचना भएको थाहा हुने तत्त्व चेतना हो। त्यो चेतनाले आफ्नो अनुभूतिको लाई आफै निर्मित पञ्चभूत संरचनाको संयोजन गर्दछ। त्यही पञ्चभूत संरचनाको माकुरोको जालो जस्तो जालो निर्मित संरचना मार्फत पञ्चमहाभूत निर्मित सूचनाको निर्माण हुन्छ।

पञ्चभूत निर्मित अत्यन्त ठुलो माकुराको जालो जस्तो शक्तिको संरचना निर्मित पञ्चमहाभूत मूलतः जड संरचना अर्थात् भौतिक निर्माण सामग्री निर्माण गर्ने फुट प्रिन्ट बन्ने गर्दछ। जुन चेतना निर्मित निश्चित










गुणको रूपमा अस्तित्वमा रहने भएकोले चेतना अर्थात् अवलोकन कर्ताको संसर्गका पञ्चभूत ऊर्जा आउँदा वेब फर्ममा रहने भएता पनि चेतनाले त्यसले दिन सक्ने पार्टिकल फर्मको चरित्र डिकोड गरी अनुभूति गर्न सक्ने हुन्छ। जसलाई क्वान्टम डुवालिटि भनेर फिजिक्सले चिन्ने गर्दछ। जुन चेतनाको वेब फर्मलाई पार्टिकल फर्म मै बुझ्न सक्नेखुबी हो।

त्यसैले यो ब्रह्माण्ड तपाइको चेतना निर्मित चिज हो। तपाइको दुनियाँ, तपाइको सपनार तपाइको जीवन समेत तपाइको चेतनाको अनुभूतिमा छ। यथार्थमा यो त आकाश जस्तै सबै मिथ्या अस्तित्व रुपी सत्य हो भनिन्छ।

त्यसैले हामीले जीवनलाई गहिरो संग बुझ्न











महाभूतहरू र भूतहरू फरक फरक कुरा हुन् भन्ने बुझ्नु जरुरी छ।

ब्रह्माण्ड र यसको अवयवहरूले जब अवलोकन कर्तालाई आफ्नो उपस्थिति देखाउन योग्य बन्छन् तब तिनीहरू महाभूतहरू (महा—ठुलो, भूत—तत्त्वहरू) भनेर चिनिन्छन्। उनीहरूलाई महाभूत किन भनिन्छ भने तिनीहरूको आकार आफ्ना पूर्ववर्ती भूतहरू (भूतहरूको साना माकुरे जाल रुपी रूपहरू) भन्दा ठुलो छ। अनि तिनीहरूको व्यापक उपस्थिति समेत रहन्छ।

अवलोकन कर्तालाई कणहरूको रूपमा देखिएको वा व्यवहार गरिरहेको ऊर्जा तसर्थ पञ्च महाभूत हो भने अवलोकन कर्ताको अनुपस्थितिमा त्यही सब्टल सूक्ष्म ऊर्जा एक माकुराको जालो जस्तो वेबको













रूपमा हुने तत्त्व पञ्च भूत हो।

वेबको रूप जसरी कणको रूपको पूर्ववर्ती हुने गर्दछ त्यसरीनै पाँच भूतहरू पनि पञ्च महाभूतहरूको पूर्ववर्तीको रूप (Precursors) हुने गर्दछ। त्यसैले त्यसलाई तन्मात्र भनिएको छ।

आधुनिक क्वान्टम फिजिक्सले प्रमाणित गरेको छ कि यस ब्रह्माण्डमा सबै कुरा मूलतः ऊर्जाको तरङ्ग वा कम्पनका रूपमा अवस्थित छ। ब्रह्माण्डका सबै सजीव र निर्जीव चीजहरू ऊर्जाको तरङ्ग वा कम्पनका निर्मित रहेकाले त्यसरी निर्मित तत्त्वहरू सत्त्व, रज र तम गरीतीन सूक्ष्म आधार गुण युक्त हुन पुग्दछ। जसलाई त्रिगुणमा आधारित संरचना भनिन्छ। सृष्टिमा रहेका सबै जीवित र निर्जीव, मूर्त र अमूर्त चीजहरू बाट त्रिगुणमा आधारित उत्सर्जित









ऊर्जाको कम्पनहरूले तिनीहरूको व्यवहारलाई निर्धारण गर्दछ।

वैदिक दर्शन अनुसार जन्म जात रूपमा व्यक्तिमा छ - पक्षको गुण रहेको हुन्छ। इच्छा (Will), नियत (Intent), भावना / करुणा (Emotion / Compassion), चेतना (Cognition), दृढता (Conation / Determination) र अन्तर सम्बन्ध (Relation)।

रङ्गका गुणहरूले जीवनका शारीरिक, मानसिक रभावनात्मक पक्षहरू लाई प्रभाव पार्ने ठानिन्छ। आयुर्वेद र साङ्ख्य सिद्धान्तले रङहरूलाई सत्त्व, रज, र तम गरी तीन गुणहरूमा विभक्त गर्दछ। संसारको हरेक चिज त्रिगुण निर्मित छ। त्रिगुण मध्ये जुनगुण त्यसमा हाबी हुन्छ त्यो चिज, त्यही गुणमा हामीले









पाउने गर्दछौ। उदाहरणको लागि फरक फरक रङ्गमा हुने तीन गुणहरू मध्ये जुन गुण त्यसमा हाबी हुन्छ, हामीले त्यही स्वरूपमा त्यसलाई देख्ने, अवलोकन गर्नेगर्दछौ।

जस्तै सत्त्व गुण शुद्धता, सामञ्जस्य र सन्तुलन प्रेमी हुन्छ। सत्त्व गुण सम्बन्धित रङहरू सेतो, हल्का नीलो, पहेँलो, र हरियो हुन्। यिनीहरू शान्ति, स्पष्टता, शान्त, सन्तुलन, शुद्धता, ज्ञान प्राप्ति मैत्री ऊर्जा प्रदायक हुन्छन्। सेतोले शुद्धता र शान्तिलाई प्रतिनिधित्व गर्दछ। हल्का नीलो शान्त र आत्मा विभोरको अवस्थालाई प्रतिनिधित्व गर्दछ। पहेँलो ले ज्ञान र बौद्धिकताको प्रतिनिधित्व गर्दछ। हरियोले सामञ्जस्य र सन्तुलनको आभास दिन्छ।










रज गुणमा क्रियाशीलता, उत्साह र नियमित कर्ममा लिन हुने गुण पर्दछ। नियमित परिचालन, परिवर्तनर निरन्तर विकाशको चक्र राज गुणको देन हो। राज गुणी रङहरू रातो, सुन्तला र चम्किलो पहेँलो हुन्। किनकि यी रङ्गहरू ऊर्जाशीलता, कर्मशीलता, उत्साह, बेचैनी रशौक निर्माण मैत्री विशेषताहरू निर्माण गर्न सहयोगी हुने गर्दछन्। रातोको ऊर्जा र उत्साह निर्माण गर्ने गुण हुन्छ। सुन्तलाले चासो, उत्साह र कर्मशील जीवन्तता दिन सहयोगी बन्छ। चम्किलो पहेँलो उत्साह र उत्प्रेरणा मैत्री हुन्छ।

तम गुण अन्तर्गत आलस्य, अन्धकार र अज्ञानताको अधिकता हुन्छ। तम गुणी रङहरू कालो, गाढा खैरो, खरानी, गाढा नीलोआदि हुन्। यिनीहरू













अन्धकार, मन्दता, आलस्य, अज्ञानता, भ्रम जस्ता विशेषताहरू थप्ने सहयोगी बन्दछन्। कालो अन्धकार रअज्ञानता मैत्री हुन्छ। गाढा खैरो मन्दता, सुस्तता र आलस्य युक्त हुन्छ। खरानी रङ्गले स्पष्टताको अभावपैदा गर्दछ। गाढा नीलो भ्रम र भारीपन मैत्रीहुने गर्दछ। कुनै पनि जीर्ण संरचनाको पुनर्निर्माणको खातिर हुने ध्वंस वा विनाश समेत तम गुण चरित्र हो।

सत गुण खाली स्थान जस्तो रहने स्थान उपलब्ध गराउने निर्गुण, निराकार प्रवृत्तिको हुन्छ। हावा जस्तो स्वतन्त्र तथा पानी जस्तो तरल गुण रज गुणको चरित्र हो। तम गुण ठोस पदार्थ जस्तो स्थिर र कुनै बस्तुलाई अँठ्याएर राख्ने क्षमता युक्त हुन्छ।

आफ्नो अडानमा अत्यन्त कठोर रहेर रहने तम गुणी











स्वभाव कालान्तरमा आफ्नै आन्तरिक ऊर्जा क्षय भएर गल्ने र नष्टहुने क्रिया बाट गुज्रन जाने हुँदा त्यहाँ ध्वंस वा विनाश तथा नयाँ निर्माणको सु-अवसर उपलब्ध बन्दछ।

आयुर्वेद र सम्बन्धित वैदिक दर्शनहरूको सिद्धान्तहरू अनुरूप आफ्नो गुण अनुरूप रङहरूले व्यक्तिको मुड, भावना र मानसिक अवस्थाहरूमा प्रभाव पार्ने गर्दछ।

रज घटक छोटो तरङ्ग र अधिक एम्प्लिच्युडको हुने र सबै भन्दा सक्रिय रहने गर्दछ। सत्त्व घटक तरङ्ग लामो र एम्प्लिच्युड कम हुने शान्त प्रकृतिकोहुने गर्दछ।

तम घटकको तरङ्ग अव्यवस्थित र विकृत रूपको













तथा एम्प्लिच्युड समेत अनियमितर तुलनात्मक रूपमा कम तर विचलित प्रकृतिको देखिन्छ।

# गीतामा सत्व, रज र तम गुण

श्रीमद्भगवद्गीतामा भगवान् कृष्णले अर्जुनलाई भन्नु हुन्छकि हाम्रो मनमा तीन मुख्य गुणहरू हुन्छन्। शुद्धता (सत्व), क्रियाशीलता (रजस), र स्थिरतावा निष्क्रियता (तमस)। यी गुणहरूले हाम्रो शाश्वत आत्मा लाई हाम्रो शारीरिक शरीरसँग जोड्ने काम गर्दछ। सत्वले शान्ति, उज्यालो र धर्म निष्ठाको प्रतिनिधित्व गर्दछ। यो प्रकृतिको गुणहो जसले हामीलाई खुसी हुन र नयाँ कुरा सिक्ने इच्छा बढाउँछ।





रजसले शक्तिको प्रतिनिधित्व गर्दछ। जुन इच्छा र आशक्तिबाट उत्पन्न हुन्छ। त्यसले हामीलाई जीवनका विभिन्न पक्षहरू संग आशक्ति विकास गर्न प्रेरित गर्दछ। हाम्रा क्रियाकलाप बाट सदैव चाहेको फल पुरस्कारको रूपमा प्राप्त होस् भन्ने किसिमको नियत विकास गर्ने गर्दछ । जसले गर्दा हामी हाम्रो हरेक कर्म वाट हामीले चाहेअनुरूपको फल प्राप्तिमा अशक्त हुने बनी दिन्छौ। हामीमा त्यसैको एडिकसनको विकास हुन्छ।

तमस मायावी भ्रम पैदा गर्न र परिवर्तन सँग प्रतिरोध गर्ने बानीको विकास गर्ने भूमिका हुन्छ। आफ्नो नियमितको बानी वा दृष्टिकोण आदि परिवर्तन नगर्ने नियत बाट तम गुणको उत्पन्न हुन्छ। जसले हामीमा अज्ञानता, आलस्य र अधिक सुत्ने









बानीको विकास गरिदिन्छ।

सत्व, रज र तम गुणहरूका विशेष प्रभावहरू हुने गर्दछ। सत्वले आनन्द ल्याउँछ। रजसले क्रिया वा कर्म गर्न प्रेरित गर्दछ। तमले हाम्रो बुझाइ लाई अस्पष्ट गरिदिन्छ। अज्ञानताको पक्ष अधिक पारिदिन्छ। तमले हामीलाई आफूसँग भएको अज्ञात लाई समेत चिन्न र त्यसलाई चिर्न वा सम्बोधन गर्नबाट समेत रोक्छ।

सत्व, रज र तम प्रत्येक गुण अर्को माथि हर समय हाबी हुन खोज्ने प्रकृति हुन्छ। सत्वले हामीमा निहित रजस र तमस गुण लाई दबाउँदै आफ्नो अधिकता निर्माण गर्दै सन्तुलन र स्पष्टता कायम गर्ने कोसिस गर्दछ। रजसले सत्व र तमस लाई पराजित गर्दै ऊर्जार गतिशीलता प्रदान गर्ने चरित्र देखाउने











गर्दछ। तमसले सत्व र रजलाई पराजित गर्दै अँध्यारो वा अज्ञानता बढाउने र हरेक परिवर्तन तथा प्रगतिको विरोधमा सक्रिय रहने नियत विकास गर्नेगुण बोक्दछ।

अर्जुन कृष्णका यी अवधारणाहरू प्रति जिज्ञासु भएर सोध्छन् हे कृष्ण जी यी तीन गुणहरू लाई सफलता पूर्वक नियन्त्रणमा लिएर पार गर्ने वा मुक्त बनेका व्यक्तिहरूका लक्षण र व्यवहार कस्तो हुन्छ र उनीहरूले कसरी त्यस्तो अवस्था प्राप्तगर्न सक्दछन् ? उक्त प्रश्नमा कृष्णको प्रतिक्रिया अत्यन्त गहिरो आउँछ। उहाँ त्यस्ता व्यक्तिहरू अजिबको गुण युक्त हुने वर्णन गर्नुहुन्छ।

जसले ज्ञान, क्रिया (कर्म) वा भ्रमको उपस्थिति प्रति घृणा गर्दैनन्। नत तिनीहरूको अनुपस्थित









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



अवस्थामा तिनीहरूको उपलब्धता रहोस् भन्ने इच्छा नै गर्दछन्। उनीहरू जीवनलाई निष्पक्ष रूपमा हेर्ने गर्दछन्। उनीहरू सत्व होस् वा रज वा तम सबै गुणहरूको उतार चढावको क्रिया बाट आफूलाई अप्रभावित राख्न सक्दछन्।

उनीहरू आफ्नो विश्वासमा दृढ रहन्छन्। केवल दैवी मार्गदर्शनमाअर्थात् प्रकृतिको नियमको सिद्धान्तले दिने नियति स्विकारेर त्यसैमा पूर्ण निर्भर रहन्छन्। दुःख र खुसी दुवै प्रति समभाव राख्दै आफूलाई अप्रभावित राख्दछन्। दुवै लाई एकै किसिमले स्विकार्दछन्। उदासीन रहँदैनन् । उनीहरूको लागि साधारण माटो, ढुङ्गा र मूल्यवान सुन सबै समान महत्त्व र मूल्यको अनुभूति हुन्छ। उनीहरू मित्र र शत्रु दुवैलाई समान व्यवहार गर्छन्। प्रशंसा वा





॥ श्री गणेशाय नमः ॥



निन्दा प्राप्तिमा समान व्यवहार गर्दछन्। सम्मान वा अपमानबाट प्रभावित नहुने गर्दछन्। उनीहरूको मन दृढ रहन्छ।

व्यक्तिगत कर्तव्य बोधको महसुस गरी त्याग भावले कर्म गर्दछन्। यसरी उनीहरूले जीवित रहँदै सत्व, रज र तम सबै गुणहरू लाई पार गरेर मुक्त बनी आनन्दित जीवन यापन गर्दछन्।

श्रीमद्भगवद्गीताले समग्रतामा मानवमा अन्तर्निहित तीन गुणहरूके के हुन्, तिनीहरूको चरित्र कस्तो हुन्छ, तिनीहरूले मानव कर्ममा कसरी प्रभावित गर्न सक्दछन् आदि बारे चर्चा गर्दै तीन गुणहरूको नियन्त्रणबाट कसरी स्वतन्त्रता प्राप्त गरी जीवनमा सन्तुलनको अवस्था ल्याउन सकिन्छ भन्ने बारे बोलिएको छ। भगवान् श्रीकृष्णको अवधारणा






अनुसार मानिस कसरी आनन्दित बन्न सक्दछ र मुक्तहुन्छ भन्ने बारेको संक्षिप्त चर्चा भएको छ।

वेद र विज्ञानमा सात्विक, राजसिक र तामसिक गुण

हामीले यो संसारमा जे जे कुराहरू आफ्नो इन्द्रियहरू द्वारासुन्न, देख्न, स्वाद पाउन र गन्ध पाउन वा महसुस गर्न सक्दछौ त्यसलाई नै शास्त्रमा गुण भनिएको छ। जुन बुझ्नको लागि सहज होस् भनी तिन प्रकारमा विभक्त गर्ने गरिन्छ। शुद्धता (Purity), ज्योति (Light), समग्र सन्तुलन (Harmony), बौद्धिकता (Intelligence) जस्ता चेतनालाई परिष्कृत गर्ने गुणहरू लाई सत्त्व गुण अन्तर्गत राखिएको छ। कर्म (Activity), शौख (Passion) आदि रज गुणको र आफू जुन रूपमा छ त्यही रूपमा रहन चाहने नियति वा





इनर्सिया (Inertia &Ignorance) को पक्ष, अल्छी पन र स्थिरताको (Dullness) पक्षलाई तम गुणको पक्ष भनिएको छ।

चेतनाको स्तरमा एक मनो-भौतिक (A Subtle Psyco-Physical Thread) सूक्ष्म ऊर्जाको डोरोले एक व्यक्तिले आफ्नो भौतिक स्वरूपको अस्तित्वको महसुस गर्ने गर्दछ। त्यही मनो-भौतिक सूक्ष्म ऊर्जाको डोरो मार्फत नै नियमित परिवर्तन भई रहने सांसारिक यथार्थ लाई व्यक्तिले अनुभूति समेत गर्ने गर्दछ। एक सूक्ष्म ऊर्जा निर्मित अव्यक्त गुण जसमा कुनै मिसावट छैन (Pure & not-containminated) र त्यो सबै दोष (Sickness)आवृत्ति (Web & Frequency in difinite time) मुक्त रहन्छ त्यसले हामीलाई









आनन्द दिने गर्दछ। जहाँ आनन्द भनेको मनोरञ्जन, रोमाञ्च वा रोमान्स आदि भनिएको होइन। उक्त आनन्द प्रदायक अव्यक्त सूक्ष्म ऊर्जाले हाम्रो आत्मालाई सुखको अनुभूति र आत्मा ज्ञान संग जोडेर राख्ने (Attachment) कार्य गर्दछ। उक्त अव्यक्त सूक्ष्म ऊर्जालाई सत्त्व गुण भनिएको छ।

हरेक कण कम्पनको अवस्थामा रहने हुँदा क्वान्टम मेकानिक्समा परम्परागत भौतिक विज्ञानको विपरीत कणको स्थान र ऊर्जा एकै साथ मापन गर्न सकिँदैन। त्यस्तै क्वान्टम मेकानिक्सको बुझाइमा परम्परागत भौतिक विज्ञानले बताउने जस्तो ऊर्जा कुनै पनि वस्तुबाट बनेको समेत हुँदैन। ऊर्जा त एक प्रणालीको सम्पत्तिको रूपमा रहेको हुन्छ।

जस्तै एक अणुको इलेक्ट्रोन जस्ता कणको










काइनेटिक ईनर्जी (गतिकोऊर्जा) र पोटेनसियल ईनर्जी (सम्भावित ऊर्जा) गरी दुई मुख्य ऊर्जाका घटकहरूको आपसी अन्तरक्रियाको परिणामले इलेकट्रोन नामक शक्ति प्रणालीको सम्पत्ति वा चरित्र गत ऊर्जा प्रणाली निर्माण हुन्छ।

इलेकट्रोन कम्पनको अवस्थामा रहदै गर्दा कणको गतिको कारण विकसित हुने ऊर्जा इलेकट्रोनको काइनेटिक ईनर्जी हो। जसका कारण इलेकट्रोन कणले तरङ्गको जस्तै गुणहरू प्रदर्शन गर्ने गर्दछ। कम्पनको अवस्थामा रहदै गर्दा तरङ्गको लहरले इलेकट्रोनको काइनेटिक ईनर्जी गुण निर्माण गरेको हुन्छ। जुन समुन्द्रको पानीको छालको प्रवाह जस्तो हुन्छ। इलेकट्रोनको काइनेटिक ईनर्जीको तरङ्गको छालको प्रवाह













अन्तरगत ऊर्जा केन्द्रित भएर प्रवाह रहेको काल्पनिक विन्दु भेटिने अधिक सम्भावना भएको स्थान वेवलेन्थ भनिने तरङ्गको फैलावटको "स्प्रेड" अर्थात लम्बाइले निर्धारण गर्ने गर्दछ। वेब लेन्थ साँघुरो भएको समयमा काइनेटिक ईनर्जी ऊर्जा केन्द्रित भएर प्रवाह रहेको काल्पनिक विन्दु अधिक सटीक रूपमा यकिन गर्न सकिने सम्भावना हुन्छ। वेब लेन्थ साँघुरो भएको समयमा काइनेटिक ईनर्जीको ऊर्जा समेत अत्यधिक हुने हुँदा काइनेटिक ईनर्जी ऊर्जा केन्द्रित भएर प्रवाह रहेको काल्पनिक विन्दु तुलनात्मक रूपमा पहिचान गर्न सहज समेत हुने गर्दछ।

काइनेटिक ईनर्जीका कारण तरङ्गको छालको रूपमा नियमित प्रवाहमा रहने इलेक्ट्रोनलाई आफ्नो











अणुको केन्द्रले आफू तर्फ केन्द्रित हुने गरी अविच्छिन्न रूपमा तानी राख्ने फोर्स फिल्डको प्रभावको कारण निश्चित परिधि भित्र चलायमान रहँदै गर्दा समग्र अस्तित्व सन्तुलित रहेको अणुको निर्माण गर्ने कार्यमा समेत सहकार्य गरी रहेको हुन्छ। अणुको फोर्स फिल्डको प्रभाव क्षेत्रभित्र रहँदा (जस्तै एटमको न्युक्लियसको इलेक्ट्रो - म्यागनेटिक फिल्डले आफ्नो इलेकट्रोनलाई आफ्नो नियन्त्रणको सीमा भित्र नियन्त्रणमा लिने तागत) इलेक्ट्रोनले अणुको फोर्सफिल्डको ऊर्जाको कारण प्राप्त गर्ने इनर्जी लाई पोटेनसियल ईनर्जी भनिन्छ। उक्त पोटेनसियल ईनर्जीको मात्रा र दायराको हद इलेक्ट्रोनमा फोर्स फिल्डको प्रभावको बलको प्रकृति र मात्राले निर्धारण गरिदिन्छ।













क्वान्टम मेकानिक्समा कणको "कुल ऊर्जा" कणको काइनेटिक ईनर्जी (गतिशील ऊर्जा) र पोटेनसियल ईनर्जीको (सम्भावित ऊर्जा - अवसरको सम्भावना) आपसी प्रभावहरू बिचको सन्तुलनले निर्धारण गर्ने विन्दुलाई जनाउने गर्दछ । उक्त सन्तुलनको विन्दुले तरङ्ग रुपी कण भेटिने अधिक सम्भावनाको स्थान कुन हुन्छ र त्यो स्थानमा त्यस कणले कस्तो व्यवहार देखाउने छ भन्ने कुराको निर्धारण गर्ने गर्दछ।

समुद्रमा आउने पानीको छाल संग तुलना गरेर यसलाई सरलीकृत रूपमा बुझ्न सकिन्छ। पानीको छालको तरङ्गले इलेकट्रोनको कणको प्रतिनिधित्व गर्न सक्छ। पानीको छाल नियमित चलायमान चिज रहेकोले क्वान्टम मेकानिक्समा कण भेटिने फिक्स स्थान निश्चितगर्नु सान्दर्भिक नहुने हुँदा











त्यसलाई तरङ्गको गतिविधि अर्थात् "वेब फङ्क्सन" भनी वर्णन गर्ने गरिन्छ। यथार्थमा वेब फङ्क्सन तरङ्गको उचाइ र लम्बाइको आधारमा गरिने वेबको आकार र व्यवहारको गणितीय लेखाजोखा हो।

श्रोडिङ्गरको समीकरणले उक्त तरङ्गले फरक फरक वातावरण बिच कसरी व्यवहार गर्दछ भनेर बुझ्न मद्दत गर्दछ। एटमको नजिक रहँदा र मलिकुल भित्र हुँदा तरङ्गको व्यवहार कस्तो हुनेछ भनेर बुझ्न श्रोडिङ्गरको समीकरणले (Schrödinger Equation) मद्दत गर्दछ।

पानीमा पर्ने गुरुत्वाकर्षण र हावाको चाप आदि जस्ता प्रभावले पानीमा तीव्र गतिमा छालको उत्पत्ति गर्न भूमिका खेल्दछ। समुन्द्रको गहिराई अनुरूप त्यसको पिँधको स्थिर भागले गतिशील हुन चाहने













पानीको झोक्का विपरीत दिशामा रोकेर पानीको छाल कति आग्लो र कुन गतिमा फैलिने भन्ने कुराको निर्धारण गरिदिन्छ। पानीको छालहरू कति ठुलो र लामो हुने भन्ने कुरा समुद्रमा आएको हावाको वेग र पानीको गहिराइले प्रभावित गर्ने गर्दछ। त्यसै गरी इलेकट्रोनको तरङ्गको स्वरूपलाई यसको चारै तिर फैलिएको न्युक्लियस को इनर्जी फिल्डको तागत र इलेकट्रोनको आफ्नो गतिशील ऊर्जाको तेजले प्रभावित गर्ने गर्दछ।

हरेक क्वान्टम पार्टिकलको सन्दर्भमा काइनेटिक इनर्जीले तरङ्ग कसरी फैलिएर चलायमान हुने भन्ने कुराको निश्चय गर्दछ। पोटेन्सियल इनर्जीले आफ्नो आन्तरिक इनर्सिया मार्फत बाह्य बलहरूको प्रभावलाई नियन्त्रणमा लिन भूमिका खेल्दछ। उक्त











दुई ऊर्जाहरूको आपसी प्रभाव बिच कायम हुन पुगेको रूपले क्वान्टम कणको "कुल ऊर्जा" को हद निश्चय गरिदिन्छ। जस अनुरूप तरङ्ग कहाँ कहाँ कसरी उठ्दछ र त्यसको वास्तविक व्यवहार कुन स्वरूपको हुने भन्ने कुरा निर्धारित हुन पुग्दछ।

एक यटममा त्यसका इलेकट्रोनहरू न्युक्लियसको प्रभाव क्षेत्रभित्र निश्चित ऊर्जाको लेबलमा आफ्नो विशिष्ट कक्ष वा सेलहरूमा चलायमान रहेर उक्त कक्ष ओगट्ने गर्दछ। इलेक्ट्रोन आफ्नो निर्धारित कक्ष बाट अन्य कक्षमा स्थानान्तरण हुनको लागि एउटा इनर्जी लेबल बाट अर्को इनर्जी लेबलमा उछिट्टिनु पर्ने हुन्छ।

त्यसको लागि त्यो इलेकट्रोनले निश्चित मात्रामा प्रकाश वा फोटोनको रूपमा ऊर्जाको कि त













अवशोषित कि उत्सर्जन गर्नु पर्ने हुन्छ। तिनै कारण हामीले नियोन साइनको ग्यास उत्सर्जित फोटोनहरूका कारण विशिष्ट रङ्गको प्रकाश देख्ने गर्दछौ। फायर वोर्कको समयमा समेत इलेक्ट्रोनहरु फरक फरक इनर्जी लेबलमा जम्प हुने परिस्थिति पैदा गरिने भएका कारण उत्सर्जन भएका फरक फरक रङ्गका फोटोनहरूका कारण फायर वर्क मनमोहक बन्ने गर्दछ।

कुनै बस्तुलाई जलाउने क्रममा प्राप्त शक्तिको कारण अणुका इलेकट्रोनहरूले ऊर्जा अवशोषित गरेर उत्तेजित बनी आफ्नो नियमितको सन्तुलित कम ऊर्जाको स्तर बाट माथिल्लो ऊर्जाको स्तरमा जान्छन्। माथिल्लो ऊर्जाको स्तरमा उत्तेजित भएका इलेकट्रोनहरूमा जलाउने क्रममा प्राप्त थप











उर्जाको कारण बढेको अधिक अस्थिरता बिच तिनीहरू त्यो भन्दा माथिको स्तरमा जानुपर्ने हुन्छ। यो अबस्थामा अणुको पोटेनसियल ऊर्जाको दायरा भन्दा बाहिर पुग्दा अणु नै असन्तुलित हुने हुँदा प्राय: इलेकट्रोनहरू अन्ततः आफ्नो नियमितको सन्तुलित कम ऊर्जाको मूल स्तरमा फर्कन्छन्। कम ऊर्जाको मूल स्तरमा फर्कने क्रममा तिनीहरू संग रहेको अतिरिक्त ऊर्जा फोटोनको रूपमा उत्सर्जन गर्नु अनिवार्य हुन्छ। जुन प्रकाशको किरण निर्मित गर्ने शक्तिको पोका हो। उक्त फोटोन नै सम्पूर्ण भौतिक संरचना निर्माण गर्ने इनर्जी वा शक्तिको रूपमा रहेकोले यसलाई भर्गो ज्योति आदि नाम वाट समेत ले पुकारिन्छ।

यसरी हरेक तत्वको काइनेटिक भनिने चलायमान













ऊर्जाले त्यसको तत्कालको कर्म सञ्चालन हुने गर्दछ। तर त्यसमा रहेको पोटेन्सियल भनिने अवसरको सम्भावनाले त्यसको भविष्य निर्धारण गर्दछ। जस्तै तपाइको हातमा भएको एउटा ओखरको बीज तत्कालीन खानाको रूपमा तपाइको खानाको एक अंश हुन सक्दछ। त्यही बीजलाई यदि रोपियो भने र त्यसले स्याहार सुसार पायो भने त्यो लामो समय जीवित रहने विशाल वृक्षको रूपमा विकास हुन सक्दछ। तत्कालीन खानाको रूपमा उपयोगमा आउने ओखरको बीज त्यसको काइनेटिक भनिने चलायमान ऊर्जाको उपयोग हो।

त्यही वीज भित्र लुकेको अस्तित्वमा रहेको ओखरको विशाल वृक्षको रूप भने त्यसको पोटेन्सियल भनिने अवसरको सम्भावना हो। हाम्रो दैनिक जीवनमा









हामीले ओखरको बीज भित्र लुकेको ओखरको विशाल वृक्षको रूप हाम्रा इन्द्रियहरूको पहिचानको क्षमता भित्रको रहेर पहिचान हुन सक्दैन। त्यसको लागि ओखरको वृक्षको जीवन चक्र र कृषिको ज्ञान जरुरी पर्दछ। हाम्रो चेतनाको मुख्य सूचनाको एजेन्ट हाम्रा इन्द्रियहरूले कार्य गर्ने क्षमता बाहिरको सत्यता प्राप्त गर्न हामीलाई अविद्या अर्थात् विज्ञान र विद्या अर्थात् आध्यात्मिक वैदिक ज्ञान जस्ता समग्र ज्ञानको जरुरी पर्दछ। जसलाई अध्यात्म र आत्मा ज्ञान समेत भन्ने गरिएको छ।

**कन्यादान**

उदाहरणका लागि हाम्रो समाजमा रहेको कुरीति कन्या दानलाई लिन सकिन्छ । वेदमा 'कन्यादान' शब्द कतै उल्लेख समेत भएको भेटिँदैन। कन्या,









पाणिग्रहण, पतिग्रहण र दान जस्ता शब्द बिलकुलै अलग प्रसंगमा वेदमा समावेश भएको देखिन्छ । ऋग्वेदमा गाई, घोडा र कपडाको दान गर्न सुझाइएको छ (ऋग्वेद ५–४२–८)। अथर्ववेदले सन्तान उत्पादन गर्न सक्ने क्षमता भएको गाईको बाच्छी, डुवानीमा सहयोगी हुन सक्ने बहर, वस्त्र र सुन आदि दान गर्ने वस्तुमा उल्लेख छ (अथर्ववेद ९–५–२९) ।

दानको अर्थ कुनै वस्तुमा रहेको आफ्नो स्वामित्व त्यागि दिनु भन्नेहुन्छ । वेदले कन्या न त कुनै दानको प्रयोजनमा उपयोग गर्न सकिने वस्तु नै मान्ने गर्छ। न विवाहमा मातापिताले आफ्नो पुत्रीलाई त्यागेका वा विवाहपश्चात् उससँग सम्बन्ध नै समाप्त गरेका हुन्छन्।








वेदपछि ब्रह्माण्ड ग्रन्थको रचना गरियो। ब्रह्माण्ड ग्रन्थ पछि उपनिषद् आयो। उपनिषद् पछि पुराण लेखियो। वेद, ब्रह्माण्ड ग्रन्थ र उपनिषद्मा समेत उल्लेख नभएको कन्यादान पुराण मध्येको अग्निपुराणमा कपटपूर्ण रूपमा कन्यादान सबैभन्दा उत्तम दान भनी उल्लेख गरियो । अग्निपुराण पछि आएका स्मृतिमा त कन्यादानलाई सामाजिक परम्परामा सूत्रबद्ध रूपमा स्थापित गर्ने नियतले अभियान नै छेडिएको देखिन्छ ।

कन्यादान गर्ने, दुलहीले श्रीमान्को जुठो खानुपर्ने, खुट्टा ढोग्नुपर्ने, खुट्टाको पानी खाने परम्परा वेदको बर्खिलापका अपव्याख्या समाजमा पुगेको छ। ऋग्वेदको ऋचामा पतिपत्नी सहयोद्धा र सहधर्मी रहने उल्लेख छ । श्रीमान् र श्रीमती एक रथका दुई









पांग्रा हुन् भन्ने ऋग्वेदको अर्ति सर्वत्र सुनिन्छ ।

कतिपय प्राचीन स्मृति कन्यादानको विरोधमा समेत लेखिएका छन्। प्राचीनकालमा गन्धर्व विवाह हुने गर्थ्यो। जसमा केटाकेटी आपसी सहमतिमा ब्रह्माण्डलाई साक्षी राखी विवाह गर्थे । स्वयम् भगवान् अर्जुनले सुभद्रासँग गन्धर्व विवाह गर्ने इच्छा प्रकट गर्नुभयो ।

बलरामले कन्यादान बिनाको विवाह विवाह मात्र सर्किंदैन भन्ने अड्डीकसे । भगवान् श्री कृष्णले पशुको जस्तो कन्याको दान कसैबाट अनुमोदन हुन सक्ने विषय हुन सक्दैन भनी बताए। गान्धर्व विवाह सम्पन्न बन्यो।

**देवता**






व्यक्ति वा समाजलाई कुनै पनि प्रकारले लाभ पु¥याउन सक्नेगुण भएको पदार्थ वा व्यक्तिलाई देवगुणी मान्छ वेद। जस्तै आफ्नो ज्ञान वा गुण वा सज्जनता समाज कल्याणमा लगाउने मानवलाईआदरपूर्वक सम्बोधन गरी देवताको उपाधि दिइन्छ । पृथ्वी, सूर्य, चन्द्र, जल, अग्नि, वायु, मातापिता, विविध सामग्री, बृहत् इकोलोजीसम्पूर्ण प्राणी वा वनस्पतिको ब्रमाण्डलाई लाभ कारी हुने गुणलाई देवगुणी वा देवता भनिएकोहो । देवता एक कल्याणकारी गुणधारी वाचक उपाधि हो ।

संस्कृतमा ‘कोटि’ शब्दको प्रसंग अनुसार दुई भिन्न अर्थ लाग्छ। पहिलो संख्यावाचक करोड र दोस्रो किसिम वा प्रकार।











वेदका अनुसार ब्रह्माण्डमा ३३ कोटिका मतलब थरीका (करोड होइन) जड् देवता र एक चैतन्य देवता हुने गर्छ । ३३ प्रकारका जड् देवताभनेर देवगुणधारी पदार्थ आठ बसु (जसमा सूर्य, चन्द्रमा, नक्षत्र, पृथ्वी, जल, अग्नि, वायु र आकाशपर्छ) ११ रुद्र (दस थरीका जीवाणु र सबै जीवाणु जीवित रहन जरुरी हुने जीवात्मा), १२ महिनावा आदित्य, एक यज्ञ अथवा इन्द्र अथवा पानी पर्ने चक्र र एक सामाजिक अभियन्तावा गुणवान् नेता वा प्रजापतिलाई जनाउँछ ।

चैतन्य देवता भनेर जीवित प्राणीमा हुने चेतनावा कन्ससनेसलाई जनाउँछ। चेतनशीलता वा चेतनालाई देवताको पनि देवता भनी महादेवको संज्ञा दिइन्छ।









**भगवान**

ब्रह्माण्डमा रहेका विशेष दिव्य गुण दिने मानिस वा प्रणाली वासंस्थालाई उसको कर्ममार्फत प्राप्त उत्कृष्टताका अनुसार भगवान् उपाधि दिने गरिन्छ। भग+वान् मिलेर बनेको शब्दमा भग भनेर ऐश्वर्य, धर्म, यश, श्री, ज्ञान, र वैराग्य जस्ता छ विधा मध्ये कुनै एक वा सोभन्दा बढी विधा भन्ने हुन्छ । वान् को अर्थ ज्ञान प्राप्त भएको प्रणाली वा संस्था वा व्यक्ति हो ।

वैदिक ज्ञानमा उत्कृष्टता वा सिद्धता प्राप्तिलाई ईश्वरको प्राप्ति मानिएको छ । उदाहरणका लागि भागवत गीतामा परमेश्वर प्राप्त गने सरल तरिका भनेको आफ्ना सबै काममा उत्कृष्टता ल्याउनू हो भनी यकिनका साथ उल्लेख छ । वेदले इंगित गर्न









खोजेको भगवान् भनेको प्राणी मात्रको निजी र सामाजिक उत्थानका लागि जरुरी हुने कुनै पनि विषयको उन्नति, ऐश्वर्य, महानता, यश, श्री, सद्गुण, नीति, धर्म, पुरुषार्थ, वैराग्यमध्ये कुनै एक वा धेरै विधामा सिद्धता प्राप्त गरी उत्कृष्टता प्राप्त गरेको व्यक्ति वा प्रणाली वा संस्था भन्ने बुझिन्छ।

**ईश्वर**

ईश्वर भनेको चेतना वा चैतन्य हो। कतिपय सन्दर्भवमा यसको अर्थ प्रकृति भन्ने बुझिन्छ। संसार उत्पन्न गर्ने, सञ्चालन गर्ने र विनाश गर्ने शक्तिलाई ईश्वर भनिएको हो। ब्रह्माण्ड र ज्ञानको मूल स्रोत चेतना लाई वेदले ईश्वरको संज्ञा दिएको हो।

पूर्वीय सभ्यतामा अध्यात्मवादी र भौतिकवादी दुवै




दर्शन चर्चित छ। अध्यात्मवादी दर्शनको सिद्धान्त गीतामा भेटिन्छ। वेदमा अध्यात्मवादी र भौतिकवादी दुवै दर्शन भेटिन्छ। वेदको भौतिकवादी व्यावहारिक मार्गदर्शक सिद्धान्त लाई वेदमा चर्चित विज्ञानको रूपमा हेर्नु पर्दछ।

## गुरु वारे वेद

गुरु वारेको वेदहरूमा पाइने अवधारणा हामीले सामान्य व्याख्याहरूमा सुन्ने गरेको भन्दा अलि फरक छ। गुरु-शिष्य सम्बन्धलाई वैदिक परम्परामा निकै सम्मानका साथ हेरिन्छ। यद्यपि "गुरु" शब्द मुख्य रूपमा उपनिषद, पुराण र स्मृतिहरूमा उल्लेख गरिएको छ, वैदिक साहित्यमा





पनि गुरु वा ऋषिहरू मार्ग दर्शकको भूमिकामा हुने उल्लेख भएको छ। कस्तो व्यक्ति मात्र गुरुको भूमिकाको लागि योग्यहुन्छ भन्ने प्रष्टता अथर्ववेदको मुण्डको उपनिषदको एक प्रसिद्ध वैदिक मन्त्रले गरिदिएको छ। जसबाट गुरु के हो र को हो भन्ने समेत प्रस्ट बन्दछ।

**मुण्डको उपनिषद् १.२.१२:**

**तद्विज्ञानार्थं सगुरुमेवाभिगच्छेत्**

**समित्पाणिः श्रोत्रियंब्रह्मनिष्ठम् ॥**

शब्दार्थ:

तद्विज्ञानार्थंस गुरुमेवाभिगच्छेत्

तद् (tad): त्यो (परम सत्य रुपी सर्वोच्चज्ञान)





विज्ञानार्थं (vijñānārtham): अविद्या (विज्ञान - ज्ञान, सीप, प्रविधि र व्यवहारिक उपयोगको ज्ञान) प्राप्तिको लागि

स (sa): साधक वा विद्यार्थी ( जरुरी हुने उत्सुकता, लगन, नियम र अनुशासन )

गुरुम् (gurum): विद्याको व्यवहारिक मार्ग निर्देशक (आफू सँगै सहभागी भएर आफै त्यसको उदाहरणको रूपमा प्रस्तुत भएर देखाउने आध्यात्मिक आत्मा ज्ञान समेतको ज्ञान दिन योग्य ओजिलो आकर्षक व्यक्तित्व)

एव (eva): विशेष रुपमै

अभिगच्छेत् (abhigacchet): आदर र निष्ठा सहित सङ्गत गर्न योग्य (अहिंसा र प्राकृतिक









मैत्री, नैतिक वान, लालच विहीन, निष्पक्ष र करुणाशील, अहङ्कार विहीन, दानी र ज्ञानी)

समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम्

समित्पाणिः (samit-pāṇiḥ): गुरुको रूपमा सेवा दिन योग्य (अविद्या र विद्याको प्रचुर ज्ञान र अनुभव रहेको मात्र नभएर श्रद्धा, विनम्रता, जिम्मेवारी र समर्पण लगायतका अनिवार्य गुणहरूले युक्त) र इच्छुक

श्रोत्रियम् (śrotriyam): वेद, विज्ञान र सम्बन्धित कला शास्त्रहरूमा गहिरो ज्ञान राखेको

ब्रह्मनिष्ठम् (brahma-niṣṭham): परम सत्यको अनुभूति प्राप्त गरीब्रह्ममा दृढ निष्ठा भएको (ब्रह्मलाई न केवल सिद्धान्तमा तर आफ्नो जीवनमा पनि




त्यसको पूर्ण रूपले अँगाले अनुभव प्राप्त गरी आफ्नो ध्यान सधैं परम सत्यको प्राप्तिमा केन्द्रित गर्ने गुणको।)

भावार्थ

गुरु भनेको यस्तो व्यक्ति हो, जसले विद्यार्थीलाई परम सत्यको मार्गमा लैजानअनिवार्य रहेको विज्ञानको ज्ञान जस्ता व्यवहारिक अविद्या र आत्मा ज्ञान जस्ता विद्याको मार्गदर्शन दिन्छन्। गुरु न केवल वेद, शास्त्र, विज्ञान र कलामा गहिरो ज्ञान राख्छ, तर आफैंले त्यो ज्ञानलाई जीवनमा अँगालेर, उदाहरण प्रस्तुत गर्दै विद्यार्थीलाई मार्गदर्शन गराउने गर्दछ। गुरुमा अज्ञान हटाउन र ज्ञान उपलब्ध गराउने असीमित क्षमता र इच्छा हुन्छ।





अविद्या र विद्याको प्रचुरज्ञान, अनुभव आदि रहेको मात्र नभएर श्रद्धा, विनम्रता, करुणाशील, अहङ्कार विहीन जिम्मेवारी बोध, समर्पण र निष्पक्ष सेवा भाव गुणहरूले युक्तगुरुको रूपमा सेवा दिन योग्य गुण रहेर सो जिम्मेवारीको लागि इच्छुक तथा आतुर गुण एक गुरुमा हुनुपर्ने अनिवार्य गुणहरू हुन्।आफ्नो ध्यान सधैं परम सत्यको प्राप्तिमा केन्द्रित गर्ने, परम सत्य ब्रह्ममा दृढ निष्ठा राख्ने, ब्रह्मलाई केवल सिद्धान्तमा मात्र सीमित रहेर व्याख्या गर्ने, प्रवचन दिने हैन कि आफ्नो जीवनमै त्यसको पूर्ण रूपले अँगालेर अनुभव प्राप्त गुणको सेवा कर्मको प्रतिफल नचाहने लालच विहीन व्यक्ति मात्रगुरु हुन योग्य हुन्छ।

साधकले त्यस्ता व्यक्ति संगमात्र आदर र निष्ठाका







साथ गुरुको दर्जा दिएर सङ्गत गर्नुपर्छ, जहाँ गुरु अहिंसा पूर्ण, नैतिक, दानी, करुणाशील, अहङ्कार विहीन हुन्छ। जीवनमा सत्यको अनुभव गराउने, भौतिक र आध्यात्मिक ज्ञानको ज्योति दिने, शिष्यको समर्पणपूर्ण भावनालाई दुरुपयोग नगर्ने ब्रह्ममा स्थापित मार्गदर्शक नै गुरु हुन लायक हुन्छ।

# देवी देवताको पूजा कति वैज्ञानिक

सम्पूर्ण रूपमा मानव दिमागलाई विज्ञानको सहारामा बुझ्ने विकल्प हालसम्म पनि तपाईं हामीलाई उपलब्ध नरहेकाले सोको लागि वैदिक













तथा आध्यात्मिक सहारा लिनुपर्ने बाध्यता आइलागेको छ । एक सामान्य मानवको दैनिक दिनचर्यामा रमाईरहँदा दिमाग फुरुङ्ङ बनिदिँदा जीवन नै धन्य बन्ने र त्यही दिमाग दुःखी बनिदिँदा आफ्नो मात्र हैन आफू सँगै रहेका आफ्ना प्रिय आफन्त समेतको दिनचर्या नारकीय बनि दिने समस्या पक्कै मेरो मात्र होइन होला। सोही सन्दर्भमा विज्ञान र वेदको सहारामा दिमाग भन्ने तन्तु वा तत्वको प्रकृति र कार्य शैलीबारे अध्ययन गर्न जरुरी बनेको छ ।

मानिसको दिमागको विभिन्न अवस्था रहन्छन्। पहिलो निद्रामा सपनीमा रहेको अवस्था। कुनै एक केही समयको निद्रा जसमा आफूले चाहेको सात घुम्ती पारिकी आफ्नी सपनाकी राजकुमारी





ऋतुकलासँग भेट्दा बिहानीको अनुभूति रंगीन बन्छ। देख्यो कि घृणाभाव जाग्ने पल्ला घरकी सुनीति देख्दा शरीर भरका रौँ नै जिरिंङ बनिदिन्छ।

दोस्रो, छ सपनी नदेखेको निद्राको अवस्था। जसलाई सुषुप्त अवस्था भन्ने गरिन्छ । त्यो समयमा न त ऋतु नै झुल्किन्छिन् न सुनीति कै सामना गर्नुपर्छ। बिहान उठ्दा भने मजाले निद्रा पुगेको महसुस हुन्छ। आज त रातभर मज्जाले निदाइयो, सपना पनि देखिएन भन्ने अनुभूतिको समेत स्मरण रहन्छ ।

तेस्रो अवस्था छ जाग्रत वा सामान्य दैनिकीको ब्युँझिएको समयको अवस्था। ननिदाएको वा ब्युँझिएको अवस्थालाई उक्त जीवनको मूल अवस्था भनिन्छ। ब्युँझिएको समय अन्तर्गत जति समय





आफन्त भनिएकी ऋतु जस्ता आफ्नै लाग्ने व्यक्ति वा परिवेशसँग बित्छ, त्यो जिन्दगी बन्छ । जति समय सुनीतिर आफूले असहजता वा आनन्द महसुस गर्न नसक्ने समय वा परिवेश झेल्नुपर्छ, त्यो समय उमेर अन्तर्गतको बितेको समयमा जोडिन्छ।

माथि फालिएको एउटा भकुन्डो अलिकति माथि पुगेपछि फेरि तल झर्दा माथि गएको र तल झरेको हामी सजिलै महसुस गर्छौं । दिमागको जाग्रत, सुषुप्त र सपनीको तिनै अवस्थाहरू माथि गएको र तल झरेको बल जस्तै हामी सजिलै महसुस गर्छौं । तर बीचको भकुन्डोले आफ्नो दिशा परिवर्तन गर्दाको पूर्ण रोकिएको अवस्थाको भने सहज महसुस हुँदैन। जसबारे हामीलाई अर्ध जानकारी हुने गर्छ । माथि जाँदै गरेको भकुन्डो तल फर्कने







क्रममा एउटा बिन्दुमा टक्क अडिएर मात्र आफ्नो दिशा परिवर्तन गरी तल फर्कन सम्भव बनेको हुन्छ। उक्त अवस्था र सिद्धान्तको बुद्धिमत्तापूर्वक उपयोग बाट हावामा नतैरिने जहाजको उडान सम्भव बनेको छ।

मानिसको दिमाग एक अवस्थाबाट अर्को अवस्थामा प्रवेश गर्दै गर्दा समेत बीचमा कुनै अवस्थाबाट गुज्रन जरुरी पर्छ । उक्त अवस्था अर्धचेतनाको अवस्था हो। जाग्रतबाट सुषुप्त, सुषुप्तबाट सपनी, सपनीबाट जागृत अथवा सुषुप्तबाट जागृत आदिको बीचमा दिमागको अवस्था बदलिँदै गर्दा मस्तिष्क अर्धचेतनाको अवस्थाबाट गुज्रन अनिवार्य हुन्छ। अर्धचेतनको समयमा मस्तिष्कमा आत्म सचेतता रहँदैन । न त मस्तिष्कले बाहिर बाट प्राप्त













सूचनाप्रति कुनै प्रतिक्रिया नै दिँदै गरेको हुन्छ । इन्द्रियहरू मार्फत प्राप्त सबै सूचनामा पूर्णतया प्रतिक्रियात्मक विहीन बनिरहेको हुन्छ। कुनै निश्चित अवस्थाको अर्धचेतनमा रहँदै गर्दा भने जे कुराले दिमाग अर्धचेतन अवस्थामा पुगेको हुन्छ, मस्तिष्कले त्यसैको अनुसरण गरिरहेको हुन्छ ।

अर्धचेतन अवस्था चेतनाको एक अत्यन्त महत्वपूर्ण तर परिवर्तित रूप हो। अर्धचेतन अवस्थामा व्यक्ति न त पूर्ण जागृत रहन्छ न त पूर्ण निद्रामा । दिमागको ट्रान्सस्टेट भनिने अर्धचेतन अवस्थामा हाम्रो दिमाग सचेतन र अवचेतन अवस्था बीचमा फसेको हुन्छ। संक्षेपमा ट्रान्सस्टेटमा मानिस न त पूरा जाग्रत न त पूरा सपनाको अवस्थामा रहन्छ । जोनिङ–आउट भनिने ट्रान्सस्टेटलाई कहिले काहीं









दिवा–सपना मतलब डे–ड्रिमिङ पनि भन्ने गरेको भेटिन्छ । मानिसमा मनोवैज्ञानिक तथा आध्यात्मिक प्रकृतिको मनोआध्यात्मिक प्राकृतिक उपचारमा, योग तथा मेडिटेसनमा सेमी–ट्रान्सस्टेट वा ट्रान्सस्टेटमा परिवर्तित चेतनाको अत्यधिक उपयोग गरिन्छ ।

अनुभवहरूले बताए अनुरूप मानिसको भित्री रूपान्तरण गर्ने कार्यमा उसभित्र पैदा हुने आलोचनात्मक सोचले अत्यन्त हस्तक्षेपकारी भूमिका खेली अवरोध पु¥याउने गर्छ। मस्तिष्क ट्रान्सस्टेटमा रहँदा आलोचनात्मक सोच पैदा गर्ने दिमाग बाइपास हुनेगर्छ। ट्रान्सस्टेटमा गरिने भित्री रूपान्तरणको प्रयासमा आलोचनात्मक सोचको अवरोध नरहने हुँदा अचेतन दिमागसँग सिधा संवाद









सम्भव बन्छ । अचेतन दिमागसँगको सिधा संवादले भित्री रूपान्तरणमा जरुरी हुने सकारात्मक सोच र विश्वास पैदा गरिदिन्छ। सोच र मान्यतामा आएको सकारात्मकताले आलोचनात्मक सोच हराउने हुँदा भित्री रूपान्तरणलाई पूर्ण गराउन जरुरी हुने पूर्वाधारको विकास गरिदिन्छ।

तर्क संगत दिमाग (Rational mind) एक आलोचनात्मक सोच पैदा गर्ने दिमाग हो। अनकन्सियस ब्रेनको (Unconscious Mind) अंश अचेतन दिमाग (Subconscious mind) तर्क संगत रहेर नभई भोगेको अनुभवका आधारमा आफ्नो मान्यता विकास गर्छ। तर्क संगत दिमाग (Rational mind) को दायित्व तर्क संगत रूपमा निश्चयमा नपुगी जारी गरिएको दिमागको






निर्देशनलाई रोक्नु नै हो। दुर्भाग्यवश मानिसमा मनभित्र गडेर बसेको पीडा, दर्द, मनोरोग र समाधान नगरिएका आघातका अधिकांश चोट मस्तिष्कको अनकन्सियस ब्रेनको भागमा गाडिएर बस्ने गर्छ। मौका पर्नासाथ बारम्बार बल्झिने गर्छ ।

एउटा बिरुवाको बीज जस्तै अचेतन दिमागमा बिउका रूपमा गढेर रहेको सबै डर, आघात, पीडा, ईर्ष्या वा बदलाको भावना चेतन दिमाग कारण वश कमजोर बन्न पुग्दा अंकुरित हुने, फस्टाउने र झाँगिने मौका पाउँछ ।अन्ततः बाहिर छताछुल्ल भएर पोखिन्छ ।

मानिसमा 'म' वा 'आफू' का नाममा कायम हुने आफ्नो पहिचानरूपी अहंकारको मुख्य भूमिका स्वाभाविकरूपमा उसलाई कथित खतराहरूबाट











जोगाउनु हो। आफ्नो तत्कालीन भौतिक सुरक्षा र भविष्यको सुरक्षाको प्रत्याभूति दिलाउनु हो । म, आफू जस्ता अहंकारको जिद्दी पूर्वक बचाउ गर्ने मानिसमा आफू स्वयम्, आफ्नो परिवार, आफन्त र समाजका लागि समेत विषाक्त भूमिका खेल्ने आनी बानीको निर्माण हुने गर्छ ।

आफूमा अर्कोप्रति विकास भएको नकारात्मक भावनाहरू प्रकट गर्न नसक्ने, दिमागमै गुम्स्याएर राख्ने बानीले मनभित्र गहिरो उदासी, क्रोध वा निराशा, प्रतिस्पर्धाको, बदलाको भावना आदि पैदा गरिदिन्छ। लामो समय मन भित्रै पालेर राखेको त्यस्ता असन्तुष्टि र दर्दको हद एक दिन सीमापार हुने र बेलुन फुटे जस्तो सँगालिनै नसक्ने गरी बाहिर निस्कन्छ। विकसित परिस्थितिले मानिसमा आफ्नो









व्यक्तिगत, पारिवारिक, सामाजिक तथा मनोवैज्ञानिक सबल सम्बन्धहरू नराम्ररी टुट्ने स्थिति पैदा गरिदिन्छ। उसलाई मनोवैज्ञानिक उपचारको जरुरत हुन सक्छ। साथै मानसिक, आध्यात्मिक वा प्राकृतिक उपचारको सहायता खोज्नुपर्ने प्रबल सम्भावना बन्न सक्दछ।

जिद्दीपूर्वक विकास हुने अहंकार एक जैविक र आध्यात्मिक उपकरण हो । यो उपकरणले व्यक्तिमा म फरक किसिमको विशेष व्यक्ति हुँ भन्ने जस्ता विचार विकास गराउँछ। भलै आज लुते कुकुर बनें हुँला, हिजो त म भोटे कुकुर थिए भन्ने अहम् हाली दिन्छ। मेरो असली पहिचान त्यही भोटे हो। मैले त्यही पहिचान अनुरूपको सम्मान पाउनु पर्छ। मेरो जीवन अन्यको भन्दा सानदार रूपमा चल्नुपर्छ भन्ने









सोचको भूतमा सवार गराउँछ।

वास्तविकता भन्दा विपरीतको अहंकार ग्रस्त अनुभूतिमा हामी केही चिज स्वीकार गर्छौं भने अन्य चिजलाई अस्वीकार गर्छौं । केही मानिसलाई माया गर्छौं, अन्यलाई घृणा गर्छौं। जीवनलाई विनासर्त स्विकार्नुको सट्टा आफ्नो निजी विचार, भावना, विश्वास आदिको भरमा स्वीकार्य र अस्वीकार्य गरी विभाजन गरि दिन्छौं। आफ्नै जीवनका आफ्नै कतिपय कार्य वा कार्य प्रगतिमा आफैंलाई पनि इन्कार गर्न थाल्छौं।

आफ्नै मनमा उब्जेका चिन्तन, मनोभावना, चेतना, अनुभव, विश्वास आदिलाई समेत खराब, अस्वीकार्य वा गलत करार गर्दै दमन गर्ने, बेवास्ता गर्ने, स्वीकार नगर्ने, अरू बाट लुकाउने स्थितिमा






पुग्छौं। आफ्नै अन्तरात्माको विश्वासको दमनको परिणाममा हामी आफ्नो काल्पनिक जीवन जिउन सुरु गर्छौं । जुन अधिक रिस, कुण्ठा, जलन र विकृतिले भरिएको आडम्बरे जीवनशैलीका रूपमा रहेको हुन्छ ।

अहंकारले जीवनलाई डुवालिटी वा वास्तविकता भन्दा अलि पर पुऱ्याएर बुझिदिने गर्छ। प्रेम–घृणा, राम्रो–खराब, सही–गलत, पवित्र–पापी जस्ता परस्पर विरोधी भागमा जीवनलाई विभक्त गरेर महसुस गरिदिन्छ। आफू अन्य भन्दा बिलकुल अलग र पृथक् हुँ भन्ने विश्वासमा अत्यन्त कष्टकर एकल काटे जीवन रोज्न पुग्छ। डुवालिस्टिक इगोको परिणामले सदैव आफूले आफैं माथि गरिने दमन, अन्याय, घृणा र निन्दायुक्त एक्लोपन निम्त्याउने











हुँदा हामी अनिवार्य रूपमा कष्ट भोग्न बाध्य हुन्छौं।

डुवालिस्टिक इगो वा अहंकारको उत्पादनका रूपमा मानिसलाई उदासीनता, चिन्ता, मानसिक रोग, हत्या, घृणा, लोभ, गरिबी, युद्ध र वातावरणीय विनाश आदि हातपर्ने गरेको छ । समग्रमा मानिसको आन्तरिक पीडा वा सफरिङको कारक तत्वका रूपमा अहंकारनै देखा पर्छ ।

हुन त आफैंलाई जिउँदै पटकपटक हत्या गरिदिने जिद्दीयुक्त अहंकारबाट छुटकारा पाउन उक्त अहंकारकै हत्या गरिदिनु सबैभन्दा खास्साको ओखती हुने थियो । तर, नत मानिस जिउँदै नमर्न सक्छ न यो अहंकार भन्ने जिनिसलाई सदैवका लागि मृत्यु तुल्य नै गराउन सम्भव छ । अहंकारलाई पहिचान गरी आफ्नो चेतनाको दायराभित्र ल्याएर









परिवर्तित चेतना युक्त नयाँ जीवनले अहंकारबाट छुटकारा लिन सक्छ। मूलतः सेमी–ट्रान्सस्टेट वा ट्रान्सस्टेटमा गरिने मनोवैज्ञानिक तथा आध्यात्मिक रूपान्तरण, मेडिटेसन र योग जस्ता परिवर्तित चेतनाको उपाय मनको भित्री रूपान्तरण लागि उपयोगी हुनेछ ।

ट्रान्सस्टेटमा तर्क संगत सचेत दिमागलाई बाइपास गरी अचेत दिमागसँग प्रत्यक्ष सम्पर्क गरी कुरा गर्नसकिने स्थित मनोवैज्ञानिक दृष्टिकोणबाट समेत तर्क संगत देखिन्छ । तर पनि विना अवरोध अचेत दिमागसँग कुरा गरेर कसरी अहंकारलाई चेतनाको दायराभित्र ल्याउन र त्यो हदको मनोवैज्ञानिक जटिलतामा पुगेको मानिसलाई सामान्य दिनचर्यामा फर्काउन सकिन्छ भन्ने भन्ने सम्बन्धकाअसंख्य









सिद्धान्त प्रतिपादन गरिएको भेटिन्छन् । जसमध्ये प्रसिद्ध मनोवैज्ञानिक कार्लजङको अवधारणा सत्यताको धेरै नजिक रहेको ठानिन्छ ।

मनोवैज्ञानिक कार्ल जङको अनुसार अचेतन दिमाग सामूहिक अचेतन वा कलेक्टिभ अनकन्सेन्ससको ठूलो दायराको सञ्जालसँग प्रत्यक्ष सम्पर्कमा रहने गर्छ। सामूहिक अचेतनलाई युनिभर्सल अथवा डिप माइन्ड समेत भन्ने गरिन्छ । पुरातन समयमा देवीदेवताको शक्ति भनेर चिनिने सामूहिक अचेतनता विश्वव्यापी गहिरो स्मृतिको ऊर्जा निर्मित प्राकृतिक आवरण हो। संसारमा अस्तित्वमा आएका सबै जीवनको अनुभूतिको ऊर्जा समावेश भएर उक्त प्राकृतिक आवरणको निर्माण भएको हुन्छ ।

नियमित सचेत दिमागको सम्पर्कमा रहेर जिद्दीयुक्त








अहंकार पक्डेर बसेको अचेत दिमागलाई ट्रान्सस्टेटमा पु¥याएर गरिने संवादले कलेक्टिभ अनकन्सेन्सस सँग को सम्पर्कमा पु¥याउँछ । अचेत दिमाग र कलेक्टिभ अनकन्सेन्सस बीच हुने सम्पर्कमा जिद्दीयुक्त अहंकार समेत कलेक्टिभ अनकन्सेन्सस तर्फ विलीन हुँदै जाने प्रक्रिया सुरु हुन्छ ।

ट्रान्स स्टेटको संवाद प्रक्रिया केही समय सुचारु राख्न सक्दा अचेत दिमागमा गढेर रहेको गहिरो उदासी, क्रोध वा निराशा, प्रतिस्पर्धा–बदलाको भावना आदि क्रमशः कलेक्टिभ अनकन्सेन्सस तर्फ फ्याँकिन पुग्छ । मतलब आफ्नो जिद्दीयुक्त अहंकार त्याग्न सहयोगी बन्छ। मस्तिष्ककोअनकन्सियस ब्रेनको भागमा भित्र बीजका रूपमा गढेर बसेको









पीडा, दर्द, मनोरोग र समाधान नगरिएका आघातका अधिकांश चोट सबै सामूहिक अचेतनको भण्डारमा थन्काइ दिए पछि मौकापर्न साथ बारम्बार बल्झिने बीजको अभावमा मानिस समस्यामुक्त बन्न सक्छ ।

परम्परागतरूपमा हुने हाम्रा देवी देवताको भाकल, पूजाआज आदिबाट हाम्रा पुर्खाले आफूलाई मनोरोग (भूत, प्रेत, मसान, पिचास, डर, चिन्ता आदि) बाट मुक्त पाएको महसुस हुनुमा परम्परागत कर्म काण्डी प्रक्रियामा अचेत दिमागलाई ट्रान्सस्टेटमा पु¥याएर गरिने परम्परागत हिप्नोटिजम नै कारक रहेको यकिन गर्न सकिन्छ। मानव चेतना (Individual Conciousness) लाई सार्वभौमिक चेतना (universal




consciousness) सँग संसर्ग हुने वातावरण मिलाएर गरिने आधुनिक उपचार प्रणालीको रूपमा हिप्नोसिसलाई लिन सकिन्छ जसमा व्यक्तिको मस्तिष्कको पहुँच चेतनाको गहिरो तह सम्म पुऱ्याएर परिवर्तन गर्ने विधिको अनुसरण गरिन्छ। हिप्नोसिस गर्ने धेरै तरिकाहरू छन्। पहिलो उदाहरणमा, धूम्रपान छोड्ने चाहनाले व्यक्ति हिप्नोसिसको लागि एक चिकित्सकलाई भेट्दछ भने चिकित्सकले सुरुमा उनलाई आराम गर्न र आँखा बन्द गर्न भन्छ। चिकित्सकले शान्त स्वरमा उसलाई गहिरो सास लिन र आफ्नो शरीरको प्रत्येक भागलाई क्रमशः आराम गर्न निर्देशन दिन्छ। व्यक्ति एकदमै शान्त अवस्थामा पुगिरहेको समयमा चिकित्सकले उसलाई यस्तो सुझाव दिन्छ कि सुर्ती





संग उसमा घृणा भाव जागृत हुन्छ। त्यो सल्लाह उसको मनमा यति गढेर रहन्छ कि जब उसमा धूम्रपान गर्ने इच्छा जागृत हुन्छ तेतीवेला उसलाई सुर्ती संग घृणा भाव जागृत हुन्छ। त्यसले बिस्तारै उसमा धूम्रपान प्रति अलगाव विकास हुन थाल्छ। त्यस किसिमको हिप्नोसिसले व्यक्तिलाई पुरानो बानी तोड्न मद्दत पुऱ्याउन सक्छ।

दोस्रो उदाहरणमा, जब एक व्यक्तिलाई तनाव कम गर्न मद्दत खोज्दै हिप्नोसिस लिन चाहन्छ तव चिकित्सकले व्यक्ति लाई शान्त ठाउँमा बसेर आँखा बन्द गर्न भन्छन्। व्यक्तिलाई आफू समुद्र किनारमा रहेको कल्पना गर्न लगाउँछन्। उसले त्यहाँको हावाको मिठास र पानीको शीतलता महसुस गर्छ। यो कल्पना गर्दै गर्दा व्यक्ति गहिरो विश्रामको



अवस्थामा पुग्छ। त्यसपछि चिकित्सकले सुझाव दिन्छ कि जब उनी व्यस्त जीवनमा फर्किन्छन्, तव उनी तनाव मुक्त रहन र ध्यानमा केन्द्रित रहन सक्षम हुने छन्। यसरी हिप्नोसिसले व्यक्तिलाई मानसिक शान्ति र आत्म-संयम हासिल गर्न मद्दत पुऱ्याउँछ।

मस्तिष्कमा फरक प्रकारका तरङ्गहरू उत्पादन हुँदै गर्दा त्यसको आफ्नै आवृत्ति र मानसिक अवस्थाहरू हुन्छ। गामा तरङ्गहरू (γ) को आवृत्ति ३० हर्ज भन्दा माथि हुन्छ। यो उच्च स्तरको मानसिक कार्य हुँदै गर्दाको अवस्था हो। बिटा तरङ्गहरू (β) को आवृत्ति १२-३० हर्ज हुन्छ। त्यति बेला सक्रिय सोच र ध्यानमा रहन्छ। अल्फा तरङ्गहरू (α) को आवृत्ति ८-१२ हर्ज (Hz) हुन्छ। यति बेला मस्तिष्क आराम र सजग अवस्थामा रहन्छ। थेटा तरङ्गहरू (θ) को








आवृत्ति ४-८ हर्ज हुन्छ। त्यो गहिरो विश्राम, रचनात्मकता र हल्का निद्रासँग सम्बन्धित हुन्छ। डेल्टा तरङ्गहरू (δ) को आवृत्ति ०.५- ४ हर्ज हुन्छ। जुन गहिरो निद्राको समयमा देखा पर्छ।

दिइने सल्लाह तर्फ व्यक्तिको लगाव विकास गरी दिइएको सुझाव सजिलै ग्रहण गर्ने मानसिक अवस्थामा व्यक्ति लाई पुऱ्याउने अनि मस्तिष्कको गहिरो विश्रामको अवस्था व्यक्तिको मनमा निश्चित सूचना गहिरो संग बस्ने गरी सुझाव हाली दिने विधि हिप्नोसिस हो। मस्तिष्क यस अवस्थामा ट्रान्स-अवस्थाहरूमा प्रवेश गरेको हुन्छ। व्यक्ति सामान्य विश्रामको अवस्था वाट गहिरो विश्रामको अवस्था सम्म पुग्दै गर्दा उसको मस्तिष्कको तरङ्गहरू (brainwaves) मा परिवर्तन भएका कारण






चेतनाको परिवर्तन भएको हुन्छ। उक्त प्रक्रियामा व्यक्तिको चेतनाको सामान्य अवस्था (beta waves) बाट अल्फा (γ: more than 30 Hz, β : 12-30 Hz and α : 8-12 Hz), थेटा (θ: 4-8 Hz) र कहिलेकाहीँ डेल्टा (δ: 0.5-4 Hz) तरङ्गहरूमा सम्म परिवर्तन हुन्छ। विशेष गरी थेटा तरङ्गहरू रचनात्मकता, अन्तर्ज्ञान दिने र गहिरो अचेतन सँग जोडिन पुग्दछ। हिप्नोटिक अवस्थामा जब व्यक्तिको चेतना रचनात्मकता, अन्तर्ज्ञान दिने र गहिरो अचेतन मन सँग जोडिन पुगेको मौका छोपी उसले जे परिवर्तन चाहेको हो त्यो नै गर्नु पर्ने सन्देश उसको अवचेतन वा अचेतन मनमा दर्ता गरिने कार्य गरिन्छ। जुन उसको अत्यन्त गहिरो विश्वासको रूपमा उसमा गाडेर बस्न सम्भव











हुन्छ।

सार्वभौमिक चेतनाको (Universal Consciousness) अवधारणा आध्यात्मिक, दार्शनिक, र पारलौकिक सन्दर्भमा आएकोले वैज्ञानिक रूपमा यसको मापन योग्य आवृत्ति यकिन हुन सकेको छैन। वैदिक आध्यात्मिक परम्पराहरू र आयुर्वेदिक चिकित्सा अभ्यासको अवधारणा अनुसार गहिरो ध्यान, अन्तर्ज्ञान र उच्च चेतनाका वेला सार्वभौमिक चेतना महसुस हुने भनिए बाट गामा तरङ्गहरू (γ: ३० हर्ज भन्दा माथि) वा थेटा तरङ्गहरू (θ: ४-८ हर्ज) रहँदा व्यक्तिको चेतना सार्वभौमिक चेतना संग जोडिने वैदिक अवधारणाको रहेको बुझिन्छ।

ॐ जपको आवृत्ति पृथ्वी सूर्यको वरिपरि घुम्ने





आवृत्तिको (कस्मिक ॐ) अनुरूप १३६.१ हर्ज मानिन्छ। कतिपय सन्दर्भमा जुन प्रकृतिका कम्पनहरूसँग मेल खाने ब्रह्माण्ड सँगको सामञ्जस्यपूर्ण आवृत्ति ४३२ हर्ज आवृत्ति लाई समेत ॐ जप सँग जोडेर हेरिन्छ।फरक फरक तरिका वाट हुने जपमा फरक फरक आवृत्तिहरू सम्भव हुन्छ। फरक-फरक दायरामा फरक आवृत्तिहरू क्रियाशील हुन्छन्। आ-आफ्ना फरक कार्यहरू पूरा गर्छन्। १३६.१ हर्ज, ४३२ हर्ज र थेटा तरङ्गहरू (४-८ हर्ज) बिचमा विश्राम, आध्यात्मिक सम्बन्ध र भावनात्मक सन्तुलनलाई प्रोत्साहित गर्ने समनजन्य पूर्ण सम्बन्ध पाइन्छ। त्यस्तै ३० हज माथिका गामा तरङ्गहरू धैरै उच्च आवृत्तिमा हुने भएता पनि ध्यान वा गहिरो ध्यानका क्रममा १३६.१ हर्ज, ४३२ हर्ज





संग मानसिक स्पष्टता लिन चेतनाको हद बढाउन सहकार्य गर्ने देखिन्छ। यसरी सामूहिक रूपमा सबै मिलेर मस्तिष्क-शरीरको चेतनाको विस्तार तथा भावनात्मक कल्याण र आपसी सन्तुलनमा भूमिका रहेको देखिन्छ।

सार्वभौमिक चेतना (Universal Consciousness) प्रकृतिमा अवस्थित एउटा साझा चेतनाको क्षेत्र हो, जसमा सबै प्राणीहरू आपसमा जोडिएका हुन्छन्। यो अवधारणा विभिन्न आध्यात्मिक वेदान्तका परम्पराहरूमा रहेको दर्शनहरू वाट आएको छ। मन्दिर हरूमा देव देवताहरूको पूजा गरेर आशिष माग्दा माथि उल्लेखित प्रकारकै मनोवैज्ञानिक सूचना दर्ता हुने र व्यक्तिको आचरणमा परिवर्तन गरी व्यक्तिले







आफूलाई सुधार गरी आफ्नो शरीरले नै आफ्नो उपचार गर्ने आयुर्वेदिक स्व-उपचार विधिमा भाग लिएको हुन्छ। हिप्नोसिस मार्फत हुने उपचारमा चेतनालाई बाइपास गरेर, अचेतन मनमा पहुँच पुऱ्याउन सक्छ र सार्वभौमिक चेतनासँग पनि जोडिन सक्छ। त्यसले व्यक्तिलाई अन्तर्ज्ञान बढाउन, गहिरो ज्ञान प्राप्त गर्न र चेतनाको बृहत् क्षेत्रमा एकताको अनुभूति गराउन सक्छ। अनि यसलाई उपचारको लागि उपयोग गरिन्छ। त्यही तरिका परम्परागत पूजा आजा मार्फत व्यक्तिले आफूलाई मनोवैज्ञानिक रूपमा सबल राख्ने तरिका हो।

आधुनिक मस्तिष्क विज्ञान र मनोविज्ञानका सिद्धान्तहरूले हिप्नोटिक अवस्थामा मस्तिष्कमा नयाँ













जानकारी, व्यवहार र विश्वासहरू ग्रहण गर्न थप सजिलो हुने विश्वास व्यक्त गरेको भेटिन्छ। हिप्नोसिसले गहिरो अचेतन मनलाई अधिक पहुँच योग्य बनाउँछ, जहाँ लामो समयसम्म भएका विश्वासहरू, डरहरू र स्मृतिहरू हुन्छन्। यसलाई वैदिक अनुभवमा सार्वभौमिक विचार र ऊर्जासँग समेत जोडेर हेरिन्छ। पूजा आजा गर्दा हुने जस्तै हिप्नोसिसले व्यक्तिगत अचेतन र सार्वभौमिक चेतन अवस्था बिच अन्तर सम्बद्ध कायम गर्ने चेतनाको पुलको रूपमा काम गर्दछ।

आफ्नो जरो किलो र चुरो ज्ञान नबुझेको नेपाली समाजले आफ्नो पुर्खाले आदि कालदेखि मान्दै आएको देवीदेवताको पूजा आराधना गरिने चलनलाई अवैज्ञानिक भन्दै अचेत दिमागलाई







ट्रान्सस्टेटमा पु¥याएर गरिने अन्य मनोवैज्ञानिक उपचारतर्फ लम्केको महसुस गर्न सकिन्छ । हाम्रा परम्परागत पूजा, आराधना, योग, भजन, किर्तन र मेडिटेसनले जे प्रतिफल दिन्छ, सैद्धान्तिक रूपमा र विधि तथा प्रक्रियामा समेत ठ्याक्कै त्यही नतिजा दिने हिप्नोसिस उपचारतर्फ संसार लम्केको छ ।

देवी देवताको पूजा आराधना मार्फत परम्परागत रूपमा हामीले आफ्नो अचेत दिमागलाई ट्रान्सस्टेटमा पु¥याएर आफैँले गरिने मनोवैज्ञानिक उपचारको नतिजा प्राप्त गर्न आज संसारभर विभिन्न उपाय अवलम्बन गरिएको यथार्थ माथिका तथ्यहरूले हामीलाई महसुस गर्न बाध्य गर्ने छ। हाल सम्म अवलम्बन गरिएका उक्त उपायमा एक बिन्दुमा नियन्त्रित भएर गरिने ध्यान, आत्म








सम्मोहन, सोमलता–गाँजा–भाङ–काँचो सुपारी जस्ता स्वास्थकर तर हेलुसिनेटिङ जडीबुटी सेवन पश्चात् सम्मोहन, प्राणायाम र कपाल भाँती जस्ता श्वासप्रश्वास प्रक्रिया, मन्त्र पूजा र तपस्या, संगीत–बिद्व र ध्वनिहरू, पेन्डुलमको आवाज र गतिमा ध्यान केन्द्रितगर्न ध्यानपूर्वक रेकर्ड गरिएको गतिशील दृश्य हेरी गरिने ध्यान, बास्नादार अगरबत्ती र जडीबुटी मार्फत गरिने सम्मोहन, धर्म कार्य र सामाजिक कार्य नाचआदिमा भाग लिएर प्राप्त गरिने शारीरिक र भावनात्मक सन्तुष्टि आदि पर्छन् ।

हाम्रा रैथाने प्रविधि र दर्शनमा आधारित रहेर विकसित बनेका उल्लिखित मनोवैज्ञानिक उपचारका उपायहरू आज संसारभर पुगेका मात्र हैनन्, तिनीहरूको माग एकाएक ह्वातै बढेकाले










अत्यन्त प्रख्यात समेत बनेका छन् ।

## सपना किन र कसरी

मस्तिष्कको विभिन्न कार्य सुचारु राख्न सुत्नु अनिवार्य हुन्छ । स्नायुका विभिन्न कोषिका (न्युरोन) एकापसमा सम्पर्कमा रहेर विभिन्न काम सम्पन्न गर्दैगर्दा त्यहाँ विभिन्न फोहोर उत्पन्न हुन्छन् । फोहोर समयमै थान्को लगाउन नसक्दा मस्तिष्कका लागि विषाक्त बन्छ । निदाएका बेला मस्तिष्कको सफाइ प्रक्रिया सम्पन्न हुने हुँदा त्यहाँ रहेको विषाक्त पदार्थ सफा हुन्छ । जसले गर्दा दिमाग र शरीर उल्लेखनीय रूपमा सक्रिय, सन्तुलित र जागरुक बन्न सम्भव देखिन्छ ।













सुतेको अवस्थामा जब मस्तिष्क आराम गरिरहेको हुन्छ त्यहाँ ग्लिमप्याथिक प्रणाली (Glymphatic system) नामक फोहोरसफा गर्ने चक्र सञ्चालन हुने गर्छ । मस्तिष्क र मेरुदण्डमा हुने सेरेब्रोस्पिनलफ्लुइड नामक तरल पदार्थ दिमागमा स्वतन्त्र रूपले बग्ने र मस्तिष्कको फोहर भनेर चिनिने बिटा–एमाइलोइड नामक हानिकारक प्रोटिनलाई दिमागबाट सफा गरी पखाल्छ । राम्रोसँग निद्रा नपर्दा बिटा–एमाइलोइड राम्ररी सफा हुन नसक्दा समयको अन्तरालमा जमेको लेउ बाक्लो हुँदै जाने र विभिन्न मनोवैज्ञानिक समस्या देखिने र अन्ततःअल्जाइमर जस्तो घातक रोग सम्म लग्न सक्ने सम्मको परिस्थिति पैदा गरिदिन्छ ।

सुत्नु मानिसलाई अरू कुन कुन कारणबाट अनिवार्य











छ भन्नेबारे वैज्ञानिक अनुसन्धान जारी रहँदै गर्दा मानिसलाई निद्रा कसरी पर्छ भन्नेबारे धेरै कुरा थाहा हुन सकेको छ । हरेक रात मानिसको दिमाग र निद्राको चक्र विभिन्न चरणमा सम्पन्न हुने गर्छ। हल्का निद्रा त्यसको पहिलो चरण हो, जुन प्रायः पाँच देखि १० मिनेट समयको रहन्छ। यदि तपाईं उक्त समयभित्र उठ्नुभयो भने तपाईंलाई आफू सुतेको छैन भन्ने महसुस हुन्छ। पहिलो स्टेजमा मस्तिष्कका तरंगहरू ढिला हुन्छन् । मुटुको धड्कनको दर घट्छ। सम्भवतः मुटुको मांसपेशीले केही आराम गरिरहेको हुन्छ। रक्तचाप पनि कम हुन्छ। सास फेर्ने गतिमा सुस्तता आउने र श्वासप्रश्वासको प्रकृति परिवर्तनहुने हुन्छ। शरीरको मांसपेशीले आराम गर्छ। निदाएको महसुस दिन्छ।













निदाउँदै गर्दा ७० प्रतिशतसम्म मानिसमा अनैच्छिक रूपमा मांसपेशी तन्कने क्रममा काम्ने वा ट्विच हुने गर्छ, जसलाई हाइपनिक जर्क भनिन्छ। मानिसमा अनैच्छिक मांसपेशी झड्कने वा हाइपनिक जर्क किन हुन्छ भन्ने हाल सम्म थाहा हुन सकेको छैन। अनुमान अनुसार कि त सुतेको समयमा झक-झकाउँदै गर्दा मांसपेशीको गतिको प्रकृति परिवर्तन गर्ने क्रममा नभए मष्तिसकले आराम गर्दा तपाईं ढल्न लागेको अन्दाजमा तपाईंलाई ब्युँझाउन सो कार्य गरेको हुनुपर्छ। नवजात शिशु सुत्ने बेला पहिलो चरणमा प्रवेश गर्दैन। सिधै दोस्रो स्टेजमा प्रवेश गरेको देखिन्छ।

रातको धेरै समय मानिसले दोस्रो तहको सुताइमा बिताउने गर्छ । यो स्थितिमा मानिस गहिरो निद्रामा











नपुगेको हुन सक्छ तर पनि यो समयमा आफ्नो वरपरको वातावरण बारे मानिस खासै जानकार रहँदैन। यो समयमा मुटुको धड्कनको दर र श्वास प्रश्वास क्रम झन् घट्दै जान्छ। मांसपेशी झन् आरामको अवस्थामा पुग्छ। आँखाको गतिविधि रोकिन्छ। शरीरको तापक्रम समेत घट्छ। दिमागको तरंग बीच बीचमा फ्लसिङ्ग गरे जस्तो धड्कन देखिने गरी तरंग झन् धिमा गतिमा प्रवाह हुने गर्छ। जसलाई स्लिप-स्पिनडल भनिन्छ। विज्ञहरू स्लिप स्पिनडल गतिविधि मस्तिष्कले आफ्नो सूचना स्मरणमा परिवर्तन गरी मौजाद राख्ने मा हुने ठान्दछन्। कुनै पनि नयाँ कुरा सिक्दा वा अचम्म लागेको घटना भएको समयको रातमा सुत्ने क्रममा मानिसको निन्द्रामा धेरै स्लिप स्पिनडल हुने विश्वास













गरिन्छ।

मानिसले आफ्नो एक तिहाइ भाग सुतेर बिताउने गर्छ। जब मानिस बुढो हुँदै जान्छ तब उसले दोस्रो स्टेजको सुताइमा आफ्नो धेरै निद्रा गुजार्ने गर्छ। रातको सबैभन्दा गहिरो निद्रामा पुगिने चरण तेस्रो चरणको निद्रा हो। यो चरण पार गर्दा सबै भन्दा स्फूर्तिदायी अनुभव प्राप्त हुन्छ। तेस्रो चरणको निद्राको चक्रको पहिलो गहिरो निद्रामा मानिसले प्राय २०–४० मिनेट व्यतीत गर्छ । त्यसपछि गहिरो निद्रा कि त छोटो रहन्छ, कि पूर्ण रूपमा गायब हुन्छ। यो चरणमा मुटुको धड्कन र सास फेर्ने क्रम सबै भन्दा न्यून वा सुस्त तहमा पुग्छ। यसै वेला शरीरले आफ्नो हड्डी निर्माणको प्रक्रिया सुरु गर्छ। मांसपेशी सबैभन्दा आरामको अवस्थामा पुग्छ।







ग्रोथ हर्मोनहरूले मांसपेशीको निर्माणमा सहयोग गरिरहेको हुन्छ।

तन्तुहरू आफैं बढ्ने र बिग्रेको तन्तुहरूको मर्मत सम्भार गरिरहेको हुन्छन। प्रतिरक्षा प्रणाली बलियो बनाउने कार्य भइरहेको हुन्छ। दिमागका तरंगहरू स्टेज एक र दुई भन्दा कम कम्पनमा रहन्छन्। तसर्थ यो स्टेजलाई सबैभन्दा कम दिमागको कम्पन रहने निद्राका रूपमा लिइन्छ। यो अवस्थामा उठ्नु मानिसका लागि अत्यन्त गाह्रो हुने गर्छ। हरेक दिन सात देखि नौ घण्टा सुत्ने वयस्क मानिसले लगभग दुई घण्टा स्टेज ३ मा बिताउने गर्छ। ६५ नाघेका वृद्धमा यो समय ३० मिनेट मात्रको हाराहारीमा देखिन्छ ।

स्टेज ३ को पहिलो घण्टामा प्रवेश गर्दैगर्दा कतिपय








मानिस डराउने गर्दछन। रातमा हिंड्ने बानी भएकाहरू हिंड्ने गरेको भेटिन्छ । यो समयमा हुने कुनै प्रकारले श्वास-प्रश्वासमा अवरोध पैदा भयो भने उक्त बेला अचेत अवस्थामै दिमागमा हुने सोचाइका प्रकृतिका कारण मानिसमा उकुस-मुकुसको अनुभूति दिने सपना आउने विश्वास गरिन्छ। मस्त निद्राको चरणमा प्रवेश गर्दै गर्दा मानिसको आँखा द्रुत गतिमा पछाडि र अगाडि घुम्नेगर्छ। सपना देख्दै गरेका बेला पनि यस्तै गतिविधि देखिन्छ।

भुसुक्क निदाएको लगभग ९० मिनेटपश्चात् धेरै मानिसको आँखा यसरी पछाडि र अगाडि डुलेको देखिन्छ। जुन मात्र पाँच–दस मिनेट हुने गर्छ। तर, रात छिप्पिँदै जाँदा यो अवस्था पुनः दोहोरिने र यसको चक्र लामो हुँदै जाने गर्छ। कहिलेकाहीँ यो






एक घण्टा सम्मको हुनसक्छ ।

जब मानिसले सपना देख्छ, सपना एकदम जीवन्त लाग्छ। यो समयमा मानिसको मस्तिष्कको लिम्बिक प्रणालीमा अधिक रगत बगिरहेको हुन्छ। त्यो तिनै अंगहरू हुन् जसले मानिसको दृष्टि र भावनालाई नियन्त्रण गरिरहेको हुन्छ। अध्ययनका अनुसार उक्त समयमा आँखाको चाललाई मस्तिष्कले भीषण गतिविधिका रूपमा बुझिरहेको हुन्छ। जस लाई मानिसले आफ्नो सपनाका रूपमा हेरिरहेको हुन सक्छ। हुन पनि भुसुक्क निदाएको चरणमा आँखाहरू पछाडि अगाडि गरिरहेका बेला मांसपेशीलाई अस्थायी रूपमा हाम्रो दिमागले निष्क्रिय पारिदिएको हुन्छ। जसले गर्दा सपना देखिरहँदा समेत शरीर हिँड्न चलबलाउन सक्दैन।











केही विज्ञको मान्यतामा सपनाको समयमा मानिसको स्मरणमा रहेका ताजा वा पुराना सोच वा अनुभवका अंशहरू पुनः प्ले हुन पुग्दा अनायास सपना देखिने गर्छ। यसरी देखिने सपनाले मानिसलाई आफ्नो स्मरणहरू दिगो भण्डार गर्न र मानिसको स्मरण शक्तिलाई मजबुत पार्न महत्वपूर्ण हुने विश्वास गर्छन्। अनुसन्धानले देखाए अनुसार चिन्ता, तनाव र केही नशालु औषधी सेवन आदिले सपनामा भावनात्मक रूपले सकारात्मक वा नकारात्मक दृश्य देखिने गर्छन्। एउटा अध्ययनले निर्क्योल गरे अनुसार सुतेका बेला मानिसले महसुस गर्ने राम्रो र नराम्रो गन्ध तथा बाह्य उत्तेजनाले सपना सकारात्मक वा नकारात्मक प्रकृतिको हुने कुरामा धेरै भूमिका खेल्ने गर्छ।











वैदिक दृष्टिकोणमा डरलाग्दा सपनाहरू मानिसको मानसिक असन्तुलन, नकारात्मक ऊर्जा वा पुरानो कर्मको प्रभावको कारणले आउने गर्दछ। जब दिमागमा तनावमा हुन्छ वा कुनै कारणले मनमा डर बसिरहेको हुन्छ, त्यो हाम्रो सपनामा डरलाग्दो रूपमा देखिने गर्दछ। आयुर्वेदको अनुसार शरीरको दोषको (वात, पित्त, कफ) असन्तुलन लाई सपना संग जोडिएको छ। विशेष गरी वात दोषको असन्तुलन डरलाग्दा सपना ल्याउने गर्दछ। सुखद सपना तब आउँछन् जब हाम्रो दिमाग शान्त, सन्तुलित र सकारात्मक ऊर्जाले भरिएको हुन्छ। खुसी, सन्तुलन र राम्रो कर्मले भरिएको जीवनमा सपना पनि सुखद र आनन्ददायक हुन्छ। आयुर्वेदले शरीरका दोषहरू (वात, पित्त, कफ) सन्तुलित हुँदा













त्यसले सुखद र आनन्ददायक सपना ल्याउने गर्दछ।

वैज्ञानिक दृष्टिले दुखद सपना तब आउँछ जब हामी तनाव, चिन्ता वा डरको अनुभव गरिरहेका हुन्छौ। खास गरी हाम्रो सुत्ने समयमा तीव्र रूपमा आँखाका नानीहरू घुम्दै गर्दा (Rapid Eye Movement) मस्तिष्कले हाम्रो भावनाहरू र सम्झनाहरू लाई मिलाउँदै गरेको हुन्छ। वैदिक अवधारणा संग सहमत हुँदै वैज्ञानिक दृष्टिकोणले पनि यो नै भन्दछ कि तनाव र चिन्ता कम गरेर प्राप्त हुने शान्त दिमागको अवस्था मार्फत निद्रा लाई मिठो गर्ने तथा डरलाग्दा सपना हटाउन सम्भव हुन्छ। वैज्ञानिक दृष्टि अनुरूप सुखद सपना तब देखिन्छ जब हामी आफूलाई आरामदायी, खुसी वा सन्तुष्ट राख्न सक्दछौ। तीव्र रूपमा आँखाका











नानीहरू घुम्दै गर्दा आएका सूचनाहरूलाई मस्तिष्कले सकारात्मक भावनाहरू र अनुभवहरूको रूपमा राम्रो सपनाको चित्र स्मरणमा ल्याउने गर्दछ। वैदिक र वैज्ञानिक दुवै दृष्टिकोणले राम्रो मानसिक अवस्था र शान्त मन नै सुखद सपनाको कारक बन्ने देखिन्छ।

## राइट ब्रेन–लेफ्ट ब्रेन

सन्सारको तथ्यांक अनुसार झन्डै ९० प्रतिशत व्यक्ति देब्रे भन्दा दाहिने हात धेरै चलाउने भेटिन्छन्। यसको मुख्य कारण जेनेटिक वा आनुवंशिक रहेको छ। आनुवंशिक विकासका क्रममा देब्रे हातभन्दा उल्लेखनीय रूपमै अधिक संख्याका मानिसमा













दाहिने हात सबल रहने परिस्थिति कसरी विकास भयो भन्ने विषय आजसम्म पनि विज्ञानले यकिनका साथ उत्तर पाउन सकेको छैन।

हाम्रो दैनिकीमा कतिपय अवस्थामा दायाँ हात राम्रो चलाउने व्यक्तिलाई बायाँ हात राम्रो चलाउने गरी तालिम दिन सकिन्छ । उदाहरणका लागि कतिपय कोचहरूले दाहिने हातले टेबलटेनिस, गल्फ, भलिबल आदि खेल्ने बच्चालाई देब्रे हातले खेल्न सिकाएर अधिक सफल सर्ट हान्न सक्ने बनाउने गरेका छन्।

उनीहरूलाई कस्तो तालिम दिएर यस्ता काममा पोख्त पर्न सकिन्छ भन्ने विषयको आफ्नै महत्व रहँदा रहँदै यो प्राक्टिसमा देखिएको सफलताले आनुवंशिक रूपमा एक हात राम्रो चल्ने गरी जन्मेका









मानिसलाई जरुरत अनुरूप अर्को हात कुशल चल्ने प्राथमिकताका साथ हार्ड–वायरिङ सम्भव रहेकोतर्फ संकेत गर्छ। हालसालै गरिएको एक अनुसन्धानबाट मानिसको बायाँ–ब्रेन वा दायाँ–ब्रेनको क्षमताको सन्दर्भमा भने माथि बताइए जस्तो सजिलै एउटाले गर्ने काम अर्कोले गर्ने गरी हेरफेर वा हार्ड–वायरिङ गर्न सम्भव देखिएन।

स्नायु विज्ञान अन्तर्गतको मेडिकल क्षेत्रमा काम गर्ने मानिसले प्रत्यक्ष अनुभव गरेको कुरा के हो भने मानिसको मस्तिष्कको एक भागले गर्ने काम अर्को भागले गर्ने कामभन्दा फरक हुने गर्छ । जब दिमागको कुनै निश्चित भागमा रगतको आपूर्तिमा अवरोध आउँछ वा कम हुन्छ, तब मस्तिष्कका तन्तुमा अक्सिजन र पोषक तत्वहरू प्राप्त हुनबाट










रोकिन्छ । उक्त समयमा ब्रेनका सेलहरू मिनेटमै मर्न थाल्छ जसलाई हामी स्ट्रोक भन्ने गर्छौं। स्ट्रोक एक चिकित्सकीय आपतकाल हो ।

उक्त समयमा जति छिट्टै उपचार गर्न सक्यो त्यति दिमागमा हुने क्षति र अन्य जटिलतालाई कम गर्न सकिन्छ। स्ट्रोकले मस्तिष्कको जुन भागलाई असर गर्छ त्यसका आधारमा शरीरको कुन कुन अंगमा कस्तो प्रभाव पर्छ भनी यकिन गर्न सकिन्छ। उदाहरणका लागि मस्तिष्कको दायाँ तर्फको भागमा पुगेको असरले बायाँ तर्फका हात र खुट्टाको गतिमा असर गर्ने र बायाँ तर्फको भागमा असर पुग्दा दायाँ तर्फको हात र खुट्टाको नियन्त्रणमा समस्या देखिन्छ।

दायाँ–ब्रेनमा हुने स्ट्रोकमा मस्तिष्कको दाहिने आधा











गोलार्धमा कमजोरी पैदा हुने गर्छ। फलतः दायाँ–ब्रेनले नियन्त्रण गर्ने शरीरको बायाँ पट्टिको भाग दिमागको नियन्त्रण बाहिर जान सक्छ । जसले गर्दा कुनै वस्तु आफूबाट कति टाढा वा नजिक छ भन्ने जान्न अप्ठ्यारो पर्छ । मस्तिष्कले आफ्नो बायाँ भागको सन्देश पाउन नसक्ने हुँदा बायाँ भागको उपेक्षा गर्ने, निर्णय क्षमता गुम्ने र अन्तर्दृष्टि क्षमतामा परिवर्तन वा कमसलता आउने अवस्था बन्छ।

निर्णय क्षमतामा ह्रास आउने हुँदा शरीरको सुरक्षामै गम्भीर चिन्ता आइलाग्छ। छिटै आवेगमा आउने, कुनै पनि कुरामा छोटो समय मात्र ध्यान जाने र नयाँ कुरा सिक्न निकै ढिलो हुने लक्षण देखिन्छ। अनुहारमा कमजोर पन देखिने, बोली अस्पष्ट हुने र खाना निल्न समस्या देखिने जस्ता विकृति













आइलाग्छ ।

बायाँ–ब्रेनमा हुने स्ट्रोकमा भने मस्तिष्कको बायाँ गोलार्ध कमजोर हुने हुँदा शरीरको दायाँ भाग मस्तिष्कको नियन्त्रण बाहिर पुग्छ । जस अन्तर्गत बोल्न समस्या हुने, लेखिएको वा भनिएको शब्द बुझ्ने क्षमतामा ह्रास आउने, बिस्तारै अत्यन्त सचेत बनेर मात्र हिँड्न सक्ने, दायाँ भागको सन्देश पाउन नसक्ने, दायाँ तर्फका वस्तुहरू देख्न नसक्ने, आफ्नो दायाँ भागको भए-नभएको महसुस नहुने, अनुहारमा कमजोरपन देखिने, बोली अस्पष्ट हुने र खाना निल्न समस्या हुने आदि समस्या आइलाग्छ।

मस्तिष्कको अर्को सबै भन्दा ठूलो दुई गोलाकार भागमा विभक्त सेरेब्रमले शरीरको मांसपेशीका साथै बोली, विचार, भावना, पढ्ने, लेख्ने र सिक्ने











क्षमतामा नियन्त्रण गर्छ। सेरिबेलमले शरीरको सन्तुलन कायम गर्न ठूलो भूमिका खेल्ने हुँदा सेरेबेल र स्ट्रोकको समयमा चक्कर लाग्ने, शरीरले ब्यालेन्स गुमाएर अस्थिर बन्ने, पाखुरा, हात, खुट्टा अनियन्त्रित रूपमा चल्ने, बोली अस्पष्ट लर्बराउने, वाकवाकी लाग्ने, बान्ता आउने, आँखा छिटोछिटो चल्ने जस्ता समस्या देखिन्छ।

मस्तिष्कको तल्लो भागलाई ब्रेन स्टिम भनिन्छ जुन मेरुदण्डसँग जोडिएर मेरुदण्डको न्युरोनहरूलाई मस्तिष्क वा केन्द्रीय स्नायु प्रणालीसँग जोड्ने काम गर्छ। मस्तिष्कको ब्रेन स्टिमले मुटुको दर, श्वास र रगतको चापको नियन्त्रण गर्छ। त्यसको अलावा ब्रेन स्टिमले आँखाको चाल, सुन्ने शक्ति, बोली र निल्ने गतिविधिको समेत नियन्त्रण गर्न मद्दत गर्छ। ब्रेन









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



स्टिम स्ट्रोकको प्रभावले डबल भिजन हुने, धमिलो दृष्टि देखिने, चक्कर लाग्ने, निल्न समस्या आउने, बोली अस्पष्ट हुने, सास फेर्न समस्या देखिने, पाखुरामा र गोडामा कमजोरी हुँदै पक्षाघात निम्तने र सतर्कताको स्तर न्यून गरिदिने गर्छ ।

परम्परागत मान्यतामा विश्वास गर्ने धेरै व्यक्ति हरेक मानिसको व्यक्तित्व, सोच, कार्यशैली तथा कार्य गर्ने तरिकामा उसको दाहिने दिमाग वा देब्रे दिमाग उपयोग गर्ने आनी बानीमा धेरै भर पर्ने ठान्छन्। परम्परागत विचार धारा अनुरूप दाहिने दिमाग प्रयोग गर्ने मानिस सहज, रचनात्मक र स्वतन्त्र रहेर सोच विचार गर्ने प्रवृत्तिका हुने गर्छन्।

उनीहरू गुणात्मक, बृहत वैचारिक अवधारणा युक्त विचारकका रूपमा रहन्छन् । उनीहरू सँग विश्वलाई





॥ श्री गणेशाय नमः ॥





वर्णनात्मक र व्यक्ति वा वस्तु परक हिसाबले अनुभूति गर्ने चरित्रको विकास भएको हुन्छ। जस्तै, आज बिहानै आकाश उघ्रिएको छ, तापक्रम समेत धेरै छ सायद साँझ पख कालो बादल उठ्ने र भारी वर्षा हुने त हैन भन्ने जस्ता तार्किक प्रकृतिको व्यावहारिक सोच उनीहरूमा पैदा हुने गर्छ ।

बायाँ दिमागको उपयोग गर्ने मानिस भने अधिक मात्रात्मक र विश्लेषणात्मक खुबीका रहने विश्वास गरिन्छ। तिनीहरू मूलतः विषयवस्तुको विस्तृत विवरणमा गहिरिएर ध्यान पु¥याउने र तर्कका आधारमा निष्कर्षमा पुग्ने प्रवृत्ति युक्त भेटिन्छन्। उनीहरूमा तर्कका आधारमा यस्तो हुन्छ होला भनी पूर्व अनुमान गर्ने बानी देखिन्छ । जस्तै मौसम बारेको पूर्वानुमान, आज २५ प्रतिशत अनुमानमा









वर्षाको सम्भावना छ भनियो भने आकाशमा देखिएको बादलले वर्षा मेघ गर्जन समेत आउने अनुमान निकाल्छन।

सन् १९७९ मा पहिलो पटक मानिसमा बायाँ–ब्रेन र दायाँ–ब्रेन रहने अवधारणालाई प्रकाशित गर्ने लोकप्रिय पुस्तक ड्रोइङ अन द राइट साइड अफ ब्रेनमा उल्लेख भए अनुरूप दिमागको हार्ड–वायरिङ जसरी सुकै गरिएको होस्, दाहिने दिमागको सम्पर्कमा रहेर गरिने हरेक गतिविधिले कुनै पनि विषय वस्तुलाई भिन्न तरिकाबाट देख्न, बुझ्न र महसुस गर्न मद्दत पु¥याउने गर्छ।

ऊथाह विश्वविद्यालयका अन्वेषकहरूले सात र २९ वर्षबीचका एक हजारभन्दा बढी युवाको मस्तिष्कको स्क्यान गरी हेरेर फरक फरक व्यक्तित्व










रहेको मानिसको दिमागको सञ्चालनको गतिविधिमा फरक रहने नरहने यकिन गर्ने योजना गरे । मानिसको व्यक्तित्व अनुरूप मस्तिष्कको एक पक्ष अर्को पक्षभन्दा बढी सक्रिय रहने वा एक आपसमा दरिलो संयोजनमा रहेर गतिविधि सञ्चालन हुने / नहुने मापन गर्ने विधि विकास गरियो । जस अन्तर्गत दिमागलाई जति क्षेत्रमा विभक्त गरी हरेक भागमा हुने गतिविधि मापन गर्ने व्यवस्था गरियो।

अनुसन्धानको प्रोटोकल अनुरूप जब सहभागी व्यक्तिहरूमा उनीहरूको व्यक्तित्व अनुरूप फरक फरक गतिविधि हुने-नहुने परीक्षण गरियो, त्यहाँ हुने गतिविधिमा व्यक्तिको व्यक्तित्व अनुरूप खासै कुनै फरक प्रकृतिको पक्षपाती गतिविधि सञ्चालित हुँदै गरेको प्रमाण फेला परेन । अनुसन्धानबाट













आफ्नो व्यक्तित्व अनुरूप रचनात्मक व्यक्ति फरक व्यक्तित्वको मानिस भन्दा बढी आफ्नो बायाँ–दिमाग वा दायाँ–दिमागको उपयोग गर्ने भन्ने अवधारणा वैज्ञानिक रूपमा पुष्ट हुन सकेन।

सन् २०१३ मा उथाह विश्वविद्यालयले मस्तिष्कको स्क्यान गरी गरेको अध्ययनमा फरक फरक व्यक्तित्व भएका व्यक्तिको बायाँ वा दायाँ दिमागको गतिविधिमा फरक गतिविधि हुने कुराको त्यस्तो कुनै खासै उल्लेखनीय फरक पहिचान गर्न सकेन। वैज्ञानिक परीक्षणमा फरक फरक व्यक्तित्व रहेको मानिसको दिमाग सञ्चालनको गतिविधि समान प्रकृतिको भेटिएकाले मानिसमा बायाँ–ब्रेन र दायाँ–ब्रेन फरक फरक तरिकाबाट सञ्चालन हुने अवधारणा वैज्ञानिक रूपमा पुष्टि हुन नसकी









अप्रमाणित सिद्धान्तमा सीमित रहेको निष्कर्ष नै न्युरो–वैज्ञानिकहरुको निष्कर्ष बन्यो ।

उपनिषद् र भागवत गीताको मान्यता अनुरूपको दिमाग वा मस्तिष्कबारे वैदिक अवधारणा व्याख्या गर्न रथको एक प्रख्यात उदाहरणको सहयोग लिइन्छ । जहाँ व्यक्तिको भौतिक शरीरलाई रथ मान्ने हो भने रथलाई विभिन्न दिशामा तान्ने घोडालाई व्यक्तिको इन्द्रिय ठानिन्छ । घोडाको लगाम हातमा लिएर रथ चलाउने चालकलाई दिमाग ठानिन्छ । पछिल्लो भाग मुख्य रथमा बसेर सवार गरिरहेको रथको मालिक उक्त यात्राको वास्तविक पर्यवेक्षक वा साक्षी हो । जो स्वयम उक्त यात्राको अवलोकन र अनुभूति दुवै गरिरहेको हुन्छ । त्यसलाई सबैले 'म' आफू भनेर सम्बोधन गर्ने गर्छन् । त्यो









वास्तवमा आत्मा हो ।

तैत्तिरीय उपनिषद् २.७ अनुसार 'म' भनेर आफूलाई चिनाउने हरेक व्यक्ति पाँच अलग अलग आवरण वा पञ्चकोश निर्मित रहन्छ । भौतिक शरीर (अन्नमय कोश), ऊर्जाको आवरण (प्राणमय कोश), मानसिक आवरण (मनोमय कोश), बौद्धिक आवरण (विज्ञानमय कोश) र आनन्द आवरण (आनन्दमय कोश) । हरेक आवरण (तह) को पत्रपत्रलाई मिहिन रूपमा केलाउँदा आत्मा सबैभन्दा उच्च तहमा रहेर आनन्दमय आवरणको सम्पर्कमा बस्छ । आत्माको संयोजनमा आत्मासँग प्रत्यक्ष सम्पर्कमा रहने आनन्दले (ब्लिस) मानिसको सबैभन्दा बाहिरी आवरण बनाउने गर्छ ।

आनन्दको तह भित्र बुद्धिमत्ताको तह (इन्टलेक्ट)




रहन्छ। सम्पूर्ण शारीरिक र मानसिक प्रक्रियाहरू सञ्चालनका लागि ऊर्जाको अनिवार्यता रहन्छ। जसलाई प्राण भनिएको हो। बुद्धिमत्ता (इन्टलेक्ट) र आनन्दको (ब्लिस) तहमा समेत ऊर्जाको खपत हुन्छ। तसर्थ प्राणलाई बुद्धिमत्ता भन्दा भित्री तहका रूपमा लिइन्छ । प्राणभन्दा भित्रको तहका रूपमा हाम्रो भौतिक शरीर रहन्छ ।

आवरणगत रूपमा सबैभन्दा भित्री भौतिक शरीरको तह, त्यस बाहिरको ऊर्जाको तह र त्यो भन्दा बाहिर रहेको विचार समेतका तह मानव शरीरको मुख्य: तीन तहका रूपमा देखिन्छ। मानव शरीरको यी तीन तह अत्यन्त जटिल रूपमा एक अर्कासित जोडिएर शरीरको निर्माण भएको भेटिन्छ।

तीन तह बीचको जटिल अन्योँन्योँश्रित सम्बन्धका





कारण फरक फरक प्रकृतिको ऊर्जा आपूर्तिले मानिसमा फरक फरक शारीरिक या मानसिक हबिगत पैदा गरिदिन्छ। शरीरको ऊर्जालाई शरीरको प्राण भनिन्छ। प्राणले भौतिक शरीर र मनोवैज्ञानिक प्रणाली (विचार) बीच नियमित संसर्गका लागि जरुरत पर्ने विनिमयको माध्यम वा मुद्राको काम गर्छ। मनोवैज्ञानिक प्रणाली भित्र बुद्धिमत्ता (इन्टलेक्ट), आनन्द (ब्लिस) र आत्मा (चेतना वा कन्ससनेस) गरी तीन उच्च आवरण पर्छ। उक्त तीन उच्च आवरणलाई संयुक्त रूपमा दिमाग वा मस्तिष्कको नामकरण दिइएको छ ।

मस्तिष्कमा जरुरत भए जति ठिक्क तरङ्ग युक्त ऊर्जाको आपूर्तिले शरीरको सन्तुलन कायम गर्छ। त्यो अवस्थालाई सत्वगुण भनिन्छ। जरुरत भन्दा







अधिक रूपमा तरङ्गित ऊर्जाले उत्तेजना र बेचैनी पैदा गरिदिन्छ। जसलाई रजगुण भनिन्छ । जरुरत भन्दा कम तरङ्गित ऊर्जाले सुस्तता र अल्छीपन निम्ताउँछ। जसलाई तमगुण भनिन्छ।

संरचनागत रूपमा दिमाग पाँच वटा आधारभूत तत्व मिलेर बनेको हुन्छ । जसमा मन, अहंकार, चित्त, बुद्धि र आत्मा पर्छ । दिमाग यी पाँच तत्वलाई आकाश, वायु (हावा), अग्नि (आगो), जल (पानी) र पृथ्वी जस्ता पञ्चतत्वमा पुनः विभक्त गर्न नसकिने हुँदा मन, अहंकार, चित्त, बुद्धि र आत्मालाई दिमागका आधारभूत तत्व भनिएको हो। मन दिमागको पहिलो तह हो। मनले इन्द्रियहरू जस्तै श्रवण (कानमार्फत), स्पर्श (छालामार्फत), दृश्य (आँखामार्फत), स्वाद (जिब्रोमार्फत) र गन्ध













(नाकमार्फत) ले हरेक क्षणमा प्राप्त गरेका अनुभूतिलाई सूचनाको प्राप्तिको (इन–पुट) रूपमा ग्रहण गरी अनुभूति (महसुस वा बोध) गर्छ। मानिसका हरेक इन्द्रिय फरक फरक प्रक्रिया मार्फत शासित र सञ्चालित हुने गर्छन्।

न्युरोनहरू मार्फत इन्द्रियहरूले फरक क्षणमा फरक प्रकारको परिवर्तित सूचना सम्प्रेषण गरिरहने हुँदा मनले नियमित रूपमा आफूलाई प्राप्त परिवर्तित सूचना जस्तो रूपमा प्राप्त भएको हो, त्यस्तै रूपमा अनुभूति वा बोध गर्ने कार्य गर्छ। हरेक व्यक्तिले आफूले आफूलाई 'म' भन्ने पहिचान बाट बुझ्छ। त्यसलाई अहंकार भनिन्छ ।

अहंकार मानिसले आफूले आफ्नो पहिचानबारे बनाएको व्यक्तिगत अवधारणा र अनुभवको





मनोवैज्ञानिक रूप हो। म वा आफ्नै पहिचान जस्तो अहंकार बारेको संवेगात्मक निचोड निकाल्ने काम बुद्धिले गर्छ। बुद्धिले निर्णयमा बौद्धिकता वा इन्टलेक्टको विकास गर्न भूमिका खेल्छ। मन, अहंकार र बुद्धिलाई सामूहिक रूपमा मनका आन्तरिक उपकरण वा छोटकरीमा अन्तःस्करण भन्ने गरिन्छ। आधुनिक विज्ञानले भन्ने मस्तिष्क लाई वैदिक अवधारणाले मन (अनुभूति Mind), अहङ्कार (अनुभव Ego) र बुद्धि (बौद्धिकता Cognition) गरी तिन भागमा विभक्त गरेर अध्ययन गर्दछ।

चित्त (स्मरण Memory) लाई भने दिमागको स्मरणहरूको मौजाद राख्ने मेमोरी बैंक (Mental Memory) ठानिन्छ। दिमागमा रहने सम्झनाले





दिमागलाई नियमित रूपमा काम गर्ने आधार तयार गरिदिन्छ। चित्त केवल स्मरणको मौजाद राख्ने एक निष्क्रिय मेमोरी बैंकका रूपमा नरहेर आफूले प्राप्त गरेको अनुभूति, पैदा भएका मनोभाव (गट–फिलिङ), इच्छा वा चाहना आदिको संयोजनबाट सृजित सक्रिय मेमोरी बैंकका रूपमा अस्तित्वमा रहन्छ। चित्त आफ्नो जीवनका विगतका वास्तविक अनुभूतिको आधारमा निर्माण भएको नितान्त निजी मान्यता र प्राप्त सूचनाहरूको भण्डारको रूपमा रहन्छ। जसलाई चित्त वृति पनि भनिन्छ।

मानसिक जटिलताको सम्पूर्ण संरचना चेतनाको आवरण बाट घेरिएर रहेको हुन्छ। चेतनाको उक्त आवरणलाई आत्मा नामकरण गरिएको छ। आत्मा आफैं ब्रह्माण्डको मूल तत्वको एउटा टुक्रा हो।







जसले ब्रह्माण्डमा रहेको पर को– मूल आत्मा वा परमात्माको नियमित संसर्गमा रहेर मानवको जटिल मानसिक संरचना र ब्रह्माण्ड बीच नियमित संसर्ग स्थापित गराउँछ।

समग्रमा वैदिक तथ्यको मान्यता अनुरूप मानिसमा रहने बुद्धिमत्ता (इन्टलेक्ट) उसको आनन्दमय आवरण (ब्लिस) र बौद्धिक आवरणको (विज्ञानमय) संयोजनको हद र प्रभावकारिताले निश्चय गर्छ। चेतनाका रूपमा रहेको आत्माको बाह्य–आत्माको (परम – आत्मा / परमात्मा) नियमित सम्पर्क / सञ्चारमा रहेर उक्त बुद्धिमत्ता (इन्टलेक्ट) निर्मित हुने गर्छ। यो सन्दर्भमा मानिसमा बायाँ – ब्रेन र दायाँ – ब्रेन फरक फरक तरिकाबाट सञ्चालन हुने तथा दाहिने दिमाग प्रयोग













गर्ने मानिस देब्रे दिमाग उपयोग गर्ने भन्दा अधिक संज्ञानात्मक कुशलतायुक्त हुने भनाइ वेदको अवधारणाका आधारमा समेत पुष्टि हुँदैन।

उक्त मान्यतामा हालसम्म विज्ञान वा वेद दुवैको एकै प्रकारको निचोड भेटिन्छ ।

गोलो आकारको बायाँ र दायाँ मस्तिष्क एकापसमा सेतो खरानी रङको स्नायु तन्तुको मोटो बन्डलले जोडिएको हुन्छ जसलाई कर्पस क्यालोसम भनिन्छ। बायाँ र दायाँ मस्तिष्क बीच कर्पस क्यालोसम मार्फत सूचना आदानप्रदान हुने र दैनिक मनोवैज्ञानिक कार्यहरू सुचारु हुने सुनिश्चित हुने गर्छ। सन् १९८१ मा स्प्लिट – ब्रेन (Split Brain) अनुसन्धानमा नोबेल पुरस्कार विजयी रोजर स्पाइरीको परीक्षणको निर्क्योल बाट व्यक्तिको









उच्च सिर्जनात्मकता विकासमा राइट ब्रेन मात्रको होइन कि राइट–लेफ्ट सम्पूर्ण दिमाग बीचको प्रभावकारी संयोजन क्षमताले निश्चय गर्छ भन्ने प्रस्ट गर्दछ।

लगभग २०० मिलियन नर्व फाइबर युक्त कर्पस क्यालोसमले जति मजबुत रूपमा राइट र लेफ्ट ब्रेन बीचको सम्पर्क मजबुत बनाउन सक्छ, त्यति धेरै मानिसमा सिर्जनात्मकताको विकास हुने गर्छ । सन २०१३ मा रचनात्मक प्रतिभा युक्त महान् भौतिक शास्त्री अल्बर्ट आइन्स्टाइनको मस्तिष्कको विस्तृत तस्बिर जब बाहिरियो त्यसमा समेत न्युरो साइन्टिस्टले खैरो खरानी रङको बाक्लो दरिलो कर्पस क्यालोसम मार्फत नितान्त बलियो सँग राइट–लेफ्ट ब्रेनलाई अविश्वसनीय रूपमा जोडिएको









फेला पारे ।

सन् २०१२ मा कोलजाटो एट अल लगायतका डच मनोवैज्ञानिकको एउटा टोलीको अध्ययनले मेडिटेसनले मानिसमा रचनात्मकताको विकास गर्न महत्वपूर्ण ठानिएका उत्प्रेरकलाई सक्रिय पार्ने निचोड निकाल्यो । मेडिटेसनले मूलतः बहुआयमिक संज्ञानात्मक क्षमता वृद्धि गर्ने, नयाँ विचार र अनुभवमा खुलापन ल्याउने, स्मरण शक्ति बढाउने र सकारात्मक निर्णय गर्ने क्षमता वृद्धिमा सहयोग पु¥याएको भन्ने निचोड निक्लिएको थियो।

वर्षौं वर्ष लगाएर स्मरण प्रशिक्षणका रूपमा ४० हजार देखि एक लाख शब्द सम्मका संस्कृतका पाठहरू मौखिक रूपमै कण्ठस्थ गर्ने वैदिक संस्कृत पण्डितमा सन् २०११ मा इटालीको ट्रेन्टो








विश्वविद्यालयले उनीहरूको दिमागको एमआरआई स्क्यान प्रविधि मार्फत भौतिक संरचनामा आएको असरबारे उन्नत अनुसन्धान गऱ्यो ।

उक्त अनुसन्धानले पण्डितको दिमागको धेरै भागको भौतिक संरचना उल्लेखनीय रूपमा विकसित बनेको, दुवै गोलाकार सेरेब्रल भागमा खरानी रङको ग्रे म्याटर १० प्रतिशत भन्दा धेरै भेटिएको र कर्पस क्यालोसमको मोटाइमा समेत पर्याप्त वृद्धि भएको भेटेको थियो।

निचोडमा राइट ब्रेन र लेफ्ट ब्रेनबारे विज्ञान र वेदको समधारणा देखिन्छ। कुनै पनि व्यक्तिको उच्च सिर्जनात्मकता विकासमा उसको राइट ब्रेनको भूमिका हुने विषय आजसम्म न त विज्ञान न त तर्क न वेदको अवधारणा बाट नै प्रमाणित हुन सकेको






वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे


छ। हालसम्म उपलब्ध प्रमाणित तथ्यहरूका अनुसार राइट र लेफ्ट लगायत समग्र दिमागबीचको प्रभावकारी संयोजन क्षमताले मानिसको सिर्जनशीलताको हदको निश्चय गर्छ ।

योग तथा मेडिटेसन गर्दा अथवा आफूलाई मनपर्ने कार्यमा लगातार अनुशासित रूपमा लागि रहँदा मस्तिष्क आफैं ब्लिस जोनमा पुगी मस्तिष्कका सबै भाग एकापसमा उच्च संयोजनमा रहेर काम गर्ने अकल्पनीय हार्मोनीको विकास हुने हुँदा उनीहरूमा उच्च सिर्जनात्मकता विकास हुने यथार्थ नै आज सम्मको तथ्य र तर्कसंगत रूपमै प्रमाणित चुरो यथार्थ हो।



॥ श्री गणेशाय नमः ॥







# वेदमा मस्तिष्क ज्ञान

मानव विकाससँगै मानिसको दिमागको पनि विकास भएको छ। सामान्यतया, हाम्रो दिमागका विभिन्न भागहरू छन्: मेरुदण्ड र शरीरमा रहेको दिमाग (Spinal Cord), मेरुदण्डको डाँठ (Brain Stem), भित्री दिमाग (Limbic System) र बाह्य दिमाग (Neocortex)। हरेक दिमागको विकास क्रमिक रूपमा हजारौँ हजार वर्ष लागेर धेरै चरणहरू भएको मानिन्छ। तिनीहरू आफ्नो उत्पत्ति देखि नै आफूलाई सक्षम बनाउने गतिविधिमा सक्रिय हुँदै आएका छन्, जसले गर्दा प्रत्येकले आफ्ना दक्षता र विशेषता विकास गरेका छन्। तिनीहरूले बाँच्नका लागि विभिन्न तरिकाहरू













अपनाएका भेटिन्छन्। यसरी, हाम्रो दिमागमा मुख्यतः चार तह देखिन्छन्। तिनीहरू आपसमा मिलेर काम गर्दा पनि सबैले आफू हाबी हुन चाहने स्वभाव राखेका देखिन्छन्। एक भागले अर्को भाग माथि आफ्नो विशेष क्षमता प्रयोग गरेर हरेक कार्यलाई आफ्ना अनुकूल बनाउन खोज्छ।

तिनीहरूको कार्यमा द्वन्द्वात्मक सहकार्य हुन्छ। दिमागको जुन भाग कुनै विशेष कामको लागि बढी दक्ष छ, त्यसले सो कामको नेतृत्व लिने गर्छ। जहाँ फरक-फरक कार्यहरूमा दिमागका विभिन्न भागहरूले नेतृत्व लिन्छन्। कुनै पनि कार्य हुँदा, सो क्षेत्रको काममा दिमागको जुन भाग अधिक दक्ष छ सोही भागले अन्य भागलाई पनि संयोजन गर्दै नेतृत्व गर्छ। हाम्रो चेतनाले जुन भागको नेतृत्वमा







कार्य हुँदै छ, त्यही भागमा केन्द्रित भएर त्यहाँ भएका गतिविधि र घटनाबारे ज्ञान लिन्छ। यसरी मानिसको चेतना मस्तिष्कको जुन जुन क्षेत्र सक्रिय रहेको छ त्यही अवस्थित रहन्छ। जुन फरक फरक स्थानमा एकै चोटि पनि केन्द्रित हुन् सम्भव रहन्छ।

मस्तिष्कको स्पाइनल कर्ड (Spinal Cord) भाग शरीरको इन्द्रियहरू वाट र विभिन्न तन्तुहरू वाट प्राप्त जानकारी दिमागमा पठाउने, मांसपेशीका स्वचालित क्रियाहरू जस्तै चल्ने, खुम्चने, तन्किने आदि नियन्त्रण गर्ने, हातमा तातो वस्तु परेमा तुरुन्तै खिच्ने जस्ता रिफ्लेक्स एक्सन सञ्चालन गर्ने आदिमा दक्ष हुने हुँदा तिनै कार्यको नेतृत्व गर्दछ। ब्रेन स्टिमको (Brain Stem) श्वासप्रश्वास (श्वास लिन र फाल्ने प्रक्रिया नियन्त्रण गर्ने), मुटुको गति











नियन्त्रण गर्ने, निन्द्राको प्रक्रिया नियन्त्रण गर्ने, रक्तचापको नियन्त्रण गर्ने जस्ता कार्य दक्षताको क्षेत्र भएकोले त्यही कुराहरू सञ्चालनमा नेतृत्व लिन्छ। लिम्बिक सिस्टम (Limbic System) भने भावनात्मक प्रतिक्रियाहरू (आनन्द, दुख, डर), स्मृतिको निर्माण र संरक्षण तथा प्रेरणा र प्राथमिकता तय गर्ने कार्यमा दक्ष हुन्छ र त्यही जिम्मेवारीको नेतृत्व लिन्छ। नियोकोर्टेक्स (Neocortex) विचार र तर्क गर्ने क्षमताहरू, भाषाको समझ र विकास, जटिल निर्णय लिन र योजना बनाउने तथा संवेदनाहरू (छालाले स्पर्श गर्ने, आवाज सुन्ने, दृश्य देख्ने) जस्ता कुरा सम्पन्न गर्न दक्ष हुने गर्दछ। त्यसैले तिनै कुराको सञ्चालनमा नेतृत्व लिने गर्दछ।





मस्तिष्कको बारेमा जान्न न्युरो प्लास्टिसिटि बारे पनि जान्न जरुरी हुन्छ। मस्तिष्कले आफ्नो न्युरोनको सञ्जाल वृद्धि गरेर आपसमा सहकार्य गर्दै नयाँ नयाँ प्रविधि सिक्दै नयाँ नयाँ कग्निसन विकास गर्दै आफ्नो काम सुचारु गर्दछ। त्यो क्रममा त्यसले हरेक समय चारै तिर न्युरोनको सञ्जाल विकास गर्न जरुरी हुन्छ। कुनै कुरा सिक्ने क्रममा विकास भएको न्युरोनको त्यो सञ्जाल उक्त कुरा सिके पछि वा प्रयास उपयोगी नहुँदा जरुरी नहुने स्थिति आउँछ। त्यसो हुँदा तिनीहरूलाई हटाउनु पनि पर्ने हुन्छ। हामीले नर्सरीमा बिरुवाको गोडे जस्तो एकातर्फ चाहिएको तिर बिरुवा बढ्न दिने र नचाहिएको तिर पुर्निङ्ग गरेर काट छाँट गरेर त्यसलाई सुन्दर बनाउने गरिन्छ। मस्तिष्कको विकासको क्रममा चाहिएको









स्थानमा न्युरोनहरू बिच नयाँ सञ्जाल बनाउने र नचाहिएको तिर काटेर फाल्ने काम जरुरी हुन्छ। जसलाई लर्निङ्ग र अँनलर्निङ्ग प्रक्रिया भनिन्छ। मस्तिष्कको त्यो लर्निङ्ग (Learning) र अँनलर्निङ्ग (Unlearning) कार्य नै न्युरो प्लास्टिसिटि हो। जसले गर्दा हाम्रो मस्तिष्क चुस्त मात्र हुँदैन, नयाँ कुरा सिक्ने, जरुरत भएको सूचना लामो समय सम्म राख्ने र अत्यन्त कम महत्त्व पूर्ण नचाहिने सूचना स्मरण वाट हटाएर अधिक सूचनाका कारण दिमाग ह्याङ्ग हुन वाट जोगाउने गर्दछ।

न्युरोसाइन्सको हिसाबले हेर्दा हामीले हाम्रो दैनिक जीवनमा नयाँ बानी निर्माण गर्न दिमागका चार वटा मुख्य भागको विशेषताहरूको उपयोग गर्दा त्यसलाई जीवनमा प्रभावकारी रूपमा लागु गर्न









सम्भव हुने छ। हामीले विकास गर्न खोजेको बानी वा चेतना (ज्ञान) सर्वप्रथम नियोकोर्टेक्सको चेतनामा आधारित सिकाइ मार्फत योजना बनाउँछ। आफ्नो मन पर्ने वा नपर्ने विषय अनुरूप १८ देखि २५४ दिन सम्म निरन्तर अभ्यास गर्दा त्यसलाई लिम्बिक सिस्टमले आफ्नो नियमित बानीको रूपमा स्वीकार गर्दछ।

कार्य लिम्बिक सिस्टमको नियमित बानीको रूपमा स्वीकार भए पछि उक्त कार्य गर्दा मस्तिष्क आनन्द वा सफलता प्राप्तिको महसुस गराउने डोपामाइन मार्फत पुरस्कृत हुन थाल्दछ। जसले त्यसमा हाम्रो लगावको विकास हुन्छ। अभ्यासको निरन्तरता गर्ने बानीहरू केही समय पछि स्वचालित बन्दछ र बेसल ग्याङ्ग्लियाले यसलाई आफ्नो नियन्त्रणमा लिन्छ।









जसले गर्दा दिमागले कम ऊर्जा खर्च गरी ती कार्यहरूलाई स्वतः सम्पन्न गर्न थाल्दछ। त्यो हाम्रो दैनिकीमा परिवर्तन हुन्छ।

ब्रेन स्टिम र स्पाइनल कर्ड जस्ता मस्तिष्कका भागहरू प्रत्यक्ष रूपमा नयाँ बानी निर्माण र त्यसलाई संस्थागत गर्न संलग्न हुँदैनन्। तिनीहरू जीवनका अन्य स्वचालित कार्यहरू जस्तैः सास फेर्ने, हृदय गति नियन्त्रण आदिमा भूमिका खेल्न व्यस्त रहेता पनि स्थापित बनिसकेको नयाँ बानीलाई निरन्तरता दिन जरुरी हुने शरीरको सामान्य क्रियाकलाप लाई नयाँ बानी मैत्री बनाउन उनीहरू सहज बन्दछन्। यसरी हरेक बानी बनाउन चरणबद्ध अभ्यास मार्फत इनाम प्रणाली सक्रिय गर्न र स्वचालित प्रक्रियाको उपयोग मार्फत दीर्घकालीन










सफलता हासिल गर्न जरुरी हुने गर्दछ।

वैदिक दृष्टिकोणमा चाहिने कुरा सिक्ने, नचाहिने बिर्सने र नयाँ बानीको विकास गर्ने प्रक्रियामा आत्मज्ञान, अभ्यास र विवेक जरुरी हुने कुरा उल्लेख छ। वैदिक शास्त्रहरू विशेषत: उपनिषद् र भगवद्गीतामा सिकाइलाई दुई मुख्य भागमा बाँडेर हेरिन्छ। विद्या र अविद्या। विद्या भनेको आत्मज्ञान र आध्यात्मिक ज्ञान हो जसले मानिसलाई जीवनको परम सत्य बुझ्न, आफ्नो वास्तविक उद्देश्य पत्ता लगाउन र आफूलाई आत्मानुभूतिको मार्गमा लैजान मद्दत गर्दछ।

अविद्या भनेको भौतिक संसार सँग सम्बन्धित ज्ञान हो। विज्ञान र व्यवहारिक विज्ञान दुवै अविद्यामा पर्दछ। जसलाई सिक्न अनिवार्य छ। त्यसको सिकाई













वाट आफू आफ्नो खुट्टामा उभिने, समाजको परजीवी नबन्ने र सक्षम बन्ने गरिन्छ। तर त्यसको प्राप्ति पछि अन्तत: आत्मज्ञान प्राप्त गर्न अनिवार्य हुने छ। आत्मज्ञान विनाको विज्ञान उपयोगिता विनाको धन हुने छ।

वैदिक शिक्षामा नियमित प्रयास अर्थात् अभ्यास र वैराग्य अर्थात् त्यसमा असम्बद्धता (detachment) महत्त्वपूर्ण मानिन्छ। नयाँ बानीहरू सिक्न नियमित अभ्यासको आवश्यक हुन्छ। जब एक पटक कुनै बानी आत्मसाथ हुन्छ त्यो जीवन पद्धति बन्ने गर्दछ। जीवन पद्धति बनिसकेको बानीहरू नियमित रहला वा नरहला भनेर त्यसमा लागी रहनुले त्यसमा आफ्नो सम्बद्धता (attachment) पैदा गरिदिन्छ। तसर्थ त्यसमा







वैराग्य अर्थात् असम्बद्धता (detachment) अभ्यास गरिनु पर्छ। जसले त्यो बानीलाई सहज रूपमा ग्रहण गरी सके पछि त्यसले विकास गर्ने अनावश्यक चाहनाहरू जीवन वाट हटाउन मद्दत गर्छ।

वैदिक प्रकृतिको सिकाइ प्रक्रियामा ध्यान र योग महत्त्वपूर्ण हुन्छन्। योगको माध्यमबाट मानसिक र शारीरिक अनुशासन सिकेर मानिसले आफ्ना अनावश्यक र अवाञ्छित बानी (Non-value added steps or operations) वाट मुक्ति पाउने गर्दछ। नयाँ सिकेका सकारात्मक बानी (Value added steps or operations) आत्मसात् गर्न सक्दछ। कुनै प्रोसेसको कुरा गर्दा योग भनेको नियमित सुधारमा लिन हुनु हो। जसमा








वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



भ्यालु एड पक्ष नरहेको (Non-value added) प्रोसेसका अंशहरू प्रोसेस वाट हटाएर त्यसलाई प्रभावकारी बनाइन्छ। त्यसैलाई स्थापित गरिन्छ। वैदिक शिक्षाले सांसारिक मोह र आशक्ति त्यागेर आफूभित्रको ज्ञान (विद्या) र सत्य (आत्मा) लाई पहिचान गर्न प्रेरित गर्दछ। नयाँ सिकाइ संस्थागत (Institutionalizations) तथा दिगो (आन्तरिकीकरण - Internalization) गर्दै पुराना बानी वा प्रक्रियाका मूल्यहीन पक्ष त्यागिने गरिन्छ। यस प्रकारले वैदिक मार्गले त्यस्तो प्रकृतिको आत्म चिन्तन, अनुशासन र ज्ञानको महत्त्वमा जोड दिन्छ जसले मानिसलाई सही तर प्रभावकारी मार्ग तर्फ नियमित अग्रसर गर्ने गर्दछ।

ज्योतिष विद्या र आधुनिक चिकित्साको नेक्सस









मानव मस्तिष्कलाई इलेक्ट्रिकल इन्जिनियरिङ अन्तर्गतको कम्प्युटरको विभिन्न पार्टपुर्जा सँग तुलना गर्ने हो भने मेरुदण्डमा रहेका स्नायुले हाम्रो दिमागको केन्द्रीय सूचना प्रशोधन निकाय वा सीपीयूको भूमिका खेल्ने गर्छ। मानिसको सोच उसको टाउकोमा रहेको दिमाग नियन्त्रित हुन्छ भन्ने मान्यता झन्डै दशकअघि गलत प्रमाणित भएको हो। मेरुदण्ड र दिमागले शरीर भित्र फरक फरक एकाइका रूपमा नभई एकल एकाइका रूपमा मनोवैज्ञानिक काम गर्ने अवधारणा स्थापित भएपछि मनोवैज्ञानिक क्षेत्रमा निकै ठूला उपलब्धि हासिल हुन सम्भव बन्यो।

कालान्तरमा साइकोसोमाटिक सिस्टमको अभिन्न अंगका रूपमा रहेर शरीर र दिमागले संयुक्त रूपमा









काम गर्नेतथ्य उजागर बने । जसले गर्दा साइको – बायोलोजी र साइको – न्युरो – इम्युनोलोजी जस्ता नयाँ विषयहरूले मनोवैज्ञानिक क्षेत्रको नेतृत्व लिन सम्भव बन्यो। प्रतिफलमा वैदिक अवधारणाबारे समेत गहिरिएर बुझ्ने अवसर विज्ञानलाई प्राप्त भयो।

मस्तिष्कको एउटा क्षेत्रले दिमागले गर्ने धेरै कार्य गर्न सक्ने हुँदा यसको एउटा भागको क्षतिको भर्पाई अर्को भागले सजिलै गर्न सक्ने यथार्थ आधुनिक चिकित्साले अनुसन्धान र भौतिक प्रयोग मार्फत प्रमाणित गरिदियो। जसले गर्दा शल्यक्रियाको माध्यमबाट मस्तिष्कको पर्याप्त भाग हटाइ दिँदा समेत एक व्यक्ति उचित मानसिक क्षमतामा सक्रिय रहेर आफ्नो सामान्य जीवन बिताउन सम्भव बन्यो।








सो सम्भव हुनुमा मस्तिष्क–मेरुदण्ड प्रणालीले आपसमा मिलेर गर्न सहकार्यको मूल भूमिका भेटियो ।

यसको विपरीत शल्यचिकित्साको मध्यमबाट महिलाको गर्भबाट महिलाको सामान्य जीवन यापनको दृष्टिबाट सुरक्षित देखिने केही भाग हटाउँदा भने महिलामा डिमेन्सिया जस्ता दिमागी समस्याले गाँजेको भेटिएको छ । आधुनिक शल्यचिकित्साको यस्ता धेरै अनुभवबाट मानव शरीरमा साइकोसोमाटिक सिस्टम ले उसको मस्तिष्कको अभिन्न अंगका रूपमा रहेर शरीर भित्र सक्रिय रहने तथ्य उजागर गर्न सक्यो ।

मस्तिष्क–मेरुदण्ड प्रणाली एकल एकाइका रूपमा कार्यरत हुने यकिन भए तापनि मेरुदण्डको कुनै पनि









भागमा सोच्ने कार्य भने सम्पन्न नहुने आधुनिक चिकित्साको आज सम्मको बुझाइ छ । वैदिक परम्परामा तर्क संगत सचेत दिमागलाई मन भनिन्छ भने अनुभूतिको आधारमा निर्मित अचेत दिमागलाई चित्त ।

पुरातन वैदिक अवधारणा अनुरूप दिमागका विभिन्न घटक मध्ये अहंकार एक हो । म भन्ने आत्मभाव वा पहिचान बोकेको अहंकार मस्तिष्कमा मैले म आफैंले सैद्धान्तिक रूपमा तय गरेको मेरो हैसियतमा बाँच्नै पर्छ भन्ने भावनाको बीजारोपण गर्ने गर्छ। मानिस बाँच्ने क्रममा भोग्नु पर्ने कथित खतराबाट जोगाउनु अहंकारको मुख्य भूमिका हो । जसमा मूलतः भौतिक सुरक्षा र सुरक्षित भविष्यको प्रत्याभूति दिलाउने गतिविधि पर्छन् ।








मानिसले नाक मार्फत प्राप्त गर्ने गन्धको अनुभूति दिमागको अहंकारको भाग सँग जोडिएको हुन्छ । दिमागका विभिन्न भागहरूले प्राप्त गर्न ऊर्जा मध्ये गन्धका रूपमा अहंकारको केन्द्रले प्राप्तगर्ने कम्पन सबै भन्दा न्यून हुन्छ । ज्योतिष शास्त्र अनुसार मस्तिष्कमा अहंकार विकास गर्ने लक्षण बुध ग्रहले ब्रह्माण्डमा दिने प्रभाव जस्तै हुने गर्छ। बुधबार मानिसकोअहंकारको केन्द्र धेरै प्रभावशाली वा शक्तिशाली रहने विश्वास गरिन्छ ।

चित्त वा भावनाले दिमागमा प्राप्त सूचनाको अनुभूति गर्छ। भोक लागेको, तिर्खा लागेको, निद्रा लागेको विषय होस् वा रति रागमा लाडिने इच्छा सबै नै चित्तले अनुभूति गर्छ। मूलतः बाह्य चेतना सँग सम्बन्धित नरहेको, आन्तरिक तर आफ्नो पूर्ण









नियन्त्रणमा समेत नरहेको अवचेतन (अचेतन) प्रवृत्तिको अनुभूति गर्ने मस्तिष्कको भाग हो चित्त। चित्त केन्द्रमा भावनात्मक विचार जस्तै कल्पना, कलात्मक प्रेरणा, जैविक आवश्यकता सँग जोडिएका विषय वस्तुको सम्पर्क रहन्छ।

जिब्रो मार्फत दिमागमा प्राप्त हुने स्वादका सूचनाहरू चित्त केन्द्रमा जोडिएको हुन्छ। स्वादको सूचना बोक्ने ऊर्जाको कम्पन अहंकार केन्द्रमा प्राप्त हुने गन्धको कम्पन भन्दा अधिक हुने गर्छ। ज्योतिष मान्यता अनुसार चित्त केन्द्रका लक्षण शुक्र ग्रहका प्रभावसँग मिल्दो जुल्दो रहन्छ। मानिसको चित्त केन्द्र शुक्रबार धेरै प्रभावशाली वा शक्तिशाली रहने विश्वास गरिन्छ।

विभिन्न तर्क संगत कारणका आधारमा मैले यो










गर्नुपर्छ वा म यो गर्न चाहन्न वा म यो सहन गर्न सक्दिनँ जस्ता आफ्ना सचेत शक्ति वा सचेत विचारको स्रोतका रूपमा मन लाई लिइन्छ। उपलब्ध तर्क संगत सोचलाई आन्तरिक मानसिक अन्तरकृया सँग जोडिएर दिमागले लिने निर्णयमा मनको भूमिका रहन्छ। मस्तिष्कको एक भागका रूपमा रहने मन–केन्द्र परम्परा र सामाजिक आवश्यकता सँग गहिरो सँग जोडिएको हुन्छ ।

विचाराधीन अवस्थामा रहेका विषय वस्तुबारे सकारात्मक र नकारात्मक पक्षको पहिचान गरी व्यावहारिक सम्भावना बारे मनले मूर्त सुझाव उपलब्ध गराउँछ। छाला मार्फत दिमागमा प्राप्त हुने स्पर्शको सूचना मनको केन्द्रसँग जोडिएको हुन्छ। स्पर्शको सूचना बोक्ने ऊर्जाको कम्पन चित्तकेन्द्रमा













प्राप्त हुने स्वादको कम्पन भन्दा अधिक रहने गर्छ। ज्योतिष मान्यता अनुसार मन केन्द्रका लक्षण बुध ग्रहका प्रभावसँग मिल्दो जुल्दो रहन्छ। मानिसमा बुधबार मन केन्द्र धेरै प्रभावशाली वा शक्तिशाली रहने विश्वास गरिन्छ।

बुद्धि मानिसको मस्तिष्कको बौद्धिकताको केन्द्र हो। बुद्धिले हरेक विषयलाई विभिन्न मापदण्डका आधारमा विश्लेषण गरी त्यसबारे आलोचनात्मकता अवधारणा निर्माण गर्छ। कुन कुन कुरा भावनात्मक पक्ष हो र कुन कुन विषय तर्क, न्याय र व्यवहार संगत छ भन्ने तर्क संगत निर्णय लिने काम बुद्धिले गर्छ। बुद्धिले व्यक्तिको वैचारिक क्षमताको पहिचान दिलाउँछ।

यस परिस्थितिलाई सामना गर्न म सँग पर्याप्त स्रोत











र अनुकूलता उपलब्ध छैन, यो कुरा मलाई राम्ररी थाहा छैन, म यो यो विषयमा निर्णय लिन सक्षम छु, म यो सजिलै प्रबन्ध मिलाउन सक्छु या यो कुरा गर्न मैले अझै पर्ख र हेरको नीति लिनुपर्छ जस्ता विचार सोच्ने र निर्णय लिने काम बुद्धिको हो ।

बुद्धि केन्द्रले दिमागको अन्य भागलाई समेत सन्तुलित र नियन्त्रण गर्ने क्षमता राख्छ। आँखा मार्फत दिमागमा प्राप्त हुने दृष्टि सम्बन्धका सूचनाहरू बुद्धि केन्द्रसँग जोडिएको हुन्छ। दृष्टिको सूचना बुद्धि केन्द्र सम्म ल्याउने ऊर्जाको कम्पन मन केन्द्रमा प्राप्त हुने स्पर्शको सूचनाको कम्पन भन्दा अधिक रहने गर्छ। ज्योतिष मान्यता अनुसार बुद्धि केन्द्रका लक्षणहरू बृहस्पति ग्रहका प्रभावसँग मिल्दो जुल्दो रहन्छ। मानिसमा बृहस्पति बार













(बिहीबार) बुद्धि केन्द्र धेरै प्रभावशाली वा शक्तिशाली रहने विश्वास गरिन्छ ।

मस्तिष्कको मानसिक जागरूकताको केन्द्रलाई व्यक्तिको एक अतिरिक्त असाधारण क्षमताका रूपमा लिइन्छ। शरीर भित्रको वा यसको पहुँचको कुनै पनि क्षेत्र भित्र के भइरहेको छ भन्नेबारे जानकारी राख्ने काम मानसिक जागरुकताको केन्द्रको हो । मानसिक जागरुकता केन्द्रको हरेक क्षण अस्थिर र बेचैनी रहेर आफ्नो सम्पर्कको क्षेत्र भित्र के के भइरहेको छ भन्ने जानकारी लिने विशेषता रहन्छ। शारीरिक सचेत कार्यहरू गर्नका लागि जरुरत अनुरूपको आदेश मानसिक जागरुकता केन्द्रले दिने गर्छ ।

कान मार्फत दिमागमा प्राप्त हुने ध्वनि वा सुनाइ









भाव मानसिक जागरुकता केन्द्रमा पुग्ने गर्छ। बुद्धि केन्द्रमा प्राप्त हुने दृष्टिको ऊर्जाको कम्पन भन्दा जागरुकता केन्द्रमा पुग्ने ऊर्जा ध्वनिको बढी कम्पन हुने गर्छ। ज्योतिष मान्यता अनुसार जागरुकता केन्द्रको विशेषता मंगल ग्रहको प्रभावसँग मिल्दो जुल्दो रहन्छ । मानिसमा मंगलबार जागरुकता केन्द्र धेरै प्रभावशाली वा शक्तिशाली रहने विश्वास गरिन्छ। अन्य दिनमा भन्दा हरेक हप्ताको मंगलबार घर झगडा अलि धेरै हुने कारण यसैलाई मानिन्छ।

मस्तिष्कको मुख्य सूचना केन्द्रका रूपमा यसको ज्ञान केन्द्र रहने गर्छ। सर्जरीका क्रममा अपरेटिङ टेबलमा पूर्ण सचेत रूपमा बसिरहेको बिरामीको दिमागको सतह (कर्टेक्स) लाई सिधै उत्तेजित गर्न क्रममा उसले आफूले बिर्सेका पुराना अनुभव पुनः









सम्झने गरेको भेटिन्छ। मस्तिष्कको स्मरण रहेका खास अंशहरू अप्रेसन मार्फत जब हटाइन्छ, त्यो भागमा रहेका उसका विशिष्ट स्मृतिका अनुभव समेत हराउने गर्छ ।

मस्तिष्कमा रहने पिनियल ग्रन्थिलाई दिमागको ज्ञान सक्रिय गराउने केन्द्र वा थर्ड आई (तेस्रो आँखा) भन्ने गरिन्छ। पिनियल ग्रन्थिले मानिसको स्मरण तथा ज्ञानको संयोजन गरी दिमागलाई शान्त र धन्य राख्न सहयोग पु¥याउँछ। हरेक व्यक्तिको व्यक्तित्वको आसन ठानिने पिनियल ग्ल्यान्ड छैटौं इन्द्रियसँग जोडिएको विश्वास गरिन्छ ।

छैटौं इन्द्रिय मार्फत प्राप्त सूचना समेतको आधारमा मस्तिष्कको सूचना केन्द्रलाई सक्रिय तुल्याउने पिनियल ग्रन्थिले प्राप्त गर्न ऊर्जाको कम्पन






मानसिक जागरुकता केन्द्रमा पुग्ने ध्वनिको कम्पन भन्दा उच्च रहन्छ । ज्योतिष मान्यता अनुसार मस्तिष्कको सूचना केन्द्रको विशेषता चन्द्रमाको प्रभावसँग मिल्दोजुल्दो रहन्छ। मानिसमा सोमबार (चन्द्रबार) मस्तिष्कको सूचना केन्द्र धेरै प्रभावशाली वा शक्तिशाली रहने विश्वास गरिन्छ ।

मस्तिष्कमा भण्डारण भएको स्मरण, ज्ञान जस्ता सूचनामा जरुरतका बेला प्रशोधन मार्फत दिमागले आफ्नो पहुँचमा स्थापना गर्छ। आधुनिक चिकित्साको अनुसन्धानको बुझाइ अनुरूप सूचनाहरू प्रशोधन टाउकोमा रहेको दिमागको भाग भन्दा मेरुदण्डमा अवस्थित दिमागका भागको मूल भूमिका रहने गर्छ। सूचना प्रशोधनमा मेरुदण्डका विभिन्न भागमा फरक फरक प्रकृतिका सूचना










जागरुक गराउने भर्चुअल विन्दुहरू अवस्थित रहेको देखिन्छ ।

अहंकार–केन्द्र मेरुदण्डको आधार भागमा अवस्थित देखिन्छ भने चित्त–केन्द्र निजी गुप्तांगको पछाडिको भागको मेरुदण्डभित्र अवस्थित रहन्छ। मन – केन्द्र घाँटी र मुटु बीचमा रहेको थाइमस ग्रन्थिको पछाडिको भागको मेरुदण्ड भित्र अवस्थित देखिन्छ भने बुद्धि–केन्द्र नाइटो पछाडिको भागको मेरुदण्ड भित्र केन्द्रित रहेर कार्य सञ्चालन गरिरहेको बुझिन्छ। जागरुकताको केन्द्र घाँटीको पछाडिको भागमा रहेको मेरुदण्ड भित्र हुन्छ भने पिनियल ग्रन्थिको केन्द्र भने टाउकोमा बीच निधारको काल्पनिक थर्ड आईको भित्री भागमा रहन्छ। मस्तिष्कको मुख्य सूचना केन्द्र भने जसरी सूर्यको परावर्तित प्रकाशले





चन्द्रमा चम्कन्छ, त्यस्तै पिनियल ग्रन्थिको केन्द्रमार्फत सञ्चालित रहन्छ ।

उदाहरणका लागि चित्त–केन्द्र निजी गुप्तांगको पछाडिको भागको मेरुदण्डभित्र भागमा अवस्थित रहने हुँदा यसको प्रभावको चक्रभित्र मानिसको यौन अंग सहजै पर्ने गर्छ। ओहियो स्टेट युनिभर्सिटीको टेरी फिसरको अनुसन्धानको टिमले हरेक पुरुषमा दिनमा औसत १९ पटक र महिलामा दिनमा १० पटक मैथुनबारे सोच विचार आउने कुरा वैज्ञानिक रूपमै प्रमाणित गर्न सफल बने। उक्त रिपोर्टले दिएको तथ्यले चित्त केन्द्रमा अधिक कामुकता कैद रहने ज्योतिष विचारधाराको मान्यतामा तुक रहेको सङ्केत गर्दछ।

प्राचीन मान्यता अनुरूप चन्द्रमा र यसले लिने





विभिन्न स्थानले हाम्रो शरीर, स्वास्थ्य र प्रकृतिसँगको हाम्रो सम्बन्धमा गहिरो प्रभाव पार्छ। चन्द्रमा र लुनर फेज भनिने औँसी–पूर्णिमाको चक्र अन्तर्गत चन्द्रमा फरक फरक स्थानमा रहँदा मानिसको शारीरिक र मानसिक स्वास्थ्यमा पर्ने असर बारे गरिएका फरकफरक आधुनिक वैज्ञानिक अनुसन्धानले औँसी–पूर्णिमाको चक्रले मानिसको शारीरिक र मनोवैज्ञानिक स्वस्थ र सबलतामा असर पु¥याउने धेरै प्रमाण उपलब्ध गराउने गर्दछ।

जर्मनीको अग्सबर्गको सेन्ट्रल अस्पतालका अन्वेषकहरूले १६ हजार हार्ट-अट्याक पीडितको सम्बन्धमा गरेको अध्ययनले औँसी र औँसी पछिको तीन दिन सबैभन्दा कम हृदयाघात हुने गरेको तथ्य उजागर ग¥यो । डाक्टरलाई लक्षित गरी प्रकाशित





हुने अखबार पल्समा चिकित्सक डा. पिटर पेर्किंसले ७९ जना सामान्य चिकित्सकको अन्तर्वार्ता लिएर गरेको अर्को एक महत्वपूर्ण विस्तृत अनुसन्धानमा अस्पतालले इमर्जेन्सी सर्भिसका लागि प्राप्त गर्ने कल सामान्य दिनको तुलनामा पूर्णिमाको दिनमा तीन प्रतिशतले बढ्ने तर औँसीको दिनमा भने छ प्रतिशतले गिरावट आउने गरेको तथ्य भेटिएको समाचार प्रकाशित गर्यो।

सन् २००८ मा रोयल लिभरपुल युनिभर्सिटी अस्पतालले गरेको अनुसन्धानले युरोलोजी वार्डमा हुने इमर्जेन्सी एडमिसन पूर्णिमाको दिनमा अधिक र औँसीको दिनमा न्यून रहने निष्कर्ष निकाल्यो। युरोलोजी जर्नलले सन् २०११ मा अर्को फरक अनुसन्धान बारे प्रकाशित गरेको अध्ययनको






वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे


रिपोर्टले मिर्गौलाको पत्थरीका कारण पीडामा रहेका लगभग १५ सय बिरामीको दुखाइ बारे अध्ययनमा अन्वेषकले पूर्णिमाको दिनमा दुखाइ वृद्धि भएको बिरामीले अनुभव गरेको भेटिएको उल्लेख गरेको छ।

सन् २०११ मा निजमेगेन स्थित रडबोन्ड विश्वविद्यालयका अनुसन्धानकर्ताले पाँच हजार चार सय भन्दाधेरै बिरामीमा गरेको अध्ययनले पूर्णिमाको अवधिमा मनोवैज्ञानिक बिरामीको आपत्कालीन भर्ना बढेको रिपोर्ट सार्वजनिक ग¥यो। रिपोर्टमा उल्लिखित सुझावमा चन्द्रमाको गुरुत्वाकर्षणले मस्तिष्क कोषहरूमा रहेको दिमागको तरलताको प्रवाहलाई असर गर्ने र त्यसले मानिसको मुड र व्यवहारमा बदलाव ल्याउने तर्फ






संकेत गरेको छ ।

ज्योतिष शास्त्रको मान्यतामा सूर्यले ताप र प्रकाश दिन्छ। हाम्रो शरीरमा परेको सूर्यको परावर्तित प्रकाशका कारण हामीलाई अरूले देख्न सक्छ। सूर्यबाट प्राप्त ध्वनि, ताप र प्रकाश हाम्रो शरीरको प्राण धान्ने जीवन्त शक्तिको प्रमुख स्रोत हो।

समग्रमा सूर्यको ताप र प्रकाश हाम्रो आफ्नो भौतिक शारीरको व्यक्तित्वको निर्माणमा प्रमुख भूमिका खेल्ने गर्छ। चन्द्रमाको चमक मार्फत हामीले प्राप्त गर्ने सूर्यको परावर्तित प्रकाशले भने हाम्रो भित्री रूप जस्तै व्यक्तित्व, सोच, भावना र स्मरणको निर्माणमा प्रमुख भूमिका खेल्ने गर्छ। चन्द्रमा जस्तै पृथ्वीमा आफ्नो प्रभाव राख्ने अन्य ग्रहको समेत हाम्रो भित्री रूप निर्माणमा प्रत्यक्ष–अप्रत्यक्ष भूमिका खेलि











रहेका हुन्छन्।

चन्द्रमा र अन्य ग्रहमा ठोकिएर पृथ्वीतिर फर्किएको सूर्यको प्रकाशले हाम्रो निजी आन्तरिक विचार र भावनालाई त्यसमा रहने ऊर्जाको कम्पनका आधारमा फरक फरक तरिका बाट महसुस गर्न उत्प्रेरित गर्ने गर्छ। हाम्रो आफ्नै भित्री भावना समेत हामीले गर्ने अनुभूति अनुरूप अभिव्यक्तिका रूपमा फरक फरक टोन वा कम्पन युक्त ऊर्जाका रूपमा (जस्तै: बोली, हाउभाउ र नियत) व्यक्त हुने गर्छ। हाम्रो शरीरले आफ्नो ऊर्जा नियमित रेडिएसनका रूपमा समेत फालेर बाह्य वातावरणमा आफ्नो नियमित प्रभाव जमाइरहेको हुन्छ ।

जब हामीले प्राप्त गर्ने शक्ति शान्त वा गाढा अभिव्यक्ति युक्त रहन्छ, यसले हामी आफैँलाई









नकारात्मक प्रभावबाट सम्पर्क विच्छेद गरी आनन्द र धन्यको भावनामा विकास गराउँछ। सूर्यको अलावा चन्द्रमा तथा अन्तरिक्षमा रहेर हाम्रो जीवनमा प्रभाव पार्ने दूरीमा रहेका ग्रहर अन्य वस्तु (जस्तैः प्रकृति) मार्फत आउने प्रकाश, विकिरण, ध्वनि र अन्य ऊर्जाको (जस्तैः चेतना) हामीमा पर्ने प्रभाव जस्तो किसिमको रहन्छ, त्यसै अनुरूप हामीले दिने सचेत तथा अचेत प्रतिक्रिया निर्माण हुन पुग्छ। हाम्रो जीवनमा आउने परिवर्तन, शारीरिक र मनोवैज्ञानिक स्वस्थ तथा सबलता आदि समेत हामीले हाम्रो वातावरण बाट प्राप्त गर्ने ऊर्जाको प्रकृतिले निर्धारण गरिदिन्छ।

ज्योतिषशास्त्रको मान्यता यिनै यथार्थको जगमा उभिएको देखिन्छ। उल्लेखित र त्यसै अनुरूपका









अन्य धेरै विषय वस्तुको बहुआयामिक लेखाजोखा मार्फत ज्योतिष विद्याको विकास गरिएको छ। जस अन्तर्गत शरीरका विभिन्न शक्ति केन्द्र, उक्त शक्ति केन्द्र वरपर रहने चक्र र चक्रको गतिलाई हेरफेर गरी शरीरमा गरिने शक्तिको प्रवाह गर्ने कुशलता आदिमा समेत ध्यान दिएर विभिन्न ध्यान, मेडिटेसन, योग, तपस्या विधि आदिको विकास भएको छ।

## अर्कै ग्रहबाट पृथ्वीमा आए हाम्रा पुर्खा

पृथ्वीको उमेर करिब ४.५४ अर्ब वर्ष अनुमान गरिएको छ। यो अनुमान उल्कापिण्ड सामग्री र










पृथ्वीका सबैभन्दा पुराना चट्टानहरूको रेडियो मेट्रिक उमेर मापनको प्रमाणका साथै सौर्य मण्डलको निर्माणको प्रमाणमा आधारित छ। होमो सेपियन्स मानव जीवन पृथ्वीमा करिब ३ लाख वर्ष पहिले देखापरेको अनुमान गरिएको छ। होमो इरेक्टस करिब १९ लाख वर्ष पहिले र होमो हाबिलिस करिब २.१ मिलियन वर्ष पहिले देखा परेको विज्ञानको अनुमान छ। हामीले बुझे अनुसर पृथ्वीमा आधुनिक मानव सभ्यताको विकास भएको त केवल २ लाख बर्ष मात्र भयो ।

मानव सभ्यता औद्योगिकीकरणको युगमा करिब सन्  १७६० मा मात्र प्रवेश ग¥यो । जब मानव सभ्यता औद्योगिकीकरणको युगमा प्रवेश ग¥यो, हामी एकमाथि अर्को उत्कृष्टता प्राप्त गर्न सुरु ग¥यौ













। बिसौं शताब्दीको दोस्रो दशक चुम्दै गर्दा निकै छोटो समयमा हामीले धेरै उपलब्धि गरिसकेका छौँ । अहिले हामी आफू मात्र हैन आफू बसेको ग्रह पृथ्वी र पूरा ब्रह्माण्डको नै हेरचाह कर्ताका रूपमा हाम्रो जिम्मेवारी र चासो देखाउन सक्ने अवस्थामा पुगिसकेका छौँ । यदि पृथ्वीलाई आणविक युद्ध आदिबाट बचाउन सकियो, यसमा अन्तरिक्षबाट आउने उल्का, स्टेरोइड आदि ठोकिएर वा अन्य कुनै अकल्पनिक विपत्तिले हस्तक्षेप गरेन भने अझै कम्तीमा १७५ करोड वर्ष पृथ्वीले मानव जीवन थेगेर हाम्रो अस्तित्व कायम राखि राख्ने छ ।

पृथ्वी मात्र हैन अन्य ग्रह समेत कुनै जमानामा जीवन यापन योग्य थिए। हाल पनि कतिपय ग्रह जीवन यापन योग्य हुनुपर्छ भन्ने अनुमान छ ।





वैज्ञानिकहरूले अनुमान गरेका छन् कि सूर्यको चमक बढ्दै गएको आधारमा समयसँगै, सूर्य झन् तातो हुँदै जाने छ। जसले पृथ्वीमा तापक्रम नियमित बढ्नेछ। अन्ततः महासागरहरू वाष्पीकरण भएर ग्रहलाई जीवनका लागि बस्न योग्य बनाउने छैन। यो अनुमान अनुरूप पृथ्वी अर्को ५० करोड देखि १ अर्ब वर्षसम्म मानवहरूको लागि बस्न योग्य रहनेछ।

पृथ्वी मानवहरूको लागि बस्न अयोग्य भएको दिन सौर्य मण्डल भित्रको मङ्गल ग्रह हालको अवस्थामा मानिसको लागि उपयुक्त बसाइ सराई गर्ने ग्रह हुन् सक्दछ। मङ्गल ग्रहको गुरुत्वाकर्षण पृथ्वीको करिब ३८% छ। जसले गर्दा त्यहाँ काम गर्न मानिस लाई सहज हुनेछ। मङ्गल ग्रहको एक दिन





करिब २४.६ घण्टाको। यसको सतह मुनि जमेको पानी पिउन, खेती गर्न र अक्सिजन उत्पादन प्रयोग गर्न सकिन्छ। कार्बन डाइअक्साइडले बनेको वायुमण्डल पातलो भए पनि अन्तरिक्षको विकिरणबाट त्यसले केही सुरक्षा दिने हुँदा मानवीय बसोबासका लागि उपयुक्त हुने सम्भावना रहेको हो। अन्य विकल्पमा बृहस्पति र शनि ग्रह हुन् सक्दछन्, तर ती अत्यधिक टाढा उपयुक्त वायुमण्डलको अभावका कारण धेरै चुनौतीपूर्ण कठोर वातावरण युक्त छन्। आवास निर्माण, अक्सिजन उत्पादन, खाद्य उत्पादन र विकिरणबाट सुरक्षा गर्न सक्दा हाल सम्म हामीलाई प्राप्त सूचना अनुसार मङ्गल ग्रहलाई पूर्ण रूपमा मानिसको पहुँच पुर्‍याउन र बस्न योग्य बनाउन



सम्भव देखिन्छ।

अनुमानित हिसाबकिताब अनुसार मानिसले लगभग ६०० करोड वर्ष वर्षभित्रै पृथ्वीलाई पूर्ण रूपमा छोडेर आफू बाँच्न सकिने नयाँ ग्रहमा बसाइँ सरिसकेको हुनुपर्ने छ। सम्पूर्ण मानव जातिको जीवन रक्षाका लागि नयाँ ग्रहको बसाइँ सराइमा मात्र सीमित मानिस र उनीहरूसँग नयाँ ग्रहमा जीवनयापनका लागि सहज हुने अत्यन्त लाभदायी विषयवस्तु मात्र लैजाने परिस्थितिको विकास हुनेछ । पृथ्वीमा रहेका पैसा, जुहारत, घर, गाडी नयाँ ग्रहमा उपयोगी रहने छैनन्।

जीवन यापनका लागि जरुरी गाँस, बास र कपास लैजान उपलब्ध यात्राको साधन पर्याप्त रहने छैन । त्यो अवस्थामा मानिसले पृथ्वीमा रहँदा गरेका










उपलब्ध गरेका ज्ञान र प्रविधिको सँगालो उसको नयाँ ग्रहमा लिएर जाने सबैभन्दा उत्तम र लाभकारी विषय हुनेछ । जुन नयाँ ग्रहमा नयाँ जीविका सुरु गर्ने अद्यावधिक गरिएको चार खण्डमा बाँडिएको ज्ञानको माइक्रो चिप्स हुनेछ। त्यो नयाँ र परिष्कृत ज्ञानको भण्डार नयाँ वेदका रूपमा नयाँ ग्रहमा अस्तित्वमा रहनेछ ।

नयाँ ग्रहमा मानिस बसाइँसराइ हुने क्रममा भविष्यमा अस्तित्वमा आउने भनी अनुमान गरिएको ज्ञानको माइक्रोचिप्स समग्रमा अद्यावधिक गरिएको चार खण्डमा बाँडिएको वेदका रूपमा नै अस्तित्वमा रहने भनी यहाँ अनुमान गरिनुको पछाडि निकै अहम् कारण रहेको छ। उक्त कारण बुझ्न वेदको चुरो यथार्थबारे जान्नु जरुरी हुन्छ ।











संस्कृतमा वेद शब्दको अर्थ ज्ञान भन्ने हुन्छ । परम्परागत रूपमा द्रष्टा, सन्त तथा ऋषिहरूले सिधै ब्रह्मबाट प्राप्त ज्ञान लिपिबद्ध गरी सञ्चारित गरिएको शास्त्रलाई श्रुति भनियाँ । ऋग्वेद, सामवेद, यजुर्वेद र अथर्ववेद गरी चार वटा श्रुति कालान्तरमा वेद र उपनिषद् रूपमा अस्तित्वमा रहे । वेद जस्ता अलौकिक ज्ञानको अध्ययनपश्चात् मानवमा विकसित अन्तरज्ञानको उपयोग गरिँदै तयार गरिएको शास्त्रलाई स्मृति भनियो। जस्तै, वेदांग, उपवेद, उपांग, धर्मसूत्र, पुराण, रामायण, महाभारत आदि सबै स्मृति हुन् ।

लगभग लगभग तीन चार लाख वर्ष पहिले आफू बसिरहेको ग्रह जब जीवनयापन योग्य रहेन र ब्रह्माण्डबाट उक्त ग्रह नष्ट हुँदै गरेको अनुभूति प्राप्त









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



ग¥यो तब मानिसले आफ्नो जीवनयापन योग्य ग्रहको खोजीमा लग्यो। तत्कालीन उपलब्ध ज्ञानको उपयोगले मानिसले आफ्नो जीवनयापन योग्य ग्रह पृथ्वी रहेको पत्ता लगायो । उक्त समयमा पृथ्वीमा अन्य जीवसमेत अस्तित्वमा रहेको जानकारी प्राप्त गरेको मानिसले अन्तिम समयमा हाल अस्तित्वमा नरहेको ग्रहबाट पृथ्वीमा बसाइँ स¥यो ।

नयाँ ग्रहको बसाइँसराइमा मात्र सीमित मानिस र उनीहरूको नयाँ ग्रहमा जीवनयापन सहज पर्ने लाभदायी हुनेमध्ये सबैभन्दा मूल्यवान् तत्कालीन अवस्थामा मानिसले विकास गरेका ज्ञान र प्रविधिका रूपमा चार वेद आफू सँगै लिएर आए । सुरुमा नयाँ ग्रहमा आफ्नो जीविका अनुकूलन बनाउन महत्वपूर्ण समय खर्च हुन गयो। पृथ्वी











भित्रकै आन्तरिक बसाइँसराइले भिन्नभिन्न झुन्डमा बस्तीहरू विकास भयो। विभिन्न वैज्ञानिक परीक्षण हुँदै मानिसले आफ्नो जीविका दिनदिनै सहज गर्दै लाने र प्रगति पथमा लम्किरह्यो ।

कालान्तरमा एकातर्फ आफूसँग लिएर आएको चार वेदको अध्ययनमा रहेका मानिसले वेदलाई परम्परागत रूपमा द्रष्टा, सन्त तथा ऋषिहरूले सिधै ब्रह्मबाट प्राप्त गरी लिपिबद्ध गरिएको ज्ञान वा श्रुति ठानी ग्रहण गरे । समय र परिस्थिति अनुरूप कालान्तरमा मानिसद्वारा वेद लिपिबद्ध गर्ने क्रममा पृथ्वी सम्बन्धका र धर्मका कतिपय तथ्यहरूसमेत वेदमै संलग्न हुने गरी पुनर्लेखन गरियो । नयाँ स्मृति तथा विविध धर्मका सिद्धान्तसमेत प्रतिपादित गरिए। अन्ततोगत्वा वेदको व्यावहारिक पक्ष पछाडि













प¥यो। सैद्धान्तिक पक्ष त्यसमा पनि वैराग्यको पक्ष धेरै खोतलियो।

अर्कातर्फ वैज्ञानिक परीक्षण एकमाथि अर्को सफल बन्दै गयो । आश्चर्यजनक उपलब्धिसमेत हात लाग्यो । देखिएको र सुनिएकोमा विश्वास गर्ने, अनुभूति गरिएकोमा अविश्वास गर्ने प्रवृत्तिले धेरै नै प्रश्रय पायो। विज्ञानको एक छत्र वाहवाही बीच जीव विकासको सिद्धान्त जस्ता सैद्धान्तिक चुरोसम्म नपुगेका वैज्ञानिक सिद्धान्तले समेत सामाजिक स्वीकार्यता पाए ।

जब विज्ञान आणविक र क्वान्टम युगमा प्रवेश ग¥यो तब मानिसले पृथ्वीमा आएर विज्ञानमार्फत निक्र्योल गरेका कतिपय कुरा आफ्ना चार वेदमा बताइएका महसुस मात्र गरेन, त्योभन्दा निकै परसम्मको









विषयवस्तुबारे इंगित गरेको अनुभूति गर्न थाल्यो । मानिस बाहिरी ग्रह वाट पृथ्वीमा आएको कुरा वेद र विज्ञान दुबैमा उल्लेख भएको मैले देखिन। वेद र विज्ञानको अनुसार यो कुरा लेखकको अनुमानको हो। यो पुष्टि भएको विषय समेत रहेन।

पृथ्वीमा सयौँ वर्षदेखि वैज्ञानिक ग्रहणले लुकाइदिएको वैदिक यथार्थता बिस्तारै प्रस्ट हुँदै गर्दा आजको दिनसम्म आइपुग्दा नयाँ अनुमान गर्ने अवसर हामीलाई मिलेको छ। वैदिक यथार्थ ज्ञानको धेरै कुरा प्रस्टिँदै गएर समाजमा नयाँ सूचना पुगिरहेको छ। आगामी दिनमा वेद र विज्ञानको सबल पक्षको संयोजनमार्फत मानव जीवनलाई अझ सहज बनाई मानवीय उत्कृष्टताको प्राप्तिको दिशामा गतिविधि अघि बढेको देखिनु वास्तवमै









अत्यन्त स्वागतयोग्य क्षण वा समय रहने छ।

# वैज्ञानिक दृष्टिमा नागमणि

नागमणिबारे वैज्ञानिक लेख सबैभन्दा पहिले प्रोफेसर हेन्सोल्डट, पीएचडीले सन् १८९० मा हार्पर नामक मासिक पत्रिकामा प्रकाशित गरेको भेटिन्छ। उनको उक्त लेखपश्चात् वैज्ञानिक समुदायमा यथार्थमा नागमणि रहने तर त्यो सर्पको शरीरभित्र बन्ने जैविक प्रकृतिको नभएर सर्पले बाहिरबाट संकलन गरिराख्ने एक प्रकारको प्राकृतिक रेयर अर्थयुक्त मूल्यवान् खनिज रत्न वा पत्थर भएको खुलासा भयो। उक्त वैज्ञानिक खुलासापश्चात् यसबारे वैज्ञानिक समुदायमा समेत धेरै चासो बढेको










र यस्तै प्रकृतिको मूल्यवान् खनिज रत्नहरूबारे खोजी व्यापक बनेको देखिन्छ ।

प्रोफेसर हेन्सोल्डटले लेखे अनुसार अनुसार उनले कोब्रा मोती भनेर चिनिने प्राकृतिक रूपको नागमणि श्रीलंकामा उनकै आँखाले देखे । सिलोन छोड्नुपहिले उक्त मोतीका केही टुक्रा उनले किनेर आफूसँगै ल्याए । त्यसको परीक्षणबाट उनलाई उक्त मणि क्लोरोफेन नामक अत्यन्त दुर्लभ खनिज रहेको थाहा भयो ।

विविधतायुक्त रातो–गुलाबी (पिंक), रातो, रातो–खैरो, पर्पल (बैजनी) र हरियो रङ्मा पाइने क्लोरोफेन आफैँमा एक दुर्लभ क्याल्सियम फ्लोराइडयुक्त फ्लुओरस्पर हो । कुनैकुनै प्रकारका क्लोरोफेनहरू अत्यन्त संवेदनशील प्रकृतिका













हुन्छन् । केही समय मानिसको हातले च्याप्प समातेर लिँदा मात्र पनि हातको छिनभरको हल्का तातोले मात्र पनि अन्धकारमा घण्टौँ इलेक्ट्रोम्याग्नेटिक रेडिएसन निकाली प्रकाश निकाल्न अर्थात् फास्फोरेन्सका लागि पर्याप्त हुने गर्छ ।

जस्तै: बर्लिनका प्रख्यात खनिजविज्ञ गुस्तभ रोजले साइबेरियाको अल्ताई पर्वतहरूमा पाइने प्रख्यात क्लोरोफेनका गिट्टी वा टुक्राहरू मात्र दिनभर सूर्यको किरण प्राप्त गरेका भरमा अन्यत्रबाट कुनै तातोपन नलिई रातभर तीव्र रूपमा आफैँले निकालेको प्रकाशको चमकले चम्कने गरेको पाएका थिए ।

फ्लोराइट सामान्यतया छोटो तथा लामो तरंगको पराबैजनी प्रकाशका अन्तर्गतको निलो–बैजनी











रङ्को प्रकाश उत्पादन गरी चम्कने गर्छ । कुनैकुनै भने क्रिम वा सेतो रङ्को प्रकाश निकालेरसमेत चम्किएको भेटिन्छ । यथार्थमा क्याल्सियम फ्लोराइट निर्मित धेरै क्लोरोफेन फ्लोरोसेन्स गुणयुक्त हुने गर्दैनन् । जब उक्त फ्लोराइटमा युट्रिएम, युरोपियन, समारिएम वा तिनका अन्य तत्वहरू क्याल्सियम फ्लोराइटयुक्त खनिजमा न्यून मात्रामा अर्थात् ट्रेस मात्रामा मिसिन्छ तब फ्लोरोसेन्स अर्थात् प्रतिदीप्ति सम्भव रहने अनुमान गरिन्छ ।

दिनभर सूर्यको किरणबाट विशेष प्रकारका क्लोरोफेनको इलेक्ट्रोनहरू इनर्जी खिची लिएर उत्साहित बनी माथिल्लो अर्बिटमा गएर घुम्ने गर्छ । बेलुकीको समयमा सूर्यको किरणबाट शक्ति प्राप्त













नहुने हुँदा आफ्नै नियमित स्थानको कम इनर्जीको अर्बिटलमा फर्कने क्रममा दिउँसो खिचेर राखेको शक्ति ओकल्ने गर्छ । यसरी ओकलिएको वा फालिएको शक्ति प्रकाशको किरणका रूपमा बाहिर निस्कने हुँदा रातको समयमा क्लोरोफेन चम्कने गर्छ।

जुनकीरीले रातिको समयमा प्रकाश निकाल्छ । जुनकीरी मानिसले मन पराउने कारण के हो भने तिनीहरूले आफैँले हरियो र पहेँलो रङ्को अत्यन्त सुन्दर प्रकाश उत्पादन गर्ने गर्छन् । जुनकीरी आफैँमा बायोलुमिनिसेन्ट गुणयुक्त हुन्छ। जुनकीरीको शरीरमा रहेको जैविक प्रकाश उत्पादन गर्ने दुई प्रमुख मलिकुल लुसी–फिरिन र लुसी–फिरेज निकै लामो समयदेखि औषधी विज्ञानमा











प्रयोग हुँदै आएको छ। जुनकीरीको पछाडिको भागको फोटिक अंगले प्रकाश उत्पादन गर्ने दुवै मलिकुललाई एक्लैएक्लै नियन्त्रणमा लिने गर्छ । फोटिक अंगमा जुनकीरीले लुसी–फिरिन र लुसी–फिरेजलाई एकापसमा मिसिन दिन्छ तब त्यहाँ प्रकाशको किरण निस्कन्छ ।

जीवविज्ञान र चिकित्सा प्रणालीको अनुसन्धानमा प्रायः गरेर जैविक अणुहरू पत्ता लगाउन आवश्यक पर्छ। उदाहरणका लागि क्यान्सरको उपचार गर्नका लागि डाक्टरहरूलाई के बिरामीको शरीरमा क्यान्सरको ट्युमरका कोषिकाहरूको उपस्थिति छ वा छैन भनी यकिन गर्ने अत्यन्त छिटो र भरपर्दो तरिकाको आवश्यकता पर्छ। हालसम्म उक्त कुराहरू पत्ता लगाउने विभिन्न परीक्षणका विधि













उपलब्ध भए तापनि तिनीहरू प्रायः धेरै समय लिने र अधिक खर्चिला छन् ।

यसै सन्दर्भमा वैज्ञानिकहरूले जुनकीरीमा प्रकाश निकाल्ने खुबी राख्ने इन्जाइमलाई रासायनिक रूपमा टुइक्स वा फरक प्रकृतिको इन्जिनियरिङ गरी आफूले पहिचान गर्न चाहेको जैविक अणुका प्रकारहरू बिरामीमा रहेको नरहेको यकिन गर्नका लागि संकेत दिने प्रयोजनमा उपयोग गर्न सफल बने।

जुन अत्यन्त सस्तो, सरल र लक्षित गरिएको जैविक अणुहरू छिटो पत्ता लगाउन सक्ने उपाय बन्न सक्यो । फलतः आज जुनकीरीको फोटिक अंगबाट प्राप्त गरिने लुसी–फिरिन र लुसी–ज्ञफिरेज क्यान्सर, स्ट्रोक, एड्स, स्वतः प्रतिरक्षाका विकार, रगतका









विभिन्न रोग, हृदयाघातको क्षति यकिन गर्न उपयोगमा आउँछ। त्यसमा पनि अति महत्वपूर्ण प्रकृतिको स्नायुहरूको क्षति हुने अल्जाइमर जस्ता रोग तथा कोषलाई मार्न वा बढ्न नदिनका लागि औषधीको प्रयोग गर्न आवश्यक पर्ने अन्य विकारबारे परीक्षणमा समेत लुसी–फिरिन र लुसी–फिरेज उपयोगमा आउने गरेको छ।

बायोलुमिनिसेन्ट रासायनिक प्रतिक्रियामा संलग्न हुने लुसी–फिरिन एक फोटो–प्रोटिन हो जसले प्रकाश निकाल्छ। लुसी–फिरिनले पहेँलो वा हरियो प्रकाश बनाउनका लागि चार्ज आयोनको आवश्यकता पर्छ। जुनकीरीको शरीरको मनोवैज्ञानिक, भौतिक र रासायनिक प्रतिक्रिया तथा अझै राम्रोसँग बुझी नसकिएको प्रतिक्रिया मार्फत लुसी–फिरेज नामक









इन्जाइमको सहजीकरणमा प्रकाश बन्ने प्रक्रियाहरू ट्रिगर हुने गरेको भेटिएको छ ।

समग्रमा रासायनिक उत्प्रेरक इन्जाइम लुसी–फिरेज अक्सिजनसँगै जोडिएर सब्सट्रेट प्रोटिन लुसी–फिरिनसँगको रासायनिक प्रतिक्रिया सम्पन्न गराएर प्रकाश उत्पादन सम्भव पार्छ । अक्सि–लुसी–फिरिन र पानी सहउत्पादनका रूपमा पैदा हुन्छ ।

भाले–पोथीको मिलन र मौसमी सम्भोगमा रमाउने जुनकीरी एक सम्भोगको मौसमदेखि अर्को सम्भोगको मौसमसम्म एक–दुई वर्ष मात्र बाँच्ने गर्छ। सम्भोगको मौसममा तसर्थ प्रायः पुरुष जुनकीरीहरू आफ्नो सिकारीबाट बच्न र सम्भोगका लागि विपरीत लिंगी साथीलाई आफूतर्फ आकर्षण गर्न प्रकाश निकाल्ने अनुमान गरिन्छ ।






समुद्रमा हुने ऐङलर फिस नामक एक प्रकारको माछाले समेत प्रकाश उत्पादन गर्छ । गहिरो समुद्रमा एकातर्फ सूर्यको प्रकाश पुग्दैन भने अर्कोतर्फ पानीको उच्च दबाब र धेरै कम तापक्रम हुने गर्छ । उक्त स्थानमा जीविकोपार्जन गर्ने ऐङलर फिस नामक जातिको पोथी माछा जैविक रूपमै प्रकाश उत्पादन गर्ने बायोलुमिनिसेन्ट गुणयुक्त हुन्छन् ।

आफ्नो शरीरको माथिल्लो भागमा रहेको एन्टेना जस्तो भागमा बस्ने ब्याक्टेरिया र आफू दुवैलाई फाइदा पुग्ने गरी जीवित रहेको सिमबायोन्ट ब्याक्टेरियाको सहयोगमा ऐङलर फिसको जुँगा जस्तो भागमा प्रकाश उत्पन्न हुन्छ ।

ठूलो मुख भएको पोथी ऐङलर फिसको मुखमाथि









रहेको प्रकाशको कारण आकर्षित हुने जीवहरू ऐङलर फिसको मुखमा आफैँ पर्न जाने हुँदा कम परिश्रम गरेर नै खान र आफ्नो जीविका गर्न उक्त प्रकाशले ऐङलर नामक माछालाई सहयोग गर्छ ।

तुलनात्मक रूपमा हर्दा भाले जुनकीरीले उत्पादन गर्ने प्रकाश जुनकीरी आफैँले उत्पादन गर्ने जैविक प्रकाश हो। ऐङलर फिस नामक पोथी माछाको जुँगामा उत्पादन हुने प्रकाश भने त्यहाँ टाँसिएर रहने माछामा आश्रित रहने ब्याक्टेरियाहरूको जैविक प्रकाश हो । जबकि नाग–मणिबाट प्राप्त हुने प्रकाश भने पृथ्वीमा पाइने एक रेयर–अर्थका रूपमा रहेको सूर्यको किरणसँग संवेदनशील रहने विशेष प्रकारका क्लोरोफेन नामक पत्थर वा मिनरलबाट प्राप्त हुने अजैविक मणिको प्रकाश हो ।








सर्पहरूको राजासमेत भनिने नाग राजा वा कोब्रालाई कैदमा उत्तम पालन पोषण गरिराख्दा २० देखि ३० वर्षसम्म मात्र बाँचेको रेकर्ड छ। जंगलको संघर्षपूर्ण जीवन उजाड स्थान, अभाव र अन्य परिस्थितिसँगको नियमित जुधाइको अवस्थामा तिनीहरूमा हुने धेरै संख्याको शिशु मृत्युदर, रोगहरू, सिकारीहरू, खराब मौसम, दुर्घटना वा खानाका लागि प्रतिस्पर्धाले निम्त्याउने मृत्युदरका कारण तिनीहरू लामो समय बाच्ने सम्भावना रहँदैन। त्यसैले तिनीहरू कैदको पूर्ण पालनपोषणको अवस्थाभन्दा धेरै बाँच्ने स्थिति देखिंदैन र भेटिएकोसमेत छैन ।

कुनै जमनामा रेयर अर्थको खानी भएको स्थान हुँदै बहने नदी जब अर्कै बाटो बग्छ वा सुक्छ त्यहाँ










नदीको बगेको डोब तथा जमिनमाथि र भित्र सुक्खा ढुंगाका बगरहरू भेटिने गर्छ। उक्त बगरहरू क्लोरोफेनका चामलका गेडा जस्तै अन्दाजी दुई सेन्टिमिटर लम्बाइ र दुई सेन्टिमिटर चौडाइका चार–पाँच ग्राम जति तौलका ससाना गेगरहरूसमेत मिसिएका हुन्छन्। त्योभन्दा ठूला गिट्टी वा साना बालुवाका रूपमा समेत उक्त विशेष प्रकारका क्लोरोफेन मणिहरू रहने गर्छन्। यस्ता स्थानहरू श्रीलंका, बर्मा, उराल (साइबेरिया) आदि जस्ता ठाउँमा धेरै पाइने बताइन्छ ।

श्रीलंका, भारत, नेपाल आदि स्थानमा उक्त क्लोरोफेन मणिहरूलाई सरपेन्ट स्टोन, नागढुंगा, कोब्रामणि वा नागमणिसमेत भनिन्छ । साइबेरियामा भेटिएको उक्त प्रकारको क्लोरोफेन







हातको तातोको प्रभावबाट सेतो चमक, उम्लेको पानीको प्रभावले हरियो प्रकाश र जलेको कोइलाको तातोको प्रभावले पन्ना जस्तो हरियो प्रकाश दिने गरेको भेटिएको छ । भर्जिनियाको अमिलिया कोर्ट हाउसमा रहेको क्लोरोफेनलाई लामो समयदेखि थर्मोलुमिनिसेन्टका रूपमा मान्यता प्राप्त छ ।

किनकि यो बायोलुमिनिसेन्ट जस्तो जीवले उत्पादन गर्ने प्राकृतिक किरण नभएर तातोको कारण निर्जीव पदार्थले उत्पादन गर्ने थर्मोलुमिनिसेन्ट हो । उक्त क्लोरोफेनमा युभी–रे अर्थात् पराबैजनी किरणहरूको सम्पर्कमा ल्याउँदा निलो प्रकाशसहित चम्कने गर्छ । त्यो तातोसँग यति संवेदनशील छ कि मानव हातको तातोबाट समेत हरियो चमक वा











प्रतिदीप्ति दिने गर्छ ।

सर्पको जातिहरूमा सम्भवतः कोब्रा एक मात्र सर्पको जाति हो जसले किराहरू खाने गर्छ । कोब्राहरू कमिला, फट्यांग्रा, विभिन्न प्रकारका बिटल वा किरा आदि खाने गर्छ। यो मध्ये कोब्राको प्राथमिकतामा राति सजिलै पकड्न सक्ने जुनकीरीहरू तथा प्रकाशमा आकर्षित हुने किराहरू खाएर बाँच्ने पर्छ । अत्यन्त साना किराहरू, फट्यांग्रा, कमिला आदि पकडिएर दैनिक पेट भर्ने काम कोब्राका लागि अत्यन्त झन्झटपूर्ण र थकाइलाग्दो कार्य हो ।

कीटविज्ञहरूका अनुसार उड्ने र प्रकाश निकाल्ने जुनकीरीहरू भाले प्रजातिको हुने गर्छ । पोथी जातका जुनकीरीहरू भालेभन्दा कम हुने, धेरै ठूला









हुने र उड्न प्रायः नसक्ने प्रकृतिका हुन्छन् किनकि तिनीहरूसँग प्राथमिक प्वाँख मात्र रहने गर्छ । तसर्थ तिनीहरू भुइँमा घाँसमा चुपचाप शान्तसँग बस्छन्। पोथी जातका जुनकीरीले रातमा हरियो बत्ती उत्सर्जन गर्छन् जुन भाले जुनकीरीको तुलनामा धेरै चहकिलो हुन्छ । कहिले फिका हुने र कहिले चम्किने गरी नियमित अन्तरालहरूमा उत्सर्जन हुने पोथी जुनकीरीको प्रकाशले आकाशमा उडेका भाले जुनकीरीहरू पोथी जुनकीरीतर्फ आकर्षित हुने गर्छन्। पोथीको खोजीमा उक्त प्रकाशको निकटतामा पुग्छन्।

क्लोरोफेनले समेत अँध्यारोमा गाढा हरियो रङको प्रकाश उत्सर्जन गर्ने गर्छ जुन पोथी जुनकीरीले उत्सर्जन गर्ने प्रकाश जस्तै देखिन्छ । क्लोरोफेनले









दिने प्रकाशलाई देखेर भाले जुनकीरीलाई पोथी जुनकीरी रहेको भ्रम दिन सम्भव तुल्याएर सजिलै आफ्नो सिकार पार्न सकिने कुरा कोब्राहरूले जेनेटिक वा परम्परागत रूपमै सिकेका हुन्छन्। हरियो रङको प्रकाश देख्यो कि पोथी जुनकीरी भेटिएको भ्रममा पर्ने भाले जुनकीरीले गल्ती गर्ने कमजोरीलाई कोब्राले उपयोग गर्ने गर्छ। अनुभवबाट कोब्रा जति धेरै उमेरको भयो त्यति क्लोरोफेनको जम्मा गर्ने, सुरक्षा गर्ने र उपयोग गरी जुनकीरीलगायत कमिला, फट्यांग्रा, विभिन्न प्रकारका बिटल आदिको सजिलै सिकार गर्ने काइदा सिक्ने गर्छन् ।

सुरुमा सिकारको खोजीमा सुक्खा नदीको तट आदिमा घुम्दै गर्दा त्यहाँ रहेको चम्किलो








क्लोरोफेनको टुक्राको चमकमा आकर्षित भएर जम्मा भएका किरा, लार्भा आदि खाने गर्छ । दैनिक सिकार खोज्ने क्रममा चम्किलो क्लोरोफेनको टुक्राको वरपर सजिलै सिकार भेटिने अनुभवले कोब्रालाई भोक लग्यो कि त्यहाँ पु¥याउने बानी विकास गरिदिन्छ र त्यहाँ दैनिक फर्किने गर्छ । केही समयमा उक्त स्थानमा क्रमशः अन्य धेरै कोब्रासमेत आउने र खानका लागि प्रतिस्पर्धा हुने गर्छ ।

आन्तरिक प्रतिस्पर्धाले कोब्राले आफ्नो लागि छुट्टै क्लोरोफेनको व्यवस्था गर्न र एकाधिकार जमाउन उक्त क्लोरोफेन आफैँसँग बोकेर हिँड्छ र यसलाई आफ्नो महत्वपूर्ण खजानाका रूपमा जोगाएर राख्न सिक्छ । जसलाई आफ्नो निश्चित स्थानमा लुकाउने र चाहिँदा प्रयोग गर्ने गरी क्लोरोफेनको उपयोग गर्न









कोब्राले सिक्छ । जुन उसको खाने मूल आधारमा परिवर्तन हुन्छ । हुन पनि क्लोरोफेन कोब्राका लागि खाना प्राप्ति गर्ने सजिलो साधन बनिदिन्छ ।

नियमित खानाको जगेडा गर्न अब कोब्राले क्लोरोफेनको टुक्राहरू रातको समयमा घाँसमा जम्मा गर्ने गर्छ र त्यही आरामसँग बस्छ । उक्त प्रकाशसँग आकर्षण भएका किराहरू जब प्रकाशतर्फ जान्छन् तब कोब्राको मुखमा पर्न बाध्य हुन्छन् । कोब्राले सजिलै किराहरू समात्न र खान सक्छ ।

अनुसन्धानमा जब भर्खरको सानो कोब्राले क्लोरोफेनको टुक्राहरू भेट्छ, त्यसले उक्त टुक्राहरू आफूसँगै लिएर जाने गरेको भेटिन्छ । यसले कोब्राहरूले क्लोरोफेनको टुक्राहरू आफूलाई खाना










खोज्न सजिलो हुने गर्छ भन्ने ज्ञान विरासतबाट अथवा परम्परागत स्मरणबाट प्राप्त गर्ने कुरातर्फ इंगित गर्छ ।

कोब्रा जब धेरै बूढो हुन्छ तब उसको खानका लागि सिकार खेल्ने तागत क्षीण बनेको हुन्छ । धेरै उमेरको कोब्राले धेरै क्लोरोफेनको टुक्राहरू जम्मा गर्ने र धेरै प्रकाशले सिकार सजिलो पारिदिने गर्छ । यदि कसैले कोब्राले जीवनभर लगाएर जम्मा गरेको उक्त क्लोरोफेनको टुक्राहरू देखेर लगिदिएमा धेरै उमेरको कोब्रा खानाको अभावमा मर्ने स्थितिसम्म आउने गर्छ।













# ऊर्जामा आधारित औषधीय प्रणाली आयुर्वेद

परम्परागत वैदिक विज्ञानबारे केही प्रस्ट हुन आयुर्वेदिक चिकित्सा र आध्यात्मिकतामा क्वान्टम फिजिक्स कसरी जोडिएको छ भन्ने जानकारी राख्न जरुरि हुन्छ। तीन प्रमुख विषय आयुर्वेदिक चिकित्सा, आध्यात्मिकता र क्वान्टम फिजिक्स सरसर्ती हेर्दा एकापसमा निकै टाढाका विषय जस्तो लाग्छ । जब तपाईं यिनीहरूबारे निकै गहिरिएर अध्ययन गर्नुहुन्छ तब तिनै पक्ष मानवीय इलेक्ट्रोम्याग्नेटिक फिल्डको माध्यमबाट गैररेखीय रूपमा प्रस्टसँग जोडिएको अनुभूति गर्न सक्नुहुन्छ ।











जब तपाईं संवेदनशील बन्नुहुन्छ, तपाईंले यसको अनुभूतिसमेत गर्न सक्नुहुन्छ । सरल रूपमा बताउँदा आयुर्वेदिक चिकित्सा, आध्यात्मिकता र क्वान्टम फिजिक्स तीनै क्वान्टम युनिफाइड फिल्डमार्फत जोड्ने गर्छ । व्यक्तिको क्वान्टम युनिफाइड फिल्डले गैररेखीय अर्थात् ननलिनियर मानवीय रेडिएसन (औरा) निकाल्छ। मानव औँराको उच्च फ्रिक्वेन्सीको इलेक्ट्रिक फिल्ड प्रयोग गरी सबैले देख्ने गरी फोटोसमेत खिच्न सकिन्छ । किर्लियन फोटोग्राफी भनिने उच्च फ्रिक्वेन्सीको इलेक्ट्रिक फिल्ड प्रयोग गरी फोटो खिच्दा मानव शरीरबाट नियमित रूपमा प्रसारण हुने औराको फोटनहरूलाई धेरै गुणा वृद्धि गरी सबैले देख्न सक्ने गरी फोटो खिच्न सम्भव बनाउँछ।













शरीरका लगभग ९९ प्रतिशत एटमहरू हाइड्रोजन, कार्बोन, नाइट्रोजन र अक्सिजनका एटमले बनेका हुन्छ। हामीले खाने खाना, पेय पदार्थ र श्वासमा समेत पोटासियम – ४० र कार्बन – १४ जस्ता रेडियोन्युक्लाइडस हुन्छ । जुन शरीरका मलिकुलसँग मिल्छ र विखण्डन भई रेडिएसन निकाल्छ । जस्तै पोटासियम–४० विखण्डन हुँदा यसले इलेक्ट्रोनको एन्टिमेटर्स ‘पोजिट्रोन’ बनाउँछ। एटमको इलेक्ट्रोनसँग जबरजस्त ठोक्किन गई गामा–रेको फर्ममा रेडिएसन निकाल्छ । यसरी हाम्रो शरीरले आन्तरिक रूपमा रेडिएसन (औरा) निकाल्छ।

कुनै पनि निर्जीव वा सजीव वस्तुको वरिपरिको हावा इलेक्ट्रिफाइड गरिन्छ (वा हुन्छ) अर्थात् विद्युतीय







विकिरणमार्फत इलेक्ट्रिफाइड बन्छ, उक्त वस्तुको वरिपरिको इलेक्ट्रिफाइड हावा अथवा विद्युतीय विकिरणमा रहेका प्रकाशका प्याटर्नहरू किर्लियन फोटोग्राफीको माध्यमबाट क्याप्चर गरी फोटो खिच्न सकिन्छ । मानवको शरीरले नियमित निकाल्ने प्रकाशको किरण (औरा) लाई समेत यो प्रविधिबाट फोटो खिच्न सम्भव बनेको हो।

एलोपेथिक औषधी विज्ञानका हालको अभ्यासमा मानव शरीरका विभिन्न प्रकारका ऊर्जालाई आणविक चिकित्सा, रेडियोलोजी र इमेजिङ जस्ता डायग्नोस्टिक्स विधिहरूमा उपयोग हुने क्वान्टम फिल्ड डाइनामिक्सको उपयोग गरेर मापन गरिन्छ। उक्त डायग्नोस्टिक प्रक्रियाले दिने बिरामीको स्वास्थ्यसँग सम्बन्धका धेरै जानकारी प्राप्त गरेपश्चात्











बिरामीको रोगको पहिचान वा अनुमान गरिन्छ ।

क्वान्टम फिल्ड डाइनामिक्स विधिबाट रोगको पहिचान भएपश्चात् बायोफिजिक्स थेरापीहरूको उपयोगबाट सूक्ष्म ऊर्जामा रहेका गडबडीको निदानका उपाय अपनाउनु कतिपय अवस्थामा अत्यन्त सान्दर्भिक देखिन्छ । तर पनि एलोपेथिक औषधी विज्ञानमा उपचारका लागि बायोफिजिक्स थेरापीको सट्टा पुनः जैविक रसायन मतलब बायोकेमेस्ट्रीमा नै फर्किने गरिन्छ । जसले गर्दा विश्वव्यापी रूपमै ठूलो संख्यामा बिरामीहरू आफ्नो रोगको उपचारमा एलोपेथिक औषधी विज्ञानमा भन्दा इनर्जी मेडिसिनको विकल्पतर्फ अधिक आकर्षित भएको भेटिने गर्छ ।

क्वान्टम फिजिक्सले हामीलाई ऊर्जा र पदार्थबीच







कुनै भिन्नता नरहेको सिकाउँछ । मानव शरीरका सबै प्रणालीमा परमाणुको (एटम) स्तर देखि अणुको (मलिकुल) स्तरसम्म सबै नै नियमित निश्चित गतिशीलतामा रहेर शरीरको सन्तुलन कायम गर्ने गरिन्छ । मानिसको स्वास्थ्य र स्फूर्तता कसरी कायम राख्छ सकिन्छ भनेर बुझ्नका लागि निश्चित गतिशीलतामा रहने सूक्ष्म ऊर्जाको कसरी सन्तुलन वा रिजोनेन्स कायम गराउन सकिन्छ भन्ने जानकारी प्राप्त गर्नु अनिवार्य हुन्छ ।

इनर्जी मेडिसिन अर्थात् ऊर्जामा आधारित औषधीय प्रणालीमा भने शरीरका प्रणालीलाई होमियोस्टेसिस वा सन्तुलनमा फिर्ता ल्याउन ज्ञात सूक्ष्म ऊर्जाको फिल्डको उपयोग गरी प्रणालीहरूमा भइरहेको ऊर्जाबारे सूचना संकलन गरी असन्तुलनको








आकलन गरिन्छ । रोगको पहिचानपश्चात् मानव स्पर्श वा कुनै उपकरणको सहयोगमा सूक्ष्म ऊर्जामा रहेका गडबडीको उपचार गर्ने विधि अवलम्बन गरिन्छ । यसरी गरिने इनर्जी मेडिसिनको भविष्य एलोपेथिक औषधी विज्ञानले आफ्नो चिकित्सकीय उपचार पद्धतिमा बायोकेमिस्ट्री र भौतिक विज्ञानलाई कुन हदसम्म जोडेर संयुक्त उपचार विधि विकास गर्ने क्षमतामा राख्छ त्यसैमा निर्भर रहनेछ ।

मानवसहित सबै जीवित प्राणीले अत्यन्त मलिनो प्रकाशको उत्सर्जन गर्ने गर्छन् । जसलाई बायोफोटन उत्सर्जन भनिने गर्छ । मानव बायोफोटन उत्सर्जनको पहिचान गर्ने रोबस्ट तरिका, तिनीहरूको सामान्य लक्षण, फरकफरक अवस्थामा तिनीहरूमा हुने परिवर्तन, उत्सर्जन प्रणालीमा










देखिने विविधता आदिबारे गहिरो अध्ययन गर्न सक्दा भविष्यमा मानव बायोफोटन उत्सर्जनका लक्षणहरूको मापनमार्फत मानव शरीरको रोगका कारण पहिचान गर्न, चिकित्सकीय उपचार विधि विकास गर्न सम्भव हुन सक्ने बलियो आधार देखिएको छ ।

मानव सेलहरूमा एक निश्चित प्रकारका विशिष्ट रिसेप्टर्स हुने गर्छ। सेलको उक्त रिसेप्टर्समा प्राप्त हुने संकेतका आधारमा सेलहरू विभिन्न तरिकाले सक्रिय हुने गुण देखाउँछन् । जस्तैः उदाहरणका लागि इन्सुलिन हर्मोनको संकेत प्राप्त गर्नासाथ मांसपेशीका कोषिकाहरू हतारहतार रगतबाट ग्लुकोज लिने र भण्डार गर्ने काममा लाग्छन्। त्यही इन्सुलिन हर्मोनको संकेत प्राप्त गर्दा कलेजोको













कोषहरू भने ग्लुकोजको उत्पादन रोक्ने गर्छन् । जसले गर्दा हाम्रो शरीरले रगतमा ग्लुकोजको मात्राको नियमन र नियन्त्रण हुने गर्छ । शरीरको यस्तो प्रकारको बायोलोजिकल प्रक्रिया जसमा एक सेलले सेलबाहिरको पदार्थसँग आफ्नो सतहभित्र र सतहमा पाइने अणुहरूमार्फत पठाउने संकेतहरूलाई सिग्नल ट्रान्सडक्सन भनिन्छ ।

सेलहरू सामान्यतया रासायनिक पदार्थको प्रयोग गरी संकेतहरूको सञ्चार गर्ने गर्छन् । संकेत पठाउने सेलले प्रोटिन वा अन्य अणुहरू उत्पादन गरी आफ्नो सतहबाट सेलबाहिर द्रवित गर्छ । उक्त केमिकल सेलबाहिरको तरल पदार्थमा तैरिएर छिमेकी सेलको विशिष्ट रिसेप्टर्समा पुग्छ। जब पठाएको संकेत वा लिगान्ड्स लक्ष्य गरिएको सेलको रिसेप्टरमा










बाँधिन्छ, यसले सेलभित्र आन्तरिक परिवर्तन गरी रिसेप्टरको आकार र गतिविधि परिवर्तन गरी उक्त संकेत वा लिगान्ड्सलाई सेलभित्र पु¥याउँछ । छिमेकी सेलभित्र उक्त लिगान्ड्स आन्तरिक संकेतका रूपमा परावर्तन भई लक्षित प्रतिक्रिया उत्पन्न गराउँछ ।

क्वान्टम फिल्ड डाइनामिक्स विधिहरूमा मानव बायोफोटन उत्सर्जन, कोषिकाहरूको सिग्नल ट्रान्सडक्सन तथा र कोषिकाहरूबीच हुने आन्तरिक संकेतको सञ्चार प्रणालीका आधारमा मानव स्वास्थ्य र स्फूर्तिको पहिचान तथा उपचारमा सहयोगी हुने व्यापक रूपमा स्विकार्ने गरिन्छ। भविष्यको परिप्रेक्ष्यमा विभिन्न सेलको भोल्टेज क्षमता, तिनीहरूबीचको सञ्चार आदिले स्वास्थ्य र











स्वास्थ्यसँग सम्बन्धित सन्तुलन तथा विकृतहरूसँग कसरीकस्तो साइनो राख्छन् भन्ने बुझ्न सक्दा अत्यन्त लाभदायी हुनेछ।

मानव बायोफोटन उत्सर्जन लगायतका उल्लिखित विधिको सैद्धान्तिक पक्षबारे जानकारी राखी व्यवहारमा विस्तार गर्न अझै धेरै अध्ययन अनुसन्धानको जरुरतको आवश्यकता रहेको देखिन्छ। मानिसमा हुने सामान्य गडबडी, कुनै रोग देखिँदाको अवस्था तथा नियमित बुढ्यौलीले छोप्दै जाँदा उसको शरीरमा रहने ऊर्जाको प्याटर्नमा देखिने फरकपन आदिको अध्ययनमार्फत उचित सुधारात्मक तथा उपचारात्मक सुधार पद्धतिको विकास गर्नसमेत मानव बायोफिल्डमा (वा मानव ऊर्जाको क्षेत्र) आधारित इनर्जी मेडिसिन उपचार









पद्धतिको ठूलो भूमिका हुने निश्चित छ ।

आयुर्वेदको सन्दर्भमा भने कुनै निश्चित सेल वा अत्यन्त सूक्ष्म निकायको एक्लो कार्यभन्दा तिनीहरूले समूहमा गर्ने कार्यको सामूहिक प्रतिफल मानिसले महसुस गर्ने गरी ऊर्जा सन्तुलन राखी स्वस्थ राख्न वा ऊर्जाको सन्तुलन खस्कन गई विभिन्न दोष अर्थात् विकृति उत्पन्न गर्न जिम्मेवार हुने गर्छ। उक्त सैद्धान्तिक आधारलाई दैनिक जीवन पद्धति र स्वास्थ्य उपचारमा व्यावहारिक रूपमा सम्भव तुल्याउन प्रतिरोधात्मक, सुधारात्मक तथा उपचारात्मक साइको – न्युरो –इम्युनोलजी (दिमाग तथा शरीर) जीवन पद्धति, हिलिङ खाद्य, आयुर्वेदिक उपचार तथा औषधीय पद्धति विकास गरिएको छ ।









जस अन्तर्गत स्नायु तथा ऊर्जाका चक्र प्रणाली मात्र नभएर विचार, आहार, हर्बल वा प्राकृतिक उपचार, ध्यान वा मेडिटेसन, योग तथा यौगिक श्वासप्रश्वास विधि आदिको संयोजन मार्फत ऊर्जाको सन्तुलन गरिने विधिको उपयोग गरिने गर्छ ।

क्वान्टम युनिफाइड फिल्डको अवधारणालाई कम्पन शक्ति भन्ने आयुर्वेदमा कम्पन शक्ति तथा त्यसको सहउत्पादन शक्तिहरूको गठजोड बाट बन्ने पञ्च तत्वद्वारा नै संसारका हरेक पदार्थ निर्मित रहेको मान्यता लिइन्छ। तिनै पञ्चतत्वको संयोजनबाट कफ, पित्त र बात दोष निर्माण भएर बन्ने शरीरमा चेतन शक्ति र जीवन्त शक्ति जोडिएर सम्पूर्ण रूपमा मानव अस्तित्व सम्भव बनेको छ। एक मानव कफ, पित्त र बात नाम गरिएका त्रिदोषको सन्तुलित






संयोजनले स्वस्थ रहने र सन्तुलन गुमाउँदा विकृतिको सिकार बन्ने अवधारणा आयुर्वेदको अवधारणा हो ।

आयुर को अर्थ जीवन र वेदको अर्थ ज्ञान रहेको आयुर्विज्ञानको आयुर्वेदमा ब्रह्माण्डसँग हार्मोनीमा रहेर अधिकतम स्वास्थ्य प्राप्त गर्ने दृष्टिकोण र कार्यविधि उल्लेख छ। जसको आधारभूत सिद्धान्तमा इनर्जी मेडिसिन अर्थात् ऊर्जामा आधारित औषधीय प्रणाली समेत समावेश रहेको प्रस्टसँग अनुभूति गर्न सकिन्छ। त्यसैले त आयुर्वेदलाई नयाँ पुस्ताको मुख्य रोजाइको उपचार तथा जीवन पद्धति ठान्ने गरिन्छ ।











# महामारी र चरक संहिता

महामारीको संक्रमणका कारण बसिने आइसोलेसको समयलाई चरक संहिताले आफू आफैंभित्र गएर आफ्नो जरुरतको पहिचान गर्ने, जरुरत अनुभूति गर्ने र दैनिक तालिका बनाएर जरुरत पूर्ति गर्ने उपायको अनुसरण गर्ने समय मान्दा उत्तम हुनेछ। घरमा रहेर जीवन र जगत्बारे गहिरिएर बुझ्ने अवसर हो आइसोलेसनको समय। जतिबेला कुनै व्यक्तिलाई विफलता हात लागिरहेको हुन्छ त्यतिबेला उसलाई दिइने एक मात्र प्रोत्साहनको शब्द उसको सफलता पछि दिइने कुनै पनि हदको प्रशंसा र उत्सवभन्दा बढी प्रभावकारी हुन्छ ।तसर्थ विफलतामा साथ दिने कार्य समाजको





धर्म ठानिने र स्वागतयोग्य कदम हुनुपर्ने भएतापनि तपाईं हाम्रो परिस्थिति आज त्यस्तो छैन। किन होला? त्यसमा तपाईं र मेरो के भूमिका होला? समाजको के भूमिका होला? अनि के तपाईं, म र समाज बाहेकअन्य पक्ष पनि होलान्, जसको यसमा भूमिका रहला? यो र यस्ता सामान्य प्रश्नबारे घोत्लिने समय ।

मानवता के हो र मानिसमा रहेको करुणाको उपयोग कहाँ गर्ने भन्नेपाठ हाम्रो स्कुलका नैतिक शिक्षाको पाठ्यपुस्तकमा कहिल्यै अटाउन सकेन। आफ्नै जीवनमा भोगिएको सामान्य भन्दा सामान्य परिस्थिति र घटनाक्रमका कारक, कारण र परिणामको महसुस गरी कसरी जीवनकै लागि उपयोगी हुने पाठ सिक्ने भन्ने कलामा पनि हामीले





समाजलाई कहिल्यै अभ्यस्त पार्न भ्याएनौं। यो क्षेत्रमा काम गर्न चाहँदा पूरा मैदान खाली देखिँदा पनि हामी यो सुवर्ण अवसरलाई सदुपयोग गर्न उत्साहित बन्न सकेनौं।

विगतबाट सिकेर भविष्यमा आइलाग्ने गतिविधि विरुद्ध बुद्धिमत्ता पूर्वक जाइलाग्ने रणनीति बनाउनुपर्ने मानव चरित्र विपरीत ‘हिँड्दै छ अनि पाइला मेट्दै छ’ को हालतमा हामी पुगिरहेका छौं । जस्तै कोभिड–१९ कै हालतका पहिले कहिल्यै नसुनिएको नजानिएको प्रकृतिको महामारी मानव इतिहासमा मानिसले धेरैचोटि भोग्दै आएकै हो। महामारीका विगतका त्यस्ता श्रृंखलाहरू उपलब्ध ज्ञान, स्रोत, साधन र परिस्थिति अनुरूप भोगेर, त्यसविरुद्ध डटेरै पृथ्वीमा मानव अस्तित्व सुचारु गर्न





सफल बनिएकै हो।

महामारीका सम्बन्धका हाम्रा विगतको सबै अनुभवका साझा अनुभव के रह्यो भने वास्तविक रोगले भन्दा रोगको डरले सिर्जना गरेको त्रासका कारण धेरै मानिसमर्ने क्रम पहिला हरेक पटक भए । यस पटक पनि त्यही दोहोरिँदै छ । यसको अर्थ भोलि पनित्यसै हुने लगभग बुझियो । यो अवस्थामा यसको चुरो कारण के र समाधानको उपाय के भन्नेबारे विमर्श गर्नु जरुरी देखियो।

मानिसहरू जतिबेला सबै कुरा आफ्नो नियन्त्रणमा छ भन्ने भ्रममा पुग्छन् तब मानव मानव बीचकै घिनलाग्दो प्रतिस्पर्धामा उत्रने गर्छन् । एकातर्फ प्रकृति दोहन कार्यमा लिप्त हुने, अर्का तर्फ संसारमा आफ्नै अस्तित्व कायम राख्न अनिवार्य रहनुपर्ने









आधारभूत संरचनाका रूपमा रहेको मानवताको कखरा समेत भुलिदिन्छ । मानव चोला जस्तै सञ्चालनका लागि अमूक चिजहरू सञ्चालनगर्ने अमूक तौरतरिका र नियम रहन्छन् भन्ने होस गुमाउन पुग्छ। प्राकृतिक नियमको अनदेखा गर्दै जब मानिस जबरजस्ती अगाडि बढ्छ, प्रकृतिलेआफ्नै तरिकाले केही न केही सबक सिकाएर मानव हैसियत प्रस्टइदिन्छ। हरेक मानव ज्यादतीमा गतिलो सबक सिकाएर प्रकृतिले मानिसलाई आफ्नो खुट्टा दरिलोसँग जमिनमा टेक्न सिकाएको देखिन्छ।

प्रकृतिमा ऊर्जा न उत्पन्न हुन्छ न नष्ट नै । मात्र एक रूपबाटअर्को रूपमा परिवर्तन हुने गर्छ । प्रकृतिमा संकलित ऊर्जा प्रकृतिमा रहेका हरेक प्राणी,








वनस्पति रअन्य निर्जीव वस्तुले शक्तिको स्रोत हुने गर्छ । प्रकृतिको ऊर्जा प्रकृति र त्यहाँरहेका जीव वा निर्जीव वस्तुबीच शक्ति एक रूपबाट अर्को रूपमा परिवर्तन हुँदै लिने दिनेक्रम चल्ने गर्छ । प्रकृतिका रहेका सजीव र निर्जीव एवं अभौतिक पदार्थबीच समेत एक रूपबाट अर्को रूपमा शक्तिको परिवर्तन हुने विधिबाटै शक्तिको लेनदेन हुने गरेको छ ।

प्रकृतिमा सन्तुलित रूपमा रहेका दुई वस्तु आफ्नो आन्तरिक शक्तिमा आएको विचलनका कारण जब ध्रुवीकरण गर्न कोसिस गर्छ तब प्राकृतिक ऊर्जाले तिनीहरूलाई पुनः संयोजन गर्न कोसिस गर्छ। पुनः संयोजनगरी नयाँ सन्तुलन कायम गराउँछ। प्रकृति आफैँमा विशाल रहेकाले यसका सबै चिजलाई सन्तुलनमा राख्ने आफ्नै विशेष तरिका रहने गर्छ।









प्रकृतिको ऊर्जाले जुन हदमा ध्रुवीकरण हुँदै गरेको विभिन्न वस्तुबीच पुनः नयाँ सन्तुलनमा फर्कन फर्काउने हैसियत राख्छ, त्यो क्षमता मानिसले राख्दैन।

ब्रह्माण्डमा विभिन्न स्तरका चेतना मतलब कन्ससनेस अस्तित्वमा रहने गर्छ। विभिन्न स्तरका चेतन एकापसमा सन्तुलित रूपमा शान्त र निश्चल रहेर मिलेर बस्न सक्ने प्रकृतिको हुँदैन । एक स्तरको चेतना अर्को स्तरको चेतनासँग फरकफरक अस्तित्वमा एकले अर्कोलाई प्रभाव पार्ने गरी जोल्टिएर रहने गर्छन् । किनकि तिनीहरू सबै ब्रह्माण्डभित्र एकापसमा सम्पर्कमा रहेरै समान शैलीमा विकसित बनिरहेका हुन्छन्।

प्रकृतिको आफूले आफूलाई जसरी पनि सन्तुलनमा








फर्काउने प्रवृत्ति रहन्छ। जसका कारण विभिन्न स्तरका चेतनाबीच असन्तुलन भित्र सन्तुलन कायम गर्न चेतनाहरू जकडिएर (इनटयांगलमेन्ट) एकापसमा अनुबन्धित भएर रहन अनिवार्य हुन्छ । यो पक्षबाट विश्लेषण गर्दा चेतना आफैं प्रकृतिमा असन्तुलन उत्पन्न गराउन सक्षम रहने गर्छ। चेतनाको कारणबाट प्रकृतिमा हुने असन्तुलनका लागि मानिस जिम्मेवार रहने बुझिन्छ ।

आज जो कोहीले पनि भन्ने गरेको कुरा हो मानव जातिले पृथ्वीमा रहेको जंगल, प्राकृतिक सम्पदा माथिको दोहन र पृथ्वी निवासी मानिस मानिस बीचमै समेत शक्तिको बाँडफाँट, स्रोत साधनको बाँडफाँट असमान गरिदिएर धनी र गरिबको स्थिति सिर्जनागरी ब्रह्माण्डलाई असन्तुलित बनाइरहेका









छन्। ती कुरामा आंशिक सत्यता छ ।

यो सँगै केही अति महत्वपूर्ण र गहिरो कुराहरू हाम्रो बुझाइको दायरामा आउन सकेको देखिँदैन। कतिपय अवस्थामा आएर पनि छुटेका वा नजरअन्दाज गरिएका भेटिन्छन्। जस्तै मानिसले आफ्नो असावधानी वा नियोजित स्वार्थका कारण पैदा गर्ने भोक, रोग, डर, आतंक, असहायता र असहज मृत्यु जस्ता परिस्थिति, त्यस्ता परिस्थितिका कारण जन्मिन पुगेका नकारात्मक ऊर्जाको प्रसारण र पुनः प्रसारण मार्फत ब्रह्माण्डलाई नै पूर्ण असन्तुलित दिशातर्फ धकेलिदिन सक्ने हैसियत। मानिसका कारण प्रकृतिलाई असन्तुलित दिशातर्फ धकेलिदिने कारक तत्वको निवारणका लागि आशा, भरोसा, आफ्नो क्षमता र आफ्नो स्वास्थ्य माथि




आत्मविश्वास जगाउन सक्के दर्शनको जरुरत। जसले मानिसको दिमाग र चेतनाको पुनः प्रोग्राम गरी मानिसमा मानवता पुनःस्थापित गराउन सकोस् ।

परिवर्तित समय अनुसार मानिसले भोग्नुपर्ने नयाँ प्रकृतिका रोगतथा मनोरोग मानिसको प्रकृतिप्रतिको व्यवहारको प्रतिफलसँग सम्बन्धित रहन्छ । ऐतिहासिक कालखण्डमा हामीले बेहोर्नु परिरहेको विभिन्न रोगका प्रकार उक्त कालखण्ड सम्म पुग्नेक्रममा प्रकृति माथिको मानव दोहनका कारण आएका परिवर्तन नै जिम्मेवार रहेको प्रमाणित भएको छ । जुन मानव निर्मित भौतिक असन्तुलनको प्रतिक्रियात्मक नतिजा हो ।

अर्को तर्फ मनोवैज्ञानिक रूपमा हेर्दा समाजमा मानिसहरू आफूलाई जे रोग लाग्छ भन्ने आन्तरिक









मनोविज्ञान ग्रस्त बनेको भेटिएको छ, तिनीहरू प्रायः तिनै रोगको सिकार बनेको भेटिन्छ। एउटा बिरामीमा बिरामी अवस्थाबाट मुक्त हुन्छु भन्ने दह्रो आत्मविश्वास रहँदा अस्वास्थ्य अवस्थाबाट साँच्चिकै स्वस्थ भएको धेरै अनुभव हामी सँग छ । रोग लागेकै अवस्थामा पनि म यो रोगबाट निश्चित रूपमा पार पाउँछु भन्ने आत्मविश्वास रहेका बिरामी सहजै बाँच्ने गरेको भेटिन्छ । म अब मर्छु भनी आत्मविश्वास गुमाएको बिरामी मर्ने सम्भावना प्रबल देखिएको तथ्य विज्ञानले उजागर गरिदिएको छ । यस प्रकारका मानिसको आफ्नै आत्म विश्वास अनुरूपको नतिजा प्राप्त हुने घटनाहरू मानव चेतनाको स्तरको असन्तुलनको प्रतिफलको परिणाम ठानिन्छ ।









आज विभिन्न कारणबाट मानिसमा आपसी युद्धका लागि तुरुन्त आमनेसामने बनिदिने प्रवृत्ति अचाक्ली बढिरहेको देखिन्छ। त्यसबाहेक विभिन्न बाधा अवरोध सिर्जना गर्ने, भौतिक विरोध प्रदर्शनका गतिविधि सञ्चालन गरी समाजमा सहजै असन्तुलन भित्र्याउने गतिविधि भइरहेका भेटिन्छन् । यस्ता प्रकारका युद्ध वा आन्तरिक कलह ले मानवजीवनको गुणस्तरलाई अनिश्चयमा मात्र धकेल्ने हैन, डरलाग्दो गरी स्खलित पारिदिएको देखिन्छ।

मानिस एक सचेत सामाजिक प्राणी रहेकाले सामाजिक स्मरणमा स्थापित विश्वासको चेतना बिरामीको चेतनासँग जकडिएर बस्ने गर्छ। यो अवस्थामा एक बिरामीको आत्मबल वृद्धि गर्न जरुरी










हुने चेतनालाई बिरामीको पहुँचको समाजको सामाजिक स्मरणमा कैद बनेको चेतनाले प्रत्यक्ष प्रभाव पारिदिने हैसियत राख्छ । सकारात्मक सामाजिक मनोविज्ञान नबोकेको सामाजिक चेतनाले बिरामीमा नकारात्मक चेतना भरिदिन्छ । जुन उसका लागि प्राणघातक समेत बन्न हुन सक्छ । यो अर्थमा समाजको सामूहिक सबलताका लागि मात्र नभएर समाजमा रहेका हरेक सदस्य शारीरिक र मनोवैज्ञानिक तवरमा स्वस्थ रहन हरेक व्यक्तिको पहुँच रहेको समाजको सामाजिक स्मरणमा विश्वासको चेतना स्थापित गराउन अनिवार्य हुन्छ । अन्यथा समाज आफैं निराशावादी बनिदिन्छ।

एक अमूक व्यक्तिको नियन्त्रणमा नरहने सामाजिक गतिविधिले जन्माएको असन्तुलनले पृथ्वीका हरेक









मानिस विभिन्न हदमा प्रभावित बनिरहेका हुन्छन् । असन्तुलनको हदले सीमा नाघिदिँदा जीवनको गुणस्तर मै सम्झौता गर्नुपर्ने हदमा मानिस पुगेको देखिन्छ। दैनिक जीविकाको गुणस्तर निश्चित स्तरभन्दा तल ओर्लिदिँदा मानिस न त स्वस्थ रहन सक्छन त उसको मानवीय व्यक्तित्वमा नै सन्तुलन कायम गरी अघि बढ्न सक्छ। नकारात्मक सामाजिक गतिविधिका कारण जीवनको गुणस्तरमा अकल्पनीय क्षय हुनबाट न्यून गर्न मानिसलाई प्रकृतिकोआशीर्वादका रूपमा आध्यात्मिक, मानसिक र मनोवैज्ञानिक जैविक क्षमता उपलब्ध छ। पृथ्वीमा मानव बाहेक अन्य प्राणीमा यो सुविधा उपलब्ध छ / छैन हालसम्म यकिन हुन सकेको छैन । तर, आफ्नै नाभिको बास्ना नचिन्ने कस्तुरी









जस्तै भोलिको सुख खोज्ने क्रममा आज आफूमा निहित विशाल क्षमताको पहिचान र महसुस गर्न नसकेर मानिसहरू मानवीय व्यक्तित्वको सन्तुलन गुमाउन पुगिरहेका देखिन्छ । मानिसले आफूलाई उपलब्ध आध्यात्मिक, मानसिक र मनोवैज्ञानिक जैविक क्षमताको सही उपयोग गरी आफूलाई निर्धारित नैतिक र मानवीय गुणबाट स्खलित हुनबाट बचाउन, आफूले आफूलाई स्वस्थ र सन्तुलित राखी अन्यलाई समेत सहयोग गर्नसक्ने हैसियतमा पु¥याउनेतर्फ सचेत रहन जरुरी देखिन्छ।

कोभिड–१९ जस्ता भाइरसको संक्रमणका कारण आइसोलेसनमा रहँदा मानिसको शरीरभित्र रहेका भाइरसका गतिविधिका कारण शरीरको नियमित








सञ्चालनमा असन्तुलन निम्तिन्छ। उता संक्रमणको सिकार बनेको शरीर स्वयम् संक्रमण विरुद्ध प्रतिक्रियात्मक गतिविधि सञ्चालनगरी भिडिरहेको हुन्छ । शरीरका दैनिक नियमित गतिविधि सन्तुलित र स्वास्थ कायम गर्नेकोसिस अनुरूप शरीरका ती प्रतिक्रिया आन्तरिक रूपमा सञ्चालन हुँदै गर्दा मानिसलाई हरहालमा जिउँदो राख्न आफ्ना नियमित गतिविधि समेत सञ्चालन गरिरहेको हुन्छ।

रामवाण ओखती पहिचान नभएको महामारीको संक्रमणमा बिरामीमा जस्ता जस्ता लक्षण देखिन्छ त्यो लक्षण घटाउने उपाय गरेर नियमित सन्तुलनमा फर्काउन कोसिस गरिन्छ। जस्तै ज्वरो भए ज्वरोको ओखती खाने, दम भए दमकोओखती खाने, स्वाद गुमेमा स्वाद फर्कने उपाय लगाउने, अक्सिजनको









हदैसम्म कमी देखिए भेन्टिलेटरमा बसेरै भए पनि अक्सिजन पूर्ति गर्ने र शरीरले आफूलेआफूलाई गर्ने स्वउपचार प्रक्रियामा बाहिरबाट चिकित्सकीय सहयोग पु¥याउने आदि।

त्यस बाहेक तपाईंको शरीरको नियमित गतिविधि सञ्चालनका लागि जरुरी हुने पोषण र औषधीय तत्व उपलब्ध गराउन भाइरस विरुद्ध लड्न समेत सजिलो हुने गरी नियमित तातो तुलसी पानी, तातो सुप, रसिला भिटामिन सी हुने फलफूल र जुस, मुङको दालर बासमती चामलको मसलेदार खिचडी, घरकै औषधीय मूल्यका बेसार, मसला रहेका सँगसब्जी र तरकारी खाने, सकभर चिसो खाना नखाने आदि ।

बिहान वा साँझ पर्याप्त सूर्यको प्रकाश पाउँदा






शरीरलाई प्रतिरक्षाको स्तर बढाउनकालागि मद्दत गर्ने भिटामिन डी प्राप्त हुन्छ । प्रतिरक्षा प्रणालीको गति द्रुत गर्नेटी–सेलहरू बन्ने प्रक्रियामा सहयोग गर्छ। हाम्रो दिमाग, मृगौला, मुटु र फोक्सोजस्ता संवेदनशील अंग ७५ देखि ८५ प्रतिशतसम्म पानीबाट निर्मित हुन्छन्। हामी पानीको सहायताले जति सजिलै र छिट्टै हाम्रो संवेदनशील अंगका गुणहरू परिवर्तन गर्न सक्छौं, अन्य उपाय बाट सायद कम व्यावहारिक होला ।

सामान्य स्तरमा हाम्रो रगतको पीएच ७.३५ देखि ७.४५ हुने गर्छ। संसारभर भएका निकै धेरै अनुसन्धान तथा अध्ययनको निचोडको आशय के देखिन्छ भने भाइरस, ब्याक्टेरिया र क्यान्सरका कोषसमेत शरीरमा रगतको पीएच सामान्य वा








सामान्य स्तरभन्दा माथि हुँदाको अवस्थामा सक्रिय रहन असहज हुन्छ। रगत एसिडिक रहँदा संक्रमण उच्च हुने निश्चित हुन्छ।

पटक पटक तातोपानी पिएर, पाँच–दस मिनेट पानीको बाफ लिएर हामीले हाम्रो रगतलाई एसिडिक हुनबाट रोक्न सक्छौँ । त्यसमा पानी अल्कलाइन पानी वा रगतको पीएच घटन नदिने खाना, हाम्रै भान्साका औषधीय मरमसला र झोलिलो चिजबिज समावेश गर्दा संक्रमणबाट मुक्त हुन सकिने सम्भावना अधिक हुन्छ। दैनिक खानामा पर्याप्त जिंक, बिटा क्यारोटिन, भिटामिन ए, सी, डी, ई र बी समावेशहुने गरी खान कोसिस गर्नु उत्तम विकल्प बन्न सक्दछ।

तपाईंको स्वास्थ्यमा सुधार आउने वा बिग्रँदै जाने










वा यथावतरहने भन्ने कुरा तपाईंको आफ्नै चेतनाको अवस्थाले धेरै हदसम्म निर्धारण गरिरहेको हुन्छ। तपाईंका आफ्नै इच्छा, मनमा उठ्ने भावना र तिनले उत्पन्न गर्ने विचार तपाईंको चेतनाको अवस्था निर्धारण गर्न प्रमुख कडी हुन्। आफ्नो आत्मबल सुदृढ तुल्याएर तपाईं आफैं आफ्नो चेतना शक्तिमा उल्लेखनीय सुधार गरी आफ्नो मानसिक स्वास्थ्य र जीवन्त शक्तिको प्रवद्र्धन गर्न सक्नुहुन्छ ।

तपाईं जति धेरै रोग, फ्लु अथवा कोरोना भाइरस तपाईंको जीवन नै लिन सक्ने जोखिमपूर्ण वस्तु हो भन्नेबारे चर्चा गर्नथाल्नुहुन्छ, त्यति नै त्यो बारे तपाईंमा डरलाग्दो छाप पर्ने गर्छ । भयावह रोग वा संक्रमण रहेको भन्ने सूचना तपाईं जति धेरै सुन्दै वा पढ्दै जानुहुन्छ, ती सूचना तपाईंको चेतनामा













अनुभवका रूपमा दर्ज भएर बसिदिन्छ। परिणाम, यो रोग वास्तवमै अत्यधिक खतरा रोग हो, यो लागि हाल्यो भने त म पक्कै बाँच्न सक्दिनँ भन्ने गहिरो छाप तपाईंको मनमै गढेर बसिदिन्छ ।

तपाईंको मनमै गढेर बसेको गलत विश्वास जब तपाईं उक्त भाइरसको धेरै नजिक पुग्नुहुन्छ र सङ्क्रमित बन्नुहुन्छ त्यो बेला तपाईंको बाँच्न सक्ने आत्मबल गुमाउन निर्णायक बनिदिन्छ। ओखतीको अभावमा आफ्नै अन्तर्मनमा रहेको एक अचुक ओखती, आफ्नै चेतन शक्तिको प्रभावमा आफूलाई खराब स्वस्थबाट मुक्त हुने सुवर्ण अवसर उपयोग गरी आफ्नै इहलीला समाप्त हुन बाट रोक्ने अर्को सुवर्ण अवसर तपाईंले गुमाउन पुग्ने सम्भावना बढेर जान्छ ।







यो कुरा पढ्दै जाँदा तपाईंलाइ ताजुब लाग्ला। संरचनागत रूपमैयो ब्रह्माण्डको भित्री इन्जिनियरिङ यसरी भएको छ कि तपाईंको मानव चोलामा तपाईं भित्री मनबाट जे माग्नु हुन्छ वा बन्न चाहनुहुन्छ अन्ततोगत्वा त्यही तपाईंलाई प्राप्त हुन्छवा तपाईं त्यही बन्नुहुन्छ। तपाईं जति कुनै कुराबाट आफूमा पुग्ने भयको जोखिम तिर आफ्नो दिमाग घुमाउनु हुन्छ त्यति धेरै तपाईंका चेतनामा रहेका ऊर्जाका कम्पन सक्रिय बनिदिन्छ। जसमा डर एउटा अत्यन्त शक्तिशाली कम्पन हो। अधिक डरले कुनै पनि महामारी भन्दा निकैछिटो तपाईंलाई आक्रमण गर्न सक्छ।

तपाईं आफूले आफ्नो चेतनालाई जति धेरै डरका भावना उपलब्ध गराई विषपान गराउनु हुन्छ, यो











त्यति धेरै तपाईंको चेतन शक्तिमा गहिरोसँग गढेर बसिदिन्छ। विज्ञान र वेद दुवैको आँखामा अधिक डरले कुनै पानी व्यक्तिलाई दिने सक्ने खती संसारमा सम्भव हुने कुनै पनि महामारीको भन्दा बलिष्ठ हुन्छ।

किनकि महामारीको समयमा समेत वास्तविक महामारीबाट भन्दा महामारीका कारण पैदा भएको अधिक डरका कारण धेरै मानिसको इहलीला समाप्त हुने गर्छ । यो अर्थमा तपाईंको चेतनामा डेरा गरी बस्ने तपाईंको डर तपाईं आफ्नै लागि संसारमा सम्भव हुने कुनै पनि संक्रमणले दिने हानि भन्दा धेरै हानिकारक हुने बनिदिन सक्छ। तसर्थ तपाईं जुन कुराहरू आफ्नो जीवनमा चाहनुहुन्न, जुन विषय वस्तुमा भाग लिनु तपाईंको उज्ज्वल भविष्य





निर्माणमा सहयोगी हुँदैन, ती चिजहरूको बेवास्ता गर्नुहोस्। अथवा जरुरी भन्दा धेरै चासो नलिनूस्।

यो रोगसँग नियमित डराएर आफ्नो सोचका कम्पनहरू सक्रिय राखी आफ्नो चेतनामा आफूलाई फाइदा नगर्ने अनुभव संकलन गरी आफ्नो आत्मबल घटाउने काम बन्द गरिदिनूस्। यसबारे परिवार र साथीसँग छलफल गरी उनीहरूको समेत आत्मबल घटाउने काम बन्द गरिदिनूस्। कुनै पनि प्रकारको रोग होस् वा फ्लु वा कोरोना भाइरस त्योसँग दुवै भौतिक र मनोवैज्ञानिक रूपमै सीमित दूरी बनाएर कसरी रहन सकिन्छ, त्यसबारे उपयुक्त तरिका सिक्नूस् । जब तपाईं भाइरसका कारण जीवनमा बढ्न जाने चिन्ताका प्रमुख कारक सँग दुरी कायम गर्न सक्नु हुन्छ तब यसले तपाईंको कुनै हानि गर्न





सक्ने छैन।

मानव शरीरका प्रत्येक कोषिका डीएनए आदिबाट बने पनि सूक्ष्म रूपमा हेर्दा ती सबै बिलियनस एटम बाटै निर्मित छन्। हरेक एटम क्वार्क, ग्लुबोन लगायतका विभिन्न अति सूक्ष्म पार्टिकलले बनेका, प्रोटोन र न्युट्रोनबाट बनेका हुन्छन्। इलेक्ट्रोन र क्वार्ज, ग्लुबोन लगायतका सूक्ष्म पार्टिकल निकै सानो सानो इनर्जीका संयोजनले बनेका विन्दु हुन्। यस्ता विन्दुह रूजसले हाम्रो शरीरभित्र इन्फरमेसनको जालोको संयन्त्र बनाउँछ । एक जीवित व्यक्ति आफैं भौतिक पदार्थ (शरीर), अभौतिक जीवन्त शक्ति (कन्सियसनेस / चेतना / विवेक) र अभौतिक पदार्थ प्राणशक्ति (आत्मशक्ति) को अजिब संयोजन हो । जसरी मुटु एउटा



रक्तसञ्चारको भौतिक आधार अंग हो, त्यस्तै दिमाग समेत जीवन्त शक्ति (कन्सियसनेस / चेतना / विवेक) को आधार अंग हो। जसरी रगतको आधार अंग हुँदैमा रगत मुटुभित्र मात्र सीमित रहँदैन त्यस्तै जीवन्त शक्ति पनि मस्तिष्कसँग जोडिएर रहेको भए तापनि दिमाग भित्र मात्र सीमित रहँदैन।

आयुर्वेदमा जीवन्त शक्तिलाई (वायु वा प्राण वा लाइट) पनि भनिन्छ। क्वान्टम फिजिक्सले भने इन्फरमेसन भन्ने गरेको छ । बोलीचालीको भाषामा इन्टेलिजेन्स वा जैविक चेतना भनिने इन्फरमेसन वेबले इलेक्ट्रोम्याग्नेटिक संसर्गको प्रक्रियाबाट शरीरको न्युरोन आदिलाई सञ्चालित गरी मानिसलाई जीवन्त राख्ने काम गर्छ। मूलतः सूर्यको किरणमार्फत प्राप्त हुने ऊर्जाद्वारा निर्मित अभौतिक







पदार्थ (आत्मा) सँग समेत इन्फरमेसन वेबको प्रत्यक्ष संसर्ग रहन्छ ।

भौतिक शरीरले आफ्नो पुर्खाबाट प्राप्त स्मरणहरू र इन्द्रियहरू मार्फत प्राप्त भई मस्तिष्कमा दर्ता हुन पुगेको अनुभव र ज्ञानका कारण हाम्रो सोच, भावना तथा इच्छाको उत्पत्ति भएको हुन्छ। तिनै विकसित सोच, भावना तथा इच्छा चैतन्य मार्फत पातलो शक्तिको थैलीका रूपमा रहेको मानव आत्मासँग जोडिने गर्छ। यसरी हाम्रो भौतिक शरीरका अनुभव र ज्ञान चैतन्यसँग र चैतन्य मार्फत हाम्रो सोच, भावना, मान्यता तथा इच्छा आत्मासँग एकले अर्कोलाई प्रभाव पार्न सक्ने गरी जोल्टिन पुगेको देखिन्छ।

जसरी थोपा थोपा पानी मिलेर समुद्र बन्छ, त्यसरी







नै आत्मा आत्मा मिलेर ब्रह्माण्डको चेतनाको निर्माण हुन्छ । जसलाई ईश्वरीय आत्मा अथवा प्रकृतिको चैतन्य समेत भनिने गरिन्छ। मानव चैतन्य ब्रह्माण्डको चेतनासँग एक आपसमा जोल्टिएर अस्तित्वमा रहेको अनुमान गर्न सकिन्छ। मानव चैतन्य र ब्रमाण्डको चेतना बीच हुने नियमित संसर्गबाट मानव आत्मा र ईश्वरीय आत्माबीच नियमित प्रत्यक्ष सम्पर्क कायम रहन्छ। चमत्कारपूर्ण भौतिक तथा अभौतिक पदार्थहरू बीचको अजिब त्रिकोणात्मक संयोजन मार्फत निर्मित सन्तुलन कायम रहँदा सम्म एक व्यक्ति जीवित रहन्छ। उक्त सन्तुलन भत्कँदाको अवस्थामा भने व्यक्तिको इहलीला नै समाप्त हुन्छ।

प्राकृतिक नियम अनुसार हरेक वस्तुका अणुहरूको













आफ्नै फरक फरक गतिशीलता हुने गर्छ। अणुहरूको फरक फरक गतिशीलता अनुसार वस्तु ठोस, तरल, वा ग्यासकोरूप लिने गर्छ। मानव शरीरका प्रत्येक अंग आफ्नै प्रकृतिको गतिशील सूक्ष्म अणुहरूबाट निर्मित छ। आफ्नै पाराको नियमित तर फरक फरक गतिमा रहने शक्तिको पोकाका रूपमा रहेका क्वार्ज, ग्लुबोन लगायतका सूक्ष्म परमाणुको संयोजनबाट अणुहरू बन्छ । परमाणु आफैं गतिशील रहने, परमाणुबाट गतिशील अणु बन्ने, अणुबाट गतिशील कोषिकाहरू बन्ने प्रक्रियाले शरीरभित्र इन्फरमेसनको जालो निर्मित गरिदिन्छ ।

शरीरभित्र निर्माण हुने उक्त आन्तरिक सूचनाको जालोले निश्चित ध्वनि उत्पन्न गर्छ। ध्वनि एक











प्रकारको कम्पन हो। हाम्रो शरीरमा नियमित उत्पन्न हुने कम्पन ब्रह्माण्डको कम्पनसँग नियमित जोल्टिने प्रक्रियामार्फत भौतिक र अभौतिक पदार्थबीच संयोजन हुँदै हाम्रो जीवनलाई जीवित राख्ने उपाय सुझिएको छ। हाम्रा जीवन्त सहकार्यहरू नियमित राख्न हाम्रो भौतिक शरीरका अनुभव र ज्ञानहरू आफ्नै प्रकृतिका कम्पनमा परिवर्तन भएर अभौतिक विचार, भावना र चाहनाका रूपमा उत्पन्न हुने गर्छन्। जसलाई हामीले अनुभूति समेत गर्न सकिन्छ।

अन्य भाइरस जस्तै कोभिड–१९ भाइरसको कम्पनात्मक इलेक्ट्रोम्याग्नेटिक बायोफिल्ड ५.५ हर्ट्जबाट १४.५ हर्ट्ज सम्म भेटिएको थियो। जब इलेक्ट्रोम्याग्नेटिक बायो फिल्ड २५.५ हर्ट्ज नाघ्छ













तब यो भाइरस निष्क्रिय बन्छ। भाइरस मानिसको शरीरभन्दा बाहिर बाँच्न नसक्नुको प्रमुख कारण हो पृथ्वीको आजको इलेक्ट्रोम्याग्नेटिक बायोफिल्ड लगभग २७.४ हर्ट्ज रहनु ।

जहाज, गाडी, घना बस्ती, अस्पताल, सपिङ मल, अफिस, रेस्टुरेन्ट तथा बार आदिमा मानव तथा अन्य गतिविधिका कारण इलेक्ट्रोम्याग्नेटिक बायोफिल्ड सात हर्ट्ज वा तल देखिएकाले कोभिड–१९ भाइरस ती स्थानमा निष्क्रिय नभएको हुन सक्ने धेरै जोखिमपूर्ण बनेको बुझिन्छ। प्राकृतिक वातावरणमा र गाउँघर, सहरभन्दा तुलनात्मक रूपमा सुरक्षित भेटिनुको एउटा कारण यो पनि हो ।

जब मानिस उच्च मनोबलमा रहन्छ तब उसमा उच्च कम्पनको इलेक्ट्रोम्याग्नेटिक बायोफिल्ड हुने गर्छ ।







जुन कोभिड–१९ को संक्रमणमा समेत धेरै हानिकारक लक्षणको सिकार बन्दैन । जस्तै उदार भावनायुक्त रहँदा (९५), धन्य महसुस गर्दा (४५), दिलैदेखि धन्य महसुस गरिरहँदा (१४० वा माथि), आफन्त व्यक्तिको साथ र एकात्मकताको भावना जागृत हुँदा (१४४ वा धेरै), अनुकम्पा (१५० वा माथि), दयामायाको महसुस हुँदा (१५०), प्रेमको अनुभूति (१५० वा माथि), निःस्वार्थ प्रेमको अनुभूति (२०५ वा माथि) हर्ट्ज । यो अवस्थामा कोभिड–१९ संक्रमण हुँदाको अवस्थामा समेत मानिसलाई खासै प्रभाव पर्दैन। प्रायः थाहानै नलाग्ने वा सामान्य रूपमै निको हुने स्थिति पैदा हुने गर्छ ।

जब तपाईंको अत्माबल दह्रो छैन तब तपाईंको शरीर











कमसल कम्पनको इलेक्ट्रोम्याग्नेटिक बायोफिल्ड उत्पन्न गर्न थाल्छ । यस्तो बेला तपाईं कोभिड–१९ भाइरसको संक्रमण रहँदा खतरनाक जोखिमको सिकार बन्ने सम्भावना रहन्छ। जस्तैः जेमा पनि जति बेला पनि चित्त दुखाउने (०.१ देखि २), डर (०.२ देखि २.२), असन्तुष्ट रहने र आफूलाई सधैं रक्षात्मक स्थितिमा राख्ने बानी (०.६ देखि ३.३), जलन (०.९), बेचैनी (०.६ देखि १.९), रिस (१.४), गरम स्वभाव (०.९), घमण्ड (०.८), हेलत्व (१.५), श्रेष्ठताकोअभिमान (१.९) हर्ट्ज आदि।

स्वस्थ र सन्तुलित मस्तिष्क भएका प्रायः सबै मानिसको इलेक्ट्रोम्याग्नेटिक बायोफिल्ड फ्रिक्केन्सी आठ हर्ट्ज हुने भेटिएको छ। आफ्नो नित्य











गतिविधि मार्फत पैदा हुने बानी व्यहोरा एवं अन्य परिस्थितिका कारण मानिसको इलेक्ट्रोम्याग्नेटिक बायोफिल्ड फ्रिक्वेन्सीमा सुधार आउने वा स्खलन हुने गर्छ । योग तथा मेडिटेसन जस्ता उपाय, खाली चौरमा नांगो खुट्टा हिँडी शरीरलाई प्राकृतिक रूपमा अर्थिङ गरी इलेक्ट्रोम्याग्नेटिक सन्तुलन कायम गर्ने जस्ता गतिविधि संक्रमणको भयको बेला अत्यन्त लाभकारी हुने गर्छ। समग्रमा धनी, चर्चित वा ठूलो मान्छे बनेर हैन मात्र असल मानवता भएको, आफूले आफू माथि भर पर्न सक्ने अत्माबल भएको मान्छे बनेर जीवनमा आइलाग्न सक्ने हरेक प्रकृतिका संक्रमणबाटआफूलाई सुरक्षित राख्न सकिने वेदको चुरो मन्त्र यथार्थ परक रहेको समयक्रमले प्रमाणित गरिदिएको छ।









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



# महामारीमा वेद

महामारीको समय मानव जातिका लागि एक नयाँ प्रकारको मनोवैज्ञानिक सहनशीलता र धैर्यको प्रयोगका लागि प्रकृति सृजित परीक्षणका रूपमा रहन्छ। महामारीको अन्तिम परिणाम कस्तो हुने, किन र कसरी उत्पत्ति भयो र कहिले र कसरी अन्त्य हुनेछ, त्यो तत्कालको समझ बाहिरको विषय बन्दछ। प्रकृति सृजित परीक्षणको घडीमा धैरै लाई ईश्वर हुनुहुन्छ भने कहाँ हुनुहुन्छ र के गर्दै हुनुहुन्छ भन्ने गम्भीर प्रश्न दिमागको कुनै कुनामा गडिएर रहेको देखिन्छ। हुनुहुन्न भने यसको पनि पक्कै प्राकृतिक नियम त होला। त्यो के होला भन्ने खुल्दुलीले मनभित्र डेरा जमाउने गर्दछ।





॥ श्री गणेशाय नमः ॥

मानव मात्रका लागि प्राकृतिक विपद्का रूपमा आइलागेको महामारीवेदको भावनाको अनुभवमा भने नियमित रूपमा मानव निर्णयमा रहेको त्रुटिपूर्ण अन्दाज ले विकास गरेको मानवीयतामा स्खलन, प्राकृतिक दोहन तथा नैतिकहीनताको ज्यादतीलाई सुधारका खातिर अनिवार्य बनेको निर्मम प्रहारको विन्दुका रूपमा बुझ्न सकिन्छ । वेदको आशय अनुरूप हरेक निर्मम नियतिको एक मात्र उपचार सहनशीलता र सकारात्मक आत्मबल हुने गर्छ ।

कोभिड–१९ को महामारीको समयमा नेपाली मिट्टी तनहुँको देवघाटमा जन्मिएका महर्षि सुश्रुत र अर्का आयुर्वेदका ज्ञाता आचार्य चरक उपस्थिति रहेको भए कोभिड–१९ को रोगहरूको उपचारमा आयुर्वेदको कस्तो भूमिका हुन्थ्यो होला भन्ने





काल्पनिक प्रश्नको उत्तर खोज्ने प्रयासले हामीलाई केही खुराक उपलब्ध गराउन सक्छ ।

आयुर्वेद शास्त्रका अग्रगामी चिन्तक यदि महामारीको समयमा जीवित नै थिए भने उनीहरूले पक्कै पनि कोभिड–१९ प्रतिरोधी जीवन शैलीको प्रोटोकल, कोभिड–१९ को संक्रमण विरुद्ध लड्ने प्रतिरोधी क्षमता वृद्धि गर्ने जडीबुटी र प्राकृतिक सामग्री निर्मित विविध खाद्य पदार्थको तैयारी विधि सहितको सुची, रोगबाट बच्न भौतिक दुरी कायम गर्ने तरिका, आइसोलेसनमा रहने उपाय तथा कोभिड–१९ को संक्रमण हुँदा त्यसले पैदा गर्ने रोगविरुद्ध काम गर्ने सफल आयुर्वेदिक फर्मुलेसन, रगतमा अक्सिजनको मात्रा वृद्धि गर्ने ओखतीय खाद्य तथा सुधारिएको दैनिक दिनचर्याका उपायको



संग्रह वा संहिता हामी माझ राखिदिने निश्चित थियो।

नेपालको सन्दर्भमा यी दुई हस्तीले निश्चय नै आधुनिक चिकित्साका डाक्टर र आयुर्वेदको गहिरो समझ राख्ने स्वस्थ कर्मीहरू बिच सहकार्य गर्दै सफल हस्तीहरूको समय र घटनाक्रमको रियल टाइम अनुभव धैर्यता पूर्वक सुनेर निकै भित्र पुग्न विचार विमर्श गर्दथे होलान्। विचार विमर्श र छलफल बाट प्राप्त ज्ञान, समुदायमा देखिएको रोगको प्रतिरोधी क्षमताको हद, अन्य कार्यगत स्तरको व्यावहारिक अनुभव, उपलब्ध स्रोत साधन, नेपालको आफ्नै परिस्थितिमा मिल्ने गरी शास्त्रमा दिइएको ज्ञानको कार्यगत स्तरको परिस्थितिजन्य व्यावहारिक ट्रान्सलेसन मार्फत संक्रमणबाट बच्ने,











सामाजिक दुष्प्रचार, मनोवैज्ञानिक डर आदिबाट मुक्ति लिने र उपचारका विधिहरू विकास गरी त्यसको सहजीकरण मार्फत समाजलाई प्रभावकारी उपचार पद्धति उपलब्ध गराएर सोचिएभन्दा निकै छिटो महामारीको चपेटामुक्त पार्न भूमिका खेल्ने थिए होलान् ।

वेदका ऋचाहरूमा उल्लिखित दैनिक जीवनमा अँगाल्नुपर्ने अभ्यास घातक भाइरसको फैलावट कम गर्न सहयोगी हुने कुरा वैज्ञानिक रूपमा समेत प्रमाणित छन्। महामारीको समयमा विश्वका मानिसहरू जो जो यस सँग परिचित हुने अवसर पाए, उनीहरू मध्ये धेरैले उक्त अभ्यासलाई अनुसरण गरिरहेको बुझिन्छ । आज नमस्ते (नमस्कारम) विश्वव्यापीअभिवादनको माध्यम बन्दै







छ। विश्वव्यापी रूपमा राजनीतिक नेताहरूले हात मिलाउने, चुम्बन गर्ने, अँगालो हाल्ने ठाउँमा झुकेर अभिवादन गर्ने नमस्तेले स्थान पाएको देखिन्छ। विश्वका शीर्ष नेतामा गनिएका अमेरिकी पूर्वराष्ट्रपति डोनाल्ड ट्रम्प, प्रिन्स चाल्र्स, फ्रान्सेली राष्ट्रपति इमानुएल म्याक्रोन र इजरायलका प्रधानमन्त्री बेन्जामिन नेतान्याँहूको अरू लाई नमस्ते गर्दै गरेका फोटोहरू महामारीको समयमा सामाजिक सञ्जालमा भाइरल भएको भेटिएको थियो ।

संस्कृतको नमस्कारम बाट आएको 'नमस्कार' र 'ते' शब्दको संयोजन बाट बनेको नमस्तेको अर्थ हो 'म तपाईंमा अन्तर्निहित ईश्वरीय शक्तिको अघि श्रद्धाका साथआफूलाई झुकाउँछु।' वैदिक संस्कृतिमा मानसिक र शारीरिक रूपमा स्वस्थ रहनु








र भौतिक दूरी कायम राख्ने तथा आइसोलेसनमा रहने पद्धति आफ्नो दिन चर्याको दैनिकीका रूपमै स्थापित चलन हो । वैदिक युग देखिनै मर्दा र पर्दा हुने सामाजिक गतिविधिमा सहभागी हुनुपर्दा व्यक्तिगत स्वच्छता र क्वारेन्टाइन हाम्रो परम्परागत जीवन शैलीको अभिन्न र महत्वपूर्ण पक्ष थियो। अनिवार्य भौतिक दूरी र स्वच्छता कायम गरी वैदिक कार्यमा सहभागी हुने हाम्रा परम्परागत व्यावहारिक अभ्यासहरू वेदमा उल्लिखित ज्ञानमा आधारित छन्। वेदमा जब कुनै कार्य अनिवार्य गरिन्छ, त्यसको कारण समेत उल्लेख हुने गर्छ।

वेदभूमि नेपालले शताब्दीयौं देखि अनुसरण गरिआएको हाम्रो परम्परागत उत्कृष्ट चलन मात्र कर्म काण्डी चलनका रूपमा सीमित हुँदै गर्दा








वर्तमान महामारीले पुनःआफ्नो ट्र्याकमा फर्काउन भूमिका खेलेको छ। हामी भान्सा गर्नु अघि सफासुग्घर रहनुको मूल्य, नमस्तेको मूल्य, भौतिक दूरीको मूल्य, आइसोलेसनको मूल्य, मानसिक र शारीरिक रूपमा तन्दुरुस्त रहनु पर्ने कुराको मूल्य मात्र हैन, पिसाब वा शौचपछि एन्टिसेप्टिक्स कीटाणुनाशकले हात धुनुपर्ने बानीमा समेत आफूलाई पुनः अभ्यस्त गराउन महामारीले सिकायो।

हाम्रा परम्परागतरूपमा हुने एन्टिसेप्टिक्समा जीवन बर्बादीतिर लैजाने ठर्रा हैन बेसार (हलेदो), नीम, पाती, गाइको गहुँतको अर्घ आदि हुने गर्दथ्यो। इम्युन बुस्टरमा भान्सामै प्रयोग हुने जडीबुटी, आयुर्वेदिक ओखती, बेसार पानी, क्यामुनु–जामुनु,









पातीको झोल, अर्घ, चिराइतो, जेठीमधु, ल्वाङ, अलैंची, जिरा, ज्वानो, दालचिनी, कागती, अमला, हर्रो, बर्रो जस्ता मिश्रण हुने गर्दथे । हरेक बिहान नुहाउने, खाना पकाउनुअघि गाईको गोबर र खरानी पानीले सेनिटाइज गर्ने, खानुअघि र पछि हाम्रोसँग हातखुट्टा धुने हाम्रो नित्य कर्मको अभिन्न अंग थियो।

खराउ, चप्पल घरबाहिर पट्टि नै रहन्थ्यो। लागेको लुगाफाटा समेत फेरेर मेडिटेसन वा जप पश्चात् शुद्ध भएर खाना खाने गरिन्थ्यो। घर परिवारमा कोही मरे भने सम्पूर्ण परिवार नै क्वारेन्टाइनमा बसिन्थ्यो । मलामी र गाउँलेका लागि आफ्नै प्रकारको चोखो रहने, भौतिक दूरी कायम गरी आफ्नो मानसिक र भौतिक शुद्धता र सरसफाइ कायम गर्ने आफ्नै










प्रकृतिको प्रोटोकल बनेको हुन्थ्यो। सबैले त्यसैलाई पछ्याइने चलन थियो।

रुघाखोकी, टिबी जस्ता थाहा भएका सरुवा रोगको समय र पहिले नदेखिएको कुनै नयाँ रोग देखिएका परिदृश्यमा पूरै परिवार वा सङ्क्रमित व्यक्ति क्वारेन्टाइन रहने, कम्तीमा भौतिक दूरीको सिद्धान्त पछ्याउन अनिवार्य मानिन्थ्यो। क्वारेन्टाइन वा भौतिक दूरीमा रहँदा अनिवार्य आत्मसुरक्षित र स्वच्छ राख्ने योग अभ्यासहरू गर्ने, मेडिटेसन गर्ने, शरीरलाई अर्थिङ गर्ने, शरीरलाई सफा, ओभानो र न्याँनो राख्ने, घाम ताप्ने जस्ता अनिवार्य गतिविधिमा सहभागी हुने गरिन्थ्यो।

आज हाम्रो जीवनशैलीमा निकै ठूलो परिवर्तन आएको छ। हाम्रा जैविक र मनोवैज्ञानिक शत्रुमा













समेत हाम्रो परिवर्तित जीवनशैली अनुरूप परिवर्तन आएको देखिन्छ। हामी नयाँ प्रविधि, कृत्रिम बुद्धिमत्ता, रोबोटिक्स, आईओटीको संसारमा प्रवेश गर्दै नयाँ जीवन शैली र दैनिक अभ्यास अनुसरण गरिरहेका छौँ। तर पनि हजारौँ वर्ष पहिलेदेखि हाम्रो परम्परागत संस्कृतिका रूपमा रहेको हाम्रो जीवनशैलीको मूल्य भने हामीलाई हामी जति आधुनिक बन्दै छौँ त्यति धेरै खड्कने गरेको छ। संसार आफ्नो खानपान, ओखतीमुलो, मनोरञ्जन, जीवनशैलीर जीवनको मूल्यको सार पक्ष सम्भव भएसम्म हालको परिवर्तित जीवनशैली भित्र अन्तरग्रहण गरी पुराना उत्कृष्ट पद्धतिका लाभकारी पक्षबाट आफूलाई लाभान्वित गराउन प्रयत्नशील गरिरहेकोअनुभूति हुन्छ।









कोरोना भाइरसको प्रकोप पश्चात् विश्वभर मृत्यु भएका मानिसको मृत्यु पछि गरिने अनुष्ठान प्रविधिमा समेत व्यापक परिवर्तन आएको महसुस गर्न सकिन्छ । मृत्युमा गरिने दाहसंस्कारमा लास जलाउने तरिका क्रिमे–सन विधिको मूल्य समाजले बुझेको छ। शव जलाएर गरिने दाहसंस्कार वैदिक परम्परागत प्रचलन हो । वैदिक मान्यतामा दाहसंस्कारका लागि लगिने मृत शरीरहरू मृत्यु हुनेको अत्यन्त नजिकको मानिस बाहेकअन्यले छुनुसमेत नैतिक मानिँदैन । दाहसंस्कारमा संलग्न वा मलामीमा सहभागी हुने हरेक व्यक्तिले अनिवार्य नुहाउनु पर्ने र चोखिनुपर्ने जस्ता प्रोटोकल छन् वैदिक परम्पराका। दाहसंस्कारलाई वैदिक मान्यतामा अन्त्येष्टि भनिन्छ । जुन अन्त्यः र इस्ति









शब्द मिलीबनेको छ । जसको अर्थ अन्तिम बलिदान अर्थात् अन्तिम संस्कार मतलब वैदिक मान्यतामा भौतिक शरीरको अन्तिम विदाइको पवित्र समारोह।

निकै छोटो समयमा भएका १० हानिकारक संक्रमणमध्ये छ वटा सङ्क्रामकरोगहरू एच–१ एन–१, स्वाइन फ्लु, एच–५ एन–१, बर्डफ्लु, इबोला, सार्स, कोभिड सबै पशुबाट नै मानिसमा सरेको भेटिएको छ । शताब्दीयौँ देखि स्थापित वैदिक मान्यतामा शाकाहारी खानपान रोजिने प्रचलन जनावरबाट मानिसमा सर्ने घातक रोगको सिकार हुनबाट जोगिने दरिलो कारक बन्न सक्ने छ। विज्ञानको विकास क्रम जतिसुकै भएको होस् अझै तरकारी र फलफूल नै मानव प्रतिरक्षा–बढावा गर्ने










भिटामिन, खनिज, एन्टीअक्सिडन्ट, फोक्सोमा हावाबाट अक्सिजनको मात्र रगतमा घुलाउने क्षमता वृद्धि गर्ने, रगतमा अक्सिजनको घुलनशीलता बढाएर तन्तु तन्तुको कोषिकासम्म पु¥याउने औषधीय सारतत्वको उत्कृष्ट स्रोत रहेको छ। वैदिक खानपान र ओखती विज्ञान अन्तर्गतको आयुर्वेदमा उल्लेख भएका बेसार, जिरा, धनियाँ, लसुन, तेजपत्ता, अदुवा, कागती, खुर्सानी, मरिच, ल्वाङ, सुकमेल, मेथी, अलैंची, जाइफल, ज्वानो, सिन्कौली, जेठीमधु, पिप्ला, बोझो, गुर्जो, अमला आदि आज पनि खानालाई रोग प्रतिरोधात्मक क्षमता प्रदायक बनाएर हिलिङ खानामा परिवर्तन गर्ने कडी बनिरहेका छन्।

वैदिक विधाको पुनर्ताजगी प्रकृतिको श्वासप्रश्वासको













काइदा, नाचगान, संगीत, जप, सामूहिक आराधना, मेडिटेसनर योग ऊर्जाको पुनर्संयोजनमार्फत शरीर स्फूर्त र चुस्त राख्ने सबैभन्दा प्रभावकारी प्राकृतिक उपायका रूपमा स्थापित छन्। शरीरको भौतिक र मनोवैज्ञानिक सन्तुलन कायम राख्ने प्रयास स्वरूप हामी हर समय शान्त र आराम रहेर बस्ने कोसिसमा भेटिन्छौं। महामारीको समयमा जीवनशैली, व्यवसाय, रोजगार, स्वास्थ्य र वित्तीय अवस्थामा समेत पुग्ने असरले हाम्रो तनावको स्तर उच्च पारिदिएको छ। विश्वनै सम्पूर्ण रूपमा चिन्तित रहेको दैनिकको सूचनाबाट हाम्रो सामाजिक चेतना स्तरमा समेत भय र आतंकको माहौल पैदा गरिदिने गर्छ। आफ्नो तनाव नियन्त्रणमा राख्न भएका अधिक तरिकामध्ये





वैदिक ध्यानको निकै ठूलो योगदान हुने भेटिएको छ।

शाब्दिक रूपमा मेडिटेसन भनिने ध्यानको मतलब स्वअनुभूति वा आत्मज्ञान भन्ने हुन्छ । आफूले आफ्नै उपस्थितिको महसुस गरेर आफ्नै अनुभवका आधारमा ज्ञान प्राप्त गर्ने र आफूमा लीन हुने कला हो आत्मज्ञान। जसमा मात्र आफ्नो अनुभवले, एकाग्रताले आफैँ सँगबाट धेरै कुरा सिक्ने र अनुभूति गर्ने अवसर प्राप्त हुन्छ। वेदमा सुरुवात देखि अन्तसम्म पटकपटक उल्लेख भएको पाइने ध्यान ऊर्जाको पुनर्संयोजन मार्फत ज्ञानको गहिराइमा पुग्ने उपाय हो। ध्यानको माध्यमबाट निर्माण हुँदै गरेको सामाजिक चेतनाको भय र आतंकको घेरा समेत छिचोलेर ज्ञान प्राप्त गर्न तथा भौतिक र





मनोवैज्ञानिक सन्तुलन कायम गर्न सम्भव बन्छ। त्यसैका कारण महामारीको समयमा वैदिक ध्यान तर्फ धेरै मानिसको आकर्षण बढ्ने गर्दछ।

महामारीको समयमा डाक्टरहरूलाई सही उपचार विकल्प के हो भन्ने तरिका समेत फेला नपरिरहेको अवस्था निकै हुन्छ। कुनै विकल्प कम प्रभावकारी हुने र कुनै विकल्प विकल्प रोगले विकास गरेको लक्षण अनुरूप सही नहुन सक्छ । डाक्टरलाई उपलब्ध विकल्पको अवस्था जस्तो सुकै होस्, जब एक व्यक्ति बिरामी पर्छ, घरमा निको हुने अवस्था नदेखिँदा डाक्टरको खोजीमा अस्पताल पुग्छ । डाक्टरसँग उपलब्ध विकल्प र कर्तव्य भनेको आफ्नो सम्पूर्ण अनुभव र उपलब्ध विकल्प अन्तर्गत रहेर उसको उपचार गर्नु नै हुने गर्दछ।





महामारीको समयमा कतिपय वातावरणीय पक्ष सम्पूर्ण रूपमा नियन्त्रणमा लिन नसक्के रहेकाले नै महामारी फैलने गर्छ। उक्त समयमा प्रकृति यति निर्मम बनिदिन्छ कि रोगको प्रकृति, उपचार पद्धति र समय समेतको अलिकति सूचना समेत दिने गर्दैन। आचार्य चरक र सुश्रुतको समयमा समेत विभिन्न संक्रमण रोगको नियन्त्रणमा सावधानीलाई नै मुख्य उपायका रूपमा उपयोग गरिन्थ्यो । जस अन्तर्गत रोगको सम्पर्कबाट बाहिर रहेर रोगको संक्रमणबाट बच्ने उपाय नै प्रमुख थियो । जब व्यक्ति रोगबाट संक्रमित बन्छ, तब तुरुन्त लक्षणको उपचार विधिसुरु गरिन्थ्यो ।

आयुर्वेदले तत्कालीन महाऋषिहरूलाई समेत जडीबुटीको शक्तिको विवेक तथा हिट एन्ड ट्रायल










प्रणाली अपनाएर परीक्षण गरी महामारीको उपचार गर्नुपर्ने बाध्यता थियो। जसलेगर्दा जडीबुटीको प्रयोगमा त्रुटि हुने प्रशस्त सम्भावना रहन्थ्यो। उपचारका क्रममा देखिएका हरेक क्रिया र प्रतिक्रियामा अत्यन्त मिहिन र सूक्ष्म रूपमा ध्यान पु¥याएर उपचार पद्धतिमा परिमार्जन गर्दै उपचार सम्पन्न गरिन्थे। त्यसबाट प्राप्त अनुभवको आधारमा संहिताहरू विकास गरिन्थ्यो। आजको महामारीको समयमा समेत उपलब्ध विधि र तरिका लगभग त्यस्तै रहेको छ । संक्रमणको प्रकृति अनुरूप परिस्थिति जुन तरिकाबाट जुन दिशामा अगाडि बढ्छ, त्यसको उपचार पद्धति समेत त्यही रूपमा अघि बढाउन जरुरी हुन्छ । यो तरिका आयुर्वेदिक जडीबुटीको सन्दर्भमा मात्र हैन आधुनिक







चिकित्सामा समेत लागू भइरहेको छ।

कोरोना कहरले संसारलाई दिएको पाठ एउटै छ, त्यो हो रोगको रोकथाम नियन्त्रण भन्दा सदैव उत्तम रहने गर्छ। सायद यसै कुरालाई मनन गरेर आचार्य चरकले आयुर्वेदका दुई मुख्य उद्देश्य चरक संहितामा उल्लेख गरे। पहिलो व्यक्तिको स्वास्थ्यलाई सन्तुलित कायम राख्ने निवारक प्रकृतिको उपचारमा सदैव ध्यान दिने। दोस्रो बिरामी व्यक्तिको उपचार गर्नका लागि उपचारात्मक प्रकृतिको उपचार सम्पन्न गर्ने ।

संहितामा आचार्य चरक लेख्छन्, 'महामारी जस्ता संकटमा समेत आयुर्वेदको विकल्प सर्वप्रथम रोगको रोकथाममा नै ध्यान दिनु हुनेछ। त्यसपछि उपचारमा जोड दिइनुपर्छ।' आचार्य महामारीको







समयमा देखिने शारीरिक, मानसिक र सामाजिक समस्याको रोकथामका लागि विभिन्न प्रकारका ऋतु अनुसारको आयुर्वेदिक खाना र जीवन पद्धति (रीतचर्या) तथा दैनिकी (दिनचर्या) आदिको ठूलो भूमिका रहने बताउँछन्।

घरेलु रूपमा गरिने आयुर्वेदिक उपचारमा अत्यन्त धेरै चर्चामा हुने औषधीय मूल्यको हिलिङ पेय पदार्थको नाममा काँडा पानी सेवन एक हो। प्रायः आफ्नो भान्सामै उपलब्ध र रोगको समस्या अनुरूप आयुर्वेदिक पसलबाट किनि ल्याएका केही जडीबुटी सहित विभिन्न जडीबुटी र मसला पानीमा उमाल्दा जब झोल ५० प्रतिशत घट्न पुग्छ तब छानेर झोल पिउने वा झाम्टा सबै चपाएर खाने र झोल सबै नै पिउने पेय हो काँडापानी। नेपाली भान्साका प्रायः



धेरै मसलाका सामग्री र जडीबुटी काँडा पानीका रूपमा पिउँदा शरीरको प्रतिरक्षा प्रणालीमा उल्लेखनीय सुधार गर्ने र रोगको संक्रमण विरुद्ध लड्न शरीरको क्षमता वृद्धिमा मद्दत गर्न प्रमाणित बनेकाले यसको चलन अधिक बढ्न गएको छ ।

शास्त्र मार्फत उपलब्ध हरेक ज्ञानलाई बदलिँदो परिस्थिति अनुरूपको अनुभवका आधारमा कार्यक्षेत्रको व्यावहारिकता अनुरूप परिमार्जन गरी प्रभावकारी नतिजादिने जडीबुटी, भस्म र तिनीहरूको सारतत्वको संयोजन कसरी गर्न सकिन्छ भन्ने प्रस्ट वैज्ञानिक आधार सहितको आयुर्वेदिक कौशल आज हाम्रो सामु उपलब्ध छ । सञ्जीवनी जडी बुटी जस्ता प्रस्ट बुझ्न नसकिएको केही अपवाद छोडेर प्रायः सबै नै आयुर्वेदिक जडीबुटीको








प्रशस्त वैज्ञानिक आधारसहित उपचार प्रभावकारी गराउने गरी औषधीय फर्मुलेसन गर्न सकिने ज्ञान, अनुभव र उपचार गरेर प्रमाणित गरेको प्रमाण आयुर्वेद क्षेत्रसँग छ। आयुर्वेद क्षेत्रका विज्ञहरू आधुनिक भनिने चिकित्सा प्रणालीका चुरो मर्म सँग नियमित रूपमा परिचित रहने गरेका हुन्छन् भने औँलामा गन्न सकिने आधुनिक चिकित्साका डाक्टरहरू आयुर्वेद र प्राकृतिक चिकित्साबारे जानकार देखिन्छन्। जुन आयुर्वेद क्षेत्रको अत्यन्त ठूलो काबिलता हो।

सहरका अत्यन्त चर्चित नाम बनाएका र दाम कमाएका आधुनिक चिकित्सक गनिने अधिक डाक्टर साब रोगको रोकथाम उपायका रूपमा रहेको रोग प्रतिरोधक क्षमता विकास बिषयको जरासम्म




पुग्न नसकेकाले यसको वास्तविक भ्यालु एडको ज्ञानबारे लगभग अनविज्ञ छन्। उनीहरू मध्ये धेरैले बुझेको ओखतीले एउटा रोगको उपचार गर्दा कम्तीमा तीन वटा अन्य रोग जन्माइ रहेका छन्। उनका बिरामी जीवन भर स्थायी बिरामी रहेर उसको आजीवन ग्राहकमा परिवर्तन भइरहेका छन्।

अर्कोतर्फ, ठुलो सङ्ख्याका आधुनिक चिकित्सक हरूका आफ्नै जहान र परिवार आधुनिक चिकित्सा पद्धतिले दिने गरेको ओखती माथिको अविश्वासकाकारण प्राकृतिक र आयुर्वेदिक ओखती मुलोको सल्लाह लिन बाध्य भइरहेको घटना हरेक गल्ली गल्लीमा भेटिन्छ। यो यथार्थ मात्र नेपाल, भारत र चीनको कथामा सीमित छैन, अमेरिका, बेलायत, क्यानडा, जर्मनी रइजरायल जस्ता





विकसित भनिएका मुलुकमा समेतको वास्तविक यथार्थता बनेको छ ।

# महामारीले चिनिएको आयुर्वेद

कोभिड–१९ महामारीको भुक्तभोगी संसारका २४ देशका १२ हजार मानिसमा उनीहरूको स्वास्थ्य र पोषणप्रतिको चासोको सन्दर्भमा परिवर्तित अवस्थाले विकास गरेको दृष्टिकोणबारे एक विश्वव्यापी सर्वेक्षण गरियो । सर्वेक्षणका अनुसार ६५ प्रतिशत व्यक्तिको आफ्नो स्वास्थ्य र पोषण सम्बन्धका धेरै चिन्ता मध्ये शीर्ष तीन स्थानमा रहेको चिन्तामा आफ्नो शरीरको प्रतिरक्षा क्षमता बनेको बताए। सबै उमेर समूहका मानिसमा आफ्नो







प्रतिरक्षा क्षमताबारे चिन्ता समान देखिन्थ्यो । ३० वर्ष उमेर समूह माथिका मानिस भने तुलनात्मक रूपमा रोग र बिरामीको जोखिमबारे अन्य उमेर समूहका मानिस भन्दा धेरै चिन्तित रहेको सर्वेक्षणले देखायो ।

विश्वव्यापी सर्वेक्षणमा सहभागी प्रायः सबै नै मानिसले आफूले हाल आफ्नो खाना वा पेयमा प्रतिरक्षा प्रणाली अभिवृद्धि गर्ने पोषण तत्व समावेश हुनेगरी खान कोसिस गरेको बताए। संसारभरका मानिसको हालको गतिविधि अनुरूप कोभिड–१९ पछाडि उनीहरूको खानपान र व्यवहारमा आएको गहिरो र दिगो प्रभावले बजारमा रोग प्रतिरोधी क्षमता अभिवृद्धि गर्ने जडीबुटी र वैकल्पिक हिलिङ पेय र खाद्यको माग अत्यधिक बढाइदियो।













कोभिड–१९ को महामारीले मानिसको जीवनका धेरै गतिविधिमा परिवर्तन गरिदिएको छ। असाध्यै ठूलो जनसंख्याको खानपान र जीवनशैलीमा अत्यन्त सावधानी पूर्वक स्वास्थ्य र स्वास्थ्य स्थितिमा सुधार पुगोस् भन्ने स्वकेन्द्रित दृष्टिकोण सहित जीवन जिउने क्रम बढिरहेको छ ।

मानिसहरू शरीरको प्रतिरक्षा क्षमता विषयमा आफ्नो चेतना अभिवृद्धि गर्न लालायित भेटिने गर्छन् । उनीहरूले बिस्तारै कमसल रोग प्रतिरक्षा क्षमता नै आफूमा विकास हुने पाचनका समस्या, निर्बलता, अल्छीपन, एलर्जी, मानसिक रोग, सरुवा रोग आदिको प्रमुख कारक हुने महसुस गरिरहेका भेटिन्छन्। खाना वा पेय वा सप्लिमेन्ट वा ओखतीका उपभोक्तामा पैसा महँगो हुँदैमा र











प्रभावकारी विज्ञापन देखिँदैमा तिनीहरू आफ्नो शरीरको स्वस्थको जरुरत अनुरूपको प्रभावकारी नरहने गहिरो अनुभूति गरिरहेको भेटिन्छ। पश्चिमा इन्जिनियरिङको जडीबुटीको सारतत्व निकाली बनाएको सप्लिमेन्ट वा भिटामिन, मिनिरल आदिका क्याप्सुल होस् वा चक्की सबै सँग निराश बन्दै गएको देखिन्छ ग्राहकहरू।

आज आएर प्रमाणित भएको तथ्य के हो भने पश्चिमा इन्जिनियरिङ भएका खाद्य सप्लिमेन्टका क्याप्सुल वा चक्की सैद्धान्तिक रूपमा मात्र उपयोगी तत्व युक्त भेटिन्छ। ल्याबका टेस्टमा तिनीहरूमा शरीरका लागि जरुरत हुने भनिएका पदार्थ देखिने पनि गर्छन्। तर, तिनीहरू मानिसको आफ्नो पाचन प्रणाली मैत्री नरहेकाले शरीरको वास्तविक













प्रयोजनमा भने आउने अत्यन्त झिनो सम्भावना रहन्छ। शरीरले खाना मार्फत आफूलाई जरुरत हुने प्राकृतिक सारतत्व (अर्थात पोषण तत्व, औषधीय तत्व र ओज तत्व) उक्त खाना प्राकृतिक पाचन प्रक्रियाबाट गुज्रेर मात्र प्राप्त गर्ने गर्छ। पश्चिमाहरूले विकास गरेको हालका भिटामिन, मिनिरल र अन्य तागत दिने पदार्थ एवं खाद्य सप्लिमेन्टमा रहेका सारतत्व शरीरको आवश्यकताको जरुरत पूर्ति गर्न सक्ने हैसियत च्युत बनेको यथार्थ संसारले भर्खरै बुझ्दै छ।

त्यो सन्दर्भमा आफूलाई चाहिने तत्व पाइने आसमा ठूलो धनराशि खर्चेर आफूले खरिद गरेर उपभोग गरेको वस्तुमा बताइए अनुरूपको क्षमता स्खलित भएको र प्रभावकारी नतिजा पाउन नसकेको बाट









उपभोक्ता निराश देखिन्छन् । तोकिए अनुरूपको गुणस्तर पुगेको भनि वैज्ञानिक नामकरण गरिएको तर पूर्ण अवैज्ञानिक कानुनी र गुणस्तरीय मापदण्ड पु¥याएका भरमा बजारमा पुगेका यस्ता पदार्थ भनिएका र दाबी गरिएका नतिजा ल्याब परीक्षण वाट देखाउन सकिने तर वास्तविक प्रयोगमा भनिए जस्तो प्रभावकारी रहनेमा निश्चिन्त हुन सकिने देखिएन। प्रडक्ट डेभलपमेन्टका क्रममा अत्यन्त साँघुरो घेरा भित्र अपनाएको नियन्त्रित अनुसन्धानमा आएको नतिजाका भरमा बजारमा जाने अनुमति दिइएका त्यस्ता फर्मुलेसनहरु आयुर्वेदिक औषधी र सप्लिमेन्टहरू जस्तो परम्परागत रूपमा पुस्तौं पुस्ता मानिसले सेवन गरी अब्बल प्रमाणित भएका देखिएनन्।









सबैभन्दा चाखलाग्दो विषय के रहेको छ भने बजारमा आज उपभोक्ता आफ्नो शरीरको माग पूर्ति गर्ने पोषण तत्व, औषधीय तत्वर ओज तत्व युक्त खानाहरू खोजिरहेका छन्। कोषिकाका झिल्लीहरू पार गरी माइकोकोन्ड्रिया नामक ससाना कोषिकाका इन्जिनहरूमा जब श्वासप्रश्वास प्रक्रियाबाट आउने अक्सिजन र पाचन प्रक्रियाबाट आउने खाना पुग्छ, ती सूक्ष्म इन्जिनहरूले चिनी लाई कार्बनडाइअक्साइड र ऊर्जामा परिणत गरिदिन्छन्। उक्त क्रममा प्राप्त हुने ऊर्जाले नै जीवनलाई जरुरी हुने इन्धन दिन्छ। शरीरमा खाना टुक्रने, अवशोषण हुने, पाचन हुनेर त्यस बापत प्राप्त शक्तिबाट शरीरका गतिविधि सञ्चालित बनी शरीर जीवित रहने गर्छ । जुनकुरा यहाँ उल्लेख गरिए जस्तो




सहज र सरल नरहेर नितान्त जटिल संयन्त्रर बहुआयमिक प्रक्रियाको संलग्नता जरुरी हुने प्रकृतिको हुन्छ।

पाचन प्रक्रियाका लागि खाना र अक्सिजनको अतिरिक्त नकारात्मक चार्जका कणहरू अथवा इलेक्ट्रोनहरूको प्रवाह अनिवार्य हुन्छ। जसको जोहो शरीरले गर्ने गर्छ। माइकोकोन्ड्रियाको आन्तरिक झिल्ली भित्र रहने चार वटा प्रोटिनमा प्रवाह गरिने इलेक्ट्रोनको (Electron transport chain) सहयोगबाट माइकोकोन्ड्रिया भित्र खानाबाट ऊर्जा उत्पन्न गर्न चाहिने ऊर्जाको पूर्ति हुन्छ। खानाको वास्तविक पाचन प्रक्रिया ठानिने शक्ति उत्पादनको यो प्रक्रियाबाट प्राप्त हुने ऊर्जाले शरीर सञ्चालनको





तागतको काम गर्छ। माइकोकोन्ड्रिया भित्रको सेलुलर प्रोटिन निर्मित पानी मिललाई खाना पचाउन उपलब्ध गराइएको सबै इलेक्ट्रोनको पाचनको क्रममा खपत हुदैन। इलेक्ट्रोन ट्रान्सपोर्ट चेनबाट चुहावट भएको इलेक्ट्रोनहरू अक्सिजन सँग समय भन्दा अगाडि संयोजन हुन जाँदा रिएक्टिभ अक्सिजन वा फ्री रेडिकलहरू उत्पन्न हुन्छन्। जस्तै सुपर अक्साइड आयनहरू। यसरी उत्पन्न भएको अत्यन्तै रियाक्टिभ फ्री रेडिकलहरू लाई उचित रूपमा एन्टिऑक्सिडेन्टहरूले निष्क्रिय गर्न सकेन भने तिनीहरूले सेलका अंशहरू लाई नोक्सान पुऱ्याउने गर्दछ।

यसरी उत्पन्न भएका फ्री रेडिकलहरूले आफूलाई सन्तुलनमा ल्याउन वरपरको संरचनामा रहेको







डीएनए र प्रोटिनका अणुहरू बाट इलेक्ट्रोनहरू जबरजस्ती खिचेर लिइदिन्छ। यो क्रम शरीरको सबै भागमा नियमित रहन्छ । फ्री रेडिकलहरूले डीएनए र प्रोटिनका अणुहरू बाट आफूलाई जरुरत हुने इलेक्ट्रोनहरू जबरजस्ती खिचेर लिइदिने क्रम लामो समयमा जारी रहँदा शरीर छिटै बुढेसकाल निम्तने, उमेर सम्बन्धित रोगहरू विकास हुने, इलेक्ट्रोनहरूको चुहावट अधिक हुने क्रमले हद नाघेमा म्युटेसनका कारण हुने क्यान्सर जस्ता दुर्भाग्य समेत निम्त्याउन सक्छ। जीवनलाई हृष्टपुष्ट राखी पलपल जीवित राख्ने अक्सिजन खाना पचाउने क्रममा लिक भएको बिजुली नियन्त्रण गरी संवेदनशील अंगहरूलाई हानि गर्न नदिने क्रममा आफैँ फ्री रेडिकल बनाउने कारक बन्न पुगी













शरीरलाई बूढो बनाउने, कमजोर तुल्याउने, क्यान्सरपैदा गराउने र इहलीला समेत समाप्त पार्ने कारक बनिदिने गर्छ। यो अर्थमा अक्सिजनले हाम्रो स्वास्थ्यका लागि दुवैतर्फ धार बोकेको खुकुरी जस्तो फाइदा र बेफाइदाको भूमिका निभाउँछ।

सिद्धान्तगत रूपमा उल्लेख गर्दा शरीरमा फ्री रेडिकल्स पैदा हुने स्थितिमा कमी ल्याएर तथा उत्पन्न हुने फ्री रेडिकल्सबाट शरीरलाई पुग्ने हानि न्यूनगर्न सक्दा हामीले आशा गरिए अनुरूप पूरा उमेर स्वस्थ जीवन जिउन, स्फूर्त रहेर छिटै बुढ्यौलीपन लाग्न नदिन र लामो समय आफ्नो आयु बढाउन सक्छौँ। आयुर्वेदको सिद्धान्त अनुरूप खानपान र जीवन पद्धतिमा सुधार गरेर शरीरमा फ्री रेडिकल्स पैदा हुने स्थितिमा कमी ल्याउन तथा











उत्पन्न हुने फ्री रेडिकल्सबाट शरीरलाई पुग्ने हानि न्यून गर्न सम्भव बन्छ। यो अर्थमा आयुर्वेदमा खाना बाट पोषण, ओजस्वी तागत र औषधीय क्षमताको पूर्तिको समेत परिकल्पना गरिएको हो।

आयुर्वेदिक मान्यतामा ओजस्वी तागत वृद्धि गर्न सक्दा पाचन प्रक्रियामा हुने इलेक्ट्रोनको चुहावट घटाउन मद्दत पुग्छ। त्यस्तै योग तथा मेडिटेसन जस्ता उपायबाट समेत फ्री रेडिकल्स उत्पन्न हुने स्थितिमा कमी ल्याउन सकिन्छ। चुहावट भएको इलेक्ट्रोनका कारण बनेको फ्री रेडिकललाई खानामा एन्टिअक्सिडेन्ट उपलब्ध गराएर शान्त बनाउन सकिन्छ। जब खानामा एन्टिअक्सिडेन्ट उपलब्ध हुन्छ तब फ्री रेडिकल्सहरू पैदा हुनासाथ एन्टिअक्सिडेन्टहरूले रेडिकल आयोनलाई













सन्तुलनमा ल्याएर कुनै हानि नोक्सानी पु¥याउन नसक्ने बनाइ दिन्छ। रेडिकल्स आयोनले शरीरका लागि अत्यन्त संवेदनशील मानिने डीएनए र प्रोटिनका अणुहरूबाट जबरजस्ती इलेक्ट्रोनहरू खिचेर लिन पर्ने अवस्थाको अन्त्य हुन्छ । आयुर्वेदिक खानपान, जडीबुटी र अन्य उपाय प्राकृतिक रूपमा खानामा एन्टिअक्सिडेन्ट उपलब्ध गराउने एक उत्कृष्ट विधि हो ।

एक पटक पश्चिमा इन्जिनियरिङ भएका खाद्य सप्लिमेन्टका क्याप्सुल वा चक्कीको प्रभावकारिताको बारे भएको अनुसन्धान वारेका केही तथ्यगत नतिजाहरूको पुनरावलोकन गरौं। १९७० देखि १९८० सम्म मुसामा एन्टिअक्सिडेन्टको प्रभावबारे धेरै अनुसन्धान गरियो। जसमा टेस्टगर्न चाहेको









एन्टिअक्सिडेन्टहरू वैज्ञानिक प्रोटोकल अनुरूप मुसालाई खानामा दिने, जेनेटिकल्ली मोडिफाई गरिदिने गरियो। कुनै टेस्टमा सुई लगाएर सिधै रगतमा पनि दिइयो। अधिकांश अनुसन्धानमा जीवनको स्फूर्ति बढाउने, रोग नलगाउने वा उमेर तन्काउने काममा उक्त एन्टिअक्सिडेन्टका सप्लिमेन्टको प्रभावकारी भूमिका खेलेको भेटिएन। मान्छेमा चाहिँ यसको प्रभाव होला कि त भन्ने परीक्षण गर्न १९९४ मा ५० वर्ष समूहका २९ हजार १३३ फिनल्यान्डका नागरिकमा बिटा–क्यारोटिन सप्लिमेन्ट दिइयो। बिटा–क्यारोटिन सप्लिमेन्ट खाने १६ प्रतिशतमा उल्टो फोक्सोको क्यान्सरको जोखिम बढेको देखायो। १० वर्ष लगाएर अमेरिकामा फोलिक एसिड नामको एक प्रकारको भिटामिन









'बी' सेवन गराइएका महिलामा स्तनको क्यान्सरको जोखिम झन् २० प्रतिशतले बढेको देखायो। १९९६ मा एक हजार जना अधिक धूमपान गर्ने मानिसमा भिटामिन 'ए' र बिटा–क्यारोटिन सप्लिमेन्टदिई गरिएको परीक्षणमा २८ प्रतिशतमा क्यान्सरको जोखिम बढाएको र १७ प्रतिशतले मृत्युदरबढेको दुर्भाग्य बेहोर्नुपर्‍यो। सन् २००७ मा अमेरिकन नेसनल क्यान्सर इन्स्टिच्युटले मल्टिभिटामिन लिने मानिसको नलिनेको भन्दा दुई गुना बढी मृत्युदर भेटिएको कुरा सार्वजनिक गर्‍यो । २०११ मा ३५ हजार ५३३ स्वस्थ मानिसमा दिइएको भिटामिन 'ई' र 'सेलेनियम' सप्लिमेन्टले उनीहरूमा १७ प्रतिशतले प्रोस्टेट क्यान्सरको जोखिम बढाएको भेटायो। भिटामिन 'सी' सप्लिमेन्टको हकमा ठिक्क










मात्रामा हुँदा त्यसले एन्टिअक्सिडेन्टको केही भूमिका निभाएको भेटिएको हो। तर, फ्री इलेक्ट्रोनलिने क्रममा भिटामिन 'सी' आफैँ रेडिकलाइज भइदिने र त्यसलाई नियन्त्रण गर्न कि त अस्वाभाविक रूपमा धेरै भिटामिन 'सी' खानुपर्ने कि त्यसको खती शरीरले बेहोर्नुपर्ने अवस्था सिर्जना हुने देखियो ।

सन् २०१२ मा गरिएको २७ क्लिनिकल ट्रायलको विविध प्रकारको निष्कर्षको मुख्य निष्कर्ष के रह्यो भने एन्टिअक्सिडेन्टको प्रभावकारिता सप्लिमेन्टमा रहेका तत्वहरू शरीरको पाचन प्रक्रियामैत्री नरहेकाले प्रभावकारी नभएको बरु धेरै अवस्थामा प्रत्युत्पादक बन्ने गरेको निष्कर्ष निक्लियो। यस्ता सबै प्रकारका वैज्ञानिक परीक्षणका निचोड के हो













भने खानामा शरीरका लागि चाहिने तत्व शरीरलाई उपलब्ध हुने अवस्थामा हुनुपर्छ। हाम्रो नियमित खानामा पाइने तत्वहरू हाम्रो पाचन प्रक्रियामैत्री रूपमा रहन्छन्। जब हामी शरीरको कुनै विशेषअवस्थाको समस्या निवारणमा विशेष तत्वहरू शरीरलाई उपलब्ध गराउन चाहन्छौँ भने त्यो खानाकै प्रकृतिको रहँदा चाहिने तत्व शरीरलाई उपलब्ध हुने अवस्थामा हुने निश्चित गर्न सकिन्छ। हाम्रा आयुर्वेदिक फर्मुलेसनहरूको अत्यन्त शक्तिशाली र प्रभावकारी तागत भनेकै शरीरको कुनै विशेष अवस्थाको समस्या निवारणमा विशेष तत्वहरू शरीरलाई उपलब्ध गराउन खानाकै प्रकृतिको औषधीय पदार्थको विकास गरिनु हो । जहाँ जुन जुन तत्वहरूको खाँचो शरीरलाई परिरहेको









छ त्यो शरीरलाई उपलब्ध हुने अवस्थामा रहने निश्चित हुने गरी डिजाइनकोअवस्था मै इन्जिनियरिङ गरिएको हुन सक्नु हो ।

समग्रमा सर्वेक्षणहरूले उजागर गरेको चुरो कुरा के हो भने स्वस्थ जीवन याँपनका लागि आयुर्वेदिक जीवन शैलीले दिने प्रकृति मैत्री जीविका, खानपान र औषधीमुलोको फाइदा र प्रभावकारिता अधिक छ। आयुर्वेदिक प्रणालीको स्वास्थ्यका लागि समग्र दृष्टिकोणको प्रमुख विशेषताको महत्व संसारले महसुस गरिसकेको छ ।






वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे


# खोप विकासमा आयुर्वेदिक दृष्टिकोण

आधुनिक विज्ञान अन्तर्गत भईरहेको रोग प्रतिरोधी शक्ति निर्माणगर्ने विभिन्न प्रकृतिको खोप विकासका प्रयासहरू लाई आधुनिक औषधिमा आयुर्वेदिक दृष्टिकोणको फ्युजन हो। प्रयोगशालामा खोप विकास गर्ने प्रयासहरू कुनै सफल हुन्छन् भने कुनै विफल। तर समग्रमा त्यसको रोग प्रतिरोधी क्षमता विकास गर्ने रणनीति आफैमा भने आयुर्वेदिक रणनीतिलाई नै आधुनिकीकरण भएको भनी मान्नु पर्ने हुन्छ।

मानव स्वास्थ्यको सन्दर्भमा राखिने आयुर्वेदिक



॥ श्री गणेशाय नमः ॥

दृष्टिकोणअन्तर्गत जीवनशैलीका अभ्यासहरू, आहार, र जडीबुटी उपचारहरू मार्फत रोगको रोकथाममा जोड दिने गरिन्छ जसकोउद्देश्य बलियो प्रतिरक्षा निर्माण गर्दै शरीरको निश्चित स्थानमा भएको त्रुटि युक्त सञ्चालन प्रक्रियाको मर्मत मार्फत सच्चाउनु, सुधार गर्नु र समग्र सन्तुलनको पुनर्स्थापना गर्नु हो। यस्तैगरी, खोपहरू रोगहरू रोक्नका लागि विकास गरिन्छ। शरीरको प्रतिरक्षा प्रतिक्रियालाई वास्तविक रोग निम्त्याउने बाहकहरूको सामना गर्नु भन्दा पहिले नै रोग निम्त्याउने बाहकहरू विरुद्ध लड्ने तालिम दिएर त्यसलाई परास्त गर्ने क्षमता विकास गरिन्छ।

आयुर्वेदमा जस्तै खोप विकासको क्रममा समग्र स्वास्थ्य निर्माणमा अधिक ध्यान दिने









गरिन्छ। आयुर्वेदमा शरीरका ऊर्जा र शरीरका प्रणालीहरूको समग्र सन्तुलन हेर्दै गर्दा त्यस अन्तर्गत समेत खोपले गर्ने जस्तै विशिष्ट खतराहरूको विरुद्ध प्रतिरक्षा प्रणालीलाई चुस्त बनाउने तयारी समावेश हुन्छ । आयुर्वेदमा जस्तै सबै खोप चिकित्साका अभ्यासहरूले स्वीकार गर्ने गर्दछ कि सबै उपचारहरू सबैका लागि काम गर्दैनन्। तर निरन्तर प्रयास र समायोजन अनिश्चित बनिरहेको उपचार विहीनता र समग्र स्वस्थको पुनर्स्थापना हुन नसकिरहेको अवस्थामा सम्भावित उपचारको विधि वा प्रक्रिया विकास गर्न महत्त्वपूर्ण ठानिन्छ।

जस्तै खोपको विकासको क्रममा निकै दिक्दार लाग्दो कडा परीक्षण, असफलताहरूबाट सिक्ने र





सफल खोप विकास नभए सम्म पुरानो खोप विकास गर्दै गर्दा प्राप्त भएको अनुभववाट सिक्ने र त्यसको समेत सदुपयोग गरेर आफूले लक्षित गरेको उद्देश्य प्राप्त नहुँदा सम्म फेरी अनि फेरी खोपको विकास गर्ने प्रयास जारी राख्ने दृष्टिकोण अवलम्बन गरिन्छ। परम्परागत आयुर्वेदिक उपायहरू यही विधि वाट लामो समयमा विकास भएका हुन्।

समग्रमा खोप विकासको प्रक्रिया, यसको समग्र स्वस्थ निर्माण र रोकथाममा केन्द्रित उपचार पद्धति आयुर्वेदिक सिद्धान्तहरू लाई वैज्ञानिक सन्दर्भमा अलि छिटो खोजेको लक्ष भेटिने गरी अवलम्बन गरिने आधुनिक वैज्ञानिक उपायको रूप हो। आयुर्वेदमा आधारित ओखती र खोपमा आधारित उपचार पद्धति दुवैले अवलम्बन





गर्ने साझा दृष्टिकोण तथा लक्ष्य मानव समग्र स्वास्थ्यलाई अहिंसा युक्त मार्ग मार्फत सुरक्षित राख्नु, सुधार गर्नुमा नै केन्द्रित हुने गर्दछ। यद्यपि तिनीहरूको विकास हुने विधिहरू र सन्दर्भहरूमा निकै भिन्नता हुने गर्दछ।

आयुर्वेद अन्तर्गत शरीरमा प्रतिरक्षा प्रणाली विकासको अवधारणा "ओजस" सँग सम्बन्धित छ। आयुर्वेदले जीवन्तताको सार र प्रतिरक्षाको आधारका रूपमा ओजसको परिभाषा दिने गर्दछ। जीवनलाई धान्ने र शरीरको बल, ऊर्जा र प्रतिरक्षा प्रणालीलाई कायम राख्ने सूक्ष्म सार ओजस हो भन्ने आयुर्वेदको ठम्याइ छ। ओजसलाई आयुर्वेदिक ग्रन्थहरूमा खानाको अवशोषण, पाचन र मेटाबोलीजम प्रक्रिया पछि प्राप्त हुने अन्तिम






उत्पादनको रूपमा चित्रित हुने गर्दछ। जहाँ खानाका सबै पोषक तत्त्वहरू शरीरद्वारा पूर्ण रूपमा अवशोषित र रूपान्तरण गरिएर एउटा सारतत्वको निर्माण भएको हुन्छ। आयुर्वेदमा त्यही सारतत्व वा ओजस शारीरिक बल, मानसिक स्पष्टता, भावनात्मक स्थिरता, अध्यात्म र समग्र कल्याणको ऊर्जाको स्रोत रहेको ठानिन्छ।

बलियो ओजस भएका व्यक्तिहरूको शरीरमा बलिष्ठ प्रतिरक्षा, मानसिक स्पष्टता र समग्र स्वास्थ्यको स्थापना मार्फत सन्तुलित स्वस्थ निर्माण हुने विश्वास गरिन्छ। शरीर तथा प्रकृति मैत्री सोच, आहार, जडीबुटीहरूको सेवन र जीवनशैली समायोजन भएका अभ्यासहरू लाई आयुर्वेदिक जीवन शैली भन्दै ओजस आयुर्वेदिक जीवन शैली भित्र












व्यक्तिलाई भौतिक, मानसिक र आध्यात्मिक रूपमा बलिष्ठ बनाउन जरुरी हुने शरीरको प्राकृतिक रक्षा संयन्त्रहरू सुदृढपार्नमा अधिक केन्द्रित हुने विश्वास गरिन्छ।

आधुनिक खोपहरू जस्तै कोभिड-१९ को लागि विकसित गरिएका खोपहरू समेत शरीरको प्राकृतिक रक्षा संयन्त्रहरू सुदृढपार्नमा अधिक केन्द्रित हुने आशयमा विकसित गरिएको खोप थियो। कोभिड-१९ को शरीरमा सङ्क्रमण गर्ने रोगजनक रोगाणु भाइरसको निष्क्रिय वा कमजोर भाग लाई खोपको रूपमा शरीरमा पठाएर त्यस बारे शरीरको प्रति-रक्षा प्रणाली लाई जानकारी उपलब्ध गराएर रोगको सङ्क्रमण विरुद्ध लड्ने शरीरका संयन्त्रहरू लाई त्यसको विरुद्ध लड्न तालिम दिएर











सक्षम गर्नु थियो।

जसले गर्दा प्रतिरक्षा प्रणालीले भविष्यमा वास्तविक रोगजनक रोगाणु भाइरसको सामना गर्नु पर्दा त्यसलाई मौकामै चिनेर लड्न र त्यसको सङ्क्रमणलाई विफल पार्न तयार बनाउनु थियो। यस प्रकारले प्रतिरक्षा प्रणालीलाई अहिंसा रुपी प्रशिक्षण दिने र समग्र स्वास्थ्यको सुरक्षा र सन्तुलनको कायमको लागि प्राकृतिक रूपमै शरीरको रक्षा प्रणालीहरूलाई क्रमिक रूपमा बलियो बनाउने रक्षात्मक विधि आयुर्वेदिक अवधारणाको आधुनिक वैज्ञानिक रूपान्तरणको रूप नै हो।

आयुर्वेदिक अवधारणा र वैज्ञानिक खोप विकास बिचको निवारक दृष्टिकोणमा समानता अन्तर्गत आयुर्वेद र आधुनिक खोप दुवैले उपचारको सट्टा













रोकथाममा जोड दिन्छन्। आयुर्वेदले प्रतिदिनका अभ्यासहरूलाई सिफारिस गर्छ जसले प्रतिरक्षा प्रणालीलाई बलियो बनाउँछ । जबकि खोपले भविष्यको सङ्क्रमणहरू रोक्नका लागि प्रतिरक्षा प्रणालीलाई तयारपार्छ। शरीरलाई प्रशिक्षण दिने सन्दर्भमा आयुर्वेदमा विभिन्न जडीबुटी र अभ्यासहरूले शरीरलाई तनावका कारकहरू सँग राम्रोसँग सामना गर्न "प्रशिक्षण" दिन्छ। वैज्ञानिकरूपमा विकसित खोपले प्रतिरक्षा प्रणालीलाई विशिष्ट रोगजनक रोगाणुहरू (कीटाणु तथा विषाणु) लाई चिनेर लड्न प्रशिक्षण दिने गर्दछ। दुवै विधिमा केही हद सम्म उपचारको समान अवधारणा भेटिन्छ।

खोप र आयुर्वेदिक उपचार प्रणालीहरू दुवै को











उद्देश्य समग्र कल्याण हो। आयुर्वेदमा भलै शरीर, मन र आत्माको सन्तुलन द्वारा समग्र स्वस्थ खोजिन्छ। खोपले आयुर्वेदकै मान्यता भित्र पर्ने रोगको कारक लाई रोक्ने, दीर्घकालीन स्वास्थ्यलाई बढवा दिने प्राकृतिक प्रतिरक्षा द्वारा प्रणालीको विकास गर्ने अहिंसा युक्त उपाय आधुनिक वैज्ञानिक ज्ञान वा अविद्याको उपयोग गर्दछ।

आधुनिक खोपहरू निर्माणमा भलै प्रत्यक्ष रूपमा आयुर्वेदिक सिद्धान्तहरू पालना हुने गर्दैन तर तिनीहरूले शरीरको प्राकृतिक रक्षा प्रणालीलाई सुदृढ पार्ने व्यापक आयुर्वेदिक अवधारणासँग मेल खाने अवधारणा अवलम्बन गरेको हुन्छन्। खोपहरूले कार्य गर्ने अवधारणा र दृष्टिकोण लाई आयुर्वेदिक प्रतिरक्षा वृद्धिको













सिद्धान्तको आधुनिकीकरण नै हो। मानवता र मानव सेवामा लाग्ने समान उद्देश्य बोकेकाहरू आयुर्वेदिक अभ्यासकर्ता र आधुनिक वैज्ञानिकहरू बिच खोपको उपचार पद्धतिको अवधारणाले आपसी अनुसन्धानात्मक संवाद मार्फत अनुसन्धान र सह-कार्य गर्ने मजबुत जग निर्माण गर्ने सहायक हुने छ। जुन आशयको लागि वेदमा विज्ञान समर्पित छ।

संक्षेपमा, खोपहरू र आयुर्वेदिक अभ्यासहरूका फरक फरक विधिहरू भए पनि, तिनीहरूको साझा लक्ष्य प्रतिरक्षा प्रणालीलाई सुदृढ पार्नु हो। खोपको उपचार विधिहरूलाई आयुर्वेदिक अवधारणाको पूरकको रूपमा लिन सक्दा परम्परागत र आधुनिक स्वास्थ्य दृष्टिकोणलाई जोड्ने सेतु बन्ने छ।







# वैदिक परम्परामा नारी नै अब्बल

परम्परागत वैदिक दर्शन अनुसार नारीहरू पूर्ण स्वतन्त्रता मात्र हैन, घर र समाजमा उच्च सम्मानको आदर्श पात्र रहने गरेको देखिन्छ। नारीको सम्मान र सुरक्षामा अत्यधिक संवेदनशील रहेको परम्परामा जहाँ महिलाको सम्मान गरिन्छ, त्यहाँ ईश्वरको बास हुने मान्यता समाजले बोकेको हुन्थ्यो। वैदिक परम्पराको मूल मर्मले आमामा सर्वोच्च बौद्धिकता रहनेहुँदा परिवारमा आमालाई नेता र बुवालाई शिक्षकको दर्जा दिएको भेटिन्छ । वैदिक लेखोटमा लेखिए अनुरूप सत्य ज्ञान सिकाउने पितारूपी







शिक्षक पाठशालामा ज्ञान सिकाउने १० दक्ष प्रशिक्षक भन्दा बढी महत्वपूर्ण हुन्छन्। आमा त्यस्ता १० बुबाभन्दा बढी महत्वपूर्ण हुन्छिन्।

परिवारका हरेक सदस्यका लागि आफ्नो आमाभन्दा ठूलो गुरु अरू कोही हुन सक्दैन। आफ्नो पिता भन्दा ठूलो शिक्षक अर्को कोही बन्न सक्दैन । जुन परिवारमा नारीको कदर हुँदैन, नारीलाई शोकमा बाँच्न बाध्य पारिन्छ, त्यो परिवारको उन्नति सम्भव रहँदैन। परिवारभित्र अन्य सदस्यसरहकै कदर र सम्मान प्राप्त नारी सदस्यको सहभागिताले चरम दुःखको परिस्थितिबाट गुज्रिरहेको पारिवारिक दुःखको सामना गर्न अत्यन्त सहज र सम्भव बनाउँछ।

आधुनिक जैविक विज्ञानको हिसाबबाट हेर्दासमेत







हरेक परिवारमा बालकको भविष्य बालक अस्तित्वमा आउँदाको विन्दु देखिको परिस्थितिले निर्धारण गर्छ । महिला गर्भवती भएको सोह्रौँ दिनआसपासमा एम्ब्रोइनिक तन्तुबाट न्युरल प्लेट बनी मानिसको स्नायु प्रणाली विकास हुन थालेकोभेटिने गरेको बताउँछ न्युरो–साइन्स। त्यसको दुई–चार दिनभित्रै न्युरल ग्रोभको स्पष्टस्केच विकास हुँदै एक्काइसौँ दिन पुग्दानपुग्दा न्युरल ग्रोभ न्युरल प्लेटसँग जोडिँदैन्युरल ट्युब बनिसक्छ । न्युरल ट्युबको अगाडिको भागबाट टाउकोमा हुने अगाडिको, बीचको र पछाडिको मस्तिष्क बन्छ भने बाँकी मेरुदण्डभित्रको स्पिन कर्ड बन्ने गर्छ। मात्र सात हप्ता पुग्दा न पुग्दा मस्तिष्कको तिनै भागको तीव्र विभाजन हुने क्रम सुरु हुने र सशक्त स्नायु













प्रणालीको विस्तारको अभियान सुरु हुने गर्छ ।

महिला गर्भवती हुनुअगाडि गर्भाशयमा रहेको डिम्बको स्वस्थ (मदर जिनेटिक कोड), पुरुष वीर्यको तन्दुरुस्ती (फादरजिनेटिक कोड), गर्भधारण हुने क्रमको महिला – पुरुषको मनोवैज्ञानिक हालत, गर्भवती हुँदै गरेकी महिलाको शारीरिक र मानसिक स्वास्थ्य अवस्था आदिले गर्भधारण पछि बसेको गर्भको हराभरापनलाई प्रभावित गर्छ। गर्भवती बनिसकेकी महिलाको कोखमा रहेको गर्भको सन्तुलित र सुरक्षित विकासमा भने गर्भवती महिलाले लिने चिन्ता, श्वास प्रश्वास, पानी, खाना, जीवन पद्धति, वरिपरिको वातावरण र त्यसले पु¥याएको मानसिक र शारीरिक स्वास्थ्य तथा तन्दुरुस्तीमा निर्भरगर्छ ।







एक अनुमानमा बालबालिकामा स्नायु प्रणाली विकास हुने क्रममा प्रत्येक मिनेट कम्तीमा दुईलाख ५० हजार न्युरोनको कोषिका (250,000 neurons per minute) बन्ने गर्छ । बच्चा जन्मेको दुई वर्षसम्म यो तीव्र विकास क्रम जारी रहन्छ। यही दुई वर्ष भित्र मानिसको जीवनभर हुने दिमागको वृद्धिको ८० प्रतिशत वृद्धि हुने गर्छ । प्रत्येक सेकेन्ड सेकेन्डमा बन्ने न्युरोनको स्वस्थ र तन्दुरुस्ती त्यो न्युरोन विभाजन भएर बन्ने अन्य न्युरोनको सुरक्षित भविष्यको निर्णायक हुने गर्छ। बच्चाको दिमागको ८० प्रतिशत सम्मको वृद्धिको समयमा बुवा, परिवारको सहयोगमा आमाको भूमिका अत्यन्त धेरै रहने गर्छ। औपचारिक विद्यालय जानुअघि प्रोग्रामिङ भइसक्ने अत्यन्त धेरै











विषयवस्तु पारिवारिक वातावरणमै सम्पन्न हुन्छ। औपचारिक शिक्षाको समयमा समेत परिवारको प्रभावले बच्चाको मनोवैज्ञानिक र शारीरिक वृद्धिमा महत्वपूर्ण रहने हुँदा वैदिक निचोडलाई आधुनिक विज्ञानको अवधारणाले सहजै पुष्टि गरेको भेटिन्छ।

नारी र पुरुष बीचको वैवाहिक अनुकूलताको सम्बन्धमा मुख्य दुई तत्व प्रमुख रहन्छन्। त्यो हो शारीरिक परिपक्वता र मानसिक परिपक्वता। एक नारीले पुरुषले भन्दा कलिलो उमेरमा शारीरिकर मानसिक परिपक्वता प्राप्त गर्ने गर्छिन् । तीन वर्षकी एउटी बच्ची सँग उही उमेरको केटो भन्दा अधिक उन्नत भाषिक र मौखिक सञ्चार कौशल विकास भएको हुन्छ। त्यो उमेरको केटा भन्दा केटी आफ्नो आमा मा निर्भरता धेरै कम भएको भेटिन्छ।







छोरीहरू छोरा भन्दा धेरै सजिलो, आत्मविश्वास र इच्छुकताका साथ प्रि-प्राइमरी स्कुलमा पढ्न जान र आफ्नो भूमिका देखाउन सक्षम र तयार बनेको भेटिन्छ । १२ देखि १४ वर्षको उमेरमा छोरीमा महिनावारी सुरु हुन्छ वा उनको यौवनावस्था सुरु हुने गर्छ । छोरा भने १४ देखि १७ वर्षमा यौवनावस्थामा पुगेको भेटिन्छ । टिनएजमा प्रवेश गरेका छोरा मानिसले भन्दा पहिले छोरी मानिसले विपरीत लिंगबारे सहज ज्ञान प्राप्त गरेको भेटिन्छ ।

शरीरका विशेष गरी छाला मुनि रहने कनेक्टिभ टिस्यु, रगतर लिम्फका नसा, स्नायु, फोक्सो तथा आन्द्रामा समेत प्रतिरक्षाको भूमिका खेल्ने विशेष प्रकारको सेतो रक्तकोष हुने गर्छ। जसलाई मास्ट सेल भनिन्छ । संक्रमणका बेला उक्त स्थानमा








रासायनिक ‘अलार्महरू’ जस्तै हिस्टामाइन आदि निकालेर प्रतिरक्षा प्रणालीका अन्य प्रमुख खेलाडीलाई समेत ल्याएर मास्टसेलले संयुक्त रूपमा हानिकारक जीवाणु विरुद्ध लड्ने र घाउ समेत निको पार्ने कार्य सम्पन्न गर्छ। नारीमा रोग तथा एलर्जी प्रतिरोधी हिस्टामाइन, सेरोटोनिनर प्रोटिएज जस्ता पदार्थ बनाउने मास्ट सेलहरूको निर्माण तथा भण्डारण पुरुषकामा भन्दा अत्यन्त धेरै हुने गर्छ ।

आइमाई र पुरुषमा सेक्स क्रोमोजोम जिनको अपवाद बाहेक मास्ट सेलहरूको जिन समान प्रकृतिको रहने भए तापनि मास्ट सेलको जिनले खेल्ने गतिविधिमा भने नितान्त फरक गुण भेटिएको छ । अनुसन्धानमा नारीको मास्ट सेलमा पुरुषकोमा








भन्दा चार हजार भन्दा धेरै सक्रिय जिन भेटिएको छ । जसले गर्दा नारीमा पुरुषको भन्दा धेरै रोग प्रतिरोधी क्षमता रहने गर्छ। ठूलो संख्यामा सक्रिय मास्ट कोषिकाहरूका कारण हानिकारक जीवाणुको संक्रमण तुरुन्त निष्क्रिय गर्न सकिने हुँदा त्यसले निम्त्याउने सहायक असरलाई समेत न्यून गर्न सकिने हुँदा आइमाईको प्रतिरक्षा प्रणालीहरू धेरै प्रभावकारी भेटिन्छ । मास्ट सेलको प्रतिरक्षा प्रणालीले क्यान्सर जस्ता कोषहरूको वृद्धिलाई समेत रोक्न महत्वपूर्ण भूमिका खेल्ने हुँदा पुरुषहरूको क्यान्सरबाट हुने मृत्युको दर नारीको भन्दा उच्च हुने, नारीहरू पुरुष भन्दा लामो उमेर बाँच्नु आदिको प्रमुख कारण हुन सक्छ ।

२१ वर्ष पुग्दै गर्दा एक युवतीमा संसार र आफ्नो









वरिपरिको वातावरण, समाज र मानिसलाई अवलोकन गरी सहजज्ञान विकास गरिसकेको भेटिएको हुन्छ । सामाजिक न्याय, आफ्नो जीवन र आफैँमा आश्रित वा सम्बन्धित व्यक्ति तर्फ आफ्नो उत्तरदायित्व, आफ्ना आवश्यकता, चाहना, लक्ष्य, महत्वाकांक्षा आदिका बारेमा स्पष्ट विचार विकास गरिसकेको भेटिन्छ। अर्कोतर्फ २१ वर्षसम्म पनि छोरो मान्छे धेरै बच्चा जस्तो बानी नगएको र लापरबाह भेटिनु, हरेक चिजलाई हल्कासँग लिने, प्रतिबद्धता र जिम्मेवारी लिनबाट डराउने आदि हुनु सामान्य रहन्छ। उसको प्रतिबद्धता, जिम्मेवारी र प्रतिबद्ध विनाको बेलगाम अविवाहित जीवन पद्धति तर्फ धेरै आकर्षक रहेको भेटिन्छ। लगभग २६ वर्षको उमेरमा एक पुरुषले अनुशासित,








पारिवारिक, जीवनका लागि आवश्यक मानसिक परिपक्वताको स्तर हासिल गरेको भेटिन्छ। २६ वर्षको उमेर पार गर्दै गर्दाको अवस्थामा मात्र एक मायालु पत्नीको प्रेम, स्नेह र पारिवारिक बन्धन शारीरिक सौन्दर्य र तृप्तिभन्दा अत्यन्त धेरै मूल्यवान् र अर्थपूर्ण रहन्छ भन्ने पुरुषले अनुभूति ग्रहण गरेको देखिन्छ ।

नारीको जिनमा माताबाट प्राप्त X र पिताबाट प्राप्त X समेत गरी XX क्रोमोजोम रहन्छ। पुरुषको जिनमा भने माता बाट X र पिताबाट Y पाएर XY क्रोमोजोम रहन्छ ।नारीको शरीर संरचनागत रूपमा नै माइक्रोबियल संक्रमण विरुद्ध, आक्रमणकारी रोग विरुद्ध बलिष्ठ प्रतिरक्षा क्षमतायुक्त बन्छ ।नारीको रगतमा धेरै एन्टिबडी रहने हुँदा धेरै खोपमा प्रतिकूल









प्रतिक्रिया समेत देखिन्छ । नारीको यौन हर्मोन एस्ट्रोजिनले प्रतिरक्षा प्रणालीलाई सक्रिय पार्न सहयोग गर्छ। जबकि पुरुषको यौन हर्मोन टेस्टोस्टेरोनले शरीरको प्रतिरक्षा प्रणालीलाई दबाउने काम गर्छ ।

Y क्रोमोजोममा लगभग केवल ५० देखि २०० जीनहरू रहन्छन्। तर Y क्रोमोजोममा लगभग १,००० देखि १,५०० जीनहरू रहने गर्छन्। धेरै जिनले धेरै काम गर्ने गर्छ । X क्रोमोजोममा जिनहरू एकातर्फ मस्तिष्कको निर्माणमा भूमिका खेल्छन् भने अर्कातर्फ प्रतिरक्षा प्रणाली बनाउनमा सहयोग पु¥याउँछ । पुरुषमा X क्रोमोजोम महिलाको भन्दा आधा मात्ररहन्छ । आधा Y क्रोमोजोम रहन्छ । Y क्रोमोजोमले सामान्य










प्रकृतिका कार्य जस्तै क्यान्सरको वृद्धिलाई रोक्ने, धमनीहरू लाई सफा गर्ने, धमनीमा चिल्लो आदिका कारण बन्द हुनबाट रोक्ने काम गर्छ। पुरुषको उमेर बढ्दै जाँदा Y क्रोमोजोम निष्क्रिय हुने समेत कारणबाट नारीको भन्दा पुरुषको उमेर कम हुने अनुमान गरिन्छ। नारीमा हुने सुझबुझपन, धैर्य, परिपक्वता र सहनशीलतामा उनको शरीरको संरचनाको निकै ठूलो देन रहेको भेटिन्छ ।

शारीरिक परिपक्वताको दृष्टिकोणबाट एक नारीले ३५ वर्ष पुग्दा बढीमा दोस्रो अन्तिम बच्चाको आमा बनिसक्नु उत्तम देखिन्छ । किनकि ३५ वर्ष हुनु भन्दा पहिले नारीमा सक्रिय यौन सम्बन्धमा चासो रहन्छ। ३५ वर्षपछि नारीले यौन सक्रियतामा बिस्तारै कमी आउँदै गरेको महसुस गर्छिन्। यौन सक्रियता घट्दै













जाँदा ४५ देखि ५० वर्षको हुँदा नारीमा रजस्वला बन्द हुन जान्छ। रजनिवृत्ति पश्चात् नारीमा यौन हर्मोन एस्ट्रोजिनको मात्रा घट्दै जान थाल्छ। जसले गर्दा एकातर्फ कामइच्छा घट्ने, योनि सुक्खा हुने, शरीरमा तातोपन, चमक घट्ने, चिन्ता बढ्ने, तौल बढ्ने र निद्रा नलाग्ने जस्ता समस्याले नारीमा यौन मुडलाई कम गराउने गर्छ। व्यावहारिक यौन सक्रियता धेरै गुमेको भेटिन्छ। अर्कातर्फ पुरुषको शारीरिक संरचनाले करिब ४० वर्षको उमेरमा पुग्दै गर्दा फेरि नयाँ यौन जोस र चाहना विकसित गराउँछ। ६० वर्षको उमेर हुँदासम्म पुरुषमा सन्तान वृद्धिको खुबी सहितको यौन सक्रियता रहने गरेको भेटिन्छ ।

मानसिक परिपक्वताको हिसाबमा एक नारी उनी











भन्दा लगभग आठ वर्ष जेठो पुरुषको स्तरको परिपक्वतामा पुगेको भेटिन्छ। शारीरिक परिपक्वताको हिसाबमा पनि कम्तीमा आफू भन्दा चार वर्ष जेठो पुरुषको स्तरमा देखिन्छिन्। विवाह समान मानसिक र शारीरिक परिपक्वताको स्तरमा रहेका नारी र पुरुषको समायोजन रहेकाले एक नारीले आफू भन्दा चार देखि आठ वर्ष जेठो पुरुष चुन्नु उपयुक्त देखिन्छ। वैदिक परम्परामा आमामा सर्वोच्च बौद्धिकता रहने र परिवारमा उनको भूमिका एक नेताका रूपमा रहने हुँदा शारीरिक रूपमा दक्ष रहेको भेटिएमा आफूभन्दा कम उमेरको पुरुषसँग विवाह गर्न खासै आपत्ति भने रहन्न।

हाल सम्म यकिन भएको पुरुषको आधारभूत मनोवैज्ञानिक तथ्यले पुरुष आफूमा विपरीत













लिंगीमा भन्दा शारीरिक र मानसिक श्रेष्ठता नरहँदा प्रायः खिन्न बन्छन्। एक लोग्ने मान्छेको भित्री मनमा आफूलाई आफ्नी श्रीमतीले एक समान साझेदार भन्दा बढी योग्य र आदरका भावले व्यवहार गरून् भन्नेअपेक्षा रहने गरेको भेटिन्छ। अर्का तर्फ आफू भन्दा धेरै उमेरको पतितर्फ महिलाको भित्री मन बाटै बढी आदर भाव पैदा हुने गरेको देखिन्छ। यस्ता मनोवैज्ञानिक कारणलाई समेत विशेषध्यान दिएर नारीहरूलाई आफूभन्दा चार–पाँच वर्ष जेठो पुरुष लोग्नेका रूपमा रोज्न सल्लाह दिने गरिएको बुझिन्छ ।

## तिम्रो पोइ हुन पाऊँ









विवाहको उमेरमा पुगेकी तरुणी युवतीमा विवाह गर्ने अभिलाषा पैदा हुनु स्वाभाविकै हो। विवाह गर्ने सोच बनाएकी युवतीले आफ्नो मनले खाएको तरुनो भेट्दा उक्त तन्देरीसँग लगनगाँठोमा बाँधिने रहर विकास हुनु झन् स्वाभाविक मान्नु पर्छ । युवतीले भेटेको तन्देरी पनि युवतीले इच्छा गरे अनुरूप उनैसँग विवाह गरी घरजम गर्न पाए धन्य हुने थिए भन्ने सोचाइ पुगे भने त्यो अवस्थालाई मांगलिकता वा शुभलाभको अवस्था ठानिन्छ। शुभलाभको अवस्थामा एकको अर्को प्रति सम्मान र समर्पण भाव पैदा हुने हुँदा आफ्नो इच्छा अनुरूप एक तरुनी महिलाले तन्देरी पुरुषसँग विवाह बन्धनमा बाँधिन निश्चय गर्ने शुभ साइत जुरेको मानिनु पर्छ । युवतीले आफूले मन पराएको










युवासँग विवाह बन्धनमा बाँधिने निश्चयमा पुगेको आफ्नो माता पिता, परिवार र आफन्तलाई जानकारी दिन स्वयंवर मतलब आफूले आफ्ना लागि आफैँ जीवन साथी चुन्ने औपचारिक कार्यक्रम गरिन्छ ।

स्वयंवर अगाडि महिलाको छनोटको भाग्यमानी पुरुष को रहेछ भनी स्वयम् तरुनी युवतीका मातापिता, नजिकका आफन्त र साथीभाइ समेतमा गोप्य रहने हाम्रो परम्परागत चलन हो । विवाह स्वयंवर पश्चात् समाजलाई साथी राखी उमेर पुगेका केटाकेटीले आफू दुवै एक अर्काको राजी खुसीले संयुक्त जीवन जिउने निश्चय गरेको भन्दै औपचारिक सम्झौतामा बाँधिने परम्परागत शुभकार्य हो। विवाहको क्षणबाट उमेर पुगेका केटाकेटी दुवैलाई









आफूलाई चित्त बुझेको र आफैँले चुनेको जीवन साथी सँग संयुक्त जीवनयाँपन गर्न पारिवारिक, सामाजिक र कानुनी स्वीकार्यता र मान्यता प्राप्त भएको ठानिन्छ ।

तरुणी शब्दको अर्थ नवयुवती, तरुनी वा पठ्ठी भन्ने हुन्छ। तरुनो शब्दले तरुण वा जवान वा तन्नेरी भन्ने जनाउँछ। तरुणी वा तरुनो शब्द उमेर समूह भन्दा पनि शारीरिक, मनोवैज्ञानिक र यौनिक सबलताको अर्थमा बुझ्ने गरिन्छ। पुरुष शब्दले सामान्यतः लोग्ने मान्छे भन्ने बुझिने भए तापनि यसको चुरो अर्थ मानव जाति भन्ने लाग्छ। जुन भाले वा पोथी जुनसुकै लिंगको हुन सक्छ। विवाहका लागि सोच विचार गर्दै गर्दाको अवस्थामा वैवाहिक बन्धनमा बाँधिने निश्चय गर्ने जोडीका दुवै सदस्य









मनोवैज्ञानिक र शारीरिक हिसाबमा वीर, आँटी तथा पुरुषार्थ पनको गुण र विशेषता युक्त चरणमा रहेको परिकल्पना गरिएको देखिन्छ। जहाँ पुरुषार्थ शब्दले सकारात्मक मानव ऊर्जा इंगित गर्छ।

वेदले विवाहलाई सुसंस्कृत मानव वंश सुचारु गर्ने सहयोग पु¥याउने मानव धर्म मान्छ। संस्कृतमा धर्मको अर्थ सद्भाव, स्थिरता, स्व-अनुशासन र लोक कल्याणमा सहयोग पु¥याउने महत्वपूर्ण गतिविधि भन्ने लाग्छ। सारमा विवाह लोक कल्याणकारी, राम्ररी संस्कार गरिएको शिक्षा दीक्षा, नैतिक–मर्यादा, सत्संग आदि प्राप्त सुसभ्य मानव जातिको नियमितता गर्न सहयोग पु¥याउने शुभ लगन हो। संस्कृतमा श्रीमती लाई सह-धारिणी शब्द दिइएको छ । सहधारिणीको अर्थ हो श्रीमान् को समान








हैसियतमा रहेकी धर्मधारा। धर्मधाराको अर्थ श्रीमान् लाई सही मार्गमा हिँडाउने तागत राख्ने जीवन साथी । फलित ज्योतिष अनुसार अशुभ तथा अनिष्टकारी मानिने नवग्रह मध्ये सातौँ ग्रह हो शनि।

शनि सूर्य र पत्नी छायाको पुत्र ठानिन्छ। सूर्य लगातार सकारात्मक ऊर्जा उत्सर्जन गरिरहँदा सूर्यको निकै परको दूरीमा रहने, सूर्यको विपरीत गुण हुने शनि आफ्नै माता पिताको सकारात्मक ऊर्जाको अवशोषण गर्ने र नकारात्मक चेतनाको विस्तार गरिदिने चरित्रको मानिन्छ। संसारको हरेक प्रकारको दुर्गुण र दुस्मनीलाई जित्न सक्ने तागत माया, दया र करुणामा मात्र रहने गर्छ। हरेक स्त्री जाति शरीरको संरचनाको हिसाबबाट नै माया, दयार करुणाको खानी नै रहन्छिन्। उनमा रहेको









सहनशीलता र हरेक हन्डर टक्कर विरुद्धको तागतिलो प्रतिरोधी क्षमताले उनीसँग शनि ग्रहको नकारात्मक पक्षलाई समेत शुभ गर्ने क्षमता ‘शुभाशनी’ रहन्छ। फलतः परिवार र समाजमा एकताको ‘सुवासना’ तथा सबै आ–आफ्नो स्थानमा आफ्नै परिधिमा राजी खुसी रहने ‘शुभ–आसन’ पैदा गर्न सम्भव बन्छ। शुभाशनी युक्त सुवासनी – सुभासनी स्वास्नीका रूपमा पुजिञ्छिन्।

हाम्रो परम्परामा विवाहको सबैभन्दा पहिलो साक्षी आगो राखी सामान्यतः वेदको मन्त्र उच्चारण गरी विवाह सम्पन्न हुन्छ। जहाँ यज्ञमा हुने आगो एक पवित्र सार्वभौम ऊर्जाको प्रतिमूर्तिको प्रतीक हो। हाम्रो परम्परा अनुरूप स्वविवेकले, आफ्नै चाहनाले, कसैको करकाप विना, कुनै लोभमा नपरी, पवित्र








मनले जीवन भर समान हैसियतर सम्मानमा रहने सर्तमा मात्र विवाह गर्ने छुट मानव जातिलाई रहन्छ। अन्यथा आजीवन ब्रह्मचारीको जीवन चुन्ने विकल्प रोज्न सुझाइन्छ ।

एक अर्कोको सहयात्रा गर्ने कसम खाँदै जीव भर अनिवार्य समान हैसियत र सम्मानमा रहने अनुबन्ध रहने सर्तमा शुभ विवाहको पवित्र सम्झौतामा वा लगन गाँठोमा कसिन सम्भव ठानिन्छ । विवाहको पहिलो साक्षी जग्गेको आगो छान्नुको अर्थ आफूले भर्खरै गरेको औपचारिक वाचा, सम्झौता र प्रणको व्यावहारिक अनुभूति दिलाउने मनोवैज्ञानिक काइदा नै हो।

विवाहको प्रण र सम्झौताको मूल मर्मले हरेक विवाहित जोडीले गृहस्थाश्रमको नियम अनुसार









आफ्नो घर चलाउन पर्ने बाध्यकारी व्यवस्था गरेको छ। उक्त बाध्यात्मक व्यवस्थाका कारण विवाहलाई विवाह बन्धनमा बाँधिनु भनिएको हो । गृहस्थाश्रमका लागि विवाहित जोडीले एकापसमा अनिवार्य सहिष्णुता, आत्म त्याग, उपकारी मनोवृत्ति जस्ता गुणयुक्त बन्नु जरुरी हुन्छ । विवाहले दुवैलाई आफ्नो जीवन साथी प्रति उच्च सम्मान गर्न, पूर्ण समर्पित रहेर सहयोग गर्ने चरित्रको निर्माण गर्न र त्यसलाई घर परिवारको संस्कारका रूपमा विकास गर्न सहयोग पु¥याउँछ। जुन चरित्र हरेक मानव भ्रूणमा रहँदा विकसित बनिसकेको हुन्छ। मात्र उक्त विकसित चरित्रलाई व्यवहारमा उतार्न विवाह बन्धनले प्रभावशाली भूमिका खेल्ने गर्छ ।

हाम्रो समाजको सचेत भनिएको वर्गले जब








सामाजिक हित भन्दा आफ्नो निजी स्वार्थलाई उच्च स्थानमा राख्न सुरु गर्¥यो तब हाम्रा परम्परागत उत्कृष्ट चलन, मान्यता र मूल्यलाई मानिसले आफूलाई जसरी सहज हुन्छ त्यसरी व्याख्या गर्ने धृष्टता गरेको भेटिन्छ । समयक्रममा मानिसका निजी स्वार्थहरू बिस्तारै समूहगत, धर्मगत, लिंगगत, जातिगत स्वार्थमा बदलियो । मानवता, इमान, जमान, व्यक्तिगत स्वच्छन्दता, सामाजिक न्याय सबै समूहगत मुनाफा, फाइदा, शक्तिप्राप्ति, वैभव प्राप्ति, सम्मान प्राप्ति आदिको निहित स्वार्थको चपेटामा पर्न गए।

गुटगत र पेसागत स्वार्थले जकडिएको समाजमा बदनियत पूर्ण रूपमा स्थापित चलन सामाजिक परम्परा, कानुन र धर्मको नाममा शोषण र









उत्पीडनको मध्यम बने। विवाह पद्धति समेत त्यसको सिकार बन्यो। दुई आत्मीय मन स्वविवेकले मिलेर जीवन यापन गर्ने जस्तो नितान्त निजी कार्य समेत आफन्त, समाज, पण्डित, नेतार शासक को श्री र संवृद्धि प्राप्तिका साधन बने। फगत सामाजिक, आर्थिक, मनोवैज्ञानिक, पारिवारिक, धर्मगत, जातगत लगायतका विभिन्न करकापमा सम्पन्न अत्यधिक विवाह विवाहकै विन्दुबाट एक पक्षले अर्को पक्षलाई राजी खुसीको ट्याग लगाइ दिएर बलात्कार गर्न स्वीकृति प्रदान गर्न योजना गरिएको कानुनी सामाजिक कार्यमा सीमित बनिदिन थाल्यो।

वेदका शब्दमा खेल्दै आफ्नो कलुषित नियत प्राप्ति गर्न ठूला ठूला धार्मिक गुरु कहलिएका अधर्मका










महिषासुरहरूले अधार्मिक स्मृति छल पूर्ण लेखन मार्फत सफेद झुटलाई वैदिक कृतिका रूपमा समाजमा स्थापित गराएर हाम्रो निजी जीवन जिउने स्वच्छदता माथि समेत निर्मम बलात्कार गर्न पुगे । वेदको मर्मलाई नै उल्लंघन गर्दै नेपाली समाजमा विगतमा मूलतः आठ प्रकारका विकृत पूर्ण विवाह अस्तित्वमा देखिए। आज हुने विवाह समेत यिनै विकृतपूर्ण विवाहको गहिरो प्रभावबाट गुज्रिरहेको तपाईं हामीले अनुभूति गर्न सक्छौँ।

गुरुकुलमा स्नातक तह उत्तीर्ण गरी चार वेदको अध्ययन पूरा गरेको केटालाई केटीका आमाबुवाले बिहे गरी अन्माएर पठाउने विवाह लाई ब्रह्म विवाह भनियो। वेदको अध्ययन पूरा गरेको केटा प्रतिभाशाली हुने भन्दै छोरीको कन्यादान गर्ने













विवाहको परम्परा भनियो। कन्या लाई गाईबस्तु जस्तो दान दिने विलासीको वस्तु ठान्ने नियत बोकेको समाजको बौद्धिक मानिने वर्गको स्वार्थ सिद्ध गर्न तिनै वर्गले धर्मको कलुषित व्याख्या गरी ब्रह्म विवाह उत्कृष्ट विवाह भन्ने धृष्टता गरियो। सूर्यको चन्द्रमासँग ब्रह्म विवाह भएको भन्ने भ्रम समेत तिनै वर्गबाट छरियो। जबकि वेदमा कन्यादान भन्ने आशय कतै प्रयोग भएको छैन। बरु कन्याको दान गर्न सक्ने हैसियत यो प्रकृतिमा कसैसँग रहँदैन भन्ने पक्षमा वेदले वकालत गर्छ।

सुन्दर कन्याका मातापिताले मन्दिरका पुजारी र पुरोहितलाई धन दौलत र सम्मान सहित सुम्पने विवाहलाई देव विवाह भनियो।

एक सामान्य परिवारमा खुसीको मौका होस् वा











दुःखको, जुनसुकै कार्यमा पनि पुजारी र पुरोहितलाई धन दौलत सम्मान अनिवार्य मिल्ने सामाजिक रीतिको विकास गरियो। घरमा हुर्किएका सुन्दर बालिका समेत दानका लागि उनीहरू नै योग्यताको पहिलो सूचीमा पर्ने योग्य देव रहेको धारणा समाजको भित्री तह सम्म स्थापित गरियो।

राजाको वा तत्कालीन शासकको सुराकीको काम गर्ने यस्ता आफू देवको संरक्षण प्राप्त भनी समाजको सेवक र पथ प्रदर्शक भनी दाबी गर्ने ब्रह्म-राक्षसहरू राजा महाराजा भगवान् विष्णुको असली रूप भन्दै समाजमा संगठित शोषण र उत्पीडनको सञ्जाल निर्माण गर्न सक्रिय भूमिकामा रहे। जुन वेदको अवधारणा विपरीतको पाखण्ड थियो। जसले वैदिक अवधारणा माथि नै ठुलो समुदायमा













नकारात्मकता फैल्याउन भूमिका खेल्यो।

कुनै तपस्वी वा ऋषिले केटीका बाबु आमालाई एक वा दुई जोडी गाई वा गोरु तथा केही लुगा दिएर, उपहार दिएर केटीको बाबु आमाले गर्ने कन्या दान स्वीकार गर्ने विवाहलाई अर्श विवाह भनियो। अर्श विवाहमा दुलही अमूल्य हुने स्विकार्ने, दुलहीका रूपमा आफ्नी छोरी दिएर ऋषिको 'गृहस्थ धर्म' सफल पारिदिने व्यक्तिलाई कृतज्ञता स्वरूप उपहार दिने गरिए तापनि कन्याको आत्माधिकार, स्वतन्त्रता र महिला दानमा लिन दिन सकिने वस्तु होइनन् भन्ने धारणाको यो पद्धतिको विवाहले समेत उल्लंघन गरेको देखिन्छ।

विवाह जस्तो जबरजस्ती लादिएको रीति रिवाजको सन्दर्भमा कतिपय तपस्वी तथा ऋषि समेत भगवान्











विष्णु देव कहलिने राजा–महाराजाका सुराकीका रूपमा गाउँगाउँमा आफूलाई देव दुत घोषणा गर्दै पण्डित्याइँ र प्रवचन गर्ने उत्पीडक वर्गको संयन्त्रको स्थानीय क्षेत्रका मतियारको भूमिकामा उपस्थित रहने गरेको समेत देखिन्थ्यो।

समाजको बौद्धिक वर्ग नै कुनै न कुनै रूपमा मुलुकको शोषण मार्फत आफ्नो जीविका सहज गर्ने प्रवृत्ति नेपालमा हालसम्म निर्मूल हुन सकेको छैन।

धनी व्यक्तिको सम्पत्तिमा रजाइँ गरी छोरीले यस आरामको जीवन बिताउन सक्छिन् भन्ने लोभमा माता पिताले धनी केटालाई विवाह मार्फत मान सम्मान सहित दान दिने विवाह प्रजापत विवाह हो। यस्तो विवाहमा अर्काले जोडेको सम्पत्तिमा मोजमस्ती लिन सकिने र जीवन सुखी रहने नियत













लुकेको हुन्छ। जुन न त वेदको नियमको अनुरूपको नै हो न उक्त प्रकारको विवाहले नारीको जीवन नारकीय हुनबाट रोक्न सक्ने कुनै आधार नै भेटिएको छ।

केटा र केटीबीच राजी खुसीले आफ्नै चाहना अनुरूप गरिने विवाह गन्धर्व विवाह हो। आज भोलिको प्रेम विवाह जस्तो विवाह हो गन्धर्व विवाह जहाँ स्वयंवर जस्ता कार्यक्रम हुन्थ्यो। तर, कलुषित कन्यादान भन्ने हुने गर्थेन। स्वयंवर पश्चात् हुने विवाहमा कन्यादान भन्ने कतै सुनिँदैनथ्यो। विवाह कार्यक्रम बीचमा कन्या दानको घुसाउन सक्दा विवाहमा थप आय गर्न सकिने रणनीति अन्तर्गत बीचमा पण्डितहरूले गन्धर्व विवाहमा समेत कन्यादान थपेको बुझिन्छ।











प्रेम विवाह नामकरण भएको गन्धर्व विवाहमा आज भोलि इन्गेजमेन्टको नाममा टिका टालो हुने र भागेर विवाह नहुने अवस्थामा कन्यादान हुने, दाइजो खोजिने कुप्रथा भित्रिएको भेटिन्छ।

केटीको रगतको नाता गाँसिएको आफन्तलाई मारी वा घाइते बनाएर जबर जस्ती उनका मातापिता बाट लुटी लगेर उनको कुमारीत्व नष्ट गरी गरिने विवाहलाई राक्षस विवाह भनियो। जुन पहिले पनि गैरकानुनी मानिन्थ्यो । तर, शक्ति र पहुँचमा रहेका, गुन्डागर्दीमा संलग्नबाट यस्तो दुष्कर्म पटक पटक हुने गरेको देखिन्थ्यो।

त्यस्तै केटीका माता पितालाई धन सम्पत्ति दिएर खरिद गरी हुने विवाहलाई असुर विवाह भनिन्थ्यो। सुतेको समयमा वा कुनै नशाको उन्मादमा रहँदा,













मनोवैज्ञानिक हिप्नोटिजम गरी, मोहनी लगाई, मनोवैज्ञानिक समस्यामा रहँदा वा क्षणिक प्रभावमा पारेर करकापमा केटी मानिसको कुमारीत्व लुटी आफूसँग विवाह गर्न बाध्य पार्ने विवाहलाई पिचाश विवाह भनिन्थ्यो।

पीडित पक्षमा पुगेको अन्याय र अमानवीय व्यवहारका कारणबाट भन्दा चुरो कारणमा राक्षस विवाह, असुर विवाह र पिशाच विवाहमा पण्डित तथा पण्डितका रक्षक राजा–महाराजाको आम्दानीको स्रोत नहुने अवस्था रहने भएकाले गैरकानुनी भनिएको थियो। कतिपय धनी व्यक्ति, राजा महाराजाले यस्तो विवाह गर्दथे। पण्डित तथा राजा महाराजालाई उचित नजराना दिन सक्दा यस्ता विवाह पनि उनीहरूले अब उपरान्त कानुनी









मानिने घोषणा गरिदिन्थे ।

संस्कृत भाषामा श्रीमान्लाई जनाउने विभिन्न शब्द छन्। जस्तैः पति, भर्त्ता, भर्त्तृ, स्वामी, स्वामिन्, वरः, वोढा, वोढृ, विवोढा, वरयिता,वरयितृ, कान्तः, परिणेता, परिणेतृ, परिणायकः, नाथः, इष्टः, दयितः, प्रियः, प्रियतमः,धवः, उपयन्ता, उपयन्तृ, परिग्रहीता, परिग्रहीतृ, क्षेत्रिकः, हृदयेशः, प्राणेशः, जीवितेशः, प्राणनाथः, प्राणाधिनाथः, वेत्ता, वेत्तृ आदि। त्यस्तै संस्कृतमा श्रीमतीलाई पनि धेरै शब्दबाट इंगित गरिन्छ। जस्तैः भार्य्या, वामाङ्गं, स्त्री, पत्नी, जाया, दारा, वधूः, बधूः, कलत्रं, गृहिणी, गेहिनी, पाणिगृहीता, सहधर्म्मिमणी, प्रेष्ठा,वनिता, द्वितीया, सधर्म्मिमणी, प्रेयसी, गृहं, अर्द्धाङ्गं, धूता, परिग्रहं, क्षेत्रं, दयिता, कान्ता,









वल्लभा, प्रिया, प्रियतमा, रमणी, नायिका, प्राणेशा, प्राणसमा, प्राणसखी, विवाहिता आदि ।

हाम्रो आफ्नो परम्परागत रैथाने चलन चल्तीको जिब्रोमा बसेको मीठो भाषामा श्रीमान् लाई लोग्ने वा पोइ वा बुडो भन्ने गरिन्थ्यो। श्रीमतीलाई भने पत्नी, स्वास्नी वा बुढी। परिवारको छनौट बाट केटीले वरण गरेको पुरुष पति कहलिन्थे। केटीको आफ्नै छनोटको केटा भने पोइ कहलिन्थे । परिवारको छनोटका श्रीमान् परे वा केटीको रोजाइको परे भन्न नचाहँदा उनी लोग्ने कहलिन्थे। विवाह पश्चात् बच्चाबच्ची समेत जन्मिसकेको लोग्नेलाई भने बुढो भन्ने शब्द उपयोग हुन्थ्यो।

प्रजापत विवाह वा असुर विवाह भएका कन्याको कुनै मानव अधिकार नरहने हुँदा उनीहरूलाई अरबी










भाषाबाट सापटी लिएको शब्द 'महिला' प्रयोग गरिन्थ्यो।

वेदको सार अनुरूप सम्पन्न गन्धर्व विवाह कानुनी थियो। स्वास्नी र पोइ राम्रो अर्थ दिने सम्मानित शब्द नै थिए। तर पनि गन्धर्व विवाहले पुजारी, पुरोहित र शासकलाई धनदौलत जोड्ने अवसरबाट विमुख पार्ने जोखिम रहेका ले विवाहित युवती र युवाले प्राप्त गर्न स्वास्नी र पोइ शब्द पुजारी, पुरोहित र शासकको हमेसा कटु आलोचना र निन्दाको शब्द बने । समाजले अन्ततः हो मा हो मिलायो।

यस्तो कहावत थियो कि केटा मानिस प्रायः सम्भोगका लागि प्रेमतर्फ आकर्षित बन्ने गर्छन्। केटी भने माया प्राप्तिका लागि सम्भोग तर्फ आकर्षित हुन्छिन्। हाम्रो मान्यतामा बिहे गर्ने उमेर













पुगेको हरेक केटा मानिस हलक्क बढेको मस्त शरीरको जो सुकै युवती देख्दा आकर्षक हुने कमजोरी सहित जन्मेको प्रतीत हुन्थ्यो। त्यसैले विवाहमा केटाले मन पराएको केटी हो – हैन भन्दा पनि केटीको केटीले मन पराएको केटासँग विवाह भयो भएन भन्ने कुराको ठूलो अर्थ रहने गर्दथ्यो।

केटी स्वयंवरमा आफूले चुनेको केटाको श्रीमती बन्ने हुँदा स्वयंवर मार्फत बनेकी श्रीमतीलाई स्वास्नी भनिन्थ्यो। हक्की स्वभावको निडर तर ममतामयी, आफ्नो निर्णय आफैं लिने चतुर केटी मान्छेलाई स्वास्नी मान्छे भनिन्थ्यो। नत्र आइमाईको संज्ञा पाउँथ्यो।

परिवारको छनोटको कन्यादान गरी दिइएकी श्रीमती पत्नी कहलिन्थिन्। झुक्याएर गरिएको वा लुटको







विवाहको महिला दासी वा रखेल ठानिन्थिन्। स्वयंवर बाट चुनिएका वरले वेदको विधिपूर्वक बधुको हात औपचारिक रूपमा ग्रहण गर्ने पाणिग्रहण प्राप्त गृहिणीले मात्र स्वास्नीको दर्जा पाउँथिन्। त्यस्ता सौभाग्यशाली पुरुष 'पोइ' कहलिन्थे। पोइ सँग पोइको घर जाने कामलाई पोइला जाने भनिन्थ्यो। पोइलाई आफ्नै घरमा राख्दा श्रीमती लाई जोई भनिने र श्रीमान् लाई जोइल गएको भनिन्थ्यो।

परिवारको छनोटको विवाहमा भने पतिसँग घरजम गर्न जाने कामलाई जन्मघर छोडेर कर्मघर घरजम गर्न गएको संज्ञा दिइन्थ्यो। पतिलाई आफ्नै घरमा राख्दा घरज्वाइँ बसेको भनिन्थ्यो।

धर्म वा संस्कारको नाममा वेदले स्वीकार्न नसक्ने











दुराशय युक्त विवाहहरू लाई जानेर वा नजानेर नकार्न नसकी वा मौन स्वीकृतिमा पच्छाउँदै गर्दा हामी नेपाली समाजका निकै ठूलो तप्का आज नारी उत्पीडन र शोषण गर्ने प्रणालीको मौन संरक्षक बनिरहेका छौं।

आफूबाट भइसकेका त्रुटिलाई विगतमा फर्केर सुधार्न सम्भव नहोला। तर, भविष्यमा यस्ता गल्ती अन्यत्र दोहरिन नदिन भूमिका खेल्न सकिन्छ । हालका लागि मैले भने एक प्रायश्चित गर्ने अठोट लिएको छु। आफ्नै कन्यादान मार्फत विवाह बन्धनमा बाँधिएको धर्मपत्नीसँग आफूलाई सकिन्छ आजैको मितिबाट सकिन्न अर्को जन्ममा आफूलाई पोइका रूपमा स्विकारिदिन अनुरोध गर्ने ।

**मेरी प्रियतमा,**





॥ श्री गणेशाय नमः ॥

म तिम्रो पति, सम्भव हुन्छ भने आजैको मितिबाट हुँदैन भने अर्को जुनीमा तिम्रो पोइ हुन पाऊँ भन्ने ईश्वरसँग इच्छा जाहेर गर्न चाहन्छु । मेरो यो एकतर्फी अभिलाषा हुन सक्छ । तिम्रो सहमति बेगर मैले प्रकट गर्ने मागले तिम्रो अन्तरमनको स्वतन्त्रताको हिंसा गरिदिने छ। मानव अधिकार भन्दा ठूलो अन्तरमनबाट आफ्नो जीवन गन्तव्य आफ्नै इच्छा अनुरूप जिउन पाउने धर्माधिकार बृहत् रहन्छ।

हिंसाको माग लिएर ईश्वर सम्मुख पुग्ने मानवको इच्छा पूर्ति गर्ने अधिकार स्वयम् ईश्वर सँग समेत रहँदैन। प्रकृतिले तोकिदिएको अधिकार क्षेत्र अन्तर्गत हरेक हिंसा सजायको भागी हुनुपर्छ। तिमीलाई गुमाउन नपर्ने र सजायको भागी नबन्ने





बाटो पकड्न मैले तिम्रो मन र मेरो मनबीचको एक साक्षात्कार भेटवार्ताको अपेक्षा गरेको छु । मेरो इच्छा ईश्वर सँग जाहेर गर्नु अघि तिमीसँग अनुरोध सहितको एक बिन्ती बिसाउने निश्चय गरेको छु।

मलाई आजैको मितिबाट तिम्रो पोइका रूपमा स्विकारिदिनू न है।

अर्को जुनीमा पनि तिमी मेरो स्वास्नी बन्दिनू नि है।

तिम्रो पोइ हुने मेरो इच्छा पूरा गरिदिनू न है।

## आफैँलाई फर्केर हेर्दा

तपाईंले कहिल्यै तपाईंको शरीरको संरचना बारे गौर गरेर ख्याल नगर्नु भएको हुन सक्छ। गर्नु भएको







भए पनि पुनरवलोकन नगरेको धेरै भएकाले यसको अत्यन्त सामान्य कुरा बिर्सि सक्नु भएको हुन सक्छ। पश्चिमा औषधी विज्ञानले मानव एनाटोमीको अध्ययन बाट मानिसको शरीरबारे अवधारणा बनाउने गरेको छ। पुरानो ग्रिक शब्द एनाटोमीको अर्थ हुन्छ 'काट्नु'।

शरीरको संरचनालाई ससानो भागमा टुक्र्याएर अध्ययन गर्दा भेटिएको सत्यलाई सार तत्व सत्य मानी पश्चिमा औषधी विज्ञान अघि बढ्ने गर्छ। जस अनुसार मानिसको शरीरको सबैभन्दा जुझारु प्रणाली हो प्रतिरक्षा प्रणाली। अंग, तन्तु र कोषिकाहरूको संयुक्त संयोजनबाट शरीरलाई हानिकारक हुने ब्याक्टेरिया वा सम्बन्धित नभएको पदार्थबाट रक्षा गर्न काम प्रतिरक्षा प्रणालीले गर्छ।













तपाईंको शरीरको आकार भने शरीरको कंकालले दिने गर्छ। कंकालको कडा तर लचिलो आसनले तपाईंलाई तपाईंको समग्र आकार दिलाउँछ। मांसपेशीलाई हड्डीसँग जकडिएर रहने स्थान उपलब्ध गराउँछ। शरीरका भित्री नरम अंगहरूलाई सुरक्षित राख्छ। कंकाल भित्रको मासीले निरन्तर नयाँ रक्तकोषहरूको निर्माण गर्छ। खोपडी, दिमाग र आँखा, कान, नाक र जिब्रोका लागि सुरक्षा कवच उपलब्ध गराउने घर शरीरको कंकाल हेर्दा एकल हड्डी जस्तो देखिए पनि वास्तवमा खप्पर एक्लै नजोडिएका २२ वटा हाडको संगठन हो। शिशुहरूमा झन्डै २७० हड्डी हुने गर्छन्। हड्डीहरू उमेर बढ्दै गर्दा कुनै एक अर्कासँग जोडिन्छ त दाँत लगायत पछि पलाउने पनि गर्छ। वयस्क बनि









सक्दा मानिसमा लगभग २०६ हड्डी रहने गर्छन् ।

तपाईंको शरीरमा तीन सयभन्दा धेरै जोर्नी छन्। घाँटीमा हुने हाइओइड हड्डी (Hyoid Bone) बाहेक प्रत्येक हड्डी कम्तीमा अर्को एक हड्डीसँग जोडिएको हुन्छ । एउटा हड्डी अर्को हड्डीसँग जोडिने जोर्नीहरू तीन फरक प्रकारका हुने गर्छन् ।

पहिलोमा नसाले भरिएका जोर्नीमा हलचल नहुने स्थिर जोर्नीहरू हड्डीहरूलाई एकापसमा दरिलो रूपमा जोडी शरीरलाई सम्पूर्ण रूपमै सन्तुलन कायम राख्छ। जस्तै: जरासँग जोडिएको माथिल्ला र तल्ला दाँत, टिबिया र फिबुला जस्ता लामो हाड, खोपडीका हड्डीहरू आदि ।

दोस्रोमा कुरकुरे हड्डीमार्फत जोडिएर एकापसमा









हल्का लचकता हुने जोर्नीहरू। हल्का लचिला जोर्नीहरूले शरीरलाई केही लचकता प्रदान गर्छन्। हड्डीहरूको बीचमा कुरकुरे हाड हुने गर्छ। कुरकुरे हाडले र हड्डीहरूलाई जोडेर राख्छ। जस्तै: कार्टिलेजका नसाहरू वा लिगामेन्ट बाट एकापसमा जोडिएका पहिलो करङ र घाटीको हड्डी बीचको जोर्नी, औँलाको बीचका जोर्नीहरू, करङका हड्डी बीचका जोर्नीहरू।

तेस्रोमा मोटो झिल्लीले घेरेर बनेको थैली भित्र हड्डीका जोर्नीहरू बन्छ । थैली भित्र शरीरको ग्रन्थिले बाक्लो तरल पदार्थ भरेर हड्डीहरूलाई पूर्ण रूपमा चलायमान गर्न सकिने गरी जोडेर राख्ने काम गर्छ । जस्तै पुठो, घुँडा, कुम, कुहिनो आदि हड्डीका जोर्नीहरू ।










बच्चाका रूपमा तपाईंले पृथ्वीमा पहिलो पाइलो राखे देखि वयस्क हुँदाको युद्धस्तरको गतिसम्म आफ्नो दैनिक गतिविधिमा सफल हुन तपाईंलाई जरुरी हुने हरेक किसिमका हलचल सम्भव तुल्याउन तपाईंको मांसपेशी प्रणालीको प्रमुख भूमिका रहन्छ। लगभग ७०० भन्दा बढी नामका कंकाल सँग जोडिएको मांसपेशीहरू रहने तपाईंको शरीरमा अनुहारको छाला भित्र मात्र ४० भन्दा बढी मांसपेशी रहेका हुन्छ। जसले तपाईंका खोपडीका हड्डीहरूलाई एकापसमा जोडेर राख्ने गर्छ ।

तपाईंका अनुहारका ती ४० भन्दा बढी मांसपेशी र खोपडीका २२ वटा हाड विभिन्न संयोजनमा यसरी मिलेर एकसाथ काम गर्छन् कि तपाईंको फरक फरक अनुभूतिमा लगभग १० हजार किसिमका













फरक फरक अनुहारको अभिव्यक्ति उत्पादन गर्न सम्भव बन्ने गर्छ। उक्त अभिव्यक्ति तपाईं अरूसँग कुराकानी र सञ्चारका लागि प्रयोग गर्ने गर्नुहुन्छ ।

तपाईंको शरीरभित्र हुने अन्दाजी ३० देखि ४० ट्रिलियन कोषिकाहरू जीवित र स्वस्थ राख्न प्रत्येक दिन तपाईं अन्दाजी १० हजार लिटर हावा श्वासबाट लिने र फाल्ने गर्नुहुन्छ । हावा जब फोक्सोमा प्रवेश गर्छ तब ठूलो बाट सानो, झन् सानो गर्दै सूक्ष्म नलीको हाँगामा विभक्त जेलिएको नसाको जालो मार्फत फोक्सोको तन्तु भित्रको सूक्ष्म बन्द थैलीसम्म पुग्छ ।

फोक्सोमा रहेका ती सूक्ष्म बन्द थैलीलाई अल्भियोली भनिन्छ। वयस्कको फोक्सोमा सयौं मिलियन एल्भियोली हुन्छ। एल्भियोलीमा पुग्दा











हावाको विशाल सतहको क्षेत्रफलमा फैलिएको हुने हुँदा भित्रबाट आएको कार्बनडाइअक्साइड बाहिर पठाउन र त्यहाँ पुगेको अक्सिजन भित्र लिन छोटो समयमै सम्भव हुन्छ।

श्वासप्रश्वास र रक्तसञ्चार प्रणालीको महत्वपूर्ण भाग हो रक्तनली। फोक्सोको सूक्ष्म रक्तनली भित्रको रगतले कार्बनडाइ अक्साइड छोडी अक्सिजन लिएर बनेको सफा रगत सूक्ष्म नलीबाट ठूलो, अनि झन् ठूलो गरी ठूलो नसामा पुगी मुटुमा पुग्छ। मुटुको पिचकाले सफा रगतलाई ठूलोबाट सानो, सानोबाट झन् सानो गर्दै सूक्ष्म नलीको हाँगामा विभक्त जेलिएको निलो रगतको नसा, आर्टट्रिजको जालोमार्फत शरीरको प्रत्येक तन्तुभित्रको सूक्ष्म कोषिका सम्म पु¥याउँछ।













तपाईंको शरीरभित्र रहेको नसाको यो विशाल सञ्जालमार्फत शरीरको प्रत्येक भागमा रगत यात्रा गर्न सम्भव बन्छ। तपाईंको शरीरभित्र जाने अक्सिजन यात्राको सुरु देखि कार्बनडाइ अक्साइड हावामा फाल्ने यात्राको अन्त्य सम्म नसाको सञ्जाल लगभग एक लाख २० हजार किलोमिटर हुने गर्छ। जुन सम्पूर्ण पृथ्वीलाई नै तीन फेरो लगाउन पुग्ने लम्बाइ हो ।

यो सञ्जालभित्र रगतका धमनी, भेनहरूले शरीरको विभिन्न भागबाट रगत मुटुमा जम्मा गरी फोक्सोसम्म पु¥याउँछन्। निला रगतका नसा, आर्टट्रिजले फोक्सोबाट सफा रगत लिएर मुटुमा र मुटुबाट शरीरका विभिन्न अंगमा पु¥याउँछ । भेन र आर्टट्रिज दुवै फोक्सोको तन्तु भित्रको सूक्ष्म बन्द







थैलीमा एकापसमा मिल्छ ।

तपाईंको शरीरको कलेजोभित्र रगतलाई सफा राख्ने र शरीरलाई स्वस्थ बनाउने सयौँ प्रक्रिया सुचारु रूपमा सञ्चालन हुने गर्छ । शरीर भित्रको सबभन्दा ठूलो अंगका रूपमा हुने त्रिकोणीय आकारको कलेजो पेटको नाइटोको सतह भन्दा माथि दाहिने भागमा डायाफ्राम भन्दा मुनि करङको खोक्रो ओढारमा रहन्छ ।

कलेजोको लगभग समान आकारका चार अलग अलग भाग हुन्छ जसलाई लोव भनिन्छ । हरेक पल तपाईंको शरीरमा रहने सम्पूर्ण रगतको १० प्रतिशत भन्दा बढी रगत कलेजोमा प्रशोधन भइरहेको हुन्छ। तपाईंको कलेजोले आश्चर्यजनक रूपमा हरेक मिनेटमा १.५ लिटर रगत प्रशोधन











गरिरहेको हुन्छ ।

साधारणभन्दा साधारण जनावरमा समेत भेटिने स्नायु प्रणाली मध्ये सबैभन्दा उन्नत हालसम्म मात्र मानिसमा भेटिएको छ । तपाईंको सम्पूर्ण शरीरको तौलको मात्र तीन प्रतिशत तौल हुने मस्तिष्क एक्लैले तपाईंको शरीरले खर्च गर्ने कुल मध्येको २० प्रतिशत ऊर्जा खपत गर्छ । जुन अरू कुनै पनि अंगले खर्च गर्ने ऊर्जाको तुलनामा अत्यधिक धेरै हो ।

तपाईंको दिमागमा यति विशाल ऊर्जाको माग हुनुको कारण तपाईंको दिमागले तपाईंको शरीरको श्वासप्रश्वास, रक्तसञ्चार, विचार, भावना, सम्झना लगायतका सम्पूर्ण गतिविधिमा नियन्त्रण कायम गर्ने हुनाले नै हो ।









इन्द्रियहरूले हामीलाई हामी वरिपरिको परिस्थितिबारे सूचना उपलब्ध गराउँछन् । सूचनाको उपयोगबाट चेतनाले अनुभूति र अनुभवको संश्लेषण गरी टिपोट राख्छ । विभिन्न टिपोटको निचोडका रूपमा हामीमा ज्ञान पैदा हुने गर्छ। जसलाई बुद्धि वा इन्टलेक्ट वा उइजडम (Wisdom) भनिन्छ। समग्र ज्ञानको निचोडका रूपमा मानिसमा आन्तरिक अनुभूति वा इन्टिउसन (Intutions) वा गट–फिलको विकास हुन्छ।

एक प्रकारको पदार्थ अर्को प्रकारको पदार्थमा रूपान्तरण गर्न रासायनिक प्रक्रिया वा केमेस्ट्री उपयोगमा आउँछ। एक प्रकारको ऊर्जालाई अर्को प्रकारको ऊर्जामा परिवर्तन गर्न भौतिक प्रविधि वा फिजिक्सको जरुरत पर्छ। यी गतिविधिहरू नियमित









सुचारु हुन पदार्थलाई ऊर्जामा रूपान्तरण गर्न निश्चित प्रविधि वा ईनर-इन्जिनियरिङमा दख्खलता चाहिन्छ।

पुर्खाको जैविक स्मृति वा जेनेटिक कोड अभिभावक बाट आफूमा हस्तान्तरणका लागि जैविक अथवा बायोलोजिकल उपायको जरुरत पारिदिन्छ । हामी जीवहरू एकापसमा जैविक रूपमा, पृथ्वी सँग भौतिक रूपमा र बाकी ब्रह्माण्डसँग आत्मामार्फत जकडिएका छौँ ।

जब तपाईं खाना खानुहुन्छ, पाचन र अवशोषण प्रक्रियाबाट रगतको प्रवाहसँगै उक्त पोषणतत्व र श्वासप्रश्वासबाट प्राप्त रगतको हेमोग्लोबिनमा घुलेको अक्सिजन कोषिकाहरूको माइकोकोन्ड्रियामा अक्सीकरण हुँदा ऊर्जा उत्पन्न हुन्छ ।




अक्सीकरणका क्रममा उत्पन्न ऊर्जामध्ये ३० प्रतिशत सक्रिय ऊर्जा र तातोपनका रूपमा शरीरको नियमित भौतिक र शारीरिक गतिविधि सञ्चालनमा खर्च हुने गर्छ । अन्य ऊर्जा चेतना, प्राण, आत्मा र परमात्माको संयोजन र कार्य सञ्चालनमा खर्च भइरहेको हुन्छ ।

शरीर, इन्द्रिय, दिमाग र आत्माको संयोजनले हरेक क्षण जीवहरूले अद्वितीय अनुभव गर्ने गर्छन् । जसलाई हामीले जीवनको नामकरण दिएका छौँ । शरीर निर्माण हुन शरीरको जगका रूपमा पञ्चतत्व, इन्द्रियहरू, दिमाग र प्राण रहने गर्छन् ।

इन्द्रिय र दिमाग आफैँमा एक सक्रिय पञ्चतत्व निर्मित भौतिक अंगहरू हुन् । दुवैको आफ्नो विशेष क्षमता रहँदारहँदै आफ्नै चेतना भने हुँदैन ।





पञ्चतत्व, इन्द्रिय र दिमाग सबै निचोडमा क्वान्टम ऊर्जाबाट निर्मित क्वार्कस र ग्लुवोन्स लगायतका सब-एटमिक पार्टिकल निर्मित एटमबाट बनेका भौतिक संरचना हुन् ।

यिनै भौतिक संरचनाको आधार र संसर्गमा रहेर शरीरमा आफ्नो छुटै अस्तित्वको पूर्ण अभौतिक प्रकृतिको चेतना वा कन्ससनेसको निर्माण भएको हुन्छ ।

चेतना वा कन्ससनेस पनि आफैँमा क्वान्टम ऊर्जा नै हो । जीवित वस्तुमा चेतनाको क्वान्टम ऊर्जा, सबएटमिक पार्टिकलका क्वान्टम ऊर्जासँग हरेक पल स्मरणको बादल वा मेमोरी क्लाउडको स्थिर संयन्त्र बनाएर मिसिएर बसेको हुन्छ। उक्त मेमोरी क्लाउडको स्थिर संयन्त्रमार्फत दिमागको कार्यसँग



सम्बन्धित सम्पूर्ण भाग र कन्ससनेस बीच तुरुन्त सञ्चार कायम रहन सम्भव बन्छ ।

मेमोरी क्लाउड वास्तवमा शरीरको सम्पूर्ण जीवित भाग सँग जोडिएर शरीरभर फैलिएको एक विशाल सञ्जालका रूपमा अस्तित्वमा रहन्छ । जसलाई हामी प्राण वा जीवन्तशक्ति वा आत्मा मान्छौँ ।

मानव शरीरको आफ्नै इलेक्ट्रोम्यागनेटिक विकिरण हुने गर्छ । जसले गर्दा मानिसको प्राणमा रहेको ऊर्जा शरीरमा र शरीरमा रहेको ऊर्जा प्राणमा साटफेर हुन सक्छ ।

प्राणमा रहेको ऊर्जा शरीरमा र शरीरमा रहेको ऊर्जा प्राणमा साटफेर गर्न सकिने प्रक्रियाको धेरै उपचारात्मक प्रयोग हुन सकेका कारण आज











मेडिटेसन र योग दैनिक जीवन पद्धतिका अंग बनेका हुन् ।

क्वान्टम लाइटले पदार्थहरूको अणु र परमाणुको स्तरमा धेरै परिवर्तन ल्याउन सक्छ । उक्त क्वान्टम ऊर्जाको शरीरमा भौतिक र मानसिक अवस्थामा समेत परिवर्तन गर्ने क्षमता रहन्छ ।

जस्तै: आँखाको रेटिनामा सोसिएको प्रकाशको फोटोनले रेतिनोलको मलिकुलर ट्रान्जिसन गरी स्नायु प्रणालीमा इम्पल्स वा धुकधुकी पैदा गरी जुन वस्तुबाट त्यो फोटोन आएको हो, त्यसलाई आँखाले देख्न सक्ने बनाउँछ ।

शरीर जीवित रहन प्राण शक्तिको क्वान्टम ऊर्जा र शरीरको भौतिक पदार्थबाट निस्कने क्वान्टम









ऊर्जाबीचको सन्तुलन व्यवस्थापन नितान्त जरुरी रहन्छ ।

जब उक्त दुई प्रकारका क्वान्टम ऊर्जाको एकापसमा सन्तुलित प्रयोगमा ल्याउन सकिन्छ तब अभौतिक पदार्थसमेत भौतिक पदार्थमा परिवर्तन गर्न सम्भव बन्छ। शरीरले त्यसै गर्छ ।

तपाईंको जैविक अभिभावकबाट तपाईंले प्राप्त गर्ने स्मरण र जीवन्तता तपाईंको प्राण हो । तपाईंको जीवनकालका कर्म र अनुभवका आधारमा तपाईंमा रहेको स्मरणको हरेक पल अद्यावधिक हुने गर्छ । उक्त अद्यावधिक स्मरण र प्राणको संयुक्त रूप नै तपाईंको आत्मा हो ।

संसारमा रहेका हरेक वस्तुले अर्को वस्तुलाई आफ्नो









केन्द्रतिर तान्छ । एकले अर्कालाई आफूतर्फ तान्ने बल जहाँ बराबरी हुन पुग्छ त्यहाँ एकापसबीच सन्तुलन कायम हुन्छ। एकै प्रकारका अणुहरू कोहेसन शक्तिबाट र फरकफरक प्रकारका अणुहरू भने एड्हेसनको शक्तिबाट एक अर्कोतर्फ तानिने गर्छन् ।

शरीर र ब्रह्माण्डबीच एन्टेना जस्तै भूमिकामा आत्माले हरेक पल शरीर र ब्रह्माण्डको सजीव सम्पर्क स्थापित गर्ने आधार उपलब्ध गराउँछ। आत्मबल वा आत्मशक्तिले प्राणीमा निहित कन्ससनेसलाई सदैव ब्रह्माण्डतर्फ उन्मुख रहने बनाइदिन्छ।

लेजरको किरणलाई एक निश्चित प्रकारको क्रिस्टलबाट छिर्न दिंदा लेजरको प्रत्येक किरण










एकापसमा भावनात्मक रूपमा एकापसमा जोडिएका जोडी फोटोनमा विभाजित हुने गर्छ। उक्त जोडी फोटोनलाई जतिसुकै टाढाको दूरीमा छुट्ट्याएर राख्न सकिन्छ ।

पछिल्लो समय विज्ञानले ती फोटोनहरू एकापसमा भौतिक रूपमा जतिसुकै दूरीमा छुट्टिएर रहेको किन नहोस् सधैं सम्पर्कमा रहेर एकापसमा जोडिएर रहने प्रमाणित गरिदिएको छ ।

हालै भएका धेरै परीक्षणमध्ये एकमा इनट्यांलड जोडी फोटोन मध्ये एउटालाई पृथ्वीमा र अर्कालाई पृथ्वीलाई परिक्रमा गरिरहेको पृथ्वीबाट ३१० माइल (५०० किलोमिटर) दूरीको अन्तर्राष्ट्रिय अन्तरिक्ष स्टेसनमा राखी परीक्षण गरिएको थियो ।













परीक्षणमा एउटा इनट्यांल फोटोन अप–स्पिन हुँदा अर्को डाउन–स्पिनमा जान्थ्यो । डाउन–स्पिन लिँदा अर्कोले अप–स्पिनमा घुमिहाल्थ्यो । एकापसबीचको दूरी र स्थानको कुनै प्रभावविना इनट्यांलड जोडी फोटोन जोडिएर गतिविधि निर्धक्क सञ्चालन गर्ने गुण प्रदर्शन गरेका थिए ।

जसरी टाइप गर्दा तपाईंको दाहिने हात र देब्रे हात उस्तै देखिए पनि औँलाहरू फरक दिशामा फर्केर काम गर्छन् त्यस्तै दुई जोडी फोटोन एकापसमा भौतिक रूपमा जतिसुकै दूरीमा भए पनि एकले जे ग¥यो अर्कोले त्यही गरिहाल्थ्यो।

घुम्ने दिशा मात्र एउटाको क्लक वाइज हुँदा अर्काको एन्टिक्लकवाइज हुन्थ्यो। उक्त प्रयोगमा एउटा फोटोन अर्को फोटोन सँग प्रकाशको गतिभन्दा १०











हजार गुणा चाँडो तत्काल सम्पर्क स्थापित गर्न र आफ्नो गुण देखाउन सकेको पाइएको थियो ।

जोडी फोटोन जस्ता पदार्थहरूको आफू भौतिक रूपमा जतिसुकै दूरीमा रहेर छुट्टिएको भए पनि एकापसमा आफ्नै रूपमा जोडिएर सूचना आदानप्रदान गर्ने चरित्र र क्षमता वास्तवमा भावनात्मक रुपमा एकापसमा जोडिएर रहने चरित्र हो। उक्त भावनात्मक रूपमा एकापसमा जोडिएर रहने चरित्रलाई क्वान्टम विज्ञानले इनट्यांलमेन्ट चरित्र भनेको छ ।

तपाईंको शरीरमा रहेको आत्मा वास्तवमा ब्रह्माण्डमा रहेको परमात्माको इनट्यांल रूप हो । जसको माध्यमबाट तपाईंको शरीरको ब्रह्माण्डसँगको नियमित संसर्ग सम्भव बन्छ ।













हालसम्म तपाईंको आफूभित्र अन्तर निहित र ब्रह्माण्डमा अवस्थित धेरैभन्दा धेरै सूचनाको अनुभूति लिने चाहना मात्र तपाईंमा रहेको कन्ससनेसको संयन्त्रको अधिकतम उपयोगले सम्भव रहने उपाय हामीले थाहा पाउन सकेका छौं।

# भेलेन्टाइन दिवस र आयुर्वेदिक प्रेम

भनिन्छ, अन्तरात्माबाट पैदा हुने रोमान्टिक प्रेम र आफूले मन पराएको मान्छे सँगको रासलीलाले दिने आनन्दभन्दा ठूलो अनुभूति अरू कुनै छैन। जब











मानिस प्रेम विभोर बन्छ, उसका चेतना जीवन्त बन्छ। वरिपरिका वातावरण सुखदायी बन्छ, रङ्हरू प्रकम्पित बनिदिन्छन्, सँगै खाएको खानेकुरा अत्यन्त मीठो र स्वादिलो बनिदिन्छ। सँगै बसेको प्रेमीको मुटुले सामीप्य दर्शाएको, रौँ रौँ रोमाञ्चित बनेको, देखिएका र नदेखिएका सबै कुरा ठीकठाक रूपमा चल्दै वातावरण नै रंगीन बनेको अनुभव हुन्छ। सबैभन्दा सकारात्मक पाटो उक्त रोमान्टिक प्रेम वास्तवमै हानिरहित इलेक्ट्रोम्याग्नेटिक सम्मोहनको पल बनेको हुन्छ।

आयुर्विज्ञान वा आयुर्वेद भनिने संस्कृत शब्द ‘आयुर’ र ‘वेद’ भन्ने दुईवटा शब्दबाट बनेको छ। त्यसमा आयु र शब्दले जीवन र दीर्घायुलाई जनाउँछ भने वेदले ज्ञान र विज्ञान दुवै समेट्छ । मानिसको













जीवनलाई दीर्घ आयुसम्म स्वस्थ र तन्दुरुस्त राख्न प्रेम र प्रियजनको निकै ठूलो भूमिका हुनेमा कुनै सन्देह छैन। हाम्रो परम्परागत मान्यता अनुरूप आफूले अर्कालाई प्रेम गर्नु वा आफू अर्कोसँग प्रेममा पर्नु, आफूलाई अर्कोले प्रेम गर्नु वा अर्को आफूसँग प्रेममा पर्नु र दुवै एक अर्कासँग प्रेममा पर्नुको प्राकृतिक नियम हुने गर्छ ।

प्रेममा प्राकृतिक नियमको सिद्धान्त भन्ने सुन्दा धेरैलाई आश्चर्य लाग्न सक्छ । कुनै पनि कुरामा प्राकृतिक नियमको सिद्धान्त लागू हुनुपहिले त्यो विषयवस्तु परीक्षण गर्न सकिने विज्ञानको दायरामा पर्नु जरुरी हुन्छ। विज्ञानको दायरामा परेपछि उक्त विषय वस्तुको कुनै पनि सम्भावना प्रमाणित गर्न बनाइएको हाइपोथेसिसको परीक्षण मार्फत यकिन







भए मात्र वैज्ञानिक रूपमा निक्र्योल भएको मानिन्छ।

हिजोसम्म संसार न्युटन र आइन्सटाइनको जमानामा थियो। तपाईं हामीलाई स्कुलमा पढाइँदै गरेको विज्ञानको पाठ्यक्रमले भन्छ (न्युटनको सिद्धान्त अनुसार यो ब्रह्माण्डका प्रत्येक चिज कुनै निश्चित तौलको कण–मास) बाट बनेको हुन्छ । जब त्यो कणले बाहिरी शक्ति (फोर्स) प्राप्त गर्छ, त्यो जुन दिशामा शक्ति लागेको हो, त्यही दिशामा सिधा रूपमा निश्चित गतिमा बहन्छ । जहाँ पदार्थको मास अपरिवर्तनीय हुन्छ ।

आइन्सटाइनको जमानामा पुग्दा लाइट, रेडियो वेब, लेजर जस्ता शक्ति इलेक्ट्रोम्याग्नेटिक पथ लिने भेटियो। परीक्षणबाट न त पदार्थको मास











अपरिवर्तनीय भेटियो न जुन दिशामा शक्ति लागेको हो, त्यही दिशामै बहेको पाइयो न त पदार्थ सबै समयमा बताइए अनुरूप सोझो हिँडेकै देखियो । अर्को कुरा ब्रह्माण्डका प्रत्येक चिज कुनै निश्चित मासबाट बनेको हुन्छ भन्ने पनि गलत रहेछ । किनकि यो ब्रह्माण्डको लगभग ३० प्रतिशत भूभागमा मात्र यो लागू हुने रहेछ । बाँकी लगभग ७० प्रतिशत भाग त मास विहीन ‘डार्क स्पेस’ पो रहेछ ।

बेलले सन् १९६४ मै प्रतिपादित गरिदिएका यो ब्रह्माण्डमा रहेका सम्पूर्ण वस्तु एकापसमा जोडिएर रहेका मात्र हैनन्, नियमित सम्पर्कमा रही सूचना आदानप्रदान गर्छन् भन्ने भर्खरै पार्टिकल इन्ट्यांल्मेन्टको अवस्था परीक्षणबाटै प्रमाणित गरी











स्थापित गरिदियो । फलतः आइन्सटाइनको सबैभन्दा तीव्र गतिमा हिँड्ने शक्ति प्रकाश हो भन्ने दाबी पनि सत्यताको नजिक नरहेको पुष्टि भयो ।

पछिल्लो समय अहम् वैज्ञानिक तथ्य बाहिरिए सँगै क्वान्टम सिद्धान्तले विश्वलाई आध्यात्मिक विषयवस्तुका पाटाको विज्ञानसँगको सम्बन्धबारे जानकारी पाउने अवसर दिलाएको छ। दिमागबाट निस्कने विशुद्ध विचारधारा कसरी वास्तविक पदार्थमा परिवर्तन हुन सक्छ र मानव सोचाइ, अनुभूति, आकांक्षा, सचेतना, चाहना र प्रतिक्रिया आदि अभौतिक पदार्थ कसरी भौतिक पदार्थमा परिणत हुन सक्छ भन्नेबारे क्वान्टम फिजिक्सले हामीलाई नयाँ शिराबाट सोच्न सम्भव तुलाएको छ।













हुन पनि यो भ्यालेन्टाइन दिवसको सँघारमा पुग्दानपुग्दै हामीलाई नयाँ तथ्यहरूले प्रेम सम्बन्ध, प्रेमालाप र प्रेम जस्ता विषय वस्तुबारे समेत अनुसन्धान र विश्लेषण सैद्धान्तिक सूत्र प्रतिपादन गर्ने अवसर जुटाइदिएको छ । हाम्रा भौतिक शरीर अणु (एटम) हरूको भण्डार हो भने बुद्धि (माइन्ड) सोचाइको भण्डार । दुई भण्डारलाई हामीमै रहेको चेतना (इन्टेलिजेन्स) नामक अभौतिक पदार्थले संयोजनको काम गरी जीवन निरन्तर चलिरहेको रहेछ भन्ने प्रस्ट स्वीकारोक्ति हो।

न्युटन र आइन्सटाइनको जमानामा विज्ञानलाई मात्र व्यावहारिक विज्ञानमा सीमित राखिएकाले प्रेम जस्ता भावनात्मक विषयवस्तु र आध्यात्मिक विषय वस्तु महसुस गर्ने गरे तापनि विज्ञानको दायरा









बाहिरको भावनात्मक, हेलुसिनेसनको क्षेत्र भनी मिल्काइयो। आज नानो–टेक्नोलोजी र क्वान्टम सम्म पुगेको विज्ञानले सुझाए अनुरूप जीवित र निर्जीव रहँदा प्राणीको कोषिकामा पाइने अणु र अणुको फुट प्रिन्टमा खासै कुनै अन्तर भेटिँदैन । यथार्थमा भने जीवित कोषिकाले मृत कोषिका भन्दा सम्पूर्ण रूपमै फरक गतिविधि सम्पादन गर्ने गर्छ। यस सन्दर्भमा भावनात्मक विषयवस्तु र अध्यात्मलाई विज्ञानबाट छुटाउन सकिन्न भन्ने आदिकाल देखिको आयुर्विज्ञानको परिकल्पना सत्यताको धेरै नजिक देखिन्थ्यो।

आज जमाना फेरिएको छ । न्युटनका कतिपय सिद्धान्त नै त्रुटिपूर्ण रहेको र आइन्सटाइनको सिद्धान्त अपूर्ण भएको क्वान्टम विज्ञानले यकिन









गरिदिएको छ। क्वान्टम विज्ञानले मारेको फड्कोले बायोटेक्नोलोजी मात्र हैन, प्रेम सम्बन्ध जस्ता भावनात्मक विषयवस्तु र अध्यात्म समेत वैज्ञानिक रहेको प्रचुर तथ्य भेटिएको दिन प्रतिदिन खुलासा हुँदै गएको छ । प्रमाण र तर्कका आधारमै विज्ञानको दशकौँको दाबी अदूरदर्शी रहेको स्वीकारोक्ति बाहिर आउन थालेका छन्।

मानव शरीर ३७.२ खर्बभन्दा बढी कोषिका मिली बनेको बताइन्छ। प्रत्येक कोषिका डीएनए आदिबाट बने पनि ती सबै सूक्ष्म रूपमा हेर्दा बिलियन्स एटम बाटै निर्मित हुन्। प्रत्येक एटम क्वार्ज, ग्लुवोन लगायतका विभिन्न अति सूक्ष्म पार्टिकलले बनेका, प्रोटोन र न्युट्रोनबाट बनेका हुन्छन्। इलेक्ट्रोन र क्वार्ज, ग्लुवोन लगायतका सूक्ष्म पार्टिकल निकै










ससानो इनर्जीका संयोजनले बनेका विन्दु हुन् । यस्ता विन्दुहरू जसले हाम्रो शरीरभित्र इन्फर्मेसनको जालोको संयन्त्र बनाउँछन् ।

मृत र जीवित कोषिकामा रहने फरक भनेको जीवित कोषिकामा ती ससाना इनर्जीका विन्दुहरूलाई एक अनौठो प्रक्रियाबाट निश्चित हार्मोनीमा सञ्चालन गर्ने इनर्जीको उपस्थिति रहन्छ । यसलाई आयुर्वेदमा जीवन्त शक्ति (वायु वा प्राण वा लाइट) भनिन्छ । क्वान्टम फिजिक्सले यसलाई इन्फर्मेसन भन्ने गरेको छ। जीवन्त शक्ति गुमेपछि कोषिकाको जीवन अन्त्य हुन्छ।

क्वान्टम बडी मेकानिक्सका अनुसार प्राणीको शरीरको प्रत्येक कोषिका एउटा छुट्टै अस्तित्वको जीवन हो । साबुनका फोकाजस्ता लाग्ने यस्ता खर्बौं













सूक्ष्म जीवनहरूको सग्लो रूप नै प्राणीको शरीर हो। शरीरका प्रत्येक सेलको अर्को सेलसँग भौतिक रूपमा जोडिएर सूचना र मेमोरी आदान प्रदान हुने संयन्त्र एवं न्युरोनको नेटवर्क बनाएको हुन्छ। न्युरोनले शरीर भित्र आपसमा जोडिएर रहेका जीवित पदार्थहरू बीच सूचनाको आदान प्रदान गर्ने गर्छ ।

शरीरसँग कुनै पनि रूपमा नजोडिएको सोचाइ, विचार, इमोसन, शारीरिक प्रतिक्रिया, डार्क म्याटर्स आदि निर्जीव तत्व, जसलाई न पदार्थ भन्न सकिन्छ न त शक्ति नै लाई शरीरमा जोडी निर्जीवलाई सजीव सँग जोडी जीवन्त गर्ने काम इन्फर्मेसन वेब (संयन्त्र) ले गर्छ । इन्फर्मेसन वेबले इलेक्ट्रोम्याग्नेटिक संसर्गको प्रक्रियाबाट न्युरोन आदिलाई सञ्चालित











गरी मानिसलाई जीवन्त राख्ने कामसमेत गर्छ । यसलाई बोली चालीको भाषामा इन्टेलिजेन्स वा जैविक चेतना पनि भन्ने गरिन्छ ।

वेदान्तका कुरा सरलीकृत भाषामा भन्दा संसार दुई प्रकृतिका चिज ‘परा र अपरा’ को संयोगबाट बनेको छ । परा भनेको जैविक चेतना हो । जुन प्राणी र वनस्पति दुवैमा हुन्छ । अपरामा पाँच स्थूल तत्व पृथ्वी, जल, आकाश, तेज र वायु तथा तीन सूक्ष्म तत्व मन, बुद्धि र अहंकार पर्छन् । स्थूल शरीर भनेको भौतिक शरीर हो जुन अपरा प्रकृतिको पृथ्वी, जल, आकाश, तेज र वायुबाट बनेको छ । हामीमा रहेको चेतनाको कारण नै हामीले पदार्थलाई देख्न वा महसुस गर्न सक्छौं । जुन चिजमा ईश्वरीय तत्व तथा चेतना छ, त्यो परा अर्थात्













मेटाफिजिकल हो । परा भन्नाले वास्तवमा आत्मालाई नै भनिएको हो ।

संसारमा जीव र पदार्थ एक अर्को बिना अलग अलग अस्तित्वमा रहन सक्दैनन् । जीव र पदार्थसँग ईश्वरीय तत्व वा जैविक चेतना मिलेपछि प्राणी जीवित रहन्छ । आदिम कालमै वेदान्तले भनेका यी कुरा क्वान्टम मेकानिकल बडीका मान्यताले पुष्टि हुन आएका नयाँ तथ्य भनी दोहो¥याइरहेको छ ।

मानव शरीरमा इन्टेलिजेन्स वास्तविक शरीरको न्युरोन आदि म्याटर्सभन्दा धेरै महत्वपूर्ण हुने गर्छ । किनकि इन्टेलिजेन्सले म्याटर्सलाई निश्चित हार्मोनीमा सञ्चालन गर्छ । जब उक्त हार्मोनी टुट्छ, मानिसको इहलीला समाप्त हुन्छ ।





हाम्रा खानामा रहेको फाइटो केमिकल्स, मिनिरल्स, भिटामिन आदि मार्फत नै शरीरभित्र सूचनाको आदान प्रदान हुने गर्छ । इन्टेलिजेन्सले वातावरणसँग नियमित सूचना आदानप्रदान गर्ने क्रममा दुई प्रेमी बीच शरीरबाट निक्लने विभिन्न किरण लगायत नन भर्वल बडी ल्याङ्वेज, आराम वा तनावका कारण उत्पन्न वेबको अनुभूति आदि समेतको निर्क्योल गरी आन्तरिक चेतन, अर्धचेतन र अचेतन अनुभूति गराउने क्षमता राख्छ । मानव शरीरको इन्टेलिजेन्सले आफ्नो वातावरणसँग नियमित सूचना आदानप्रदान गर्ने गर्छ।

आयुर्वेदको इन्टेलिजेन्स, मेमोरी र कन्ससनेस बारे आफ्नो प्रस्ट धारणा छ । इन्टेलिजेन्स र मेमोरी बारेको आयुर्वेदको अवधारणा र क्वान्टम





बायोफिजिक्सले अघि सारेको तथ्यमा खासै फरक भेटिँदैन । कन्ससनेसबारे भने बायोफिजिक्सलाई निष्कर्षमा पुग्न निकै समय लाग्ने देखिन्छ । समय क्रममा आज आयुर्विज्ञान वा आयुर्वेद सत्यताको निकै करिब रहेको पुनर्पुष्टि भएको छ । क्वान्टम विज्ञानमा आधारित रहेर प्रेम सम्बन्ध, मनोविज्ञान र अध्यात्मबारे अध्ययन, अनुसन्धान, विश्लेषण र निचोडमा पुग्ने हदसम्म पुग्न हामी सफल बनेका छौँ।

भ्यालेन्टाइन डे आसपास विज्ञानले गरिदिएको व्याख्याका प्रभावमा परी बस्न जाने प्रेमलाई 'प्रेम' र आयुर्विज्ञानले व्याख्या गरिदिएको प्रेमको प्रभावमा परी बस्न जाने प्रेमलाई यहाँ 'आयुर्वेदिक प्रेम' को संज्ञा दिइएको छ ।

आयुर्वेदिक प्रेममा अन्तरात्माले कसैलाई माया गर्नु





वा आफूले कसैको अन्तरात्मा देखिकै माया पाउने मानिसको आफ्नै ढर्राको मानवीय गुण हो भन्ने मान्यता रहेको छ ।

मानिसको आफ्नै प्रकारको अजिब प्राकृतिक गुण हुँदाहुँदै प्रेममा परेका आजका दुई तिहाइभन्दा धेरै मानिस भरपर्दो प्रेम सम्बन्धको खोजीमा रुमलिरहेका पाइन्छ। भनिन्छ, दुई तिहाइ भन्दा धेरै नै संख्यामा प्रेम सम्बन्धमा रहि रहेका मानिसहरू आफ्नै प्रेम वा प्रेमीसँग नियमित संघर्षबाट गुज्रिरहेका छन्।

प्रेम सम्बन्धले आफूलाई पासोमा पारेको, आफ्नो प्रेमीले आफूलाई विश्वास नगरेको, आफ्नो योगदान र भावनालाई टुक्र्याएको, आफ्ना सही र वास्तविक प्रस्तुतिमा समेत सहमति नजनाएको, तारिफ









नगरेको र सम्बन्ध सुधार गर्ने पटक पटकको प्रयासलाई आफ्नो कमजोरीका रूपमा लिई दुरुपयोग गर्न चाहेको आदि इत्यादि महसुस गरिरहेका भेटिन्छन् प्रेमीहरू।

वैज्ञानिक प्रेम सम्बन्धको खोजीमा रहेका कतिपयमा वर्षौं बितिसक्दा पनि र निकै प्रयासका बाबजुद आफू सुहाउँदो योग्य प्रेमी नै मिल्न नसकी एकल जीवन बिताउनु परिरहेको महसुस भइरहेको पाइन्छ। आफूभन्दा कमसल र कम डिजर्भिङले लभिङ, केयरिङ र पूर्ण सहयोगी आकर्षक प्रेमी भेटी आनन्दित जीवन यापन गरिरहेका छन्। तर, किन आफूलाई भने उक्त सन्दर्भमा अन्याय भएको छ भन्ने विश्वासले वैज्ञानिक प्रेमको निरन्तर खोजीमा रहेकाको मनमा डेरा जमाएको भेटिनु अब कुनै










आश्चर्यको विषय नै रहेन।

आफूलाई सुहाउने योग्य प्रेमी भेट्नै धेरैभन्दा धेरै मानिसलाई निकै संघर्ष गर्नुपर्ने र कतिपय अवस्थामा राम्रो प्रेमी मिलेको अनुमानमा सुरु गरेको सम्बन्ध पनि लामो समयसम्म नटिक्नुका कारणमा माया, प्रेम, यौन सम्बन्ध र मनोविज्ञान विषयका ज्ञान लिएका विज्ञहरूको लगभग समान प्रकृतिको धारणा भेटिने गर्छ। प्रेम सम्बन्ध हुनु, गाँसिनु र टुट्नुबारे सोधपुछमा पछिल्तिर एकापसमा मिल्दोजुल्दो क्षेत्रमा काम गर्ने तर भिन्दा भिन्दै विषय विज्ञको लगभग उस्तैउस्तै धारणा आउनुलाई संयोग मात्र मान्न सकिन्न ।

विषय विज्ञका धारणा अनुसार, मानिस प्रायः आफ्नो निजी चाहना कस्तो छ, त्यसै अनुसार अमूक













रूपमा आफू को हुँ र आफूले कस्तो प्रेमी डिजर्भ गर्छु भन्ने आफ्नो चुरो मान्यता विकास गर्छन् । यसरी आफूले आफूलाई नै बताएर, आफूले के चाहेको हो, त्यस अनुरूप विकास गरिएको मान्यतामा टेकेर म कस्तो प्रेमी डिजर्भ गर्छु भनी बनेको वैयक्तिक मापदण्डले धेरै हदसम्म प्रेम सम्बन्धको भविष्य निर्धारण गर्छ ।

‘केटाजति सबै मौका मिल्यो कि अर्को केटीको पछि लाग्ने र बदमासी गर्ने बानीका हुन्छन्’ वा ‘आइमाईको मनलाई कसैले पनि बुझ्न सक्दैन, यो जात विश्वास गर्न लायक जात नै हैन’ आदि इत्यादि नकारात्मक विचार मनमा खेलाइरहने बानीले मानिसको अर्धचेतन मस्तिष्कमा बिस्तारै बिस्तारै विपरीत लिंगीप्रति घृणा भावको जरा बसालिदिन्छ।





कतिपय सैद्धान्तिक कुरा मात्र बुझेका वा भारतीय र अंग्रेजी फिल्म हेरी आफ्नो धारणा बनाउने महिला–पुरुषमा साँचो प्रेमीले जादुको छडीले जस्तो सबै कुरा आफू अनुकूल गरिदिने चेतन, अर्धचेतन र अचेतन विश्वास र गहिरो प्रभावको विकास गरिदिएको भेटिन्छ।

परिणाम स्वरूप उनीहरूको प्रेम सम्बन्धको यात्रा सुरु के हुँदै छ, सोचेका वा आशा गरेका कुनै पनि कुरा आफ्नो कहानीमा वास्तवमै नभइरहेको महसुस गर्छन्। जब आफ्नो प्रेमीको आशा गरिएको मापदण्डको कसौटीमा भइरहेका कुनै पनि कुरा सन्तोषजनक भेटिन्नन् वा मात्र अल्प समय सम्म मात्र पूरा हुन्छ, तब उक्त प्रेम नै साँचो नरहेको र भविष्यमा उक्त प्रेमीबाट वास्तवमै डिजर्भ गर्ने माया





पाउनबाट आफू वञ्चित रहने निश्चित भएको निष्कर्षमा पुग्छन्।

फलतः प्रेम कि त अघि नै बढ्दैन वा अलिअलि अघि बढिसकेको रहेछ भने पनि पूर्णविराम तर्फ लम्कन्छ। विषय विज्ञबाट विज्ञानका आधारमा निकालिएका माथिका निचोडलाई आयुर्वेदिक प्रेमको निष्कर्षले समेत स्विकार्ने गर्छ। आयुर्वेदिक प्रेमको हिसाबमा यी तर्क सही छन् तर पूर्ण छैनन्। जब तर्क सही हुन्छ तर पूर्ण हुँदैन, त्यसले अल्प ज्ञानं भयंकरं भने जस्तो उपचारका लागि सही मार्गमा डोहो¥याउन सक्दैन ।

क्वान्टम फिजिक्सका अनुसार मानव शरीर प्रत्येक क्षणमा भिन्दा भिन्दै गतिमा तरंगित हुने इनर्जी निर्मित गतिशील अणुबाट बनेको हुन्छ । फाइटो-



केमिकल्स, मिनिरल्स, भिटामिन आदि सँगको कार्यगत हार्मोनीमा रहने खानाबाट प्राप्त हुने पोषण तत्व जस्तै, एमिनो एसिड निर्मित न्युरोपेप्टाइड नामक प्रोटिन र यसको न्युरो केमिकल्सहरूको प्रभावमा काम गर्ने तरिका यो सन्दर्भमा निकै अहम् भेटिएको छ। वातावरण सँग नियमित संवाद कायम राख्ने हेतुले कोषिकामा जोडिएर रहने न्युरोपेप्टाइडले हाम्रो शरीरभित्र इनर्जी पैदा गर्ने र इनर्जीका किरण शरीर बाहिर वातावरणमा वरिपरि पठाउन मुख्य भूमिका खेल्ने गर्छ। त्यसलाई बडी इनर्जी (शरीरको शक्ति) नाम दिइएको छ ।

मानिसले प्राप्त गरिरहेको भिन्ना भिन्नै प्रकृतिका अनुभूतिले विकास गरेको भावना अनुरूप न्युरोपेप्टाइडमा रहेको न्युरोकेमिकल्सको








गतिविधिमा अन्तर आउने हुँदा फरक फरक अवस्थामा शरीरबाट निस्कने किरणलाई भिन्न भिन्न फ्रिक्वेन्सीमा परिवर्तन हुने गर्छ । फरक अनुभूति हुँदाका बखत फलतः शरीरमा फरक फरक इमोसन पैदा हुन्छ । फरक फ्रिक्वेन्सीका बडी इनर्जी रिलिज हुन्छ । फरक फरक फ्रिक्वेन्सीका बडी इनर्जीले फरक प्रकृतिको शरीरको औरा निर्माण गरिदिन्छ ।

तेल तेल सँगै घुल्छ भने जस्तै अचेतन रूपमै पैदा हुने बडी इनर्जी र सामीप्यमा रहेको प्रेमीको बडी इनर्जीसँग फ्रिक्वेन्सी मिलेको अवस्थामा एउटै ठूलो फ्रिक्वेन्सी बन्दाको समयमा शरीर वास्तविक रूपमा रोमाञ्चित बनेको दुवैलाई महसुस हुने र नमिल्दाका बखत वातावरण उत्साहजनक नहुने हुन सक्छ । त्यसलाई सामान्य बोलीचालीमा एक अर्का बीचको




सम्बन्धमा हुने पोजेटिभ वा नेगेटिभ भाइवका रूपमा चित्रण गर्ने गरिन्छ ।

हामीले आफूलाई जुन इमोसनमा राखिन्छ, त्यसै अनुसार शरीरका रहेका न्युरोकेमिकल परिचालित भई बडी इनर्जी उत्पादन हुने आज क्वान्टम बडी मेकानिक्सले प्रमाणित गरिदिएको छ । आयुर्वेदिक प्रेमालापका लागि तपाईंले इच्छाए अनुरूपको सम्बन्धको विकास हुने गरी शरीरको एटमिक इनर्जी पैदा गर्न सकिने विकल्प उपलब्ध रहेको क्वान्टम फिजिक्सले इंगित गर्छ ।

यहाँ क्वान्टम फिजिक्सले इंगित गरेको चुरो कुरो के हो भने आफू सुहाउँदो योग्य प्रेमीको खोजीमा सफल हुन सकारात्मक सोच मार्फत आफू को हो र कस्तो प्रेमी डिजर्भ गर्छु भनी अन्तरात्मामा ज्ञात–









अज्ञात रूपमा विकास गरेको अमूक मापदण्डमा पुनरवलोकन जरुरी छ। त्यस्तो पुनरवलोकन जसले आयुर्वेदिक प्रेमको आधारभूत मान्यतालाई पूरा गर्ने गरी ती मापदण्डलाई उन्नत सम्झौताको उचाइमा पु¥याउन सकोस् ।

आयुर्वेदमा क्रिडाकार्यलाई सम्भोग भनिन्छ । समग्रमा सम्भोग के हो त भन्नेबारे रहेको वैज्ञानिक दृष्टिकोण र आयुर्वेदिक दृष्टिकोणमा रहेको विशाल खाडलले प्रेम र प्रेमालाप बारेको दृष्टिकोणमा निकै ठूलो अन्तर निम्ताएको छ । सम्भोग प्राणी मात्रका लागि भगवान् को उत्कृष्ट उपहार हो भन्ने मान्यता राख्छ आयुर्वेदिक काम शास्त्र। वैज्ञानिक दृष्टिकोणमा भने सम्भोग मनोरञ्जनको जैविक जरुरत मानिएको छ।









वैज्ञानिक प्रेममा प्रेमालाप पूर्तिका लागि सेक्स टोय र सेक्स रोबोटको विकल्प समेत पर्याप्त हुने बुजिन्छ। आयुर्वेदिक दृष्टिकोणमा भने क्रिडाकार्यमा एकै वर्गका प्राणीको (जस्तै मानिस–मानिस बीच) दुई आत्माको शारीरिक र मनोवैज्ञानिक मिलनको अनिवार्य जरुरत पर्छ। सेक्स टोय र सेक्स रोबोट निर्जीव र सजीव बीचको विकल्प रहेकाले यो क्रीडा हुन सक्दछ, तर आयुर्वेदिक सम्भोग हुन सक्दैन। आयुर्वेदिक प्रेमालाप मानिँदैन।

आयुर्वेदले प्रेमालापलाई इन्द्रियगत आनन्दको अनुभूति गराउने, मनोवैज्ञानिक चरम सुख र भावनात्मक सामीप्यता दिने र आपसमा उत्कृष्ट सम्मान अभिवृद्धि गर्ने माध्यमका रूपमा ग्रहण गर्दछ। वैज्ञानिक प्रेमको निचोडले प्रेमालापलाई









शारीरिक सम्भोग, सम्भोग पश्चात् परिकल्पना गरिएको स्खलनको चरम सुखानुभूति र स्खलनसम्म पुग्न सहयोगी हुने गतिविधि सम्ममा मात्र सीमित गरिदिएको छ। वैज्ञानिक प्रेमको बुझाइमा गीत गाउनु, नाच्नु, खेल्नुजस्तै अमूर्त सन्तुष्टि र मनोरञ्जनका लागि जरुरी हुने जैविक जरुरतको पूर्ति गर्ने माध्यम हो, रोमान्टिक प्रेम।

समग्र सन्तुष्टि सँग अमुर्त सन्तुष्टि र मनोरञ्जन समेत सम्बन्धित हुने हुँदा रोमान्टिक प्रेमले समग्र स्वास्थ्य र समृद्धिमा ठूलो भूमिका खेल्छ भन्ने मान्यता राख्छ वैज्ञानिक प्रेम।

आयुर्वेदका अनुसार ‘समयाका र भोग’ शब्द मिली सम्भोग (सम् + भोग, together + enjoyment) बनेको हो। जसमा ‘समयाका’




को अर्थ 'सन्तुलनको कायम (Timing appropriateness)' हुन्छ भने 'भोग' को अर्थ इन्द्रिय मार्फत अनुभूति गरिने आनन्द र धन्यको अनुभूति हुन्छ। आयुर्वेदले सम्भोगलाई दीर्घकालीन रूपमा दिमागी अवस्था, भावना र समग्र स्वास्थ्य प्राप्तिका लागि उपलब्ध जादुयी क्रिया या कस्मिक दिव्यता वा आनन्द कस्तो हुन्छ भनी उपलब्ध नमुनाको अनुभूतिको प्राप्तिको अवसर र अहोभाग्य भन्दछ।

पूर्ण आत्म सम्मान र स्वतन्त्रता सहित स्व-सन्तुलित हुँदै वैचारिक शून्यतामा पुगेर लिइने दीर्घकालीन आनन्द र धन्य अनुभूति लिने एक माध्यम भनी आयुर्वेदले सम्भोगलाई पहिचान र उच्च सम्मान दिएको छ। आयुर्वेदिक सिद्धान्त अनुसार सम्भोगको





अर्थ 'एक्सटेनडेड एण्ड सस्टेनेबल' वा दीर्घकालीन तथा सन्तुलित दिगो स्वर्गीय आनन्द लिने क्रिया हो। अनन्तकालका लागि दीर्घकालीन र सन्तुलित स्वर्गीय आनन्दको अनुभूतिको स्वाद लिने विकल्प भनेको छ। स्खलनको चरम सुखको अनुभूति चेतनाको मोक्ष अवस्थामा हुने अनुभूति नजिकको सुख रहने सङ्केत गर्दछ।

मोक्ष अवस्था नजिकको सुखको अनुभूतिको स्वाद सम्भोग मार्फत लिन अन्तरात्माले चाहेको, मृदु भाषी, मनै देखि मन पराउने, सम्मान गर्ने, नैतिक मूल्यमा अडेको, स्वस्थ प्रेमको दायरामा रहने निश्चित रहेको, सहवासको इच्छा मनै देखि जागृत भएकाले सो को लागि सहकार्यको स्वीकृति मागि रहेको प्रेमीसँग प्रेमीको मागको समयमा समान

सहभागिता र सहकार्य हुने निश्चितताको बिच मात्र स्वस्थ साझेदारीको सम्भोगका लागि तयार हुन सुझाउँछ आयुर्वेद।

त्यो भनेको क्वान्टम बडी मेकानिक्सले सुझाए अनुरूपको प्रेमी सँगको संगतमा रहँदा चेतन–अचेतन रूपमै पैदा हुने बडी इनर्जी र सामीप्यमा रहेको प्रेमीको बडी इनर्जीको फ्रिक्वेन्सी पूर्ण रूपमा मिल्न पुगेको अवस्था हो। जसले आयुर्वेदिक प्रेमको सर्तलाई पूरा गर्ने लगभग निश्चित हुन्छ भन्ने मान्यता स्विकार्न सहज गर्दछ।

आयुर्वेदका अनुसार नैतिक र आपसी समझदारीको यौनजन्य क्रियाकलापले सुख, दीर्घायु, यौन शक्ति प्रवर्धन, अनुहारमा आकर्षण र छालामा चमक थप्नुका साथै शारीरिक सुगठन, मनोवैज्ञानिक दक्षता









अभिवृद्धि गरी व्यक्तिको शारीरिक, मानसिक र व्यावहारिक जीवन पद्धतिलाई सन्तुलित गर्छ ।

सेतो प्रकाशको किरणलाई प्रिज्मबाट छिर्न दिंदा प्रकाश इन्द्रेणी रङका विभिन्न किरणमा परिवर्तित हुन्छन्। किनकि सेतो प्रकाश भिन्नाभिन्नै वेभलेन्थ र रङका प्रकाशहरूको मिश्रण हो । जसरी विभिन्न रङ देखिने भिन्नभिन्न वेभलेन्थका प्रकाशहरूको समसंयोजन हुँदा सेतो प्रकाश बन्छ, त्यसरी नै मनका विभिन्न इच्छा, चाहना र प्रतिक्रियाले पैदा गर्ने तरंगका कारण शरीरबाट विभिन्न वेभलेन्थका बडी इनर्जीका किरण निस्कने गर्छ ।

तपाईंको शरीरबाट तत्कालको आपसी मुड, चाहना, मान्यता र अनुभूतिको प्रभावमा निस्केका रंगीन बडी इनर्जीका किरण प्रेमीको रंगीन बडी इनर्जीका











किरणसँगको संसर्गमा आउँदा एकापसमा राम्रो हार्मानी हुन गएमा एउटै ठूलो फ्रिक्वेन्सी बनिदिन्छ।

उल्लिखित सकारात्मक परिस्थितिमा प्रेमीतर्फका सबै सूचना तपाईंको शरीरले विनाअवरोध प्राप्त गरिरहेको हुन्छ। तपाईंले प्राप्त गरिरहेको प्रत्येक सूचना तपाईंको वेभलेन्थसँग मिलिरहेकाले अकल्पनीय सकारात्मक तरंग र रोमाञ्चित भाइव निर्माण गरी रहेको हुन्छ । संश्लेषित उच्च फ्रिक्वेन्सीको इनर्जीको किरणबाट दुवै प्रेमीबीच आदानप्रदान हुने प्रस्ट अन्तरसञ्चारबाट शरीरले प्राप्त गर्ने अनुभूतिले कस्मिक रोमान्सको अनुभूति दिलाउँछ ।

हालै परीक्षणका लागि भर्खरै बच्चा जन्माएका आमाहरूका दुई वटा समूह बनाइयो । प्रत्येक













समूहका आमाहरूलाई बीचमा केही समयका लागि उनीहरूको बच्चा छोडी अन्यत्र जान भनियो। एक समूहका आमाहरूलाई बच्चासँग अलग भएको समयमा तनाव युक्त काम र वातावरणमा राखियो। अर्को समूहका आमाहरूलाई सामान्य काम सामान्य वातावरणमा गर्न भनियो। दिइएको काम एकै समयमा सम्पन्न गरिसकेका दुवै समूहका आमाहरूलाई एकै तरिकाबाट उनीहरूको बच्चा भएको ठाउँमा फर्काइयो र बच्चा नजिक जान भनियो।

तनावयुक्त वातावरण बाट फर्केका आमाहरू बच्चा नजिक पुगेर केही पनि नगरी सामान्य रूपमा बस्दासमेत उनीहरूको शरीरबाट निस्केको बडी इनर्जी तुरुन्तै तिनका नवजात शिशुमा सरेको









भेटियो। आमाहरूले ती नवजात शिशुलाई न केही गरेका थिए न त केही भनेका नै थिए न त छोएकै थिए, तनाव युक्त वातावरण बाट फर्केका आमाहरूका बच्चाहरू आमा नजिक पुग्ने बित्तिकै रुन र च्याँठिन सुरु गरिहाले। सामान्य काम सामान्य वातावरणमा गरी फर्केका आमाहरूमा भने त्यस्तो केही भेटिएन। चेकअपका क्रममा जब ती बच्चाहरू आमाको नजिक परेका थिए, उनीहरूको मुटुको धड्कन आमाको मुटुको धड्कनसँगै मिल्ने गरी बढेको थियो। त्यसलाई तनावको संक्रमणको नाम दिइयो ।

यस्ता धैरे परीक्षणबाट के पुष्टि भएको छ भने हामी र हाम्रो नजिकै रहेको व्यक्तिसँग यस्तो इनर्जीको कनेक्सन (संक्रमण) हुने गर्छ। विशेषतः









उनीहरूसँग, जो आफूसँग नजिक छन् र जोसँग हाम्रो नजिकको भावनात्मक सम्बन्ध बसेको छ। निजी जीवनका घटना न त तपाईंले चाहे अनुरूप अघि बढ्छन् न त तिनीहरू तपाईंको पूर्ण नियन्त्रणमै रहने सम्भावना रहन्छ । वातावरणबाट पलपल प्राप्त भएका सूचनाले तपाईंमा भिन्नाभिन्नै समयमा भिन्दाभिन्दै असर थुपारि दिन्छन्। यस कारण तपाईंका बडी इनर्जी र शरीरबाट प्रवाह हुने इनर्जीको पल पलमै फरक फरक बनिदिन्छ।

जब तपाईं तनावमा पर्नुहुन्छ, कसैको हेला, अन्याय, घृणा र उपहासको पात्र बनाइन्छ या आक्रोशमा हुनुहुन्छ, कुनै कुरो प्राप्त गर्ने इच्छाले भुतुक्कै बन्नुभएको छ तर त्यो तपाईंलाई मिलि रहेको हुँदैन, डरमा हुनुहुन्छ वा कुनै अप्रिय घटनाको










सिकार हुनुभएको छ, यस्ता अवस्थामा तपाईंले नचाहँदा नचाहँदै पनि त्यसले पारेका नकारात्मक असर आंशिक रूपमा प्रियजनमा सरिसकेको हुन्छ। तपाईंको बिग्रेको मुडका कारण, यो समयमा बिना कुनै खराब इरादा तपाईं एकाएक तपाईंकै प्रेमीसँग किचकिच गर्ने, सानोसानो कुरामा असहमति जनाउने र आफ्नो उग्र असन्तुष्टि पोख्ने जस्ता उग्र व्यवहार प्रस्तुत गर्ने सम्भावना रहन्छ।

तपाईंको नकारात्मक बडी इनर्जीको संक्रमणका कारण नजानिंदो रूपमा मुड बिग्रिसकेको तपाईंको प्रेमीको तपाईंले बर्साउनु भएको थप ताण्डव्यले तपाईं माथि सहानुभूति दर्साउन सक्ने क्षमता गुमाइसकेको हालतमा पुग्न सक्ने अधिक सम्भावनामा रहन्छ। फलतः दुईबीच असमझदारी













आवश्यकता भन्दा निकै अघि बढ्छ। घटना पश्चात् परिस्थिति अलि साम्य बनिसक्दा समेत घटनाको निष्पक्ष पुनरवलोकन गर्दा एकले अर्को नै बढी जिम्मेवार रहेको भन्ने निचोडमा पुग्ने गरेको भेटिन्छ।

आजको सामाजिक परिस्थितिमा, कारण जोसुकै होस्; जुनकुनै समयमा तपाईं तनावमा पर्नु सामान्य मानिन्छ हिजो आज। आफूमा पर्ने तनावले प्रेमीलाई दिने नकारात्मक असर र त्यसले प्रेमीहरू बीच एक अर्को लाई मनै भाँचिनेसम्म पु¥याउने घटना प्रायः एकै दिनमा एउटै परिघटनाले तयार गरिहाल्ने हुँदैन। तर, यी र यस्तै प्रकृतिका ससाना परिघटनाको विशाल रूप नै जोडीबीचको प्रेम टुट्ने कारक हुने लगभग निश्चित रहन्छ। तसर्थ सफल दाम्पत्य जीवनको आशामा प्रेमीहरूको खोजीमा









रहेका जो कोहीले यस्ता प्रत्येक घटनाको मूल जराकै पहिचान गरी उपयुक्त निदान खोज्नु जरुरी छ ।

क्वान्टम बडी मेकानिक्सका अनुसार जब तपाईं तनावमा पर्नुहुन्छ, त्यसको असर निजी जीवनमा पर्न नदिन तपाईंले हाई–फ्रिक्वेन्सी इनर्जीको सहायता लिन सक्नुहुन्छ । हाई–फ्रिक्वेन्सी इनर्जीलाई तपाईंको ‘होम इनर्जी’ भने पनि हुन्छ । अर्थात् बाहिरी तनावयुक्त वातावरणमा नपरिरहेका बेला तपाईंसँग रहने इनर्जी ।

बाहिरी वातावरणले तपाईंमाथि पैदा गरेको तनावमा प्रेमीको कुनै भूमिका र नियन्त्रणमा छैन । कुनै पनि तनाव अल्पकालीन हो । तपाईंका लागि प्रेमीसँगको सम्बन्धले नै मुख्य महत्व राख्छ । उक्त महत्वका सामु तपाईं जुन कारणले चिन्तित हुनुहुन्छ, ती गौण









हुन् । यस्तो महसुस गर्न सके तपाईं आफूलाई चिन्ता ग्रस्त अवस्थाबाट न्युट्रल अवस्थामा पु¥याउन सक्षम हुनुहुन्छ । यो तपाईंले तत्कालका तनावमाथि लगभग नियन्त्रण प्राप्त गरिसकेको अवस्था हो ।

जब तपाईं ‘यदि मलाई आजको यो बाहिरी तनाव नपरेको भए म के सोचिरहेको हुन्थैं होला’ भनी आफैंलाई सोध्नुहुन्छ र त्योबारे कल्पन थाल्नुहुन्छ, तपाईंले वास्तवमै आफू नयाँ अनुभूतिमा प्रवेश गरिसकेको महसुस गर्न थाल्नु हुनेछ ।

यो अवस्थामा तपाईं बिस्तारै आनन्दित र सुखी बन्दै जानु हुनेछ । प्रेममा रहँदा प्रेमीसँगका आत्मीय क्षण र ती क्षणको निरन्तरताले पुनः दिन सक्ने सन्तुष्टिबारे सोचमग्न भई तपाईंले आफैंलाई होम इनर्जीको




अवस्थामा पु¥याउन सक्नुहुन्छ । तपाईं इनर्जीको अवस्थामा पुग्दाका बखत परिणाम के आउँछ, त्यसले आफैँलाई अचम्मित पार्नेछ ।

तपाईं कुनै चिजको प्राप्तिका लागि वास्तवमै आकुल व्याकुल बनिसकेको र नियन्त्रणका लागि नै चुनौतीपूर्ण बनेको अवस्थामा ‘यदि मैले यो प्राप्त गर्न सकिनँ भने राम्रो हुने छैन’ भन्ने जस्ता सोचाइले नकारात्मक भाइव दिन्छ । त्यही कुरो यदि ‘अहिले म यो कुरो पाउनका लागि अत्यन्त आतुर छु’ भनी परिवर्तन गरे सोचाइले सकारात्मक भाइव दिने र प्रेमीसँगको सम्बन्धलाई तुलनात्मक रूपमा गाढा गरिदिने छ ।

समय परिस्थितिमा नितान्त अप्ठ्यारो सूचना नै दिनुपर्ने अवस्था आइलाग्दासमेत तपाईंले आफूलाई





आमने सामने रहेर, सके सम्म सन्तुलित राखी, धन्याँनुभूति महसुस गर्दै गरिएको कुराकानीले तुलनात्मक रूपमा सकारात्मक परिणाम दिने देखिन्छ। किनकि क्वान्टम बडी मेकानिक्सका अनुसार समयले स्थिति त्योभन्दा पनि खराब हुनबाट रोकेको सम्झी सोका लागि आफू धन्य बन्नु जरुरी छ भनी आफूले आफूलाई सल्लाह दिँदै गर्दाको अवस्थामा तपाईं बनावटी रूपमा आफ्नो मुड ठीक गरिरहनुभएको छ वा वास्तवमै तपाईंको मुड ठीक छ भन्ने फरक तपाईंको दिमागले खुट्याउन सक्दैन । यसले निकै गाह्रोभन्दा गाह्रो कुराकानीलाई पनि सरलीकृत मात्र गर्ने छैन, उक्त समयलाई समेत अद्भुत आत्मीयताको क्षणमा परिवर्तन गरिदिने छ ।



आयुर्वेदिक मान्यतामा भने उल्लेखित बाहेक ध्यानको विकल्प समेत अघि सारिएको छ ।

पृथ्वीको गुरुत्वाकर्षण, चुम्बक आदि बारे अध्ययन गर्ने क्रममा हामीले बुझेको तथ्य के हो भने एकापसमा भौतिक रूपमा नजोडिई रहेका दुई भिन्नभिन्न वस्तुबीच आन्तरिक तथा अन्य इनर्जीका कारण आकर्षण तथा विकर्षण हुन सक्छ । यस अर्थमा दुई प्रेमीबीचको आकर्षण प्राकृतिक नियम अनुकूलको प्रकृतिले प्राणी मात्रलाई उपलब्ध गराएको सबैभन्दा उत्तम र सुन्दर उपहार हो । यसले तपाईंको मनलाई प्रेमीको मनसँग भौतिक रूपमा नजोल्टिँदाको बखतमा समेत मनोवैज्ञानिक र भावनात्मक संसर्ग मार्फत जोल्टिने, एकापसमा चिर परिचित गराउने, मिलनको विन्दुसम्मै







 वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



पु¥याउने र फरकफरक शरीरमा रहेका दुई मुटु आपसमा जोडिएको अनुभूति दिई साझेदारीमा जीवनयाँपन गर्ने अवसर उपलब्ध गराउँछ ।

प्रकृतिको यो उपहार जति उत्कृष्ट छ, त्यसको सदुपयोग र जगेर्ना गर्ने तौरतरिका पनि आफ्नै ढर्राको मात्र छैन, अति नाजुक र संवेदनशील पनि छ। जे होस्, उपलब्ध आयुर्वेदिक प्रेमको मान्यतालाई आत्मसात् गर्दा प्रेम जीवन सार्थक रहने देखिएको सन्दर्भमा भ्यालेन्टाइनजस्ता दिवसमा प्रेमको गुलाफ सट्टापट्टा गर्ने क्रममा वैज्ञानिक विचारधाराको प्रेमभन्दा आयुर्वेदिक मान्यताको प्रेमीमा आफूलाई परिवर्तन गर्नेतर्फ सोच्ने कि ?





॥ श्री गणेशाय नमः ॥







# स्वर्गद्वारीको यात्रा

हरेक पुरुषको अण्डाशयमा रहेको शुक्राणु उत्पादन गर्ने कोषिकाहरूको संख्याका आधारमा उसको वीर्यमा हुने शुक्रकीटको संख्या र गुणस्तर व्यापक रूपमा फरक हुने गर्छ। सामान्यतया पुरुषको वीर्य स्खलन हुने समयमा प्रत्येक पटक दुई मिलिलिटर (एमएल) देखि पाँच एमएल वीर्य निस्कन्छ । प्रति एमएल वीर्यमा २० मिलियन देखि ३०० मिलियन शुक्रकीट हुने हुँदा हरेक चोटिको स्खलन कुल ४० मिलियनदेखि १८०० मिलियन शुक्रकीट स्खलन हुने गर्छ। सन्तान उत्पादन गर्ने क्षमता रहेको ठानिने स्वस्थ मानिसमा प्रति एमएल वीर्यमा औसत ४० देखि ६० मिलियन शुक्रकीट हुने हुँदा सम्भोगमा













संलग्न नारीलाई हरेक चोटिको स्खलनमा पुरुषले ८० देखि ३०० मिलियन शुक्रकीटको शुक्रदान गर्ने गर्छन् ।

हरेक जोडीको प्रजनन क्रियामा हरेक चोटि हुने स्खलनका क्रममा पुरुषबाट कति धेरै वा थोरै संख्याको शुक्रकीट दान हुन सक्यो भन्ने गणनाले मात्र पुरुषको नारीलाई गर्भधारण गराउने क्षमताको निर्धारण गर्ने गर्दैन । सम्भोगका क्रममा गर्भधारण सफल बन्नु वा नबन्नु पछाडि अन्य धेरै जीव विज्ञानको प्रक्रियाहरू जिम्मेवार रहन्छ । जस्तैः शुक्राणुहरू कसरी उत्पादन हुन्छ, शुक्रकीट कसरी अण्डकोषबाट योनिसम्म पुग्छ, योनिबाट कसरी डिम्बसम्म पुग्न शुक्रकीटको बाटो तय गरिन्छ, योनि भित्र अण्डकोष खोज्दै अघि बढ्ने क्रममा बाटोमा











आउने विभिन्न संघर्षका चरणहरूमा कसरी शुक्रकीट लड्छ, सम्पूर्ण समस्या पार गरी अन्तिम गन्तव्यमा आफूलाई पर्खिरहेको सक्रिय अण्डकोषभित्र कसरी सफलतापूर्वक शुक्रकीट छिर्न सक्छ आदि।

शुक्रकीटको पुच्छरले योनि रसमा वीर्य मिसाउँदा त्यहाँ पुग्ने शुक्रकीटलाई योनि रसमा पौडी खेल्दै अघि बढ्न सहयोग पु¥याउन भूमिका खेल्छ। शुक्रकीटको टाउकोको गोलो भागमा सानो ऊर्जा कारखानाका रूपमा रहेको मिटोकोन्ड्रिया, २३ वटा क्रोमोजोम रहेको सेलको डिएनए रहन्छ । शुक्रकीटको टाउकोको गोलो भागको टुप्पोमा इन्जाइम समेत रहन्छ जसले जब शुक्रकीटले डिम्ब फेला पर्छ तब त्यसको डिम्बको बाहिरी सुरक्षात्मक तह प्वाल पारी डिम्ब भित्र छिर्न सहयोग गर्छ ।













उक्त डिएनएले नै पुरुषको अनुवांशिक सूचना भ्रूणमा पु¥याउने हुँदा त्यसलाई मानिसको बीज वा बिउ भनिन्छ ।

मानिसमा हुने शुक्रकीट सबै एकै प्रकारको रहने गर्दैन। कुनैको दुई वटा टाउको भएको समेत हुन्छ भने कुनैको टाउको नै हुँदैन। सामान्यतः एउटा टाउको हुने शुक्रकीटमा कुनैको टाउको ठूलो हुने, कुनैको सानो हुने समेत हुन्छ । कुनैको पुच्छर सानो वा छोटो हुने, कुनैको पुच्छर नै नभएको समेत भेटिन्छ। कुनैको कोल्टो ठाममा पुच्छर आएको र कुनै भने घुमाउरो पुच्छर झुन्डिएको पनि भेटिन्छ। धेरै संख्यामा शुक्रकीट सामान्य संरचनामा भेटिने गर्छ। असामान्य प्रकृतिमा देखिने शुक्रकीटको गर्भधारणको क्षमता कम हुने विश्वास गरिन्छ ।





यहाँ एउटा चाखलाग्दो कुरा के छ भने जब महिलाहरू जन्मिन्छन् उनीहरूमा रहने सम्पूर्ण डिम्ब उनीहरू आफ्नो आमाको गर्भमा भ्रूणको अवस्थामा रहँदैमा राखिएको हुन्छ। महिलामा जस्तो पुरुषमा भने तयारी शुक्रकीट उनीहरूसँगै जन्मेको नभएर उनीहरूको अण्डकोष भित्र हुने सेमिनिफेरस ट्युबमा निर्माण गर्न जरुरत हुन्छ। जब पुरुष वयस्क हुने समयमा पुग्छ तब अण्डकोष भित्रको अत्यन्त लामो कोइलका रूपमा घुम्रिएर रहेको सेमिनिफेरस ट्युबभित्र शुक्रकीट बन्छ।

सेमिनिफेरस ट्युबभित्र उत्पादन भएका शुक्रकीट इपिडिडिमिस (Epididymis) र भास डिफरेन्स (Vas Deferens) भनिने गुजुल्टो परेको नलीभित्र परिपक्व बन्छन्। गुजुल्टो परेको उक्त





नलीहरू अन्त्यमा मूत्र मार्गमा खुलेका हुन्छन्। सम्भोगको समयमा परिपक्व बनेर वीर्यमा रहेका शुक्रकीट वीर्यसँगै मूत्र मार्ग हुँदै युवतीको प्रजनन अंगमा कुशलता पूर्वक पु¥याइन्छ। पुरुषको शरीर भित्र शुक्रकीट उत्पादन भएर परिपक्व हुन लगभग ७४ दिन सम्म लाग्ने गर्छ । सामान्य औसतमा भने नौ हप्ताको आसपासमा उक्त प्रक्रिया पूरा हुने गर्छ।

अर्को चाखलाग्दो कुरा के हुन्छ भने शुक्रकीटलाई अत्यन्त शान्त वातावरण मन पर्छ। जब मानिस यौवन अवस्थामा पुग्छ तब उसको अण्डकोष शरीरबाट तल झरी दुई साँप्रोबीच तुर्लुङ झोलिने गर्छ। यसले शुक्रकीट समेतको वीर्य बनाउने बायोमेसिनरीको तापमान दुई डिग्री सेल्सियसले कम कायम गर्न मद्दत गर्छ। जसले गर्दा वीर्यको







उत्पादन, संकलन, संरक्षण गर्न र सक्रिय राख्न सम्भव बन्छ।

यौवनावस्थामा पुग्दा पुरुषको अण्डकोष कुनै कारणले शरीरभित्र नै रहेर झुन्डिन सकेन भने ऊ जीवनभर बाँझो रहने डर हुन्छ । एउटा अण्डकोष झ¥यो, अर्को झरेन भने उसले प्रजनन मार्फत युवतीलाई गर्भधारण गराउन सक्छ भन्ने निश्चितता कम हुन्छ । तातो पानी वा प्याडको प्रयोग गरी नियमित अण्डकोष तताउने गर्दा पुरुषको शुक्रकीट उत्पादनमा कमी आउने गर्छ।

यद्यपि पुरुषको अण्डकोष भित्र शुक्रकीट नियमित रूपमा बनिरहने गर्छ। यदि केही लामो समयका लागि पुरुषको वीर्य स्खलन भएन वा गरिएन भने पनि उसको अण्डकोष वीर्यले भरिएर विस्फोट हुने













गर्दैन । कारण निश्चित समयमा स्खलन नभएको वीर्य तथा शुक्रकीट शरीरले पुनः टुक्र्याएर आफैंले अवशोषण गर्छ। जसलाई यौन ऊर्जा लाई ओज अथवा औरा तथा आध्यात्मिक शक्तिमा परिवर्तन गर्ने प्रक्रिया भनिन्छ। शरीरको उक्त प्रक्रियाका कारण वैज्ञानिक प्रविधिको भ्यासेक्टोमी जस्ता परिवार नियाँजनको उपाय सफल बनेको हो। किनकि भ्यासेक्टोमी हुँदै गर्दा पुरुषहरूको वीर्य आउने ट्युब काटिएको मात्र हुन्छ। शुक्रकीट मिसिएको वीर्यको उत्पादन प्रक्रिया रोकिएको हुँदैन। उनीहरूमा उत्पादन हुने अत्यधिक शुक्रकीट मिसिएको वीर्य शरीरले अवशोषित नगर्ने भएको भए उक्त कार्यले उनीहरूको अण्डकोष वीर्यले भरिएर विस्फोट हुने गर्दथ्यो। तर त्यसो हुँदैन। त्यो









शरीरले अवशोषण गर्दछ।

आज कतिपय विवाहित जोडीहरू गर्भधारणमा जिम्मेवार रहने जीव विज्ञानको आधारभूत प्रक्रियाबारे नजर अन्दाज गरी आफूले चाहेका बेला गर्भधारण नभएर दिक्क बनिरहेका भेटिन्छन् । उनीहरूले ख्याल गर्नुपर्ने कुरा के छ भने सम्भोगका बेला जति सुरक्षित वीर्यलाई योनि भित्र उच्च गतिले हुत्याइदिन सकिन्छ त्यति धेरै गर्भाधानको सम्भावना रहन्छ। यसका लागि सम्भोगको समयमा लिंग कडा र उत्तेजित रहन जरुरी हुन्छ। हर्नी भनिने उत्तेजित तथा दरिलो लिंग निर्माणका लागि लिंगको संरचनामा रहेका शिरा तथा धमनीहरूमा एक जटिल प्रक्रियाको रक्तचाप वृद्धिको जरुरत पर्छ। जुन परिवर्तित रक्त प्रवाहमार्फत उत्पन्न हुने गर्छ।









यसमा शारीरिक र भावनात्मक कारक हरूको विशेष भूमिका हुने गर्छ।

एक अर्काबीच सम्मानको अवस्था, यौन चाहना, यौन आसक्ति, एउटाले अर्कोलाई चरम सुखको अनुभव दिन आफूलाई सहज पारिदिने व्यवहार, पूरा समय दुवैको सकारात्मक सहभागिता, अर्कोलाई सम्भोगमा सक्रिय हुन उत्प्रेरित गर्ने संस्कारको विकास आदि अनिवार्य हुन्छ। त्यसमा मानिसको जीवन शैली र यौन कार्यको समयमा प्राप्त स्वतन्त्र वातावरणको समेत अत्यधिक भूमिका रहन्छ। धेरै थकित वा निराश रहेको, धेरै रक्सी पिएको वा डिप्रेस रहेको अवस्थामा हर्नि (Horny) अवस्था प्राप्ति सम्भव रहन्न।

सम्भोगको समयमा पुरुष साथीलाई चरम सुख








प्राप्ति तर्फ उत्प्रेरणा दिन होइन, त्यस विपरीत नचाहिने खुद्रा मसिना नकारात्मक कुरा निकाली बखेडा गर्ने, नकारात्मक शारीरिक हाउभाउ प्रदर्शन गर्ने, गर्भधारण हुन नसक्नुमा पुरुष निकम्मा रहेको जस्ता वचन लगाउने आनीबानीले पुरुषमा मनोवैज्ञानिक हैरानी विकास हुन गई लिंग हर्नी नहुने समस्या जन्माएको घटना अधिक देखिएको छ। उक्त अवस्था लामो रहँदा पुरुष लिंग कडा नहुने रोगले लामो समय ग्रसित भएको समेत भेटिने गर्दछ।

जब लिङ्ग हर्नि (Horny) बन्दछ र सहभागिता मूलक यौन कार्यमा सम्पूर्ण रूपमा योनि भित्र छिरेको हुन्छ त्यसलाई ब्राभो – डेल्टा भनिन्छ (पुरै ल्वात्त छिर्नु)। आपसी सहमतिको सम्भोगमा










सहभागी हुने युवक युवती दुवै सम्भोगले दिन सक्ने चरम आनन्द उठाउन सक्रिय सहभागिता मार्फत दुवैको सम्पूर्ण प्रयास ब्राभो–डेल्टा हुँदै चरम सुखको अवस्थामा दुवैलाई पु¥याउनु उनीहरूको आफ्नो स्वस्थ, मनोवैज्ञानिक सबलता र सम्भोगरत पक्षबीचको तत्कालीन समयको अनिवार्य धर्म कर्म मानिन्छ। प्रकृतिले मानिसलाई आफ्नो सन्तान उत्पादन गरी पृथ्वीमा आफ्नो वंशको बिउको नियमितता कायम राख्न दिएको जिम्मेवारी पूरा गर्न जरुरी हुने गर्भधारण सफल बनाउन उक्त धर्मको पालन अनिवार्य हुने गर्छ।

योनिभित्र वीर्यको स्खलन सम्भव हुँदै गर्दा वीर्यमा रहेको शुक्रकीटलाई आफूले गर्भाधान गराउनुपर्ने डिम्ब कहाँ छ भन्ने कुनै पत्तो हुँदैन। महिलाको











योनिमा निर्मित विशिष्ट नलीको निकास गर्भाशय सम्म हुने गर्छ । उक्त नलीहरू पूर्ण रूपमा ¥यालयुक्त योनि रसले भरिएका हुन्छन्। उक्त नली हुँदै पाठे घरको आसनभित्र छिर्ने बिन्दुमा पाठेघरको द्वार अथवा भनिने स्वर्गद्वारीको मूल आगमन गेट रहने गर्छ। चिसो लागेर रुघा लाग्दा नाकबाट बग्ने पानी जस्तो पातलो सिँगान जस्तो देखिने उक्त योनि रस अत्यन्त जटिल संरचना युक्त हुने गर्छ ।

कसैको वीर्य अत्यन्त बाक्लो छ भन्दैमा यो जरुरी छैन कि उनीहरूको शुक्रकीट मोटो वा तागतिलो र गतिलो हुन्छ। सामान्यतया त्यसको मतलब त्यहाँ अनियमित आकारको शुक्रकीट उच्च संख्यामा रहेको भन्ने बुझिन्छ। शुक्रकीट योनिमा प्रवेश गर्न साथ तिनीहरू गर्भाशयको योनि रसको सम्पर्कमा













आउँछन्। पाठेघरको द्वारमा रहेको गेटले योनि रससँग आएको शुक्रकीटलाई परिस्थिति अनुरूप कि योनिको अम्लता बाट बचाउँदै भित्र लगी डिम्बसम्म पुग्न अनुमति दिन्छ। अन्यथा भित्र छिर्न रोकी योनि रसको अम्लता बाट शुक्रकीट नष्ट गरी बाहिर फालि दिने गर्छ।

पुरुषको लिंगको जस्तो युवतीको योनिको बाहिरी दुनियाँ र गर्भाशय बीच दुरी कायम गर्ने शरीर बाहिर सम्म झुन्डिएको संरचना हुँदैन । खोँचमा अवस्थित रहेको योनि द्वार शरीरले नियमित मल त्याग गर्ने गुदद्वारको नजिकै मूत्र त्याग नलीसँगै जोडिएको हुन्छ। आफ्नै फोहोर विसर्जन गर्ने स्थानमा रहेका रोगका जीवाणुको संक्रमण बाट बच्नुपर्ने, बाहिरी वातावरण बाट समेत योनिद्वार हुँदै संक्रमण हुने











सम्भावना न्यून गर्नु पर्ने अवस्थाबीच गर्भ र बाहिरी दुनियाँको रक्षा कवचको अन्तिम लाइन रूपमा योनि द्वार र स्वर्ग द्वारीको मूल आगमन गेट बीचको नली रहेको हुन्छ। उक्त कार्य सम्पन्न गर्न प्रकृतिले बाहिरी हानिकारक जीवाणु विरुद्ध सुरक्षा प्रदान गर्न जीवाणु प्रतिरोधी गुणले योनि रसलाई पूर्ण गराउँछ ।

गर्भाशयमा गर्भाधान हुने क्षमता गुमि सकेको डिम्ब रहँदा वा डिम्ब नै नरहँदाको अवस्थामा उक्त स्वर्गद्वारीको मूल आगमन गेट शुक्रकीटका लागि खुल्दैन। केही समयमा योनि रसको बिखालु गुणले नर्कको अनुभूति गर्दै शुक्रकीट निष्क्रिय बन्छ। वीर्य सँगै योनि रसमा मिलेको मृत शुक्रकीट मिति सकिएको योनि रस नियमित योनि बाहिर विसर्जन हुने क्रममै फोहोरका रूपमा बाहिर फालिन्छ ।













योनि रसको सम्पर्कमा आउँदा शुक्रकीटले योनि रसको बिखालु जीवाणु प्रतिरोधी गुण विरुद्ध नियमित लडाइँ कायम गरी आफूलाई सक्रिय र जीवित राख्दै अघि बढ्न जरुरी पर्छ। यथार्थमा ¥यालका रूपमा रहेका योनि रसहरू अत्यन्त मसिना फाइबरको नेट जस्तो जेलिएको हजारौँ हजार जटिल संरचना निर्मित पातलो टनेल रूपी बाटोका रूपमा रहन्छन्। निर्मित अनगिन्ती टनेलहरूले संरचनागत रूपमा शुक्रकीटलाई योनि रस सहित डिम्बसम्म पुग्ने नियन्त्रित बाटो निर्माण गर्छन्। योनिको भित्री भागमा रहेका चमचम गरी चम्कने गर्भाशयका भित्री तहका मांसपेशीले पैदा गर्ने गतिले योनि रसमा तैरिएका शुक्रकीट हरूलाई स्वर्गद्वारीको मूल आगमन गेटसम्म पु¥याउन मुख्य भूमिका खेल्छ।











पुच्छर रहेका कारण योनि रसमा तैरिएर आफ्नै गतिशीलता देखाउने सक्षम शुक्रकीटहरू मसिना फाइबरको नेट निर्मित टनेलहरूको संरचनाबाट छिर्न सक्ने हुन्छन् । आफ्नै गतिशीलता कम भएका ब्याक्टेरिया र आफ्नो कुनै पनि गतिशीलता नहुने भाइरस भने जेलिएको फाइबरको नेट निर्मित टनेलहरूबाट भित्र जान असम्भव बन्छ। कोरली युवतीको महिना वारीको चक्र सँगै भिन्न रासायनिक संरचनामा हुने योनि रसको गुणका कारण उत्पादनशील समयमा शुक्रकीटहरू सजिलै स्वर्गद्वारीको मूल आगमन गेटसम्म पुग्ने प्रबन्ध हुन्छ। गर्भाशयमा गर्भाधान हुने क्षमता युक्त सक्रिय डिम्ब रहेको अवस्थामा त्यहाँ पुगेका शुक्रकीटलाई स्वागत गर्दै स्वर्गद्वारीको मूल आगमन गेट खुल्छ।













योनिमा अवतरित शुक्रकीट कति समयमा डिम्बभित्र छिरी नारीलाई गर्भवती गराउन सफल बन्छ भन्ने कुरा विभिन्न कारकमा निर्भर हुने गर्छ। योनि तथा गर्भाशयको वातावरणमा आफू सक्रिय हुन सक्ने गरी आफूलाई परिवर्तन र सक्रिय राख्न सक्ने शुक्रकीट मात्र उक्त वातावरणमा लगभग पाँच दिन आफ्नो जीवित अस्तित्व कायम गर्न सक्छ। योनि भित्र सुरक्षित अवतरण गरेको शुक्रकीट योनि रसको सञ्जाल भित्र पाँच दिनसम्म जीवित रहन सक्ने हुँदा गर्भमा अण्डा नरहेको अवस्था सम्भोग गरिएको रहेछ भने पनि त्यसको पाँच दिनभित्र अण्डा पारेर एक नारी गर्भवती हुन सक्ने सम्भावना रहन्छ ।

डिम्ब भने पैदा भएको १२ देखि २४ घण्टाको बीचमा मात्र गर्भधारण हुन सक्ने अवस्थामा रहन्छ।











त्यसपछि उक्त डिम्ब त्यसमा रहेको हर्मोनमा आउने हर्मोन सिफ्ट भनिने प्रक्रियामार्फत बिग्रन सुरु गर्ने र अन्ततः पूरै विखण्डन भएर रजस्वलामार्फत बाहिर फालिने र नयाँ रजस्वलाको चक्र सुरु हुन्छ ।

चक्रीय पद्धतिको नियमित रजस्वला आफैँमा हर्मोनको नियन्त्रणमा रहेर सञ्चालित हुने गर्छ । तिनै हर्मोनको निर्देशनका कारण योनि रसमा पैदा गरिने केमिकलका कारण कुनै समयमा शुक्रकीट नष्ट नगरी स्वीकार हुने अनुकूल वातावरण पैदा हुन्छ । कुनै समय भने नितान्त प्रतिकूल। योनि रसमा शुक्रकीटलाई स्वीकार गर्ने वातावरण रहेका बेला शुक्रकीटले आफूमा रूपान्तरण गरी डिम्बसम्म पुगी त्यसको झिल्ली तोडी प्रवेश गर्न आफूलाई सक्रिय तुल्याउन सक्छ ।













योनिले आफ्नो भित्री तहमा रहेको नरम तन्तुहरूको कोषिकाहरूमा अधिक ग्लाइकोजिन भण्डार गरि राखेको हुन्छ। योनिमा हुने मानिसलाई फाइदा गर्ने भजेनल माइक्रोबायोमका रूपमा अक्सिजनको अनुपस्थितिमा सक्रिय हुने र बढ्ने ल्याक्टिक ब्याक्टेरियाहरूले उक्त ग्लाइकोजिन खाएर ल्याक्टिक एसिड उत्पादन गर्छ । जसको कारण योनि रस पाँच पीएच भन्दा कम हुने गरी अम्लीय बन्न सम्भव हुन्छ।

योनि रसको कम पीएच नारीको यौनांगमा जोखिमपूर्ण हानिकारक जीवाणुहरूको संक्रमणबाट बचाउन तथा यौन रोगजनक रोग ग्रस्त हुनबाट बचाउने महत्त्व पूर्ण सुरक्षा कवच बन्ने गर्छ ।

तरलीकृत वीर्य ७.२ देखि ८.० पीएचयुक्त क्षारीय











पदार्थ हो। योनि रसको पाँचभन्दा कम पीएचको रस समागमको समयमा योनिमा थुपारिने वीर्यमा रहने शुक्रकीटका लागि भने प्रतिकूल हुने गर्छ। तसर्थ सम्भोगका बेला हुने चरम सुख र उत्तेजनामा हुने पिचकारी स्खलनले वीर्य गर्भाशयको सान्निध्य पुगोस् भनी योनिको माथिल्लो भागमा पु¥याउन भूमिका खेल्छ।

प्रत्यक्ष मापनले देखाए अनुसार वीर्य यौन रसमा मिसिन पुगेको मात्र आठ सेकेन्डमा योनि रसको पीएच ४.३ बाट ७.२ पीएचमा पुग्छ । बढेको पीएचले योनि भित्र वीर्यका लागि असहजता हद निकै कम गरे तापनि विकसित पीएचसमेत पूर्ण रूपमा वीर्यको सुविधाको स्तरको नरहेकाले योनि रसमा वीर्य मिसिएको एक मिनेटभित्र नै वीर्यले





॥ श्री गणेशाय नमः ॥







शुक्रकीट लाई घेरेर योनि रस बाट सुरक्षित गर्ने कार्य सुरु गर्छ।

जसमा टिनिक्क तन्किएको उत्तेजित लिंगले योनि भित्र हुत्याएर पु¥याइने शुक्रकीट तैरिएको झोलिलो च्याप च्याप लाग्ने प्रकृतिको वीर्यको थोपाहरूको मुख्य भूमिका रहन्छ। त्यसका लागि योनि भित्र आधा घण्टा देखि एक घण्टासम्मको समय वीर्यले शुक्रकीटलाई सबै तिरबाट घेरेर भौतिक अवरोध सिर्जना गरी योनि रसलाई शुक्रकीटको सम्पर्कमा आउनबाट रोकी सुरक्षित राख्छ ।

यथार्थमा योनि भित्र सुरक्षित स्खलन सम्भव बनेपछि डिम्बलाई गर्भधारण गराउन सफल हुन वीर्यले निकै लामो यात्रा तय गर्नु पर्ने हुन्छ। योनि रसको अत्यन्त अनुकूल वातावरण भेटमा सबैभन्दा





॥ श्री गणेशाय नमः ॥





छिटो एक घण्टा पछि नत्र धेरै घण्टा पश्चात् मात्र डिम्बको गर्भधारण हुन सम्भव बन्छ।

शुक्रकीटलाई घेरेर योनि रसबाट सुरक्षित गर्ने कार्यले शुक्रकीटलाई गलत दिशातर्फ अनियन्त्रित रूपमा भड्कन बाट समेत रोक्छ । लगभग आधा घण्टाको समय पछि प्रोस्टेट एन्टिजिन र प्रोटियोलाइटिक इन्जाइमले वीर्यलाई बिस्तारै पातलो पार्दै तरल गरी शुक्रकीटको वरिपरिको सुरक्षा कवच हटाउँछ । फलतः त्यहाँ वीर्य स्वतन्त्र रूपमा तैरिन सक्ने वातावरण पैदा हुन्छ ।

वीर्यका विभिन्न संरचना निर्माण गर्न प्रमुख भूमिकामा रहने सेमिनल ग्रन्थिले कुलको लगभग ७० प्रतिशत वीर्यको भाग निर्मित गरेको हुन्छ। वीर्य निर्माणका क्रममा वीर्यको गतिशीलताका लागि









चाहिने शक्तिका लागि इन्धनका रूपमा फ्रुक्टोज व्यवस्था गरेको हुन्छ। उक्त फ्रुक्टोज बाट प्राप्त शक्तिको खर्च गरी शुक्रकीट आफैं तरल पदार्थमा स्वतन्त्र पौडन सक्छ ।

वीर्यबाट स्वतन्त्र बनेको र योनि रसको बिखालुपन छल्न र सामना गर्न शुक्रकीट सक्रिय रहेर आफ्नो सम्पूर्ण तागत लगाएर हर सम्भव पौडने शक्ति र अघि बढ्ने गर्छ। यौन क्रियाकलापमा मस्तिष्कले पैदा गर्ने ओक्सिटोसिन हर्मोनका कारण एकातर्फ नारीले स्वर्गीय आनन्दको महसुस गर्छिन् भने त्यही ओक्सिटोसिन हर्मोनले दिने आनन्द योनिको भित्री तहलाई संकुचित गराउने र फुलाउने गरिदिंदा योनिभित्र आत्मा विभोरी धुन र कम्पन पैदा हुन जाँदा योनि चुमचुम चुम्किन थाल्छ ।






आफ्नो सम्पूर्ण तागत लगाएर पुच्छरको सहायतामा पौडेको शुक्रकीट चुमचुम चुम्किएको योनिको भित्ता खुम्चने र फुक्के क्रममा अगाडि धकेलिन थाल्छ। फलतः शुक्रकीट गर्भाशयको द्वार अर्थात् स्वर्ग द्वारी सम्म पुग्न सफल बन्छ । स्वर्गद्वारी पुगेको शुक्रकीटको स्वर्गद्वारी छिचोल्ने यात्रा जीवन मरणको यात्रा बनिदिन्छ । भर्खरै रजस्वला भएको बेला रहेछ भने त्यहाँ पौडन चाहिने मात्रामा योनि रस नै रहँदैन । रजस्वला भएको देखि डिम्ब बन्ने समय नभइसकेको बेला रहेछ भने योनि रसमा एस्ट्रोजनको मात्रा अधिक रहेकाले त्यो धमिलो, लयालो तर बाक्लो हुने हुँदा शुक्रकीटले त्यसलाई छेड्न सक्दैन। छेड्न कोसिस गर्दा पासोमा पर्छ। डिम्ब बन्ने समयमा भने पाठेघरको सर्किभल म्युकस











भनिने योनि ¥याल अक्सर अण्डा जस्तो पातलो, चिप्लो, तनक्क तनक्क तन्कने, सेतो, शुक्रकीट लाई पौडन सहज हुने प्रकृतिको हुन्छ।

स्वर्ग द्वारीको प्रवेशद्वार अत्यन्त साँघुरो रहने मात्र हैन, अत्यधिक दुष्ट आत्माहरू लाई भित्र छिर्न अवरोध गर्ने स्वर्ग द्वारीको पारदर्शी पासो ठानिने लयालो ¥यालको अवरोध युक्त हुने गर्छ । यात्राको क्रममा जुन जुन शुक्रकीट स्वर्गद्वारी सम्म पुग्न सक्दैन त्यसलाई अम्लीय प्रकृतिको कठोर योनि रसले नष्ट गरी दिन्छ। अथवा उनीहरूको यात्रा नारकीय बन्छ।

शुक्रकीटहरू स्वर्गद्वारीको मूल गेटभित्र छिर्न सफल हुनासाथ गर्भाशयमा (हस्तिनापुर) शुक्रकीटहरूका उपस्थितिका कारण प्रतिरक्षा प्रणाली (शकुनी)











सक्रिय बनेर प्रतिरक्षाको प्रक्रिया (महाभारत युद्ध) ट्रिगर हुन पुग्छ। हरेक पाँच शुक्रकीट (पाण्डव) विरुद्ध सेतो रक्तको कोषिकाका सयभन्दा अधिक प्रतिरक्षा कणहरूको (कौरव सेनाहरू) सामना गर्नु पर्ने स्थित आइलाग्दछ। कमसल र युद्धमा सक्षम नदेखिएका शुक्रकीटहरू प्रतिरक्षा प्रणालीको आक्रमणबाट मर्न थाल्छन्। यद्यपि स्वस्थ शुक्र कीटहरू समेत आक्रमणमा परी मर्ने गर्छन्। तर, लडाइँमा सफल बनेकाहरू स्वर्ग वा डिम्बको खोजीमा फिलोपियन ट्युबतर्फ अघि बढ्छ।

स्वर्गद्वारीको मूल आगमन गेट पार गरी हस्तिनापुरको महाभारतको युद्धमा बचेका स्वस्थ र सबल शुक्रकीटले स्वर्गको सुन्दरीका रूपमा रहेकी डिम्ब कुन चाहिँ फिलोपियन ट्युबमा राज गरी













बसेकी छिन् भनी कुनै सुइँको पाउने गर्दैन। गर्भाशय भित्र डिम्बको खोजीमा पुण्य कमाउन नसकेका अत्यधिक अभागी शुक्रकीटहरू गलत फिलोपियन ट्युब र स्थानमा पुग्छन्। पुण्य कमाएका निकै दुर्लभ भाग्यमानी शुक्रकीट मात्र सही मार्ग हुँदै लक्षित डिम्बाशयसम्म पुग्छन्। डिम्बाशय भेटाएको मध्ये एउटा मात्र सर्वाधिक पुण्य कमाएको शुक्रकीटले टाउकोको गोलो भागको टुप्पोमा रहेको इन्जाइमको सहयोगमा डिम्बको बाहिरी सुरक्षात्मक तह प्वाल पारी डिम्बभित्र छिर्ने अनुमति पाउँछ ।

तीन तहको बाहिरी आवरणमा घेरिएको डिम्बाशयको झिल्ली लाई छेडेर भित्र छिर्न अत्यन्त धर्मात्मा युक्त शुक्रकीट अर्जुनले आफ्नो टाउकोमा











रहेको रसायन, आफ्नो पुच्छरको तागत र आफ्नो टाउकोको टुलुक्क परेको भागको सहयोग लिन्छ। गर्भधारण सम्भव बन्छ। गर्भधारण भएको डिम्ब स्वर्गको मूल आसन वा गर्भमा रहेर लगभग दस महिना पालित पोषित हुँदै नयाँ सन्तानको रुपमा जन्म लिन्छ।

तीनै तह प्वाल पारिभित्र छिरेको (तम, सत र रज गुणी कृष्ण वा ॐ ज्ञान प्राप्त) शुक्रकीट लाई डिम्बले भित्र तानेर आफ्नो सारतत्व सँगै मिसाउँछ र गर्भधारण सम्पन्न हुन्छ। तीनै सुरक्षा तह पार गरी शुक्रकीटले डिम्बलाई गर्भधारण गर्ने बित्तिकै डिम्बले आफ्नो झिल्लीहरूमा रासायनिक सन्देश सम्प्रेषण गर्छ। जसका कारणबाट डिम्बको झिल्ली सँगै सम्पर्क बनाउँदै झिल्ली तोडेर भित्र छिर्ने













कोसिसमा रहेका शुक्रकीटहरू लाई निषेध गरिन्छ।

लिंगले योनिमा शुक्र दान गरेको ४० देखि ३०० मिलियन मिलियन शुक्रकीटमध्ये एउटा शुक्रदेव अर्जुनलाई मात्र ४० हप्ताका (९ महिना) लागि स्वर्ग आसन प्राप्ति हुन्छ।

स्वर्ग आसन प्राप्ति गरेको भ्रूणले पूर्ण मानवका रूपमा धर्ती वा मृत्युलोकमा जन्म लिई आफ्नो सत्कर्म मार्फत आफूलाई मुक्त पार्ने अवसर प्राप्त गर्छ। गर्भाशयको फिलोपियन ट्युबमा गर्भिणी बनेको डिम्बलाई युटेरस (जुन १५ देखि २० सेन्टिमिटरको हुन्छ) हुँदै गर्भाशय पुगी प्रत्यारोपण हुन (आफ्नो स्वर्गको आसनमा स्थिर रहेर स्थापित हुन) अर्को लगभग ६ देखि १२ दिनको समय लाग्छ।











गर्भधारण सम्पन्न बनेपछि उचित मात्राको पुण्य कमाउन नसकेका शुक्रकीटहरू डिम्बाशयको चारैतिरको गुफामा केही समय वा दिन सम्म स्वतन्त्र तैरन पाउँछ। पाठेघर भित्रको योनि रस र पाठेघरको ¥यालले निर्माण गर्ने नेट बाट निर्मित टनेलहरूको संरचनाले दिने सुरक्षाका कारण वीर्य स्खलनपछि पाठेघरभित्र पुग्न भ्याएको शुक्रकीट पाँच दिनसम्म बाँच्न सक्छ ।

सम्भोगका बेला योनिको संसर्गमा आउने वीर्यको सामान्य पीएच ७.१ बाट ८.० हुने गर्छ। स्वस्थ योनिले आफैँले पैदा गर्ने ३.८ देखि ४.५ पीएचको अम्लीय हल्का बाक्लो झोलिलो पदार्थ सम्भोगका बेला लुब्रिकेन्टको काम गर्ने, त्यसको अलावा वीर्य, रगत आदिका कारण यौनांगमा बढ्न जाने पीएच













नियन्त्रण गरी संसर्गमा आएका ब्याक्टेरियाबाट योनिलाई संक्रमण हुनबाट बचाउँछ ।

समयको गति सँगै योनि रसमा रहेको कम पीएच र शुक्रकीटलाई बिखालु हुने रोग प्रतिरोधी क्षमताको संक्रमणबाट शुक्रकीटहरू बिस्तारै नष्ट हुन्छन्। जुन नियमित रूपमा पटकपटक योनिले बाहिर फाल्ने योनि रसमार्फत फोहोरका रूपमा बाहिर फ्याँकिने गर्छन्। योनि रसको जन्म जात प्रतिरक्षा प्रति क्रियाका रूपमा रहेको अम्लीयपन, योनिका माइक्रोबायोम, म्युकसमा रहने प्रतिरक्षा हर्मोनका कारण मरेका शुक्रकीटहरू मूलतः गुरुत्वाकर्षणका कारण योनिस्रावसँगै योनि बाहिर चुहिन्छन्।

वीर्य कोलेस्ट्रोलद्वारा निर्मित प्रोटिन, सोडियम, भिटामिन सी जस्ता पौष्टिक सामाग्रीबाट बनेको









हुन्छ। तर पनि यो पोषण तत्व नभई जीवन्त शक्तिको स्रोत रहेकाले यसले खाद्य वा पेयका रूपमा ग्रहण गर्दा नगण्य मात्र पोषणतत्व उपलब्ध गराउने गर्छ। कतिपय मानिसलाई वीर्यको एलर्जीसमेत हुने गर्छ।

नैतिक चेतनायुक्त यौन अनुभवले तपाईंलाई दिने चरम सुखको अनुभूतिको समयलाई समेतलाई तपाईं ईश्वरमा लीन हुनुभएको समयका रूपमा लिने गरिन्छ। यौनिक प्रक्रियाबाट प्राप्त हुने आनन्द र चरम सुख, बलिदानको अनुभूतिको अनुभव आदिका लागि तपाईंलाई तपाईंको यौन शक्तिको परिपूर्ति गर्नु जरुरी हुन्छ। सम्भोगको समयमा पैदा हुने तथा उपयोग गरिने नारी तथा पुरुषको प्रजनन रसहरू खनिज, भिटामिन, तागत र सुरक्षा कवचका









तत्वहरू हुने गर्छन्, जुन मस्तिष्कको सन्तुलन र कार्यसम्पादनका लागि महत्वपूर्ण हुन्छ।

शरीरले निर्माण गर्ने यौनको तरल पदार्थलाई निश्चित समयसम्म परिपक्व हुन दिँदा शरीरले यसलाई पुनः सोसी आफ्नै प्रयोजनका लागि उपयोगमा ल्याउने गर्छ। यसको सारशक्ति अथवा ओज (औरा तथा जीवन्त शक्ति) मेरुदण्डभित्र रहने स्पाइनल फ्लुड भनिने तरल पदार्थमा आपूर्ति हुने गर्छ । उक्त जीवन्त शक्ति विना तपाईंले आफ्नो मस्तिष्क सञ्चालन गर्नु भनेको विनाइन्धन गाडी चलाउनु भने जस्तै हुन्छ । तपाईं छिट्टै शिथिल बन्नुहुन्छ । तपाईंले खर्च नगर्नु भएको तपाईंको यौन ऊर्जाको झन्डै ९० प्रतिशत शरीरका अंगहरूको मर्मतसम्भार र पुनर्ताजकीकरण कार्यमा प्रयोग हुने गर्छ। उक्त








क्रियाद्वारा तपाईंको यौन ऊर्जालाई तपाईंको जीवन्त ऊर्जा र शरीरले आफूले आफैंलाई उपचार गर्ने हिलिङ शक्तिमा परिवर्तन गर्न सकिन्छ ।

आयुर्वेद अनुसार खानाको पाचन प्रक्रियाले खानाबाट रगत बन्छ । रगतबाट मासु, मासुबाट बोसो, बोसोबाट हड्डीको मासी बन्छ । हड्डीको मासीले वीर्य निर्माण गर्छ । वीर्यले भौतिक शरीर, मुटु र बुद्धिको पोषण गर्छ। आफ्नो भौतिक शरीर मात्र उपयोग गर्ने मानिसको बुद्धि र हृदय अविकसित रहन्छ। उसमा मन र हृदयको शुद्धता सम्भव हुँदैन। उसको वीर्यको शक्ति जुन मुटु र दिमागसँग सम्बन्धित रहन्छ त्यो बाहिर प्रवाह हुन जरुरी हुन्छ। उसका लागि यौन अनिवार्य विषय रहन्छ।









एक साधक जो नियमित प्रार्थना, जप र ध्यान मात्र गर्छ तर यदि उसले हृदयको विकास गर्दैन, शारीरिक योग वा व्यायामको अभ्यास समेत गर्दैन भने ऊ मात्र दिमागी रूपमा ज्ञानी रहन्छ। वीर्यको त्यो पक्ष जुन मुटुको पोषण र शरीरको पोषण गर्छ त्यो खेर जाने गर्छ। शारीरिक तन्दुरुस्तीका लागि उसलाई समेत सम्भोग उपयुक्त र अनिवार्य कार्य हो।

एक योगी जो उच्च चेतनाको तहको गहिरो ध्यान गर्छ र उसको ध्यान मानसिक विकास, हृदयको विकास र शारीरिक नियन्त्रणमा पूर्ण लागेको हुन्छ उसको वीर्य मार्फत भौतिक शरीर, मुटु र बुद्धिको पोषण सम्भव हुन्छ। उसका लागि यौन ऊर्जालाई जीवन्त ऊर्जा र हिलिङ शक्तिमा परिवर्तन गर्नु




उपयुक्त विकल्प हो। उसले जीवनमा सम्भोग खासै गरि रहनु पर्ने भन्ने हुँदैन।

सर्वसाधारण मानिस जीवनको उत्तरार्धमा प्रायः आफ्नो संस्कार र कर्मको नियन्त्रणमा रहन्छ। समयको क्रमसँगै बिस्तारै आफ्नो वास्तविकता, जीवन र शरीरको आवश्यकता, जीवनको प्रकृति आदि बुझेर ऊ बिस्तारै अध्यात्मतिर आकर्षण हुन्छ। केही आध्यात्मिक साधना मार्फत आफ्ना गलत कर्म, इच्छा र अहंकार हटाएर शान्ति पूर्ण जीवन जिउने शक्ति प्राप्त गर्छ । उसका लागि आफ्नो पारिवारिक सुख र सन्तुष्टिका लागि समेत सम्भोग अनिवार्य पक्ष रहेको मान्नुपर्छ।

मानवका रूपमा जन्मिएको भए तापनि मानवका रूपमा आफूलाई विकसित गर्न नसकेको मानिसको





हकमा भने यो संसारमा सेक्स र अहङ्कार बाहेक अरू केही कुराको महत्व र अस्तित्व रहँदैन। उसको दिमागमा उसका लागि सबैभन्दा मुख्य र महत्वपूर्ण विषय अहङ्कार हुने गर्छ । अहङ्कारलाई मुख्य आधार मानेर सेक्स अहङ्कार माथि जकडिएर बसेको हुन्छ। उसका लागि भने सम्भोग र मोज मस्ती नै सम्पूर्ण जीवनको सार, आधार र गन्तव्य हो। उक्त व्यक्तिका लागि यौन ऊर्जालाई जीवन्त ऊर्जा र हिलिङ शक्तिमा हैन कि जीवन्त ऊर्जा र हिलिङ शक्तिलाई यौन ऊर्जामा परिवर्तन गर्ने विकल्प उपयुक्त हुने गर्छ।

**अर्थ पूर्ण संयोग**

सामान्यतया १२ देखि १६ वर्ष को उमेर पुगेको किशोरावस्थाको पुरुषमा शुक्राणु उत्पादन



(स्पर्माटोजेनेसिस Puberty) सुरु हुन्छ। किशोरावस्थाको हार्मोन जस्तै टेस्टोस्टेरोन (testosterone) सक्रिय हुँदा अण्डकोष (testes) मा शुक्राणु उत्पादन सुरु हुन्छ। अण्डकोष (testes) मा शुक्राणु उत्पादन सुरु हुन थाले पछि शुक्राणु निर्माणको सम्पूर्ण प्रक्रिया लगभग ६४ देखि ७२ दिन (झन्डै २ देखि ३ महिना) लाग्छ। त्यस पछि अण्डकोषमा आफ्नो जीवनभर निरन्तर रूपमा शुक्राणु उत्पादन गरिरहन्छन्। उमेर सँगै शुक्राणुको मात्रा र गुणस्तरमा गिरावट आए पनि ८० - ९० वर्ष वा सो भन्दा अधिक उमेरमा समेत शुक्राणु निर्माण भएको देखिन्छ।

कौरवहरू सँगको पासाको खेलमा हार बेहोरे पछि जुवाको सर्तका रूपमा पाण्डवहरूले कुल १३ वर्षको











वनवास बिताए। १२ वर्षको वनवासमा पाण्डवहरूले आफ्नो राज्य र राजसी जीवन बाट टाढा रही देशका विभिन्न स्थानहरूमा पहिलो १२ वर्ष जङ्गलमा बिताउनुपर्ने थियो (किशोरावस्थाको पुरुषमा जसको अण्डकोष शुक्राणु उत्पादनको लागि विकसित हुँदै गरेको अवस्था)। १२ वर्षको वनवास पूरा गरेपछि, पाण्डवहरूले थप १ वर्ष अज्ञात वासमा बिताउनु पर्थ्यो (अण्डकोषमा शुक्राणु उत्पादन सुरु हुन थाले पछिको यौन कार्यको लागि सम्पूर्ण तैयारीमा सामान्यतया लिइने समय)। जहाँ उनीहरूले आफ्नो पहिचान लुकाएर बाँच्नु पर्ने हुन्थ्यो। यदि उनीहरू यो वर्षको अवधिमा पत्ता लागे भने फेरि १२ वर्षको वनवास दोहोऱ्याउनु पर्ने हुन्थ्यो। पाण्डवहरूले सफलता पूर्वक १३ वर्षको









वनवास पूरा गरे र आफ्नो राज्य फिर्ता दाबी गर्न (सिंहासन वा डिम्ब प्राप्तिको लागि) फर्किए। दुर्योधनले राज्यको पाँच गाऊ ( १ शुक्राणु = २३ क्रोमोजोम = २+३ = ५ पन्च तत्त्व । पन्च तत्त्व निर्मित शरीर विकास गर्ने डिम्ब ) समेत फिर्ता दिन अस्वीकार र राज्यमा प्रवेश निषेध गरेपछि (प्रतिरक्षा प्रणाली शकुनी वृति) अन्ततः कुरु क्षेत्रको युद्ध (स्वर्गद्वारी यात्रा) सुरु भयो। महाभारतमा वर्णन भएअनुसार कुरूँ क्षेत्रको युद्ध ५ पाण्डव र १०० कौरव ( हरेक पाँच शुक्रकीट / पाण्डव विरुद्ध सय सेतो रक्तको कोशिकाका प्रतिरक्षा कणहरू / कौरवहरू ) संलग्न थिए। युद्ध लगातार १८ दिनसम्म चल्यो, प्रत्येक दिन प्रमुख युद्धहरू भए। १८ औँ दिनमा (समागमको कामिइच्छा विकास अर्थात्









कृष्ण अभिमुखीकरण को १ दिन + समागम पछि महिलाको प्रजनन प्रणालीमा शुक्राणु सङ्घर्षरत रहने लगभग ५ दिन + युटेरसको नलीमा रहने अधिक १२ दिन गर्दाको कुल १८ दिनमा हस्तिनापुर राज्य प्राप्ति) पाण्डवहरू विजयी भए, जसले कौरव हरूको पराजय र दुवै पक्षबाट ठुलो सङ्ख्यामा ज्यानको क्षति गरायो।

सामान्यतया २८ दिनको महिनावारी चक्रको करिब १४ औँ दिन आसपासमा अण्डोत्सर्जन (Ovulation) हुने गर्दछ। महिलाको डिम्बाणुलाई अण्डोत्सर्जन (Ovulation) भएको समयको २४ घण्टा भित्र पुरुषको शुक्राणुले निषेचन (Fertilization) गर्नु पर्ने हुन्छ। समागम पछि महिलाको प्रजनन प्रणालीमा शुक्राणु




लगभग ५ दिनसम्म सङ्घर्षरत रहेर जीवित रहन सक्छ। त्यसैले अण्डोत्सर्ग भन्दा केही दिन अघि भएको यौन सम्पर्कमा समेत डिम्बाणुको निषेचन सम्भव हुन सक्छ।

जब निषेचित हुन्छ निषेचित डिम्ब युटेरसको नलीमा (Uterus) नै डिम्ब भित्र करिब ६-१२ दिन रहन्छ। त्यस पछि मात्र त्यो मुख्य गर्भाशय (हस्तिनापुर) पुगेर राज गर्दछ। त्यस पछिको १२ हप्ता सम्म भ्रूण (Embryo) विकास हुने र अङ्गहरू निर्माण हुन सुरु गर्छ। १३-२६ हप्ता सम्म भ्रूणको वृद्धि जारी रहन्छ। त्यो समयमा महत्त्वपूर्ण प्रणालीहरू जस्तै मस्तिष्क र फोक्सोहरू विकास हुन्छ। २७-४० हप्ता पुग्दै गर्दा भ्रूण पूर्ण रूपमा शरीरको रूपमा विकास भएको हुन्छ र जन्मको





तयारी सुरु हुन्छ।

## वैज्ञानिक भन्छन् शरीर मर्दैमा मानिस मर्दैन

वैज्ञानिक क्वान्टम सिद्धान्त अनुरूप धरै वैज्ञानिकहरू मानिसको शरीर मर्दैमा उसको चेतना मर्दैन भन्ने क्वान्टम मेटाफिजिक्सको अवधारणा पुष्टि भएकोमा विश्वास गर्दछन्। क्वान्टम केमेस्ट्री र क्वान्टम मेटाफिजिक्स लाई नजिक वाट निहालेर कार्यरत रहेका वैज्ञानिकहरू त्यस मान्यता वाट एकदम अघि बढेर क्वान्टम सिद्धान्तले मानव चेतना मानिसको मृत्यु पश्चात् अर्को ब्रह्माण्डमा सर्छ भनेर प्रमाणित






गर्ने छ भनी दाबी गरिरहेको भेटिन्छ।

द टाइम जस्ता विज्ञान कथा उपन्यासहरूका लागि सबैभन्दा प्रसिद्ध इङ्गल्यान्डका अङ्ग्रेजी उपन्यासकार, पत्रकार, समाज शास्त्री, र इतिहासकार एचजी वेल्सले आफ्ना लेख तथा रचनाहरूमा विमान, ट्याङ्क, अन्तरिक्ष यात्रा, परमाणु बम, स्याटलाइट टेलिभिजन, विश्वव्यापी वेबको वारेको भविष्यवाणी गरेको देख्न सकिन्छ। उनका ती उत्कृष्ट कथामा समय यात्रा (टाइम मिसिन), एलियनको आक्रमण, चन्द्रमाको उडान, देवताहरूको शक्ति, मानव कल्पना आदि बारे अर्थपूर्ण विषयहरू मानव रचित कथाहरूको रूपमा पढ्न सकिन्छ। वेल्सको सन् १८९५ मा लेखिएको कथा "द डोर इन द वाल" मा संसारमा त्यस्तो कुनै भौतिक नियमहरू स्थापित छैन












जसले समानान्तर संसारहरूको अस्तित्वलाई सैद्धान्तिक रूपमा निषेध गर्दछ भनी उल्लेख गरेका छन्। जुन आज सम्मको यथार्थको समेत नजिक छ।

प्रिन्सटन विश्वविद्यालयको डा. ह्यूग एभरेटको जनवरी १९५६ को " क्वान्टम मेकानिक्स बाइ द मेथड अफ द युनिभर्सल वेब फङ्सन" शीर्षकको डक्टरल थेसिसमा ब्रह्माण्ड कुनै पनि क्षणमा अनगिन्ती भागहरूमा आफूलाई विभाजित गरी "नवजात" ब्रह्माण्डहरू लाई अस्तित्वमा ल्याउन सक्छ भन्ने निचोड निकालेका थिए। उनको थेसिस अनुसार उक्त प्रक्रिया वाट जन्मेको मध्ये कुनै एक संसारमा तपाईँको उपस्थित रहेको हुन सक्ने निचोड छ।











थेसिसका अनुसार नियमित रूपमा नव बन्ने ब्रह्माण्डहरू विभिन्न दायरा अनुरूप कुनै पनि क्षणमा पुन: विभाजन हुदै परिवर्तित हुन सक्ने हुँदा यो पनि सम्भावना हुन सक्दछ कि तपाई एउटा ब्रह्माण्डमा यो लेख पढ्दै हुनु हुन्छ र भोलि अर्को ब्रह्माण्डमा टिभी हेर्दै हुनु हुन्छ।

उनको सोध पत्र अनुसार हाम्रो आत्माहरू ब्रह्माण्डको सूचनाकै एक भागको रूपमा निर्मित चिज हो। त्यो ब्रह्माण्डको सुरुदेखिकै समय वाट अस्तित्वमा थियो र सधैं अस्तित्वमा रहन्छ। हाम्रा मस्तिष्कहरू प्रोटो-चेतनाको (युनिभर्सल कन्ससनेस) को रिसिभरहरू र एम्पलीफायरहरू हुन्। जुन स्पेस-टाइमको आवरण भित्रको













सूचनाको सारतत्व अर्थात् निजी चेतनाको रूपमा रहेको हुन्छ। ब्रह्माण्डको सूचनाको एक अंशको रूपको तपाइँको भौतिक शरीरको अभौतिक अंशको रूपमा अस्तित्वमा रहेको तपाइको चेतना (कन्ससनेस - आत्मा) तपाइको शरीरको मृत्यु पछि पनि जीवित रहनेछ भन्ने निष्कर्ष निकालिएको छ।

आज जीवितै रहेका केही चर्चित र अनुभवी वैज्ञानिकहरू समेत क्वान्टम सिद्धान्तले मानिसको शरीर मर्दैमा मानिस मर्दैन, मानव चेतना वा आत्मा मानिसको मृत्यु पश्चात् अर्को ब्रह्माण्डमा समेत पुग्न सक्छ भन्ने कुरा सङ्केत गरेको दाबी गरिरहेका छन्। वैज्ञानिकहरूका यस्ता भनाइहरू सुन्दा हामीलाई भने त्यो कुरा त हाम्रो वैदिक ज्ञानको सामान्य कखरा रहेकोले कतै तिनीहरूको उक्त बिचार धारा हाम्रै







वैदिक बिचारहरूको कपि एण्ड पेस्ट गरी प्रस्तुत गरिएको त हैन भन्ने भान हामीलाई पर्ने गर्दछ। यथार्थ त्यसो नभएर क्वान्टम सिद्धान्तले नयाँ शिरा वाट प्राप्त वैज्ञानिक पुष्टिको अनुभूति वाट ती वैज्ञानिकहरूका यस्ता भनाइहरू उनीहरूको अनुसन्धान, अनुभूति र बुझाइको चुरो यथार्थ वा सारतत्वको रूपमा बाहिर आएका हुन।

एक उदाहरणको रूपमा आज भोलि इन्टरनेटमा निकै भाइरल भइरहेको न्यु योर्क टाइम्सद्वारा गरिएको सर्वेक्षणमा जीवित सबैभन्दा महत्त्वपूर्ण तेस्रो वैज्ञानिकको मत पाएका वैज्ञानिक डा. रोबर्ट लान्जा द्वारा लेखिएको "बायोसेन्ट्रिजम: हाउ लाइफ एन्ड कन्सियसनेस आर द कीज टु अन्डरस्ट्यान्डिङ द नेचर अफ द युनिभर्स" शीर्षकको पुस्तक का








दाबीहरूलाई लिन सकिन्छ। यो किताबले मानिसको शरीरको मृत्यु भएता पनि उसको चेतनाको मृत्यु नहुने तथा उक्त चेतना सधैंभरि रहन सक्ने धारणा प्रस्तुत गरेको छ।

एक प्रतिष्ठित जीव वैज्ञानिक तथा अग्रणी खगोलविद् डा. रोबर्ट लान्जाको दृष्टिकोणमा पश्चिमी जीवन विज्ञानले परम्परागत रूपमा दाबी गर्ने गरे जस्तो कुनै भौतिक विज्ञानको नियमहरूको आकस्मिक उप-उत्पादनको रूपमा हाम्रो जीवन अस्तित्वमा आएको हैन।

लान्जा आफै रिजेनेरेटिव अर्थात् स्टिम सेल थेरापीको औषधि विज्ञ मात्र होइनन् उनी उन्नत सेल टेक्नोलोजी नामक कम्पनीको वैज्ञानिक निर्देशक समेत हुन्। स्टेम कोशिकाहरू सम्बन्धित व्यापक










अनुसन्धानका अनुभवी उनी लोपोन्मुख जनावरका प्रजातिहरूको क्लोनिङ कार्य अधिक सफल प्रयोग गर्ने जीव वैज्ञानिकको रूपमा समेत प्रसिद्ध छन्।

पश्चिमी भौतिक तथा जीवविज्ञानको तत्कालीन निर्णयमा भएको त्रुटि पूर्ण बुझाइको कारण त्यस्ता बिचारहरू प्रमाणित वैज्ञानिक विचारका रूपमा स्थापित बनेको भएता पनि ती भ्रमहरू विज्ञानको क्वान्टम सिद्धान्तले गलत सिद्ध गरिसकेको पुष्टि गर्न लान्जा सफल भएका छन्।

बायोसेन्ट्रिजम विचारधाराले मानिसको अधिकार र आवश्यकताहरू अन्य जीवित चीजहरूको अधिकार र आवश्यकताहरू भन्दा अधिक महत्त्वपूर्ण हुँदैन, सबै बराबरी रहने गर्दछ भन्ने दृष्टिकोणमा विश्वास राख्दछ। बायोसेन्ट्रिजम विचारधारामा आधारित













रहेर लेखिएको लान्जाको "बायोसेन्ट्रिजम: हाउ लाइफ एन्ड कन्सियसनेस आर द कीज टु अन्डरस्ट्यान्डिङ द नेचर अफ द युनिभर्स" ले संसारको ध्यान तान्नु को पछाडि हिजोको विज्ञानले स्थापित गरेका कतिपय मान्यता सही नरहेको यथार्थ यसले उजागर गरिदिनु एक हो।

लान्जाको बायोसेन्ट्रिजम किताबमा उल्लेख भए अनुरूप जीवन र चेतना ब्रह्माण्डको आधारभूत पक्ष हुन्। चेतना भौतिक ब्रह्माण्डको सृजना गर्ने मूल तत्त्व हो। ब्रह्माण्डको संरचनाहरू हाल देखिएको रूपमा अस्तित्वमा आउनु भन्दा पहिले चेतना, त्यसपछि बौद्धिकता अर्थात् इन्टेलिजेन्स (इच्छा-शक्ति) अस्तित्वमा देखिए। चेतनाको उपयोग गर्दै बौद्धिकता अर्थात् इन्टेलिजेन्सले अनुभूति गर्न











सकिने हालको ब्रह्माण्डको संरचना निर्माण गरिरहेको क्वान्टम पार्टिकल बने। तिनै क्वान्टम पार्टिकलहरूले अन्ततः भौतिक संरचना निर्माण गर्ने ईलेक्ट्रोन, प्रोट्रोन र न्युट्रोन आदि लगायतका भौतिक पदार्थहरू निर्माण गर्न भूमिका खेले।

बायोसेन्ट्रिजम किताब अनुसार ब्रह्माण्ड निर्माण गर्ने भौतिक पदार्थहरू भन्दा पहिले चेतना र बौद्धिकता अर्थात् इन्टेलिजेन्स अस्तित्वमा थियो। चेतना र बौद्धिकता अर्थात् इन्टेलिजेन्स नै ब्रह्माण्डको संरचना निर्माण गर्ने भौतिक पदार्थहरू निर्माण गर्ने एक कडीको रूपमा अस्तित्वमा आधार भूमिकामा देखा परे।

लान्जाको अनुसार तत्कालीन विज्ञानको ब्रह्माण्डको अस्तित्वमा वारेको सैद्धान्तिक विश्लेषण तथा













हालको ब्रह्माण्ड विज्ञानका नियमहरू मुताबिकको आकस्मिक उप-उत्पादनको रूपमा देखा पर्‍यो भन्ने मान्यता तथा जीवको उत्पत्ति वारेको दाबी पुष्टि हुने हाल सम्म कुनै पनि वैज्ञानिक आधारहरू उपलब्ध छैन। यथार्थमा ती विचार धाराहरू कहिल्यै पुष्टि नभएका अर्धसत्यमा आधारित त्रुटि पूर्ण बुझाइको नतिजा रहेको हाल आएर क्वान्टम सिद्धान्तले पुष्टि गरिदिएको छ।

मानिसहरूले आफ्नो शरीरलाई नै आफ्नो पहिचानको रूपमा लिने ठुलो भ्रम बोकेको हुन्छन्। हिजो साँचो ठानिएको वैज्ञानिक अवधारणाले पहिला जीवको शरीर बन्ने र निर्मित शरीरले आफै आफ्नो चेतना उत्पन्न गर्छ भन्ने विश्वास बोक्ने गर्दथ्यो। उक्त अवधारणामा विश्वास गर्ने व्यक्ति र











विज्ञान दुवैमा शरीर मर्दा चेतना पनि मर्छ भन्ने कुरा यकिन हुनु स्वाभाविक नै थियो। ढिलो वा चाँडो आफ्नो शरीर नास हुने निश्चित रहेको बुझेको मानिसले आफ्नो शरीर नास हुने क्रममा उसको चेतना पनि लोप हुने विश्वास गर्नु स्वाभाविक थियो। त्यही भ्रममा संसार आज पनि चलिरहेको छ।

क्वान्टम फिजिक्सको नयाँ मान्यताले विज्ञानले लामो समय सम्म स्थापित गरेको वैज्ञानिक परम्परागत मान्यता सत्यताको नजिक नरहेको खुलासा गरे सँगै हिजोको विज्ञानको शरीर मर्दा चेतना पनि मर्छ भन्ने मान्यता त्रुटि पूर्ण बुझाइको जगमा विकसित भ्रम पूर्ण विश्वास रहेको नयाँ मान्यता स्थापित गरिदिएको छ।













लान्जाको व्याख्या अनुसार हामीले सामान्य रुपमा बुझ्ने गरेको स्थान (लोकेसन - दिसा), आकाश (स्पेस) र समय (टाइम) कुनै निश्चित वस्तु वा चीजहरू होइनन्। तिनीहरू जीवहरूको संसार अनुभूति गर्ने उपकरणहरू हुन्।

जसरी एउटा कछुवाले आफू सँगै आफ्नो शरीरको खपेटा बोकेर हिँड्ने गर्दछ त्यसरी नै खपेटा रुपी आवरणको रूपमा स्थान (लोकेसन-दिसा), आकाश (स्पेस), र समय (टाइम) हरेक जीवको जीवित अस्तित्व संग नियमित जोडिएर रहेको हुन्छ।

केबल बक्सले स्याटलाइटको सिग्नलहरू प्राप्त गर्ने तरिका अनुरूप शरीरले चेतना प्राप्त गर्दछ। शरीरले त्यसरी प्राप्त गरेको चेतना शरीरका इन्द्रिय हरू बाट अनुभूति गराउने मुख्य भूमिकामा स्पेस-टाइम–





डिरेक्सन(लोकेसन) को भूमिका रहन्छ। जिबनको कुनै बिन्दुमा स्पेस-टाइम–डिरेक्सन(लोकेसन) को सन्तुलित त्रिकोणको संसर्ग जब जीवको शरीर संग बिच्छेद हुन पुग्दछ जीवको जीवनको सन्दर्भमा मृत्यु त्यसको परिणाम बन्दछ।

चेतना एक गैर-स्थानीय क्वान्टम वस्तु हो। जसरी क्वान्टम वस्तुहरू फरक फरक समयमा फरक फरक स्थानमा रहने गैर-स्थानीय चरित्रका हुन्छन् चेतना पनि त्यस्तै गैर-स्थानीय हुन्छ। केबल बक्स जस्तो भौतिक वाहनको रूपमा रहेको शरीरको मृत्युमा चेतना समाप्त हुन सम्भव छैन।

केवल बक्स बिग्रँदैमा स्याटलाइट बाट आउने सिग्नलहरू मरेका हुँदैनन्। मात्र ती सिग्नलहरू लाई अनुभूति गर्न सकिने सूचनामा परिवर्तन गरिदिने





स्पेस-टाइम- डिरेक्सन (लोकेसन) को व्यवहार्यता र केवल बक्सको काम गर्ने सिंक्रोनाइजेसन र अनुकूलतामा असहजता निर्माण भएर केवल बक्सको काम गर्ने क्षमता गुमेको हुन्छ। जसले गर्दा केबल बक्सले प्राप्त सूचना (चेतना) भिजुअल रिपोर्टहरूमा ट्रान्सक्राइब गर्न (सेन्सरि स्टिमुली अर्थात् संवेदी उत्तेजनाहरूमा ट्रान्सक्राइब गर्न) अक्षम बनेको हुन्छ। जसलाई जीवको तत्कालको जीवनको सन्दर्भमा जीवले मृत्यु वरण गरेको भन्ने गरिन्छ।

लान्जाको व्याख्या अनुसार जीवको शरीर संग इलेक्ट्रिक सप्लाई सिस्टमको प्लगको पोजेटिव, नेगेटिब र न्युट्रल चार्ज बोकेको तिन पक्षीय तार जस्तै लाग्ने स्थान (लोकेसन-डिरेक्सन), आकाश

(स्पेस), र समय (टाइम) को सन्तुलित त्रिकोण छुट्टिएर केवल बक्स (मुढ शरीर) बिग्रँदैमा (मर्दैमा) जीवको अस्तित्व (चेतना वा कन्ससनेस) समाप्त हुँदैन। जीवितै रहन्छ।

चेतना यथार्थमा स्पेस-टाइम–डिरेक्सन(लोकेसन) परिधि भन्दा बाहिर अवस्थित हुने गर्दछ। त्यो मानव शरीर भित्र वा बाहिर जहाँ पनि रहन सक्दछ। संसारमा एकै साथ विभिन्न ब्रह्माण्डहरू एकैसाथ अवस्थित हुन सक्ने सम्भावना रहेकोले एक ब्रह्माण्डमा मृत भएको शरीरको चेतना अर्को ब्रह्माण्डमा अस्तित्वमा रहन समेत सम्भव हुन्छ। उक्त समयमा चेतनालाई अर्को ब्रह्माण्डले अवशोषित गरेको हुन्छ।

त्यसको मतलब के हो भने मृत शरीर छाडेको चेतना





सुरुङ यात्राको क्रममा नर्क वा स्वर्गमा पुगेर सकिने, आनन्द वा दुखमा फस्ने भन्ने हुँदैन। चेतना त्यही वा फरक ब्रह्माण्डमा असीमित समय सम्म जीवित अस्तित्वमा रहन सक्दछ। सामुहिक चेतना संग अन्तर घुलित बनेर भएर सामुहिक अस्तित्वको भागको रुपमा बसिदिन पनि सक्दछ।

आजको समयमा पुग्दै गर्दा आत्मा लाई क्वान्टम कन्ससनेस वा चेतनाको रूपमा लिएर कुरा गर्दा कति पय सन्दर्भहरूमा मानिसहरूले अनुभूति गर्ने मृत्युको निकै नजिक पुगेको समयका अनुभवहरू, सूक्ष्म प्रक्षेपण, शरीरबाट प्राण जस्तो कुनै शक्ति शरीर बाहिर गइरहेको अनुभूति भएको भनिएका अनुभवहरू लाई मात्र सिउडो साइन्सको रूपमा सीमित गर्ने अवधारणालाई अब विज्ञानले गलत

भनी नकार्न थालेको प्रस्ट हुन्छ ।

वैदिक अवधारणाहरू, प्राय सबै धर्मका अनुयायीहरूले मान्यता राख्ने जीवन विज्ञान सम्बन्धका धार्मिक विचारधाराहरू तथा पुनर्जन्म जस्ता चीजहरूको कुनै धार्मिक संलग्नता वा झुकाव बिना क्रमशः व्याख्या गर्न सक्ने स्तरमा विज्ञानले आफ्नो क्षमता बिस्तार गर्न सकिरहेको छ । त्यस्ता पक्षहरू देखिनुको पछाडि वैज्ञानिक सिद्धान्तहरू क्रमशः स्थापित गर्दै लगेको देखिन्छ ।

मानव चेतना कुनै बिन्दुमा मानिसको शरीरबाट बिदा लिँदै गर्दा सम्भावित रूपमा फरक मानव वा जीवको सरिरमा पुनः प्रयोग हुन सक्ने, भौतिक शरीर बाहिरको अर्को वास्तविकताको अर्को स्तरमा रहन सक्ने, फरक ब्रह्माण्डमा पुग्न सक्ने आदि वा यसै





पृथ्वीमा मात्र मानव चेतनाको रूपमा अस्तित्वमा रहन सक्ने जस्ता सम्भावनाहरू हाल गरेको सम्म स्थापित वैज्ञानिक ज्ञानको आधारमा नकार्न सकिन्न भन्ने प्रस्ट विचारधारा समेत विज्ञानले विकास गरेको छ ।

# प्राणीमा आत्मा रहने वैज्ञानिक पुष्टि

कटिङ एज आजको दुनियाँमा हुँदै गरेका सैद्धान्तिक र व्यावहारिक अनुसन्धानहरू विज्ञान र वैदिक ज्ञानको संयोजनविना लगभग असम्भव हुने विन्दुबाट गुज्रिरहेको छ । जब वैज्ञानिकहरू





अनुसन्धानको गहिरो र जटिल मोडमा पुग्छन्, विज्ञानको वस्तुको वास्तविक उपस्थितिको बोध गराउन सक्ने काइदा र वैदिक ज्ञानको एक वस्तुको उपस्थितिले अर्को वस्तुमा दिने अनुभव, प्रभाव, अनुभूति एवं सचेतना बुझ्न सक्ने खुबी जरुरी पर्ने गर्छ ।

वैदिक ज्ञानलाई आध्यात्मिक प्रकृतिको ज्ञान मानिन्छ। प्राणीको भौतिक शरीर जीवन्त रहन प्राणशक्ति (आत्मा) र चेतनशक्ति (कन्सियसनेस) जरुरी हुन्छ भन्ने वैदिक मान्यता विज्ञानले स्वीकार्न आनाकानी गरिरहँदा बन्न गएको विज्ञान र वैदिक ज्ञानको दूरी, बिस्तारै वैज्ञानिक आधारमा सही रहेको पुष्टि हुने अवस्था बन्दै जाँदा विज्ञान र वैदिक ज्ञानको संयोजनबाट प्राप्त ज्ञान सैद्धान्तिक र व्यावहारिक










पक्षका समस्या समाधानमा प्रयोग हुन थालेको छ ।

प्रजननमा संलग्न हुने डिम्ब र शुक्राणुको कोषिकाहरू बन्ने सेलहरूलाई जर्म सेल भनिन्छ। जर्म सेलबाट बनेको वीर्य र डिम्बको मिलनबाट जाइगोट बन्छ । जाइगोट कालान्तरमा इम्ब्रियो र सालनालमा विकास हुने गर्छ । इम्ब्रियो सेलहरू शरीरको सबै प्रकारका सेल बनाउने क्षमता राख्छन् ।

आफ्ना दुवै अभिभावकबाट प्राप्त जोडी–क्रोमोजोम रहेको कोषिकाहरू जसबाट डिम्ब र शुक्राणुका कोषिकाहरू बन्दैन त्यसलाई सोमेटिक सेल भनिन्छ। सोमेटिक सेलबाट शरीरका अंगहरू जस्तै छाला, हड्डी, रगत, मुटु आदि बन्ने गर्छ । सोमेटिक सेलबाट मानव शरीरमा सबैभन्दा पहिले बन्ने अंग मुटु हो ।









माइटोसिससमार्फत असीमित रूपमा विभाजन हुन सक्ने कोषिकाहरूलाई स्टिम सेल भनिन्छ । स्टिम सेलले शरीरका विभिन्न अंग जस्तै: मांसपेशी कोष, रक्तकोष वा न्युरल आदि सेलको नवीकरण तथा परिवर्तन गर्न सक्छ ।

बिरुवाले वातावरणबाट कार्बनडाइ-अक्साइड र जमिनबाट पानी लिएर क्लोरोफिलमा प्रकाशको किरणको उपयोग गर्दै ग्लुकोज बनाउने गर्छ। प्राणी मात्रको शरीरले बिरुवाबाट प्राप्त ग्लुकोज र अन्य शक्तिका कारण इम्ब्रियो सेल बनाउने क्षमता राख्छ। बिरुवाले वायुमण्डलीय कार्बन डाइ अक्साइडका अलावा जमिनबाट प्राप्त पानी, मल र अन्य पदार्थ समेतको उपयोगमा फोटोसेन्थेसिस प्रक्रियामा तीन टन कार्बनडाइअक्साइड लिएर २.१









टन ताजा अक्सिजन वातावरणलाई फिर्ता गर्ने गर्छ।

सूर्यको सेतो प्रकाश सात रङ मिलेर बनेको हुन्छ । बिरुवाको पातमा रहने क्लोरोफिलको मलिकुलले सात रङमध्ये निलो र रातो लाइट सोसी इनर्जीका लागि चाहिने खाना बनाउने गर्छ।

फोटोसिन्थेटिक प्रक्रियाका लागि औसत आठ वटा (निलो र रातो) फोटोन लाइटको जरुरी हुने मानिन्छ। आठ फोटोन प्रकाशको किरण भनेको लगभग ३८१ किलो क्यालोरी हुन आउँछ। एउटा कार्बनडाइअक्साइडलाई ग्लुकोजमा परिवर्तन गर्न मात्र ११४ किलो क्यालोरी जरुरी पर्छ । सूर्यबाट क्लोरोफिलले प्राप्त गर्ने इनर्जीले वनस्पतिको शक्तिको जरुरत पूर्ति गर्छ । जरुरतभन्दा धेरै ग्लुकोज वनस्पतिले सञ्चय गर्ने गर्छ । वनस्पतिले






सञ्चय गर्ने ग्लुकोज जीवहरूका लागि जरुरी खाना बन्ने गर्छ ।

विज्ञानका अनुसार सैद्धान्तिक रूपमा मात्र ३० प्रतिशत इनर्जी बिरुवा र जीवका लागि प्रयोग हुने शक्तिबद्र्धक खानामा परिवर्तन भएको देखिन्छ । जुन प्रयोगशालामा उच्चतम मात्र २५ प्रतिशत मात्र सदुपयोग भएको पाइएको छ । यसरी प्राप्त शक्ति पनि बिरुवाको श्वासप्रश्वास र दैनिक गतिविधि सञ्चालनमा जरुरी हुने हुँदा सूर्यबाट प्राप्त प्रकाशको शक्तिको औसत एक प्रतिशत मात्र बायोमास अथवा शरीरको भाग बन्न प्रयोग हुने गरेको पाइन्छ ।

सूर्यको किरणबाट लिएकोमध्ये मात्र ३० प्रतिशत इनर्जी कहाँ जान्छ भन्ने यकिन भएको दाबी गर्ने विज्ञानले बाकी लगभग ७० प्रतिशत इनर्जी कहाँ











खपत भइरहेको छ भनी तथ्यगत व्याख्या गर्न सकिरहेको भेटिन्न ।

वैज्ञानिक परीक्षणबाट प्राप्त नतिजा अनुसार एक जीवित सेल मर्ने क्रममा स्वीकार्य वैज्ञानिक सिद्धान्तले बताउनेभन्दा अत्यधिक शक्ति निस्किरहेको भेटिन्छ । जस्तै एक ग्राम इस्ट सेल मर्दा एक ग्राम सुक्खा इस्ट सेलले दिनुपर्ने जति क्यालोरी निस्कनुपर्नेमा दुई ग्राम सुक्खा इस्ट सेलले दिने जति क्यालोरी निस्कने गर्छ ।

रगतको हेमोग्लोबिनको आणविक तौल कम्तीमा १६ हजार ७०० हुन्छ । एउटा अस्थिर जीवित प्रोटिन मर्ने क्रममा भत्कँदा ४० किलो क्यालोरी शक्ति निस्किएको भेटिन्छ । जबकि हाल सम्मकै अत्यन्त अस्थिर र विस्फोटक मानिने एक आणविक तौलको







नाइट्रोजन क्लोराइड विस्फोट हुँदा मात्र ३८ किलो क्यालोरी शक्ति निस्कन्छ। एक जीवित अस्थिर प्रोटिन मर्दा आउने यति ठूलो शक्तिको स्रोत के हो भन्ने उत्तर विज्ञानले भेटाइरहेको छैन ।

पदार्थको केमिकल म्याटर अस्थिर रहेर हुने विस्फोटको नतिजा कि त चर्को आवाज कि तापशक्ति कि निकै चम्किलो प्रकाश वा तिनीहरूको मिश्रण हुने गर्छ । जीवनको अन्तिम पलमा जीवित अस्थिर प्रोटिन मर्दा आउने शक्ति आन्तरिक रूपमा प्रोटिन तथा चिल्लो पदार्थको एसिड, बेस, साल्ट, हेबी मेटलसँग केमिकल परिवर्तनमा शरीरले खर्च गर्ने र देहावसानको समयमा छिटोभन्दा छिटो जीवित सेललाई मृत्युदान दिन उपयोगमा आउने हुँदा सम्पूर्ण शरीरले आरामदायी मृत्युको बाटो











समात्ने बुझाइ छ विज्ञानको।

सूक्ष्म रूपमा हेर्दा वीर्य र डिम्ब संयोजन भई गर्भ बन्दै गर्दा सूर्यको किरणबाट जर्म सेललाई प्राप्त हुने शक्ति गर्भलाई जीवन्त राख्न जरुरी जीवन्त शक्ति निर्वाणमा खर्च भइरहेको अनुमान लगाउन सकिन्छ। सोमेटिक सेलहरूबाट शरीरका अंगहरू छाला, हड्डी, रगत, मुटु आदि बन्ने क्रममा उक्त अंगहरू नियमित सञ्चालनमा जरुरी हुनेबाहेकको शक्ति शरीरको कन्सियसनेस क्षमता अथवा चेतना निर्वाणमा खर्च हुने गर्छ । जुन प्राणीमा भौतिक शरीरका अतिरिक्त आत्मा र चेतना रहने वैदिक मान्यताको पुष्टि हो। उक्त पुष्टिलाई विज्ञानको हिसाबमा तर्कगत पुष्टि रहेकाले पूर्ण स्वीकृतिका लागि गणितीय सिद्धान्तबाट समेत पुष्टिको जरुरत











रहने मान्यतामा रहेको छ।

जीवको अस्तित्व निर्माणदेखि भौतिक पदार्थ निर्मित स्थूल शरीर नमर्दा सम्मको विन्दु सम्म जीवनलाई जीवन्त राख्ने आत्माशक्ति र चेतनशील राख्ने चेतनालाई अविच्छिन्न रूपमा भौतिक शरीरमा जोडिइराख्न समेत बिरुवाले सूर्यको किरणबाट प्राप्त शक्ति नै स्टिम सेलले उपयोग गरिरहेको देखिन्छ । मृत्युको विन्दुमा नियमित जीवन सञ्चालन शक्ति, कोषिकामा सञ्चय रहेको शक्ति, जीवन्त / प्राण शक्ति (आत्मा) र चेतनशक्ति (कन्सियसनेस) युक्त रहेको शरीरको सजीव भाग त्यही निर्जीव भागमा रहेको बचेखुचेको सञ्चालन र सञ्चय शक्तिभन्दा धेरै रहनु आश्चर्यजनक ठानिनुपर्ने अवस्था होइन ।

मरेको र जीवित जीवमा रहने फरक भनेको जीवित













कोषिकामा ससाना इनर्जीका विन्दुहरूलाई एक अनौठो प्रक्रियाबाट निश्चित हार्मोनीमा सञ्चालन गर्ने शक्तिको उपस्थिति रहन्छ। यस लाई आयुर्वेदमा जीवन्त शक्ति (वायु वा प्राण वा लाइट) भनिन्छ ।

क्वान्टम फिजिक्सले जीवन्त शक्तिलाई इन्फर्मेसन भन्ने गरेको छ । जीवित रहँदा सम्म उक्त जीवमा चेतनाको अनुभूति दिलाउने चेतनशीलताको समेत संयोजन रहन्छ। जुन मृत्युको क्रममा शक्तिकै रूपमा शरीरबाट बाहिरिने गर्छ। मृत्यु प्रक्रियामा आत्माशक्ति वा प्राण र चेतन शक्ति ब्रह्माण्डमा नै फर्कनुको विकल्प देखिंदैन।







# के रहेछ मृत्यु

भनिन्छ, संसारमा जन्मिए पछि मृत्यु अनिवार्य छ, जुन संसारको नियम हो । विज्ञानका अनुसार जुन जुन एकल कोष जीव आज पृथ्वीमा अस्तित्वमा भेटिन्छन्, तिनीहरूले आजभन्दा तीन अर्ब वर्ष पहिले आफ्नो जीवन सुरु गरेका थिए। विज्ञानकै अनुसार आज हाम्रो शरीरमा रहेका कोषहरू समेत आज भन्दा तीन अर्ब वर्ष पहिले देखि अस्तित्वमा थियो । साथै निकै लामो समय सम्म विभिन्न रूपमा अस्तित्वमा रहिरहने छन् । यही आधारमा कतिपय मानिस संसारमा जन्मिए पछि मृत्यु हैन, आफ्नो चोला परिवर्तन अनिवार्य छ भन्ने तर्कसँग सहमत हुने गर्छन् ।











मानिस र जनावर जस्ता बहुकोषमय जीवहरू जस्तो एकल कोष जीवहरू जन्मने र मर्ने गर्दैनन् भन्ने यथार्थ जीवन र मृत्युबारे आफ्नो धारणा बनाउँदै गर्दा मानिसले नजर अन्दाज गर्ने गरेको भेटिन्छ । एकल कोषिकाको स्तरमा एक कोषले अर्को कोषको जन्म दिने गर्दैन । बरु एक कोष विभाजन भएर दुई र दुईबाट चार गरी नयाँ कोषको निर्माण हुने क्रम लगातार अगाडि बढ्ने गर्छ। एउटा कोषिका विभक्त भएर दुई कोषिका बन्ने क्रममा एउटा तन्नेरी र अर्को बुढो पनि हुने गर्दैन । विभाजन पछिका दुवै सेल जवान ताजा सेल मानिन्छ । नयाँ सेल अस्तित्वमा आउँदा पुरानोको अस्तित्व सकिने हाम्रो पुरातनवादी मान्यताका कारण एक एकल कोष विभाजन भएर दुई एकल कोष बन्दासाथ पुरानो मरेको निष्कर्षमा







हामी पुग्ने गर्छौं । जहाँ, नयाँ एकल कोष बन्ने क्रममा पुरानो एकल कोष मरेको भन्नु अपूर्ण हुन्छ। नयाँ बन्दै गरेका दुई सेलहरूले पूर्ण नयाँ जीवनको सुरुवात गरेको तर्कसमेत सम्पूर्ण सत्य मान्न सकिँदैन।

जीवन के हो ? मृत्यु के हो ? जीवन र मृत्युबीचको फरक खुट्टाउन सकिने पातलो धर्का के लाई मान्ने ? सायद यो विन्दु वरपर पुगेर गरिने गहिरो खोजीले मृत्युबारे गहिरिएर बुझ्न केही मद्दत पु¥याउन सक्छ।

त्यसो त एकल कोषीय जीवहरूमा मात्र हैन बहुकोषमय जीवहरूका समेत एउटा कोषिका विभक्त भएर दुई कोषिका बन्ने क्रममा विभाजन पछिका दुवै सेल विभाजित हुँदै गरेको सेलको








तुलनामा झन् जवान र ताजा रहने गरेको भेटिन्छ । सेल विभाजनको क्रम अनन्तसम्म कायम राख्न सक्दा सेललाई जीवन्त राख्न सकिने आश्चर्य नयाँ पुस्ताको ठूलो चाखको विषय पनि रहेको छ ।

आफू बहुसेलुलर संरचनायुक्त अंग–प्रत्यंगबाट बनेको पत्तो पाएको मानिसले भविष्यमा आफूलाई दीर्घजीवी बनाउने प्रयास अन्तर्गत आफ्ना शरीरका विभिन्न भागमा सक्रिय रहेका ती सेलका कोलोनीलाई अनिश्चित कालसम्म सक्रिय कायम राख्नुभन्दा प्रजननमार्फत प्राप्त एकल सेल विभाजित गरी ती सेलबाट नयाँ सेलको कोलोनी सिर्जना गर्ने र पुरानो कोलोनीलाई नयाँ ताजा कोलोनीले प्रतिस्थापन गर्ने रणनीति बनाइरहेका छन्। जसको मुख्य कारण हो प्रजननमार्फत तयार गरिएको नयाँ






संरचना, सम्भार मार्फत जोगाइएको पुरानो संरचना भन्दा अतुलनीय रूपमै धेरै लचिलो, बलियो र दीर्घजीवी बन्ने गर्छ ।

प्रजननमार्फत बनेका ताजा रूपमा स्टिम सेल विभाजनमार्फत बनेका सेलहरूबाट बनेका अंगहरू सफा स्लेटरूपी सेल निर्मित मात्र रहने छैनन् । ती स्लेटरूपी सेलहरूले थोरै फरक ताजा जिन बोकी लामो समयसम्म दिने सन्तोषजनक बायो-टेक्नोलोजिकल भूमिकाले मानिसलाई स्वस्थ र दीर्घजीवी बनाउने धेरै सम्भावना बोकेको छ।

प्रजननमार्फत बनेका नयाँ सेलहरू किन विभाजन मार्फत बनेका सेलका तुलनामा बढी लचिलो, बलियो र प्रभावकारी भूमिका दिन सक्ने हुन्छ भन्नेबारे विज्ञानको आफ्नै निचोड छ । जस अनुसार











जटिल संरचनागत कोलोनीमा रहेर काम गरेका सेलहरूले जीवका अंगहरूमा रहेर काम गर्ने क्रममा आफ्नो जीवनकालमा अर्बौं त्रुटि गर्ने र समस्या पैदा गर्न पुग्छन्। त्यस्ता त्रुटिले पैदा गर्ने समस्या जब देखिन्छन्, शरीरले तुरुन्तै आफ्नो आन्तरिक सेल्फ हिलिङ प्रक्रियाबाट समाधान पनि गर्ने गर्छन्। सेलका त्रुटिहरूका कारण उत्पन्न समस्या निकै छिटो आन्तरिक सेल्फ हिलिङ प्रक्रियाबाट समाधान गरिने निश्चित रहँदा रहँदै कतिपय अवस्थामा भने समाधान विनै शरीरको गतिविधि अगाडि बढिदिन्छ ।

उक्त अवस्थामा सेलले आफ्नो स्मरणका रूपमा त्रुटियुक्त सूचनाहरू शरीरको गतिविधि सुचारु रूपमा अगाडि बढाउन जरुरी सूचनाकै रूपमा संकलन गर्ने गर्छन् । कतिपय अवस्थामा स्मरणमा रजिस्टर्ड











रहेका त्रुटियुक्त सूचनाका कारण नियमित गतिविधि सञ्चालन रहेकै अवस्थामा समेत त्रुटिका सन्देश प्रवाह हुने र प्रणालीको प्रभावकारिताले नै सम्झौता गर्न पुग्ने अवस्था निम्ताइदिन्छ।

विभाजन मार्फत बनेका सेलहरूमा पुरानो बाट नयाँ सेलमा ती त्रुटियुक्त सन्देश सम्प्रेषण र प्रवाह गर्ने कोड समेत हस्तान्तरित हुन्छन् । प्रजनन मार्फत निर्माण हुने सेलहरूमा भने दुई भिन्न स्रोतका सेल मिसिने क्रममा त्रुटियुक्त कोड संवाहक सेलहरू पुनर्निर्माण वा नयाँ प्रतिस्थापन मार्फत हटाइने हुँदा विभाजन मार्फत बनेका सेलका तुलनामा बढी लचिलो, बलियो र प्रभावकारी बन्न पुग्छन् ।

वैज्ञानिकहरूले शारीरिक रूपमा मानिस किन बूढो हुन्छ र मृत्युको सँघारमा पुग्छ भन्ने प्रश्नमा मुख्य तय













दुई आधार दिने गरेको भेटिन्छ। पहिलोमा कालान्तरमा सञ्चय गरेको जैविक दोषहरूको कारण नियमित कार्यका कारण सेलहरू थकित र जीर्ण बन्दै जाने। असुरक्षित र अस्वस्थ खानपान, श्वास-प्रश्वास र जीवन पद्धतिले दिने असर । सांसारिक थर्मोडायनामिक अवरोध, आणविक र यूभी जस्ता विकिरणका प्रतिकूलता। ब्याक्टेरिया, भाइरस जस्ता जीवाणुको संक्रमण । विविध रोग र तिनका उपचार पद्धतिले सेलमा पु¥याउने क्षति आदिले बिस्तारै तर अनिवार्य रूपमा डीएनए, प्रोटिन, सेलको संरचना र न्युरोनहरूमा पु¥याउने नोक्सानी मानेको छ ।

दोस्रोमा भने प्राकृतिक रूपमै शरीर आफैं बूढो हुँदै जाने एजिङ प्रक्रिया भएको बताउँछ। जसरी एउटा







व्यस्त सहरहरू यातायात, कारखाना, पावर प्लान्ट र फोहोर हटाउने ट्रक आदिको भीडभाडले भरिएको हुन्छ, हाम्रो शरीरको प्रत्येक कोषभित्र विभिन्न प्रोटिनबाट बनेका पेप्टाइड, एमिनो एसिड, इन्जाइम आदिको भीड भाड रहन्छ। जसले खानाको मेटाबोलिज गर्न, मेटाबोलिजमा उत्पन्न हुने फोहोर बाहिर निकाल्न र डीएनएको मर्मतसम्भार गर्न सघाउँछ। प्रोटिन–प्रोटिन मिलेर बनेको दरिलो डोरी शरीरलाई जरुरी हुने पदार्थहरू एक ठाउँबाट अर्को ठाउँमा लाने कार्गो जस्तो काम गरिरहेका हुन्छन् । निरन्तर आफ्नो व्यवसायमा तल्लीन हुने यी मेसिन वरिपरि हजारौं पानीका अणु रहन्छन् । जससँग हरेक सेकेन्डमा एक ट्रिलियनभन्दा धेरै पटक यिनीहरू एक आपसमा ठोकिने गर्छन् ।











ठोकिने क्रममा अत्यन्त अराजक र भद्रगोल परिस्थिति बीच कोषिकाका प्रोटिनहरू पानीसँग पौठेजोरीमा उत्रन्छन् । ठोक्किँदा प्राप्त हुने ऊर्जाले कोषिकाहरूलाई नियन्त्रित रहेर काम गर्न जरुरी हुने शक्तिको पूर्ति गरिदिन्छ । शरीरमा कोषिकाहरूलाई जरुरी शक्तिको पूर्ति हुने क्रममा सेलले प्राप्त गर्ने पटक पटकको तनावको कारण लामो समयमा कोशिषका आफैं कमजोर भई थोत्रन जान्छ । फलः बुढ्यौली लाग्ने गर्छ । जसमा बुढ्यौली हुनुको कारण बाइलोजिकलभन्दा पनि भौतिक देखिन्छ ।

शरीरले तन्तुहरूमा मरेका वा जीर्ण बनेका, काम नलाग्ने सेल विभाजन मार्फत पुनर्निर्माण वा नयाँ प्रतिस्थापन गर्ने गर्छ । जन्म जात बाइलोजिकल संवेदनाको हिसाबमा उक्त सेलमा सीमित







विभाजनको क्षमता निर्धारित हुनुको विकल्प रहँदैन। जसले गर्दा हाम्रो शरीरभित्र काल्पनिक मास्टर घडी जडित हुन पुग्छ । सीमित क्षमताका कारण हरेक सेलको सक्रिय जीवनको घण्टा गणना भइदिने गर्छ ।

निकै विवादास्पद बनेको एक मान्यतामा डीएनएमा टेलोमरस नामकरण दिइएको एक टुक्रा रहने गर्छ। प्रत्येक चोटि जब सेल विभाजित हुन्छ, उक्त टेलोमरस निश्चित नापमा छोटो हुँदै जान्छ। यसरी यसले आयु मापन गर्ने मास्टर घडीको काम गर्ने गर्छ। जति जति टेलोमरस छोटो हुँदै जान्छ उति बुढेसकालले च्याप्दै लान्छ।

३० वर्षको उमेर काटेपछि प्रत्येक सात वर्षमा मृत्युको जोखिम दोब्बर हुने ठानिने मानिसको






प्राकृतिक मृत्युवरणको मूल कारणमा नियमित एजिङ प्रक्रिया, कालान्तरमा सञ्चय गरेको जैविक दोषहरू, थर्मल तनावले कोषिकामा पु¥याउने क्षति, माइटोकन्ड्रियामा हुने मेटाबोलिजम गडबडीमा पैदा हुने रेडिकलबाट निम्तिने जोखिम, रेडिएसन आदिबाट डीएनएमा पुग्ने नोक्सानी आदिको पृष्ठभूमि पनि धेरै हदसम्म जिम्मेदार रहेको ठान्छ विज्ञान।

हुन त मृत्युको कारण पहिचान गर्दैमा मृत्यु के हो भन्ने प्रश्नको सहज उत्तर मिल्दैन। यसका लागि एउटा कोषिका विभक्त भएर दुई कोषिका बन्ने क्रममा विभाजन हुने क्रममा न त एकल कोष मरेको न त बन्दै गरेका दुई सेलहरूले नयाँ जीवनको नै सुरुवात गरेको हुन्छ भन्ने विन्दुमा फर्कन पर्ने हुन्छ।

बहु–सेलुलर जीवहरूमा समागम हुँदा जर्म सेलबाट बनेको वीर्य र डिम्बको मिलन बाट जाइगोट बन्छ। उक्त जाइगोट नै कालान्तरमा इम्ब्रियो र सालनालका रूपमा विकास हुने गर्छ। इम्ब्रियोका सेलहरू शरीरको सबै प्रकारका सेल बनाउन सक्ने क्षमता राख्छन्। प्रजननमा संलग्न हुने डिम्ब र शुक्राणुको कोषिकाहरू बन्ने सेलहरू लाई जर्म सेल भनिन्छ ।

आफ्ना दुवै अभिभावक बाट प्राप्त जोडी क्रोमोजोम रहेको कोषिकाहरू जसबाट डिम्ब र शुक्राणुको कोषिकाहरू बन्दैन त्यसलाई सोमेटिक सेल भनिन्छ। सोमेटिक सेलबाट शरीरका अंगहरू जस्तै: छाला, हड्डी, रगत, मुटु आदि बन्ने गर्छ। सोमेटिक सेलबाट मानव शरीरमा सबै भन्दा पहिले बन्ने अंग





मुटु हो। माइटोसिस मार्फत असीमित रूपमा विभाजन हुन सक्ने कोषिकाहरू लाई स्टिम सेल भनिन्छ । स्टिम सेलले शरीरका विभिन्न अंग जस्तै मांसपेशी कोष, रक्तकोष वा न्युरल आदि सेलको नवीकरण तथा परिवर्तन गर्न सक्छ ।

पोषण युक्त खाना, हावा, पानी र स्वस्थ जीवन शैली मानिसका अनिवार्य आवश्यकता रहन्छन्। इम्ब्रियोका सेलहरू रसिला फलफूल, ताजा तरकारी, नपिनेको गेडागुडी, डेरी प्रडक्ट, मुङ दाल, बदाम, ओखर, छोकडा, फिग, किसमिस, कुरिलो, ब्रोकाउली, चामल, घिउ, ज्वानो, जिरा, कालो जिरा, बेसार, धानियाँ, उरद दाल, सोंफ, दालचिनी, सुकुमेल जस्ता मसला आदिको सेवनबाट बढ्ने गरेको भेटिन्छ । त्यस्तै कुरिलो,







काउसोको गेडा, अश्वगन्धा, ढुंग्री फूल आदिको सेवनबाट इम्ब्रियोका सेलहरूमा तन्दुरुस्ती थपिएको भेटिन्छ ।

बिरुवाले वातावरणबाट कार्बनडाइअक्साइड र जमिनबाट पानी लिएर क्लोरोफिलमा प्रकाशको किरणबाट पर्याप्त शक्ति पाएर बनाउने ग्लुकोजबाट मानिसको शरीरले इम्ब्रियो सेल बनाउने क्षमता प्राप्त गर्छ । वायुमण्डलीय कार्बन-डाइ-अक्साइडका अलावा जमिनबाट प्राप्त पानी, मल र अन्य पदार्थसमेतको उपयोगमा फोटोसेन्थेसिस प्रक्रियामा तीन टन कार्बनडाइअक्साइडबाट २.१ टन ताजा अक्सिजन वातावरणलाई फिर्ता गर्ने गर्छ ।

सूर्यको सेतो प्रकाश हामीले देखिने सात रङ मिलेर बनेको हुन्छ । बिरुवाको पातमा रहने













क्लोरोफिलको मलिकुलले सात रङमध्ये निलो र रातो लाइट सोसी इनर्जीका लागि चाहिने खाना बनाउने गर्छ । त्यस्तै कतिपय बिरुवाको फलमा हुने केरेटिनोइड पिगमेन्ट (जस्तै गोलभैँडाको लाइकोपिन, मकैको जियोजेन्थिन, सुन्तलाको फलको बोक्राको बिटाकेरोटिन आदि) ले सूर्यको किरणबाट भोइलेट (बैजनी) र निलो–हरियो लाइट लिएर आफूलाई आकर्षक रूपमा परिवर्तन गर्छन् ता कि किरा आदि आकर्षित हुन् । फल खाउन र बिउ अन्यत्र पुगोस् र आफ्नो वंश विस्तार कायम रहोस् ।

फोटोसिन्थेटिक प्रक्रियाका लागि औसत आठ वोटा (निलो र रातो) फोटोन लाइटको जरुरी हुने मानिन्छ । आठ फोटोन प्रकाशको किरण भनेको लगभग ३८१ किलो क्यालोरी हुन आउँछ । एउटा









कार्बन-डाइ-अक्साइडलाई ग्लुकोजमा परिवर्तन गर्न मात्र ११४ किलो क्यालोरी जरुरी पर्छ । सूर्यबाट क्लोरोफिलले प्राप्त गर्ने इनर्जीबाट वनस्पतिको शक्तिको जरुरत पर्छ। तिनै वनस्पतिबाट प्राप्त हुने खानाबाट क्लोरोफिलबाट शक्ति सञ्चय गर्न नसक्ने जीवहरूका लागि जरुरी शक्तिको पूर्ति हुने गर्छ।

विज्ञानका अनुसार सैद्धान्तिक रूपमा मात्र ३० प्रतिशत इनर्जी बिरुवा र जीवका लागि प्रयोग हुने शक्ति बर्धक खानामा परिवर्तन भएको देखिन्छ। जुन प्रयोगशालामा उच्चतम मात्र २५ प्रतिशत मात्र सदुपयोग भएको पाइएको छ । यसरी प्राप्त शक्ति पनि बिरुवाको श्वास प्रश्वास र दैनिक गतिविधि सञ्चालनमा जरुरी हुने हुँदा सूर्यबाट प्राप्त प्रकाशको शक्तिको औसत १ प्रतिशत मात्र बायोमास अथवा









शरीरको भाग बन्न प्रयोग हुने गरेको पाइन्छ ।

सूर्यको किरणबाट लिएकोमध्ये मात्र ३० प्रतिशत इनर्जी कहाँ जान्छ भन्ने यकिन भएको दाबी गर्ने विज्ञानले विज्ञानले बाँकी लगभग ७० प्रतिशत इनर्जी कहाँ खपत भइरहेको छ भनी तथ्यगत व्याख्या गर्न सकिरहेको भेटिन्न। वायुमण्डलीय कार्बनडाइ - अक्साइडका मुख्य प्राकृतिक स्रोतहरू भने ज्वालामुखी फुट्दा निस्कने ग्यास, प्राकृतिक इन्धन, जैविक प्राणी तथा वनजन्य पदार्थ जल्नु, सडनु र जीवहरूको नियमित श्वासप्रश्वास प्रक्रिया आदि रहेको छ ।

एकल सेलीय जन्तु र बहुसेलीय जन्तु सबैको शरीर लगभग उस्तै प्रकृतिका सेलबाट नै बनेको हुन्छ । फरक भनेको मात्र तिनीहरूको शरीरमा रहेको










बनावटमा जटिलता हो। एकल सेलीय जन्तुहरू जबसम्म वातावरण अनुकूल रहन्छ र प्रशस्त खाना उपलब्ध हुन्छ तब सम्म बाँचिरहन्छन्। विभाजनबाट आफ्नो संख्या वृद्धि गरि रहन्छन्। तिनीहरूमा न त समय क्रम अनुसार सेल थोत्रने प्रक्रिया नै लागू भएको देखिन्छ न मृत्यु नै आउँछ।

जब वातावरण थोरै दूषित बन्छ, तिनीहरूको सेलुलर गतिविधिमा अवरोध आउँछ। निकै विषाक्त अवस्थामा वा खानाको अभावमा तिनीहरूको मर्ने क्रम सुरु हुन्छ । जब वातावरणमा रहेको विषाक्त हटाइन्छ र उनीहरूको सेलमा रहेको विष पूर्ण सफा हुन्छ, उचित खानपान पश्चात् ती सेलहरू पूर्ण रूपमै पुनर्ताजगी र पुनर्जीवित हुने र पहिले जस्तै निरन्तर सम्म विभाजन मार्फत संख्या वृद्धि गर्ने क्षमता प्राप्त













गर्छन्। बहुसेलीय जन्तुमा हामी तिनीहरूको कोषिका कोषिकाको स्तरमा पुगेर तिनीहरूको अंग र तन्तुहरू त्यसमा पनि मुख्य रूपमा स्नायु प्रणालीसँग सम्बन्धित भागहरू पुनर्ताजगी हुने गरी पुनर्जीवित र प्रतिस्थापन गर्न सक्दैनौँ ।

प्रोटिनको निकै ठूलो महत्व रहने जीवको सेलको स्तरमा पुगेर अनुसन्धान गर्दा जीवित प्रोटिनमा सायन ग्रुप रहेको देखिन्छ भने मृत प्रोटिनमा सक्रिय सायन ग्रुप मृत एमिनो ग्रुपको रेडिकलमा परिवर्तन भएको भेटिन्छ। विज्ञानको अनुमानमा अत्यन्त अस्थिर र नाजुक रहने प्रोटिनको सायन ग्रुप शरीरमा हुने नियमित मेटाबोलिजम जस्ता गतिविधिमा युरिया जस्ता नाइट्रोजन हुने र नाइट्रोजन नहुने उप–उत्पादनमा टुक्रिने क्रममा उक्त सेलहरूलाई थोत्राएर











कालान्तरमा जीर्ण बनाउने भूमिका खेल्छ । जुन मानिस वृद्ध हुनुको मुख्य कारण ठानिन्छ ।

विज्ञानको हालसम्मको बुझाइमा जब शरीरका प्रोटिनमा रहेको सायन ग्रुप एमिनो ग्रुपको रेडिकलमा परिवर्तित बनिदिन्छ, उक्त प्रोटिन मर्छ । मरेको प्रोटिनका कारण सेल मर्न जान्छ । जब शरीरका सबै सेलका जीवित पदार्थ मर्छ तब उक्त प्राणी मरेको मानिन्छ। प्रोटिनको जीवित र सक्रिय भाग मानिने सायन ग्रुप अत्यन्त अस्थिर र नाजुक प्रकृतिको बायोजिन मानिन्छ। बायोकेमेस्ट्रीमा बायोजिन भनेको एक काल्पनिक प्रोटिन हो जसले शरीरका कोषिका र अंगहरूले एकापसमा मिलेर जीवित रहँदा गर्नुपर्ने कार्य गर्न चाहिने आधार बनाउँछ।













एउटा काल्पनिक प्रोटिन जसको एमिनो ग्रुपको रेडिकलमा परिवर्तनले सेलको कोलोइडल अवस्था भत्कन्छ । सेलको झिल्लीले डिफुजन र अस्मोसिस जस्ता प्रक्रियाबाट छानी छानी बोसो पोषण जस्ता पदार्थ सेल बाहिरबाट भित्र लिने खुबी गुमाउँछ । झिल्लीबाट पानीमा घुल्ने सबै पदार्थभित्र बाहिर गर्न सक्ने अवस्थामा आउँछ । सेलको झिल्लीमै छिद्र पर्ने गर्छ । अन्ततः विविध आन्तरिक केमिकल र भौतिक परिवर्तन द्वारा जम्न पुग्छ।

वैज्ञानिक परीक्षणबाट प्राप्त नतिजा अनुसार एक जीवित सेल मर्ने क्रममा वैज्ञानिक सिद्धान्तले बताउनेभन्दा अत्यधिक शक्ति निस्किरहेको भेटिन्छ। जस्तै: एक ग्राम इस्ट सेल मर्दा एक ग्राम सुक्खा इस्ट सेलले दिनुपर्ने जति क्यालोरी









निस्कनुपर्नेमा दुई ग्राम सुक्खा इस्ट सेलले दिने जति क्यालोरी निस्कने गर्छ। रगतको हेमोग्लोबिनको आणविक तौल कम्तीमा १६ हजार ७०० हुन्छ। एउटा अस्थिर जीवित प्रोटिन मर्ने क्रममा भत्कँदा ४० किलो क्यालोरी शक्ति निस्किएको भेटिन्छ। जब कि हाल सम्मकै अत्यन्त अस्थिर र विस्फोटक मानिने एक आणविक तौलको नाइट्रोजन क्लोराईड विस्फोट हुँदा मात्र ३८ किलो क्यालोरी शक्ति निस्कन्छ। एक जीवित अस्थिर प्रोटिन मर्दा आउने यति ठूलो शक्तिको स्रोत के हो भन्ने उत्तर विज्ञानले भेटाइरहेको छैन।

पदार्थको केमिकल म्याटर अस्थिर रहेर हुने विस्फोटको नतिजा कि त चर्को आवाज कि ताप शक्ति कि निकै चम्किलो प्रकाश वा तिनीहरूको









मिश्रण हुने गर्छ। जीवित अस्थिर प्रोटिन मर्दा आउने शक्ति भने आन्तरिक रूपमा प्रोटिन तथा चिल्लो पदार्थको एसिड, बेस, साल्ट, हेबी मेटल सँग केमिकल परिवर्तनमा खर्च हुने हुदा जीवित सेल मर्ने क्रममा सम्पूर्ण शरीरले नै निकै छिटो देहावसानको बाटो समात्ने बुझाइ छ विज्ञानको।

हाम्रो शरीरमा लगभग ३७.२ खर्ब (ट्रिलियन) कोषिका हुने भए तापनि लगभग एक सय खर्व बाहिरी माइक्रोबियल कोषिकालाई समेत बोकिरहेको हुन्छन्। हाम्रो पाचन नली (आमाशय, आन्द्रा र गुदद्वार) मा लगभग ०.९ देखि २.३ किलोग्राम (करिब २ देखि ५ पाउन्ड) ब्याक्टेरियाको घर हो। तिनीहरू हाम्रो पाचन नलीमा बस्ने मात्र हैन, हाम्रो प्रतिरक्षा प्रणालीलाई के गर्ने के नगर्ने




भनी सल्लाह दिइरहेका हुन्छ। मानव कोषहरूका साथै शरीरमा धेरै संख्यामा सूक्ष्म जीवहरू पनि हुन्छन्। विशेष गरी आन्द्रामा रहेका ब्याक्टेरियाहरू मानव कोषहरूको संख्या भन्दा लगभग १० गुणा बढी हुन्छन्।

हाम्रा शरीरका सूक्ष्म जीवहरूले आवश्यकता अनुसार प्रतिरक्षा प्रतिक्रिया बढाउन वा घटाउन सेतो रगतको सेल (टी–सेल) हरूलाई परिचालन गर्छन् । यसरी हाम्रो प्रतिरक्षा प्रणालीले फाइदा हुने ब्याक्टेरियाको सहयोगमा आफूलाई उत्पादन मूलक वातावरण बनाउँछ ।

फ्री ¥याडिकल केमेस्ट्री बारे हालसालैको नयाँ तथ्य र ज्ञानका कारण आज खाद्य वैज्ञानिकहरू लाई स्वास्थ्य र रोग व्यवस्थापनमा समेत पूर्ण ध्यान





पु¥याएर स्वस्थ र पोषणयुक्त खानपान प्रस्ताव गर्न सम्भव बनाएको छ ।

मानिस जीवित रहनका लागि नभई नहुने अक्सिजनले मेटाबोलिक प्रोसेस बाट शक्ति पैदा गर्छ । कतिपय अवस्थामा मेटाबोलिक प्रोसेस बाट र धेरै जसो हाम्रो शरीर एक्स–रे, चुरोट गाँजाको धुवाँ, प्रदूषित हावा, औद्योगिक केमिकल लगायतका प्रतिकूल वातावरणको लगातार संसर्गमा आउँदा इन्जाएमेटिक र ननइन्जाएमेटिक गतिविधिमा हुने अक्सिजन र प्रोटिनमा हुने नाइट्रोजनको अर्बिटको इलेक्ट्रोनलाई ¥याडिकलाइज गरी रियाक्टिभ बनाइदिन्छ ।

¥याडिकलाइज आयोनलाई तुरुन्तै नियन्त्रण नहुँदा यसले फ्याट, न्युक्लिक एसिड, प्रोटिन आदिलाई







लक्ष्य गरी सेललाई बिगारिदिन्छ। यसलाई अक्सिडेटिभ स्ट्रेस भनिन्छ।

शरीरमा क्यान्सर लगायतका रोग तिनै अक्सिडेटिभ स्ट्रेसका कारण भित्रिन्छ। लगातारको रेडिएसन, प्रदूषण, चिन्ता र कुपोषण आदिका कारण हुने अक्सिडेटिभ स्ट्रेसबाट नै मानिसमा बुढ्यौली, छाला रोग, मधुमेह, हृदयाघात, क्यान्सर लगायत अन्य जटिल रोग पैदा हुन्छ।

शरीरमा फ्री ¥याडिकल पैदा हुँदाका बखत त्यसलाई आक्रमण गरी तुरुन्तै न्युट्रालाइज गर्न सक्ने क्षमता विकास गर्न सहयोगी हुने तत्व मानिसले प्रायः खानाबाट पूर्ति गर्नु जरुरी हुन्छ । जसलाई एन्टिअक्सिडेन्ट भनिन्छ । अक्सिडेटिभ स्ट्रेस धेरै हुँदा मानिस छिट्टै बूढो समेत देखिने हुँदा













एन्टिअक्सिडेन्ट युक्त खानालाई एन्टिएजिङ खाना र पेयलाई एन्टि एजिङ पेय अथवा अमृत भनिएको हो।

पार्टिकल फिजिक्सले सुझाए अनुसार हाम्रो शरीरका सेलहरू एटमले बनेको हुन्छ। जुन इलेक्ट्रोन, प्रोटोन र न्युट्रोनले बनेको भनिए तापनि इलेक्ट्रोनको लोकेसनले देखिएको एटम भनेको यसको एक लाख गुणा सानो प्रोटोन र न्युट्रोन हुने न्युक्लियस हो । जुन ग्लुवोनको तागतले अठ्याएर राखेको तीन वटा क्वार्कबाट बनेको प्रोटोन र न्युट्रोनबाट बनेको हुन्छ।

यसरी वास्तवमा हाम्रो शरीरमा ९९.९९९९९९९ प्रतिशत खाली भाग हुन्छ ।





शरीरका लगभग ९९ प्रतिशत एटमहरू हाइड्रोजन, कार्बोन, नाइट्रोजन र अक्सिजनका एटमले बनेका हुन्छन्। हामीले खाने खाना, पेय पदार्थ र श्वासमा समेत पोटासियम–४० र कार्बन–१४ जस्ता रेडियोन्युक्लाइडस हुन्छ। जुन शरीरका मलिकुलसँग मिल्छ र विखण्डन भई रेडिएसन निकाल्छ । जस्तै पोटासियम–४० विखण्डन हुँदा यसले इलेक्ट्रोनको एन्टिमेटर्स 'पोजिट्रोन' बनाउँछ र एटमको इलेक्ट्रोनसँग जबरजस्त ठोक्किन गई गामा–रेको फर्ममा रेडिएसन निकाल्छ । यसरी हाम्रो शरीरले आन्तरिक रूपमा रेडिएसन निकाल्छ।

सामान्य रेडिएसन हामी बस्ने घर, हामीले खाने खाना र पृथ्वीले साथै हाम्रो शरीरले पनि निकाल्ने गर्छ । बाहिरी संसारबाट प्राप्त हुने कस्मिक रे हाम्रो





शरीरसम्म लगातार पुगी एटमको न्युक्लियस सँग ठोक्किन गई मेसन्स (Mesons) बनाउँछ । जुन धेरै जसो खण्डित भएर मुवोन (Muons) र न्युट्रिनोज (Neutrinos) बन्छ। अन्ततः पृथ्वीतिर पुग्छ । कहिलेकाहीँ यिनीहरूले म्युटेसन (Mutation) पनि गराउँछन्। सूर्यबाट प्राप्त हुने फोटोन आदिले हामीलाई हाम्रो वरिपरि देख्न सहयोग गर्छ । यसमा हुने न्युट्रिनोज हाम्रो शरीर हुँदै पृथ्वीमै पुग्छ । शरीरमा यति धेरै रेडिएसन लगातार पुगिरहेको अवस्थामा पनि हामीलाई जोखिम युक्त रूपमा खासै असर नहुनुमा हाम्रो शरीरको धेरैभन्दा धेरै भाग खाली वा 'डार्क स्पेस' भएर नै हो ।

पार्टिकल फिजिक्सको निष्कर्षमा प्रत्येक

जीवजन्तुको मूर्त शरीर इनर्जीको सिस्टमेटिक संयोजनबाट बनेको कुनै फिजिकल अब्जेक्ट मात्र हो। जसलाई सञ्चालनार्थ सूक्ष्म इनर्जीको जरुरत हुन्छ।

विज्ञानकै अनुसार निर्जीव र सजीव वस्तुमा रहेको फिजिकल अब्जेक्टको सञ्चालनार्थ निश्चित शक्तिको जरुरत हुन्छ। विज्ञान नै भन्छ, ‘सजीव फिजिकल अब्जेक्ट बन्ने क्रममा यकिन गर्न नसकिएको प्रक्रियाले त्यहाँ जरुरी हुनेभन्दा निकै धेरै शक्ति लिइरहेको पाइन्छ।’ विज्ञान यो पनि बताउँछ कि जीवित फिजिकल अब्जेक्ट बलपूर्वक नष्ट गर्दा त्यही नै अब्जेक्ट निर्जीव फिजिकल अब्जेक्ट रहँदा भन्दा बुझ्न नसकिएको प्रक्रियाबाट आश्चर्यजनक रूपमै निकै धेरै शक्ति पैदा गरिदिन्छ ।









धेरै सूक्ष्म रूपमा हेर्दा शरीरमा सन्तान वृद्धिको क्षमता राख्ने वीर्य र डिम्ब बन्दै गर्दा सूर्यको किरण मार्फत प्राप्त हुने अभौतिक पदार्थ (आत्मा) शक्ति, वीर्यको डिम्बमा संयोजन भई बनेको गर्भलाई जीवन्त राख्न जरुरी जीवन्त शक्ति (कन्सियसनेस) पूर्ति गर्न विज्ञानले हुनुपर्ने भनी अनुमान गरेको भन्दा निकै धेरै शक्ति खपत भएको अनुमान लगाउन सकिन्छ। जीवको भौतिक पदार्थ निर्मित स्थूल शरीर नमर्दा सम्मको बिन्दुसम्म मात्र जीवनलाई जीवन्त राख्ने आत्मा शक्ति र कन्सियसनेस भौतिक शरीरमा जोडिइरहने हुँदा मृत्युको बिन्दुमा पुनः त्यही नै अब्जेक्टले आफू निर्जीव फिजिकल अब्जेक्ट रहँदाभन्दा निकै धेरै शक्ति निकाल्ने गरेको हुनु पर्छ ।







मृत्यु प्रक्रियामा आत्मा शक्ति र कन्सियसनेस ब्रह्माण्डमा नै फर्कने गर्छ । मानव शरीरका प्रत्येक कोषिका डीएनए आदिबाट बने पनि ती सबै सूक्ष्म रूपमा हेर्दा बिलियन्स एटम बाटै निर्मित हुन्। प्रत्येक एटम क्वार्ज, ग्लुवोन लगायतका विभिन्न अति सूक्ष्म पार्टिकलले बनेका, प्रोटोन र न्युट्रोनबाट बनेका हुन्छन्। इलेक्ट्रोन र क्वार्ज, ग्लुवोन लगायतका सूक्ष्म पार्टिकल निकै स-सानो इनर्जीका संयोजनले बनेका विन्दु हुन्। यस्ता विन्दुहरू जसले हाम्रो शरीरभित्र इन्फर्मेसनको जालोको संयन्त्र बनाउँछन् ।

मरेको र जीवित कोषिकामा रहने फरक भनेको जीवित कोषिकामा ती ससाना इनर्जीका विन्दुहरूलाई एक अनौठो प्रक्रियाबाट निश्चित











हार्मोनीमा सञ्चालन गर्ने इनर्जीको उपस्थिति रहन्छ। यसलाई आयुर्वेदमा जीवन्त शक्ति (वायु वा प्राण वा लाइट) भनिन्छ । क्वान्टम फिजिक्सले यसलाई इन्फर्मेसन भन्ने गरेको छ। जीवन्त शक्ति गुमेपछि कोषिकाको जीवन अन्त्य हुन्छ । मानिस र जनावर जस्ता बहुकोषमय जीवहरूमा पुरुषको वीर्य, महिलाको डिम्ब बन्ने, गर्भाशयमा दुवै मिल्न पुग्दा प्रकृतिको आज सम्मकै उत्कृष्ट तर निकै जटिल जीवन अस्तित्व आउने र त्यो विकसित भई उन्नत जीवन सञ्चालनको प्रक्रियामा निकै धेरै जटिलता रहने हुँदा मृत्यु निकै छिटो आउने गर्छ। एकल कोष जीवहरू सामान्य मात्र जटिलतामा रहेकाले प्रतिकूल वातावरण वा खानाको अभाव बाहेक अन्य कारणले त्यति छिटो जन्मने र मरि हाल्ने गर्दैनन्।









क्वान्टम बडी मेकानिक्सका अनुसार प्राणीको शरीरको प्रत्येक कोषिका एउटा छुट्टै अस्तित्वको जीवन हो । साबुनका फोकाजस्ता लाग्ने यस्ता खर्बौं सूक्ष्म जीवको सग्लो रूप नै प्राणीको शरीर हो। शरीरका प्रत्येक सेलको अर्को सेलसँग भौतिक रूपमा जोडिएर सूचना र मेमोरी आदान प्रदान हुने संयत्र एवं न्युरोनको नेटवर्क बनाएको हुन्छ। न्युरोनले शरीरभित्र आपसमा जोडिएर रहेका जीवित पदार्थ बीच सूचनाको आदान प्रदान गर्ने गर्छ।

शरीरसँग कुनै पनि रूपमा नजोडिएको सोचाइ, विचार, इमोसन, शारीरिक प्रतिक्रिया, डार्क म्याटर्स आदि निर्जीव तत्व (जसलाई न पदार्थ भन्न सकिन्छ न त शक्ति नै) लाई शरीरमा जोडी निर्जीवलाई सजीव सँग जोडी जीवन्त गर्ने काम इन्फर्मेसन वेब









(संयत्र) ले गर्छ। इन्फर्मेसन वेबले इलेक्ट्रोम्याग्नेटिक संसर्गको प्रक्रिया बाट न्युरोन आदिलाई सञ्चालित गरी मानिसलाई जीवन्त राख्ने काम समेत गर्छ । यसलाई बोली चालीको भाषामा इन्टेलिजेन्स वा जैविक चेतना पनि भन्ने गरिन्छ।

सरलीकृत भाषामा भन्दा संसार दुई प्रकृतिका चिज 'परा र अपरा'को संयोगबाट बनेको छ। परा भनेको जैविक चेतना हो । जुन प्राणी र वनस्पति दुवैमा हुन्छ। अपरामा पाँच स्थूल तत्व पृथ्वी, जल, आकाश, तेज र वायु तथा तीन सूक्ष्म तत्व मन, बुद्धि र अहंकार पर्छन्। स्थूल शरीर भनेको भौतिक शरीर हो जुन अपरा प्रकृतिको पृथ्वी, जल, आकाश, तेज र वायुबाट बनेको छ। हामीमा रहेको चेतनाको कारण नै हामीले पदार्थलाई देख्न वा महसुस गर्न








सक्छौँ । जुन चिजमा ईश्वरीय तत्व (आत्मा) तथा चेतना (कन्सियसनेस) छ, त्यो परा अर्थात् मेटाफिजिकल हो। परा भन्नाले वास्तवमा आत्मालाई नै भनिएको हो ।

आदिम कालमै वेदमा लेखिए अनुसार प्राणी जीव र पदार्थको संयोजन विना अलग अस्तित्वमा रहन सक्दैनन् । पदार्थसँग ईश्वरीय तत्व (आत्मा) तथा चेतना (कन्सियसनेस) मिले पछि प्राणी जीवित रहन्छ। जब खानाको कुरा आउँछ, हामी ‘दिमाग समेतको’ हाम्रो मूर्त शरीर स्वस्थ राख्ने विधि बारे कुरा गर्छौं । हाम्रो मूर्त शरीरलाई सञ्चालन गर्ने ‘दिमागको सञ्चालकको’ स्वस्थको कुरामा भने अध्यात्मको सन्दर्भ जोडिन्छ ।

मानव शरीरको इन्टेलिजेन्स वास्तविक शरीरको









न्युरोन आदि म्याटर्स भन्दा धेरै महत्वपूर्ण हुने गर्छ। किनकि इन्टेलिजेन्सले म्याटर्सलाई निश्चित हार्मोनीमा सञ्चालन गर्छ । जब उक्त हार्मोनी टुट्छ, ईश्वरीय तत्व (आत्मा) तथा चेतना (कन्सियसनेस) ब्रह्माण्डमा नै फर्कन्छ र मानिसको इहलीला समाप्त हुन्छ।

## मृत्यु पछाडिको यात्रा

(Unpoven Hypothesis): सबै संस्कृतिका आफ्नै विश्वास र परम्परा हुन्छ। हाम्रो पनि छ। ओमकारमा विश्वास गर्ने सनातन धर्ममा आस्था राख्ने हिन्दुहरूको मान्यतामा मृत्यु वास्तवमै एक चाख लाग्दो प्रक्रिया हो । कुनै पनि मानिसको मृत्यु हुनु






भन्दा झन्डै चारदेखि पाँच घण्टा अघि उसको शरीर मुनि रहने पृथ्वीका सम्पूर्ण चक्र मानिसको शरीर सँग विच्छेद हुने गर्छ। जुन मानिसको जीवन्त शक्ति र पृथ्वी बीचको आधिकारिक सम्बन्ध विच्छेद ठानिन्छ। मर्नु भन्दा केही घण्टा अघिबाट मानिसका खुट्टा चिसो हुन थाल्छ। प्रस्थान गर्ने निर्धारित समय पुग्दा यम नामका मृत्युका देवता देखा पर्छन्। आत्मालाई आत्माले तय गरेको दिशामा उसको स्मृति सहित लैजान मद्दत गर्छन्।

शरीर भन्दा बाहिरको अनुभवलाई राम्ररी बुझ्न चेतना र प्राण वा आत्माको अस्तित्व बारे बुझ्न जरुरी हुन्छ। शरीर जीवित रहन अनिवार्य हुने चेतना र प्राण वा आत्मालाई हामी 'सूक्ष्म शरीर' मान्छौँ । सूक्ष्म शरीर भौतिक शरीर भन्दा भिन्न रहन्छ । जब











सूक्ष्म शरीरले भौतिक शरीरबाट अलग हुने सौभाग्य प्राप्त गर्छ तब त्यो ब्रह्माण्डको यात्रामा निस्कन सक्षम बन्छ। सूक्ष्म शरीर भौतिक शरीरबाट निस्किएर शरीर बाहिर ब्रह्माण्डको यात्रामा निस्कने प्रक्रियाको सुरुवातको निर्णायक विन्दुलाई हामी मृत्यु भन्छौँ ।

यदि आत्मा कुनै भावनात्मक कारण (चेतनाको जालो) बाट शारीरिक जीवन सँग जोडिएको कारणले चुडिन नसकिरहेको अवस्थामा आत्मा शरीर सजिलै छुट्टिन सक्दैन। शरीरको चक्र र पृथ्वीको चक्र बीचको सम्बन्ध विच्छेद बनिसकेको अवस्थामा शरीरको वृत्ति विकास रोकिएकाले भत्कने र जीर्ण हुने अन्तिम विन्दु समेत पार गरि सकेकाले आत्मा त्यहाँ रहन सक्ने सबै अवसरको ढोका बन्द भइसकेको हुन्छ। शरीर सँग जोल्टिएर









रहेको चेतना वा कन्सससनेस आत्मा सँग समेत जोल्टिएर रहेकाले जब आत्मा शरीर छाडेर बाहिर निस्कने खोज्छ, चेतना द्वारा विकसित शरीर र आत्मा बीचको एट्याचमेन्टको पातलो डोरीले शरीरसँग बाधिएका कारण आत्मा शरीरबाट चुँडिएर बाहिर जान सकिरहेको हुँदैन।

चेतन शक्तिको एकातर्फको आजीवन मरिसकेको शरीरमा आत्मालाई राख्न चाहने क्रिया र आत्मा शरीर बाहिर निस्कन खोज्ने अर्को तर्फको प्रतिक्रिया बीचको द्वन्द्व विकसित हुन्छ। यो द्वन्द्व तबसम्म चलिरहन्छ जबसम्म आत्मा र शरीरबीचको एट्याचमेन्टको सूक्ष्म डोरी छिन्दैन । मानिसको भर्खरै मृत्यु भएको बखत एट्याचमेन्टका कारण शरीरसँग छुट्टिन नसकेको तर पृथ्वीको चक्र सँगको









सम्बन्ध विच्छेदका कारण शरीर बाहिर तानिने क्रमको नियति भोगेको आत्माको तनावयुक्त गतिशीलताका कारण मृत्युको विन्दु पछाडिको समयमा समेत मृतकको अनुहार, हात, खुट्टा सूक्ष्म वा हल्का चालका रूपमा चलिरहेको देख्न सकिन्छ।

यस अवस्थामा कन्सससनेस र आत्मा दुवै अस्तित्वमा रहेकाले त्यहाँ भएका र बोलिएका सबै आवाज र सबै व्यक्तिका विचार समेत आत्माले सुनिरहेको हुन्छ। आत्मा आफू एट्याच रहेका आफ्ना सबै प्रियजनसँग कुरा गरिरहेको हुन्छ । उसले भनिरहेको हुन्छ, 'हेर कम्तीमा तिमी त भ्रममा नपर, म मरेको छैन।' आत्माका ती भनाइहरू त्यहाँ रहेका उसका आफन्तले बुझ्ने लवजमा परिवर्तन गरिदिने उसको शरीरका इन्द्रिय काम नगर्ने इन्जिनमा परिवर्तन










भइसकेकाले प्रशोधन गरी उनीहरूले बुझ्ने भाषामा परिवर्तन हुने प्रक्रिया नै पूरा हुन सक्दैन । जसले गर्दा जीवित रहेका आत्माका आफन्तले मात्र हैन, कसैले पनि आत्माका ती अनुभूति सुन्न र महसुस गर्न सक्ने अवस्था रहँदैन ।

आफूले अनुभूति गरेका कुराहरू आफूले विश्वास गरेका आफन्तले समेत नसुनिरहेको, नबुझिरहेको तर आफ्नो मृत्यु भएकामा अत्यन्त चिन्तित देखिने क्रम जब दोहरिन थाल्छ, आफ्ना कुरा पटक पटक पुनः एकपछि अर्को कसैले सुनिरहेको हुँदैनन्, उसका भनाइमा ध्यान दिएको देखिँदैन, त्यस पछि बिस्तारै उसलाई आफू वास्तवमै मरिसकेको रहेछु भन्ने आत्मबोध हुन थाल्छ । जब आत्मालाई आफू मरेको आत्मबोध हुन्छ, आफू पुनः आफ्नो त्यही





॥ श्री गणेशाय नमः ॥







शरीरमा फर्कन सम्भव छैन भन्ने निश्चय हुन्छ तब आत्मा शरीरमा टाँसिन छोड्छ। आफ्नो शरीर, आफ्नो प्रिय वस्तु र आफन्त सँगको एट्याचमेन्टका कारण उक्त शरीरबाट लगभग १२ फिट वा छतको उचाइमा तैरिएर बस्छ। आफ्नो शरीरको केही दूरीमाथि तैरिएर शरीर वरिपरि भइरहेको सबै कुराको अनुभूति आत्माले निरन्तर लिइरहेको हुन्छ।

आफूले आफ्नो मुड शरीर त्यागि सकेको पूर्ण अनुभूति लिइसके पश्चात् शरीर वरिपरि तैरिरहने आत्मा जबसम्म शरीरको दाहसंस्कार हुँदैन तबसम्म त्यहाँ रहेको भीडभाड र गतिविधि नियाल्दै गरेको हुन्छ। शवयात्रा देखि दाहसंस्कार सम्मका सबै गतिविधिको समेत साक्षीका रूपमा रहने र सबै कुराको प्रत्यक्ष अनुभूति लिइरहेको हुन्छ। जब





॥ श्री गणेशाय नमः ॥







शरीरको दाहसंस्कार गरिन्छ तब आत्मालाई धेरै वर्षदेखि पृथ्वीमा आफूलाई आफ्नो पहिचान दिने र सार अस्तित्वको मूल पहिचान दिलाउने शरीर विलीन भएर पञ्चतत्वमा मिलन बनिसकेको एहसास दिलाउँछ । आफ्नो लामो लगाव रहेको आफ्नै शरीर आफैँ अगाडि बिलाएर ब्रह्माण्डमा मिलेको अनुभूति गरेको आत्माले दाहसंस्कारको सम्पन्नतामा पूर्ण स्वतन्त्रताको अनुभूति गर्छ। शरीर सँगको लगावमा रहँदा र हुँदाको सबै सीमा तोडिसकेको र आफू जहाँ चाह्यो त्यही यात्रा गर्न सफल बनेको फरक अनुभूति आत्माले प्राप्त गर्छ ।

आफ्नो स्वतन्त्रताको अनुभूति पाएको आत्माले पहिलो सात दिनसम्म आफूलाई मन पर्ने ठाउँ जस्तै आफू दैनिक साथीभाइ भेट्न जाने चिया पसल,













आफूले माया गर्ने ठाउँ, वस्तु, व्यक्ति सँग समय बिताउने, आफ्नो धन सम्पत्ति राखेको दराज, छोरा नातिहरू खेल्ने हाँस्ने ठाउँ, आफ्नो प्रेमी, प्रेमिका वा आफूले भ्रमण गर्दा मान सम्मान पाउने आफन्तको वरिपरि रहेर उनीहरूको सुख दुःखमा सहभागी बनिरहेको हुन्छ। उनीहरू सँगै रमाइरहेको वा भुलिरहेको हुन्छ। सातौँ दिनको अन्त्यमा पुग्दा भने यो मायावी जालोबाट मुक्त हुँदै आत्माले आफ्नो परिवार, नजिकका र आफन्तहरू, आफ्ना प्रिय वस्तु, स्थान सबैलाई अलबिदा भन्दै पृथ्वीबाट ब्रह्माण्डको यात्रामा निस्कने तयारीमा जुट्न थाल्छ।

शरीर जिउँदो रहँदा र मरिसकेपछि आत्माको अनुभूतिमा आएको अनुभवहरू आत्मा आफैँ भित्र रहने गर्दैन। हामीले देख्न नसकिने प्रकृतिको











सूचनाको चिप्स जस्तो पातलो स्मृतिमा आत्माको अनुभूतिमा आएको सम्पूर्ण अनुभव संकलन भएर रहेको हुन्छ। जसलाई गरुड (एक प्रकारको चरा) पुराणमा चित्र गुप्तको नाम दिइएको छ । उक्त पातलो स्मृतिको चिप्स आत्मा शरीरमा रहँदादेखि नै जोल्टिएर वा एट्याचमेन्ट रहेर गरेको हुन्छ। जुन वास्तवमा चेतना वा कन्ससनेस नै हो ।

चित्रगुप्त नाम दिइएको स्मृतिको चिप्सलाई आत्मा सँग जोल्टाएर एट्याचमेन्टका रूपमा आत्मा जता गयो उतै लैजान सहयोग गर्ने शक्तिलाई भने यमदूतको नाम दिइएको छ। जीवित शरीरमा रहँदा देखि मृत्यु पश्चात्को तत्कालीन समय सम्मका अनुभूतिमा आएका सन्दर्भहरू स्मृतिमा रूपमा उक्त पातलो स्मृतिको चिप्समा सुरक्षित रहन्छन्। यो













अर्थमा आत्मालाई बायोआत्मा भन्ने गरिन्छ। मानिसको मृत्युको ११ औँ दिन वा मृत्युपछि १३ औँ दिन सम्म आत्मा र पातलो स्मृतिको चिप्स एकापसमा जोल्टिएर वा एट्याचमेन्टमा रहेर अस्तित्वमा रहने गर्छ।

मृत्यु भएको पितृको हिसाबमा उसका लागि पहिलो १२–१३ दिनको प्रार्थना र रीति रिवाज अत्यन्त संवेदनशील ठानिएकाले उसका सन्तति र आफन्तलाई कम्तीमा यो समयमा नियमित प्रार्थनामा लाग्न जोड दिने गरिन्छ। मृतात्माका लागि यो समय स्मृतिका चिप्सका सूचनाहरू पुनरवलोकन गर्ने अहम् समय मानिन्छ । जीवन जिउने क्रममा भएका धेरै भुलचुक भएका गल्ती र असावधानीका कारण बायोआत्माको धेरैप्रति गुनासा, असन्तुष्टि,











आग्रह र आशा हुन सक्छन्। त्यसमा पनि आफन्त र आफ्ना निकै नजिकका सँगको गुनासा, असन्तुष्टिले आत्मा अतृप्त बनाउने गर्छ। उक्त समयमा आफन्तले पूजाआजा गरी आफ्नो अन्तरात्मा बाटै आफ्नो गतिविधिका कारण पुग्न गएको दुःख वा अपमान प्रति क्षमा माग्ने कार्यले जीवनका विभिन्न चरणमा पैदा भएका र स्मरणमा बसेका व्यक्त, अव्यक्त नकारात्मक भावना, दुःख, घृणा, क्रोध, आदि आग्रहले पैदा गर्ने अनुग्रहको मध्यमबाट क्षमादान हुने हुँदा स्मृतिको चिप्सबाट हट्ने गर्छ ।

बायोआत्मामा समर्पित रहेर गरिने सबै अनुष्ठान, प्रार्थना र सकारात्मक ऊर्जाहरू आत्माले आफ्नो यसपछिका लागि तय गर्ने यात्राका लागि जरुरत













हुने शक्ति उपलब्ध गराउन सहयोगी बन्छ। आत्मा अतृप्त राख्दै भड्काउने गुनासा, असन्तुष्टि, दुःख, घृणा, क्रोध, आग्रह जस्ता कुराबाट आत्मा जति छिटो मुक्त हुन सक्छ त्यति छिटो यात्रा गर्नुपर्ने सुरुङ मार्ग र त्यसको अर्कोतर्फको प्रकाशको उज्यालो अनुभूति गर्न सक्छ । जब त्यतातर्फ ध्यान केन्द्रित बन्छ तब मात्र बायोआत्माको ब्रह्माण्डको यात्रा सुरु हुन सम्भव बन्छ।

आत्मालाई भड्काउने प्रकृतिका आफ्नो शारीरिक, भौतिक र मनोवैज्ञानिक लगाव मुक्त बनेको आत्माको ब्रह्माण्डको यात्राको सुरुवात स्मृतिको चिप्समा सुरक्षित आफ्नै विगतका कर्मको पुनरवलोकन बाट सुरु हुन्छ । स्मृतिको चिप्सको कर्मिक बोर्डमा सुरक्षित सूचनाको सहायतामा







पृथ्वीमा भर्खरै पूरा भएको जीवनका हरेक गतिविधिभित्र आफूले गरेका कर्महरूको गहन स्वसमीक्षा गर्न सम्भव बन्छ । कुनै आग्रह, पूर्वाग्रह, अहंकार र कलुषित निर्णयको भावमुक्त बनेको आत्मा अब प्रकाशको विशुद्ध ज्योति मार्फत प्राप्त शक्तिको उपयोगले निष्पक्षमा रूपमा जीवनमा गरिएका र भएका विगतका सम्पूर्ण कर्मको स्वमूल्यांकन गर्न सक्षम बन्छ ।

जीवनको आत्म समीक्षाको संज्ञा दिइने उक्त समयमा कुनै न्यायाधीश वा ईश्वर हुने गर्दैन। त्यो आत्माले आफैँले आफ्नो अनुभूति र कर्मको पुनरवलोकन गरी न्याय दिने प्रक्रिया हो। यो यस्तो समय हो जुन समयमा आफ्नो जीवन कालमा आफूलाई अन्याय गरी व्याकुल पार्ने व्यक्तिहरू








उनीहरूले गरेको कर्मका लागि उपयुक्त पाठ सिकाउन यो दण्ड भोग्न जरुरी रहेको भन्ने अनुभूति गर्ने गर्छ। आफ्नो सन्दर्भमा आफूले गरेका हरेक गल्तीको समेत महसुस गर्छ । आफूले गरेका सबै गल्तीमा आफैँलाई दोषी समेत करार गर्ने गर्छ। आफ्ना तर्फबाट भएका दोष र गल्तीबाट पाठ सिक्नका लागि आत्म सजायको मागसमेत गर्छ। यो समयमा शरीर र अहंकार दुवै आत्मासँग नजोडिएको हुँदा वास्तविक यथार्थको तथ्यगत मूल्यांकन पश्चात् गरिने महसुस निष्पक्ष र यथार्थ परक रहने ठानिन्छ। निष्पक्ष र यथार्थ परक रहने निश्चित ठानिने उक्त आत्मा अनुभूतिलाई नै आत्माको अर्को जीवनकाल हुने वा नहुने भन्ने तय गर्न निर्णायक बन्छ। आत्माको अर्को जीवन हुने तय भएमा कस्तो हुने










भन्ने निश्चय गर्नसमेत तय गर्न तिनै आत्मानुभूति मुख्य आधार बन्ने गर्छ।

आफ्नो आत्मसमीक्षा पूरा गरेपछि आत्माको उक्त जीवनचक्र समापन भएको मानिन्छ। सम्पन्न आत्मसमीक्षाको आधारमा भर्खरै पार गरेको जीवनचक्र पश्चात् दर्द र मायायुक्त मायावी जीवनबाट नै मुक्त हुने वा अर्को जीवन चक्रमा पुनः फर्कने भन्ने आधारभूत संरचनाको खाकासमेत आत्माको आफ्नै अनुभूतिका आधारमा तय हुने गर्छ। आत्मसमीक्षाको निक्र्योलले आत्माको अर्को जीवन जरुरी रहेको देखाएमा अर्को जीवनमा कस्ता कस्ता मूल घटना, कस्ताकस्ता चुनौती सामना गर्नु पर्ने र कस्ताकस्ता घटना व्यहोर्नु पर्ने भन्ने पूर्ण सम्झौता सहितको ब्लुप्रिन्टको समेत आधारशिला













तय हुन्छ ।

आत्माको आफ्नै सम्झौताको ब्लुप्रिन्टका आधारमा तत्कालीन समयको जरुरत अनुरूप आत्माको पुनर्जन्मको तय हुने गर्छ । जसमा आत्मा आफैँले आफ्नो नयाँ आमाबुवा छान्ने र आमाको गर्भमा प्रवेश गर्ने गर्छ। यो कहिले भर्खरै अण्डाको गर्भधारणको समयमा हुने गर्छ भने कहिले गर्भधारणको चार–पाँच महिनाको समयमा पनि हुन सक्छ। आवश्यकता अनुरूप कहिले काहीँ त जन्मनु भन्दा केही समय पहिलेको क्षणमा समेत प्रवेश गर्ने समय मिलाइएको हुन्छ ।

अति सुन्दर ढंगले पूर्णता सहित इन्जिनियरिङ भएको यो ब्रह्माण्डका विभिन्न ग्रह र तारा आदिको स्थान र जन्मको समय र जन्मको ठाउँले आत्माको







नयाँ जीवन कस्तो हुनेछ भन्ने व्यवस्थित ब्लुप्रिन्ट वा कुण्डली बनाएर बुझ्न सकिने गरी संकेत गरेको हुन्छ। जब आत्माले मानिसकै रूपमा पुनर्जन्म पाउँछ त्यो परिस्थितिमा जन्मको पहिलो ४० दिन सम्म बच्चाले आफ्नो विगतको जीवनलाई सम्झेको हुन्छ। कसैलाई कुनै करकाप उत्पन्न नहुने गरी विगतको जीवनको अनुभूतिको विभिन्न क्षणको स्मृति अनुरूप बच्चा आफैं हाँस्ने, शान्त रहने, रुने, चिच्याउने आदि गतिविधि देखाउँछ। त्यस पछि उसमा आफ्नो विगतका जीवनका स्मृतिहरू एकाएक हराउने गर्छ। यो समयमा आत्माको पहिलो जन्मको स्मरणको डोरी सम्पूर्ण रूपमा चुँडिएको हुन्छ। फलतः आफ्नो पहिले पनि एउटा जीवन थियो भनी अनुभव नै पूर्ण रूपमा बिर्सिएर










सामान्य बालकका रूपमा नयाँ कुरा सिक्दै आफ्नो जीवन सुचारु गर्न सुरु गर्छ ।

गरुड पुराणका अनुसार एउटा जन्मदेखि अर्को जन्मसम्म स्मृतिको चिप्स मार्फत जानकारी पुग्ने स्थिति मानिसमा मात्र हुन्छ । मानिसले मानिसकै रूपमा पुनर्जन्म प्राप्त गर्दा मात्र एक जन्मबाट अर्को जन्म सम्म स्मृति पुग्न सक्छ। चरा, अन्य जनावर र बोट बिरुवा आदिमा स्मरणको चिप्स नहुने हुँदा यो सम्भव रहँदैन। जब आत्मा स्मृतिको चिप्ससँग जोडिन्छ यसलाई बायोआत्मा भनिन्छ। भर्खरै पार गरेको जीवन चक्रको आत्म समीक्षाको दौरानमा स्मृतिको चिप्ससँग पूर्ण रूपमा विच्छेद हुन सक्ने बायोआत्मा त्यहीबेला नै आत्मामा परिवर्तन हुन्छ। नसक्नेले पुनः नयाँ जीवनको सुरुवात गर्ने चक्रबाट









गुज्रनुपर्छ। बायोआत्माबाट पछिल्ला जीवनका स्मरण पूर्ण रूपमा हट्न सक्दा सांसारिक माया, भोक, पीडा, अहंकार सबैबाट आत्मा मुक्त हुन सक्छ । त्यो भनेको मोक्ष प्राप्तिको अवस्था हो।

मोक्ष भनेको पुनः जन्म र मृत्युको चक्रमा गइरहन पर्ने सांसारिक दु:ख र मोहको अवस्थाबाट सदाका लागि मुक्ति प्राप्ति गर्नु हो ।

हरेकको जीवन उसको आत्माले विगतमा भोगेको परिस्थिति अनुरूप आत्माले नै मागे अनुरूप तय भएको व्यवस्थित ब्लुप्रिन्ट वा कुण्डली अनुरूप उसलाई प्राप्त भएको हुन्छ। आफ्नो जीवन कालमा उसले भेट्ने हरेक साथी, आफन्त, मित्र, अमित्र, शत्रु, अभिभावक, जीवन साथी देखि नजिकका आफ्ना र पराइ समेत उसको आत्मा आफैंले निश्चय









गरी सम्झौतामा पुगेको कुण्डलीको खाकाका आधारमा निश्चित कारणका लागि उसको जीवनसँग विभिन्न रूपमा जोडिन पुगेका हुन्। उनीसँग जोडिएका हरेक पात्रले आफ्नो भागमा परेको आफ्नो भूमिका लाए अराए अनुरूप पूरा गरिरहेका छन्। एउटा कुशल फिल्म वा नाटकका अभिनेता र कलाकारले आफ्नो भूमिका खेले जस्तै। एक कुशल रचनाकार बाट रचना गरिएको निर्माणाधीन चलचित्रमा निर्देशकले निर्देशित गरे अनुरूप नाटकमा भाग लिए जस्तै ।

तपाईं जसले आफ्नो नजिकको प्रियजन गुमाउनु भएको छ तपाईंका लागि आफ्नो प्रियजनको अभाव निश्चय नै अपूरणीय क्षतिको अनुभूति दिने प्रकृतिको रहन्छ नै । तर, यो पनि ख्याल गरौं कि










यो तपाईं दुःखित, चिन्तित नै हुनुपर्ने, आफ्नै जीवनलाई हानि गर्ने स्थितिमा पुग्नुपर्ने विषय होइन। जीवात्मा कहिल्यै मर्दैन। हामी आफ्नो निर्धारित जीवनको निर्धारित समय अवधिसम्म मात्र बाँच्ने गर्छौं। मृत्युले हाम्रो निर्धारित जीवनको निर्धारित समयमा मात्र अन्त्य गरेको हुन्छ। तपाईंको प्रियजनको आत्माको होइन।

मृत्युले तपाईंको प्रियजनको आत्मालाई केही समय थोरै विश्राम गर्ने अवसर दिएर, धेरै कुरा अनुभूति गर्ने सौभाग्य उपलब्ध गराएर सांसारिक दुःख र मोहको अवस्थाबाट सदाका लागि मुक्ति लिने अवसर उपलब्ध गराउन सक्छ । उहाँको भोग भाग बाँकि नै रहेछ भने र उहाँको इच्छा रहेमा उहाँलाई आफ्ना आफन्तसँग अर्को जुनीमा पुनः झन् प्रिय













रूपमा भेट गर्ने र तृप्त भएर जिउने अवसर उपलब्ध गराएको हुन्छ।

प्रेम भनेको आफ्नो निःस्वार्थ माया हो। हाम्रो आफ्नै आफन्त जसलाई हामी निःस्वार्थ माया गर्छौं उहाँलाई मृत्युले आफ्नो जीवन झन् सुवर्ण बनाउने उत्तम अवसर उपलब्ध गराउँछ। जहाँ चरम मर्माहत तर चरम आनन्दित नतिजा दिने दुई विपरीत समय एकै विन्दुमा मिलेका हुन्छ। कत्ति पनि विचलित नभई त्यो क्षणलाई स्विकारेर साक्षात्कार गरी अघि बढ्ने जीवनको नाम नै जिन्दगी हो।

**गरुड पुराण प्रेत् कल्पको व्याख्यामा चेतनाको स्थानान्तरण**

वैदिक अवधारणा अनुरूप एक व्यक्तिको चेतना











हालको शरीरबाट नयाँ जीवनमा लगभग स्मृति जस्तै मेमोरी चिप्स मार्फत कसरी जान्छ, र त्यो डिएनएको आदि मार्फत सूचना हबको रूपमा र प्राणको रूपमा भौतिक शरीरमा संयोजन हुन पुग्छ भन्ने मेटाफिजिकल प्रक्रियाको विस्तृत पक्ष गरुड पुराणको प्रेत कल्पको भागमा उल्लेख भएको देखिन्छ।

प्रेत कल्पमा उल्लेख भएको मृत्यु, परलोक, र आत्माको अर्को अस्तित्व जस्ता शब्दहरू मेटाफिजिकल तहमा कुन अर्थ, सन्दर्भ, र उद्देश्य (नियत) जनाउँछन् भन्ने डिकोड गर्न सक्दा, त्यहाँ उल्लेख भएको विभिन्न चरणहरूको यात्रा र ति यात्रामा भएका "के भयो भने कसो हुने" देखिन्छ भन्ने प्रकारका गहिरा वर्णनहरू, मृत्यु पछिको













आत्माको यात्राको बारेमा रहेको वैदिक अवधारणाको अत्यन्त सूक्ष्म मिहिनता बुझ्न सहज हुने देखिन्छ।

प्रेत् कल्पको पारम्परिक व्याख्याहरूमा, चेतनाको स्थानान्तरणलाई कर्मको क्रमले अनुभव गरेको सूचनाको संग्रह, जन्म पूर्वको प्राप्त संस्कारजन्य चेतना तथा अविद्या र विद्याको अनुभूति मार्फत ग्रहण गरिएको चेतनाको संयोजनको समग्र स्वरूप मृत्यु पश्चात हुने मुक्ति वा पुनर्जन्मको द्विविधागत क्रमिकताको अस्तित्व रूपान्तरणको वर्णन भएको देखिन्छ।

पापले दुःख दिन्छ, पुण्यले सहजता दिन्छ, अपराधले सजायको भागी बनाउँछ। सत्कर्म र करुणा भावले मुक्ति मार्गमा लैजाने परिप्रेक्ष्यमा





चर्चा भएएको प्रेत कल्पको गहिरो निष्कर्षमा आत्मा (मुक्ति) र आसक्तिको अन्त्यमा केन्द्रित आध्यात्मिक दृष्टिकोणको व्याख्या गरिएको देखिन्छ।

आत्माको शान्तिपूर्ण र परिवर्तनकारी यात्राको वर्णनको रूपमा हेर्न सकिने प्रेत कल्पका सन्देशहरू हाल सम्म जे भएको हो त्यही रूपमा हाम्रो समाजमा नपुगेको तथा समाजमा पुगेका सन्देशहरू हास्यास्पद र सामाजिक मजाकको रूपमा रहेको स्पष्ट देखिन्छ।

व्यक्ति पापी होस् वा धर्मात्मा, अज्ञानी होस् वा ज्ञानी, अपराधी होस् वा करुणाको खानी, व्यक्तिले आफ्नो कर्मको फल जीवित रहँदाकै अवस्थामा भोग्ने कुरा प्रष्ट रहेको प्रेत कल्पमा हरेक व्यक्तिको मृत्युको क्षण अत्यन्त "शान्तिपूर्ण" चेतना





स्थानान्तरणको प्रक्रिया अनुरूप हुने प्रेत कल्पको संस्कृत ऋचाहरूको डिकोड गर्दा आउने सन्देशले प्रष्ट गर्दछ।

व्यक्तिको मृत्युको क्षण पूर्व व्यक्तिले भोगेको वा उपभोग गरेको जीवनको गुणस्तरबारे प्रेत कल्पका केही पक्ष वा तत्त्वगुणहरू प्रेत कल्पमा देखिँदैनन्। त्यहाँ मात्र पाप-पुण्यको कसौटीमा सत्कर्म र दुष्कर्मले विकास गरेको व्यक्तिगत चेतनाको सम्पूर्ण रूपको समग्रता बारे चर्चा भएको छ।

प्रेत कल्पले केन्द्रित गर्ने मुख्य विषय भनेको व्यक्तिको चेतनाको शान्तिपूर्ण स्थानान्तरणको प्रक्रिया हो, जसलाई शान्तिपूर्ण संक्रमण सँग मेल खाने गरी यस अनुरूप विभाजित गरी प्रस्तुत गरिएको छः



**१. प्राण ऊर्जा भौतिक शरीरको आत्मबलबाट अलग हुनु (शरीरबाट प्रस्थान) तैयारी:** आत्मा वा आत्मन् को शान्तिपूर्ण चेतनाको स्थानान्तरण यात्रा शरीरबाट अलग भएर सुरु गर्छ। भौतिक शरीरका लागि यो सामान्यतया भौतिक शरीरले अनुभव गर्ने सहज, राम्रा वा कठिन अनुभवसँग छुटिने क्रमको इन्द्रियहरूले अनुभव गर्ने डरयुक्त अनुभवको रूपमा व्याख्या गरिएको देखिन्छ। मृत्यु इन्द्रियहरूको अनुभवको विषय नरहेपछि इन्द्रियगत डरभाव आत्मा ज्ञानको अभावमा हुनु स्वाभाविक नै रहन्छ। उक्त समयमा पुगेको चेतनामा इन्द्रियगत अनुभवको वर्णन देखिन्छ। आत्मा ज्ञानमार्फत त्यस अवस्थामा पहिले नै सचेत नभएको र आफैंलाई मृत्युका लागि तयारी नगरी सकेको व्यक्तिको शरीरको अस्थायी











प्रकृतिको बोधमा हुने आसक्तिले चेतनामा केही असहजता दिन सक्छ, तर त्यसले आत्माको सजिलै हुने यात्राको क्रमलाई तात्त्विक फरक पार्ने छैन भन्ने प्रष्ट गरिएको छ।

**२. जीवनको संस्कार र कर्म अनुभूति (पाप पुण्य) पुनरावलोकन:** शरीरसँग छुट्टिएको चेतनाले आफ्नो कर्महरूको स्मृतिहरूको झलक पुनरावलोकन गर्ने प्रक्रियाले मन, बुद्धि, चित्त, विवेक आदिमा वर्गीकृत चेतनाको समग्र सुद्ध संयोजनमा हुने चैतन्य परा उर्जाको केन्द्रित हुने प्रक्रिया बारे चर्चा गरेको छ। जहाँ उच्च चेतना मैत्री व्यक्तिको चेतना र उच्च चेतना अमैत्री चेतनाको ध्रुवीकरणको दृष्टिकोणबाट चेतनाको स्थानान्तरण यात्राको चरण शान्तिपूर्ण भए पनि कति सहज वा असहज रहने दिशामा आत्मा







स्पष्टताको लागि आसक्ति आदि बाट अलग गराउने विधिको चर्चा रहेको छ। जसरी घैटोको धमिलो पानी घैटोमा शान्तसँग रहँदा थिग्रिएर सफा माथि र धुलो तल हुन्छ, त्यस्तै त्यहाँ मेटाफिजिकल तहको सुद्धीकरण प्रक्रियाको व्याख्या छ।

**३. दिव्य प्राण उर्जाहरूको मार्गदर्शन अर्थात् चेतन ऊर्जा सुद्ध चेतन उर्जामा हुने सुद्धीकरण प्रक्रिया:** थप व्याख्याहरूमा, आत्मामा रहेको ब्रह्माण्ड चेतना (दिव्य ऊर्जा) र संस्कारजन्य चेतना (पूर्वजहरूबाट प्राप्त चेतना) र आफ्नै कर्मअनुसार विकसित चेतना (पुण्य कार्य अनुभूति) को मिश्रणको तरिका बारे त्यहाँ उल्लेख छ। आत्मालाई परलोकमा सजिलै यात्रा गर्न मद्दत गर्ने शीर्षक अन्तर्गत शान्तिपूर्ण चेतनाको स्थानान्तरण यात्राको प्रक्रियाको चर्चा छ।











ती प्रक्रियाहरू मूलतः आत्मालाई पीडकको रूपमा नरहेर यात्रा सहजताका लागि सहयोगी भूमिकाको ऊर्जा रूपी अवलोकन कर्ताको समेत जिम्मेवारी लिएको तत्वको रुपमा व्यक्त भएको छ।

**४. वैतरणी नदी (सुद्ध चेतन उर्जाको आत्मबल सँगको बिछोड यात्रा अर्थात् परा मनोभौतिक चेतन ऊर्जा बाट सुद्ध चेतन उर्जाको वेव फङ्गसन रूपी परा उर्जामा हुने रूपान्तरण यात्रा पूरा हुने प्रक्रिया) पार गर्ने:** परम्परागत रूपमा मनोभौतिक चेतन उर्जाको मिश्रण सुद्ध चेतन उर्जाको वेवफङ्गसन रूपी परा उर्जामा हुने रूपान्तरण यात्रा चुनौती पूर्ण रहेको भनी व्याख्या गरिएको छ। तर नदीको फोहोरको रूपमा चेतनालाई असुद्ध राख्ने आसक्तिको भावनात्मक उथल पुथललाई लिएकोले, त्यसले कर्मगत





आसक्तिको नै प्रतिनिधित्व गर्ने गरेको देखिन्छ। आसक्ति बाट मुक्ति पाएको आत्मा मात्र ब्रह्माण्ड आत्मामा घुलनशील वा मिलनशील हुने अवधारणा अन्तर्गत, यहाँ कसरी व्यक्तिमा अन्तर्निहित आत्मा सजिलै र शान्तिपूर्ण रूपमा मुक्तिको पदमा बग्न सक्छ भन्ने चक्र र प्रक्रिया बारे चर्चा भएको छ।

**५. यमको दरबारमा प्रवेश (न्यायोचित व्यवस्थापन):** यमको दरबारलाई सामान्य यात्राको क्रममा हुने गुणदोष छिमलेर अभिलेखित गरी संस्कारगत र कर्मगत चेतनाको सुद्धताको हद अनुसार व्यवस्थापन हुने प्रक्रिया लाइ न्याय दिइने स्थानको रूपमा व्याख्या गरिएको छ। यो बिन्दु आत्माले कर्मको अन्तिम बोध गर्ने चरणको रूपमा प्रस्तुत भएको छ। जहाँ आत्माले गहिरो चिन्तन र









बोध पाउँछ। त्यसको अर्थ यो हो कि आत्माको ब्रह्माण्ड आत्मामा घुलनशीलताको परीक्षण हुन्छ। घुलनशीलता रहँदा अन्तर घुलनको मुक्ति मिल्छ। नहुँदा, त्यसको सुद्धता अनुसार प्रारब्ध चेतना घुलित ब्रह्माण्ड चेतनाको त्यस अघिको व्यवस्थापन प्रक्रिया सुरु हुन्छ।

**६. प्रारब्ध चेतना घुलित ब्रह्माण्ड चेतनाको अघुलन शील चैतन्यको व्यवस्थापन लाई पुनर्जन्म वा मुक्तिको चयन अन्तर्गत व्याख्या:** जब आत्माले आफ्नो कर्म चक्र बुझ्छ, तब उसले कर्मगत यथार्थ अनुसार पुनर्जन्म (अधुरो कर्म पूरा गर्न) वा मुक्ति (मोक्ष) को मार्ग प्राकृतिक नियमको सिद्धान्त अनुसार अनुसरण वा छनौट गर्दछ। यो प्रक्रिया शान्तिपूर्ण निर्णय लिने रूपान्तरणको क्षणको रूपमा











व्याख्या गरिएको छ, जहाँ आत्मा कार्मिक गुणदोषको आधारमा आगामी व्यवस्थापन प्रक्रिया पथमा पूर्ण ज्ञानको साथ स्थानान्तरित बन्ने प्रक्रिया बारे व्याख्या गरिएको छ।

यसरी समग्रमा गरुड पुराणको पारम्परिक टिप्पणीहरू डिकोड गरी अध्ययन गर्दा, आधुनिक वैदिक ज्ञानको आधारमा ब्रह्माण्ड चेतनामा अघुलनशील चैतन्यको जीवात्माको रूपमा हुने रूपान्तरण, त्यससँग संलग्न आत्माको बीजको (पुरुष) रूपमा रूपान्तरण, बीजको प्रकृति (अण्ड) प्राप्तिको प्रक्रिया र स्वर्ग द्वारको यात्रा, जीवन वा सिंहासन प्राप्ति वा भ्रूणको रूपमा रूपान्तरण, लामो तपस्या वा ध्यान वा पेट वा अण्डाभित्रको जीवन र अर्को जीवनको रूपमा प्राप्त हुने प्रक्रिया, भाग्य र













जीवन चक्रको नियति आदि मार्फत मृत्यु पछि हुने पुनर्जन्म प्रक्रियाको रूपमा व्याख्या भएको छ।

चेतनाको मुक्ति वा शान्तिपूर्ण संक्रमण र पुनर्जन्मको गरुड पुराणको प्रेत् कल्पको दृष्टिकोण हाल समाजमा गरिएको व्याख्या भन्दा नितान्त फरक छ।

# सूक्ष्मताभित्र लुकेको काबिलता

स्वरूपमा कुनै कुरा ठूलो वा भीमकाय रहँदैमा त्यो शक्तिशाली रहन्छ भन्ने सोचाइ प्रायः गलत साबित हुने गर्छ । विषय वस्तुमा गहिरिएर विचार पु¥याउने हरेकले यो बुझेकै कुरा हो कि पहराबाट खस्दै गरेको भीमकाय ढुंगोले अधिकमा त्यो तलको केही संरचना निमिट्यान्न गर्न सक्छ । तर, पृथ्वी नै ध्वस्त










गर्न त एटमिक बमको जरुरत पर्छ । एटम बम अत्यन्त सूक्ष्म पदार्थ हो ।

मानव क्रोमोजोम यथार्थमा मानिसको सम्पूर्ण गुण सूत्र निर्धारण गर्ने जटिल संरचना हो जुन डीएनए, प्रोटिन र अन्य अणुहरूबाट बनेको छ। अणु गुण सूत्र बनाउने प्रत्येक डीएनए लाखौँ देखि अर्बौं बेस पेयरहरू (जोडी) बाट बनेको हुन्छ। यो आधारमा हिसाब गर्दा एउटा गुण सूत्रमा कैयौँ अर्ब अणुहरू हुन सक्छन्। उदाहरणका लागि, १० करोड बेस पेयर भएको गुण सूत्रमा केवल डिएनएमा मात्र करिब ३ अर्ब अणुहरू हुन सक्छन्, र यसमा प्रोटिन र अन्य अणुहरू समावेश गरिएको छैन।

आज संसारमा अणु भन्दा निकै साना पदार्थ पहिचान भएका छन्। इलेक्ट्रोन, प्रोटोन र न्युट्रोन











भन्दा ससाना सबएटमिक पार्टिकलहरू जस्तै मुवोन, न्युट्रिनो, क्वार्क्स आदिबारे विज्ञानले हामीलाई प्रशस्त जानकारी गराएको छ । मुवोन, न्युट्रिनो, क्वार्क्स जस्ता तत्वहरू सबएटमिक पार्टिकलहरू इलेक्ट्रोन जस्तै कम्पन अवस्थामा रहने गर्छन् भन्नेसमेत वैज्ञानिक प्रमाणसहितको जानकारी प्राप्त भएको छ ।

फोटोन, न्युट्रियोन, ग्रेभिटोन र इलेक्ट्रोन जस्ता क्वान्टम पार्टिकलहरूमा एउटा अचम्मको बानी भेटिएको छ । जस्तै: क्वान्टम पार्टिकल भनिने फोटोनको दुई पार्टिकल लिएर पोलोराइज गरिदिँदा ती दुई पार्टिकलले एकै पार्टिकल जस्तो व्यहोरा देखाउँछन् । पोलोराइज गरिदिए पछिको ती दुई पार्टिकललाई जब एकापसमा छुट्टयाइन्छ तब











तिनीहरूले एउटाले अर्कोको ठीक विपरीत गतिविधि देखाउने जोडी बन्छन्। जस्तै एउटालाई घडीको दिशामा घुमायो भने अर्को एन्टिक्लक दिशामा घुम्छ। एउटालाई स्पिन–अप (टाउको माथि) गर्दा अर्को स्पिन–डाउन (टाउको तल) हुन्छ।

पोलोराइज गरेपछि यसरी एउटा अर्कोको प्रभावमा परेर एउटाले जे गर्छ अर्कोले त्यसको विपरीत काम गर्ने जोडीलाई विज्ञानमा इन्ट्यांगल अथवा एकापसमा जोल्टिएको पार्टिकल भनिन्छ । एउटाले अर्कोको विपरीतको व्यहोरा देखाउने बानीलाई स्पुकी एक्सन भनिन्छ।

सबैभन्दा अचम्मको कुरा के छ भने यस्ता क्वान्टम इन्ट्यांल भएर जोल्टिएका पार्टिकलहरू एकापसमा













जतिसुकै टाढा लैजानुस्, मतलब एक ग्रहबाट अर्को ग्रहमै किन नलैजानुस् उनीहरूको स्पुकी एक्सन नियमित रूपमा देखाउँछन्। तिनीहरू एकापसमा न त कुनै तार न कुनै वाइफाई, न कुनै ताररहित सिग्नल र न कुनै कोडबाट नै जोडिएको भेटिन्छ । न कुनै तरिकाबाट त्यो सम्पर्क ह्याक गरी विच्छेद गर्न नै सकिएको छ ।

उनीहरू एकापसमा कसरी सम्पर्कमा रहेका हुन् हालसम्म बुझ्न नसकिएकाले त्यसलाई उनीहरूबीचको क्वान्टम सूचना प्रवाह भनिएको छ। पोलोराइज फोटोनले देखाउने क्वान्टम कम्युनिकेसन न्युट्रियोन, ग्रेभिटोन र इलेक्ट्रोन जस्ता क्वान्टम पार्टिकलहरूले समेत देखाउने गर्छन्।

संसारमा रहेका हरेक पदार्थ अत्यन्त सूक्ष्म रूपमा









क्वान्टम मेकानिक्सले यकिन गरेको जस्तो एकापसको संयुक्त पल्स वा कम्पनका रूपमा रहेको बादलजस्तो लाग्ने वस्तुका रूपमा अस्तित्वमा रहेको ऊर्जा निर्मित छ। जसलाई क्वान्टम मेकानिक्सले क्वान्टम युनिफाईड फिल्ड भन्ने गर्छ । तपाईं हाम्रो अनुभव, विचार र सोचले पैदा गर्ने चेतना अथवा कन्ससनेस क्वान्टम पार्टिकलहरूभन्दा सूक्ष्म रूपमा रहे तापनि तिनीहरू पार्टिकलका रूपमा नरहेर एक पिण्डरहित ऊर्जाका रूपमा युनिफाईड फिल्ड सँगै सहसंयोजनमा रहेर नियमित सक्रिय रूपमा कार्यरत रहने चिज रहेको अनुमान गरिएको छ।

विज्ञान भने यो पिण्ड विहीन चिजको सूक्ष्मताको स्तरमा पुगेर यसको चरित्र उजागर गर्न सकिरहेको अवस्थामा छैन। यो विषयवस्तुमा विज्ञानको










कोसिस र नियमित खोज भने जारी रहेको छ। आगामी दिनमा विज्ञानले दिने धेरै चमत्कार उसले क्षेत्रमा प्राप्त गर्न सक्ने प्रगतिको निकै ठूलो भूमिकामा भर पर्ने भने निश्चितप्रायः भएको छ।

हामी संसारमा रहेका सूक्ष्म तत्वहरूको क्षमता र शक्तिबारे जति गहिरिएर महसुस गर्न सक्छौँ त्यति सहज रूपमा हाम्रो आफ्नै चेतनाको शक्ति वा क्षमताबारे आकलन गर्न सक्नेछौँ ।

मानव शरीरको इनर इन्जिनियरिङ अत्यन्त चमत्कारपूर्ण छ। यसका अत्यन्त साना तर असाध्य महत्वपूर्ण हजारौँ भाग आफैँमा एउटा चमत्कारका रूपमा रहेको छ । ती भागबारे उचित जानकारी राख्न सक्दा हामीलाई आफ्नैमा निहित असीमित क्षमताबारे महत्वपूर्ण प्राप्त गर्न सहयोगी हुनेछ ।









मानव शरीरका चार वटा साना भागबारे विचार गरौँ। सबैभन्दा सानो मांसपेशी, सबैभन्दा सानो हड्डी, सबैभन्दा सानो अंग र सबैभन्दा सानो रक्तनली।

मानव शरीरमा हुने सबैभन्दा सानो मांसपेशी कानको बीचको भागमा रहने स्टेपेडियस हो जुन मात्र एक मिलिमिटर लामो हुन्छ। शरीरको सबैभन्दा सानो हड्डी कानको बीचको भागमा रहने स्टेपस बोन हो जुन स्टेपेडियससँग जोडिएको हुन्छ।

कानको बीचको भागमा रहने स्टेपस बोन (Stapes bone) तीन वटा स-साना हड्डी मध्येको एक हो, जसलाई संयुक्त रूपमा ओसिकल (Ossicles) भनिन्छ भने हरेक टुक्रालाई मलियस (Malleus), इन्कुस (Incus) र स्टेपस (Stapes) भनिएको









छ। स्टेपेडियस मांसपेशीले बाहिर निकै चर्को आवाज आएमा कानको प्वाललाई ढाकेर भित्रसम्म जानबाट रोक्छ। तपाईंको आफ्नै बोली समेत चर्को आवाजका रूपमा कानभित्र जानबाट रोकेर यसले कानको रक्षा गर्छ ।तपाईंले सुनेको आवाज बाहिरी कानबाट भित्री कानसम्म पु¥याउने काम भने ओसिकलको हो, जसमा मानव शरीरमा हुने सबैभन्दा सानो हड्डी स्टेपस बोनको महत्वपूर्ण भूमिका हुन्छ ।

टाउकोमा दुई आँखाबीचको निधारको भित्री भागमा दिमागको गोलार्धबीचको केन्द्र भागको खाल्डामा पाइने पिनियल ग्रन्थि (तेस्रो नेत्र) मानिसको सबैभन्दा सानो अंग हो ।पिनियल ग्ल्यान्ड मानव शरीरको सबैभन्दा सानो इन्डोक्राइन ग्रन्थि समेत








हो। यसले सेरोटोनिन हर्मोनबाट मेलाटोनिन हर्मोनको उत्पादन गर्छ । उक्त हर्मोनले मौसमी परिवर्तन अनुरूप प्रतिक्रिया दिने, दैनिक हुने उज्यालो–अँध्यारो अनुरूप सुत्ने उठ्ने बानी बसाल्ने वा निद्रा लगाउने–ब्युँझाउने जस्ता काममा सहयोग पु¥याउँछ। आकारमा पाइन कोन वा सल्लाको खोया जस्तो देखिएकाले यो ग्रन्थिलाई पिनियल ग्रन्थि भनिएको हो ।

रक्तनलीमा क्यापिलरी भनिने कोषिकाहरू शरीरको सबैभन्दा सानो र पातलो रगत रक्तवाहिका हुन् जसले शिरा (भेन) र धमनीहरू (आर्टरिज) लाई एकापसमा जोड्ने काम गर्छ। मात्र ५–१० माइक्रोन चौडा रहने उक्त रक्त वाहिकाहरू सानो कपालको रौँ भन्दा ५० गुणा पातलो हुने गर्छन्। प्रत्येक









व्यक्तिमा लगभग १० अरब क्यपिलरीहरू रहने गर्छ। वयस्क मानिसमा हुने सबै कोषिकाको लम्बाइ करिब २५ हजार माइल हुने गर्छ। कोषिकाले रगतमा अक्सिजन उपलब्ध गराउने र रगतमा रहेको कार्बनडाइअक्साइड हटाउन मुख्य भूमिका खेल्छ। पोषणतत्व तन्तुहरू सम्म पु¥याउनसमेत रक्तसञ्चारको भूमिका रहन्छ । जहाँ क्यपिलरीहरूले रगत र टिस्यु सेलबीच जरुरी हुने तत्वहरूको आदान प्रदानमा भूमिका खेल्छ ।

व्यावहारिक रूपमा हामीले अनुभव गर्ने सक्ने सबै वस्तु अणुहरू मिलेर बनेको हुन्छ। उक्त वस्तुहरू परमाणुको साधारण जोडी जस्तै अक्सिजनको यौगिक देखि अत्यन्त जटिल जैविक संरचनाका रूपमा रहन्छन् । प्रकृतिमा रहेको सबैभन्दा ठूलो










अणु तपाईंको शरीरमा रहेको छ । जसलाई हामी क्रोमोजोम–१ भन्छौँ । सामान्य मानिसको कोषको केन्द्रको न्युक्लिअसमा २३ जोडी क्रोमोजोम हुने गर्छन्। हरेक क्रोमोजोम एउटा लामो डीएनएबाट बनेको हुन्छ । जसमा क्रोमोजोम–१ सबैभन्दा ठूलो हुन्छ जुन १० बिलियन परमाणुहरू मिलेर बनेको छ। जसमा तपाईंको आनुवंशिक सूचनाका कोडहरू वा जानकारी प्याक गरिएको हुन्छ ।

एक सानो घुमाउरो भ¥याङ जस्तो लपेटिएको आकारमा रहेको डीएनए मानव जिन बोक्ने अणु हो। उक्त जिनमा हाम्रो शरीरका सम्पूर्ण भाग निर्माण गर्न र हामीलाई जीवित राख्ने रासायनिक निर्देशनका कोडहरू सुरक्षित रहन्छन् । डीएनएकै कारण चार बिलियन वर्षभन्दा धेरै समयदेखि मानव जीवन













सुचारु हुने क्रम रोकिएको छैन। त्यसको मूल कारकमा उक्त डीएनए आफैँले आफ्नै प्रतिलिपि बनाउन सक्ने तथा उक्त प्रतिलिपि आफ्ना नयाँ सन्ततिमा सार्दै लान सक्नु हो।

अर्को आश्चर्यजनक कुरा के छ भने तपाईंको सन्ततिमा कोडका रूपमा तपाईंको गुण हस्तान्तरण गर्ने डीएनए सबै नै तपाईंले आनुवंशिक गुणका रूपमा प्राप्त गर्नुभएको पुर्खाका डीएनए होइनन् । तपाईंको शरीरमा रहेका डीएनए मध्येको अत्यन्त धेरै संख्याका डीएनए तपाईंका पूर्वजहरूबाट आएका हुन् । पूर्वजहरूका अलावा कम्तीमा आठ वटा रेट्रोभाइरसबाट डीएनए लिइएको छ। रेट्रोभाइरस एक प्रकारको भाइरस हो, जसले आफ्नो आरएनएलाई आफ्नो आनुवंशिक सामग्रीका रूपमा









प्रयोग गर्छ ।

जब रेट्रोभाइरसले सेललाई सङ्क्रमित गर्छ, यसले आफ्नो जिनोमको डीएनए प्रतिलिपि बनाउँछ, जुन होस्ट सेलको डीएनएमा सम्मिलित हुन्छ । प्रकृतिमा विभिन्न प्रकारका रेट्रोभाइरस हुन्छन्। जसमध्ये कुनै कुनैले क्यान्सर र एड्स जस्ता मानव रोगसमेत निम्त्याउँछन्।

मानव इतिहासको कुनै विन्दुमा रेट्रोभाइरसका जिनहरू (एलियन जिन) समेत मानव डीएनएमा सम्मिलित भएको देखिन्छ। मानव जिनोममा लाखौं वर्षदेखि समाहित भएका रेट्रोभाइरस जीनहरू मध्ये मानव सहयोगी उपयुक्त रेट्रोभाइरस जीनको उदाहरणमा सिन्साइटिन नामक जीन लाई लिन सकिन्। रेट्रोभाइरसको सिन्साइटिन (syncytin)









जीनले मानव प्लेसेन्टाको निर्माणमा महत्त्वपूर्ण भूमिका खेल्छ। यो जीन बिना, प्लेसेन्टाका कोषहरू एक आपसमा राम्रो संग टाँसिएर जोडिन सक्दैनन्।

प्लेसेन्टा आमाको शरीर लाई भ्रूणको पोषण गर्न र भ्रूणले उत्पन्न गरेको फोहोर फाल्ने कामको लागि जरुरी पर्छ। सिन्साइटिन जस्ता रेट्रोभाइरसका जीन संग एकीकरण भएको मानव जीनहरूले भ्रूणलाई आमाको गर्भमा राम्रो सँग बढ्न र फस्टाउन मद्दत गर्ने गर्दछ। जसका कारण आमाको प्रजनन क्षमतामा सुधार गर्दै स्वस्थ सन्तान उत्पादन शक्ति बढाउँछ त्यसले सहयोग पुऱ्याएको देखिन्छ।

एक चराको जस्तै तपाईंको जीवन एक अण्डासँगै सुरु हुने गर्छ । एक मानव अण्डा र चराको अण्डा कसरी अस्तित्वमा आउँछ र जीवन प्रारम्भ हुन्छ भन्ने










प्राकृतिक काइदाबीचमा भने निकै भिन्नता देखिन्छ। भर्खरै पार्दा मानव अण्डा चराले पार्ने अण्डा जस्तो ठूलो हुँदैन। लगभग ०.२ मिलिमिटर वरपरको मात्र हुने मानव अण्डाको आकार एउटा डटपेनले लेख्ने विन्दुको आकारको हुने गर्छ ।

उक्त अण्डा तपाईंको आमा आफ्नो आमाको गर्भमा रहँदा नै निर्मित भएर तपाईंको आमासँगै उहाँको गर्भभित्र टाँसिएर रहेको अवस्थामा जन्मेको हुन्छ । जुन अण्डाबाट तपाईं मानव बन्नुभयो, त्यो अण्डा जतिबेला तपाईंको आमाको भ्रूण निर्मित हुँदै थियो, त्यति नै बेला निर्मित भएको थियो ।

यसरी निर्मित अण्डा र तपाईंको आमाबाट उक्त अण्डाले प्राप्त गरेको तपाईंको शरीरको आधा डीएनए तपाईंको जीवन अस्तित्वमा आएको













सबैभन्दा पहिलो समय मान्न सकिन्छ, जुन वास्तवमा तपाईंको आमाको जन्म हुनुभन्दा अघि नै सम्पन्न भएको थियो।

यदि तपाईंको आमाले आफू ३० वर्षको हुँदा तपाईंलाई जन्म दिनुभएको थियो र आज तपाईं ३५ औँ जन्मदिन मनाइ रहनुभएको छ भने तपाईंको जीवन तर्कगत रूपमा कम्तीमा ६५ वर्षपहिले पहिलो पटक अस्तित्वमा आएको थियो ।

आफू आमाको गर्भमा रहँदा नै बनेको भ्रूणमा दुई–चार महिनामा नै दसौँ मिलियन अण्डा निर्मित हुने भए तापनि केही समयपश्चात् नियमित रूपमा उक्त अण्डाहरू मर्ने क्रम सुरु हुन्छ । नारी लगभग ३१ वर्षको हुँदै गर्दा त्यहाँ मात्र केही हजार अन्डा बाँकी हुन पुग्छ। पुरुषको अण्डकोषभित्र हुने वीर्यको









जस्तो अण्डकोषको संख्याभन्दा गुणस्तर महत्वपूर्ण हुने हुँदा नारी वयस्क हुँदै गर्दा उनीसँग मात्र केही हजार अण्डा रहनु उपयुक्त नै हुने गर्छ ।

प्रत्येक महिना, महिलाको दुईमध्ये एक ओभरीले (अण्डाशय) एक अपरिपक्क अण्डा–कोष छनोट गरी त्यसमा सयौँ कोष निर्माण गरी अण्डा तयार पार्छ । जरुरत अनुरूपको मोटो नहुँदासम्म अन्डालाई पोषण उपलब्ध गराउँछ। अण्डाशयमा जब अण्डा तयार हुन्छ तब फेलोपियन ट्युब हुँदै पाठेघरमा पुग्छ ।

यसरी बनेको अण्डामा नयाँ जीवन सुरु गर्नका लागि चाहिने एक चिजका अलावा सबै चीज हुन्छ । जीवन सुरु गर्न त्यहाँ पुरुषको शुक्रकीटले शुक्राणुको डीएनए उपलब्ध गराउनुपर्ने हुन्छ। जुन निश्चित समय भित्रै प्राप्त भइसक्नुपर्ने हुन्छ। किनकि केही










घण्टाभित्र शुक्रकीट उपलब्ध भएर गर्भवती हुन नसकी उर्वर हुन नसकेको अण्डा केही घण्टाभित्र मर्ने गर्छ। महिनाको एक पटक हुने ओभुलेसनमा मात्र २४ घण्टासम्म अण्डा सक्रिय रहने हुँदा ओभुलेसनको १२ देखि २४ घण्टाभित्र नारी गर्भवती नबनेमा अण्डा मर्ने गर्छ ।

नारीमा अण्डाशयमा अण्डाको निर्माण हुने गर्छ। पुरुषको शुक्राणु भने अण्डकोष भित्र निर्माण हुन्छ। निर्माणका क्रममा क्रोमोजोम एक बिन्दुमा जोल्टिने गरी आफ्नै दुरुस्त प्रतिलिपि बनाएर एक्स–आकार लिन्छ। यस्ता दुई जोडी क्रोमोजोम एकापसमा टाँसिएर एकापसमा जिनको साटासाट पश्चात् दुई पटक विभाजित भएर छुटन्छन्। फलतः शुक्राणु पनि २३ क्रोमोजोमयुक्त वा अण्डाको सेल पनि २३









क्रोमोजोमयुक्त हुने गरी निर्माण हुने गर्छन्। दुवै मिल्दा मानिसको ४६ क्रोमोजोम तयार हुने गर्छ।

सबै मानिसको कोषहरूमा ऊर्जा उत्पादन गर्ने संरचना माइटोकन्ड्रियाको आफ्नै सानो सेटको डीएनए हुन्छ। यो माइटोकन्ड्रियल डीएनए विशेष रूपमा आमा बाटै सन्तानमा सर्ने गर्छ। किनकि वीर्यमा रहेका बाबुको माइटोकन्ड्रिया गर्भधारण पछि सामान्यतया नष्ट हुन्छ।

पुरुषले आफ्नो आमाबाट एक X क्रोमोजोम (गुण सूत्र) र बाबु बाट Y गुण सूत्र प्राप्त गर्छ। XY गुण सूत्रका कारण पुरुष पुँ-लिङ्गी बन्दछ। नारीले आमा बाबु दुवै बाट X गुण सूत्र प्राप्त गर्छन्। उनीहरूको गुण सूत्र XX का कारण नारी स्त्री लिङ्गी बन्दछिन्। X गुण सूत्रमा करिब १,१०० भन्दा बढी जीनहरू









हुन्छन् जसले मस्तिष्कको विकास, प्रतिरक्षा प्रणाली र कोषहरूको वृद्धि जस्ता विभिन्न शारीरिक कार्यहरूमा मद्दत गर्छ। महिला र पुरुष दुवैमा कम्तीमा एउटा X गुण सूत्र हुन्छ। महिलामा दुई X गुण सूत्र हुन्छन्। महिला र पुरुष दुवैमा समान मात्रामा X गुण सूत्र अभिव्यक्ति होस् भन्ने नियतमा रेनडमलि (Randomly) आमाको दुई वटा X गुण सूत्र मद्ये एक लाई "X-inactivation" नामक प्रक्रिया मार्फत निष्क्रिय बनाइन्छ।

Y गुण सूत्र भने केवल पुरुषहरूमा मात्र पाइन्छ। पुरुष लिङ्ग निर्धारण गर्ने भूमिकाको अतिरिक्त Y गुण सूत्रले अण्डकोषको निर्माणलाई सक्रिय पार्ने, टेस्टोस्टेरोन जस्ता पुरुष हर्मोन उत्पादन गर्ने, शुक्राणु उत्पादन र विकसित गर्न मद्दत गर्ने र पुरुषको










शारीरिक लक्षणहरू जस्तै दाह्री, जुँगा, गहिरो आवाज र भाले पाराको मांसपेशीको वृद्धि विकास गर्ने गर्दछ।

कोलेस्ट्रोल एक प्रकारको स्टेरोइड लिपिडका रूपमा चिनिन्छ। तन्तुहरू, रगतको प्लाज्मा, कलेजो, मेरुदण्ड र मस्तिष्क जस्ता भागमा प्रशस्त रूपमा भेटिने कोलेस्ट्रोलले शरीरको जैविक तथा रासायनिक प्रक्रियामा महत्वपूर्ण भूमिका खेल्छ। रगतमा कोलेस्ट्रोलको मात्रा अधिक रहँदा यसले हृदयरोग निम्ताउने सम्भावना रहन्छ । कोलेस्ट्रोलले हाम्रो हरेक कोषिकाको झिल्ली निर्माण गर्न र त्यसलाई स्थायित्व दिन कोलेस्ट्रोलको महत्वपूर्ण भूमिका हुन्छ । कोलेस्ट्रोलबाट नै हाम्रो शरीरले भिटामिन–डी निर्माण गर्ने गर्छ ।













शरीरलाई आवश्यक पर्ने विभिन्न स्टेरोइड हार्मोनहरू जस्तै कोर्टिसोल, कोर्टिसोन, एड्रेनल ग्रन्थिमा हुने एल्डोस्टेरोन र सेक्स हार्मोन प्रोजेस्टेरोन, एस्ट्रोजेन र टेस्टोस्टेरोनको निर्माण समेत कोलेस्ट्रोल बाट नै हुने गर्छ। मस्तिष्कको एउटा न्युरोन र अर्को न्युरोन बीचको सञ्चार स्थापित गर्ने तथा प्रतिरक्षा प्रणालीलाई स्फूर्त राख्ने काममा समेत कोलेस्ट्रोलको महत्वपूर्ण भूमिका रहने गर्छ।

पुरुष अण्डकोष भित्र रहेको घुम्रिएको सिमिनिफेरस ट्युब भित्रको जर्म सेललाई कोलेस्ट्रोलबाट निर्मित टेस्टोस्टेरोन हर्मोन तथा फोलिकल स्टिमुलेटिङ हर्मोनले वीर्यको स्टिम सेलका रूपमा विकास गर्छ। उक्त जर्म सेल निकै धेरै पटक टुक्रिएर टाउको र पुच्छर भएको टेढपोल आकारमा विकसित भएपछि











पुरुषको शुक्राणु अण्डकोष भित्र मानव वीर्य तयार बन्छ ।

अण्डकोष क्वोइलका रूपमा बन्डलहरू बनेर रहेको साना ट्युबहरूले भरिएको हुन्छ । त्यसलाई तन्काउने हो भने तिनीहरू आधा माइल लामो हुने गर्छ। हरेक उमेर पुगेको पुरुषको उक्त ट्युबले प्रतिसेकेन्ड औसत एक हजार नयाँ शुक्राणु उत्पादन गर्छ। हरेक दिन लगभग एक सय मिलियन नयाँ शुक्राणु बनाउने पुरुषको अण्डकोषले जीवनभरमा दुई ट्रिलियनभन्दा बढी शुक्राणु बनाउने गर्छ।

त्यसमा पनि अत्यन्त ताजुब लाग्ने पक्ष के छ भने हरेक शुक्राणुले अर्को शुक्राणु भन्दा फरक प्रकारको आनुवंशिक कोडको प्याकेज बोकेको हुन्छ ।













टाउको र पुच्छर दुवै हुने मानिसको शुक्रकीटको आकार मात्र ०.०५ मिलिमिटर हुने हुँदा माइक्रोस्कोपको सहायताले देख्न सकिन्छ । मानव अण्डा भने करिब ०.१ मिलिमिटर हुने हुँदा आँखाले देख्न सकिने सम्मको हुन्छ। जब शुक्राणु अण्डामा प्रवेश गर्छ, गर्भधारण सम्पन्न हुन्छ। शुक्राणु र अण्डालाई संयुक्त रूपमा जाइगोट भनिन्छ। जाइगोटमा एक बच्चा जन्माउन आवश्यक पर्ने सबै आनुवंशिक जानकारी (डीएनए) हुन्छ। आकारमा मात्र ०.१ मिलिमिटर हुने जाइगोटको तौल ०.००४ मिलिग्राम हाराहारीको हुन्छ। उक्त जाइगोट नै वास्तविक मानव हो। जसको अथाह बढ्ने क्षमताका कारण मानव जीवन सम्भव बनिरहेको छ।











जीवन्त शक्ति बोकेको मात्र ०.०५ मिलिमिटरको शुक्रकीटबाट बनेको ०.१ मिलिमिटरको मात्र ०.००४ मिलिग्राम हाराहारी तौलको सूक्ष्म जाइगोटको तागतमा तपाईं हामी आज अस्तित्वमा रहनु पक्कै सामान्य विषय ठान्न नसकिएला। यो सूक्ष्मताभित्र लुकेको काबिलता निकै अर्थपूर्ण देखिन्छ ।

आजको हाम्रो दुर्भाग्य के रहेको छ भने पश्चिमा विज्ञानमा आधारित रहेका सैद्धान्तिक ज्ञानले पैदा गरेका कतिपय विज्ञहरूलाई सूक्ष्मताको तागतबारे बिरलै एहसास हुने गरेको भेटिन्छ।

एटम बमको कुरा गर्ने हाम्रा सैद्धान्तिक डिग्रीधारी निकै ठूलो जमात, सबै भन्दा सूक्ष्म प्रवृत्तिको चेतना, चेतना भन्दा सूक्ष्म आत्मा र संयुक्त आत्मा













निर्मित परमात्माबारे नकारात्मकता मात्र आफ्नो मथिंगल भरेको भेटिन्छ । त्यति सम्म त ठिकै थियो, अर्काको स्वतन्त्रताको दायरा नाघेर औरा, चेतन शक्ति, आत्मा र परमात्माबारे आफ्नो धारणा राख्ने वर्गलाई हरकुनाबाट आक्रमण गर्न उद्यत भेटिन्छ।

प्रकृतिको नियम नै यस्तो छ कि जोसँग अलिकति सेन्स बचेको हुन्छ उसले नै ननसेन्स आचरणका मूर्खतालाई सहजतापूर्वक लिएर काग कराउँदै गर्छ पिना सुक्दै गर्छ भन्ने सूक्तिसँग मिल्ने व्यवहार प्रदर्शन गर्छ। किनकि नैतिकता अनैतिक हैन, नैतिक आचरण बोकेको पात्रमा मात्र मिल्छ । सोमत बजारमा बिक्रीमा भेटिँदैन ।

यथार्थमा हाम्रो जीवन र शरीर मात्र सूक्ष्म एकाइहरूको संरचना नरहेर यसले आफ्नो दैनिक









कार्य सुचारु गर्ने क्रममा गर्ने जैविक मात्र हैन, भौतिक र रासायनिक गतिविधि समेत अत्यन्त सूक्ष्म तहमा सम्पन्न हुने गरेका हुन्छन्। जब तपाईं नुन चर्को खाना खानु हुन्छ तब तपाईं अमन, अल्छीपन र गह्रौपन महसुस गर्नुहुन्छ। रगतमा हुने नुनको धेरै गाडापनले शरीरको बायोकेमिकल रियाक्सनको सन्तुलन बिगारिदिने र न्युरोनको चतुरतामा भाँजो हालिदिने गर्छ। पाचन प्रक्रियामा पैदा हुने हाइड्रोक्लोरिक एसिड जब शरीरको तापक्रममा १:१०० को स्तरमा घुलेको हुन्छ तब खानाको प्रोटिन र फाइबर जस्ता वस्तुको उचित पाचन सम्भव बन्छ। यसको अत्यन्त न्यून मात्र अधिकताले पूरै खाना अपच गराउँछ र थोरै मात्र अधिक भयो भने आमाशयको सातपत्रे र डिउडेनममा अल्सर पैदा









गरिदिन्छ ।

हाम्रा विज्ञहरू रगतमा अक्सिजनको मात्रा बढाउन रगतमा आइरनको मात्रा चाहिन्छ भन्ने बुझ्छन् । त्यसैले दूधमा प्रशस्त आइरन रहनुपर्छ भन्ने बताउने गर्छन् । प्रशस्त भनेको के हो ? कति हो ? त्योबारे भने अलि हेक्का भएको देखिँदैन। जस्तै २५० एमएलको एक गिलास दूधमा एक एमएलको १० लाख भागको एक भाग आइरन हामीलाई चाहिने अधिक मात्रा हो । योभन्दा एक भाग मात्र धेरै हुँदा यसको नकारात्मकता भोग्नुपर्ने हुन्छ। हामीले पिउने दूधबाट रगतको हेमोग्लोबिनले आइरन पाउने गर्छ। त्यसका लागि हामी आइरनको जरुरतको कुरा गरिरहेका हुन्छौ।

एक थोपा रगतमा लगभग तीन लाख वटा










हेमोग्लोबिन हुने गर्छ । हरेक हेमोग्लोबिनलाई उक्त आइरन फरक फरक रूपमा जरुरी पर्छ । भने पछि हरेक हेमोग्लोबिन भित्र अटाउने आइरनको आकार कति होला ? कसरी त्यति सूक्ष्म पदार्थ हाम्रो सेवामा हरसमय सक्रिय रहन्छ होला ? एउटा अत्यन्त सूक्ष्म एकाइको यति ठूलो शरीरमा हामीले अनुभूति गर्न सक्ने गरी पार्न सक्ने फरकलाई नजरअन्दाज गर्न सकिने स्थिति रहँदैन ।

मेडिकल केमेस्ट्रीमा इलेक्ट्रो केमेस्ट्री अन्तर्गत गरिएको रिसर्चबाट एक स्वस्थ मान्छेको शरीर भित्र मात्र एक एमएल एसिडले जति विद्युतीय सञ्चार गराउने गर्छ, बाहिरी जगत्मा त्यति बराबरको विद्युतीय सञ्चार गराउन दुई लाख एमएल एसिडको जरुरत पर्छ भन्ने प्रमाणित भएको छ ।













मुटुको दर कम हुने लक्षणहरूको उपचारमा अथवा शल्यक्रिया गर्नुभन्दा पहिले वा अधिक विषाक्तता दिने ब्रोन्कियल स्रावलाई निको गर्न दिइने अन्तिम उपचार अन्तर्गत ३ मिलिग्राम एट्रोपिनको इन्जेक्सन दिने चलन छ। ६५ मिलिग्राम लाई एक ग्रेन (gran) भन्ने गरिन्छ । एट्रोपिनको एक लाख भागको एक भाग मात्र रगतमा पुग्दा यसले आँखामा असर गर्छ । धमनी रातो बन्छ । एक मिलिग्रामको १० लाख भागको एक भाग बराबरको एमोनियाले समेत आँखाको धमनी रातो पारिदिन्छ। आँखामा त्यत्तिकै खराबी एक ग्रेन नुनको क्रिस्टलको एक हजार–लाख भागको एक भाग बराबर मात्राले पु¥याउने गरेको भेटिएको छ । तर, नुनविना हाम्रो जीवन चल्दैन ।











माथि उल्लेख गरिए जस्तै संसारमा यति धेरै उदाहरण छन् जहाँ स्वाभाविक रूपमा दृश्य वस्तुहरू अदृश्य रूपमा र अदृश्य वस्तुहरू दृश्य वस्तुमा नियमित रुपान्तरण भइरहेको हुन्छ। संसारको गतिविधि त्यही नियम अन्तर्गत सञ्चालन भइरहेको हुन्छ। हाम्रो अज्ञानता वा विषयवस्तुलाई गहिरोसँग अवलोकन गरी बुझ्ने बानी नभएका कारण यस्ता कुरा हामीलाई कहिलेकाहीँ रहस्यमय जस्ता लाग्छन्। जसरी भौतिक पदार्थलाई ऊर्जामा रूपान्तरण गर्न सकिन्छ, त्यसरी नै ऊर्जालाई समेत भौतिक रूपले व्यक्त गर्न र भौतिक पदार्थका रूपमा रूपान्तरण गर्न सकिन्छ। यो वैज्ञानिक मान्यता प्रकृतिको चेतन र अचेतन दुवै क्षेत्रमा लागू हुन अनिवार्य छ।













आशा गरौँ निकै छिट्टै विज्ञानले हामीमा रहने चेतनाबारे निकै महत्वपूर्ण सूचनाहरू प्राप्त गर्न र प्रमाणित गर्न सक्षम हुने छ । त्यसले स्वाभाविकै रूपमा औरा, चेतन शक्ति, आत्मा र परमात्माबारे विश्वव्यापी कौतूहल मेट्न सहयोग पुग्नेछ । किनकि हाल यो मात्र अनुभव र अनुभूतिको मार्गबाट मानिसले यस्ता विषयवस्तुबारे ज्ञान प्राप्त गर्ने गरेका छन्। अन्य विकल्प भेटिएको छैन।

## ऐतिहासिक विडम्बना

एकादेशमा एक कालमा एउटा घरमा बिरालो पालेको थियो । घरमा मृतककोश्राद्ध गर्दा बिरालोले छोइछिटो गर्ला भनेर बिरालोलाई खम्बामा बाँधेर











पितृश्राद्धगर्ने गर्दथे त्यो घरका जेठ्दाई । जेठ्दाईको जेठो छोरो गोपालकृष्णेलाई आफू सातवर्षको हुँदा आफ्नो बुवाले पितृश्राद्धमा बिरालोलाई खम्बामा बाँधेर कार्य सम्पन्नगरेको आफैँले देखेको आजसम्म याद छ । गोपालकृष्णे स्कुलको पढाइ पूरा गरी आइएस्सीपढ्न काठमाडौँ पुग्यो । घरबेटीको छोरीसँगको लसपस बाहिरिएर करकापमा ललितासँग बिहेगरेको गोपालकृष्णे कुकको जागिरमा बेलायत हानियो घर बेटी सासूको पैसामा उनैकी छोरि ललिता सँगै ।

रेस्टुरेन्टमा कुकको काम गर्दैगर्दा पिताको पहिलो श्राद्धको तिथि आजै रहेको भनी गोपालकृष्णे लाई ललिताको फोन आयो । आफै काम गर्ने रेस्टुरेन्टका कुक हेल्पर साथी पण्डित श्रीले श्राद्धको समान सबै













बेच्ने हुँदा सामान सहित श्राद्ध गरिदिन आउन पण्डित श्रीलाई भनियो । आउने जाने १० पाउन्ड, श्राद्धको १५ पाउन्ड, सामानको १० पाउन्ड तथा खानामा आधा लिटर दूध र चार वटा केरा खुवाउने सर्तमा पण्डित श्री आउन राजी भए ।

सामानसहित पण्डित श्री आउने भएकाले अन्य टन्टा सकियो। गोपालकृष्णेलाई बिरालोको चिन्ता भयो। उसले बुझेको उसको घरको चलनमा पितृ श्राद्धमा खम्बामा बिरालो बाँध्नु अनिवार्य थियो । लन्डनमै एक बिरालो पाल्ने अफ्रिकन मूलकी सिना भन्ने नाम भएकी आप्रवासी गोपाल कृष्णेको अगाडिको कोठामा बस्दथी। उसले बिरालो पालेकी थिई । उपाय नलागे पछि गोपाल कृष्णेले सिनासँग आफ्नो समस्या राख्यो। सिनाले बिरालोलाई कुनै









पनि खानेकुरा खुवाउन नपाउने सर्तमा सय पाउन्ड भाडामा दुई घण्टा बिरालो बाँधेर राख्न पाउने सहमति बन्यो ।

पण्डित श्री समयमै आइपुगे । गोपाल कृष्णेले सिनासँग बिरालो मागेर ल्यायो र खम्बामा बाँध्यो । पण्डितले त्यो बिरालो नचाहिने भन्दा गोपाल कृष्णेले पण्डितलाई पैसाका लागि मात्र काम नगर, पितृ परत्र सार्ने क्षमता समेत विकास गर भन्ने सल्लाह दियो। मैले नजानेको भए त डुबाउने रहेछौ सम्म भन्न भ्यायो । ललिताले पण्डित श्रीले बताएको कुरा त ठिकै हो किन नचाहिने काममा सय पाउन्ड खर्च गरेको भनिन्। गोपाल कृष्णेले ललितालाई नजानेको नबुझेको विषयमा नबोल्न सुझायो।










बिरालो बाँधेर पितृ श्राद्ध सम्पन्न भयो । गोपालकृष्णेलाई आफू सबै भन्दा जान्ने प्रमाणित गर्न पाएकोमा खुबै आनन्द महसुस भयो। दुई घण्टा बिरालो भाडामा लिए बापत सय पाउन्ड भाडास्वरूप सिनाले पाउने सर्त रहे पनि फुर्केर गोपालकृष्णेले २० पाउन्ड टिप्ससहित १२० पाउन्ड सिनाको हातमा थ्यान्कु म्याडम भनी थमायो। त्यो दिन गोपालकृष्णे र सिना दंग देखिन्थे । पण्डित श्री र ललिता अचम्ममा परे । कुरो सकियो ।

गोपालकृष्णेको बिरालोलाई खम्बामा बाँधेर पितृ श्राद्ध गर्ने चलन आज पनि चालु छ। उसले आफ्नो सन्तान लाई पनि यो हाम्रो चलन हो नछोड्नु भनी सिकाएको छ, कसरी बाँध्ने भनी देखाएको छ। उसलाई लाग्छ, उसको चलन उसका छोराछोरीले











समेत भविष्यमा नियमित राख्ने छन् ।

गोपालकृष्णेको परिवारमा आज बिरालोलाई खम्बामा बाँधेर पितृश्राद्धगर्ने जुन चलन चलेको छ, ठीक त्यस्तै हाम्रा वेदका मन्त्रहरू मन्त्रका रूपमा जप्न मात्र अस्तित्वमा रहेको मान्यता हाम्रो समाजमा विकास भएको छ । दैनिक मन्त्र उच्चारण गरे धर्म हुने ठानिन्छ । दैनिक मन्त्र उच्चारण गर्ने, खास खास तिथि मितिमा पण्डित र ब्राह्मणलाई ल्याएर टीकाटालो गरी दक्षिणा टक्र्याउने र मीठो भोजन गर्ने गर्दा त झन् मरणो प्रान्त सिधै स्वर्ग पुगिने विश्वास गरिन्छ ।

अर्काको खेतको पानीको पालो मिचेर पाखुरा सुर्काउदै कोदाली ताकेर थर्काउँदै आफ्नो खेतमा पनि लगाएको अपराध होस् वा रातिराति अर्काको













भागको पानी चोरेको कसुर मन्त्र उच्चारण गरे फच्चे हुने भ्रममा जिउने गरिएको छ । अरूले नदेख्दा घाँस चोरेर काटेको कसुर होस् वा राजस्व मारेर काठमाडौँमा घरघडेरी जोडेको अपराध सबै पण्डित र ब्राह्मणलाई खुसी बनाउँदा आउने ब्राह्म–वाक्य तथास्तुबाट काटिने गहिरो छाप समाजमा व्याप्त छ । पाप कार्य सुचारु राख्ने र त्यस बापत चोखिन नियमित पूजाआजा गर्ने चलन धेरैको घरको नियमित नियति बनिदिएको छ । जहाँ पाप त्यहाँ फलिफाप, जहाँ अपराध त्यहाँ नेताको आशीर्वाद पुग्ने गरेको छ । यस्तै यस्तै मन्त्रले नयाँ मुलुकलाई निराशाको डिप्रेसनले गाँजेको छ ।

लुटको धन्दामा संलग्न हरेक व्यक्तिको सेवामा उनीहरुलाई पुलिस प्रशासन र अदालती कारबाही











वाट बचाउन टोलटोल र गाउँगाउँसम्म ठूला राजनीतिक पार्टीका नेताका प्रतिनिधिको संरक्षणमा ठुटे नेताहरू कमिला सरि छ्याप छ्याप्ती भेटिन्छन्। सेवाको जरुरतको अलिकति कुरो मात्र चुहाइदिनु पर्छ, सेवा गर्नेको हानाथाप परिहाल्छ। वास्तवमै राणा कालीन सिंहदरबार टोलटोल र गाउँगाउँसम्म पुगेको अनुभूति हुन्छ । आफ्नो लुटको कमाइको बढीमा ७० प्रतिशत सम्म कमिसनमा जाला, मुलुकको सरकारले सबै प्रकृतिको अपराधबाट सजिलै जोगिन सकिनेमा अघोषित तर व्यवहारिक ग्यारेन्टी गरिदिएको छ। पैसा खर्च गर्नसक्नेलाई निजी स्वतन्त्रता र लुटमा छुटको समाजवादको गहिरो अनुभूति गर्ने अवसर उपलब्ध हुने गरेको छ। जुन समाजमा विद्वत्तम कहलाएका वर्गहरू विकवा













बन्दछन्, विना मेहनतको धनले भौतिक सुखको लागि शक्ति, सम्पत्ति र प्रतिष्ठा लिने होडमा लिप्त हुन्छन् मुलुक संवेदन हीन बन्दछ। त्यसको उपचार वैदिक ज्ञान र विज्ञानको अवधारणा समाजमा प्रस्ट हुने गरी सम्प्रेषण गरेर मात्र जान चेतना मार्फत सम्भव हुने गर्दछ। त्यसै सन्दर्भमा विज्ञानले समेत पहिचान गरी प्रमाणित गरिसकेको वेदका गहन भौतिक (Physics), मनोवैज्ञानिक तथा आध्यात्मिक पक्षलाई वैज्ञानिक दृष्टिकोणबाट मूल्यांकन गरि हेर्दा बुझिने र महसुस गरिने भावार्थको सँगालो प्रस्तुत गर्ने अन्तर्गत वेदमा विज्ञान अभियान अस्तित्वमा देखिएको हो।










# शान र मसान विज्ञान

जसरी पुरानो घर छोडेर मानिस नयाँ घरमा पुग्छ त्यस्तै मुक्ति नमिले सम्म हरेक जीवको आत्मा आफ्नो कर्म र आशक्ति  अनुरूप एक शरीरबाट अर्को शरीरमा चोला फेर्ने गर्दछ। कतिपय तन्त्र विद्यामा लाग्ने हरुको भनाइ सुन्ने हो भने उनीहरूको मान्यतामा मानिसको शरीर मात्र मर्छ। तृप्त आत्मा र अतृप्त आत्माको आफ्नै कथा हुने गर्दछ।

संसारमा लगभग ८४ हजार जीवन वा चोला भेटिन्छ।

हरेक मानिसको जीवनमा धेरै इच्छा र चाहना हुन्छ। तीमध्ये कुनैकुनै चाहना उनीहरूमा यति तीव्र भएर












गढिदिन्छ कि त्यो चाहनाको हद प्रकृतिको कुनै शक्तिले उसबाट छुटाउन सक्दैन।

उक्त चाहनाको तिर्खा उसको आत्मा सँगै टाँसिएर आशक्तिको रुपमा बसिदिन्छ। जब सम्म उसको आत्मामा गढेको इच्छा पूरा हुन्न तब सम्म उसको आत्मा मुक्त बन्न सक्दैन। मुक्तिको अर्थ आत्माले एउटा शरीर छोडेपछि अर्को शरीरमा पुग्ने मरण र जीवनको चक्रबाट मुक्ति पाउनु हो। जसलाई जीवनको अन्तिम लक्ष्य र परमात्मा सँगको मिलन भनी हाम्रो मान्यताले विश्वास गर्छ।

यहाँ तपाईंको मनका अत्यन्त गहिरो सँग गढेको इच्छा बारे कुरा गरौँ । मानौँ, तपाईंको मन कुनै उमेरमा अर्को कसैको मनसँग इनट्यागलमा पारिदियो । क्रस परेको भनिने तपाईंको मन उससँग











प्रेममा पारिदियो। तपाईंमा ऊसँग धित मर्ने गरी संगत गर्ने गहिरो इच्छा जाग्यो। मृत्यु परान्त तपाईंको त्यो इच्छामा कुनै कमी हुन सकेन। तर, ऊसँग धित मर्ने गरी समय बिताउने मौका पनि तपाईं लाई मिलेन। तपाईंको काल गतिले मृत्यु भयो।

अर्को जन्ममा तपाईं ऊसँग संगत गर्न पाउने र संगत गरी तृप्त बने पछि मात्र तपाईंको मुक्ति सम्भव बन्छ। अब तपाईंको आत्मा त्यसमा गाडेको इच्छा बाट मुक्त हुन पनि तपाईंको पुनर्जन्म जरुरी हुने हुँदा यो जीवनमा तपाईं मुक्त हुने सम्भावना रहन्न। कम्तीमा एक वा दुई अर्को जीवन जरुरी हुन्छ।

मानौँ, तपाईंको गुलियो खाने इच्छा कहिल्यै पूरा भएन। अब कम्तीमा अर्को जन्ममा गुलियोमै लाग्ने













किरा भएर किन नहोस् तपाईंको इच्छा तृप्ति पछि मात्र तपाईंको आत्मा मुक्ति हुन्छ। त्यसपछि पहिला स्वर्गको भगवान् बनी मानव बन्ने सौभाग्य मिल्यो र मानव बनेपछि सबै तारतम्य भने जस्तै बन्याँ भने तपाईंको आत्मा मुक्त बन्न सक्ने सम्भावना रहन्छ ।

मानिसको अकाल मृत्युको समयको हाम्रो मान्यताको कथा भने अलि फरक छ। हाम्रा लोक कथा र संस्कृतिमा भूतहरू एक आम मनोवैज्ञानिक अलौकिक प्राणी हुन् । हाम्रो मान्यतामा तिनीहरू मृत व्यक्तिको आत्माबाट सिर्जना भएका अजिबका चिज हुन्। जीवित रहँदा आफ्नो पूरै उमेर जिएर जीवनको सुख दुःखको पूर्ण अनुभूति गरेर काल गतिले मर्ने उनीहरूको चाहना विपरीत अल्पायुमा मर्नुपर्ने परिस्थितिको सिकार बनेको मानिसको









आत्मा वास्तवमा शान्त आत्मा हुन सक्दैन ।

मनमा थुप्रै चाहना मनमै रहेका उनीहरूमा आत्मा पूर्ण रूपमा शुद्धीकरण नबनेको आफ्नो इच्छा र चाहना पूरा गर्न नपाएका कारण भड्किएको आत्माका रूपमा रहेको हुन्छ। त्यसरी भड्किएको आत्मा न त स्वर्ग वा नर्क नै जान सक्छ न पुनर्जन्ममा नै पुगिरहेको हुन्छ न त मुक्तिको पथमा नै जान पाएको हुन्छ ।

हिंसात्मक मृत्युको कारण होस् वा कुनै दुर्घटना वा कुनै आत्महत्या तिनीहरू सबै नै अतृप्त आत्माको कारक बनिदिन्छ। काल गतिले भएको मृतकको जीवनका अनिश्चित मामिलाहरू जस्तै उनीहरूको अन्त्येष्टि नै नहुने, उचित संस्कारका साथ अन्त्येष्टि नहुनु वा झुटा अभियोगको वा बेइज्जती बापतको









तिरस्कारको न्याय नमिली हुने मृत्यु आदिले समेत मानिसको आत्मा तृप्ति सम्भव बन्दैन। त्यो अवस्थामा उक्त आत्मा भड्किएको आत्मा बन्छ।

मनको इच्छा पूरा नहुँदै अकाल मृत्युवरण गरेका आत्मा भूत बन्छ। प्रेममा धोका पाएकी महिला किच्कन्ने बन्छिन्। काजकिरिया नपाएका वा रीत अनुरूप नभएकाहरू मसान बन्छन्। बच्चा जन्माउँदै गर्दा आफ्नो प्यारो सन्तानको अनुहार समेत हेर्न नपाएकी महिला तथा निर्दोष हुँदा हुँदै गाली, बेइज्जती, घृणा, तिरस्कार वा अत्याचार बापत न्याय नमिलेको महिला चुडेल बन्छिन्। त्यस्ता पुरुष मुर्कुट्टा बन्छन्। आफ्नै कुलका वा परिवारबाट न्याय र सम्मान नमिलेकाहरू बिरका रूपमा आउँछन्। मनमा गाडेको इच्छा पूरा हुन नपाएकाहरू प्रेतात्मा






बन्ने गर्छन्।

पर्यावरण बिग्रने गरी जंगल र जमिनको भूभागको दुरुपयोग गर्नेहरूबाट अन्यायमा परेकाहरू विभिन्न जनवारको आकृतिमा तर्साउने आत्मा बन्छ। जल वा पानीको दुरुपयोग गर्नेहरूबाट अन्यायमा परेकाहरू नाग, गोही वा कछुवाका रूपमा सताउने आत्मा बन्छ। हावा र आकाशको दुरुपयोग गर्नेहरू बाट अन्यायमा परेकाहरू तथा आफ्ना पितृ सम्मानमा चुकेकाको प्रभावले वायुको रूपमा सताउने प्रेतात्मा जन्माउँछ ।

उपचार पद्धतिको सन्दर्भमा जस्तै धामी झाँक्री मान्यतामा सय राज कुमारी भनिने दुष्ट राक्षसहरू प्रभावमा बच्चाहरूमा हैजा, झाडाबान्ता र पखालाले शरीर सुक्खा बनाउने रोग पैदा गर्छ। जुन








डायरियाको ब्याक्टेरियालाई लक्षित गरेको बुझिन्छ। ओखती र झारफुक हुने यो विधिमा नुन, चिनी, पानी र हर्बल प्रयोग हुन्छ।

६ अथवा आठ मुखे इन्द्रेणी राक्षसहरूको प्रभावमा मानिस फेन्ट हुने र मुख सुक्ने लक्षण हुन्छ। नौ ताराको प्रभावमा आँखामा इन्फेक्सन हुने र प्रकाशका कारण हेर्न समेत गाह्रो हुने आँखाको नानी फुल्ने समस्या देखिन्छ।

नागका कारण भएको समस्यामा पनि ज्वरो आउने, नेपाली व्यथा लाग्ने, कुष्ठरोग र पक्षाघात सम्म हुने भनिन्छ।

छालामा ढिलो बढ्ने ब्याक्टेरियाका कारण कुष्ठरोग हुने र रोगसँग संक्रमणको समयमा ज्वरो आउने










हुन्छ। नागले सताउनुको कारक पानी, नदी र समुद्र आदिको विनाश र प्रदूषण मुख्य मानिन्छ ।

अकाल मृत्युवरण गरेका वा हिंसात्मक क्रूर आक्रमणमा मरिएका बाट हुने वायुको लक्षण अन्तर्गत घरमा पालेका बस्तुहरू बिरामी हुने, घरका परिवारको पेट दुख्ने, फियो दुख्ने र आन्द्रामा ब्याक्टेरियाका कारण धेरै ग्यास निस्केर हुने सुल आदि हुने लक्षण देखिन्छ।

बिरामी गाईबस्तुबाट सर्ने रोग, बिरामी गाई भैंसीको दूधबाट आउने विकृति समेत यो वर्गमा रहेको बुझिन्छ। यो अवस्थामा झारफुकको अलावा चरनमा जडीबुटी खाएको औषधीय मसला, बाख्राको पाठोको मासु खाने चलन हुन्छ। जुन औषधीय छ। अदुवा, लसुन, प्याज, बेसार आदिले













सुन्निएको फियो शान्त गर्छ ।

भूत प्रेतको संक्रमणमा बेस्सरी टाउको दुख्ने, रिँगटा लाग्ने र बान्ता आउने हुन्छ। जुन रगतमा अक्सिजनको सप्लाई कम हुने, नाकबाट श्वास लिँदा प्राप्त हुने नाइट्रिक अक्साइडको कमीमा प्रायः हुन्छ। मानसिक स्थिति अलि धेरै बिग्रिएर हुने पागलपन, डिप्रेसन एन्जाइटीमा हुने प्यानिक एट्याक, रेस्टलेसनेस, बेचैनी, चित्तको एकाग्रता नहुने, वाकवाकी लाग्ने, बान्ता हुने आदि हुनुलाई बिर लागेको भनिन्छ।

कहिले काहीँ कुनै दर्द नहुने तर मुखमा रगत आउने टीबी जस्तो बिमारमा समेत बिरको हात मानिन्छ। टीबी जस्तो रोगमा आयुर्वेदिक डाक्टरको काम हुन्छ। अरूमा मनोवैज्ञानिक उपचार जसले









दुखाइमा राहत दिने इन्डोरफिन, मुड स्थिर र खुसी बनाउने सेरोटोनिन, प्रेम र विश्वास जोगाउने अक्सिटोक्सिन र मस्तिष्कमा आनन्द दिने डोपामाइन जस्ता इन्जाइम बनाउन शरीरलाई उत्प्रेरित गर्ने गरी बिरामीको आत्मबल बढाउने काम हुन्छ ।

मसान लागेको लक्षण अन्तर्गत टाउको दुख्ने, चक्कर लाग्ने, मासु दुख्ने, हड्डीको जोर्नी दुख्ने र डर लागेका बेला हात, खुट्टा, शरीर काम्ने हुने गर्छ। पिशाच वा अगतिमा परेको आत्माले दिएको दुःख अन्तर्गत सानै उमेरमा मरेको आत्माको दोष भन्ने ठानिन्छ। त्यसको लक्षणमा ज्वरो आउने र बान्ता हुने मुख्य हुन्छ । अत्यन्त धेरै ज्वरो आउनेलाई राक्षसले दुःख दिएको अन्तर्गत राखिन्छ ।









मुटुमा गाँठो पर्ने, दुख्ने जस्ता मुटुको रोगलाई सिकारीको भूतको कर्तुत ठानिन्छ। जसको कारक तत्व जमिन र जंगलको विनाश र प्रदूषण मानिन्छ। हेलत्वमा परेकी, समाजले एक्लाएकी विधवा वा एकल महिलालाई डर देखाई वा करकापमा पारी जबरजस्त कायम गरेको अनैतिक यौन सम्बन्ध समाजमा पुगेर हुने बदमासीको डरले ज्वरो आउने, जिउ सुक्दै जाने, शरीरमा रगतको कमीले निलो धाप देखिने र कमजोरी हुने आदिलाई बोक्सी लागेको वा किच कन्नीले दुःख दिएको ठानिन्छ।

महिलाको हकमा आफ्नो लोग्ने अन्यत्र कसै सँग लागेर दोजियाको समयमा माया र स्याहार नपुगेकी महिलाको गर्भ तुहिने, आन्तरिक रक्तस्राव हुने, अनियन्त्रित रूपमा कुनै भागमा लामो समय प्रेसर










पर्ने गरी बस्नको कारण वा कुनै किरा आदिले डस्नाको कारण छालामा उत्पन्न रगतको निलो डाम बस्ने र सुरक्षित भविष्यको डरले मनोवैज्ञानिक बेचैनी हुने, मुटु दुख्ने, पेट दुख्ने आदिलाई समेत बोक्सी वा किचकन्नी वा चुडेलले सताएको भन्ने गरिन्छ ।

यस्ता समस्यामा मनोवैज्ञानिक सबलता दिने सबै प्रकारका उपाय अपनाइने गरिन्छ। ग्रह काटिएकाले पतिको मति सुध्रने र भविष्य उज्वल बन्ने भरोसा दिलाउने देखि मीठो खानपान र हर्बल ओखतीबाट व्यक्तिको सामाजिक संसर्ग बढाउने र उसलाई सामान्य दिनचर्यामा फर्काउन कोसिस गरिन्छ ।

प्रकृतिमा प्राकृतिक रूपमै विभिन्न घटना नियमित घटि रहेका हुन्छन्। घटेका घटना मध्ये अत्यन्त धेरै घटना एक सर्वसाधारण मानिसका लागि अचम्मको













नौलो हुन्छ।

जस्तैः मान्छे जलाउने नदी किनार वा गाड्ने स्थानमा रहेको मृत शरीरको भग्नावशेष बाट मिथेन ग्यास निस्कन्छ। जब मिथेन ग्यास अक्सिजनको संसर्गमा आउँछ त्यहाँ आगोको ज्वाला बन्छ। आगोका लागि चाहिने थोरै इन्धन र हावा दुवै हुने मसान घाटमा रातको धेरै अँध्यारो समयमा सानो आगो समेत ठूलो देखिने र त्यो उज्यालोमा देखिएको आकृति मन मनै कल्पना गरिएको भूत वा प्रेतको आकृति सँगै मिल्न सक्छ ।

जसरी बादललाई जेको आकृति सम्झिएर हे¥यो त्यस्तै अन्दाजको आकृति तयार हुन्छ । यहाँ पनि त्यस्तै हुन सम्भव बनेको हुन्छ। त्यो देखेर तर्सिएको मनमा उब्जेको डर मानिसमा लामो समय देखि











अन्तरात्मामा गडिएर रहेको अन्य डरसँग मिली प्रस्फुटन हुने माध्यम बनेको भेटिएको छ ।

त्यो भनेको मानव संरचनामा रहेका विभिन्न तत्वको विकिरण र प्रकृतिको विकिरण बीचको संसर्ग स्पार्क जस्तो भई टुटेर बिथोलिन पुगे जस्तै हो। त्यसलाई हामीले परम्परागत रूपमा मसानका कारण विकास भएको मनोवैज्ञानिक रोग भन्ने नाम दिएका छौँ ।

यदि उक्त मुर्दास्थलमा एक भर्खरकी राम्री अविवाहिता कन्याको देह सेलाइएको थियो, बिरामीको ज्ञानमा त्यो कुरा रहेछ, उक्त समयमा बिरामीलाई त्यो घटना याद आएछ भने उसले त्यहाँ किचकन्नी देखिदिने गर्छ। मानौँ कुनै भद्र महिला डेलिभरीका कारण मरेकी र जलाइएकी रहिछन् भने त्यही घटनामा बिरामीले चुडेलको अनुभूति गर्न













सक्छ। जेसुकै देखिएको होस्, तर्सिएको बखत बिरामीको सातो जानु नौलो भएन ।

आत्मबल कमजोर रहेको अवस्थामा उक्त व्यक्तिलाई मनोवैज्ञानिक उपचार चाहिन्छ। अतृप्त आत्मा वा भड्किएको आत्मा शान्त बनाएको नाममा यथार्थमा स्वयम् बिरामीको आफ्नै कमजोर मनस्थितिले खस्किएको आत्मा बलिष्ठ पारिएको हुन्छ। त्यो भनेको उसको दबेको आत्मबल उच्च बनाइएको हुन्छ। आजको आधुनिक औषधी विज्ञानको मानसिक रोगको सन्दर्भमा गरिने वैज्ञानिक भनिने उपचारको विधिको चुरो समेत आखिर अन्ततः त्यही नै हुने गर्छ।

परम्परागत मान्यताको चुरोमा पुगेर हेर्दा धामी झाँक्रीको उत्पत्तिको मूल स्रोत भगवान् शिव नै हुन्।











सृष्टिको सञ्चालनमा जुन सन्दर्भमा महादेवले सप्तऋषिको परिकल्पना गरे त्यस्तै तिनीहरूको विचारको व्यावहारिक उपयोगका लागि हरेक ऋषिको सहयोगीका रूपमा सात भाइ धामी झाँक्रीको परिकल्पना गरेको देखिन्छ।

मानव र प्रकृति बीचको सामञ्जस्यताको अभावमा पैदा हुने मनोवैज्ञानिक बिरामीको रोगको जुन विन्दुमा सहजता बिग्रिएको हो त्यही विन्दुमा उपचारका लागि धामीझाँक्री विद्याको विकास भएको देखिन्छ ।

अर्कोतर्फ अर्धनरेश्वर भनिने महादेवको आधा भाग वा पत्नी पार्वती आफैँ बोक्सी ज्ञानको प्रवर्तक थिइन्। उनले शक्तिका रूपमा बोक्सी ज्ञान आफ्ना सात बहिनीहरू लाई दिइन्। सात बहिनीकी कान्छी













बहिनीबाट बोक्सी ज्ञान वैचारिक रूपमा मानिसमा हस्तान्तरण भएको ठानिन्छ।

समाजमा धामीझाँक्री र बोक्सीको भूमिका समग्रमा शिव-पार्वतीको जस्तो निर्माण र विनाश बीचको संयोजन मार्फत हुने नियमित प्रकृतिको सञ्चालनको चक्रको नियति नै बुझिन्छ । तिनीहरू समाजमा एकापसमा विपरीत भूमिकामा रहेर मानवता कायम गर्न नै समर्पित रहेको भेटिन्छ ।

तन्त्र शास्त्र र शिव पुराणका अनुसार बोक्सी एक महिलाका रूपमा चिनाइने अदृश्य शक्तिको स्रोत हो जुन सामान्य देवता वा देवीको भन्दा फरक प्रकृतिको शक्तिको तरंग निर्मित छ। बोक्सीमा निहित उक्त प्राकृतिक शक्तिको विभिन्न रोग निको पार्ने क्षमता रहन्छ। बोक्सीको शक्तिको तरंग देवता,









देवी, भूत, प्रेत, पिशाच वा डंकिनी आदिको तरंग एकापसमा जोड्न वा छुट्टाउन सक्ने प्रकृतिको हुन्छ।

बोक्सीमा निहित तरंग कुनै पनि देवता, देवी, भूत, प्रेत, पिशाच वा डंकिनी आदिको शक्ति मानव र प्रकृति बीचको संसर्गको शक्तिको तरंगसँगै जोडिदिन वा छुट्याइदिन सक्षम छ।

मानव र प्रकृतिबीचको संसर्गबीच उक्त शक्तिका तरंगहरू जोडिँदा मानिसमा असहजता आउँछ भने छुट्टिँदा सहजता आउने हुँदा मानिसलाई आफ्नो असहजता बाट मुक्ति मिल्छ ।

मानव र प्रकृतिबीचको बिग्रेको असहजतालाई मानिस आफैंले आफ्नो आत्मबललाई सकारात्मक सोच मार्फत दरिलो गरेर आफैंले मात्र पुनः सहज









पार्न सक्छ । जसरी शरीर भित्रको रोग शरीर आफैंले आफ्नो रोग प्रतिरोधी क्षमता विकास गरेर जित्न सक्छ । त्यसमा लिइने ओखती, विभिन्न सर्जरी, अक्सिजन, हर्बल, हिलिङ खाद्य, योग, ध्यान आदिले स्वहिलिङमा सहजीकरण गरिदिन्छ। त्यसरी नै मानिसको वातावरण सँगको बिग्रिएको बाहिरी असहजता समेत मानिसले आफ्नो आत्मबल बलिष्ठ परेर मात्रै आफैंले सहज गर्न सक्छ ।

उक्त प्रक्रियामा हाम्रो परम्परागत शैलीको धामी झाँक्री जस्ता विधि, देवीदेवताको पूजा आराधना, हर्बल ओखती, मन्त्रतन्त्र (विभिन्न साधन), ध्वनि, योग, ध्यान, सामाजिक उत्सव आदिले सकारात्मक सोच विकास गरी शरीरलाई आफैं आफ्नो वातावरणको संसर्गसँगै भएको असहजता सहज








गर्न चाहिने पर्याप्त आत्मबल विकास गर्न सहजीकरण गरिदिन्छ ।

जुन प्राकृतिक प्रक्रिया शान प्रक्रिया हो । त्यो मसान र मसान वर्गको शक्तिको हस्तक्षेप वा अवरोध हटाउन र शरीरलाई आफ्नो प्रकृति सँगको संसर्ग पुनः सहजता पूर्वक कायम गर्न निर्णायक बनिदिन्छ ।

स्वास्थ्य अवस्थाको दृष्टिले मानसिक रोग भनेर एक व्यक्तिको सोच, भावना वा व्यवहार वा कुनै दुई वा तीन वटैमा आउने परिवर्तनको कारणबाट उक्त व्यक्तिलाई पुग्ने कष्ट तथा काम सम्पन्न गर्न हुने कठिनाइलाई जनाउँछ। अन्य रोगमा जस्तै मानसिक रोगसमेत कुनै गम्भीर अवस्थाको हुन्छ भने कुनै सामान्य प्रकृतिको हुन्छ। मानसिक रोग भए तापनि









सामान्य देखिने र व्यवहार गर्ने मानिसको मानसिक रोगलाई सामान्य प्रकृतिको मानसिक रोग अन्तर्गत राखिन्छ। असामान्य देखिने, महसुस गर्ने र व्यवहार देखाउनेलाई गम्भीर प्रकृतिको मानसिक रोग भनिन्छ।

तपाईंको अन्तरात्माले जुन सोच तपाईंको आफ्नो हितमा रहेको र मानवताको समेत कल्याण गर्ने प्रकृतिको हुन्छ भनी विश्वास गर्छ त्यसलाई सकारात्मक सोच भनिन्छ। जुन सोच तपाईंको पक्षमा वा विरुद्धमा नै होला तर त्यो मानवता विरोधी हो भनी यकिन हुन्छ, त्यसलाई नकारात्मक सोच भनिन्छ ।

मानिसमा हुने सचेत दिमाग र अचेत दिमागका कारण हरेक मानिसमा सकारात्मक र नकारात्मक










दुवै सोचको विकास हुने गर्छ। समय र परिस्थिति अनुरूप कुनै पनि मानिसको सोचमा जस्तोसुकै विचार वा भावनाहरू आओस् त्यसलाई आफ्नो सचेतन विवेक प्रयोग गरी मानिसले कर्म सकारात्मक गरोस् भन्ने सनातन मान्यता मानव धर्मको चुरो मान्यता हो।

जीवनको हरेक पलपलमा मानव धर्मको चुरो पकड्न नसक्दा एक व्यक्तिको जीवनमा धेरै नकारात्मक कर्म हुन पुग्छ। सर्वगुणले परिपूर्ण मानिसले मात्र हरेक क्षण मानव धर्मको चुरो कायम गरी आफ्नो सम्पूर्ण कर्म पूरा गर्न सक्छ।

स्वास्थ्यको दृष्टिबाट यदि कुनै मानिसले आफ्नो जीवनमा पूरा गर्नुपर्ने अधिकतम मानव धर्मको पालन गर्न जानाजान चुकिरहेको छ भने उसलाई









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



मानसिक रोगी ठानिन्छ । चाहे त्यो पैसाको मोह होस वा प्रेमको मोह, जोवनको प्यास होस् वा शक्ति वा सामाजिक प्रतिष्ठा आदिको तिर्खाले बिगार्ने मानसिक सन्तुलन सबै नै मानसिक रोगको कारक बन्न सक्छ।

जीवनमा आइपरेको परिवार सुखको अभाव होस् वा अर्थको, खानाको अभाव होस वा इज्जतको, शरीरभित्रको पोषण वा औषधीय तत्वको अभाव होस् वा भित्री अन्तर्मनको र शारीरिक आनन्दको अभाव ती सबैले मानिसको मानसिक अवस्थामा नै खलल पु¥याउने खतरा हुन्छ। मानिसलाई मानसिक रोगी पारिदिन सक्छ।

जब मानव धर्मको चुरो पूरा गर्ने आफ्नो कर्तव्य मानिसले पूरा गर्न सक्दैन तब त्यसको चुरो कारण











मानसिक गडबडी मानिन्छ । आधारभूत रूपमा मानव धर्मको सदैव पालना गर्न सक्ने मानसिक कार्यक्षमताको मानिस मानिसका रूपमा रहन सम्भव देखिँदैन । सदैव आधारभूत मानव धर्म निभाउन सक्ने मानिसलाई आदर्श मानिस भनिन्छ। जसलाई ईश्वरको स्वरूपमा चित्रित गरिन्छ । जस्तै कृष्ण, राम र बुद्ध। सैद्धान्तिक रूपमा कुनै पनि सर्वसाधारण मानिस मानसिक रोगमुक्त हुनु सम्भव छैन भन्ने हाम्रो अलिखित सामाजिक मान्यता रहेको छ ।

सामान्य मानिसभन्दा अलि फरक केही जटिल प्रकृतिको मानसिक बिरामीले छोएको तर बिरामी भएजस्तो नदेखिने, स्वतन्त्र रूपमा आफ्नो नियमित कार्यहरू सुचारु सम्पन्न गर्ने क्षमताको व्यक्तिलाई













सामान्य प्रकृतिको मानसिक रोगी भनिन्छ। उनीहरू आफ्नै आत्मबल वा तन्त्र जस्तै कुनै हल्का ओखती वा औषधीय गुणको पदार्थ सेवनबाट अर्थात् अन्य जीवन शैलीको उपयोगबाट आफ्नो जीविका सहज गरिरहेको अवस्थामा समेत हुन सक्छन्। उनीहरूमा रोगको हल्का लक्षण मात्र रहेको अवस्था रहन्छ।

जटिल प्रकारको मानसिक रोगको सिकार भएका व्यक्तिमा भने थप स्पष्ट लक्षण देखिने गर्छन्। जस्तैः दोधारमा पर्ने, भ्रम पैदा हुने वा कुनै पदार्थको सेवन छोड्दा हुने बेचैनी र चिडचिडावट आदि। मानिसमा हुने विभिन्न प्रकारका मानसिक रोगमा डिप्रेसन, सिजोफ्रेनिया, अटेन्सन डेफिसिट हाइपरएक्टिभिटी डिसअर्डर (एडीएचडी), अटिजम र अब्सेसिभ–कम्पल्सिभ डिसअर्डर आदि छ।











हरेक जटिल प्रकारको मानसिक रोगले मानिसको सोच, अनुभूति, व्यहोरामा बदलाव ल्याएर उनीहरूलाई समस्यामा धकेलिरहेको हुन्छ ।

मानिसमा देखा पर्ने मस्तिष्कका सबै प्रकारका रोगलाई मानसिक रोगका रूपमा वर्गीकृत गरिँदैन । मास हिस्टेरिया, छारे रोग, पार्किन्सन्स रोग र मल्टिपल स्क्लेरोसिस जस्ता विकार मस्तिष्कका विकार भए तापनि तिनीहरूलाई मानसिक रोगभन्दा स्नायु रोगका रूपमा चित्रित गरिन्छ। मानसिक रोग र स्नायु रोगबीच अत्यन्त नजिकको सम्बन्ध देखिन्छ।

मस्तिष्कको संरचना, रसायन र कार्य प्रक्रियामा आएको जैविक परिवर्तनका कारण मानिसमा विकास हुने मानसिक रोगको उपचारमा औषधी













विज्ञान अन्तर्गतको आयुर्वेद र आधुनिक औषधी विज्ञानको प्रभावकारी भूमिका रहन्छ ।

मस्तिष्कको संरचना, रसायन र कार्य प्रक्रियामा आउने नकारात्मक परिवर्तनको जडको कारक बनिदिने गलत अनुभूति, अवधारणा, महसुस, आवेग, संवेग आदि र तिनको कारणबाट विकसित हुने सुरुवातको अल्पकालीन मनोवैज्ञानिक विकृतिको उपचारमा विभिन्न मनोवैज्ञानिक सुधारका उपाय तथा सल्लाह सुझाव प्रभावकारी देखिने गर्छन् । विभिन्न तन्त्रमन्त्र, जडीबुटी तथा योग, ध्यान सम्मोहन कला जस्ता सकारात्मकता अभिवृद्धि गर्ने उपाय भने दुवै चरणमा उपयोगी भेटिएका छन्।

अन्य रोगको निदानमा जस्तो डाक्टरहरूले





बिरामीको रगत, दिशा पिसाब आदि परीक्षणबाट कुनै व्यक्तिलाई मानसिक रोग छ वा छैन भनी निर्धारण गर्न सकिँदैन। न त चर्चित सूक्ष्म जीवहरूको परीक्षणबाट नै मनोरोगको पहिचान हुन सक्छ। मानसिक रोगहरूको पहिचानका लागि छुट्टै प्रकृतिको प्रभावकारी शारीरिक वैज्ञानिक परीक्षणहरू आजसम्म विकास गर्ने नसकिनुको पछाडि हाम्रा परम्परागत मानसिक रोगको निधनमा हामीले प्रयोग गर्दै आएको रैथाने विधि र प्रविधिको प्रभावकारिता र तिनको पछाडिको वैज्ञानिक कारकहरूको पहिचान गर्नेतर्फ आधुनिक औषधी विज्ञानको ध्यान नपुग्नु र परम्परागत आयुर्वेदिक उपचार पद्धतिलाई नियोजित रूपमा औपचारिक स्वस्थ उपचारको पद्धतिबाट बाहिर फाली वैकल्पिक





उपचार पद्धतिमा सीमित गर्नु थियो । जुन आज आएर संसारले महसुस गर्न पुगेको छ ।

आयुर्वेदिक पद्धति अन्तर्गत जुन दिन सर्जरी गर्न बन्देज गरियो, मानिसलाई सम्पूर्ण रूपमा स्वस्थ राख्ने मनोवैज्ञानिक र आध्यात्मिक सबलताका उपायहरू जुन दिन पाखे र रूढिवादी भनी अपहेलना गरियो र जुन दिन प्राकृतिक हर्बल र आयुर्वेदिक औषधीय खानपान र ओखतीलाई आधुनिकताको नाममा सेन्थेटिक ओखतीबाट प्रतिस्थापन गरियो त्यो विन्दुबाट पृथ्वीलाई मानसिक रोगको घर बनाउने कार्यको औपचारिक सुरुवात गरियो।

पैसा र शक्ति प्राप्तिको भोकमा अन्तर्राष्ट्रिय बजारमा आफ्नो राजनीतिक र व्यावहारिक एकाधिकार

जमाउन भएका मानवता विरोधी, पर्यावरण प्रतिकूल मानव कार्यले कुनै न कुनै मानसिक रोग नभएको मानिस भेट्नै ग्रहमा पृथ्वीलाई परिवर्तन गरिदियो । पृथ्वीलाई नै रोगी बनाइदियो ।

हाम्रा डाक्टर र स्वास्थ्य कार्यकर्ताले समेत अनुमान गरेभन्दा एक अविश्वसनीय रूपमा जटिल अंगका रूपमा मस्तिष्क रहेको वेदान्तको मान्यता आज आएर आधुनिक औषधी विज्ञान र स्वस्थ विज्ञानले स्विकारेको छ । हाम्रो शरीरको कुल तौलको मात्र दुई प्रतिशत तौल ओगटेको हाम्रो मस्तिष्क एक्लैले हामीले फेर्ने सासबाट प्राप्त हुने अक्सिजनको विष प्रतिशत उपयोग गर्छ। हाम्रो शरीरमा पैदा हुने सम्पूर्ण ऊर्जाको २० प्रतिशत ऊर्जा समेत त्यही मस्तिष्कले खपत गर्छ।





मानिसका रूपमा मानिसले अनुभव गर्ने हरेक कुरालाई मस्तिष्कले नै नियन्त्रण गर्छ । जस अन्तर्गत मानिसको चालचलन, वातावरणबाट प्राप्त हुने अनुभूति, अनैच्छिक अंगहरूको नियमनलगायत सबै कार्य पर्छ। सास फेर्न र मानव भावनालाई नियन्त्रण गर्ने जस्ता शरीरका प्रक्रियाहरू समेत मस्तिष्कबाट नियन्त्रण हुने गतिविधि हुन् ।

मस्तिष्कमा प्रत्येक सेकेन्डमा सयौं हजारौं रासायनिक प्रतिक्रिया हुन्छन्। ती प्रतिक्रियाले मानिसमा उत्पन्न हुने विचार, कार्य र व्यवहारलाई नियमन गर्छ । यी तिनै प्रक्रियाहरू हुन्, जसको परिणामस्वरूप पैदा भएको सामूहिक प्रतिक्रियाको प्रतिनिधि क्रियाका रूपमा हामीले हाम्रो उत्तेजनाका रूपमा हामी वरपरको वातावरणमा आफ्नो







प्रतिक्रिया दिने गर्छौं। छोटकरीमा मस्तिष्कले हामीलाई बाँच्न अनुमति दिने आन्तरिक प्रक्रिया र व्यवहारलाई निर्देशन दिने कार्यका अलावा हाम्रो वातावरणमा हामीले पठाउने प्रतिक्रियाको समेत नियमन र संयोजन गर्छ। हामीलाई बाँच्न सञ्चालन हुने आन्तरिक प्रक्रिया र व्यवहार शरीरको आन्तरिक गतिविधिलाई सन्तुलन गरेर मात्र मस्तिष्कबाट सञ्चालन र संयोजन सम्भव बन्छ। जसलाई दोषहरूको प्रभावकारी संयोजन भनिन्छ। शरीरबाहिरको वातावरणमा मस्तिष्कले पठाउने प्रतिक्रिया संयोजन र नियमनका लागि शरीरको सम्पूर्ण गतिविधिलाई बाहिरी वातावरणसँग सन्तुलित राख्न जरुरी बन्छ।

आजको आधुनिक भनिएको स्वस्थ र औषधी













विज्ञानले शरीरको आन्तरिक प्रक्रिया सन्तुलित रूपमा संयोजन हुन अवरोध पु¥याउने तत्वहरू पहिचान गरी त्यसको निवारणमा काम गर्ने गर्छ । शरीरबाहिरको वातावरण अनुरूप शरीरलाई सन्तुलित र निश्चित हार्मोनीमा लगेर स्वस्थ राख्ने क्रिया तथा प्रतिक्रियामा आउने बाधा अडचनको निवारणमा आफ्नो कार्यक्षेत्र अनुरूप हाम्रा धामीझाँक्रीलगायतका परम्परागत उपचार पद्धति, योग, ध्यान र आध्यात्मिक मान्यताको भूमिका रहेको आज आएर विज्ञानले महसुस गरेको छ। हाम्रा आयुर्वेदको सम्पूर्ण स्वास्थ्यको अवधारणा अन्तर्गत भने दुवै प्रक्रियाको सन्तुलन गर्ने कार्य समावेश छन्।

मानिसको दिमागले कसरी काम गर्छ र त्यसलाई







आफ्नो कार्यसम्पन्न गर्न कसरी सहज बनाउने भन्नेबारे ज्ञान र कुशलता आधुनिक विज्ञान र वेद अन्तर्गतको आयुर्वेदको दखलको क्षेत्र हो । मानिसको शरीरको हरेक अंगप्रत्यंग र गतिविधिको सञ्चालनका लागि निर्देशन गर्ने मस्तिष्क आफैं भने कोबाट सञ्चालित हुन्छ भन्ने कुराको उत्तर आधुनिक विज्ञान अन्तर्गतको औषधी विज्ञान र स्वस्थ विज्ञानसँग भेटिँदैन । त्यसको जवाफ आयुर्वेदको ज्ञानको मूल स्रोतका रूपमा रहेको वेदसँग मात्र देखिन्छ ।

मानिसलाई सञ्चालन गर्ने मानिसको दिमाग आफैं भने कसरी सञ्चालित छ भने वेदान्तको ज्ञानको अनुसरण गरेर आज आयुर्वेद र आधुनिक विज्ञानले दैनिक अहम् कुराहरूबारे नयाँनयाँ तथ्य बाहिर











ल्याउन सफल बनेको अवस्था छ ।

आधुनिक विज्ञानले मस्तिष्क आफैं कोबाट सञ्चालित हुन्छ भन्ने कुरामा खासै दखल नराख्ने हुँदा त्यही विज्ञान बुझेका आधारमा विज्ञ कहलिएकाहरूमा धामीझाँक्री लगायतका हाम्रा रैथाने परम्परागत हिलिङ पद्धति सन्दर्भविहीन र रूढिवादी लागू सामान्य ठान्नु पर्छ । हाम्रा रैथाने परम्परागत प्रविधि र तिनीहरूको पछाडिको चुरो कारण बुझेर तिनीहरूलाई राम्रो या नराम्रो भनी वर्गीकरण नगरी तिनीहरूबारे अध्ययनसमेत नगरी हचुवामा रूढिवादी मिथ्याको वर्गमा राखिदिने र प्रतिकारमा उत्रिने हाम्रा वैज्ञानिक सोच राख्ने भनिएका भुइँफुट्टा सोकल्ड एलियट बुर्जुवा वर्गको नियतलाई भने स्वस्थ मान्न सकिँदैन ।





# रैथाने धामीझाँक्री उपचार प्रणाली

आज वैज्ञानिकहरू आफैँ भन्ने गर्छन् कि नेपाल जस्ता मुलुकको दुर्भाग्यपूर्ण वर्तमानको धेरै कारण मध्येको एक कारण त्यहाँको परम्परागत धामीझाँक्री लगायतका उपचार पद्धतिभित्र रहेको वैज्ञानिक पक्ष संस्थागत गर्न नसक्दा आज मुलुक विदेशी माफियाको एकाधिकार बजार बनिदियो। मुलुकको आफ्नो सबलता पढे लेखेका र उच्च सरकारी, गैरसरकारी र मूलतः कूटनीतिक तहमा निर्णायक स्थानमा रहेका आफ्नै बुद्धिजीवी भनिएकाको षड्यन्त्रमा परेर कहिल्यै मुलुकको समृद्धिका लागि





उपयोग हुन सकेन ।

वैदिक अवधारणामा प्रकृतिमा अनगिन्ती ब्रह्माण्ड छ। प्रत्येक ब्रह्माण्ड अन्डाको आकारका रहेका हुन्छ। प्रत्येक ब्रह्माण्डको संरचनामा आगो, पानी, पृथ्वी, वायु, आकाश, मन, बुद्धि, अहंकार र अचेतनको अस्तित्व भेटिन्छ। सृष्टिको सुरुवातदेखि आजको समयसम्म प्रकृतिमा अस्तित्वमा आएका सबै घटनाका छापहरू सूक्ष्म रूपको स्मृतिका रूपमा प्रकृतिको गर्भमा भण्डारण हुने गर्छ। जुन अनन्त रहन्छ। त्यसलाई हामी संस्कार भन्ने गर्छौं। प्रकृतिमा पुराना सभ्यताहरू लगायत त्यहाँ घटेका सम्पूर्ण गतिविधिका सम्झनाहरू सूक्ष्म रूपमा भण्डारण रहेका हुँदा मानसिक रूपमा प्रकृतिको स्मरणमा रहेको सामूहिक अचेतन वा कलेक्टिभ





अनकन्सेन्ससको स्तरमा पहुँच गर्न सम्भव बन्छ । योगको मान्यता अनुरूप हरेक वस्तुको तीन गुण हुन्छन्। तीनै गुणका आफ्नै अद्वितीय विशेषता रहन्छ । जसमा तम गुणले स्थिरता, रज गुणले गतिशीलता र सत गुणले स्थिरता र गतिशीलताबीचको पूर्ण चेतनको अवस्थालाई जनाउँछ ।

ब्रह्माण्डको उत्पत्ति हुनुभन्दाको पहिलेको अन्धकारको अवस्था वा डार्क स्पेसलाई योगको अवधारणाले एक ब्रह्माण्डीय सुपर कम्प्युटर मान्छ। उक्त डार्क स्पेस (महत) मानै ब्रह्माण्डका सम्पूर्ण स्मरणको भण्डारण हुने गर्छ। महतमा सुरक्षित रूपमा भण्डारण रहेको स्मरणहरू गतिशीलता वा रज गुणका कारण प्रकृतिसम्मको पहुँचमा हुन्छन् ।









सिर्जनात्मक कम्पन भनिने स्थिरता र गतिशीलता बीचको संयोजन कारी राजसी गुणका कारण महतमा सुरक्षित स्मरणहरूको प्रतिलिपि प्रकृतिसँगै जोडिन पुग्छ। स्मरणको प्रतिलिपिको स्थिरता वा तम गुणका कारण डार्क स्पेसमा (महत) रहेका सम्पूर्ण स्मरणका प्रतिलिपि प्रकृतिको गर्भमा हरसमय उपलब्ध हुने गर्छ । यसरी डार्क स्पेसमा सुरक्षित सामूहिक स्मृति, विचार आदि स्मरण सामूहिक अचेतन वा कलेक्टिभ अनकन्सेन्ससका रूपमा प्रकृतिमा उपलब्ध हुन सम्भव बन्छ ।

प्रकृतिमा उपलब्ध सामूहिक अचेतन वा कलेक्टिभ अनकन्सेन्ससँग मानिसले आफ्नो मानसिक पहुँच सामान्य अवस्थामा पु¥याउन सक्दैन । सो को लागि एक साधकले जस्तै आफ्नो चित्तलाई




सात्विक–सात्विकको स्तर अर्थात् आत्मज्ञानको प्राप्तिको स्तरमा पु¥याउन जरुरी हुन्छ। त्यसको अर्थ हो सांसारिक नभएर आध्यात्मिक क्षमताको निपुणताको जरुरत। योग वा ध्यान जस्ता विधिबाट आफ्नो सम्पूर्ण शरीर र मस्तिष्कमा सामञ्जस्यता, सन्तुलन र बुद्धिमत्ता कायम गरी रज र तम दुवै गुणलाई घटाएर प्राप्त राजसी गुणलाई यहाँ सात्विक–सात्विकको स्तर भनिएको छ। जुन अवस्थामा आनन्दको अवस्थामा पुग्न सकिन्छ। त्यतिबेला मानिसले आफ्नो पूर्ण चेतनाको उपयोग गर्न सक्ने मान्यता योगको छ ।

सामूहिक अचेतन वा कलेक्टिभ अनकन्सेन्ससको भण्डारमा विगतमा प्रकृतिमा जीवित रहेका मानवको समेत स्मरण रहेकाले तिनीहरूको





स्मरणमा समेत मानसिक रूपमा पहुँच पु¥याउन सम्भव हुन्छ। भूतको अर्थ विगत लाग्ने हुँदा विगतका मानवजातिको स्मरणलाई कतिपय सन्दर्भमा भूत भनिएको देखिन्छ। सामूहिक चेतनासँग संसर्गमा रहने मानसिक चेतनाले पृथ्वीको पञ्चतत्वसँग कुनै पनि हदको सञ्चार वा संसर्ग कायम गर्न सक्ने देखिंदैन। समाजको मान्यतामा रहेको कुनै समय वा स्थानमा देखा पर्ने भनिएको भूत वा प्रेतात्मा तसर्थ मानसिक सञ्चार वा संसर्गको उत्पादन हुन सक्दैन। सात्विक आनन्द वा ब्लिसको अवस्थामा नभएर अन्य प्रकृतिको अर्धचेतन अवस्थाको कुनै अर्के प्रकारको मानसिक सोचको अनुभूतिको उपजका रूपमा मानिसमा भूत वा प्रेतात्माको सिकार बनेको प्रकृतिको अवधारणा







विकास भएको देखिन्छ ।

आत्मा र चेतना सम्पूर्ण जीवित प्राणीमा रहने गर्छ। वैदिक मान्यतामा देवहरू, गन्धर्वहरू, दैत्यहरू आदि धर्म वा अधर्मको सन्दर्भको व्याख्यामा उपयोग गर्न नभएर मानिस जस्तै आत्मा र चेतना हुने सम्पूर्ण प्राणी जस्तैः पन्छी, कमिला, सूक्ष्म जीव र रूख आदिको एकअर्काको सहअस्तित्वका लागि एकापसको भूमिका दर्साउन प्रयोग गरिएको बुझिन्छ। सम्पूर्ण प्राणीबीचको आत्माको अन्तरसम्बन्धको वैज्ञानिक पक्षबारे गहिरो ज्ञान दिने यी शब्दको अर्थको पहिचानमा हुन पुगेको कमजोरीले त्यसलाई देवत्वका रूपमा गलत व्याख्या गरिएको भेटिन्छ ।













राक्षस शब्द वास्तवमा 'रक्षा' बाट आएको हो। जसको अर्थ रक्षा सँगै सम्बन्धित देखिन्छ। असुर शब्दले दैत्य, दानव र राक्षसलाई नै जनाउँछ । यिनीहरू पनि जैविक र पर्यावरणीय सुरक्षा सम्बन्धकै शब्द हुन्। हावा, वायु, वायुका देवता, जल देवता र प्राण लगायतको अर्थ दिने मूर्त तथा बहुरूपी, प्रलयकारी रूपको संज्ञा दिने रुद्र मरुत, वरुण, समेत सम्पूर्ण प्रकृतिका जीवित प्राणीको सुरक्षा र ध्वंससँगै सम्बन्धित बुझिन्छ ।

आवृत्ति–शक्तिले (पूजापाठ, मन्त्र) समेत सुरक्षा सन्दर्भको तन्त्र मतलब कुनै साधनको प्रतिनिधित्व गरेको देखिन्छ। हाम्रा परम्परागत रैथाने उपचार प्रणालीको सन्दर्भमा यी शब्दहरू हाम्रो शरीरमा हर्मोन, इन्जाइम, एलर्जीका प्रभाव, शरीरका





॥ श्री गणेशाय नमः ॥







हानिकारक विषाणु, जीवाणु, रोगाणु, भाइरस कण र तिनीहरुले जन्माएको रोग, विकृति र मनोदशाको हालत, रोगका कारक, रोगका नाशक, शरीर तथा पर्यावरणका लागि लाभकारी जीवाणु प्रवर्धक एवं मनोवैज्ञानिक तथा आध्यात्मिक वृत्ति विकासको उत्प्रेरकका विषयवस्तु आदि सँगै सम्बन्धित रहेको प्रस्ट हुन्छ ।

जब मानिसमा अज्ञानता हाबी हुन्छ, अज्ञानताको बीचमै लिइने निर्णयहरू त्रुटिपूर्ण हुन सक्छ । हाम्रा दैनिक जीवनमा आइलाग्ने विषय वस्तुबारे निर्णय गर्ने समयमा गलत र सही छुट्याउने क्षमताको अभावमा हामीमा तत्काल विकास भएको भ्रमका कारण गलत निर्णयमा पुग्नु मानिसको स्वाभाविक दिन चर्या नै हो।













जब मनको कुरा आउँछ, आत्मबलको कुरा आउँछ वा दृष्टि भ्रमको कुराहरू आउँछ, हाम्रो संज्ञानात्मक कौशलले समेत जरुरत अनुरूपको सूचनाको अभावमा फरक निष्कर्ष निकाल्ने गर्छ। यसैबीच मानिसको दिमागको रचनात्मक शक्तिको क्षमता आफैंमा एक अजिब क्षमता रहेको यथार्थ हामीले भुल्नु हुँदैन ।

मानसिक शक्तिको प्रभावमा रहने मानिसको मनको पाँच अवस्था हुने गर्छ । क्षिप्त (अशान्त), विक्षिप्त (दुबिधामा रहेको, विचलित), मुग्ध (भ्रमित), एकाग्र (एकोहोरो निश्चित विषयवस्तुमा केन्द्रित) र निरुद्ध (नकारात्मक, शान्त)। मानिसको मन फरक फरक अवस्थामा रहँदा उसले फरकफरक प्रकृतिका सोच र अनुभव प्राप्त गर्ने गर्छ । तसर्थ आफ्नो











मनको फरक अवस्थामा मानिसले एकै घटनाको पनि फरकफरक अनुभूति प्राप्त गर्न सम्भव रहन्छ ।

घटनाको यथार्थ एउटा रहे तापनि मनको कुनै अवस्थामा मानिसका झुटा अनुभूति, विचार र तर्कले घर गर्न सम्भव बन्छ । मानिसले खाने खाना, जडीबुटी, रक्सी, लागूपदार्थ, जीवनशैली, तत्कालीन समयका व्यावहारिक वा मनोवैज्ञानिक परिस्थिति आदिले मानिसमा फरक प्रकृतिको गहिरो अवास्तविक अनुभूति छोडिदिन सक्छ।

साँझको बेला अँध्यारोमा एउटा डोरीलाई सर्प देखेर झस्कने देखि एउटा हरियो सर्पलाई हरियो बिरुवाको हाँगो ठानी समात्न पुग्ने अनि सातो पुत्लो उड्ने घटनाको सिकार बन्ने परिस्थितिको सहजै विकास हुन सक्छ।









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



त्यस्तै गाउँ घरमा माओवादी आतंक चरम सीमामा पुग्दा रोडमा बसको टायर आवाज निकाली पन्चट हुँदा गाउँमा बम पड्केको ठानी मानिस आतंकित हुने भाग्ने गर्दथे। अगुल्टोले हिर्काएको कुकुर बिजुली चम्कँदा कुइँ गर्छ। एक क्षणिक काल्पनिक घटनाको प्रभावले कतिपय अवास्तविकता वास्तविक बनिदिएर मानिसमा मनोवैज्ञानिक तथा संज्ञानात्मक समस्याको कारक बन्ने समेत गरिदिन्छ।

मानिसको दिमागको विभिन्न अवस्था रहन्छन्। पहिलो, निद्रामा सपनीमा रहेको अवस्था। दोस्रो, सपनी नदेखेको निद्राको अवस्था। जसलाई सुषुप्त अवस्था भन्ने गरिन्छ। तेस्रो अवस्था छ जागृत वा सामान्य दैनिकीको ब्युँझिएको समयको अवस्था। ननिदाएको वा ब्युँझिएको अवस्था। मानिसको









दिमाग एक अवस्थाबाट अर्को अवस्थामा प्रवेश गर्दैगर्दा समेत बीचमा कुनै अवस्थाबाट गुज्रन जरुरी पर्छ। उक्त अवस्था अर्धचेतनाको अवस्था हो। अर्धचेतनको समयमा मस्तिष्कमा आत्मसचेतता रहँदैन। न त मस्तिष्कले बाहिरबाट प्राप्त सूचनाप्रति कुनै प्रतिक्रिया नै दिँदै गरेको हुन्छ। इन्द्रियहरूमार्फत प्राप्त सबै सूचनामा पूर्णतया प्रतिक्रियात्मक विहीन बनिरहेको हुन्छ।

मानिसको चेतन दिमाग तर्कसंगत दिमाग हो। एक आलोचनात्मक सोच पैदा गर्ने दिमाग। अनकन्सियस ब्रेन भनिने अचेतन दिमाग भने तर्कसंगत दिमाग नभई आफूले जीवनमा भोगेको अनुभवका आधारमा आफ्नो भित्री मान्यता विकास गर्ने दिमाग हो ।









आफ्नो मनमा गढेको अनुभवका आधारमा आफ्नो अन्तरमनबाट आएको स्वनिर्देशनलाई तर्कसंकत रूपमा तौलिएर विचार गरी रोकेर तर्कसंगत फरक निर्णयमा पुग्ने काम चेतन दिमागको हो ।

दुर्भाग्यवश मानिसमा मनभित्र गडिएर बसेको पीडा, दर्द, मनोरोग र समाधान नगरिएका आघातका अधिकांश चोट मस्तिष्कको त्यही अनकन्सियस ब्रेनमा गाडिएर बसेको हुन्छ । जुन मौका पर्नासाथ बारम्बार बल्झिने गर्छ । मानिस मनोरोगी बन्छ ।

दिमागको ट्रान्सस्टेट भनिने अर्धचेतन अवस्थामा हाम्रो दिमाग सचेतन र अवचेतन अवस्थाबीचमा फसेको हुन्छ।

संक्षेपमा ट्रान्सस्टेटमा मानिस न त पूरा जागृत न त










पूरा सपनाको अवस्थामा रहन्छ। कुनै निश्चित अवस्थामा अर्धचेतन अवस्थामा हुँदै गर्दा मानिस आफ्नो अर्धचेतन अवस्थामा मस्तिष्कले जे सोचिरहेको हुन्छ त्यसैको अनुसरण गरिरहेको भेटिन्छ। त्यो अवस्थामा निद्रामै सपना देखे जस्तो गरी डराउने, खुसी हुने, हिँड्ने, कुरा गर्ने, बोल्ने, रुने जस्ता गतिविधि देखिने गर्छ।

झल्याँस्स ब्युझिंदा उक्त गतिविधिबारे जानकारी हुँदा मानिसमा झन् गहिरो सन्देह विकास भए मनोरोगी बनेको समेत भेटिन्छ ।

अनुभवले बताए अनुरूप मानिसको भित्री रूपान्तरण गर्ने कार्यमा उसभित्र पैदा हुने आलोचनात्मक सोचले अत्यन्त हस्तक्षेपकारी भूमिका खेली अवरोध पुर्‍याउने गर्छ । मस्तिष्क













ट्रान्सस्टेटमा रहँदा आलोचनात्मक सोच पैदा गर्ने दिमाग बाइपास हुने गर्छ । ट्रान्सस्टेटमा मानिसलाई रूपान्तरणको प्रयास गर्दा आलोचनात्मक सोचको अवरोध नरहने हुँदा कतिपय अवस्थामा अचेतन दिमागसँग सिधा संवाद सम्भव बन्छ।

अचेतन दिमागसँगको सिधा संवादले भित्री रूपान्तरणका लागि जरुरी हुने सकारात्मक सोच र विश्वास पैदा गरिदिन्छ । सोच र मान्यतामा आएको सकारात्मकताले डर, त्रास घट्ने, आत्मबल बढ्ने हुँदा मानिसलाई स्वस्थ हुने पूर्वाधार विकास गरिदिन्छ । मूलतः सेमी–ट्रान्सस्टेट वा ट्रान्सस्टेटमा गरिने मनोवैज्ञानिक तथा आध्यात्मिक रूपान्तरण, हिप्नोटिजम, मेडिटेसन, योग जस्ता परिवर्तित चेतनाको उपाय मनको भित्री रूपान्तरण लागि







उपयोगी बन्छ ।

मनोवैज्ञानिक कार्ल जंगका अनुसार अचेतन दिमाग सामूहिक अचेतन वा कलेक्टिभ अनकन्सेन्ससको ठूलो दायराको सञ्जालसँग प्रत्यक्ष सम्पर्कमा रहने गर्छ ।

सामूहिक अचेतनलाई युनिभर्सल अथवा डिप माइन्डसमेत भन्ने गरिन्छ। संसारमा अस्तित्वमा आएका सबै जीवको अनुभूतिको ऊर्जा समावेश भएर उक्त प्राकृतिक आवरणको निर्माण भएको हुन्छ। नियमित सचेत दिमागको सम्पर्कमा रहेर जिद्दीयुक्त अहंकार पकडेर बसेको अचेत दिमागलाई ट्रान्सस्टेटमा पु¥याएर गरिने संवादले कलेक्टिभ अनकन्सेन्सस सँगको सम्पर्कमा पु¥याउँछ ।








अचेत दिमाग र कलेक्टिभ अनकन्ससनेस बीच हुने सम्पर्कमा जिद्दीयुक्त अहंकार समेत कलेक्टिभ अनकन्सेन्सस तर्फ विलीन हुँदै जाने प्रक्रिया सुरु हुन्छ। ट्रान्स स्टेटको संवाद प्रक्रिया केही समय सुचारु राख्न सक्दा अचेत दिमागमा गढेर रहेको गहिरो उदासी, क्रोध वा निराशा, प्रतिस्पर्धा–बदलाको भावना आदि क्रमशः कलेक्टिभ अनकन्सेन्सस तर्फ फ्याँकिन पुग्छ ।

मतलब आफ्नो जिद्दीयुक्त अहंकार त्याग्न सहयोगी बन्छ । यसले गर्दा मस्तिष्कको अनकन्सियस ब्रेनको भागमा भित्र–बीजका रूपमा गढेर बसेको पीडा, दर्द, मनोरोग र समाधान नगरिएका आघातका अधिकांश चोट सबै सामूहिक अचेतनको भण्डारमा थन्क्याइदिएपछि मौका पर्ने साथ बारम्बार बल्झिने










बीजको अभावमा मानिस समस्या मुक्त बन्न सक्छ ।

परम्परागत रूपमा हाम्रा धामी झाँक्रीले देवीदेवताको भाकल, पूजा आदि गर्ने, बिरामीलाई मनो रोगबाट (भूत, प्रेत, मसान, पिशाच, डर, चिन्ता आदि) बाट मुक्त गर्न कर्मकाण्डी देखिने अचेत दिमागलाई ट्रान्सस्टेटमा पु¥याएर अचेतन दिमागसँग सिधा संवाद गरी मनोवैज्ञानिक तथा आध्यात्मिक रूपान्तरण गर्ने, हिप्नोटिजम गर्ने, अचेत दिमाग र कलेक्टिभ अनकन्सेन्ससबीच सम्पर्क कायम गरी दरिलो आत्मबल निर्माण गर्ने, घरेलु जडीबुटीमार्फत एलर्जीका प्रभाव, हानिकारक जीवाणु र रोगाणुको प्रभाव घटाउने र त्यसले जन्माएको रोग, विकृति र मनोदशाको उपचार गर्ने गरेको यथार्थ आज आएर हामीले बुझ्न सकेका छौँ ।













हाम्रा तिनै परम्परागत प्रविधिको वैज्ञानिक आधार पत्ता लगाएर पश्चिमाहरूले जडीबुटीमार्फत प्राकृतिक उपचार, प्लेसिबो इफेक्ट, एक विन्दुमा नियन्त्रित भएर गरिने ध्यान, आत्म सम्मोहन, सोमलता–गाँजा–भाङ–काँचो सुपारी जस्ता स्वस्थकर तर हेलुसिनेटिङ जडीबुटी सेवनपश्चत् सम्मोहन, प्राणायाम र कपालभाँती जस्ता श्वासप्रश्वास प्रक्रिया, मन्त्र–पूजा र तपस्या, संगीत–बिद्व र ध्वनि, पेन्डुलमको आवाज र गतिमा ध्यान केन्द्रित गर्न ध्यानपूर्वक रेकर्ड गरिएको गतिशील दृश्य हेरी गरिने ध्यान, बास्नादार अगरबत्ती र जडीबुटीमार्फत गरिने सम्मोहन, धर्म कार्य, सामाजिक कार्य, नाच आदिमा भाग लिएर प्राप्त गरिने शारीरिक र भावनात्मक सन्तुष्टि आदि दिँदै आधुनिक





मनोवैज्ञानिक उपचार, जीवाणु तथा रोगाणुको उपचारका उपाय संसारभर पु¥याएर अथाह कमाएको देखेपछि हामी झल्याँस्स बनेका छौँ ।

हाम्रा समाजका विज्ञान र मेडिकल पढेका कतिपय पण्डित त अझै हाम्रा परम्पराको चुरो यथार्थ समाजमा जान नदिन यसलाई रूढिवादी भ्रम भन्दै विदेशी ओखती र सामानको नेपाललाई मनोपली बजार बनाउन कम्मर कसेर लागिरहेका छन्। आफ्नो दलाली धर्म पूरा गरिरहेका छन्।

## गुरुकुल शिक्षा

जनताले सबै कुरा जान्छन् भन्ने कुरा राजनीतिमा लागेका बेइमानहरूले पटकपटक दोह¥याउने शब्द





हो। सूचनाको हक, स्रोत, साधन र पहुँचबाट जनतालाई वञ्चित गर्‍यो, जनतामा भ्रम छर्‍यो, गुन्डागर्दीबाट पार्टी र व्यवस्था कब्जा गर्‍यो अनि अर्को राम्रो विकल्प नहुन्जेल हामीलाई नै मौका दिनूस् भन्दै बेइमानहरू आफ्नो झुट लुकाउन जनता जनार्दन भन्दै हिँड्ने गर्दछन्। जनतालाई प्रिय लाग्ने यी दुई कुराका कारण जनता समेत हाकाहाकी लुट्नेहरूको पाखण्ड लाई सामाजिक रूपमा स्वीकार्य पाखण्डको हैसियत मिल्ने गरी मत हालेर नेता चुनी स्वीकृत गरिदिन्छन्।

वैदिक ज्ञान र विज्ञानको हिसाबमा कुरा गर्ने हो भने कुनै पनि समाज नकारात्मक सोचले कति ग्रसित छ त्यसका आधारमा उक्त समाज कति अग्रगामी छ वा पिछडिएको छ भन्ने यकिन हुनु जरुरी हुन्छ ।





आधुनिक शिक्षाको नाममा भुइँफुट्टा ज्ञान प्राप्त गरेकाहरूलाई विद्वान् मान्ने समाजले समाजमा व्याप्त नकारात्मक विचारको बिगबिगीका आधारमा समाजको समृद्धि मापन नगरी बुर्जुवा शिक्षा हासिल गरेका व्यक्तिहरूको प्रतिशत र दलाल पुँजीवादी अर्थव्यवस्था अन्तर्गतको जीडीपीका आधारमा मुलुकको समृद्धिको मापन गर्ने गर्छ ।

बेरोजगारीको हिसाब गर्दा कागजी शिक्षा लिएका अल्पशिक्षितहरूको रोजगारीको प्रतिशत मात्र गनिन्छ। बुर्जुवा, चाकर संस्कार विकास गर्ने कागजी ज्ञानको पहुँचमा नरहेका भाग्यमानी र स्वरोजगारमा रहेका मुलुकका वास्तविक अर्थतन्त्र निर्माणका आधार शिलाका रूपमा कार्यरतलाई त्यसमा गणनासमेत गरिँदैन ।









हरपल जसरी हुन्छ मुलुकको राजस्वमा सामूहिक मिलेमतोमा नियोजित रूपमा डाँका मार्न तयार जत्थासँगै मात्र मुलुक सञ्चालनको तालाचाबी पुग्ने गरी राजनीतिक र कार्यनीतिक प्रणालीको इन्जिनियरिङ गरिएको छ ।

सत्तामा रहेको अहिंरेले मुलुकको विकास वा समृद्धि गरेन भन्ने आवाज उठेमा अर्को भैंरे खोजेर प्रधानमन्त्री तोकिन्छ । बोकाको राजमा कार्यालयमा भ्रष्टाचार भएको समाजमै छताछुल्ल बन्यो भने त्यसको स्थानमा भेडालाई नियुक्ति गरी योजना प्रमुख बनाएर विरोधको आवाज थेगिन्छ । भतुवालाई भैंसीले पाडो पाओस् वा पाडी, के नै मतलब भयो र ? उसको भागमा आउने बिगौती मिलेकै हुन्छ । नियमित ब्रह्मलुटको परम्परा सुचारु










रहन्छ ।

हुन पनि बोकाले दाइँ हाल्ने भए गोरु किन नै चाहिन्थ्यो र ? हिजो पटकपटक मित्र राष्ट्रका पश्चिमा खुफिया एजेन्सी पण्डित शासकहरूको निर्देशनमा तिनैका सरकारका खुफिया एजेन्सीकै प्रायोजनमा मञ्चित भएका आन्दोलनहरू पारिको काउली खाएर वारि शासन गर्ने पद्धति एकपछि अर्को गर्दै पटकपटक पुनःस्थापित गरियो ।

वैदिक ज्ञान र गुरुकुल शिक्षालाई अघोषित रूपमा प्रतिबन्ध गरियो । समाजका गुरु र धर्मगुरुहरू गोली हानी मारिए । संस्कृतका किताब र विद्यालय जलाइए । पश्चिमा चिकित्सा मूल स्वास्थ्य सेवा र आयुर्वेदलाई वैकल्पिक स्वास्थ्य सेवा नामकरण गरी हाम्रा रैथाने ज्ञान, सीप, प्रविधि र दखलतालाई













अघोषित रूपमा हाम्रो आफ्नै भूमिमा उपयोगहीन विषय बनाएर मुलुकलाई विदेशी उत्पादनको एकाधिकार बजार बनाएर कंगाल पारियो ।

मित्र राष्ट्रमा परिवारको एउटा मात्र सदस्यलाई जवाहरलाल नेहरू विश्वविद्यालयमा (जेएनयू) पढाइदिएर गुन लगाइदिएबापत भारत नै टुक्राटुक्रा पार्ने विचारधारा गर्वका साथ भाषण गर्न तयार हुने कनैया कुमारहरू विकास गर्ने खुफिया एजेन्सीहरू नेपालमा त कुनै परिवारका सम्पूर्ण सदस्यलाई नै जेएनयूको महँगो शिक्षा र ऐहेसान जीवनशैली उपहार दिएर मुलुकलाई रसतालमा पु¥याउन तयार हुने लेन्डुप दोर्जेहरू तयार गरिदिएको छ।

लेन्डुप दोर्जे समूहका सदस्यहरू सम्पूर्ण राजनीतिक दल, नीति निर्माण निकाय, आर्थिक क्षेत्र, गृह











प्रशासन, शासन व्यवस्था, खुफिया एजेन्सी, शिक्षाका संयन्त्र, स्वास्थ्यका संयन्त्र, मिडियालगायत सबै संवेदनशील स्थानमा संगठित रूपमै परिचालित र सक्रिय पारिएको छ । मुलुकको दुर्भाग्य नै भन्नुपर्छ, उक्त ग्याङका प्रतिनिधिहरू हालका प्रायः सबै नै चर्चित नेताका परिवारको सदस्यका रूपमा उनीहरूकै भान्सामा आफ्नो करामत देखाउन कुनै न कुनै रूपमा सक्रिय रहेका भेटिने गर्छन् ।

मुलुकमा जबरजस्ती जनताले नचुनेको राजनीतिक व्यवस्था र सामाजिक संरचना लादियो । समाजलाई बन्दुक र भाटे कारबाहीको आतंकले व्याप्त पारेर जनतालाई सचेत हुनबाट वञ्चित गरियो। जनता सचेत भएका भए बाघको छालामा स्यालले रजाइँ हुँदै गर्दा आवाज, आन्दोलन उठ्थे होलान्।













मुलुकलाई नियमित लुटको साधन बनाउने गरी ग्रान्ड डिजाइन गर्ने माफिया वर्ग त्यो सम्भावनासमेत हालसम्म निमिट्यान्न पार्न सफल बनिरहेको अवस्था रहन्थेन होला ।

आजको मितिसम्म पुग्दै गर्दा जब हाम्रो मुलुक सुध्रनै नसक्ने गरी थला परिसकेको जनतामा महसुस भयो तब मुलुकको चिन्ता गर्ने धेरै बुद्धिजीवी हाम्रा परम्परागत गुरुकुल शिक्षा प्रणालीलाई झलझली सम्झिरहेको भेटिन्छ। उनीहरूमा मुलुकलाई अब गुरुकुल शिक्षा प्रणालीबाहेक अन्य कुनै शिक्षाले सुधार्न सक्दैन भनी अनुभूति हुन थालेको सजिलै महसुस गर्न सकिन्छ । हुन पनि हाम्रा गुरुकुल शिक्षा प्रणालीमा हरेक शिष्यको उसको नितान्त निजी क्षमताको पहिचान गरी उसमा अन्तर्निहित










विशिष्ट खुबीको पूर्ण रूपमा प्रस्फुटन गर्न सघाउने नियत राखिन्थ्यो ।

हरेक शिष्यलाई व्यक्तिगत रूपमा पारिवारिक वातावरणमा अध्यापन गराइने सिकाइ प्रविधिमा सैद्धान्तिकभन्दा प्रयोगात्मक शिक्षा दिने गरिन्थ्यो । छोटो अध्यापनपश्चात् लामो स्वअध्ययन अनिवार्य हुन्थ्यो । जसलाई ज्ञानको खोजी गर्ने र व्यवहारमा लागू गरी महसुस र अनुभूतिमार्फत यथार्थ ज्ञान प्राप्तिका लागि प्रशस्त अवसर उपलब्ध गराइन्थ्यो ।

सन्तुलित रूपमा भौतिक, जैविक (जीवन्त), मनोवैज्ञानिक, सामाजिक र आध्यात्मिक ज्ञान समावेश हुने गरी इन्जिनियरिङ गरिएको सिकाइ प्रणालीमा हरेक व्यक्तिलाई उसको क्षमता, कुशलता र सोख अनुरूप निजी प्रशिक्षण दिइन्थ्यो ।











मानिसको भौतिक शरीर उसको निर्धारित उद्देश्य प्राप्तिका लागि उपलब्ध माध्यम मात्र रहेको पूर्ण अनुभूतिका साथ भौतिक शरीर र मस्तिष्कको स्वस्थ तथा तन्दुरुस्तीको अनिवार्यता अपरिहार्य ठानिन्थ्यो । त्यसका लागि प्रकृतिको सामीप्यमा पुगेर प्राकृतिक नियमको अनुसरण गर्ने तथा अनिवार्य रूपमा मेडिटेसन वा ध्यान गर्ने, वैदिक ज्ञान प्राप्त गर्ने र योग अभ्यास पूरा गर्ने कार्य सम्पन्न गरिन्थ्यो । यसका अतिरिक्त पशुपतिनाथको मुलुकको परम्परागत गुरुकुल शिक्षाको आफ्नो प्रमुख नेपाली विशेषता थियो जुन अन्यत्र बिरलै पाइन्थ्यो ।

हाम्रो आफ्नै शिक्षा प्रणालीको अन्यत्रभन्दा थप विशिष्ट प्रकृतिको थियो भन्नेबारे धर्मगुरुहरू अनविज्ञ रहेकाले हो वा के कारणले हो खुलासा हुन सकेको




॥ श्री गणेशाय नमः ॥





छैन । भारतीय संस्कृतिको गुरुकुल शिक्षा हेरेर नेपाली भूमिको गुरुकुल शिक्षा पनि त्यस्तै थियो होला भनी अनुमानका भरमा निकै धेरै प्रवचन र चर्चा भएको त पाइन्छ । नेपाली गुरुकुल शिक्षामा अन्यत्रको शिक्षा प्रणालीभन्दा थप विशिष्टता के थियो र कसरी नेपालमै जन्मिएका विश्वकै पहिलो प्लास्टिक सर्जन सुश्रुत र वेद व्यासलाई त्यस्तो विशिष्टता हासिल गर्न सम्भव भयो भन्नेबारे उजागर भएन ।

साथै यो भूमि धारावाहिक लेखक गणेश, पाणिनिलगायतको कर्मक्षेत्र किन बन्न पुग्यो त्यसको पछाडिको कारण सार्वजनिक हुन सकेन। आचार्य सुश्रुत जस्तै नेपालमै जन्मिएका सिद्धार्थ गौतममा हाम्रो भूमिको गुरुकुल शिक्षाको आफ्नै थप









विशिष्टताको भूमिकाको देनबारे समाज सुसूचित हुन पाएन।

अब नेपाली भूमिको उक्त गुरुकुल शिक्षाको आफ्नै थप विशिष्टताबारे एक उदाहरणसहित चर्चा गरौँ । रोडको सञ्जाल अत्यन्त धेरै विकसित भएको मुलुकमा हाल गुगल म्याप प्रयोग गर्ने जिपिएसको प्रयोग गरी गाडी चलाउने चलन धेरै बढेको छ। एक ठाउँबाट अर्को ठाउँ जान जब तपाईं त्यसमा जाने ठाउँको ठेगाना हाल्नुहुन्छ र कस्तोकस्तो बाटोलाई प्राथमिकता दिने भनी प्रोग्राम गर्नुहुन्छ, त्यसैको आधारमा त्यसले कुन बाटो कसरी जाने भनी तपाईं प्रायः त्यसैको निर्देशन पछ्याएर आफू परिचित नभएको स्थानमा समेत आफैँले गाडी चलाएर सजिलै पुग्नुहुन्छ।




तपाईंले पक्कै पनि याद गर्नुभएकै होला यदि तपाईंले बीचमा गलत गर्नुभयो वा गुगलले देखाएको बाटो पछ्याउनुभएन भने पनि उक्त गुगलको जिपिएसले तपाईंलाई कहिल्यै गल्ती गरिस् भन्दैन । न त गाली वा निन्दा नै गर्छ न दिक्क मानेर मुडअफ हुने, ह्याङ हुने वा चिच्याउने केही गर्दैन ।

जब तपाईं गलत मोड लिनुहुन्छ, त्यसले यता बटारिएर धेरै हिँड्नु पर्‍यो वा समय खेर गयो वा यो त्यो खर्च भयो केही भन्दैन। तपाईंलाई सिफारिस गरिएको नक्सा विपरीत अन्यत्र जहाँ पुग्नुभयो पुनः त्यहींबाट तपाईं यो चौबाटो वा दोबाटोबाट बायाँ जानु वा दायाँ जानु भनी तपाईंलाई तपाईंको यात्रामा सहयोग गर्न सुरु गर्छ। तपाईंको हिंडाइबारे कुनै पनि सकारात्मक वा





नकारात्मक सोच नराखी तटस्थ रहेर सहयोग गर्न सुरु गर्ने गर्छ।

तपाईं एकछिनलाई सोच्नुस् त! गुगलले बताएको बाटो नजाँदा तपाईंले कति धेरै हिँड्नुपर्‍यो, कति समय खेर फालियो, कति इन्धन आदि अनावश्यक खर्च भयो जस्तो कुरा तपाईंलाई सम्झाउने गर्दैन। न त गाडी चलाउँदै गर्दा यो गलत भयो अब यसरी सुधार गर भन्नसमेत चासो राख्दैन । प्रोग्राम गरेको भए के त्यो गुगल म्याप जीपीएस धेरै मूल्यको र धेरै उपयोगी हुन्थ्यो होला? गुगलले ती सुविधा सामान्य प्रोग्रामबाट नै सजिलै राख्न सक्थ्यो। किन सामान्य प्रोग्रामबाट पूरा हुने त्यो काम त्यत्रो गुगल जस्तो कम्पनीले नगरेको होला ?

हामी त झन् चिन्दै नचिनेको मान्छेले भनेको कुरा,



भनिएको विषयको सन्दर्भ र त्यसबारे ज्ञान नहुँदा समेत सामाजिक सञ्जालमा ठूलाठूला तर्क र आदर्श छाँटेर लेख्ने, नमागिएको सल्लाह दिने गोर्खाली। अर्काको गल्तीमा अगाडि आएर आलोचना गर्न पाउँदा आफू स्मार्ट बनिने अनुमानमा आफैं सँग गर्व गर्ने संस्कार बोकेका महामानवलाई यस्तो विपरीत चरित्रयुक्त गुण बोकेको गुगल जीपीएसको बानीले दिक्क बनाउने, सुन्दै कन्सिरीको रौँ तातेर आउने हुनुपर्ने हैन र ? त्यस्तो हुँदाहुँदै पनि किन यो गुगल म्यापको संसारमा एकाधिकार भएको होला ।

हाम्रो पाराले सोच्दा, जीपीएसले त्यसो गरेको भए तपाईं बेकारमा यति थप बाटो हिंड्नुपर्ने भयो, तोकिएको स्थानमा यति समय ढिलो गरी पुग्ने हुनुभयो, बैठकका लागि यति ढिलो हुन जाँदै छ,








ध्यान दिएर मेरो निर्देशन सुन्नुहोस्, अब फेरि गल्ती नगर्नूस्, ठीक छ !! समेत भन्थ्यो होला । आजका फगत आधुनिक र वैज्ञानिक नाम दिइएका हाम्रा निकै धेरै विद्यालय वा विश्वविद्यालयका ठूलो संख्याका मास्टरहरूले जस्तो तपाईंलाई गल्ती गर्ने छुट छैन भन्दै पाइला पाइलामा हस्तक्षेप गरी तपाईंको हैन, पढाउने शिक्षकको महसुसले विकास गरेको मान्यताका आधारमा तपाईंको यात्रा पूरा गर्न सहयोग गरेकै होला ।

आजको दिनमा पुग्दै गर्दा नयाँ शिक्षाको उपहारबापत हामीले ग्रहण गर्न पुगेको औसत गोर्खाली प्रवृत्ति, विचारधारा र संस्कारको कुरा आफ्नै ठाउँमा छ । जति तुच्छ शब्दले अर्कालाई गाली गर्न सकियो त्यस्ती ठूलो लेखक बनिने,










प्रधानमन्त्री, मन्त्री र तिनका विशिष्ट सल्लाहकाररूपी पद र रवाफ पाइने, जति खोक्रो सिद्धान्त र आदर्शको कुरा गर्‍यो त्यति ठूलो नेता बनिने, जति पाप गर्‍यो त्यति फलिफाप आइलाग्ने हाम्रा भूमिका यथार्थहरू आफ्नै ठाउँमा छन्।

हाम्रा भूमिका आफ्नै यथार्थता कत्तिको सही छ वा खराब छ त्यो यो लेखकको बिजनेसको विषयसमेत रहेन । तर पनि निर्धारित लक्ष्य प्राप्तिको सम्बन्धमा संसारको व्यावहारिक यथार्थता भने नयाँ शिक्षा र विदेशी प्रभुका दासहरूले बिटुलाउन पाउनुभन्दा अगावैको नेपाली भूमिको परम्परामा अभ्यस्त बनेको अवधारणा सँगै हुबहु मिल्ने गरी हालको हाम्रो भूमिको यथार्थता भन्दा नितान्त भिन्न रहेको भेटिन्छ।













गुगल जीपीएसको प्राथमिक चासो तपाईंलाई तपाईंको लक्ष्यसम्म पुग्न सहयोग गर्ने हो न कि तपाईंको गल्तीमा तपाईंलाई नमीठो महसुस गराउनु वा गल्ती नहुँदा तपाईंको प्रशंसा गर्नु नै हो। जुन विन्दुमा गुगल जीपीएस आफ्नो प्राथमिक चासोलाई बिर्सेर प्रयोग कर्ताको आलोचना, समालोचना वा प्रशंसामा उत्रन्छ, त्यो विन्दुबाट उसले हामीमध्ये धेरैको सम्मान प्राप्त गर्न छोड्छ। गुगल जीपीएस सँग मोहभंग भएकाहरू यसको विकल्प खोज्न सुरु गर्ने गर्छन्। यसको हालको बजार मागसमेत उल्लेखनीय रूपमै खस्किन थाल्छ।

त्यो मूल मन्त्र बुझेको गुगल जीपीएसको गुगल म्याप तपाईंलाई तपाईं फरक बाटो जहाँ पुग्नुभयो त्यहीबाट पुनः शाही मार्गहरू सिफारिस गर्ने गरी इन्जिनियरिङ









गरिएको हुन्छ। अन्यत्र मुलुकको भन्दा नेपाली भूमिको परम्परागत गुरुकुल शिक्षा पद्धतिको महत्वपूर्ण अतिरिक्त मान्यतामा गुरुकुल शिक्षामा शिक्षाका लागि आउने एक शिष्यको गन्तव्यलाई मुख्य आधार मानी उसैलाई मिल्ने गरी गुरुकुल शिक्षाको प्रशिक्षण योजना बनाउन प्राथमिक चासो राख्न अनिवार्य मानिन्थ्यो। संयोगले आजको गुगल म्यापको इन्जिनियरिसमेत त्यही आधारमा रहेर विकसित भएको देखिन्छ। हामी भने आजको गुगल म्यापको जीपीएसले कसरी काम गर्छ भन्ने उदाहरण दिएर आफ्नो परम्परा यस्तो हो भनी समाजलाई बताउन पर्ने हालतमा पुगिरहेका छौँ ।

भूगोलका विभिन्न गुरुकुल शिक्षा अन्तर्गत हाल नेपाल रहेको भूभागको गुरुकुल शिक्षाको









प्रभावकारिता अत्यधिक रहनुमा यसको मूल अवधारणामा रहेको फरकपन र शालीनता नै प्रमुख थियो । उल्लेखनीय पृथकता जस अन्तर्गत व्यक्तिले काम गर्ने क्रममा जब गल्ती भएको महसुस भएर दुखित बनिरहेको हुन्छ त्यही बेला आफ्ना मार्गनिर्देशक, आफन्त र सहयोगीको निराशा र क्रोधको सिकार भएर उसलाई झन् पीडित र निराशावादी हुनबाट रोक्ने। शालीनता जसले काम गर्ने क्रममा हुने गरेको गल्तीलाई थप ज्ञान लिने अवसरका रूपमा उपयोग गर्न शिष्यहरूलाई उत्प्रेरित गर्ने। भएका गल्तीबाट सिकेर उक्त गल्ती पुनः नदोहरिने गरी काम सम्पन्न गर्न सक्ने क्षमता अभिवृद्धि गर्ने। नियतवश गरिएका गल्ती र बदमासीलाई दण्डित गर्ने ।




यो अवधारणाको सबैभन्दा बुद्धिमानी र उत्कृष्ट पक्ष हो शिष्यले आफ्नो जीवनको उद्देश्य आफैँले अनिवार्य छनोट गर्नुपर्ने। गुरुले शिष्य आफैँद्वारा निर्धारित उद्देश्यको प्राप्तिमा चासो राखी उचित प्रशिक्षणको निर्धारित योजना तर्जुमा गरिदिने । शिष्यलाई आफ्नो यात्रामा स्वतन्त्र बढ्न प्रेरित गर्ने । उसको नियत वा यात्राको गतिमा कुनै दृष्टिकोण नबनाउने।

यात्राका क्रममा शिष्यबाट भएका गल्तीमा न त आलोचना गर्ने न कुनै रिस राग राखी गाली नै गर्ने शालीनता हाम्रो गुरुकुलको धुकधुकी थियो । यात्राको क्रममा भएका उत्साहपूर्वक नतिजाहरूमा समेत उसलाई फुक्र्याउने गरी तारिफ नगर्ने हाम्रो गुरुकुलको कला थियो। शिष्य स्वतन्त्र रूपमा आफ्नै





बुद्धिमत्ता वा कमजोरीले जाँदा पुग्छ त्यही विन्दुबाट उसको उसको गन्तव्यको विन्दु पुग्न उपलब्ध सबैभन्दा उत्तम विकल्पको हरक्षण उपलब्ध गराइदिने गुरुको करुणा तथा असीम प्यार हाम्रो गुरुकुलको फरक प्रकृतिको विशेषता थियो ।

हाम्रो जीवन जस्तै मुलुकको समृद्धिको हजारौं माइलको यात्रासमेत यसले चल्ने पहिलो कदमसँगै सुरु हुने गर्छ । यो जरुरी छैन कि मुलुकले चालेको पहिलो कदम समृद्धिको गन्तव्यतिर बढेको देखियोस्। तर, नियतमा भने प्रस्ट रूपमा त्यतै बढ्ने उद्देश्य निहित हुनुपर्छ । एउटा कुरा सही हो कि हरेक मुलुकको आफ्नै बाध्यता, लक्ष्य र महत्वाकांक्षा हुने गर्छ । कहिलेकाहीँ उक्त मुलुकले लिएको गन्तव्य र नियत फरक पो छ कि भन्ने पनि



देखिन सक्छ । जब नियत नै जसरी पनि समृद्धितर्फ बढ्ने भन्नेमा केन्द्रित गरिन्छ, त्यसले गन्तव्यलाई समेत जबरजस्त फरक आकार दिएर समृद्धिमै पु¥याउँछ ।

दुर्भाग्यवश विगत केही दशकदेखि हाम्रा नेतृत्वमा रहेका नेता र शासक वर्गको नियतमा सदैव लुटतन्त्र र देखाउने गन्तव्यमा हरदम मुलुकको समृद्धि राखिएको प्रस्ट अनुभूति हुन्छ ।

इतिहासकै सबैभन्दा नालायक शिक्षा प्रणालीले विकास गरेको बिचौलियाहरूको राजनीतिमा नेताका रूपमा राजनीतिक सक्रियता, राष्ट्रिय मान्यता प्राप्त राजनीतिक दलमा संगठित रूपमै हुने गरेको माफियाकरण आदि आज नेपालमा न्याय, मूल्य र मान्यता स्खलित सामाजिक संरचना निर्माण गर्न











प्रमुख बनिदिनु नै नेपालको सबैभन्दा ठूलो दुर्भाग्य बनिरहेको छ ।

विकसित मुलुकको अनुभवले मुलुकको समृद्धिका लागि मुलुकमा नवप्रवर्तनको संस्कार बस्नुपर्ने देखाउँछ । नवप्रवर्तनको संस्कारको स्थापनाका लागि हालका ढुकुरे छातीवाला भ्रष्ट नेतालाई मुलुकको माया गर्ने समाजसेवीबाट प्रतिस्थापनको जरुरत पर्छ । मुटुमाथि ढुंगा राखेर मुलुकको यथार्थता बताउने हो भने दुःखका साथ यो कुरा स्वीकार गर्न बाध्य हुनुपर्छ, हाम्रा हकमा आजको राजनीतिक प्रणालीको पहुँच बाहिरको अवस्थासँग मात्र मुलुकभित्र नवप्रवर्तनको संस्कार स्थापना गर्ने हैसियत र क्षमता रहेको छ । जसले मुलुक निकै छिट्टै पुनः अकल्पनीय द्वन्द्वतर्फ अघि बढिरहेको प्रस्ट











संकेत गरेको छ।

## मन्त्रको अद्भुत शक्ति

तपाईं बाटोमा हिँड्दै जाँदा नयाँ कुरा देख्नुभयो भने सायद त्यसको फोटो वा भिडियो खिचेर अन्यलाई देखाउन सक्नुहुन्छ । नयाँ चिज बारेको जानकारी समाजमा ल्याउने पहिलो व्यक्ति बन्न सक्नुहुन्छ । तर, तपाईं त्यो कुराको निर्माणकर्ता मानिनुहुन्न । किनकि तपाईं त्यो वस्तु पहिलो पटक देख्ने मानिस हो, निर्माणकर्ता होइन । संयोगले तपाईंको नाम उक्त नयाँ चिजबारेको ज्ञान समाजमा पु¥याउने पहिलो व्यक्तिमा दर्ज हुन सक्छ। वैदिक मान्यता अनुरूप वेदको सवालमा ज्ञान मानव समुदायसम्म









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



ल्याउन सहयोग गर्ने ऋषिहरूलाई त्यही रूपमा ग्रहण गरिन्छ। स्थापित मान्यतामा ध्यान र तपस्यामा एकाग्र भएर लामो समयसम्म मेडिटेसनमा रहन सक्ने व्यक्ति आफू रहेको वातावरणबाट विभिन्न सूचना प्राप्त गर्ने र त्यसलाई गहिरो अर्थ दिन सक्ने मन्त्ररूपी श्लोकमा व्यक्त गर्न सक्षम बन्न सक्छ। विगतमा हाम्रा ऋषिहरूले त्यही मार्ग अवलम्बन गरी दैविक ज्ञान प्राप्त गरी ती ज्ञानलाई मन्त्रका रूपमा संश्लेषण गरी समाजमा पु¥याउन सफल बने।

हाम्रा चार वेद हाम्रा ऋषिहरूले आफ्नो ध्यानको मध्यमबाट दिव्य शक्तिमार्फत महसुस गरे। त्यसैलाई अर्थपूर्ण मन्त्रका रूपमा परिवर्तन गरी एक सन्ततिबाट अर्को सन्ततिमा हुबहु पु¥याउन सफल





॥ श्री गणेशाय नमः ॥



बने। अक्षर र लेख्ने पद्धति विकास भएपछि लिपिबद्ध गरियो। त्यसैले हाम्रो मान्यतामा हाम्रा वेदको कुनै सर्जक वा लेखक छैनन्। तसर्थ यसलाई श्रुति अन्तर्गत राखियो ज जसले वेदको अध्ययन गरे र त्यसका आधारमा आफ्नो अवधारणा विकास गरी आफ्नोसमेत विचार मिसाएर अन्य सहायक ग्रन्थ तयार गरे त्यसलाई स्मृति भनियो । हाम्रो परम्परागत मान्यतामा तसर्थ ऋषिहरू तपस्या वा अन्य उपयुक्त साधनामार्फत दिव्य ज्ञान प्राप्त गरी त्यसको उपादेयताको महसुस गरेर समाजमा आफूले भेटेको ब्रम्हज्ञान आफ्नो सन्ततिलाई हस्तान्तरण गर्ने अलौकिक पात्र हुन् ।

ऋषि जस्तै समाजमा प्रयोग हुने अर्को शब्द छ 'गुरु'। हाल हाम्रो समाजमा आध्यात्मिक अनुभव











प्राप्त गरेका व्यक्तिका लागि गुरु शब्द प्रयोग गरिने गरेको भेटिन्छ। शाब्दिक रूपमा 'गुरु' शब्दको अर्थ ज्ञान प्राप्ति गर्न सहयोग गरी आफ्नो जीवनमा रहेको अज्ञानताको अँध्यारोलाई हटाउन सहयोग गर्ने व्यक्ति हो। जहाँ गुरु शब्दको 'गु' ले ज्ञानमा रहेको अन्धकारपन लाई जनाउँछ, 'रु' शब्दले अन्धकार बाट छुटकारा दिलाउने वा मुक्ति भन्ने अर्थ दिन्छ । हाम्रो परम्परामा गुरु शब्द मात्र आध्यात्मिकमा सीमित नभएर आफ्नो जीवनमा रहेको कुनै पनि आध्यात्मिक वा व्यावहारिक पक्षसँग सम्बन्धित अज्ञानता हटाएर ज्ञान दिलाउन सहयोग गर्न मुख्य भूमिकामा रहेको व्यक्तिलाई जनाउँछ। आफ्नो जीवनको अन्धकार बाट उज्यालो तर्फको यात्रामा अघि बढ्न प्रभावकारी भूमिका खेल्ने मुख्य











पात्रलाई गुरु भावको आदर दिन सुझाइन्छ ।

आफ्नो जीवनकालमा विज्ञानको गहिरो खोज र अनुसन्धानमा कहिल्यै नघुसेका, अर्काले लेखेको विज्ञानका सतही कुरो पढेका भरमा अवधारणा बनाएर व्यापक बुद्धि विलास गर्न सिपालु बनेको हाम्रो समाजको एउटा निकै ठूलो भुइँफुट्टा बुद्धिजीवी वर्ग वैदिक मन्त्रहरूमा निकै ठूलो शक्ति रहन्छ भन्यो भने अरिंगाले शैलीमा झम्टन आइपुग्छन् । मन्त्रहरूले बिरामीका रोग निको पार्ने, वर्षा नभइरहेको अवस्थामा बर्सात समेत गराउन सम्भव गराउने बनाउने भन्यो भने त त्यसो भन्नेहरूलाई अवैज्ञानिक र पागल करार गर्न साइबर भेडाको समूहमै सक्रियता बढ्छ ।

अथर्व वैदिक मन्त्रले टाउको तथा आँखाको दुखाइ,













छालाको रोग, ज्वरो, कुष्ठरोग, क्षयरोग जस्ता माइक्रोबियल रोग, स्नायु सम्बन्धी रोग आदिलाई निको पार्न प्रभावकारी भूमिका खेल्छ भन्ने मान्यतामा आफूलाई वैज्ञानिक विचारधाराको सामाजिक अभियन्ता बताउनेको व्यापक तिरस्कारको विषय बनिरहँदा स्वयम् विज्ञानको भने उनीहरूबाट व्यक्त विचारमा कुनै सहमति रहेको भेटिँदैन। एकातर्फ वेदका मन्त्रहरूको शक्ति र तिनीहरूको रोगको उपचारलाई प्रभावकारी बनाउने गुणलाई वेदमा उच्च प्रविधियुक्त पद्धति ठानिएको छ। आयुर्वेदले समेत यस्ता उपचार प्रणालीको सराहना गरेको धेरै प्रसंग भेटिन्छ। अर्कोतर्फ विज्ञानले समेत यसलाई गलत प्रमाणित गर्न सकेको छैन। उल्टो एक पछि अर्को गर्दै गरिएका वैज्ञानिक









परीक्षणमार्फत मन्त्रको अद्भुत शक्ति हुने यथार्थ वैज्ञानिक रूपमै प्रमाणित हुने क्रम बढिरहेको देखिन्छ।

सन् १७८५ मा एन्टोइन लाभोइजरले आफ्नो खोजका आधारमा ल अफ कन्जर्भेसन अफ मास भन्दै एउटा वैज्ञानिक नियमको प्रतिपादन गरे। संक्षिप्त रूपमा यसले भन्छ, 'पदार्थ न त सिर्जना गरिएको कुरा हो न त नष्ट नै हुने ।' सन् १८४२ मा जुलियस रोबर्ट मेयरले ल अफ इनर्जी कन्जर्भेसनको नाममा पहिलो ऊर्जा संरक्षणको सिद्धान्त पत्ता लगाए र संक्षिप्त रूपमा थर्मोडिनामिक्को अर्को नियम लेखे 'ऊर्जा न त सिर्जना गरिएको हो न त नष्ट नै हुने गर्छ।'

सन् १९०५ तिर अल्बर्ट आइन्स्टाइनले जब $E =$









$mc^2$ समीकरणको घोषणा गरे, नतिजास्वरूप दुवै वैज्ञानिक सिद्धान्तको मिलन गरी भनियो, 'ब्रह्माण्डमा पिण्ड (द्रव्यमान) र ऊर्जाको कुल मात्रा स्थिर रहन्छ।' त्यसपछि नै हालको वैज्ञानिक अवधारणा 'शक्ति न त पैदा गर्न सकिन्छ न त नष्ट नै । सकिन्छ त मात्र एक रूपबाट अर्को रूपमा परिवर्तन गर्न' भन्ने सम्पूर्ण अवधारणा प्रस्ट गर्न सकियो। हाम्रा बुद्धिविलासी महाबौद्धिक वर्गलाई माथि उल्लिखित विज्ञानका कथा प्रायः कण्ठस्थ रहेको भेटिन्छ। उनीहरूको चुरो समस्या उनीहरूले थाहा पाएर पनि थाहा नपाएको जस्तो अभिनय गर्ने, सुनेर पनि नसुनेको जस्तो बहानामा स्वीकार्न नचाहने दसौं शताब्दीको आसपासका वेदका रूपमा संश्लेषण गरिएको वैज्ञानिक यथार्थता मात्र हो।








वेदका अनुसार ब्रह्माण्डमा पुगेका कुनै पनि कुरा हराउने गर्दैनन्। आज भन्दा लाखौँ वर्षपहिले भएको कुरा नै किन नहोस् तिनीहरू अझै ब्रह्माण्डमा रहने हुँदा कुनै उपयुक्त तरिकाबाट तिनीहरूबारे थाहा लाग्न सक्नेछ किनभने तिनीहरूको आवाज अझै यही ब्रह्माण्ड मानै छ। हामीले सुन्ने ध्वनि जुन कम्पन र तरंगहरूको श्रृंखला हो, त्यो विभिन्न तरिकाबाट ब्रह्माण्डमा प्रसारित हुने गर्छ। जस्तै: प्रकाशले आवाज बोक्न सक्छ। यसको इलेक्ट्रोम्याग्नेटिक ऊर्जा रहन्छ। जुन आज आधुनिक विज्ञानले समेत प्रमाणित गरिसकेको छ।

वेद भन्छ, 'तरंगित हावाको अणुहरूको घर्षण मार्फत उत्पन्न हुने ध्वनि मार्फत अर्को वस्तु, जनावर वा व्यक्तिबाट उत्पन्न भएको आवाज वा शब्द









सामान्य अवस्थामा मानिसले महसुस गर्छ। त्यसलाई आफ्नो अनुभवका आधारमा संस्लेष्ण गरी त्योबारे आफ्नो मान्यता विकास गर्छ । जसमा आफ्नै प्रकारको कम्पन हुन्छ। प्रकाशको किरणको सन्दर्भमा भने प्रकाशको आफ्नो आफ्नै प्रकृतिको कम्पन हुन्छ। प्रकाशको ध्वनिको कम्पनको प्रकृति हाम्रो सामान्य कानले सुन्न सक्ने भन्दा सूक्ष्म र फरक ढंगको हुने गर्छ। मानिस जब उक्त तरंगहरू सुन्न सक्ने गरी आफूलाई अभ्यस्त गराउन सक्छ तब उसले त्यहाँ रहेका सूक्ष्म आवाजमा समेत पहुँच वृद्धि गर्न सक्छ। उक्त ध्वनिबारे आफूलाई अभ्यस्त गराउन सक्दा ध्वनिका आधारमा प्राप्त शब्दलाई संश्लेषण गरी मानिसले त्यसमा रहेका विषयवस्तुबारे आफ्नो धारणा बनाउन मतलब सुन्न






र बुझ्न सक्षम बनाउन सक्छ। ब्रह्माण्डमा रहेका प्रायः सबै नै पदार्थले ध्वनि वा तरंग उत्पन्न गर्ने हुँदा ध्यान र उपासनामार्फत उक्त आवाज सुन्ने गरी आफ्नो क्षमता विकास गरेका तपस्वी हाम्रा पूर्वजले आफूलाई ऋषिका रूपमा आफ्नो इतिहास निर्माण गर्न सम्भव बनाएको देखिन्छ।'

वेदको ब्रह्माण्डमा रहेका कुनै पनि कुरा हराउने गर्दैनन् भन्ने अवधारणा होस वा प्रकाशको किरणसँगै विभिन्न ध्वनि हिंड्ने यथार्थ आधुनिक विज्ञानले वैज्ञानिक परीक्षण मार्फत पुष्टि गरी स्विकारेका कुरा हुन्। तपाईं तनहुँको बोके खोलाबाट साइकलमा गुल्मीको मालिका गाउँ जमपोखरामा घुम्ती हाटबजारतिर लाग्नुभएको पाँच घण्टापछि यदि मैले भटभटे लिएर तपाईंको पछिपछि आएँ भने










तपाईंलाई मैले कविलास गाविसको जुगेडीतिर भेट्न सम्भव हुन्छ । जसले मलाई तपाईंको भौतिक शरीरको नजर गर्ने, तपाईंसँग बातचित गर्ने मौका उपलब्ध हुन सक्छ।

हालसम्म सबैभन्दा तीव्र गतिमा हिंड्ने भौतिक पदार्थमा प्रकाशको किरण रहेको अनुमान गर्ने विज्ञानले यदि आफूले प्रकाशको किरणभन्दा तीव्र हिंड्ने तरिका पत्ता लगाउन सकियो भने ब्रह्माण्डमा प्रसारित भइरहेका ती ध्वनि सुनेर हाम्रो इतिहासमा भएका घटनाक्रम पत्ता लगाउन सकिने विश्वास गर्छ। त्यही सिद्धान्तका आधारमा टाइम मेसिन बनाउन सकियो भने हामीले आफ्नो बूढो उमेरलाई तन्नेरी उमेरको समयमा पु¥याउन सकिन्छ भन्ने आधारमा निकै धेरै गहिरो वैज्ञानिक अनुसन्धान











भइरहेका छन् ।

३८० न्यानोमिटरको तरंग हुने प्रकाशको अल्ट्राभायोलेट किरणको उज्यालो छर्किदिंदा डीएनएमा रहेको थाइमाइनको दुई अणुबीचको सन्तुलन भत्काइदिएर बिग्रिएको डीएनएको पी–५३ नामक थुप्रो बनाइदिएर कीटाणुको कोषिकाको नष्ट गरिदिने हुँदा आज खानामा रहेको हानिकारक ब्याक्टेरिया मार्न यूभी प्रविधिको व्यापक प्रयोग भएको छ। त्यस्तै माइक्रोवेब, लेजर प्रविधि आजभोलि व्यापक प्रयोगमा छ । यहाँ रमाइलो के छ भने विशेष प्रकृतिको ध्वनिको प्रयोग गरी आफ्नो खानाबाट विषाक्त जीवाणु माइक्रोवेब, लेजर प्रविधिले मार्दै ब्रेकफास्ट, लन्च र डिनर हसुर्ने हाम्रा विद्वत् वर्ग आफैं भने वेदले ध्वनिले माइक्रोबियल













रोग निको पार्ने क्षमताको गहिरो अर्थ बुझ्न नसकी वेदका उक्त विचारधाराको निन्दा गर्ने पंक्तिमा खडा भएको देख्न पाइन्छ ।

लेजर प्रविधिको आँखाको उपचार लगायतको विभिन्न उपचार सम्भव बन्नुको पछाडिको पहिलो ज्ञानको स्रोत के थियो त्यसलाई मुक्त कण्ठले जस दिन सक्ने हैसियतमा आफूलाई उभ्याउन सकिरहेका छैनन् ।

स्वस्थ मानिसको रगतमा नुनको मात्रा करिब ०.१५३ मोल प्रतिलिटरको हाराहारीमा, चिनी १४० मिलिग्राम प्रति डेसिलिटर भन्दा कम अपेक्षा गरिन्छ। ३७ डिग्री सेल्सियसको तापक्रम भएको मानिसको रगतको औसत अस्मोटिक प्रेसर ७.८ बारको हाराहारी रहने आशा गरिन्छ। हाम्रो











वातावरणमा रहने धेरै जसो ई.कोली नामक ब्याक्टेरिया तुलनात्मक रूपमा खासै हानिकारक हुँदैनन्। कतिपयले कहिले काहीँ हल्का पखाला लगाउने गर्छन्। ई.कोलीको ओ–१५७:एच–७ जातको स्ट्रेनले भने हामीमा गम्भीर पेट काट्ने, दिसामा रगत देखिने प्रकृतिको पखाला लगाउने, बान्ता हुने रोग लगाउँछ ।

वेदका अनुसार हाम्रो ब्रह्माण्डमा हामीले पहिचान गर्न सक्ने र नसक्ने श्रव्य ध्वनिहरू व्यापक रूपमा अवस्थित छ। विज्ञानले आजको मितिसम्म श्रव्य ध्वनिको जैविक जीवाणुमा हुने प्रभावबारे अत्यन्त न्यून जैविक अनुसन्धान गरेको छ। तर पनि जीव र श्रव्य ध्वनिबीचको सम्बन्धबारे केही अध्ययन भएका छन्।













सन् २००९ डिसेम्बरमा चाइनाको हेनान विश्वविद्यालय, झेजियाङ विश्वविद्यालय र वुहान विश्वविद्यालयले श्रव्य ध्वनिले सामान्य अवस्था र वातावरणीय तनावको अवस्था अन्तर्गत ई.कोलीको कोषिकामा कस्तो प्रभाव पार्छ भनी व्यापक अध्ययन अनुसन्धान गर¥यो। अनुसन्धानको नतिजा अनुसार सामान्य स्थितिमा राखिएको ई.कोलीमा पु¥याइएको श्रव्य ध्वनिका कारण ई. कोलीको कोलोनी वा झुप्पाको वृद्धिमा उल्लेखनीय रूपमा वृद्धि भएको भेटियो ।

जब तिनै ई.कोली ब्याक्टेरियालाई चिनी र नुनयुक्त ओस्मोटिक तनावको वातावरणमा राखेर श्रव्य ध्वनि सुनाएर र सो विना परीक्षण गरियो, तब ओस्मोटिक तनावको अवस्थामा भने श्रव्य ध्वनिले ई.कोलीको









वृद्धिमा अत्यन्त धेरै निषेधात्मक प्रभाव बढाएको पाइयो। सामान्य तया ३० ग्रामप्रति लिटरको नुनको मात्राले ई.कोली ब्याक्टेरियाको गतिविधि पूर्ण रूपमा निषेधित हुने गर्छ। तर, जब आवाजको तरंग र ध्वनिको उपस्थिति रह्यो, त्यो समयमा २० ग्राम प्रतिलिटर नुन भएको वातावरणमा नै ई.कोली ब्याक्टेरियाको गतिविधि रोक्न सम्भव देखियो ।

संसारमै प्रतिष्ठित विश्वविद्यालयको ध्वनिको रोग निम्त्याउने परजीवीहरू नियन्त्रण गर्न सहयोग हुने २०१० मार्चमा एल्सेभिएर साइन्स डिरेक्टमा प्रकाशित अनुसन्धानको विवरण निष्कर्ष सहित नेसनल लाइब्रेरी अफ मेडिसिन, नेसनल सेन्टर फर बायोटेक्नोलोजी इन्फरमेसनले संग्रहमा राख्यो ।

अनुसन्धानको यो नतिजामा वेदमा उल्लेख भए









अनुरूप मन्त्रको ध्वनि स्वतन्त्र रहँदा मानव मात्र नभएर जीवजन्तुका लागि समेत उत्थान गर्ने प्रकृतिको रहन्छ। जब उक्त जीव अर्को जीवमा हानि गर्ने उद्देश्यमा पुग्छ, उसले प्रतिकूलता व्यहोर्नुपर्छ । किनकि हानि गर्ने उद्देश्यमा एकापसमा तनावको अवस्था पैदा हुन्छ। तनावको अवस्थामा मन्त्रको ध्वनि तनावकारी पक्षका लागि प्रत्युत्पादक बनिदिन्छ । वैज्ञानिक परीक्षणको यो नतिजालाई वेदको अवधारणा पुष्टि गर्न सहयोग गर्ने नतिजाका रूपमा लिन सकिन्छ।

धार्मिक जप, मन्त्र, विभिन्न प्रकारका ध्यान आदिको मानिसको न्युरल सहसम्बन्धबारे थोरै भए तापनि केही अत्यन्त गुणस्तरयुक्त र विस्तृत वैज्ञानिक अनुसन्धान भएकोबारे वैज्ञानिक समुदाय परिचित








छ। मार्च २०१९ मा नेचरको साइन्टिफिकमा प्रकाशित बहुमोडल इलेक्ट्रोफिजिकल र न्युरो-इमिजिङ विधिको प्रयोग गरेर गरिएको अनुसन्धानको रिपोर्टले जपका कारण मानिसको मस्तिष्कको पोस्टरियोर सिन्गुलेट कर्टेक्सको इजिनभेक्टर सेन्ट्रालिटीमा ठूलो गिरावट हुने पुष्टि गरेको देखिन्छ। अनुसन्धान कर्ता को अनुमानमा जपका कारण मस्तिष्क क्षेत्रमा हुन पुगेको आन्तरिक डेल्टा ओसिलेसन यसका लागि जिम्मेवार छ । समग्रमा यो अनुसन्धान ले अथर्व वैदिक मन्त्रले एक प्रभावकारी मनोवैज्ञानिक थेरापीको काम गर्ने हुँदा दिमाग र शरीरको अन्तरसम्बन्धमा सुधार ल्याई भौतिक शरीर र ऊर्जाको व्यवस्थापन मार्फत सोचाइ र गराइ बीचको सामञ्जस्यता पैदा गर्न र मानसिक









स्वास्थ्यको अभिवृद्धि गर्ने सहयोग पु¥याउने अवधारणाको पुष्टि गर्न बल पु¥याउँछ ।

बर्सात को ध्वनि सामान्यतया शून्यदेखि २० किलो हर्ज हुने गर्छ । स्वाभाविक प्राकृतिक क्रिया रहेको बर्सातको ध्वनिले झट्टै निराश हुने मानिसको मस्तिष्कमा संगीतले जस्तै आरामको महसुस गराउँछ। बर्सातको बीचको मेघको गर्जनले भने मानिसमा तनाव उत्पन्न गर्छ। किनकि गड्याङ गुडुङको आवाजले मानिसमा चिन्ता लगाउने हार्मोन कोर्टिसोलको मात्रा उच्च गरिदिन्छ।

आरामको अवस्था भनेको मानिस अत्यन्तै कडा ध्यानमा केन्द्रित रहनुपर्ने वा विशेष कार्यमा संलग्न बनिरहन नपरिरहेको अवस्थालाई जनाउँछ। उक्त अवस्थामा मानिसको दिमागले आठदेखि १२ हर्जको










तरंग उत्पादन गर्ने गर्छ। तिनै तरंगका कारण मानिसले अपेक्षाकृत शान्त र आरामको महसुस गर्छ। जसलाई अल्फा तरंगको नाम दिइएको छ ।

अध्ययनहरूले पत्ता लगाए अनुसार वर्षाको आवाज मानिसको दिमागमा प्रवेश गर्दैगर्दा दिमागले अन्जानमै विश्राम लिने गर्छ। फलस्वरूप त्यहाँ अल्फा तरंगहरू उत्पादन हुन पुग्छ । जुन मानव निद्रामा पर्दा हुने दिमागको नजिकैको अवस्था हो। सामान्य भाषामा भन्दा बर्सातको टिकटिकको आवाजलाई मस्तिष्कले अद्भुत लय बद्ध लोरीका रूपमा महसुस गर्ने हुँदा यसले मानिसलाई चाँडै निदाउन मद्दत गर्छ।

तिब्बती सुक्खा पहाडी भूभागमा चीनको सिंघुवा विश्वविद्यालयको स्टेट की लेबोरेटरी अफ हाइड्रो













साइन्स एन्ड इन्जिनियरिङ्का प्राध्यापक वाङ गुआङकियानको नेतृत्वमा सन् २०२० मा आवाजको प्रयोगमार्फत मौसमको हेरफेर गर्न सकिने / नसकिने विषयमा एक अनुसन्धान गरियो।

अनुसन्धानकर्ताले आकाशतर्फ विशाल लाउड स्पिकर फर्काएर कम–फ्रिक्योयन्सिको ध्वनिको तरंग छाड्दा फराकिलो तिब्बती सुक्खा पहाडी भूभागमा उनीहरूले १७ प्रतिशतसम्म वर्षा बढेको भेट्टाए।

उनीहरू ध्वनि शक्तिले बादलको फिजिक्समा परिवर्तन ल्याउन सम्भव हुने निचोडमा पुगे। सफल अनुसन्धान पश्चात् सावधानी पूर्वक पिएर–रिभ्युसमेत पूरा गरी प्रतिष्ठित जर्नल साइन्टिया सिनिका टेक्नोलोजीले जनवरी २०२१ मा प्रकाशित गरेको उक्त अनुसन्धानको निचोडले कम











फ्रिक्योयन्सीको ध्वनिको तरंगको प्रयोग गरी सुक्खाग्रस्त क्षेत्रमा वर्षा गराउन सकिने भएको समाचार विश्वभर पु¥यायो।

बेइजिङस्थित सिंघुवा विश्वविद्यालयका अन्वेषकहरूले गरेको उक्त अध्ययनको नतिजाले वेदले उल्लेख गरेको मन्त्रमार्फत बर्सात गराउन सकिने विषयको वैज्ञानिक पुष्टि गरिदिएको छ।

दुबईले आफ्नो शुष्क जलवायुमा वर्षा बढाउन क्लाउड सीडिङ प्रविधिको प्रयोग गरेको छ। यो विधिमा विमानहरूबाट सिल्भर आयोडाइड वा सोडियम क्लोराइड जस्ता कणहरू बादलमा छरिन्छन्, जसले सघनता केन्द्रको रूपमा काम गर्छन्। यी कणहरूले बादलभित्रको चिस्यानलाई जम्मा हुन मद्दत गर्छन्, जसले गर्दा ठुला थोपा













बन्छन् र अन्ततः पानीको रूपमा खस्छ।

पछिल्लो समयमा, दुबईले ड्रोनको प्रयोग गरेर पनि बादलहरूमा विद्युतीय चार्ज छोड्ने प्रविधि अपनाएको छ। जस अन्तर्गत विद्युतीय उत्तेजनाबाट पानीका थोपाहरूलाई ठुलो बनाउन मद्दत गर्दछ। यो विधिमा प्राकृतिक रूपमा बादलमा हुने विद्युतीकरणको नक्कल गरिन्छ जसमा रसायनको प्रयोग बिना नै कृत्रिम वर्षा सम्भव हुन्छ। यी प्रविधिहरू पानीको अभाव भएको क्षेत्रमा वर्षा बढाउन प्रभावकारी भएको प्रमाणित भएको छ।

मन्त्र ध्वनि ऊर्जा हो। ध्वनि ऊर्जाको प्रयोग गरेर क्लाउड सीडिङ वा वर्षा गराउन सकिने सिद्धान्तहरू आज पनि सैद्धान्तिक रूपमा सम्भव हुने सिद्धान्तको रूपमा स्थापित छ। केही अनुसन्धान कर्ताहरूले









तल्लो आवृत्तिका ध्वनि तरङ्गहरू (इन्फ्रासाउन्ड) प्रयोग गरेर बादलमा रहेका पानीका कणहरूलाई उत्तेजित गरी थोपामा परिवर्तन गरी वर्षा गराउन सकिन्छ भन्ने कुरा सैद्धान्तिक रूपमा ठिक रहेकोले त्यो दिसामा अन्वेषण गर्ने क्रममा रहेको देखिन्छ।

निकोला टेस्लाले एक पटक अनुनाद ध्वनि आवृत्तिहरूको (Resonating sound frequencies) प्रयोग गरी मौसमलाई प्रभावित गर्न सक्ने प्रस्ताव गरेका थिए। यद्यपि उनको यो प्रस्ताव वैज्ञानिक रूपमा उनी जीवित रहँदा परीक्षण गरिएन। चीनमा भएको परीक्षणले भने यसको पुष्टि गऱ्यो। आधुनिक समयमा, केही वैज्ञानिकहरूले उच्च तीव्रताका ध्वनि तरङ्गहरू प्रयोग गरेर बादलहरू लाई प्रभाव पार्नका लागि परीक्षण गरेका छन्।









त्यसलाई पूर्ण प्रभावकारी गर्ने दिसामा अनुसन्धानहरू नियमित चलेको छ।

यद्यपि संस्कृत मन्त्रको जप जस्ता ध्वनि तरङ्गहरूले बादलहरूमा प्रभाव पारेर वर्षा गराउन सक्छ भन्ने हदमा पुगेर हाल सम्म ध्वनिमा आधारित मौसम परिवर्तन मार्फत को वर्षा गराउने हदको क्षमता विज्ञानले विकास गरिरहेको छैन तर क्वान्टम फिजिक्सको हाल सम्म बुझी भन्दा गहिरो ज्ञान लिन सक्दा भविष्यमा यसो हुन सक्ने तर्फ वैज्ञानिक परीक्षण हरुको नतिजाले औँल्याएको छ। हाल त्यो भन्दा अलि तल्लो स्तर मै रासायनिक र विद्युतीय विधि युक्त प्रविधिहरू सहज सफल बनेकाले त्यो उपयोग भइरहेको छ।








# मन्त्रै मन्त्रभित्र जकडेको जिन्दगी

मानिसको जीवनमा विभिन्न मोड आइपर्छन्। ती प्रत्येक मोडलाई सफलता वा सन्तुष्टिका साथ निकास दिन कुनै निश्चित मन्त्रको अनुसरण गर्न सक्दा जीवन सजिलो हुन जान्छ। ती मन्त्रहरू यो या यस्तो नै हुनुपर्छ भन्ने हुदैन। तर, कतिपय अवस्थामा मन्त्र के चाहिँ सही होइन भन्न सकिने अवस्था रहन्छ। जब मानिस आफ्नो मनको कुरा सुन्न छोड्छ वा आफूलाई भन्दा अर्का लाई बढी विश्वास गरी अरूको निर्देशनमा आफ्नो निजी जीवनमा के गर्ने के नगर्ने भन्ने बाटो समात्छ तब मानिस मूल मन्त्रबाट विचलन बन्छ र कम्तीमा आत्म सन्तुष्टिको दिगो फल लिनबाट भने वञ्चित









हुन्छ।

मात्र सिद्धान्तवादी भएर न त व्यवहार चल्छ न विज्ञानमा आधारित कुनै यन्त्र वा मेसिन नै । कुनै पनि परियोजना चल्न होस् वा व्यवसायलाई सफलतापूर्ण टुंगोमा पु¥याउन होस्, त्यसको आधारभूत सैद्धान्तिक पक्ष जति जरुरी छ, उत्तिकै महत्वपूर्ण त्यसका व्यावहारिक पक्ष हुन्छ। त्यो मात्र विज्ञान र दर्शनमा हैन, प्रेम, मनोविज्ञान र अध्यात्ममा पनि उत्तिकै लागू हुन्छ। जब कुनै पनि देशका जनताको दैनिक जीविका र उत्थानका लागि जरुरी हुने रैथाने संस्कृति र व्यावहारिक पक्षलाई पन्छाएर आयातित संस्कृति, रहन सहन र विचारधारा लाई समाजले अवलम्बन गर्छ समाज पिछडिन सुरु हुन्छ। अथाह स्रोत साधन बीच मुलुक










चरम गरिबी, निराशा र शक्ति असन्तुलनको चपेटामा पर्छ।

मानिसको मनोवैज्ञानिक मान्यता विकास हुन आफ्ना सम्पर्कका वातावरणले गराउने अनुभूति र अध्ययनबाट प्राप्त सामाजिक समृद्धिबारे अवधारणा, प्रेम सम्बन्ध बारे छाप र अध्यात्मिक चेतनाबारे अनुमान मुख्य पर्छ।

## सफल व्यवसायको मन्त्र

कुनै पनि व्यवसाय आजका नामुद कमर्सका विश्वविद्यालयहरूले सिकाउने गरे अनुरूपको बजारको सम्भाव्यता अध्ययन गर्ने, योजना तर्जुमा गर्ने, नाफाघाटाको यकिन गर्ने, स्रोतसाधनको













व्यवस्था गर्ने अनि व्यवसाय सुरु गर्ने अनि रातारात पैसा छाप्दै अमीर बन्ने मोडलले चल्दैन ।

यो विषय यति सजिलै भएको भए सायद ती विश्वविद्यालयका प्राध्यापकहरू नै त्यतै धेरै पहिले लागि सक्थे होला। संसारको दुर्भाग्य आजसम्म यो नै व्यवसायले मान्छेलाई निश्चित अमीर बनाउँछ भन्न सक्ने एउटा मात्र पनि न त सिद्धान्त न त विधि नै कोही कसैले यकिन गरी भन्न सकेको छ।

आजको दिनसम्म आइपुग्दा सफल व्यवसाय भनेको त्यो हो जसले तपाईंलाई आनन्द दिन्छ र सफल व्यवसायको मन्त्र हो। तपाईंलाई जे मन पर्छ त्यही गर्नुस् । जे गर्दा तपाईंको अन्तरात्मा खुसी हुँदैन, त्यो जतिसुकै प्रिय वा जरुरी देखियोस्, त्यो नगर्नूस्।









जुन कुरा तपाईंलाई मन पर्छ त्यो काम तपाईंको सौख हुनेछ । जब तपाईंको सौख नै तपाईंको काम बन्नेछ, तपाईं सन्तुष्ट हुनु हुनेछ। जब तपाईं सन्तुष्ट हुनुहुनेछ, तपाईं सफल व्यवसायी बन्नुहुनेछ ।

यहाँनिर अलिकति सफलता भनेको के हो भन्ने जान्न र महसुस गर्न जरुरी छ। सफलता भनेको अरूले बनाएको तपाईंबारे धारणा हैन वा तपाईंबाट अरू मानिस कति असन्तुष्ट वा सन्तुष्ट छन् भन्ने हुँदै होइन। सफलता भनेको तपाईं जहाँ हुनुहुन्छ र जे गरिरहनु भएको छ, त्यसमा के तपाईं आफैं सन्तुष्ट हुनुहुन्छ, त्यसले निर्धारण गर्नेछ ।









# सफल प्रेमीको मन्त्र

मानिसको जीवनमा यौन अर्को अति महत्वपूर्ण पाटो हो। भौतिक, मानसिक र मनोवैज्ञानिक रूपमा स्वस्थ रहन गाँस, बास र यौनसन्तुष्टि मानिसका आधारभूत आवश्यकता हुन् । तीन आधारभूत आवश्यकता पूर्ति भएपछि मात्र मानिसको मनोवैज्ञानिक र आध्यात्मिक सन्तुष्टिले दिने आत्म स्वाभिमानको बृहत् अर्थ रहन्छ ।

आत्मस्वाभिमान तपाईं सम्मान योग्य हुनुहुन्छ भनी अर्काको दिमागमा परेको प्रभाव र अर्काले तपाईंलाई गर्ने मान वा सम्मानले निर्धारण गर्दैन। स्वयम् तपाईंको नजरमा तपाईं आफैं लाई कति असल ठान्नुहुन्छ र हुनुहुन्छ, त्यसले निर्धारण गर्नेछ।






तपाईंलाई अर्काले गर्ने सम्मानमा न तपाईंको कुनै नियन्त्रण रहन्छ न समयक्रमले यसलाई दिगो राख्ने कुनै ग्यारेन्टी हुन्छ।

तपाईंसँग भएको कुनै विशेष खुबी, क्षमता, पद, पैसा, शक्ति वा अन्य मानिसलाई तपाईंले पारेको प्रभावले तपाईं असल मानिस बनाउने छैन। न त तपाईंले कसैका लागि कुनै असल काम नै गरेको हुनु जरुरी छ। मात्र खराब नियतले वा आफ्नो वा आफूले चाहेको विषयको फाइदाका खातिर तपाईंले अर्काको दुरुपयोग गर्नु भएको छैन, दुःख दिनुभएको छैन र त्यस्तो नियत वा चाहना तपाईंमा छैन भने तपाईं वास्तवमै असल मनिस मानिनुहुन्छ।

प्रेम आफैं मानिसको यौनरूपी प्राथमिक आधारभूत आवश्यकता पूर्ति गर्ने माध्यम हुनु पर्छ भन्ने माथि











उल्लेख गरियो। सफल प्रेमी हुन तपाईं कसैसँग प्रेममा पर्न जरुरी छ। सफल प्रेमी बन्नका लागि दुई आधारभूत आवश्यकता छ। एक तपाईंको प्रेमीले समेत तपाईंसँग स्वेच्छाले प्रेम गरेको हुनु। अर्को तपाईं तपाईंको प्रेमीप्रति असल रहनु ।

तपाईं कसैसँग प्रेममा पर्नुभएको छ कि छैन त्यो तपाईं आफैंले अनुभूति गर्न सक्नुहुन्छ। तपाईंको प्रेमी तपाईंसँग के वास्तवमै प्रेममा छन् वा छिन् भन्ने कुरा हलिउड, बलिउडका फिल्ममा देखाइने र बजारमा बिक्रीमा भेटिएका किताबहरूमा वा कथाहरूमा लेखिने जस्तो पहिलो नजरमै इलु इलु हुने, देख्दै मायामा पर्ने वा एक–दुई कुरा गरेपछि जालमा पर्ने भन्ने मात्र भन्ने वा भनिने कुरा हुन्, धेरै बनावटी कथन। अक्सर गरी प्रेमभन्दा आसक्तिका











अनुभवलाई प्रेम नै हो भनी समाजमा भ्रम छर्न गरिने खेती ।

प्रेमको मन्त्रले भन्छ; "मैले उस लाई देखेँ । उसले मलाई देख्यो। हामी एक अर्कालाई नै बनेका हौँ भन्ने भित्री अन्तरात्माको आवाज सुनियो अनि प्रेम भयो।" भने जसरी प्रेम हुँदैन। न त सँगै घुम्यो, मीठो मीठो खाइयो, मनोरञ्जन गरियो भन्दैमा प्रेम बस्छ वा बसिसक्छ।

प्रेम एउटाले गरेको मीठो कुरा सुनेर अर्को दंग हुँदा वा एउटाको जोकमा अर्कोलाई मुस्कान उठ्दा बसि सकेको नहुन सक्छ। "जब एउटाले पादेको पादमा अर्काले छिः त भन्छ र पनि गलल्ल हासी मनोरञ्जन लिन सक्ने अवस्थामा पुगिन्छ" तब भने वास्तविक प्रेम बसेको हो कि भन्ने विश्वास गर्ने स्तरमा पुग्ने













गर्छ।

प्रेम वा प्रेमी ठूलो र सानो बीचमा हुने कुरा हैन। एक पति परमेश्वर अर्को दासी वा सेवक रहँदा सम्म प्रेम, प्रेम हैन फाइदाका लागि गरिएको सम्झौता हुन्छ। त्यो संस्कार बोकेको विवाह सामाजिक र स्व–स्वीकृतिमा चाहेको अवस्थामा गरिन सकिने बलात्कारका लागि दिइएको लाइसेन्समा परिवर्तन हुन्छ।

एकले अर्काको सबै वा उचितभन्दा धेरै जिम्मेवारी बोकिनुपर्ने वा बोकिने सम्बन्ध पनि प्रेम भन्दा फाइदा कै सौदा हुन पुग्छ। प्रेममा एकको अर्का प्रति माया, जिम्मेवारी, मान, सम्मान, इज्जत सबै बराबरी हुन जरुरी छ । वास्तविक प्रेममा दुई प्रेमी बीच न त कोही ठूलो कोही सानो भन्ने भावना











रहन्छ, न त स्वार्थ। स्वार्थ हुन्छ त दुवैको जीवन एक अर्कोको भरोसामा र जिम्मेवारीमा दुवैलाई समान फाइदा पुग्ने गरी स्वेच्छाले सँगै रहने र बाँच्ने सम्झौता। यस्तो सम्झौता जहाँ असमझदारीका विषयमा आफूले चाहे अनुसार गरी स्वतन्त्र रूपमा अघि बढ्ने समझदारी सर्त राखेर होइन, नभनेर, लिखित वा मौखिक रूपमा सम्झौता नगरीकन, व्यवहारिक रूपमा नै स्थापित हुन पुग्दछ।

## मेडिटेसनको मन्त्र

मेडिटेसन आफूलाई वा आफ्नो प्रभावमा रहेका जोकोहीलाई दर्द वा सफरिङबाट छुटकारा दिलाउने आध्यात्मिक र मनोवैज्ञानिक पद्धति हो । जसलाई













आज संसारमा उपलब्ध विकल्पमध्ये सबैभन्दा शक्तिशाली र प्रभावकारी मानिएको छ ।

अर्काले भनेको वा बताएको कुरा विनाप्रतिरोध पूर्ण करुणाका साथ मनन गरेर सुन्नुलाई अंग्रेजीमा डिप वा कम्प्यासनेट लिसनिङ भन्ने गरिन्छ । जुन, जेसुकै कारणले किन नहोस्, मन अशान्त हुन गई प्रतिक्रियात्मक हुन पुगेको व्यक्तिको सबैभन्दा उत्तम 'प्रथम चरणको' उपचार वा कम्प्यासनेट लिसनिङ थेरापी हो ।

पोखिएको असन्तुष्टि जायज हो वा हैन, त्यो पछि उचित समयमा सम्बोधन गरिनुपर्ने कुरा हो भन्ने ठानी यो चरणमा व्यक्त कुराहरू पूर्ण करुणाका साथ गम्भीर भएर सुन्ने काम गरिन्छ ।





कम्प्यासनेट लिसनिङले असन्तुष्ट भई मनबाट रिसको आगो ओकलिरहेको मानव होस् वा दर्दले छियाछिया पारेको मनबाट निक्लेको वेदना पोखिरहेको पीडितको वा निर्धक्क बेलगाम आफूले भोगे अनुभव गरेका कुरा बताइरहेको बिन्दास मान्छेको, आफ्ना कुरा बताउन पाउँदा मन हल्का हुन गई प्रथम अति प्रभावकारी दिमागी उपचार शरीरलाई प्राप्त हुन्छ ।

मात्र एक–दुई घण्टा करुणाका साथ पीडितको कुरा सुनिदिँदा उसलाई उसको मन हल्का भएको बोध भई पीडा कम भएको महसुस हुन्छ । जीवन सकारात्मक परिवर्तनतर्फ उन्मुख बन्छ ।

डिप वा कम्प्यासनेट लिसनिङले लिसनिङमा सहभागी भएका भन्ने र सुन्नेबीच गहिरो सुझबुझको





विकास गराउँछ । एकापसमा विश्वासको वातावरण अरू गाढा बनाई मेडिटेसनमार्फत पूर्ण उपचार गर्न चाहिने पूर्वाधारको तयारी गरिदिन्छ ।

मानिसको जीवनको प्रमुख उद्देश्य मोक्ष प्राप्ति नै हो। मोक्ष प्राप्तिका लागि मानिसलाई कन्सियसनेसको जरुरी पर्छ। मानिसमा कन्सियसनेस (सचेतना वा जागरण) जगाउन मेडिटेसन (ध्यान वा साधना) ले निकै ठूलो सहयोग पु¥याउँछ ।

अन्य कुराको जस्तै मेडिटेसनको पनि आफ्नै मन्त्र हुन्छ।

थिच नहटसँग ओप्रा विन्फ्रेको वार्ताबाट साभार प्रतिलिपि दिइएको छ ।

(Copied from **Oprah Winfrey** talks with **Thich Nhat**)

First Mantra: Darling, I am here for you. (When you love someone. It is the best you can offer). You look into his or her eye and say, "Darling, do you know something? I am here for you".

**पहिलो मन्त्र**: प्रिय, म तिम्रो लागि यहाँ छु। (जब तिमी कसैलाई माया गर्छौं, यो नै तिमीले दिन सक्ने सबैभन्दा राम्रो चीज हो)। उसको आँखा हेरेर भन, "प्रिय, के तिमीलाई थाहा छ? म तिम्रो लागि यहाँ





तिम्रो सामुन्ने तिमि सँगै छु।

Second Mantra: "Darling, you are here. I am happy you are truly here." Recognizing the present moment, even if your beloved one is not in front of you, you can tell her or him through the telephone or the means you have.

**दोस्रो मन्त्र**: "प्रिय, तिमी यहाँ छौ। म खुसी छु कि तिमी साँच्चै यहाँ मेरो सामुन्ने म सँगै छौ।" (वर्तमान क्षणलाई स्वीकार गर्दै, चाहे तिम्रो प्रियजन तिम्रो अगाडि नभए पनि, तिमी उनलाई फोनमार्फत वा



तिमीले पाएको कुनै पनि माध्यमबाट यो कुरा भन्न सक्छौ।)

Third Mantra: Darling, I know you are suffering. That is why I am here for you. (The third Mantra is needed if your loved one is suffering)

**तेस्रो मन्त्र**: प्रिय, म जान्दछु कि तिमी पीडामा छौ। त्यसैले म तिम्रो लागि यहाँ छु। (तेस्रो मन्त्र तब आवश्यक हुन्छ जब तिम्रो प्रियजन दुःखमा हुन्छन्)।







Fourth Mantra: Darling I am suffering. I am trying my best to practice. Please! help me. (Then go to her or him and practice meditation. It is needed when you suffer. The meditation does not advise you to go into the room, close the door and you suffer alone. It rather tells you. you are punishing your loved one later at the time when he or she knows you were suffering but you did not believe in her or that she or he deserved to know what was going into you in

real-time)

**चौथो मन्त्र:** प्रिय, म दुःखमा छु। दर्द वाट छिटै मुक्ति मिलोस् भनी कामना गर्दै म नियमित सम्पूर्ण शक्ति लगाएर ध्यान गरिरहेको छु। कृपया ! मलाई सहयोग गर। (त्यस पछि तिमी उसको नजिक जाऊ र उनको नजिक रहेर ध्यान अभ्यास गर। यो तब आवश्यक हुन्छ जब तिमी पीडामा हुन्छौ। ध्यानले तिमीलाई एक्लै कोठामा गएर, ढोका बन्द गरेर एक्लै मौन पीडा सहेर रहनु भन्दैन। बरु यसले तिमीलाई भन्छ कि, त्यसो गरी रहँदा तिमी आफ्नो प्रियजनलाई सजाय दिइरहेका हुने छौ। जब पछि उन वा उनीले थाहा पाउने छन् कि तिमी दुःखमा थियौ तर तिमीले उसलाई विश्वास गरेनौ। तिमीले





यो सोचेनौ कि उनलाई तिमि दुःखमा रहेको थाहा पाउने अधिकार थियो। त्यसले उनलाई वास्तवमै निकै दुखित अनुभव गराउने छ)।

मन्त्रहरू धेरैजसो तपाईंले नबुझेको वा नजानेको भाषा वा कोडमा लेखिएका हुन सक्छन्। जसलाई तपाईंले आफूले बुझ्ने भाषामा ट्रान्सलेसन गरी पूरा बुझी मनन गरी व्यवहारमा लागू गरे मात्र त्यसले दिन सक्ने फल प्राप्ति हुन्छ ।

नबुझेको भाषाको मन्त्र नबुझी सुगाले जस्तो रटेर वा अर्काले लेखिदिएको पढेर फल पाइने हैन, बरु ‘अर्थ न बर्थ गोविन्द दाइ, टाउको दुखेको औषधी नाइटामा लाई’ मात्र हुने हुन्छ।





# गायत्री मन्त्रको कखरा

गायत्री मन्त्रलाई वेदको जन्मदाता र वेदको सार भनिन्छ । गायत्री मन्त्रको उल्लेख वैदिक ग्रन्थ ऋग्वेदको ३.६२.१० पदमा भएको पाइन्छ । उक्त पदमा उल्लिखित मन्त्र पूर्ण संस्करणको मन्त्र नरहेकाले तैत्तिरीय आरण्यका २.११.१–८ को वर्णन अनुरूप केही शब्द थप गरी बनेको ब्रह्मसंहिता (५.२७–२८) विस्तारित ब्रह्म–गायत्री मन्त्र आजभोलि सर्वत्र गायत्री मन्त्र पाठका रूपमा वाचन हुने गरेको छ ।

गायत्रीका तीन नाम छन्। गायत्री, सावित्री र सरस्वती। गायत्रीले इन्द्र अर्थात् केन्द्रीय मस्तिष्क प्रणालीको प्रतिनिधित्व गर्छ। जुन अन्ततोगत्वा









सम्पूर्ण मानव इन्द्रियको सञ्चालक हो। सावित्रीले प्राण अथवा जीवन्त शक्ति जनाउँछ। तसर्थ सावित्री परमसत्यको प्रतीक हो। सरस्वती विद्याकी देवी हुन्।

शुद्ध विचार तथा नैतिक निष्ठाले सात्विक आचरण सम्भव बन्छ। त्रिकरण शुद्धि अन्तर्गत विचार (मन), वचन (वाणी) र कर्ममा शुद्धता पर्छ । गायत्रीका समग्र तीन रूप, इन्द्रियको शक्ति (गायत्री), ज्ञानको शक्ति (सरस्वती) र जीवन्त शक्ति (सावित्री) शुद्धीकरण अर्थात् त्रिकरण शुद्धिमार्फत मात्र मानव आचरण सात्विक बन्न सक्छ ।

गायत्रीको पाँच पहेलीमा (गम्भीर रहस्यमा) मानव जीवनका पाँच आधारभूत गतिविधि जन्म, धर्म, कर्म, अर्थ र मोक्ष पर्छ । वैदिक परम्परामा






जीवनको अन्तिम श्वाससम्म शुद्ध विचार तथा नैतिक निष्ठाले ओतप्रोत रहेर जिउने प्रेरणा र असीम तागत प्राप्त होस् भनी दैनिक गायत्री मन्त्र जप्न सुझाइन्छ ।

गायत्री मन्त्रलाई योगमा तन्त्र योग भनेर चिनिन्छ । तन्त्रको अर्थ प्रविधि हो । जब तपाईं योग गर्दा कुनै बाहिरी वस्तु मतलब प्रविधिको सहारा लिनुहुन्छ त्यसलाई तन्त्रयोग भनिन्छ। जब कुनै पनि बाहिरी टेक्नोलोजी वा वस्तुको सहारा नलिई सम्पूर्ण रूपमा शरीरभित्र नै आन्तरिकीकरण गरी सम्पन्न हुने योग जस्तै ध्यान योग हो। पूजा, आरती, अभिषेक (जप, मन्त्र) आदि तन्त्र हो ।

तन्त्रयोगको मध्यमबाट मानव जीवन जिउने कला र मान्यतामा केही निश्चित सकारात्मक असर पु¥याउन सकिन्छ। मानव जीवनमा मानिस आफू आफैंले







शरीरभित्र नै आन्तरिकीकरण गरी गर्न सकिने योग तथा मेडिटेसन जस्ता उपायमार्फत आफूमा उल्लेखनीय परिवर्तन गर्ने चाहना नदेखाउँदा वा गुञ्जायस नरहँदा सामान्य जीवनयापनमा विकल्पका रूपमा तन्त्रयोग उपलब्ध गराइन्छ ।

हरेक अनुच्छेदमा आठ शब्दांश उच्चारण गरिने गरी चार अनुच्छेदमा जम्मा २४ शब्दांशको उपयोग गरी वनेको गायत्री मन्त्र आजभन्दा २५०० देखि ३५०० वर्षपहिले ऋग्वेदमा रेकर्ड भएको देखिन्छ ।

गायत्री मन्त्रको जप पाठ गर्ने गर्दा पाठ गर्ने वाचक र सुन्ने स्रोतालाई समेत त्रिकरण शुद्धि गर्न प्रेरणा र तागत उपलब्ध गराउने वैदिक मान्यता छ।







**ॐ भूर् भुवः स्वः।**

**तत्सवितुर्वरेण्यं।**

**भर्गो देवस्य धीमहि।**

**धियो योनः प्रचोदयात्।**

Om bhūr bhuvaḥ suvaḥ

tatsaviturvareṇyaṃ

bhargo devasyadhīmahi

dhiyo yo naḥ prachodayāt

## प्रचलित शब्दार्थः

ॐ: आदिम ध्वनि

भूर्: भौतिक शरीर / भौतिक पक्ष













भुवः: जीवन शक्ति / मानसिक क्षमता

स्वः: आत्मा / आध्यात्म

तत्: त्यो

सवितुरः सूर्य, सम्पूर्ण जीवको सृष्टिकर्ता–जीवन सिर्जनाको शक्ति वा स्रोत (आदिम शक्ति)

वरेण्यं: पूजा – धन्य बन्नु÷सराहना व्यक्त गर्नु

भर्गो : दिव्य प्रकाश – ज्ञानको ज्योति

देवस्य: सम्पूर्ण सिर्जनाको सर्वोच्च शक्ति (प्रकृति)

धीमहि: ध्यान गर्नु

धियो : बुद्धिमत्तापूर्वक

यो : ज्ञानको ज्योति (प्रकाश) प्राप्त होस्









न : हाम्रो

प्रचोदयात् : ज्ञान प्राप्तिको (दिव्य प्रकाशको उदयका लागि) प्रेरणा मिलोस् ।

सामान्य शब्दार्थमा बताउँदा गायत्री मन्त्रका पहिला नौ शब्दमा जीवनको सृष्टिकर्ता(आदिम शक्ति) तथा सम्पूर्ण ब्रह्माण्डको सिर्जनाको सर्वोच्च शक्तिको स्रोत प्रकृतिको महिमा अथवा देनको वर्णन गरिएको छ। अन्तिम अनुच्छेद धियो योनः प्रचोदयात् भनी ब्रह्माण्ड तथा जीवनको सृष्टिकर्ताका रूपमा प्रकृतिले सम्पूर्ण व्यवस्थापनमा पु¥याइरहेको देनको उच्च मूल्यांकन गर्दै हार्दिक सराहना तथा कृतज्ञता व्यक्त गर्दै आफूलाई सो प्राप्तिको अवसर मिलेकामा कृतज्ञता व्यक्त गर्दै सो प्राप्तिमा धन्य महसुस गरिएको छ ।









ॐ शब्द भौतिक, सूक्ष्म र सांसारिक दुनियाँ अस्तित्वमा रहनुको कारणहरूको परम वास्तविकतालाई संकेत गर्न प्रयोग गर्ने गरिन्छ । ब्रम्हाण्डको भौतिक रूपमा अस्तित्वमा आउनुअघि केही पनि नरहेको अन्धकार वा डार्क स्पेस (Dark Space) बाट सिर्जनाका क्रममा उत्पन्न पहिलो युनिभर्सल क्वान्टम फिल्ड (Universal Quantum Field) अथवा कम्पनको (शिवशक्ति) रूपमा पैदा भएको आवाज ॐ हुनुपर्ने अनुमान वास्तविकताको निकै नजिक रहेको महसुस हुन्छ ।

ॐ संस्कृतको प्रथम ध्वनि हो । किनकि संस्कृतको ॐ ध्वनि 'अ', 'ऊ' र 'म' गरी तीन महत्वपूर्ण सूक्ष्म ध्वनिहरूको संयुक्त रूप हो । जननी ध्वनि






'अ', 'ऊ' र 'म' मध्ये कम्तीमा कुनै एकको प्रयोगविना अन्य ध्वनिको उच्चारण लगभग सम्भव हुँदैन।

माण्डूक्य उपनिषद् लगायतमा अ, ऊ, र म (अव्, ऊठ्, मन् गरी तिन गुणहरू) मिलेर ॐ शब्द बन्ने व्याख्या छ । जसले उत्पत्ति, स्थिति र लयलाई व्यक्त गर्छ । अ–कार सृष्टिकर्ता (Generator) ब्रह्माको प्रतीक, ऊ–कारलाई सञ्चालक (Operator) वा विष्णुको प्रतीक र म–कार संहारकर्ता (Destroyer) वा शिवको प्रतीक भनी व्याख्या गरिएको हुन्छ।

जीवनको सृष्टिकर्ता अथवा सिर्जनाको अलगअलग तीन परमशक्तिको संयुक्त स्वरूप दर्साउने ॐ सम्पूर्ण सिर्जनाको सर्वोच्च शक्तिको (प्रकृति) रहेको






वैदिक मान्यता छ । छान्दोग्य उपनिषद्मा उल्लेख गरिए अनुरूप सम्पूर्ण चराचर जगत्को (विश्वको) सार पृथ्वी, पृथ्वीको सार जल, जलको सार अन्न, अन्नको सार मानव देह, मानव देहको सार वाणी, वाणीको सार ऋग्वेद, ऋग्वेदको सार सामवेद र सामवेदको सार उद्गीथ (ॐ) हो ।

## प्रचलित भावार्थ:

सम्पूर्ण ऊर्जाको स्रोत, सर्वोच्च प्रतिभायुक्त सामूहिक चेतनाको खानीका रूपमा रहनुभएको हाम्रो प्रेरणा र अन्तरात्माको अनन्त आनन्दको स्रोतका रूपमा रहनुहुने अत्यन्त प्रिय, मनमोहक तथा जादुमय दिव्य चमकयुक्त आवरणमा रहनुहुने सम्पूर्ण सृष्टिको सृष्टिकर्तामा मेरो कृतज्ञता व्यक्त गर्दै





म ध्यान गर्छु कि तपाईंको न्यानो र मायालु ज्ञानको दिव्य चमक मेरो जीवनयापनको प्रेरणा र पथप्रदर्शक बन्न सकोस् । मेरो ज्ञान र सतबुद्धिको द्वार खोल्न कारक बनोस् ।

## वैज्ञानिक खोज र दृष्टिकोणको पाटो

ॐ भूर् भुवः स्वः।

OM BHUR BHUVAH SWAH

ॐ

भूर् – पृथ्वी

भुवः – ग्रहहरू (सौर परिवार)

स्वः – आकाश गंगा (गुरुत्वाकर्षणद्वारा अस्तित्वमा









रहने पृथ्वीलगायतको सौर परिवार, तारा आदि सबै ब्रह्माण्डका चिज)

जब कुनै वस्तु (जस्तै पंखा) घुम्छ वा निकै ठूलो गतिमा तलमाथि गर्छ (जस्तै मौरी उड्दा) त्यहाँ आवाज निस्कन्छ । गौर गरेर हेर्नु हुन्छ भने झन्डै मिनेटमा नौ हजार पटक घुम्ने पंखाको दर्बिलो आवाज निकालेर निकालेर घुमिरहेको हुन्छ । घण्टामा २० माइलसम्म उड्न सक्ने मौरीले उसको प्वाँख एक सेकेन्डमा २०० पटक तलमाथि गर्ने गर्छ। अत्यन्त छिटो चल्ने प्वाँखहरूको आवाज अत्यन्त दर्बिलो हुने गर्छ। सूर्यको वरपर आकाश गंगा औसत १३० माइलप्रति सेकेन्डको (२१० किमी/सेकेन्ड) गतिमा घुम्ने हिसाब निस्कन्छ । पृथ्वी आफैं ३० किलोमिटरप्रति सेकेन्ड अथवा ६७






हजार माइल प्रतिघण्टाको दरमा सुईलाई घुमिरहेको हुन्छ। पृथ्वीलगायत आकाश गंगामा रहेर घुम्ने सबै पदार्थले घुम्ने क्रममा अत्यन्त ठूलो आवाज निकाल्ने गर्छन्। आकाश गंगामा तीव्र गतिमा गतिशील रहेका पृथ्वी, ग्रहहरूलगायतका सम्पूर्ण पदार्थको गतिको कारणबाट उत्पन्न हुने ध्वनि ॐ हो जुन यो मन्त्रको सुरुवातको भागका रूपमा प्रयोग भएको छ। जसलाई आकाशीय आवाज वा आदिम ध्वनि (Celestial Sounds) भन्ने गरिन्छ।

यो आवाज पहिलो पटक गहिरो ध्यानमा रहेका बेला ऋषि विश्वामित्रले अनुभूति गर्नुभयो। विश्वामित्रले आफ्ना अन्य सहकर्मीलाई समेत आफ्नो अनुभूति सुनाउनुभयो। उक्त आवाज पहिचान तथा यकिन गर्न अनुरोध गर्नुभयो । गहिरो










ध्यानपश्चात् उक्त आवाज पहिचान गरेको यकिन भएका सबैको राय मिलेपछि उनीहरूले सुनेको यकिन भएको आवाज सर्वसम्मतिले ॐ रहेको निष्कर्ष निक्लियो । ॐ लाई आकाशीय आवाज अर्थात् प्रकृतिको आवाजको नाम दिने निश्चय बन्यो।

ध्यानमा रहेका बेला आवाजतर्फ आफ्नो ध्यान केन्द्रित गर्दा ॐ को आवाज जुनसुकै समयमा पनि स्थायी रूपमै सुनिन्थ्यो। तर, त्यहाँ न त कुनै रूप नै देख्न सकिन्थ्यो न त ध्वनिबाहेक अन्य कुनै चिजको उपस्थितिको अनुभूति नै प्राप्त हुने गर्दथ्यो। उक्त परिस्थितिजन्य यथार्थको गहिरो चिन्तन मननबाट एक निराकार आकाशीय आवाज ॐ लाई विशिष्ट शीर्षकको रूप वा उपाधि दिन भगवान्को आवाज











अर्थात् प्रकृतिप्रदत्त अद्भुत ध्वनि भनी ॐ लाई पहिचान गरियो। जुन वैदिक ज्ञान प्राप्तिको पहिलो निकै क्रान्तिकारी विचार र मान्यताको स्थापनाका रूपमा मनन गरिन्छ।

उक्त समयबाट निराकार प्राकृतिक शक्ति जसबाट दुनियाँको निर्माण, सञ्चालन र नियमितता चलिरहेको छ, त्यसलाई ईश्वरको अनुकम्पा भनियो।

गीतामा यकिनका साथ ओमित्येकाक्षरं ब्रह्म लेखियो। जसको अर्थ हुन्छ ब्रह्म अर्थात् सर्वोच्च शक्तिलाई जनाउने नामको संकेतसमेत हो ॐ। समाधिको समयमा सुनिने मात्र एक अक्षरको ॐलाई ऋषिहरूले नाडा–ब्रह्मा (शुद्ध ब्रह्म ध्वनि) अथवा अद्भुत तर नितान्त प्राकृतिक ध्वनिको संज्ञा













दिए। अद्भुत ध्वनि भनिनुको कारण थियो उक्त प्राकृतिक ध्वनि ॐ अत्यन्त विशाल ध्वनियुक्त रहे तापनि हाम्रो कानले सुन्न सक्ने तरंगको (फ्रिक्वेन्सी) लम्बाइ युक्त ध्वनिभित्र नै पर्दथ्यो। त्यसलाई समेत प्रकृतिको अनुकम्पाका रूपमा ग्रहण गरियो ।

नियमित ध्यानमार्फत प्रकृतिको विषयवस्तुको गहिरो ज्ञान प्राप्त गर्ने ऋषिहरूले ॐ ध्वनिलाई उद्गीथ अर्थात् अन्तरिक्ष (स्वर्ग) को संगीत अथवा ध्वनिका रूपमा लिए । ॐ ध्वनि अर्थात् ओमकारी जप गरिने उद्गीथ प्राणायाममार्फत उनीहरूले सूर्यको वरपर (औसत १३० माइलप्रति सेकेन्डको–२१० किमी/सेकेन्ड) तीव्र गतिमा घुम्ने आकाश गंगाको अनन्त पिण्डहरू नियमित गतिशील कम्पनमा (जसलाई काइनेटिक इनर्जी–ईके EK) भनिन्छ।











ईके (एमभी स्क्वायरको आधा हुने गर्छ) रहेका कारण नै ब्रह्माण्डको कुल ऊर्जा खपतमा सन्तुलन कायम गर्न सम्भव बनेको (जस्तै मात्र दुई पांग्रा हुँदासमेत गतिशील रहँदा साइकल सन्तुलनमा गुड्न सक्छ) अनुभूति गर्न सके ।

उक्त प्रकारको गतिशील पिण्डहरूबीच कायम हुन पुगेको सन्तुलन जनाउन प्रणव शब्दको प्रयोग गरियो। जसको अर्थ हुन्छ शरीर (भौतिक शरीर – वपु) तथा गतिशील ऊर्जाको भण्डार (प्राण) युक्त सन्तुलित घर । शब्दगत रूपमा प्र – प्रपञ्च, ण – अर्कै कुनै नयाँ तथा व – तिम्रा लागि हुने हुँदा शाब्दिक अर्थमा भने प्रणव शब्दलाई संसाररूपी प्रकृतिको नाटकको सागरबाट मुक्त गराउने अथवा तार्ने डुंगाको अर्थमा प्रयोग गरियो।













तत्सवितुर्वरेण्यं ।

TAT SAVITUR VARENYAM

तत् – त्यो (प्राकृतिक शक्ति–ईश्वरीय शक्ति)

सवितुर – सूर्यलगायतका तारा

वरेण्यम –सम्मानका दिन आदरका साथ शिर झुकाउनयोग्य

कुनै पनि नवीन खोज वा अनुसन्धानमा जब अनुसन्धान गर्न लगिएको चिजको प्रकृति र पहिचान खुल्ने अस्तित्वबारे सूचना प्राप्त गर्न सकिन्छ तब उक्त विशिष्ट चिजबारे थप यथार्थ पत्ता लगाउन सजिलो पर्ने गर्छ । ॐ ध्वनिमार्फत अनुभूत गरिएको निराकार अद्भुत प्रकृतिप्रदत्त ईश्वरीय शक्तिको चरित्रको प्रकृति र अस्तित्वको पहिचान





दिने / खुल्ने कम्तीमा दुई उपाधि पहिचान गर्न सक्दा त्यसबारे थप विस्तृत विवरण प्राप्त गर्ने ठोस आधार उपलब्ध हुने विश्वामित्रको ठम्याइ रह्यो।

त्यो सन्दर्भमा विश्वामित्रले आफ्ना सहकर्मीहरूलाई भन्नुभयो कि हामीलाई हालसम्म प्रस्ट रूपमा ज्ञात हुन नसकेको प्राकृतिक (ईश्वरीय) शक्तिबारे हालसम्म हामीलाई ज्ञात हुन सकेका सूचकहरू ॐ ध्वनि, सूर्यको (तारा) प्रकाश र अज्ञात निराकार स्वरूपको प्रकृतिको माध्यमबाट उक्त अज्ञात निराकार प्राकृतिक शक्ति (ईश्वरीय शक्ति) बारे धेरै थप तथ्य जान्न, महसुस गर्न र हाम्रा जिज्ञासाको निवारण गर्न सक्नेछौँ।

जसरी एक गणितज्ञले जब X को मापन पत्ता लगाएपछि एक समीकरण $X^2 + Y^2 = 4$ को









प्रयोग गरी सहजै Y को मापन निकाल्न सक्छन्, जसरी एक इन्जिनियरले एक नदीको चौडाइ मापन गर्नका लागि केवल एक त्रिकोण कोर्दै नदीको किनारमा उभिएर त्यसका केही सूचना प्राप्त गरेका आधारमा सम्भव बन्छ त्यसरी नै विश्वामित्रले सबैको सहयोगमा तलको मन्त्रबाट प्रकृति (ईश्वर) बारे थप तथ्य जानकारी गर्न सकिने उपाय सुझाए ।

भर्गो देवस्य धीमहि।

BHARGO DEVASYA DHEEMAHI

भर्गो – प्रकाश (चमक) र चेतनाको ज्योति

देवस्य – ईश्वरीय शक्तिको

धीमहि – हामीले ध्यान गर्नुपर्छ ।









निराकार देखिएका सृष्टिकर्ता अर्थात् प्रकृति (ईश्वर) बारे खोज तथा पहिचान कार्य सिद्धिका लागि सूर्यको प्रकाशको चमक र चेतनाको ज्योतिबारे गहिरो ध्यान (मेडिटेसन) गरी अनुसन्धान तथा अनुभूति गर्न ऋषिले सुझाएका छन्।

प्रकाशको चमक र चेतनाको ज्योतिको ध्यानमार्फत गरिने प्रकृति (ईश्वर) बारे थप तथ्यको खोजी कार्यमा ओमकारी जप अथवा ॐ ध्वनिको उच्चारण गरी गरिने उद्गीथ प्राणायामले ध्यानीको गहिरो ज्ञान प्राप्ति तथा अनुभूति गर्ने क्षमतालाई संवृद्ध गर्ने गुह्यसमेत ऋषिले खोलेका छन्।

ऋषिले सुझाएका माथिको ध्यानको उपायमा एउटा निकै ठूलो समस्या महसुस गर्न अनिवार्य छ । मानव मन हरसमय अत्यन्त अस्थिर र बेचैन रहने









गर्छ । एक सर्वोच्च चेतन शक्तिको (ब्रह्मा) उपयोग वा कृपाविना मानव मनलाई नियन्त्रणमा लिएर आफूले चाहेको दिशामा आफ्नो ध्यान केन्द्रित गर्न सकिँदैन । त्यसको निवारणका लागि विश्वामित्रले तलको प्रार्थना गर्ने तरिका सुझावका रूपमा अघि सारेका छन्।

धियो योनः प्रचोदयात्।

DHIYO YO NAH PRACHODAYAT

धियोः बुद्धि

योः जो

नः : हामी सबै










प्रचोदयात् : सही दिशामा निर्देशन गरिदिनु ।

हे प्रकृति माता अथवा ईश्वर ! आफूलाई सही मार्गमा लगाउन आफ्नो बुद्धिको उपयोग गर्ने तागत हामी सबैलाई दिनुहोस् ।

वैदिक कालमा सांसारिक यथार्थको खोजको सुरुवातको वैज्ञानिक चरणको खोज र दृष्टिकोण विकासको चरणमा गायत्री मन्त्रको पहिचान र विकास भएको देखिन्छ। यस चरणमा गायत्री मन्त्रले समग्रमा तलका कुराहरू बताएको बुझाइ रहेको देखिन्छ ।

## वैदिक विज्ञानको भावार्थ:

अनन्त पिण्ड (mass) रूपी पृथ्वी (bhur-Earth), ग्रहहरू (bhuvah-Planets) र













आकाश गंगाहरू (swah-Planets) नियमित ठूलो वेगमा (velocity) गतिशील रहेर ब्रह्माण्डको कुल ऊर्जा खपत सन्तुलन कायम गर्दै सन्तुलित ब्रह्माण्डको निर्माण गरेका छन्। उक्त क्रममा समग्र कम्पनद्वारा निर्मित ध्वनिको आवाज ॐ (OM) हो । ॐलाई निराकार प्रकृति वा ईश्वरको संज्ञाका रूपमा समेत लिन सकिन्छ । उक्त प्रकृति वा ईश्वर (tat) आफैं सूर्यको प्रकाशको ज्योतिको (savitur – चमक र चेतना) रूपमा प्रकट भएर हामीसामु प्रकट हुने गर्छ ।

उक्त सूर्यको प्रकाशका रूपमा हामीसामु प्रकट हुने प्रकृति वा ईश्वरीय रूप (devasya) आदरका साथ शिर झुकाएर हाम्रो सम्मान पाउन (varenyam) योग्य छ। तसर्थ हामी सबैले प्रकृति (ईश्वर–











devesaya) बारेको खोज तथा पहिचान कार्य सिद्धिका लागि सूर्यको प्रकाशको चमक र चेतनाको ज्योतिमा (bhargo jyoti) आफ्नो ध्यान केन्द्रित गर्दै गहिरो ध्यानमा (dheemah) लिन हुन जरुरी छ । त्यसको लागि ॐ ध्वनिको उच्चारण गरी गरिने ॐ कारी जपले तपाइको ध्यान विषय वस्तुमा केन्द्रित गर्न र त्यस वाट जरुरतको सन्देश लिन ब्रह्माण्ड कम्पन लाई निर्मलीकरण (Constant) गर्न सहज गर्ने छ।

त्यसो हुँदा ध्यान कार्य वाट आफ्नो मनलाई विचलित हुन् वाट रोकेर हामी सबैलाई ज्ञान मार्गमा prachodayat) केन्द्रित हुन् र त्यसैमा आफ्नो (nah) बुद्धिको (dhiyo)उपयोग गर्ने













तागत प्रकृति (ईश्वर, yo) बाट प्राप्त हुनेछ।

उल्लिखित प्रचलित भावार्थ, वैदिक विज्ञानको भावार्थ, वैज्ञानिक दृष्टिकोणको शब्दार्थ र नयाँ बुझाइ अनुरूपको व्याख्या आदिको आधारमा गायत्री मन्त्रलाई वैदिक तथा आधुनिक विज्ञानको समकक्षी भावार्थको दिने गरी तलको व्याख्यामार्फत अत्यन्त सरल रूपमा प्रस्तुत गर्न सकिन्छ ।

## वैदिक तथा वैज्ञानिक दृष्टिकोणको समकक्षी भाव:

सारांशमा गायत्री मन्त्रमा नियमित गतिशीलता हुने







विविध पक्षहरू रहेको सन्तुलित ब्रह्माण्डको प्राकृतिक कम्पनबाट उत्पन्न ध्वनि ॐ ध्वनि लाई ओम कार जप मार्फत आफ्नो शरीरको ध्वनी संग समन्वय गरी आपसी हार्मोनीको सन्तुलन निर्माण गर्न सकिने गोप्यता उजागर गरिएको छ। प्रकृतिमा सूर्यको अत्यन्त ठुलो प्रभाव रहेको कुरा समेत गायत्री मन्त्रले भन्ने गर्दछ। जस अनुसार प्रकृतिमा निर्णायक भूमिका खेल्ने सूर्यको गुण बारे बुझ्न हामीलाई त्यसैको अंशको रूपमा प्रकाशको किरण उपलब्ध छ। त्यही प्रकाशको किरणमा आपसी कम्पनको हार्मोनिको अवस्थामा जब हामी हाम्रो ध्यान त्यसको गुण जान्नमा केन्द्रित गर्न सक्ने छौ तब हामीलाई सूर्यको निकै धेरै गुणहरू पहिचान गर्न सहज हुने छ। यसरी पहिचान भएको गुणको











आधारमा हामीले ब्रह्माण्डको समग्र गुणको पहिचान गर्न सक्ने छौ। जसले गर्दा हामीले हाम्रो अस्तित्वको लागि जिम्मेवार मूल प्राकृतिक ऊर्जाको पहिचान गर्न सक्ने छौ। जसले गर्दा हामीले आफूलाई पहिचान गर्न र आफ्नो जीवन अस्तित्वमा आउनुको उद्देश्य बारे ज्ञान प्राप्त हुने छ। यसरी प्रकृति वा ईश्वरको महत्त्वपूर्ण गोप्यताहरूको उजागर गर्न सक्दा हामीलाई हाम्रो चेतना मार्फत परा तथा अपरा प्रकृतिको सम्पूर्ण दिव्य ज्ञान प्राप्त गर्न मद्दत पुग्ने छ।

तसर्थ गायत्री मन्त्रले यस संसारको रहस्य खोजीको ध्यान प्रक्रियामा संलग्न हुन ॐ ध्वनिको जप उच्चारण गरी ध्यानको वातावरण निर्माण गर्न, आफ्नो मन लाई अन्यत्र विचलित हुन वाट रोक्न





तथा आफ्नो बुद्धिमता र ध्यान कुशलता लाई समयोचित रूपमा पर्याप्त प्रकृति गुण र सिद्धान्त बुझ्न केन्द्रित गर्न र संसारको रहस्यको दिव्य ज्ञान प्राप्त गर्न एक व्यवहारिक उपाय वा मन्त्र सुझाएको छ।

सृष्टिको सिर्जना, संरक्षण र विनाशको समयमा समेत निराकार शक्ति प्रकृति अस्तित्वमा रहने गर्दछ। त्यही प्रकृतिमा रहेको पृथ्वी, पृथ्वी र अन्तरिक्षको बिचको आकाश तथा अन्तरिक्ष लोकमा हुने हरेक गतिविधिले हाम्रो जीवनमा प्रत्यक्ष प्रभाव छोड्ने गर्दछ। नियमित कम्पनमा रहेर निश्चित गतिको यात्रामा रहने सम्पूर्ण ब्रह्माण्ड सन्तुलित रहेर सञ्चालनमा रहन सूर्यको ठुलो भूमिका रहने गर्दछ। उक्त सूर्यको गुणको बारेमा जान्न सक्दा हामीले





सम्पूर्ण ब्रह्माण्डको गुण पहिचान गरी आफूलाई समेत पहिचान गर्न सक्ने छौ। त्यसको बारे ज्ञान लिनको लागि हामी लाई सूर्यको गुणको सारको रूपमा त्यसको अत्यन्त मनमोहक दिव्य ज्योति उपलब्ध हुने गर्दछ। सर्वशक्तिमान् सर्वोच्च शक्ति सूर्यको त्यही दिव्य चमकको गुणको पहिचान मार्फत हामीले सांसारिक यथार्थको नजिक पुग्न सकिने छ। त्यसैले हामीले आफ्नो आध्यात्मिक अर्ध चेतनशीलता तथा बौद्धिकता लाई प्रबुद्ध गरी आफ्नो मन लाई आफ्नो काबुमा लिई गहिरो ध्यान मार्फत संसारको अद्भुत रहस्य बारे जान्न नियमित ध्यानमा रहन जरुरी छ। उक्त कार्यको लागि नियमित ॐ कारी जप गर्ने गर्दा त्यसको कम्पन प्रकृतिको कम्पन संग हार्मोनिमा बसिदिने हुँदा



हामीले आफ्नो ध्यानलाई पूर्ण रूपमा भर्गो ज्योतिको गुण पहिचानमा केन्द्रित गर्न सक्के छौँ।

# वैज्ञानिक दृष्टिमा दसैं

(A person whom you respect, often your parents or elders by blood relation, marriage, or other formal bonds, chants this mantra as a blessing for you and places tika on your forehead as a symbol of victory during the holy Dashain festival. In Hindu tradition, Dashain signifies the victory of truth over falsehood.






The mantra for each gender is assigned differently, based on the unique qualities, specialties, and competitive advantages that nature has allocated to each gender, aimed at building perfect societies with social harmony.)

विजया दशमीको नवरात्रिको १० दिनलाई नेपालीको प्रमुख चाड दसैं वा विजया दशमी भन्ने गरिन्छ । नवरात्र भर हुने शक्तिको आराधना पछि दसौँ दिन बिहान दशमीका दिन आफू भन्दा ठूला मान्यजनको हात बाट टीका लगाएर आशीर्वाद लिने र प्रसाद ग्रहण गरी आफू धन्य बन्ने यो पर्वको विशेषता हो।







वैदिक परम्परा अनुरूप विजया दशमीको दिन समाजमा तेस्रो लिंगी, नारी र पुरुषको लैंगिक अवतारमा रहेका हरेक वर्गको संसारको सृष्टि गर्न र सञ्चालनमा खेलिरहेको विशिष्ट भूमिकाको उच्च सम्मान गर्दै टीका लगाउने र आशीर्वाद दिने चलन थियो ।

हाम्रो वैदिक परम्परामा व्यक्तिको लिंग अनुरूप फरक फरक आशिष दिने गरी मन्त्र र टीका विधि स्थापना समेत भएको छ । कालान्तरमा समाजमा तेस्रो लिंगीको संख्या निकै कम रहेकाले त्यसको चर्चा कम हुन थालेको देखिन्छ। हालको समय सम्म आइपुग्दा नारी र पुरुषका लागि निर्मित टीकाको आशिष / मन्त्र र विधिबारे मात्र चर्चा हुने र व्यवहारमा लागू हुने गरेको देखिन्छ ।













रगतको नाता वा विवाह वा अन्य औपचारिक भावनात्मक श्रद्धा अनुरूप आफूले सम्मान गर्ने व्यक्ति बाट लिइने दसैंको टीकामा प्रायः आफ्ना आमा बुवा र ठूला मान्यजन हरेक व्यक्तिको प्राथमिकतामा पर्ने गर्छन् । हिन्दु परम्परामा दसैं असत्य माथि सत्यको विजयको क्षण हो ।

फरक फरक लिंगको व्यक्तिमा प्रकृतिले विनियोजन गरेको विशिष्टता, विशेषता र विशेष क्षमताको सदुपयोग गरी नैतिक मूल्य र मान्यता स्थापित समुन्नत समाजको निर्माण गर्ने र सामाजिक सद्भाव नियमित कायम राख्ने कडीका रूपमा दसैं पर्व मान्ने परम्परा चलेको जो कोहीले सहजै अनुमान लगाउन सक्छ ।

वैदिक अवधारणामा प्रकृतिको शक्तिलाई ईश्वर











भनिन्छ। ईश्वरको शक्ति प्राप्त गरी निश्चित विषयमा दक्ष हुने तथा आफूमा निहित क्षमता र दक्षतालाई समग्र चराचरको हितमा खर्च गर्ने मानवता युक्त मानव लाई पुरुष रहे देव, नारी रहे देवी र तेस्रो लिंगी भए शिव शक्तिको प्रति मूर्तिका रूपमा चित्रित गर्ने गरिन्छ ।

हरेक नारीमा रहेको मातृत्वको क्षमतालाई ईश्वरको चामत्कारिक उपहारका रूपमा लिइन्छ। साक्षात् ईश्वरको प्रतिनिधित्वका रूपमा नारीको मातृत्वको क्षमता हरेक व्यक्तिले उसको आमा बाट प्राप्त गर्छ भन्ने वैदिक स्वीकारोक्ति छ। नारीमा निहित उक्त शक्तिलाई सुन्दर र अद्भुत देवी शक्ति भन्दै आमाको नाम दिने गरिन्छ। आमालाई देवीको प्रति मूर्ति पनि मानिन्छ ।













देवी रूपी आमाका तीन रूप भेटिन्छ । काली, लक्ष्मी र सरस्वती। मानिसको दिमागबाट सबै खराब प्रवृत्ति र सोच हटाउने शक्तिलाई कालीको नाम दिइएको छ। जब मानिसमा सकारात्मकता हाबी हुन्छ, उसमा विस्तारै सबैलाई सकारात्मक आँखाले हेर्न सुरु गर्छ। प्रकृतिका हरेक चिज निश्चित कारणले अस्तित्वमा रहेको र तिनीहरूको आफ्नै महत्व भएको अवधारणा विकास हुन थाल्छ। मानिसको मन र विचारमा सद्भावको अवधारणा रोपिदिने शक्तिलाई लक्ष्मी भनिन्छ। जुन जीवनको सबैभन्दा मूल्यवान् सम्पत्ति हुने गर्छ।

प्रकृतिर अन्तर्गतका सम्पूर्ण चराचरको हित हुने कार्यलाई वेदले पुण्य कार्य भन्ने गर्छ। प्राकृतिक नियमको सिद्धान्त अनुकूलको कार्यलाई धर्म र







प्राकृतिक नियमको सिद्धान्तको प्रतिकूलको कार्यलाई अधर्म कार्य भन्छ।

सद्भावको अवधारणाले भरिएको सोच तथा मनले सबैको जीवनमा भलाइको बिउ रोप्न उद्यत रहन्छ। पुण्य कार्यतर्फ उसको मन, वचन र कर्म उद्यत हुने गर्छ। त्यसका लागि उसमा सबैभन्दा पहिले प्राकृतिक नियमको सिद्धान्त अनुकूल र प्रतिकूल कार्यबारे गहिरो ज्ञान लिने चासो पैदा हुन्छ। धर्म र अधर्मको ज्ञान प्राप्त भएपछि उक्त मानव स्वभावले नै पुण्य कार्यमा लाग्छ। मानिसमा धर्म र अधर्मको बोध दिलाएर पुण्य कार्य बारे ज्ञान उपलब्ध गराउने शक्तिलाई सरस्वतीको नामकरण गरिएको छ । एक मानवलाई मानवीयता युक्त मानवमा विकास गर्न जरुरी हुने सम्पूर्ण ज्ञानको उपलब्धता गराउने







 वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



शक्तिलाई सरस्वती देवी भनिएको छ ।

**Why Dashain:** Navaratri means nine consecutive nights, and it is celebrated for nine days. The motherhood ability of every female is considered a god-gifted miracle and is accepted as a representation of the divine. Therefore, she is named the Divine Mother. The Divine Mother is also called Devi. Devi has three forms: Kali, Laxmi, and Saraswati. During the first three days of Navaratri, we worship Kali, who removes all evil tendencies





॥ श्री गणेशाय नमः ॥





from our minds. For the next three days, we worship Laxmi, who plants goodness in our lives. During the last three days, we worship Saraswati, who bestows knowledge.

कथाको सन्दर्भमा नवरात्रि भनेर लगातारको नौ दिनसम्म मनाइने नौ रातलाई बुझिन्छ। नवरात्रिको पहिलो तीन दिन हामी कालीको पूजा गर्छौं। आफ्नो जीवनमा गाँसिएर रहेका सम्पूर्ण नकारात्मकताको पहिचान गर्ने, त्यसलाई आफ्नो जीवनबाट हटाउने र पुनः त्यसलाई नअँगाल्ने वाचा वा प्रण गर्छौं।

अर्को तीन दिन हामी लक्ष्मीको पूजा गर्छौं। आफ्नो जीवनमा रहेको सकारात्मकताको पहिचान गरी









त्यसलाई जोगाउन कटिबद्ध बन्छौं। आफ्ना जीवनका कर्ममा देखिएका नकारात्मक पक्षका कारण अन्यायमा परेकामा पर्न गएको असुविधा र हानिका लागि आत्म आलोचना गर्दै आफ्नो मनमा सबै प्रति सद्भावको विकास गर्छौं। आफूलाई सत्कर्ममा रहने र पुण्य युक्त कार्यमा समर्पण गर्ने वाचा वा प्रण गर्छौं।

बाँकी तीन दिनसम्म हामी ज्ञान दिने सरस्वतीको पूजा गर्छौं। आफूलाई पुण्य कार्यमा संलग्न हुनजरुरी हुने धर्म के हो? र अधर्म के हो? भन्ने बोधका लागि सुरुवाती व्यावहारिक ज्ञान लिन आफूलाई समर्पित गर्छौं। आफू को हो? र आफ्नो जीवनको मानवीय जिम्मेवारीके के हुन्? ती कुराबारे गहिरो चिन्तन गर्छौं। सृष्टिको नियम के हो ? आफ्नो अस्तित्वको










कारण के हो? जीवनको उद्देश्य के हो? आदि जस्ता कुराको गहिरो चिन्तन मार्फत अनुभूति लिने कोसिस गर्छौं ।

दसैं मुख्य रूपमा आफूमा निहित असुर चरित्रको मधु, कैटभ, महिषासुर, शुम्भ र निशुम्भ प्रवृत्तिबाट मुक्ति लिने उत्सव हो।

During Dashain, Hindus primarily celebrate the defeat of demons (asuras) Madhu (मधु) & Kaitabha (कैटभ), Mahishasura (महिषासुर), and Sumbha (शुम्भ) & Nishumbha (निशुम्भ) as symbols of victory.

The twin demons, Madhu and













Kaitabha, thrive on impurities (mental waste) and work towards harming good health while obstructing the ability to acquire knowledge. Madhu and Kaitabha were rightly slain by Madhusudan (मधुसूदन), another name for Vishnu (विष्णु).

Vishnu is considered the preserver and protector, providing nourishment and medicine, and works to restore energy, harmony, and balance between good and evil.







Mahishasura is an evil force, often depicted as a buffalo-like amphibious demon, capable of changing shape and size over time. He attacks the immune system, damaging physical, mental, and spiritual health. Devi Durga rightly killed Mahishasura. Durga represents the power of immunity, protection, strength, motherhood, and destructive force during times of war. The two brothers, Sumbha and Nishumbha, are evil forces that actively work against mutual love,











respect, ethics, law, positive vibes, and harmony, always disrupting family and social relationships. Sumbha and Nishumbha were rightly slain by Devi Saraswati.

कथाले भगवान् विष्णुको कानको कानेगुजीबाट उत्पन्न भएको असुर चरित्रको जुम्ल्याहाका रूपमा मधु र कैटभको उल्लेख गर्छ। विष्णु शक्तिले प्रकृति नियमको सिद्धान्त अनुरूप सम्पूर्ण ब्रह्माण्ड र चराचरको सुव्यवस्था, धार्मिकता र सत्यको सिद्धान्तको स्थापना लाई प्रतिनिधित्व गर्छ। ब्रह्मालाई संसारको निर्माण कर्ताका रूपमा बुझिन्छ।

मधुर कैटभलाई विष्णुको (विष्णु) अर्को नाम मधुसूदन (मधुसूदन) द्वारा मारिएको भनिन्छ।







विष्णुको वेदको (ज्ञानको भण्डार) पुनः प्राप्तिको लडाइँमा पैदा भएको मधुसूदन अवतार संसारको नियमित सञ्चालन, रक्षक र संरक्षकका रूपमा लिइन्छ। उनको मुख्य काम ज्ञान प्रदायक (वेद) खाना र औषधी तत्व उपलब्ध गराउने र त्यसको सारतत्व मार्फत प्राप्त हुने तागत, पोषणशक्ति र रोग प्रतिरोधी क्षमता मार्फत स्वस्थ विचार र मनोवैज्ञानिक सबलताको पुनःस्थापना गर्ने र खराब विचार आनीबानीमा सुधार गरी मनोवैज्ञानिक सबलता पुनः सन्तुलनमा ल्याउने काम पर्छ ।

मधुर कैटभले अन्ततः ब्रह्माविरुद्ध जाइलाग्नुले प्राकृतिक नियमको सिद्धान्त विपरीत संरचनाको सञ्चालन विधि लैजाने नियतलाई जनाउँछ । मधुरकैटभले मन र मस्तिष्कको लोभ र अधर्मी सोचले











जन्माएको पाप–पूर्ण कर्मतर्फ उद्यत गर्ने प्रवृत्तिलाई जनाएको छ ।

अज्ञानता र अधर्मी सोच (काम, लोभ, क्रोध, घृणा) आफैँमा मानिसमा दम्भ र अहंकार पैदा गरी दुष्कर्म तर्फ लैजाने, ज्ञान तथा आत्मा ज्ञान प्राप्तिमा अवरोध पु¥याउने चरित्र हो।

महिषासुर भैँसीले जन्माएको एक असुर शक्ति हो। आफ्नो आकृति र रूप नियमित परिवर्तन गर्न सक्षम महिषासुर नियमित रूपमा शारीरिक, मानसिक र आध्यात्मिक स्वास्थ्यलाई हानि पु¥याउने र प्रतिरक्षा प्रणाली विरुद्धकाम गर्ने शक्तिका रूपमा चित्रित छ।

दुर्गालाई सुरक्षा, बल, मातृत्व, शारीरिक प्रणालीको संरक्षक (असुर शक्ति विरुद्ध लड्ने र विनाश गर्ने)











गर्ने प्रतिरक्षा शक्तिका रूपमा लिने गरिन्छ । देवी दुर्गा बाट महिषासुर नष्ट हुनुलाई हाम्रो प्रतिरक्षा प्रणालीको सबलता र तन्दुरुस्तीका कारण हामीले प्राप्त गर्ने स्वस्थ जीवनलाई लिन सकिन्छ ।

शुम्भर निशुम्भ नाम गरेका दुई दाजुभाइ आपसी प्रेम, सम्मान, नैतिकता, विधिको शासन, सकारात्मक भावना र सद्भाव विरुद्ध बल पूर्वक काम गर्ने असुरी शक्तिको प्रतिनिधित्व गरेको देखिन्छ। अज्ञानता र हठ वादी दुई दाजु भाइको चरित्रले सदैव पारिवारिक सम्बन्ध सुदृढ गर्ने तथा सामाजिक सद्भाव र अमन चैनको निर्माण गर्ने कार्यमा अवरोधका रूपमा चरम निराशावादी शक्तिका रूपमा देखिने गर्छन्। अज्ञानता र हठवादी ती दुई दाजुभाइ बिचको अज्ञानको कारण उत्पन्न आशङ्का













लाई ज्ञानकी देवी सरस्वतीले नष्ट पारेको कथा छ ।

The tenth day is celebrated as Victory Day and is called Vijaya Dashami. After going through those nine days, psychologically, we have overcome all negative vibes and have already embraced positive ones.

By observing Navaratri, we can celebrate a happy, healthy life that generates eternal joy, satisfaction, and safety. We celebrate this victory to recognize and honor our positive energy.





मुख्य दिन दसौँ दिनलाई विजयादशमी अर्थात् असत्य माथि सत्यले विजय प्राप्त गरेको दिन मानिन्छ। उल्लेखित आन्तरिक अनुभूति वा मेडिटेसनका नौ दिन पार गर्दैगर्दा मानिस मनोवैज्ञानिक रूपमा आफ्ना सम्पूर्ण नकारात्मक भाइब (Vibes) लाई जितेर सकारात्मक भाइब प्राप्त गरिसकेको दिनका रूपमा लिने गरिन्छ।

दसौँ दिनसम्मको यो ध्यान रूपी मेडिटेसनले शरीरमा सकारात्मकता मात्र विकसित गराएको हुँदैन सम्पूर्ण रूपमा सकारात्मकताको अनुभूति नै गराएको हुन्छ । त्यसलाई मानिसले ब्लिस वा धन्यताको विन्दुमा पुगेको ठानिन्छ। सकारात्मकताको अनुभूतिले दिएको ब्लिसको





(Bliss) क्षणमा हामी पहिलेको आफूभन्दा उत्कृष्ट आफूका रूपमा जन्मेका हुन्छौँ । तसर्थ सो बापत आफ्नो मान्यजनको टीका र आशीर्वाद थाप्नपुग्छौँ ।

पहिलेको आफूभन्दा उत्कृष्ट आफैँको पुनर्जन्मको समयमा असत्यमाथि सत्यको विजय भइरहेको हुन्छ। उक्त अवसरमा आफन्त र मान्यजन सँग टीका र आशीर्वाद थाप्न जानेलाई उनीहरूको लिंग अनुसार फरक फरक मन्त्रोच्चारण गरी आशीर्वाद र शुभकामना दिने गरिन्छ।





# दसैं र दसैंको मन्त्र

TIKA & BLESSING

**तेस्रो लिंगीका लागि दसैंको टीकाको मन्त्र र त्यसको अर्थ**

DASHAIN & MANTRA DECODING

**MANTRA FOR TRANSGENDER**

Jaya Tvam Devi Chamunde

Jaya Bhutartiharini

Jaya Sarvagate Devi

KaaL Ratri Namostute









**जय त्वं देवि चामुण्डे जय भूतापहारिणि ।।**

**जय सर्वगते देवि कालरात्रि नमोऽस्तुते ॥**

**Word's Meaning**: To the Divine Mother Chamunde (Devi Chamunde, another name for Parvati, the primordial transgender Shakti who fights against health, natural, and evil disasters), the destroyer of evil forces (Jaya Bhutartiharini), present for us everywhere (Jaya Sarvagate Devi) at all times, including during the night






(i.e., during difficult times beyond time and periods of ignorance — Kaalratri, referring to the primordial Shakti, the third gender Shiva-Shakti), you, as the living representative of Aadim Shakti, deserve to be praised publicly (Jaya Tvam) with prostrations (Sasthang Dandawat Pranam, i.e., Namostute).

**भावार्थः** महामारी, रोग, अनिकाल लगायत वातावरणीय भवितव्य प्रकोपहरू विरुद्ध लड्ने, अत्यन्त आपत (विपत युक्त काल रात्रिमा (सृष्टिको ठिक अगाडीको आदिम समय र अज्ञानताको समय)











सर्वत्र उपलब्ध भएर जगतका सम्पूर्ण मानवहरू लाई घोर अन्धकार वाट उज्यालो तिर लगी उद्धार गर्ने दैविक अथवा प्राकृतिक शक्तिको प्रतिरूपको रूपमा मृत्यु लोकमा (जहाँ जीवन मृत्युको चक्र चल्दछ) आदिम शक्तिको प्रतिमूर्तिको भूमिकामा जीवितै उपस्थित रहनु भएको तपाई चामुण्डे अर्थात तेस्रो लिङ्गीको अत्यन्त कदर योग्य रहेको भूमिका वापत विशिष्ट आदर भाव प्रकट गरी प्रकृतिकी देवीलाई साष्टाङ्ग दण्डवत प्रणाम सहित हार्दिक नमन गर्दै तिमीलाई उच्च आदरको साथ शुभ दसैंको आशीर्वाद अर्पण गर्दछु ।

(जलवायु परिवर्तन, प्राकृतिक र वातावरणीय प्रकोप, विश्वव्यापी द्वेषपूर्ण गतिविधिहरू विरुद्धको





लडाइ र लडाइँको मूल ट्रान्सजेन्डर शक्तिको प्रतिनिधित्व देवी चामुण्डेले गर्छिन्। अन्धकारले सामान्य परिस्थिति र मानव समझको स्तर भन्दा बाहिरका चुनौती पूर्ण क्षणहरू लाई समेत सङ्केत गर्दछ। कालरात्रिले असत्य माथि सत्यको विजयको क्षणलाई जनाउँदछ। अन्धकार तथा अज्ञात समयमा प्रकट हुने दुष्टशक्तिहरू (जया भुर्ति हारिणी) लाई सधैं सर्वव्यापी दिव्य माता चामुण्डेले (जया सर्वगते देवी) पराजित गरिदिनु हुन्छ।

दिव्य माता चामुण्डेको जीवित प्रतिनिधिको हैसियतमा, सार्वजनिक रूपमा प्रशंसा र कदरको लागि योग्य प्रकृतिकी देवीलाई साष्टाङ्ग दण्डवत् प्रणाम सहित आदिम शक्तिको जीवित अवतार





(जय त्वम्) तिमि लाई म मेरो मेरो (नमोस्तुते) हार्दिक नमस्कार अर्पण गर्दछु।)

**नारीका लागि**

**दसैंको टीकाको मन्त्रर त्यसको अर्थ**

**MANTRA FOR FEMALE:**

Om Jayanti Mangala KaaliBhadra Kali Kapalini

Durga Kshyamashiva dhatri swaha swadha namostute.

**जयन्ती मङ्गला काली भद्रकाली कपालिनी ।**

**दुर्गा क्षमा शिवा धात्री स्वाहा स्वधा नमोस्तुते ।।**

**Word's Meaning**: Divine Mother, you are Jayanti (Ever Victorious), Mangala (Provider of Success), Kali (Who is beyond time and removes evil tendencies from the mind), Bhadrakali (Who controls Life and Death), Kapalini (Who wears a garland of skulls, representing the continuous cycle of birth and death), Durga (Mother of Goodness), Shiva (Source of All Success), Kshama (Source of love and forgiveness), Dhatri (Supporter of all living beings), Swaha (Final





receiver of sacrificial offerings to the gods), and Swadha (Final receiver of sacrificial duties to the Manes, i.e., spirits or souls of dead ancestors). Namostute – My prostrations (Sasthang Dandawat Pranam) to you as a symbol of the beloved Divine Mother.

**भावार्थः** मृत्यु लोकमा (जहाँ जीवन मृत्युको चक्र चल्दछ) ईश्वरको प्रतिनिधिको रूपमा अस्तित्वमा रहने गुण युक्त आदरणीय देवीको (आमा अथवा माताको) रूपमा तपाई मृत्यु लोकमा मानवताको विजय, सफलता, जीवन (मृत्यु, जीवन-मृत्युको

चक्र), सकारात्मकताको प्रतीक, जगतको सफलतामा जस दिन योग्य, माया, दयार करुणाको खानि मात्र नभएर सम्पूर्ण जगतको वास्तविक उद्धार गर्ने ईश्वरको (प्रकृतिको) प्रतीक हुनुहुन्छ। विजया दशमीको अवसरमा आफ्नो जीवनकालमा कसैले कहिल्यै तिर्न नसक्ने प्रकृतिको यो ऋणको स्मरण गर्दै आफ्नो पुर्खा, सन्ततिर जगतको कल्याणको खातिर मैले मेरो तर्फबाट पुर्याउन सम्भव हुने हरेक योगदानमा तपाईँको मार्गदर्शन मिलोस् भनी प्रकृतिकि देवीलाई साष्टाङ्ग दण्डवत् प्रणाम सहित हार्दिक नमन गर्दै प्रकृतिकी देवीको साक्षात् प्रतिनिधि तपाईँलाई उच्च आदरको साथ शुभ दसैँको आशीर्वाद अर्पण गर्दछु।





(सदैव विजयी हुने दिव्य माता जयन्ती हुन्। मङ्गला सफलता प्रदान गर्ने देवी हुन्। मनबाट नकारात्मक विचारहरू हटाउने काली सबैभन्दा श्रेष्ठ छिन। भद्रकालीले जीवन र मृत्युको नियन्त्रण गर्दछिन्। जन्म र मृत्युको निरन्तर चक्रको प्रतिनिधित्व गर्ने खप्परको मालाले सजाइएको कपालिनी जीवन चक्रको सञ्चालक हुन्। दुर्गा सबैको भलाइकी आमा हुन्। सम्पूर्ण उपलब्धिको स्रोत शिव हुनुहुन्छ। क्षमा प्रेम कि श्रोत हुन् जसले अपार करुणाका साथ माफी प्रदान गर्दछिन्।

धात्रीले सबै प्राणीहरूको सहयोगी छिन। अनुष्ठानहरूमा हुने समर्पणहरूको अन्तिम प्राप्त कर्ता देवताहरू स्वाहा हुन्। अनुष्ठान हरूको प्रस्तावहरूको अन्तिम प्राप्ति कर्ताको रूपमा लिइने पूर्वज वा



आत्माहरू भनेर स्वधा लाई भनिएको हो।

म प्राकृतिक शक्ति (ईश्वर) लाई साष्टाङ्ग दण्डवत्प्रणाम गर्दै सृष्टि, जन्म, सृष्टिको सञ्चालन, सफलता र क्षमा, जीवन चक्र र मृत्युका हरेक चरणमा अपरिहार्य रहेको सबै दिव्य शक्तिहरूको जीवित अवतारको रूपमा, तिमीलाई प्रशंसा गर्दै मेरो (नमोस्तुते) हार्दिक नमस्कार अर्पण गर्दछु।

**पुरुषका लागि दसैंको टीकाको मन्त्र र त्यसको अर्थ**

TIKA & BLESSING

DASHAIN & MANTRA DECODING

**MANTRA FOR MALE:**











Ayu Drona sute, Sriyem Dasarathae, Satru Chheyam Raghabe

Aishoryei Nahushe Gatischa pawane Manancha Duryodhane

Sourya Shanta nabe, Balam Haldhare, Satyanta KuntiSute

Bigyani Bidure Bhawati Bhabatam, KritischhaNarayane

**आयुद्र्रोणसुतेश्रियोदशरथेशत्रुक्षयंराघवे।**

**ऐश्वर्यनहुषेगतिश्चपवनेमानञ्चदुर्योधने॥**

**शौर्यशान्तनवेबलंहलधरेसत्यञ्चकुन्तीसुते॥**

**बिज्ञानेबिदुरेभवतिभवतामकिर्तिस्चनारायणे॥**







**Word's Meaning:**

I pray for your long life like Dronaputra Ashwathama (Ayu Drona Sute):

Dronaputra Ashwathama (द्रोणपुत्र अश्वथामा) had a very strong body, willpower, and immune power to survive forever (चिरञ्जीवि). Dronacharya (द्रोणाचार्य) refers to the master trainer—just like highly effective vaccines that train our immune system to protect us from highly contagious and infectious diseases by activating it.







Be rich like King Dasharatha (Sriyem Dasarathae):

सूर्यवंशी दशरथ (Dasharatha) represents sunlight, the pure source of life, synergy, and materials to construct the physical body.

Let your enemies be destroyed like those of Lord Rama (Satru Chheyam Raghabe):

Lord Rama (भगवान राम) always displayed perfect moral and social behavior and represents the embodiment of truth and morality,

symbolizing the victory of right over evil.

Be famous and praised like King Nahus (Aishorya Nahushe):

Aishwarya (ऐश्वर्य) means sovereignty and prosperity. चंद्रवंशी नहुष (Nahus) was a fearless king, blessed to marry Ashokasundari (अशोकसुन्दरी), who had the power to remove sorrow and loneliness. Ashokasundari was created by Kalpavriksha (कल्पवृक्ष), the wish-giving tree admired by





Devi Parvati. Nahus fought against sorrow, loneliness, and social disharmony by eliminating distrust and misunderstanding, thus rehabilitating social sovereignty and prosperity. His ability to unite and restore harmony among family and societal members made him enjoy a heavenly life, much like स्वर्ग (Swarga) in the absence of Indra. Just like the moon reflects sunlight at night, Indra controls the central nervous system, and Nahus represents the controller of the







lymph nodes.

Be dynamic like the wind, like Hanuman (Gatischa Pawane):

पवन पुत्र हनुमान (Hanuman), praised for his wisdom, strength, courage, devotion, and self-discipline.

Receive respect like Duryodhana (Manancha Duryodhane):

दुर्योधन (Duryodhana) was highly skilled in fighting and defeating opponents. Though his greed and arrogance ultimately led to his downfall, he was respected for his













exceptional warrior skills and courage.

Be generous like Karna, the son of Surya (Sourya Shanta Nabe):

सूर्य पुत्र कर्ण (Karna) was a handsome, powerful archer with exceptional intelligence and moral ethics. Despite facing struggles and repeated insults, he remained committed to generosity.

Be strong like Balarama (Balam Haldhare):

बलराम (Balarama) represents the











unlimited potential of power in both the spiritual and material realms. He is the shelter of both material and spiritual worlds. The spiritual energy that creates the spiritual world (वैकुण्ठ, Vaikuntha) is attributed to Balarama's boundless strength, making Vaikuntha a blissful realm, much like a mother's nurturing lap.

Be truthful like Kunti's son, Yudhishthira (Satyanta Kunti Sute):













युधिष्ठिर (Yudhishthira), Kunti's son, was a polyglot, known for his honesty, justice, wisdom, tolerance, good behavior, and discernment. He was virtuous and brave, never engaging in shameful deeds.

Be knowledgeable like Vidura (Bigyane Bidure):

विदुर (Vidura) narrated Vidura Niti, a treatise on ethical philosophy, discussing the principles of life, death, war, and nature's desire for rulers. It remains a timeless source of wisdom for modern-day life









situations.

Be respectful while maintaining the fame of Lord Narayan (Bhawati Bhabatam Kritischha Narayane):

नारायण (Narayan) represents the supreme force in the creation of the human foundation. Praying for Bhawati Bhabatam Kritischha Narayane is a wish for your value to be as essential as Narayan, a fundamental ingredient in constructing the foundation of









humanity.

**भावार्थः** म ईश्वर वा प्रकृति सँग प्रार्थना गर्दछु की तिम्रो इच्छा शक्ति सदैव पवित्र र दृढ रहोस्। रोग र अधैर्य प्रतिरोधी क्षमता बलिष्ठ होस। अमृत तुल्य सुद्ध ऊर्जाले शरीर भरिपूर्ण बनोस। सत्कर्म वाट विचलित गराउन खोज्ने हरेक नकारात्मक विचारलाई सकारात्मकताले विस्थापित गरोस। आफ्नो लगातारको सत्कर्म, परिश्रम, मेहनत, त्याग र ज्ञानको अभिवृद्धि वाट प्राप्त कौशलताले जीवन विवेकी, ज्ञानी, सद्गुणी र सहिष्णु बनोस। असत्य माथि सत्यको विजय स्थापित गराउन सदैव न्यायको पक्षमा वकालत गर्ने क्षमताको विकास गरोस। आफ्नो क्षमताहरूको पहिचान गरी त्यसको






समयोचित उपयोग गर्ने क्षमताको विकास भई प्रकृति प्रदत्त सम्भावनाका सम्पूर्ण ज्ञान, प्रतिष्ठा, वैभव, उदारता, सद्गुण तथा सन्तुष्टि प्राप्त होस भनी प्रकृतिकि देवीलाई साष्टाङ्ग दण्डवत् प्रणाम सहित हार्दिक नमन गर्दै तिमीलाई उच्च आदरको साथ शुभ दसैंको हार्दिक आशीर्वाद अर्पण गर्दछु।

(द्रोण पुत्र अश्वत्थामाको जस्तै दृढ सङ्कल्प, स्थायी जीवन शक्ति र दीर्घायु होस् होस् । सामञ्जस्यपूर्ण ऊर्जाशील जीवनको प्रचुर स्रोतका प्रतीक राजा दशरथको जस्तै ख्याति प्राप्त होस्।

दुष्ट, अधर्म कर्म र असत्य माथि सत्य र धार्मिकताको विजय प्राप्त गर्ने भगवान् रामका जस्तै विरोधीहरू परास्त हुन्। सामाजिक सद्भाव र समृद्धि बढाउने राजा नहुसको जस्ती लोकले सम्झना र











प्रशंसा गरुन्। हनुमानको जस्तै होस, बुद्धि, बल, साहस, भक्ति र अनुशासन मार्फत कार्यहरू गतिशील बनुन्। जीवनको असाधारण लडाइँमा अहङ्कार र लोभका पीडाहरूबाट जोगिएर कौशल र शासनको लागि दुर्योधनले पाएको जस्तै सम्मान प्राप्त होस्।

सूर्य पुत्र कर्णको जस्तै बुद्धिमत्ता, असीमित उदारता नैतिक सिद्धान्तहरूको ग्रहण गर्ने क्षमता प्राप्ति होस। बलरामको जस्तै आध्यात्मिक र भौतिक दुवै क्षेत्रमा रचनात्मक ऊर्जा र प्रचुरता प्रदान गर्ने शक्ति र सामर्थ्य प्राप्त होस्। इमानदारिता, न्याय र बुद्धिका लागि चिनिने युधिष्ठिरको जस्तै सत्यलाई अवलम्बन गर्ने वृत्ति प्राप्त होस्। समकालीन जीवनको दर्शन प्राप्त गर्न विदुरको जस्तै ज्ञान र नैतिक बुद्धि प्राप्ति











होस्। मानवताको आधारशिला निर्माण गर्ने भगवान् नारायणको जस्तै महिमा र सम्मान कायम रहोस्।)

# बीज मन्त्र कोडिङको पहिलो आइडिया

परापूर्व कालमा समस्या समाधानका गहिरा उपाय वा सिद्धान्त वा मन्त्र आफ्नो स्मरणमा राख्न त्यसलाई कोड वर्डको रूपमा ढालेर कण्ठस्थ गर्ने र त्यही कोड आफ्नो शिष्यहरू लाई सिकाएर एक पुस्ता वाट अर्को पुस्तामा हस्तान्तरण गर्ने विधि लिइएको थियो। वैदिक विद्याहरूको स्मरण गर्ने र हस्तान्तरण













गर्ने नियतमा बनेका त्यस्ता मन्त्र हरूलाई वीज मन्त्र भनियो। जस्तै रुखको बीजको सही सदुपयोग भयो भने विशाल वृक्ष बन्न सम्भव हुने गर्दछ। बीज मन्त्रको समेत सही डिकोड गरी त्यसको सदुपयोग भयो भने त्यसले दिने उपाय मार्फत आफ्ना दैनिक समस्याहरू समाधान सम्भव हुन्छ। त्यो बीज मन्त्र वास्तवमा कस्तो थियो र त्यसको अर्थ र चुरो पक्ष के हो भन्ने बारे एक चोटि पुनरावलोकन गरौँ।

सामान्य रूपमा बीज मन्त्र तीन प्रकारले कोडिङ हुन्छ। एक अक्षरको एकाक्षर वा आधारभूत, दुई अक्षरको बिजाक्षर वा कम्पाउन्ड र दुई भन्दा बढी अक्षरको घनाक्षर वा कोड।

ऐं, यं, रं, लं, वं, क्षं आदि जस्ता एकाक्षर बीजलाई मौलिक बीज मन्त्र मानिन्छ। त्यो मूल बीज हो।











दुई अक्षरको संयोजन बाट निर्मित यौगिक अक्षर ह्रीं, क्लीं, श्रीं, स्त्रीं, क्ष्रौं आदि बिजाक्षर हो। त्यसै गरी तीन वा सोभन्दा बढी अक्षरहरू मिलेर बनेको घनाक्षर बीज वा कोड रुपी बीज मन्त्र ह्रीं, क्लीं, श्रीं, स्त्रीं, क्ष्रौं आदि हुन्।

मन्त्रको कोड लाई कूट बीज भनिन्छ।

वैदिक मन्त्रको कूट बीजको अवधारणा नै कम्प्युटर निर्माण पूर्व कोडिङ आदिको अवधारणा विकास गर्न, अल्गोरिदम आदिको विकास र परीक्षण गर्ने अवधारणा विकास गर्न मूल उत्प्रेरक खुराक बनेको देखिन्छ।

मन्त्र साधनाको रहस्य भन्दछ ‘‘अमन्त्रमक्षरं नास्ति नास्तिमूलमनौषधम्’’। अर्थात् कोही यस्तो अक्षर













हुँदैन जुन मन्त्र न होस। त्यस्तै कोही यस्तो वनस्पति हुँदैन जुन औषधि न होस। औषधि बिग्रिएको स्वस्थ सुधार गर्ने व्यवहारिक विकल्प हो।

आफूले लक्ष गरेको उद्देश्य प्राप्ति गर्नको लागि जरुरी हुने प्रकृति नियमको सिद्धान्त मैत्री व्यवहारिक उपाय, तौर तरिका र सिद्धान्त जसले आफ्नो लक्ष प्राप्तिको मार्ग सहज गर्ने विकल्प दिन्छ त्यसलाई मन्त्र भनिन्छ। हरेक कार्य सम्पन्न गर्नको लागि निश्चित प्रकारको शक्तिको जरुरत हुने हुँदा बीज मन्त्रलाई समग्र प्रकृतिमा उपलब्ध शक्तिहरू बारे सङ्केत गर्नको लागि प्रयोग गरिन्छ। जस्तै केही महत्त्वपूर्ण बीज मन्त्रको अर्थ हेरौँ।







## प्रसिद्ध बीज मन्त्र तथा त्यसको परम्परागत वैदिक मन्त्रको अर्थः

ॐ शब्द ईश्वर वा समग्र प्रकृतिको निर्माण गर्ने शक्ति। ॐ ले सम्पूर्ण शक्तिको श्रोत र सर्वत्र नियमित रहने अवलोकन कर्ता लाई जनाउने गर्दछ। जुन ब्रह्माण्ड चेतना हो। व्यक्तिको चेतना वा आत्मा समेत ब्रह्माण्ड चेतनाको सीमित अंश मानिन्छ जुन ब्रह्माण्ड चेतना संग नियमित संसर्गमा रहन्छ।

ह्रीं शब्द माया बीज हो। जसमा रहेको "ह" ले शिव, "र" ले प्रकृति, "नाद" ले ब्रह्माण्ड चेतना रुपी विश्व माता शक्ति तथा त्यहाँ लेखिने सङ्केत "बिन्दु" ले दुःखको उन्मूलनको सङ्केत गर्दछ। माया











वीज शब्द ह्रीं ले तसर्थ समग्रमा विशिष्ट निर्माणको हेतुले ध्वंस गर्ने देव शिवकी आद्याशक्ति आदि माता शिवयुक्त जननी आद्या शक्ति (पार्वती) मलाइ यो मायावी आशक्ति तथा एट्याचमेन्टका कारण उत्पन्न भएको दुःख र हैरानी वाट मुक्त गरिदिनु भन्ने अर्थ दिन्छ।

श्रीं शब्द लक्ष्मी बीज हो। श्री बीज अर्थात् लक्ष्मी बीजको शब्द श्रीं को "श" ले महालक्ष्मीको अर्थ दिन्छ। धन को अर्थ दिने "र", महामाया को अर्थ दिने "ई", विश्व माताको अर्थ दिने " नाद" तथा दुःख वाट पार लगाइदिनु भन्ने सङ्केत "बिन्दु" को हुने गर्दछ। यस अर्थमा धन कि अधिष्ठात्री जगत जननी देवी लक्ष्मी कृपया मेरो दुःख हटाई दिनुहोस् भनेको हुन्छ।











क्रीं लाई काली बीज भनिन्छ। शब्द "क्रीं" बनेको अक्षर क् = काली, र् = प्रकृति, ई = महामाया, नाद = विश्व माता र बिन्दु = दुःखको उन्मूलन अर्थ दिने छ। तसर्थ काली बीज या कर्पूर बीज समेत भनिने क्रीं बीज शब्दले माता देवी महाकाली मेरो दुःखहरू नष्ट गरिदिनु भन्ने अर्थ दिन्छ।

ऐं सरस्वती बीज मन्त्र हो। वागभवबीज समेत भनिने सरस्वती बीज मन्त्र "ऐं" बनेको अक्षर ऐ = सरस्वती, नाद = विश्व माता र बिन्दु = दुख हरण हुन्छ। तसर्थ यस बीजको अर्थ हुन्छ 'माता देवी सरस्वती मेरो दुःख हटाइदिनु।

क्लीं कृष्ण बीज मन्त्र हो। काम बीज समेत भनिने कृष्ण बीज मन्त्र "क्लीं" क = योगस्त श्री कृष्ण, ल = दिव्य तेज, ई = योगीश्वरी या योगेश्वर तथा













बिन्दु सङ्केत = दुःखको उन्मूलन हो। तसर्थ यस काम बीजको समेत मानिने कृष्ण बीज आशय अनुरूप दैनिक काम बीजको सन्दर्भमा " हे राज राजेश्वरी योगमाया मेरो दुःख हटाइदेऊ।' भन्ने लाग्दछ। त्यसको साथै कृष्ण बीजको सर्वश्रेष्ठता प्राप्तिको सन्दर्भमा " हे योगेश्वर श्रीकृष्ण मेरो लक्ष अप्राप्तिको पिडा वाट मलाइ मुक्त दिनु" भनेको हुन्छ।

दूं शब्द लाई दुर्गा बीज भनिन्छ। जसमा द् = दुर्गति नाशिनी दुर्गा, सङ्केत ¬ ( "~" वा "¬") = संरक्षण र बिन्दु = दुःख उन्मूलन भन्ने लाग्दछ। तसर्थ दुर्गा बीजको दूं शब्दको अर्थ 'दुर्गति नाशिनी दुर्गा मेरो दुर्गति वा दुर्गतिमा पर्न सक्ने जोखिम वाट मलाइ रक्षा गर भन्ने नै हो।'







स्त्रीं शब्द वधू बीज या तारा बीज हो। बधू वीज वा तारा बीजमा स् = दुर्गा, त् = तारा, र् = प्रकृति, ई = महामाया, नाद = विश्व माता र बिन्दु सङ्केत = दुःखको हरण भन्ने लाग्दछ। तसर्थ वधू बीज बीजको अर्थ 'जगत माता महामाया तारा मेरो दुःख हटाइदेऊ' भन्ने हो।

हौँ शब्द प्रसाद बीज वा शिव बीज हो। जसमा ह्= शिव, औ = सदाशिव र बिन्दु सङ्केत = दुख हरण हुन्छ। तसर्थ शिव बीज बीजको अर्थ 'भगवान् शिव र सदाशिवले मेरो दुःख हरण गरुन् भन्दछ।

हुँ शब्द वर्म बीज या कूर्च बीज हो। जसमा ह् = शिव, ¬ = भैरव, नाद = सर्वोच्च (विश्व माता) तथा बिन्दु सङ्केत = दुःखको उन्मूलन हुने गर्दछ। तसर्थ वर्म बीज या कूर्च बीजले "भयङ्कर असुर एवं











सर्वश्रेष्ठ भगवान् शिवले मेरो दुःख हटाउन सहयोग गर्नुहोस्।" भन्ने अर्थ दिन्छ।

हं शब्द हनुमद् बीज हो। जुन ह् = अनुमान, अ्= सङ्कट मोचन र बिन्दु सङ्केत = दुःख निवारण हुन्छ। तसर्थ हनुमद् बीज "हं" ले "सङ्कट मोचन कर्ता हनुमान मेरा दुःखहरू हटाउनुहोस्" भन्ने अर्थ दिन्छ।

गं शब्द गणपति बीज हो। जुन ग् = गणेश, अ् = विघ्न बाधाहरू नाश गर्ने र बिन्दु सङ्केत = दुःख हटाउने हुन्छ। तसर्थ गणपति बीज "गं" शब्दको अर्थ "विघ्न बाधाहरू नाश गर्ने भगवान् गणेश मेरा दुःखहरू हटाइदिनुहोस्" भन्ने अर्थ दिन्छ।

क्ष्रौं शब्द नृसिंह बीज हो। जुन क्ष् = नृसिंह, र् =











ब्रह्म, औ = दिव्य र तेजस्वी र बिन्दु सङ्केत = दुख हरणको अर्थ दिने गर्दछ।

यसैले नृसिंह बीजको अर्थ "दिव्य र तेजस्वी ब्रह्म स्वरूपको श्री नरसिंह मेरा दुःखहरू हटाइदिनुहोस्" भन्ने अर्थ दिन्छ।

बीज मन्त्रको भावनाले सङ्केत गर्ने ईश्वर वा समग्र प्रकृति शब्दले ब्रह्माण्ड चेतनाले नियमित कम्पनमा रहने आदिम ऊर्जा रूप अर्थात् परमात्माको सङ्केत गर्दछ। ब्रह्माण्ड चेतना कन्सन्ट्रेटेड हुँदै सानो बाक्लो कम्पनयुक्त नाडी विकास गर्ने बिन्दुको रूपमा परिवर्तन भएर जीवको शरीर लाई कैद गरी राख्ने शक्ति बन्दछ। जसलाई आत्मा भनिन्छ।

**योनिमन्ये प्रपद्यन्ते शरीरत्वाय देहिनः ।**













**स्थाणुमन्येऽनुसंयन्ति यथाकर्म यथाश्रुतम् ॥**

**॥ कठ उपनिषद् ७ ॥**

कठ उपनिषद् ७ अनुसार आफ्नो कर्म र ज्ञान अनुसार कुनै आत्मा जीव गर्भ गृहमा प्रवेश गरेर जीवको रूपमा व्याप्त रहन्छन् भने कुनै अचल बीज गर्भ गृहमा प्रवेश गरी वनस्पतिको रूपमा (स्थाणुमन्येऽनुसंयन्ति = वृक्षादीस्थावरभावम्) व्याप्त हुन पुग्दछन्।

आत्मा व्यक्तिको चेतन शक्ति हो। चेतन शक्ति नियमित अवलोकन कर्ताको रूपमा अस्तित्वमा रहन्छ। चेतन शक्तिले अवलोकन गरेको स्मरणको सँगालोलाई चित्त भनिन्छ।

चित्तको स्मरणको आधारमा व्यक्तिले अवलोकन





॥ श्री गणेशाय नमः ॥





कर्ताको अस्तित्वको सट्टा आफ्नो भौतिक अस्तित्वलाई आफू र मेरो आफ्नो भन्ने अवधारणा निर्माण गर्दछ। जसलाई आफ्नो भन्ने पहिचानको जरुरत पर्दछ। जसबाट व्यक्तिको इगो अर्थात् अहङ्कारको विकास हुन्छ। अवलोकन कर्ता र चित्त वृत्तिले विकास गरेको अहङ्कारको नियमनको लागि त्यहाँ अर्को शक्तिको जरुरत हुन पुग्दछ। जसलाई मन भनिन्छ।

स्मरणको सँगालो वाट बन्ने चित्त वृत्तिको अनुभूतिले विकास गर्ने अतृप्त चरित्रको मन शक्तिलाई सन्तुलनको जरुरत पर्दछ। जसको लागी आफ्नो विवेक वा बुद्धिमत्ताले नियन्त्रण गर्न मनस अर्थात् बुद्धि शक्ति सक्रिय बन्दछ।

अत्यन्त चुलबुले चित्त र चञ्चल मनको वृत्तिको









अर्थात् मनोवृत्तिको प्रभावलाई यन्त्रित रूपमा नियन्त्रणमा लिई तौलिएर उपयुक्त निर्णय लिने र आफ्ना पाँच कर्मेन्द्रिय र पाँच ज्ञानेन्द्रिय परिचालन गरी व्यक्तिको बुद्धिमत्ताले जीवको कर्म सम्पन्न हुने गर्दछ।

मनमा व्यक्तिको बुद्धिमत्ता अर्थात् बुद्धि प्रभावशाली सल्लाहकारको भूमिकामा र चित्त अर्थात् दिल आन्तरिक हठ युक्त दबाब शक्तिको भूमिकामा जोडिएर रहेको भेटिन्छ। मन, बुद्धि, चित्त र अहंकार अंतःकरणको चार विभागको रूपमा पारस्परिक रूपमा काम गरिरहेको हुन्छ।

मन्त्रहरूमा प्राय आउने शब्दहरू ॐ समग्र प्रकृति निर्माण शक्ति हो। व्यक्तिको स्वस्थको हकमा यसलाई आत्मबल भनिन्छ। दुस्मनीको हकमा चुरो






विवाद उत्पन्न हुने कारकको समाधानको उपाय यसलाई मानिन्छ। खगोलमा ॐ ले मूल शक्ति जसमा सम्पूर्ण गतिशील ब्रह्माण्डीय पिण्ड हरुको शक्ति सन्तुलनको मुख्य आधारको अस्तित्व लाई सङ्केत गर्दछ। यसैलाई तपाइले औषधि उपचारको मन्त्रमा देख्नुभयो भने रोग उत्पन्न हुने, निको नहुने र बढ्दै जाने लक्षणको मूल कारकमा खोज्नु पर्ने समाधान भन्ने अर्थ दिन्छ।

मन्त्रहरूको निचोडले दिने अन्य शब्दहरू जस्तै शिव, शिवकी आद्याशक्ति पार्वती, महालक्ष्मी, महाकाली, सरस्वती, श्रीकृष्ण, दुर्गा, महामाया तारा, असुर, भगवान्, हनुमान, गणेश, श्री नरसिंह, सूर्य, चन्द्र, मङ्गल, बृहस्पति, बुध, शनि, यम आदि जस्ता शब्द चयन भएको देखिन्छ। जीवनका हरेक











पक्षको समस्याको समाधान वा अवसरको खोजीमा सफलता प्राप्त गर्न उपयोग हुने यी शब्दको परिस्थिति विशेष अर्थहरू कोडिङ भएर बनेको छन्।

तिनै कोडिंगहरु लाई मन्त्र मार्फत स्मरण गरेर हरेक कुराको ज्ञान प्राप्त गर्न वा समस्या समाधानको उपायको ज्ञान पुस्तौं पुस्ता हस्तान्तरण गर्न हाम्रा पुर्खाले उपयोग गरेको देखिन्छ। हाम्रा वैदिक परम्पराका कोडिङको तरिकाको अवधारणा कम्प्युटर निर्माण पूर्व मात्र अँन र अफको बाइनरी कोडिङको अवधारणा विकास गर्न उदाहरण बनेको र आजको क्वान्टम युगमा त्यसमा गति, लोकेसन र अन्य रिफरेन्स समेतको उपयोग गर्ने तर्फ कम्प्युटर प्रविधि अघि बढिरहेको हामी सबैलाई अवगत नै











छ।

यसरी समग्रमा हेर्दा वैदिक बीज मन्त्रको अवधारणा वाट कम्प्युटर निर्माण पूर्व कोडिङको अवधारणा विकास भएको प्रस्ट हुन्छ। यसरी मानव इतिहासको हरेक पलमा आधुनिक वैज्ञानिक समाजको विकास गर्न तथा प्रविधि विकास र इनोभेसन गर्न वैदिक कालिन विज्ञानको अवधारणा अत्यन्त सहयोगी बन्दै आएको छ। जुन आजको क्वान्टम युगमा विज्ञान प्रवेश गर्दै गर्दा झन् अधिक उपयोगी बनिरहेको छ।

यो सन्दर्भमा बीज मन्त्रहरू वाट बनेको शरीरको वजन कम गर्न वैदिक मन्त्रको रूपमा चर्चित अग्नि गायत्री मन्त्र र दुर्गा मन्त्र जपको अर्थ यस्तो लाग्ने गर्दछ।













**ॐ महाज्वालाय विद्महे अग्नि मध्यमय धीमहि |**

**तन्नो: अग्नि प्रचोदयात ||**

**|| अग्नि गायत्री मन्त्र ||**

अग्नि गायत्री मन्त्रको चलन चल्तीको भावार्थ: ॐ। मलाई महान् अग्निको ज्वालाको सान्निध्य ध्यान गर्न दिनुहोस्। हे अग्निको भगवान्, मलाई उच्च बुद्धिमत्ता प्रदान गर्नुहोस्। हे तेजस्वी अग्निको भगवान् मेरो मनलाई ज्ञानको उज्यालो दिनुहोस्।

**सर्वमङ्गलमाङ्गल्ये शिवे सर्वार्थसाधिके ।**

**शरण्ये त्र्यम्बके गौरि नारायणि नमोऽस्तु ते ||**

**|| दुर्गा मन्त्र ||**











दुर्गा मन्त्रको चलन चल्तीको भावार्थ: दुर्गा सारा संसारका जीवहरूको शुभ प्रदायक पवित्र र दैवी शक्ति हुन्। उनी सम्पूर्ण चराचरहरूको उत्थानमा लाग्नेहरूको शुभ प्रदायक हुन्। उनको भूमिकामा तल्लीन रहेका (उनमा आत्म समर्पण गरेका) हरूको उनले रक्षा गर्छिन्। हिमाली राजाकी छोरी, त्रिलोककी माता गौरी माताको नामले समेत चिनिने दुर्गालाई मा बारम्बार नमन गर्दछु। पूजा गर्दछु।

मोटो पन उत्पन्न हुने कारकको समाधानको उपाय (ॐ) अन्तर्गत अग्नि गायत्री मन्त्रले मिठो स्वाद हुने र तुरुन्त पच्ने र शरीरमा पोषण दिने अन्नमा आफ्नो आशक्ति घटाउने सल्लाह दिन्छ। तर पनि मानिस जीवित रहन, दैनिक कार्य गर्न उसलाई न्यूनतम शक्तिको जरुरत पर्दछ।













त्यस परिस्थितिको समाधानको लागि दुर्गा मन्त्र समेत जोडिएर आउँदछ। त्यसमा वाचन हुने मोटो पन नियन्त्रणको सन्दर्भमा वाचन गरिने दुर्गा मन्त्रको आशय यस्तो हुने गर्दछ।

यो दुई मन्त्रले वेदका ज्ञाताहरूलाई यस्तो सेन्स दिने गर्दछ।

अग्नि गायत्री मन्त्रको यो सन्दर्भको चुरो अर्थ यस प्रकार लाग्दछ। "मोटो पन उत्पन्न हुने कारकको समाधानको उपाय (ॐ) खोज्नको लागि पाचन रस र त्यसको सान्निध्यमा घटित हुने पोषणको प्राप्ति बारे (अग्निको भूमिका) सचेत बन।

पाचन पछि शरीरमा प्रचुर शक्ति वा बोसिय तत्त्व दिने अन्न ( हे अग्नि भगवान् - ३३ कोटी भगवानमा











अन्न समेत पर्दछ र अग्नि मैत्री अन्न भनेर बोसियुक्त तत्त्व निर्माण गर्ने कर्बोहाईड्रेड अधिक भएका अन्नहरू पर्दछन्) कम खाने बानीको विकास (उच्च बुद्धिमत्ता प्रदान - मिठो प्रतिको आशक्ति घटाउने शक्ति) गर्ने व्यवहारिक क्षमता विकास (मनलाई ज्ञानको उज्यालो) गर्नु होस्।" यहाँ मन शब्दले तपाइको आफ्नै आत्मा बल भन्ने तर्फ सङ्केत गर्दछ।

"मोटो पन कम गरि शरीर लाई स्फूर्त राख्न (सारा संसारका जीवहरूको शुभ प्रदायक पवित्र र दैवी शक्ति) शारीरिक वजन कम गर्ने तर मानसिक गतिविधि कायम गर्न सहायक हुने (पवित्र र दैवी शक्ति दुर्गा) तत्त्व तपाइको खान, पान र आचरणमा (दुर्गा शक्तिमा आत्मसमर्पणको) जरुरत हुने छ।













प्रकृति मैत्री फलफूल र सागपातको (हिमाली राजाकी छोरी) मनोवैज्ञानिक सबलता तथा शारीरिक परिचालनको हार्मोनी दिने तत्त्व, यथार्थमा फाइटोकेमिकल जसले पहिलो अन्नको कम ग्रहण गराउन भूमिका खेल्छ, दोस्रो मनोवैज्ञानिक सबलता थपेर स्वस्थ वृद्धि गर्दछ र तेस्रो शरीरमा उत्पन्न विकार शरीर वाट हटाउन सहयोग गर्छ (त्रिलोककी गौरी माता)। तिमीले त्यही विनि नियमित अपनाउनु (पूजा गर्दछु)। यस बानी लाई आफ्नो नियमित खाद्य आहार लिने बानीको रूपमा विकास (दुर्गालाई बारम्बार नमन) गर्नु।"

## वीज मन्त्र बारे अथर्व वैदिक ज्ञान र विज्ञान









अथर्व वैदिक ज्ञानको अभावमा तन्त्र क्षेत्रमा लागेका तान्त्रिकहरू वीज मन्त्रले खास कुनै अर्थ नहुने कुरा गर्छन्। वीज मन्त्र लाई मात्र ध्यान केन्द्रित गर्ने यान्त्रिक उपायको रूपमा प्रयोग गर्छन्। यथार्थमा वीज मन्त्रहरू ब्रह्माण्ड चेतना सँगको संसर्गमा हुने मानव चेतना तथा भौतिक शरीर निर्माण गर्ने सूक्ष्म क्वान्टम वेभ फङ्क्नहरूलाई आपसी समन्वय गर्ने ध्वनि आवृत्तिका साना साना टुक्राहरु हुन्।

संगीतको क्षेत्रमा मेलोडी भनेको संगीतका नोटहरूको एउटा श्रृंखला हो। संगीतका नोटहरूको श्रृंखलाबद्ध धुनहरू क्रमैसँग बजाएर वा गाएर संगीतको एउटा वाक्यांश वा थिम सिर्जना गरिन्छ। तिनै लाइ विशेष लय तथा स्वरको संयोजनले मेलोडीको रूप र चरित्र दिइन्छ। मेलोडीले व्यक्त









गर्ने संगीतको भावनात्मक सार र विषय वस्तुले भावनात्मक केन्द्रलाई छोएर व्यक्तिलाई मन्त्रमुग्ध पार्दछ।

जसरी संगीतको मेलोडीले भावनात्मक केन्द्रलाई छोएर व्यक्तिलाई मन्त्रमुग्ध पार्दछ, त्यसरीनै तन्त्र विद्यामा वीज मन्त्र मनोविज्ञानको आधार चेतना र भौतिक शरीरको मूल आधार क्वान्टम वेभ फङ्क्नहरू लाई आपसी समन्वय गर्ने साना-साना कम्पन रूपी नोटहरू भावनात्मक केन्द्रलाई विश्राम, ध्यान र आनन्द (bliss) को अवस्थामा लैजान उपयोगी हुन्छ।

भौतिक र मनोवैज्ञानिक कम्पनहरू बीच वीज मन्त्रका साना-साना नोटहरू प्रयोग गरेर तन्त्र विद्यामा शरीरको कम्पनलाई त्यसका चक्र र नाडी








मैत्री लयमा क्रमबद्ध गरी संयोजन गर्दा शरीरको स्व-उपचार तागत उत्प्रेरित गरि क्वान्टम हिलिङ सम्भव तुल्याइन्छ। यस्तो समयमा व्यक्तिले आनन्द र धन्यताको महसुस गर्दछ। भित्रि शक्ति तथा आत्मबल जागृत भएको अनुभूति गर्दछ।

यथार्थमा वीज मन्त्रहरू मानव शरीरका विशिष्ट ऊर्जा केन्द्रहरू (चक्रहरू) सँग प्रतिध्वनि गर्ने कोर ध्वनिका कम्पनहरू हुन्, जसले उपचार, शान्ति, र उच्च ब्रह्माण्ड चेतनासँगको मानव चेतनाको सम्बन्ध लाई सुगम र सुमधुर बनाउँछन्।

आधुनिक वैज्ञानिक बुझाइ अनुसार शरीर वेभ फङ्क्सनहरू बाट निर्मित छ। वीज मन्त्रहरूको प्रयोजन क्वान्टम भौतिकी र चेतना बीचको क्वान्टम मेलोडी विकासको अवधारणा सँग सम्बन्धित छ। क्वान्टम









मेकानिक्सले शरीरका कणहरूलाई सम्भावनाको वेभ-आधारित अस्तित्व मान्दछ, जुन वेभ फङ्क्सन द्वारा सञ्चालित हुन्छ।

अवलोकनकर्ताको उपस्थितिमा कणको गुण देखाउने त्यो ऊर्जा, अवलोकन कर्ताको अनुपस्थितिमा वेभ फङ्क्सनको गुणमा आउँछ। यसरी पदार्थलाई ऊर्जा कम्पनको रूपमा बुझ्न सक्दा प्राचीन वैदिक वीज मन्त्रको प्रयोजनको दर्शन सँग आधुनिक वैज्ञानिक बुझाइ फरक देखिँदैन। जहाँ ध्वनि लाई (नाद) ब्रह्माण्डको सिर्जना र निर्माणको आधार भूत शक्ति मानिएको छ।

क्वान्टम बायोलोजी र न्युरोसाइन्स जस्ता क्षेत्रहरूमा वीज मन्त्र कै कम्पन हुने जस्ता ध्वनि आवृत्तिहरूको उपचारमा उपयोगिताको अनुसन्धान गर्दा, शरीर र




मस्तिष्कमा ध्वनि आवृत्तिहरूले प्रतक्ष प्रभाव पार्ने देखिन्छ। वीज मन्त्रहरूको विशिष्ट ध्वनि आवृत्तिहरूले तान्त्रिक क्षेत्रमा शरीर र मस्तिष्कका क्वान्टम तहका वेभ फङ्क्ननहरूमा असर गर्ने कुरा यो हिसाबमा असम्भव भने देखिँदैन। वीज मन्त्रहरूले स्व-उपचार प्रक्रियाहरूलाई सक्रिय पार्न र चेतनाका अवस्थाहरूलाई सुगम बनाइ आनन्दको अनुभूति गराउँछ भन्ने तान्त्रिक हरुको अनुभव समेत वैज्ञानिक तर्क सङ्गत नै रहेको अनुभूति हुन्छ।

उदाहरणका लागि, हामीलाई थाहा भएकै कुरा हो कि आँखाले देख्न सकिने साइमाटिक्स (Cymatics) ध्वनि तरङ्गहरूले पदार्थमा प्रत्यक्ष प्रभाव पार्न सक्छ। त्यस्तै, वीज मन्त्रहरूले शरीरभित्रको सूक्ष्म ऊर्जा र वेभ ढाँचासँग





अन्तरक्रिया गर्न सक्छन्।

वैज्ञानिक परीक्षणमा विशेष आवृत्तिमा मन्त्रहरूको जपले मस्तिष्कको तरङ्ग ढाँचामा प्रभाव पारेर मस्तिष्कलाई गहिरो विश्राम, ध्यान, र आनन्द (bliss) को अवस्थामा पुऱ्याएको देखिएको छ।

यस सन्दर्भमा वीज मन्त्रहरूको विशिष्ट ध्वनि आवृत्तिको उपयुक्त प्रयोगले मस्तिष्कको न्युरल गतिविधिलाई गहिरो चेतनाको अवस्था सम्म पुऱ्याउन सहयोग गर्छ भन्ने दाबीलाई अस्वीकार गर्न सकिँदैन।

आणविक वा क्वान्टम तहमा वीज मन्त्रहरूले उत्पन्न गर्ने कम्पनका ढाँचाहरूले शरीरको प्राकृतिक उपचार प्रक्रियालाई वैज्ञानिक रूपमा नकार्न

सकिँदैन। किनकि ध्वनि कम्पनहरूले कोषहरूको मर्मत, ऊर्जा प्रवाहमा सन्तुलन मात्र होइन, आनुवंशिक अभिव्यक्तिलाई परिवर्तन गर्ने एपिजेनेटिक (Epigenetic) प्रभाव दिने संकेत वैज्ञानिक परीक्षणहरूबाट प्राप्त भएका छन्।

वीज मन्त्रहरू मार्फत तान्त्रिकहरूले पाएका अनुभवहरू वैज्ञानिक सिद्धान्तहरू विरुद्धका अनुभवहरू भने होइनन्।

वीज मन्त्रहरूको क्षमता र तान्त्रिकहरूले सुनाएका अनुभवहरू बारे वैज्ञानिक रूपमा अझ धेरै कुरा पुष्टि भएर आउन बाँकी भए तापनि, वीज मन्त्रहरूले शरीरका क्वान्टम वेभ फङ्सनहरूको मेलोडी निर्माण गरेर चेतनाको अवस्था सुगम बनाउन र स्व-उपचारमा भूमिका खेल्छ भन्ने अथर्व वैदिक प्राचीन





बुझाइ वैज्ञानिक सिद्धान्त अनुरूप नै रहेको विज्ञानले संकेत गर्दछ।

# वेदमा रहेछ सिमुलेशन हाइपोथेसिस

विज्ञानको आधारमा अन्वेषण मार्फत हाम्रो ब्रह्माण्ड लाई गहिरिएर बुझ्ने प्रयास गर्दै गर्दा हालका विज्ञानका लगभग सबै प्रयासहरूले अन्वेषक र वैज्ञानिकहरू लाई प्रविधि (टेक्नोलोजी) र दर्शनको दोबाटोमा लगेर उभाइदिने गरेको छ। यौटा यस्तो दोबाटो जहाँ एक तर्फ वाट उन्नत भनिएका सैद्धान्तिक भौतिकीका पक्षको बाटो र अर्को तर्फ



वाट गहिरो मेटाफिजिकल जिज्ञासा युक्त बाटाहरू आएको एकल बाटो निर्माण गरिदिएको हुन्छ।

व्यवहारिक प्रकृतिको उच्च वैज्ञानिक अनुसन्धानको चरणमा काम गरिरहेका हरेक वैज्ञानिकले अनिवार्य रूपमा साक्षात्कार गर्ने त्यो दोबाटोको विन्दुमा पुग्दै गर्दा उ आफै संग उसको आफ्नै मनको गहिरो प्रश्न ठोकिन आउँछ।

के हामी वास्तव मै सिमुलेशनमा त बाँचिरहेका छैनौ? अर्थात् हामी वास्तविक यथार्थता भन्दा फरक चिजलाई यथार्थ मानी सोही भ्रममा त बाँची रहेका छैनौ?

विज्ञानमा सिमुलेशन मोडेलहरूको प्रयोग गरि वास्तविक विश्व प्रक्रियाहरू वा प्रणालीहरूको








सञ्चालनको विधिको नक्कल गरिन्छ। तिनीहरु कसरी सञ्चालन भइरहेको छ भनी व्याख्या वा प्रस्तुत गर्ने कोसिस गरिन्छ।

सिमुलेशन हाइपोथिसिस आफैमा एउटा यस्तो अवधारणा हो जसले वैज्ञानिक र दार्शनिक दुवै पक्षलाई समान रूपान्तरण गरी कुनै वस्तु, प्रक्रिया वा प्रणालीको वास्तविकता बारे प्रस्टता थप्न एक कृत्रिम भौतिक वा डिजिटल निर्माण सम्भव पार्दछ।

उन्नत डिजिटल सिमुलेशन जुन यथार्थमा प्राप्ति भइसकेको छैन तर प्राप्ति हुँदाको समयमा त्यसको मोडल वा प्रकृति कस्तो हुनेछ भन्ने एक कृत्रिम भौतिक वा डिजिटल अवधारणा प्रस्तुत गर्नु, कतिपय सन्दर्भमा प्रोटोटाइप बनाउनु, भर्चुयल रियालिटी आदिमा सिमुलेशन मोडेलहरू उपयोग






हुन सक्दछ।

सिमुलेटेड रियालिटीको एकरूप रहेको भर्चुअल रियालिटी (VR) अन्तर्गत भर्चुअल वास्तविकतामा एक सिमुलेटेड वातावरण सिर्जना गर्न कम्प्युटर टेक्नोलोजीको प्रयोग गरिन्छ। सिमुलेटेड रियालिटीको कम्प्युटर टेक्नोलोजीले प्रयोगकर्ताको संवेदी अङ्ग (Sensory Organ) सित अन्तरक्रिया गरी भर्चुअल रूपमा डिजाइन गरिएको अनुभव, अनुभूति, भावना र चेतनाहरू उपलब्ध गराउने गर्दछ।

संसारका वास्तविक वातावरणका पक्षहरूको अनुभूति दिलाउन वा पूर्णतया काल्पनिक संसारहरू सिर्जना गर्न डिजाइन गरी इच्छाइएको अनुभूति दिने नियतले सिमुलेटेड वातावरण पैदा गर्न






प्रयोगकर्ताहरूलाई विशेष भर्चुअल रियालिटी उपकरणहरू जस्तै: हेडसेट र गति नियन्त्रकहरू आदि उपलब्ध गराइने गरिन्छ।

भर्चुअल रियालिटीको अनुभवमा व्यक्तिहरूले कम्प्युटरले उत्पन्न गरेको वातावरणमा डुबेको महसुस गर्न सक्छन्। जसमा दृश्य, श्रवण, र कहिलेकाहीँ स्पर्शात्मक संवेदनाहरू पनि समावेश गरिएको हुन्छ। मूलतः मनोरञ्जन, शिक्षा, प्रशिक्षण वा अन्य उद्देश्यका लागि सिर्जना गरिएको भर्चुअल रियालिटी नियत बस डिजाइन गरिएको नियन्त्रित सिमुलेशन विधि हुने गर्दछ।

विज्ञानमा अत्यन्त धेरै प्रयोग हुने डिजिटल सिमुलेशनमा प्रकृतिका चाख लाग्दा सिमुलेटेड प्रोटोटाइप वा अवधारणाहरूको विकास गर्ने





गरिन्छ। जसको आधार वा जराको रूपमा निश्चित वैज्ञानिक दर्शन वा सैद्धान्तिक आदर्श रहने गर्दछ। त्यस्ता वैज्ञानिक हाइपोथेसिसहरुले परिकल्पना गरेको सिमुलेटेड वातावरणको प्राप्ति आधुनिक वैज्ञानिक खोजहरूमा आधारित उन्नत प्रविधिको उपयोग मार्फत सम्भव तुल्याइने नीति अवलम्बन गरिन्छ।

डिजिटल सिमुलेशनको क्रममा विकास गरिने वैज्ञानिक हाइपोथेसिसहरुले गरेका परिकल्पना हरूको ठोस वैज्ञानिक आधारमा पुष्टि गर्न सकिन्छ भन्ने निश्चित नरहेता पनि सिमुलेशनको प्रयोजनको लागि परिकल्पना गरिने मोडेलहरू वैज्ञानिक रूपमा अधिक प्रशंसनीय हुने गर्दछन्।

यथार्थमा आज हामी निकै फरक प्रकृतिको









वैज्ञानिक दुनियाँमा रहेका छौ। जहाँ विशेष गरी एलोन मस्क जस्ता विज्ञानका ज्ञाता, सफल अन्वेषक तथा इनोभेटरको रूपमा अत्यन्त उच्च-प्रोफाइलमा रहेका प्रसिद्ध व्यक्तिहरू लगायतका केही मानिसहरूले हाम्रो दैनिक वास्तविकता "साँचो" वास्तविकता हुने सम्भावना धेरै उच्च देखिँदैन भन्ने विचारहरू फरक फरक सन्दर्भमा पटक पटक दोहराई रहेको भेटिने गर्दछ।

हामीले हाम्रो आधारभूत वास्तविकताको भनि विश्वास गरिरहेको वैज्ञानिक वास्तविकताहरू समेत "साँचो" वास्तविकता हुने सम्भावना एकदम कम रहेको भन्ने जस्ता विचारहरू स्थापित सफल वैज्ञानिकहरू वाट नियमित खुलासा हुने गरेको भेटिन्छ।








कम्प्युटरको कोडिङ विकास गर्ने क्रममा सैद्धान्तिक भौतिक शास्त्री डा. जेम्स गेह्वले सुपर सिमेट्रीको समीकरणको विशेष कोडहरू बनाउन सफल वने। यी कोडहरू कम्प्युटर प्रणाली मार्फत हुने सूचना सम्प्रेषणको क्रममा हुने त्रुटिहरू सच्याउने कोडहरू रहेकाले कम्प्युटर प्रणालीहरू मार्फत प्राप्त हुने सूचना प्रणालीको विश्वसनीयतामा सुदृढ गरी कम्प्युटर लाई राम्रो सँग काम गर्न यसले सक्षम बनायो।

उक्त कोडहरूको विकास गरिसके पछि डा. जेम्स गेह्वले निकै गहकिलो भनाइ बाहिर ल्याए। जसमा उनले उल्लेख गरे कि ***हाम्रो ब्रह्माण्डको आधारभूत संरचनाले काम गर्ने समीकरणहरू अर्थात् तरिकाहरू लाई वर्णन गर्ने अनौठा 'कम्प्युटर कोडहरू' फेला***









***परेका छन्। यो एउटा यस्तो खोज हो जसले मलाई हरेक कुराको यथार्थ वास्तविकता बारे प्रश्न गर्न बाध्य तुल्याएको छ। किनकि यसले एउटा यस्तो संसारको रहस्य उजागर गरेको छ जहाँ जीवविज्ञान, भौतिक विज्ञान, गणित र सूचना सिद्धान्तहरू एकै विन्दुमा मिलन हुन्छ। जुन मैले यो भन्दा पहिले कहिल्यै कल्पना समेत गर्न सकेको थिइनँ।***

डा. जेम्स गेह्वको यो भनाइले ***ब्रह्माण्डमा लुकेको कोड रहन्छन् भन्ने धारणा तर्फ सङ्केत गर्दछ।*** यसले मानिसहरूलाई ***हामीले देखिरहेको हाम्रो ब्रह्माण्ड समेत एक सिमुलेशन ब्रह्माण्ड हुने अधिक सम्भावना रहेको बारेमा सचेत हुन र त्यस दिसामा आफ्नो अनुसन्धान र अन्वेषण गर्न समेत गर्न अन्य वैज्ञानिकहरूलाई प्रेरित गरेको छ।***








आज विशेष गरी भर्चुअल वास्तविकता र कृत्रिम बुद्धिमत्ताले हामीले सोचे भन्दा र वैज्ञानिकहरूले यकिन गरे भन्दा पनि अत्यन्त तीव्र गतिमा प्रगति गरिरहेको छ। यो परिपेक्षमा भविष्यमा विज्ञानले विकास गर्ने सिमुलेशनहरू वास्तविकताको यति नजिक हुने छन् कि तिनीहरू वास्तवमै वास्तविक हुन् वा सिमुलेटेड हुन् भनेर वैज्ञानिक आफैले बताउन सक्षम हुने छैनौँ भन्ने कुरामा निकै ठुलो वैज्ञानिक समुदायले विश्वास गर्दछ।

विज्ञानको धर्म अनुरूप वैज्ञानिक विधिले विचारहरू प्रमाणित हुनको लागि पहिलो सर्तको रूपमा तिनीहरू विज्ञानको परीक्षणको खुबीको दायरा भित्र परीक्षणयोग्य हुन आवश्यक पर्दछ। त्यसो हुन नसक्दा तिनीहरू सत्य छन् वा छैनन् भनी विज्ञानको









विश्वास योग्य परीक्षण विधि वाट प्रमाणित भएको मानिँदैन।

जस्तै: प्रकाशको गति नाप्न यसको समय हेर्ने घडीको आवश्यकता पर्छ। जसमा एउटा बिन्दुको घडी अर्को बिन्दुको घडीसँग पनि समय समकालिक (synchronization) भएको हुनुपर्छ। त्यसो गर्न, पहिले दुवै घडीहरू कसरी सिङ्क्रोनाइज गर्ने भन्ने कुरा परिभाषित गर्न अनिवार्य हुन्छ। त्यो गर्न नसकिएको कारणले हामीले प्रयोगशालामा प्रकाशको एकतर्फी गतिलाई प्रत्यक्ष रूपमा मापन गर्न सक्दैनौं। यसको कारण के हो भने घडीको सिङ्क्रोनाइजेसन प्रक्रिया प्रकाशको गतिको बारेमा गरिने अनुमानमा आधारित हुन्छ, जुन आफैँमा सम्भव छैन।








तसर्थ, प्रयोगशालामा प्रकाशको गति मापन गर्न A बिन्दुबाट B बिन्दुसम्म पठाएर फेरि A बिन्दुमा फर्काइन्छ। यसमा A बिन्दुको एउटै घडी मात्र प्रयोग गरिन्छ ताकि सिङ्क्रोनाइजेसनको समस्या नआओस्।

यही विधि अपनाएर जब आइन्स्टाइनले प्रकाशको गति नाप्ने प्रयास गरे, तब उनी सँग प्रकाशलाई A बिन्दुबाट B बिन्दु सम्म पठाएर फेरि A बिन्दुमा फर्काएर त्यसको समय हेर्नुपर्ने बाध्यता आयो। उनले त्यही गरे।

तर, यहाँ पनि प्रकाशलाई A बिन्दुबाट B बिन्दुसम्म पुग्न र त्यहाँ ऐनामा ठोकिएर B बिन्दुबाट A बिन्दुसम्म फर्कन बराबर समय लाग्छ भन्ने अनुमान गर्न जरुरी भयो। उनले यो प्रमाणित गर्न भने









सकेनन्, जुन आजसम्म प्रमाणित हुन सकेको छैन। यसलाई Einstein's Synchronization Convention भनिन्छ। यो प्रमाणित भएको होइन, मात्र आइंस्टाइनले आफ्नो अनुमानमा आधारित भएर दाबी गरिएको कुरा हो।

आइन्स्टाइनले दाबी गरेको **प्रकाशको गति** जुन विज्ञानको परीक्षणको खुबीको दायरा भित्र रहेको विश्वास गरिए पनि योग्य वैज्ञानिक परीक्षण विधिवाट आज सम्म पनि पूर्ण रुपमा प्रमाणित हुन सकेको छैन। अनुमान र जबरजस्त समेत मिसिएको वैज्ञानिक घटनाले विज्ञानमा मान्य भएको हो।

विज्ञानमा विश्वास योग्य परीक्षण विधि वाट प्रमाणित हुन नसकेको विषयहरू लाई विज्ञान वाट सत्य रहेको वा नरहेको भनी प्रमाणित नभएका










सिद्धान्तको रूपमा लिँदै "वैज्ञानिक रूपमा साबित हुन नसकेको" सिद्धान्त वा अवधारणा वा हाइपोथेसिस कन्भेन्सन अन्तर्गत उल्लेखित गरिन्छ। प्रकाशको गति यति हुने भनी विज्ञानमा भनिने आइन्स्टाइनको अङ्क समेत विज्ञबाट प्रमाणित नभएर उनको कन्भेन्सनको हैसियतको हो।

विज्ञानमा एउटा भनाइ छ 'ब्रेन इन ए भ्याट'। "ब्रेन इन ए भ्याट" अन्तर्गत तपाईं लाइ कुनै वैज्ञानिक ल्याबमा कुनै सम्भाव्यता बारे कल्पना गर्न भनिन्छ। उक्त समयमा तपाईँको मस्तिष्क विशेष प्रकारको कम्प्युटर प्रोग्राममा जोडिएको हुन्छ। जसले बाहिरी संसारका सम्पूर्ण अनुभवहरूलाई पूर्ण रूपमा अनुकरण (सिमुलेशन) गर्न सक्छ।

उपलब्ध सिमुलेशटेड वातावरण भित्र छिरे पछि













तपाईँलाई जुन सम्भाव्यता बारे कल्पना गर्न भनिएको हो त्यो यथार्थमा नै सम्भव बनिरहेको तपाइले अनुभूति गर्न थाल्नु हुन्छ।

उक्त सिमुलेशटेड वातावरणको कम्प्युटर प्रोग्रामले तपाईँको दिमागलाई नै ह्याक गरी वास्तवमै तपाईँको कल्पना यथार्थमा परिणत भइरहेको अनुभूति तपाईँलाई गराई दिन्छ।

वैज्ञानिक क्षेत्रमा अत्यन्त ठुलो प्रशंसा पाएको यस प्रकारको अनुभूति निर्माण गर्ने सिमुलेशन हाइपोथेसिसले आजको समयको विज्ञान लाइ निकै ठुलो चुनौतीको सामना गर्दै अघि बढ्नु पर्ने टिठ लाग्दो अवस्थामा पुर्‍याई दिएको छ। किनभने सिमुलेशन "ब्रेन इन ए भ्याट" विचारको अर्को आकर्षक संस्करण बनिदिएको छ।









पुरानो वैदिक दर्शनका कतिपय सूचनाहरू जुन आज सम्म पनि विज्ञानको परीक्षण क्षमता बाहिर रहेकोले प्रमाणित हुन नसकेको तर मानिसले अनुभूति गर्न सक्ने भए जस्तै सिमुलेशन हाइपोथेसिस विज्ञानको परीक्षण क्षमता बाहिरको विषय बनिदिएकोले उक्त परिकल्पनालाई परीक्षण गर्ने कुनै वास्तविक प्रमाण वा तरिका नभएकोले त्यो अनुमानको श्रेणीमा मात्र रहन पुगेको छ।

सिमुलेशन विधिलाई मानिसले प्रस्ट संग अनुभूति गर्न सक्ने भएकोले वैज्ञानिक क्षेत्रमा विज्ञानले प्रमाणित गरेको होस् वा नहोस् त्यसको बेवास्ता गर्दै वैज्ञानिक समुदायकै अत्यन्त ठुलो प्रशंसा प्राप्त गरी त्यसका नियमित सुधारका कामहरू तीव्र गतिमा अघि बढिरहेको छ। सिमुलेशन प्रविधिले









आश्चर्यजनक प्रगति समेत गरिरहेको छ।

स्विडिस दार्शनिक तथा अक्सफोर्ड विश्वविद्यालयको फ्यूचर अफ ह्युमनिटी इन्स्टिच्युटका संस्थापक निर्देशक निक बोस्ट्रम उनको अस्तित्वको जोखिम, मानव शास्त्रीय सिद्धान्त, मानव नैतिकता वृद्धि, सम्पूर्ण मस्तिष्कको अनुकरण वा सिमुलेसन, सुपरइन्टेलिजेन्सका जोखिम तथा रिभर्सल परीक्षण जस्ता अत्यन्त गहिरा विषयको सन्दर्भमा उनले गरेको काम र उपलब्धिका कारण विश्वभरका वैज्ञानिक समुदायहरू बिच चर्चित र परिचित छन्।

निक बोस्ट्रमले अनुमान गरे अनुसार आजको सिमुलेशनको ट्रेन्डको सङ्केत अनुरूप भोलिको उन्नत समाजले अत्यन्त धेरै सिमुलेशनहरू सिर्जना गर्नसक्ने सम्भावना प्रबल छ। यदि त्यो सम्भव भयो भने






त्यहाँ व्यक्तिहरूका वास्तविक दिमागको तुलनामा अत्यधिक धेरै सिमुलेटेड दिमागहरू अस्तित्वमा रहने छन्। त्यसो हुँदै गर्दा सांख्यिकीय रूपमा (Statistically) हामी आफै आफ्नो वास्तविक दिमागी रूपमा रहन सम्भव हुने छैन। आफ्नै दिमाग र सिमुलेशन दिमाग मिली बनेको सम्पूर्ण दिमागी परिवेश भित्रको सानो, सीमित तर अर्थपूर्ण अंश मात्र रहेको दिमागधारी मूलतः सिमुलेटेड दिमाग वा बौद्धिकताले भरिएको मानिसको हैसियतमै हामी आफै परिवर्तित हुन जाने सम्भावना यसले थप गरिदिएको छ।

निक बोस्ट्रमको शब्दमा भन्दा भोलिका मानिसहरूले (पोस्टह्युमनस) यदि आफ्नो विकासको इतिहासका आफ्नै प्राकृतिक बौद्धिकता











(Intellect) र अनुभूति (Cognition) प्रक्रियाहरु महत्त्वपूर्ण सङ्ख्यामा समावेश गरी भविष्यका सिमुलेशनहरूको विकास गर्न सकेनन् भने सम्भवतः हामी सिमुलेटेड बौद्धिकता युक्त दिमागी वातावरणमा बाँचिरहेको प्राणीमा सीमित हुने छौ।

क्वान्टम मेकानिक्समा भइरहेको अन्वेषणहरूले हामीलाई एउटा यस्तो संसार देखाइसकेको छ जहाँ आपसमा इनट्याङ्गल रहेका कणहरू अत्यन्त लामो असीमित दूरीहरूमा रहेर पनि आपसमा अल्झेर वा कुनै सम्पर्क मध्यम विना नै जोडिएर रहने सुपरपोजिसनमा रहन सक्दछ।

ब्रह्माण्डका कणहरू अवलोकन कर्ताको उपस्थितिमा मात्र कणको रूप देखाउने तर





अवलोकन कर्ता अनुपस्थित रहँदा तिनीहरू वेब वा तरङ्गको रूपमा रहने जस्ता क्वान्टम विषमता र जटिल अन्तरसम्बन्धका वैज्ञानिक गुणहरू सामान्य विज्ञानका म्याक्रोस्कोपिक ज्ञान, सुझाव र मान्यता आदि भन्दा पृथक् रहेको खुलासा भएको छ। उल्लेखित नयाँ वैज्ञानिक तथ्यहरूले चेतना के हो? यथार्थमा वास्तविकता के हो? भन्ने जस्ता गहन प्रश्नहरू हाम्रो दिमागमा जन्माई दिने गर्दछ।

आणविक विखण्डनको आधारभूत सिद्धान्तहरूको व्याख्या गर्न निल्स बोहर सँग क्वान्टम मेकानिक्समा काम गरेका अमेरिकन फिजिसिष्ट जोन आर्किबाल्ड व्हीलर बिसौं शताब्दीको चर्चित सैद्धान्तिक भौतिक शास्त्रीको रूपमा रिलेटीभिटी (सामान्य सापेक्षता), गुरुत्वाकर्षण आदि क्षेत्रमा समेत उल्लेखनीय





योगदान पुऱ्याएका व्यक्ति हुन्। व्हीलर ब्ल्याक होल र खगोलीय घटनाहरूको अध्ययनमा समेत अत्यन्त अग्रणी मानिन्थे।

जोन आर्किबाल्ड व्हीलरको अवधारणा अनुरूप ब्रह्माण्ड निर्माणको सबैभन्दा आधारभूत मुख्य निर्माण ब्लक (Sbstratum) कुनै पदार्थ र ऊर्जा जस्ता चीजहरू नभएर सूचनाहरू (Informations) हुन।

व्हीलरको सोच अनुरूप हाम्रो वरिपरि हामीले देख्ने प्रकृतिका सबै चीजहरू त्यसमा मूलतः ब्रह्माण्डका प्राकृतिक चीजहरू र ती चीजहरूले आपसमा कसरी काम गर्दछ भन्ने प्राकृतिक नियमहरू सबै तिनै सूचनाहरू (Informations) निर्मित छन्।







सूचनाहरू निर्मित प्राकृतिक ती चीजहरू र प्राकृतिक नियमका सिद्धान्तहरू आपसमा संयोजित भएर आधारभूत कम्प्यूटेशनल सब्सट्रेट निर्माणगरी ब्रह्माण्डका चीजहरूमा भौतिक गुणहरूको निर्माण गर्दछ। जसले गर्दा सम्पूर्ण ब्रह्माण्डले एक विशाल कम्प्युटरको जस्तै काम गर्दछ। ब्रह्माण्डमा हामीले अवलोकन गर्ने चीजहरू, घटना र परिघटनाहरू त्यहाँ रहेका सूचनाहरूको प्रशोधनको उपजको परिणाम हुने गर्दछ।

ब्रह्माण्ड एक विशाल कम्प्युटर सिमुलेशन जस्तै हुन सक्ने सम्भावना अधिक रहेको डिजिटल फिजिक्सको यो तर्कहरूले सिमुलेशन परिकल्पनाको तैयार गर्ने निक बोस्ट्रम जस्ता दार्शनिकहरू गहिरो रूपमा प्रभावित बने पछि यो तर्क डिजिटल फिजिक्सको













विशेष मान्यताको पक्षको रूपमा सबैको ध्यान खिच्न सफल लोकप्रिय विचारको रूपमा स्थापित बन्न पुग्यो।

प्रमाणित गर्ने विज्ञानको क्षमताको अभावमा आज सम्म पनि प्रमाणित वैज्ञानिक तरिकावाट प्रमाणित भई नसकेको व्हीलरको यो विचार हाल अत्यन्त चाख लाग्दो अप्रमाणित हाइपोथेसीसको रूपमा सूचीकृत रहेको छ।

व्हीलरको अवधारणा अनुरुप यदि सम्पूर्ण ब्रह्माण्डले उल्लेखित कम्प्युटेसनको सिद्धान्तहरूमा आधारित रहेर एक विशाल कम्प्युटर जस्तै काम गर्दछ भने कम्प्युटेसनको क्षेत्रमा एल्गोरिदमहरू मार्फत लेख्न सकिने विशेष नियमका निर्देशन लेख्ने विधिहरू पछ्याएर भौतिक ब्रह्माण्ड (वास्तविक ब्रह्माण्ड) र





सिमुलेट गरिएको क्षेत्र (बनाइएको ब्रह्माण्ड) बिचमा हाल देखिएको भिन्नता निकै हदसम्म हटाउन सम्भव हुन गइ दुवै बिच सहज सहकार्य हुने बिन्दु प्राप्त गर्न सम्भव हुन सक्दछ। त्यसो हुन सक्दा कम्प्युटर सिमुलेशनले (बनाइएको ब्रह्माण्ड) काम गर्ने तरिका वास्तविक ब्रह्माण्डले कार्य गर्ने तरिका जस्तै हुन सक्दछ।

तपाईँलाई तल उल्लेखित वेद वारेको सूचना पढ्दा आश्चर्य लाग्न सक्दछ। किनकि यो संसारको सृष्टि बारे वैदिक विज्ञान अन्तर्गत निकै धेरै समय खर्च गरिएको छ। त्यसको चुरो कुराहरू निकालेर बुझ्दा तपाइले माथि लेखिएका विज्ञानका डिजिटल सिमुलेशन र कम्प्युटेसनको सिद्धान्तहरू वारेका विवरणहरू वेदका सूचना हरुको सार पढिरहेको





अनुभूति हुन सक्दछ।

जस्तै: ऋग्वेदको नासदीय सूक्तमा १०:१२९ मा उल्लेख भएका ब्रह्माण्ड र ब्रह्माण्डको उत्पत्ति बारे चर्चामा माथिका कतिपय कुराहरूको उल्लेख छ। उक्त सूक्तका ७ मन्त्रहरूको संक्षिप्त व्याख्या एक पटक यहाँ हेरौँ।

**नासदासीन्नो सदासीत्तदानीं नासीद्रजो नो व्योमा परो यत् ।**

**किमावरीवः कुह कस्य शर्मन्नम्भः किमासीद्गहनं गभीरम् ॥ १ ॥**

यो संसारको उत्पत्ति हुनुभन्दा पहिले न केही न कसैको अस्तित्व थियो। न केही, न कसैको







अनस्तित्व नै थियो। शून्य (Nothings) बाट यो संसारको सुरु भएको हो। संसारको सुरुवातमा न आकाश, न हावा, न त्यो भन्दा परका अन्य केही कुरा हरू नै थिए। सर्वत्र सागरजस्तै गहिरो र गम्भीर अन्धकार बाहेक केही थिएन।

**न मृत्युरासीदमृतं न तर्हि न रात्र्या अह्न**
**आसीत्प्रकेतः।**

**आनीदवातं स्वधया तदेकं तस्माद्धान्यन्न परः**
**किञ्चनास ॥२॥**

त्यस बेला न त मृत्यु थियो। न अमरता नै थियो। न त अनादि पदार्थमा (पृथ्वी तत्त्व) जीवन थियो। न अमर मानिसहरू (स्वर्गमा रहने भनी व्याख्या गरिने) नै थिए। त्यो बेला न त दिन थियो। न त













रात। त्यहाँ मात्र एउटा शाश्वत पदार्थ (जसलाई प्रकृति भनिन्छ) थियो। जसको न कुनै आरम्भ वा प्रारम्भको विन्दु थियो। त्यो सदैव नियमित चल्दै आएको छ।

**तम आसीत्तमसा गूहळमग्रे प्रकेतं सलिलं**
**सर्वाऽइदम्।**

**तुच्छ्येनाभ्वपिहितं**
**यदासीत्तपसस्तन्महिनाजायतैकम् ॥३॥**

प्रारम्भमा घना अन्धकार गुणी अँध्यारोले लपेटेको पानी जस्तै अनन्त पदार्थको (तम गुणी Dark Matters) कुनै रूप थिएन। आफ्नो स्वरूप (शाश्वत सत्य रूप) परिवर्तन नगरी आफ्नो गुणमा परिवर्तन गर्न सक्ने शाश्वत पदार्थ (प्रकृति) थियो।







सृष्टिकर्ताको रूपमा रहेको उक्त अनन्त अखण्ड शाश्वत पदार्थको तपस्याले (अव्यक्तको व्यक्त हुने प्राकृतिक आत्मा बल) सृष्टिको आधारभूत मुख्य निर्माण ब्लक (Substratum) अर्थात् सृष्टि निर्माणको सबैभन्दा सूक्ष्म कण तत्त्व ब्रह्माण्ड चेतनाको (परम आत्मा / परमात्मा अर्थात् युनिभर्सल कन्ससनेस) उत्पत्ति (प्रकट) भयो।

**कामस्तदग्रे समवर्तताधि मनसो रेतः प्रथमं यदासीत्।**

**सतो बन्धुमसति निरविन्दन्हृदि प्रतीष्या कवयो मनीषा ॥४॥**

सृष्टिकर्तामा सर्वप्रथम ब्रह्माण्ड सिर्जना गर्ने इच्छा शक्ति (चाहना / विचार / भावना / इरादा)








देखियो। जुन सृष्टिको पहिलो बीज (ब्रह्माण्डीय आत्मबल वा पुरुष) थियो। जसको कारण सृष्टिकर्ताको अव्यक्त अस्तित्व र व्यक्त अस्तित्व बिचको खाडल पूर्ति गर्ने चाहना पुरा भयो। अव्यक्त अस्तित्व व्यक्त अस्तित्वमा प्रकट हुन् सम्भव बन्यो।

(नोटः वैदिक अवधारणामा प्रकृतिले आधारभूत ब्रह्माण्ड सामग्रीहरू लाई जनाउने गर्दछ। जुन जुन तम गुणी अन्धकार हो। सृष्टि कर्ता हो। सम्पूर्ण व्यक्त, अव्यक्त निर्माण ब्लक (Substratum) तथा सबै सजीव र निर्जीव चिजहरूको मुख्य उत्पत्तिको श्रोत हो। पुरुषले सम्पूर्ण व्यक्त,अव्यक्त तथा सबै सजीव र निर्जीव चिजहरूको जीवन र वास्तविकता लाई नियन्त्रण गर्ने ब्रह्माण्ड चेतनाको (ब्रह्माण्ड आत्मा वा परमात्मा) रुपी ऊर्जालाई




जनाउँछ। ब्रह्माण्डीय अस्तित्वमा रहने पुरुष समेत प्रकृति जस्तै समय र स्थान दायरा भन्दा बाहिर गुणको रूपमा रहन्छ। प्रकृति निर्मित पुरुष सँग मिलेर प्रकृतिले आफ्नो अव्यक्तता लाई व्यक्त गर्ने इच्छा अनुरूप व्यक्त संसारको सृष्टि गर्दछ।)

**तिरश्चीनो विततो रश्मिरेषामधः स्विदासीदुपरि स्विदासीत् ।**

**रेतोधा आसन्महिमान आसन्त्स्वधा अवस्तात्प्रयतिः परस्तात् ॥५॥**

अव्यक्त प्रकृतिको व्यक्त रूपमा प्रकट हुने इच्छाले (ब्रह्माण्ड चेतना वा ब्रह्माण्डको आत्मा वा परमात्मा) शाश्वत पदार्थ (प्रकृति) र पुरुष निर्मित सृष्टिको आरम्भ गर्ने बीजको भूमिका खेल्यो। जसले गर्दा





प्रकृति गुण र पुरुष गुण संयोजित भएर प्राकृतिक नियमको सिद्धान्त र सृष्टि निर्माणको सूचनाको (ब्रह्माण्डीय आधारभूत कम्प्यूटेशनल सब्सट्रेट) गुण निर्माण सम्भव बन्यो। अव्यक्तता व्यक्त गर्ने क्षमता बोकेको उक्त आधारभूत ब्रह्माण्डीय सूचना सञ्जालको ब्रह्माण्डीय बुद्धिमत्ता बाट सूर्यको किरण आदि लगायतका ऊर्जाका लहरहरू सर्वत्र प्रकट हुन् सम्भव बन्यो। यसरी प्रकृति र पुरुष निर्मित अ व्यक्तता व्यक्त भएर सृष्टिको आरम्भ हुने कार्य सम्भव हुन गयो।

**को अद्धा वेद क इह प्र वोचत्कुत आजाता कुत इयं विसृष्टिः ।**

**अर्वाग्देवा अस्य विसर्जनेनाथा को वेद यत आबभूव ॥६॥**



आजको वर्तमानमा यो विविध प्रकारको सृष्टिको उत्पत्ति कहिले र कसरी भयो भन्ने यकिनका साथ सम्पूर्ण सत्यता ठ्याक्कै मिल्ने गरी कसैले पनि भन्न असम्भव प्राय छ। किनकि विद्वानहरू आफैं संसारको सृष्टि पछि संसारमा आएका हुन्। तसर्थ सृष्टि हुनुभन्दा पहिले के थियो र सृष्टिको कारण यकिनका साथ यही थियो भनेर अहिले कसैले दाबी त गर्न सक्लान् तर त्यो वर्णन यथार्थ वास्तविकता भएको निश्चय हुन सक्दैन।

**इयं विसृष्टिर्यत आबभूव यदि वा दधे यदि वा न ।**

**यो अस्याध्यक्षः परमे व्योमन्त्सो अङ्ग वेद यदि वा न वेद ॥७॥**

त्यसैले हे सम्पूर्ण विद्वानहरू हो, सृष्टिको स्रोत के








हो? यसको निर्माता को हो? ब्रह्माण्डको नियन्त्रक (प्रमुख शक्ति वा देवता) को हुनु हुन्छ, उहाँ कहाँ के गर्दै हुनुहुन्छ जस्ता कुराहरू तपाइले पहिचान गर्ने कोसिस गर्नुहोस्। तपाईले तपाइको आफ्नै चेतनाको सहयोगले यसलाई पहिचान गर्न सक्नु भएन भने अरूले तपाईँलाई वहाँसँग कसरी परिचित गराउन सक्छ र?

हाम्रो लागी अत्यन्त चाखलाग्दो पक्ष के छ भने उल्लेखित बाहेकका अन्य धेरै सन्दर्भहरूमा समेत जब हामी वेद तथा वेदमा आधारित कथाहरूमा उल्लेख भएका विभिन्न दर्शन, ऋचा, भजन, कविता, सङ्गीत आदिमा रहेको वैज्ञानिक दृष्टिकोण बारे गहिरिएर अनुभूति गर्ने प्रयास गर्दछौ तब हामीले त्यहाँ आधुनिक सैद्धान्तिक भौतिकी तथा










सिमुलेशन वारेका परिकल्पनाहरूको प्रस्ट सङ्केत रहेको, हालको आधुनिक विज्ञानका चिन्तनहरूको समकक्षी चिन्तनहरू समेत प्रस्तुत भएको भेटिन्छ।

वेद तथा वेदमा आधारित कथाहरूमा हाम्रो अगाडी देखिने वास्तविकताहरूका विभिन्न स्तर र तहहरूसँग तुलना गरिएको छ। हामीले देखिरहेको संसार वास्तविक संसार हो वा त्यो एक सिमुलेशन हो (लामो सपना) हो? के हामी सिमुलेशन (लामो सपना ठानिने जाग्रत् अवस्था) लाई जीवनको वास्तविकता मानी बाँची रहेका त छैनौ ? हामीले देखेको संसार वा वास्तविकता यथार्थ नरहेर सिमुलेशन (लामो सपना) त होइन?

सिमुलेशन (लामो सपना) हुने सम्भावना कस्तो छ भन्ने जस्ता क्षेत्रको आधुनिक विज्ञानको सांसारिक













वास्तविकता र सिमुलेशन विषयमा भई रहेका खोजी उन्मुख दर्शन, हाइपोथेसिस र डिजिटल सिमुलेशन कार्यमा हुँदै गरेका चर्चाहरूको समानान्तर चित्रणहरू समेत वेद तथा वेदमा आधारित कथाहरूमा भेटिने गर्दछ।

त्यसको केही पक्ष बुझ्न अथर्व वेदीय माण्डूक्यो - पनिषदमा उल्लेख भएको हाम्रो चेतनाले कसरी काम गर्छ भन्ने कुराको संक्षिप्त व्याख्या एक पटक हेरौँ।

**ओमित्येतदक्षरमिदं सर्वं तस्योपव्याख्यानं भूतं भवद्भविष्यदिति सर्वमोङ्कार एव।**

**यच्चान्यत्त्रिकालातीतं तदप्योङ्कार एव ॥**

**॥ माण्डूक्योपनिषद १ ॥**







व्यक्त अव्यक्त अविनाशी ब्रह्माण्डलाई समग्रमा ॐ शब्दले व्यक्त गर्दछ। भूत, वर्तमान र भविष्यमा जे थियो, जे छ, जे हुनेछ तथा भूत, वर्तमान र भविष्यमा विभक्त भएको समयको सीमाभन्दा बाहिर रहेको सम्पूर्ण अस्तित्व समेतको समग्रतालाई सङ्केत गर्ने शब्द ॐ हो।

[नोट: यी पङ्क्तिहरूले आदिम ध्वनिको रूपमा ॐ रहेको अवधारणा दिएको छ। ॐ ध्वनि वास्तवमै अस्तित्वमा समेत रहेको छ। ॐ ध्वनिले समग्रताको प्रतिबिम्बित गर्ने अवधारणा यहाँ प्रस्तुत छ। ॐ ध्वनिले ब्रह्माण्डमा अन्तर्निहित एकल वास्तविकतालाई सङ्केत गर्ने कुरा समेत प्रस्ट गरिएको छ। जसलाई सिमुलेशनको आधारभूत कोड सँग तुलना गर्न सकिन्। सिमुलेशनको











आधारभूत कोडहरू प्रयोग गरी विज्ञानमा सीमित डिजिटल सिमुलेशन सम्भव बनिरहेको हालको परिप्रेक्ष्यमा ॐ ध्वनिले सङ्केत गरेको आधारभूत कोडहरू विकास गर्न सक्दा हाल विज्ञानले गर्न सकेको सीमित डिजिटल सिमुलेशनलाइ प्रकृतिको वास्तविक यथार्थ नजिकको हदको सम्पूर्ण अनुभवहरू उत्पन्न गर्न सक्ने डिजिटल सिमुलेशन सम्भव रहने हाइपोथेसिस माण्डूक्योपनिषद-१ मा रहेको देखिन्छ।]

**सर्वं ह्येतद्ब्रह्मायमात्मा ब्रह्म सोऽयमात्मा चतुष्पात् ॥**

**॥ माण्डूक्योपनिषद २ ॥**

सम्पूर्ण ब्रह्माण्ड एक अनन्त-ब्रह्म हो। आत्मा ब्रह्म हो। आत्मा चतुष्पति (चार पक्षको) छ। यसको भावार्थ हुन्छ: ब्रह्माण्ड शाश्वत ब्रह्म हो। स्वयम्









सनातन हो। आत्मा ब्रह्म सर्वत्र रहने ब्रह्म सत्य र पूर्ण वास्तविकता हो। आत्मा स्वयम् पनि ब्रह्म हो। परम यथार्थ हो। आत्मा र आत्मा ब्रह्म सबैको चार पक्षहरू छन् । जस द्वारा आत्मा र आत्मा ब्रह्म सञ्चालित हुन्छन्।

[नोट: माण्डूक्योपनिषदको दोस्रो मन्त्रले आत्मालाई चतुष्पति वा चार चौथाइ पदको रूपमा वर्णन गर्दछ। पहिलो तीन चौथाइलाई जागृत, स्वप्न र सुषुप्ति (गहिरो निद्रामा पुगेको र सपना समेत नदेखेको) तीन अवस्थाहरूको रूपमा परिचित गराउने गर्दछ। जसलाई क्रमशः विश्व, तैजस र प्रज्ञा अवस्था भनिएको छ। विश्व, तैजस र प्रज्ञा तीन अवस्थालाई पार गर्ने (Transcends) चौथो अवस्थालाई तुरिया अवस्था भनिएको छ। तुरियाको









अर्थ चतुर्थ अर्थात् चौथो भन्ने लाग्दछ।

तुरिया अवस्था आत्मा वा चेतनाको वास्तविक प्रकृति हो। आत्मा वा चेतनाको वास्तविक प्रकृति तुरिया अवस्था जागृत, सपना र सुषुप्तिको अवस्थाहरूमा संलग्न हुने विविध प्रकृतिका लगावहरूले (Attachments - एट्याचमेन्टहरू) पैदा गर्ने सीमितता हरूको कारण दर्द युक्त (सफर गर्नु पर्ने- Suffering) अवस्थामा पुग्दछ। जीवन दर्द युक्त (सफरिङ्गका विषय वस्तुहरू थोपरिदिने) पारिदिने एट्याचमेन्टको पक्षहरू वाट आत्मालाई मुक्त गर्न सक्दा मात्र परम आनन्द वा आत्माको तुरिया अवस्था प्राप्त गरी जीवनमा मुक्ति प्राप्त गर्न सकिन्छ।]

**जागरितस्थानो बहिःप्रज्ञः सप्ताङ्ग एकोनविंशतिमुखः**






## स्थूलभुग्वैश्वानरः प्रथमः पादः ॥

## ॥ माण्डूक्योपनिषद ३ ॥

पहिलो पक्ष वैश्वानर अर्थात् संसार-पुरुष भनिने जाग्रत् अवस्था हो। जुन बाह्य जगतको बारे जानकारी राख्दछ। त्यसको लागि ऊसँग सात अङ्गहरू र उन्नाइस उपायहरू (ढोका) छन्। त्यसले स्थूल वस्तुको (भौतिक संसार) भोग गर्दछ। भौतिक संसारको भोगको अनुभूति र आनन्द लिन्छ।

[व्याख्या: जब आत्माले जागृत अवस्थाको अनुभव गर्छ र स्थूल अर्थात् देखिने बाह्य वस्तुहरूमा आफूलाई जोड्छ तव त्यसलाई वैश्वानर भनिन्छ। वैश्वानर शब्द अर्थ “त्यो प्राणी हो जसले जागृत











संसारको अनुभव गर्छ र सबैले अनुभव गरेको समानतामा भाग लिन्छ” भन्ने लाग्दछ। वैश्वानर शब्द मानव अवतारमा मात्र सीमित नभई संसारलाई कुनै पनि अर्थमा देख्ने सबै मूर्त प्राणीहरूका लागि प्रयोग गरिन्छ। वैश्वानरले व्यक्तिलाई सम्पूर्ण विश्व वा जागृत अवस्थाको ब्रह्माण्डको अनुभव गराउन नेतृत्व दिन्छ। किनभने यो अवस्थामा आत्माले आफैँलाई गलत पहिचान गरी जागृत वस्तुहरूसँग गहिरो लगाव (Attachment - एट्याचमेन्ट) गाँस्न पुग्दछ। त्यस्तो परिस्थितिले आत्मालाई पूर्ण रूपमा बाह्यता तर्फ वा सांसारिक वस्तुहरूमा उन्मुख पारिदिन्छ। भौतिक जीवन, विज्ञानमा र अविद्यामा रमाउने गर्दछ। आत्माले आफूलाई थाहा पाउने अवसर











गुमाउँछ। भौतिक जीवन, विज्ञानमा र अविद्याको क्षेत्र वाट अघि बढेर आत्मा ज्ञान र विद्याको क्षेत्रमा आफूलाई पुऱ्याउन मेसो पाउँदैन। यसलाई उपनिषदिक मन्त्र ३ ले बहिष्प्रज्ञाको रूपमा वर्णन गरेको छ। जसको अर्थ यो बाह्य वस्तुहरूसँग बाँधिएको छ। आत्माको संसारसँगको यो सम्पूर्ण लगाव युक्त सम्बन्धले बन्धन निम्त्याउने गर्दछ। देखेको र अनुभव र अनुभूति गरेको चीजहरू लाई आत्माले गलत रूपमा बुझेर तिनै संग बलिष्ठ रूपमा बाँधिएको देखिन्छ। यद्यपि आत्माले ती बस्तुहरूलाई गरेको पहिचान वास्तविक नरहेर अल्पकालीन तर अनिवार्य भ्रम वा मायावी खेल हुने गर्दछ। स्वयं वारेको ज्ञानको अभाव वा आत्म अज्ञानताको कारणले वैश्वानर अवस्थामा आत्मा













आफैँलाई बाह्य वस्तुहरूसँग पहिचान, गर्ने, तिनै संग भुतुक्कै हुने गरी आफ्नो लगाव (Obsession) विकास गरी आफ्नो जीवनकाल व्यतीत गर्न पुग्दछ।]

[वैश्वानरका स्थूल वस्तु अनुभूति गर्ने उन्नाइस वटा उपायहरू (मार्गहरू) रहेको भनिन्छ। त्यसमा पर्ने पाँच ज्ञानेन्द्रियहरूमा (बुद्धि इन्द्रियहरू) नाक, कान, जिब्रो, आँखा, छाला; पाँच कर्मेन्द्रियमा मुख (वाणी), हात (ग्रहण), गोडा (गति), गुदद्वार (उत्सर्जन) र उपस्थ (गुह्यद्वारा - उत्पत्ति) पर्दछ। त्यस्तै पाँच श्वास अन्तर्गत बाहिर फालिएको श्वास (प्राण), भित्र लिइने आगमन श्वास (अपान), वितरणात्मक श्वास (व्यान), तरल पदार्थमा घुलिएर फैलिने श्वास (उदान) र डकार आदि जस्ता स्वतन्त्र









शरीर वाट बाहिरिने वायु (समान) पर्दछ। अन्तःकरणमा समावेश हुने मन (Mind), बुद्धि (Brain i.e., Intellect), अहङ्कार (Ego) र चित्त (स्मरण, स्मृति वा Memmory) समेत स्थूल शरीरको भाग अन्तर्गत पर्दछ। पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, पाँच श्वास अर्थात् प्राण तथा चार अन्त करण गरी उन्नाइस तरिकालाई स्थूल शरीरको स्थूल संसारको भोग गर्ने उपाय वा उन्नाइस द्वारहरू भनिन्छ।

त्यसको लागि शरीरले मूलतः सात विशिष्ट अङ्गहरू (सप्ताङ्ग) नाक, कान, जिब्रो, आँखा, छाला (यौन अङ्ग), मस्तिष्क (मन,बुद्धि, अहङ्कार र चित्त) तथा तिनीहरूको व्यवस्थापन संयोजन गर्ने अभौतिक अवलोकन कर्ता आत्मा गरी सात अङ्गहरू मानिन्छ।









मात्र अवलोकन कर्ताको रूपमा रहने आत्मा द्वारा संयोजन नहुँदा जीव जीवित नरहने हुँदा पहिलो तह वैश्वानरको स्थूल वा भौतिक संसारको भोग गर्न उपयोग हुने अङ्गहरूमा अप्रत्यक्ष अङ्गको रूपमा आत्माको पनि समावेश जरुरी भएको हो।

वैश्वानरलाई आत्मा ब्रह्मको चार पक्षहरू मध्येको पहिलो एक चौथाइ तह किन मानिएको हो भने विराट स्थूल शरीरको समग्रताबाट यो पक्ष भिन्न छैन। पहिले वैश्वानरको प्राप्ति पछि मात्र अन्य तिन तहको प्राप्ति सम्भव रहने हुँदा वैश्वानर लाई प्रथम चतुर्थांश (प्रथम पद) भनिन्छ।

विज्ञानको दृष्टिमा सात इन्द्रियमा नाक (Smell), कान (Hearing), जिब्रो (Taste), आँखा (Sight) र छाला (Touch) को पाँच चेतना,










भेस्टीभुलरको (Vestibular) बाह्य चेतन (गुरुत्वाकर्षण, चाल र सन्तुलनको अनुभूति) र प्रोप्रियोसेप्शनको (Proprioception) बाह्य चेतन (शरीरको भागहरूको सापेक्ष स्थितिको र तिनीहरू लाई चलाउन पर्दा प्रयोग गरिने उचित दबाब वा शक्तिको अनुमान) लाई मानिन्छ। जुन औषधि विज्ञान गहिरिएर पूर्ण यथार्थको ज्ञान लिन नसक्दाको अवस्थाको आंशिक सत्यता हो।]

[ब्रह्माण्डको हकमा सात अङ्गको अवधारणा छान्दोग्योपनिषद् ५.१८.२ मा भेटिन्छ। ब्रह्माण्डको शिर उसको स्वर्ग हो। सूर्य उसको आँखा हो। वायु उसको सास हो। आगो उसको हृदय हो। पानी उसको पेट हो। पृथ्वी उसको खुट्टा हो। आकाश (अन्तरिक्ष) उसको शरीर हो। वैदिक सामाजिक













कार्यहरूमा अग्निहोत्र यज्ञको तीन अग्नि मध्येको एक आहवानी अग्नि अर्थात् बलिदानको रूपमा अर्पण गरिने यज्ञको अग्निलाई ब्रह्माण्डको मुखको रूपमा लिने गरिन्छ।]

स्वप्रस्थानोऽन्तःप्रज्ञः सप्ताङ्ग एकोनविंशतिमुखः
प्रविविक्तभुक्तैजसो द्वितीयः पादः ॥

॥ माण्डूक्योपनिषद ४ ॥

दोस्रो पक्ष सपनाको अवस्था हो। स्वप्नले भित्री जगत र अन्तर्मनको ज्ञानीको सम्बन्धको सूचना वा जानकारी दिन्छ। सूक्ष्म वस्तुको अनुभूति मार्फत सपनाले आनन्दको अनुभूति गराउने गर्दछ। स्वप्नको अनुभूति गर्ने सात अङ्गहरू छन् । जसले उन्नाइस उपायहरू (द्वार वा पथहरू) वाट सूक्ष्म जगत बारेको





जानकारी राख्दछ। सपना मानिसको उज्ज्वल अर्थात् तेजोमय मनमा निवास गर्दछ।

[व्याख्या: माण्डूक्य उपनिषदको मन्त्र ४ ले तैजसको बारेमा विस्तृत अवधारणा दिन्छ। तैजसको अर्थ स्वयंको सपनाको संसार भन्ने रूपमा यहाँ लिइएको छ। चार भागमा विभक्त आत्माको दोस्रो भाग मानिने स्वप्नमा जागृत अवस्थामा सङ्कलन भएका भौतिक संसारका छापहरू वास्तविकता मै मूर्त भएको अनुभव सपनामा हुने गर्दछ। सपनाले कुनै अभौतिक छाप वा कल्पना आदि लाई वास्तविक वस्तुहरूको भौतिक रूपमै आत्मालाई अनुभूति गर्ने अवसर उपलब्ध गराउने गर्दछ। अभौतिक छाप वा कल्पना आदि लाई सपनामा भौतिक वस्तुको रूपमा अनुभव गर्ने आत्मालाई तैजस भनिन्छ।





जागृत अवस्था जागृत अवस्थाको अवलोकन कर्ता अर्थात् ज्ञानी र जागृत संसार बिच विभिन्न अन्तरक्रिया हुन्छ। हाम्रो दिमागले वरपरको संसारसँग अन्तरक्रिया गर्छ। हामीलाई ती चीजहरू, व्यक्तिहरू र विचारहरूसँग जोडिदिन्छ। हाम्रो मस्तिष्कले वास्तविकता मै संसारसँग भइरहेको अन्तरक्रिया अनुरूप काम गरी त्यसको अनुभूति कसरी लिने र दिने, ती चीजहरू कसरी गर्न सकिन्छ र उपकरणहरू कसरी प्रयोग गर्न सक्छौँ भन्ने बारे सोच्दछ।

त्यसको प्रभाव आदिको हामीमा अभौतिक छाप वा कल्पना विकास गरिदिने गर्दछ। जब हामी सपना देख्छौँ, त्यहाँ विशेष तरिकाको केही त्यस्तै समान



अनुभूति हामीलाई हुन्छ। हाम्रा सपनाहरूले एउटा संसार सिर्जना गर्दछ, जुन हामीलाई वास्तविक लाग्दछ। यद्यपि ती वास्तविक होइनन्। तर स्वप्न अवस्थामा हाम्रो मस्तिष्कले संसारको एक अद्वितीय संस्करण बनाउँछ जुन हामीले हामी जागृत अवस्थामा रहेको जस्तै त्यसलाई देख्न र छुन र यथार्थ मै प्राप्ति गरेको अनुभूति लिन सक्छौं।सपनाको अवस्थामा केही अनौठो तरिकामा पुनः उत्पादन गरिएका बाहिरी मूर्त देखिने संसारको सिर्जना हुन्छ।

जब हाम्रो दिमाग चल्दछ (स्पन्दन) तिनीहरूले हामीलाई चीजहरू देखाउँछन्। यी चीजहरू भौतिक रूपमै त्यहाँ छन् जस्तो देखिन्छ, तर तिनीहरू वास्तवमा केवल दिमागका गतिविधिहरू मात्र हुने










गर्दछ। तर पनि भौतिक रूपमै आफूले तिनीहरूको अनुभूति लिएको छापहरू हाम्रा दिमागमा रहिदिन्छन्।

हाम्रो दिमागले सपनामा अज्ञानता बस आफ्नो अविद्या (भौतिक ज्ञान), त्यसको प्राप्तिको चाहना वा इच्छा (काम तथा लगाव) र कर्म (सिमुलेसन कार्य) मार्फत हामीलाई वास्तविक रूपमै आफूले प्राप्ति गरेको लाग्ने चीजहरूको सिर्जना गर्दछ। यहाँ कार्यले हामी ब्युँझँदा देखिने वा स्मरणमा रहने छापहरू बनाउनेलाई जनाउने गर्दछ। हामी सपनाको अवस्थामा रहेको दिमागको अज्ञानताले हाम्रो आफ्नै इच्छा लाई प्रबल गर्दछ। उक्त इच्छा प्राप्तिको चाहनाले इच्छाएको कार्य पुरा गर्न तर्फ हामीलाई डोऱ्याउँछ, र उक्त कर्मले हामीमा उक्त











कार्य प्राप्ति भएको छाप छोड्न भूमिका खेल्दछ।

हामी ब्युँझिएकै अवस्थाको प्रभावहरूका कारण हाम्रा दिमागहरूले सपना देख्छन् मानौँ तिनीहरू जागा अवस्थामा नै छन्। एउटा क्यानभासमा काम गर्ने कलाकारले जस्तै जागृत संसारको सानो टुक्रा सपनाहरूमा देखिन्छ। यथार्थमा हाम्रो दिमागले जागृत अवस्थाको प्रभावलाई सपनाहरूमा पुनः प्ले गर्दछ, जसले गर्दा हामी सपना देख्दा पनि हामी जागा छौँ जस्तो महसुस गराउँछ। फलतः सपनीमा हामी सिमुलेटेड जागृत अवस्थाको अनुभूति लिइरहेका हुन्छौ।

जागृत अवस्थामा हामी संग मन थियो। सपनाको अवस्थामा जागृत अवस्थामा मनले बनाएको अनुभवको स्मरण (चित्त) निर्मित छापबाट उत्पन्न













चित्त वृत्तिले सपनीमा सिमुलेटेड बिपनी स्थापित गर्ने अवधारणा माण्डूक्य उपनिषदको मन्त्र ४ मा उद्धृत छ।]

**यत्र सुप्तो न कञ्चन कामं कामयते न कञ्चन स्वप्नं पश्यति तत्सुषुप्तम् ।**

**सुषुप्तस्थान एकीभूतः प्रज्ञानघन एवान्दमयो ह्यानन्दभुक्चेतोमुखः प्राज्ञः तृतीयः पादः ॥**

**॥ माण्डूक्योपनिषद ५ ॥**

गहिरो निद्राको सुषुप्तिको अवस्थामा सुत्नेले न कुनै सुखद कुराको चाहना राख्दछ न कुनै दुखको नै अनुभूति गरिरहेको हुन्छ। आत्माको जम्मा चार तहको तेस्रो अंश (पद) प्रज्ञा हो। सुषुप्त अवस्थामा अवलोकन कर्ता भेद भाव विहीन द्रष्टाको रूपमा











एकीभूत: (पूर्ण रूपमा एकमात्र अस्तित्वमा) रहन्छ ।

[व्याख्या: न कुनै कामना, न कुनै इच्छाको लालसा, न कुनै सपना देखेको अबस्थामा सुतेको अबस्था पूर्ण निद्राको अवस्था हो। पूर्ण निन्द्राको अवस्थालाई सुषुप्तिको अबस्था भनिन्छ। सुषुप्तिको अबस्थामा प्रज्ञाघन अर्थात् ज्ञान समेत संकुचित भएर अविच्छिन्न चेतना संग एकीकृत हुन पुग्दछ। जसले गर्दा त्यहा मात्र निर्मम शान्ति र केवल परम आनन्द (Just Bliss) मात्र बाँकी रहन्छ।

प्रज्ञा चेतना सङ्कुचित भएर बनेको अत्यन्त गाडा घनत्वको उक्त प्रज्ञानघन: (Prajñānaghanaḥ) सुषुप्त अवस्थामा आनन्दको अनुभूति गर्दै (ānandabhuk) आनन्दमय (Blissful - ānandamayaḥ) अवस्थामा पुग्दछ। सपना र









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



जागृत अवस्थाको अनुभव गर्ने द्वार (cetomukhaḥ) सुषुप्ति हुने गर्दछ। ]

[माण्डूक्य उपनिषद्ले सुषुप्तिको अवस्थालाई जाग्रत् र स्वप्नको दुवै अवस्थाहरू भन्दा फरक मान्दछ। किन भने सुषुप्तिको अवस्थामा न त सपना अवस्थाको सपनाका संसार र वस्तुहरूको अनुभूति हुन्छ न त जाग्रत् अवस्थामा हुने जस्तै सांसारिक भोगको अनुभूति हुने गर्दछ। जाग्रत् समयमा बाहिरी स्थूल वस्तुहरूको भोगको अनुभूति हुन्छ। सपनाको समयमा स्मरणले पैदा गर्ने कल्पनाको संसारको उत्पादनको भित्री सूक्ष्मताको अनुभवका अनुभूतिहरू प्राप्त हुन्छ।

न त बाहिरी संसारको भोग, न त भित्री संसारको अनुभूति गर्दै गरेको सुषुप्त अवस्था एउटा यस्तो







विशेष अवस्था हुने गर्दछ जसमा विभेद रहित एकीकृत चेतनाको मात्र उपस्थिति रहन्छ। स्वप्नको अवस्था वाट गुज्रिएको समय र सुषुप्तिको अवस्था वाट गुज्रिएको समय जाग्रत् अवस्थामा आउँदा समेत अनुभूतिको रूपमा बस्दछ। सपना देखेको र भुसुक्कै निदाएको दुवै अनुभूतिहरू हाम्रो सूचनामा रहने गर्दछ। यो परिघटनाहरूले सुषुप्तिको अवस्थामा भुसुक्कै निदाएको सूचना राख्ने तथा सपना देखेको समेत सूचना राख्ने कुनै अवलोकनकर्ता अस्तित्वमा रहेको पुष्टि गर्दछ।

सुषुप्ति अवस्थाको चेतनालाई प्रज्ञा भनिएकोले प्रज्ञालाई विभेद रहित रूपमा आनन्द संग रहने अवलोकन कर्ता मानिन्छ। त्यसको प्रकृति शान्त र मौन हुन्छ। त्यसैले अवलोकन कर्ताले समेत











आनन्दमय अवस्थामा गुज्रिएको अनुभूतिको सूचना राख्दछ।

जागृत अवस्थाको तुलनामा गहिरो निद्राको सुषुप्त अवस्था अत्यन्त छोटो र अस्थायी हुने व्यवहारिक छाप व्यक्तिमा परेको हुन्छ। त्यो जीवित अवस्थाको अनुभवमा आधारित अनुभूति हो। वैदिक अवधारणा अनुसार आत्मा परम सत्य रूपको हुने र त्यसको वास्तविक स्वरूप आनन्दमय सुषुप्त अवस्थाको रहने हुँदा सुषुप्त अवस्थाको आत्माको लगाव जब बाहिरी संसारका स्थूल बस्तुहरूको भोगमा लिप्त हुन्छ तव त्यहाँ जागृत अवस्था उत्पन्न हुन्छ। जब आत्मा आन्तरिक कल्पनाको संसारको उत्पादन रुपी भित्री दुनियाँको सूक्ष्मताको अनुभूति गर्न अल्पकालीन रूपमा पुग्दछ तव त्यहाँ स्वपन







अवस्था उत्पन्न हुन्छ ।]

**एषः सर्वेश्वर एष सर्वज्ञ एषोऽन्तर्याम्येष योनिः सर्वस्य प्रभवाप्ययौ हि भूतानाम् ॥**

**॥ माण्डूक्योपनिषद ६ ॥**

प्रज्ञा नै सर्वज्ञानी सबैको अवलोकन कर्ता हो। सबै जीवको जीवितताको कारण र अन्तिम सत्य पनिहो। सर्वत्र सबै भित्र वास गर्ने सम्पूर्ण जगतको पालन कर्ता अर्थात् मालिक हो।

**नान्तःप्रज्ञं न बहिःप्रज्ञं नोभयतःप्रज्ञं न प्रज्ञानघनं न प्रज्ञं नाप्रज्ञम् ।**

**अदृष्टमव्यवहार्यमग्राह्यमलक्षणमचिन्त्यमव्यपदेश्यमे**











**कात्मप्रत्ययसारं प्रपञ्चोपशमं शान्तं शिवमद्वैतं चतुर्थं मन्यन्ते ।**

**स आत्मा स विज्ञेयः ॥**

**॥ माण्डूक्योपनिषद ७ ॥**

चेतनाको वास्तविक अवस्था बाह्य अनुभव (External World) वा आन्तरिक विचार र भावनाहरू (बाह्य संसार वा भित्री छापहरू Inward Impressions) दुबैमा निर्भर हुँदैन। चेतना हामीले दैनिक जीवनमा अनुभव गर्ने सामान्य चेतनशीलता (शुद्ध चेतना Pure Consciousness) होइन। न त यो हामीले गर्ने पूर्ण बेहोशी को अनुभवको (अचेतनको Unconsciousness) अवस्था नै हो। हामीले









अनुभूति समेत गर्न नसकिने (Imperceptible), हाम्रा कुनै कुरा संग समेत सम्बन्धित नरहेको (Unrelated), कुनै तरिका वाट समेत प्राप्त गर्न नसकिने (Unachievable Through Any Action) चेतना; सामान्य कारण र प्रभावका सम्बन्ध भन्दा पनि बाहिर (beyond the usual cause-and-effect relationships ) छ। यसलाई कुनै चिन्ह वा विशेषताहरू वाट (Devoid of Any Insignia) समेत परिभाषित गर्न सकिंदैन। हाम्रो भाषाको दायरा र विचारको दायराको उपयोग गरेर (Beyond Contemplation, Indescribable) यसलाई बुझ्न वा वर्णन गर्न समेत (Transcends the limits of









conceptualization ) सकिंदैन।

हामीले बुझ्नको लागि प्रयोग गर्ने सापेक्ष तुलनाहरूको कुनै परिभाषामा समेत (Beyond All Relative Definitions) यसको व्याख्या हुन सक्दैन। चौथो चरण वा खण्डको विशुद्ध अद्वैत चैतन्य स्वरूपको आत्म-चेतन (Purely self-conscious) अर्थात् आत्मा (Atman) आनन्दमय र शान्त अवस्थामा (Blissful Stillness) अवस्थित हुन्छ। आनन्दमय शान्त अवस्थामा अवस्थित आत्म-प्राप्ति (Achieving a deep and profound level of self-awareness, beyond the usual bounds of conscious and unconscious experiences) नै हाम्रो








जीवनको अन्तिम (Ultimate goal of self-realization) लक्ष्य हुने गर्दछ।

सरल शब्दहरूमा उल्लेख गर्दा आत्म-जागरूकताको गहिरो र अद्भुत स्तर (Achieving a deep and profound level of self-awareness) सचेत र अचेतन दुवै अनुभवको सीमाभन्दा बाहिरको (Beyond the usual bounds of conscious and unconscious experiences) सन्तुष्टि र तृप्तिको स्थिति (Leads to a state of contentment and fulfillment) उन्मुख हुन्छ।

**सोऽयमात्माध्यक्षरमोंकारः।**









**अधिमात्रं पादा मात्रा मात्राश्च पादा अकार उकारो मकार इति ॥**

**॥ माण्डूक्योपनिषद ८ ॥**

मौखिक रूपमा व्यक्त गरिने अ, उ र म तीन वटा ध्वनिहरू मिलेर बनेको शब्द ॐ (ओम्) कार अर्थात् ओमकार (Om-maker) ध्वनी लाई आत्माको प्रतीकको रूपमा लिने गरिन्छ।

**जागरितस्थानो वैश्वानरः अकारः प्रथमा मात्राप्तेरादिमत्त्वाद्वा ।**

**आप्नोति ह वै सर्वान् कामानादिश्च भवति य एवं वेद ॥ माण्डूक्योपनिषद ९ ॥**

मानिसको आत्म वा आत्म-अस्तित्वको सार (The Self or self-existent essence of








human beings) लाई वैश्वानर (Vaishvanar) भनिन्छ। वैश्वानर एक विश्वव्यापी प्राकृतिक ऊर्जा (Universal Aspect or Universal Energy) प्रतिनिधित्व गर्ने शब्द हो। आध्यात्मिक परम्पराहरूमा ॐ लाई एक पवित्र ध्वनिको रूपमा लिने गरिन्छ। ॐ को पहिलो ध्वनी 'अ' ले वैश्वानरको प्रतिनिधित्व गर्दछ। जुन विश्वव्यापी रूपमा (Universal or Divine) कम्पनको रूपमा (Vibrational Mode) सदा सर्वदा सर्वत्र (Omnipresent) रहन्छ।

पूर्णरूपमा जागा र सचेत (Fully Awake and Aware) रहँदाको (जाग्रत् अवस्थामा - State of Wakefulness) हरेक व्यक्ति विश्वव्यापी प्राकृतिक वा ईश्वरीय शक्ति सँग जोडिन









खोजिरहेको हुन्छ। जाग्रत् अवस्थामा विश्वव्यापी कम्पन संग (Universal Being) नियमित जोडिएर आफ्नो जीवन यापन सम्पन्न गर्न सफल बन्ने (प्राकृतिक नियम मैत्री जीवनयापन रोज्ने) व्यक्तिहरू आफ्ना जीवनका लक्ष्यहरू प्राप्त गर्दै आध्यात्मिक क्षेत्रमा महत्त्वपूर्ण स्थान प्राप्त गर्न सफल बन्ने (Fulfill their desires and attain a high or significant position in their spiritual journey or life) गर्दछन्।

**स्वप्नस्थानस्तैजस उकारो द्वितीया**
**मात्रोत्कर्षादुभयत्वाद्वा ।**
**उत्कर्षति ह वै ज्ञानसंततिम् ।**




**समानश्च भवति ।**

**नास्याब्रह्मवित्कुले भवति य एवं वेद ॥**

**॥ माण्डूक्योपनिषद १० ॥**

आफूलाई ईश्वरीय वा आध्यात्मिक उपस्थितिसँग जडान गर्न खोजिरहेका व्यक्तिहरू आफ्नो उज्ज्वल भविष्य उन्मुख हुने गर्दछन्। ॐ को मध्य ध्वनी 'उ' ले उज्ज्वल (Radiant) वा भित्री ऊर्जा (Inner Energy) को प्रतिनिधित्व गर्दछ। भित्री उज्ज्वल ऊर्जा (Inner Radiant Energy) अधिक शक्तिशाली र उत्कृष्ट तेजस (Taijasa) शक्ति हो।

भित्री उज्ज्वल ऊर्जाको खोजी गर्नेहरू परम आध्यात्मिक वास्तविकता (Ultimate





Spiritual Reality) बाट अनभिज्ञ वा विच्छेदन (Ignorant of or disconnected) रहने स्थिति हुँदैन। उत्कृष्ट भित्री ऊर्जाको सँगको नियमित सक्रियताको कारण व्यक्तिले जीवनलाई सन्तुलित र संयोजित तरीकामा सञ्चालन गर्ने (Attain Equanimity of Conduct) कुशल बुद्धि (Achieve Increased inflow of Wisdom or Knowledge) तथा ज्ञान प्राप्त गर्दछ।

बुद्धि प्राप्त गर्न, सन्तुलित जीवन बिताउन र आफ्नो परिवारमा आध्यात्मिक समझको स्थापनाको सुनिश्चितता गर्न व्यक्तिलाई भित्री उज्ज्वल ऊर्जा (Inner radiant energy) अर्थात् तेजसको (Taijasa) जरुरत पर्दछ। जुन आत्मा ज्ञानवाट



प्राप्त हुन्छ।

**सुषुप्तस्थानः प्राज्ञो मकारः तृतीया मात्रा मितेरपीतेर्वा।**

**मिनोति ह वा इदं सर्वमपीतिश्च भवति य एवं वेद ॥**

**॥ माण्डूक्योपनिषद ११ ॥**

ॐ को अन्तिम ध्वनि 'म' ले प्रज्ञालाई जनाउने गर्दछ। आफूलाई चेतनाको शुद्ध अवस्था (Undiluted Pure Consciousness) सँग निरन्तर रूपमा जोड्न चाहने गुण र चरित्रलाई प्रज्ञा (Prajna) भनिन्छ। प्रज्ञा अवस्थाले आध्यात्मिक ज्ञान प्राप्तिको उच्चतम स्तर (Highest level of Spiritual Attainment) को प्रतिनिधित्व






गर्दछ। प्रज्ञा अवस्थाले अविच्छिन्न चेतना (प्रज्ञा) को खोजी (Seeks Uninterrupted Undiluted Pure Consciousness) गर्दछ। अविच्छिन्न चेतनाको खोजी पूर्ण ज्ञान प्राप्त (Gain complete Wisdom) भएर मात्र रोकिन सक्छ। जसले व्यक्तिको समझलाई सर्वव्यापी (All - encompassing) वा समावेशी (All Inclusive) बनाउने गर्दछ।

**अमात्रश्चतुर्थोऽव्यवहार्यः प्रपञ्चोपशमः शिवोऽद्वैतः।**

**एवमोंकार आत्मैव ।**

**संविशत्यात्मनात्मानं य एवं वेद ॥**

**॥ माण्डूक्योपनिषद १२ ॥**

चेतनाको गहन अवस्था लाई "चौथो राज्य" भनेर

चिनिन्छ। चौथो राज्य ध्वनि भन्दा निकै परको (Not limited to sound) एकात्मक क्षेत्र हो। एउटा अद्वैत राज्य जहाँ हाम्रो आफ्नै व्यवहारहरू सामान्य व्यवहारहरू भन्दा परको (Beyond the grasp of conduct) फरक चरित्रमा परिवर्तन (Transcends normal behavior) भइरहेको हुन्छ।

संसारका अभूतपूर्व मापदण्डहरू रहितको (Devoid of all phenomenal parameters) अवस्था जति वेला "ॐ" ध्वनि आनन्दमा विलय (Union of Bliss and ॐ) बनिरहेको हुन्छ। जहाँ आफ्नो अस्तित्व (Ego) समेत परम अस्तित्वमा (Ultimate Being) विलय (Merged) हुन्छ।





त्यसको अनुभूतिमा हामीले हाम्रो आफ्नो अस्तित्व समेत बिर्सेर परम आनन्दको अनुभूति गरिरहेको हुन्छौं। जसले यो परम अनन्दको अवधारणालाई गहन रूपमा अनुभूति (Truly Comprehends It) गरिरहेका हुन्छन् (Who Knows) तिनीहरूले नै त्यस्तो परम आनन्दको अनुभूति वास्तवमै गरिरहेका हुन्छन्।

अथर्व वेदीय माण्डूक्योपनिषदमा उल्लेख भएको हाम्रो चेतनाले कसरी काम गर्छ भन्ने संक्षिप्त व्याख्यामा मानिस आफ्नो भौतिक जगत रुपी सिमुलेटेड जगत वाट तथा सिमुलेटेड स्वप्नको अवस्था वाट सांसारिक यथार्थ वा अन्तिम सत्यको कसरी पहिचान गरी अनुभूति गर्न सक्दछ भन्ने विधि उल्लेख छ।





वेदमा रहेको उक्त सिमुलेशन हाइपोथेसिस विधिलाई रिभर्स इञ्जिनियरिङ्ग गर्न सक्दा आधुनिक विज्ञानका अन्वेषक र वैज्ञानिकहरूलाई वास्तविक यथार्थता लाई फरक यथार्थ मानिरहेको हालको विज्ञानको समस्या समाधान तर्फ जान र वास्तविक विश्व प्रक्रियाहरू वा प्रणालीहरूको सञ्चालनको विधिको नक्कल गरी निर्माण गर्न खोजिएको कृत्रिम भौतिक वा डिजिटल निर्माण रुपी उन्नत डिजिटल सिमुलेशन लाई वास्तविक यथार्थको सिमुलेशनको हदमा पुऱ्याउन सम्भव हुने बलियो आधार दिन्छ।

**मायां तु प्रकृतिं विद्यान्मायिनं च महेश्वरम्।**

**तस्यावयवभूतैस्तु व्याप्तं सर्वमिदं जगत्॥**

**श्वेताश्वतरोपनिषद ४.१०॥**









श्वेताश्वतरोपनिषदको यो मन्त्र भन्दछ तपाईँ यो जान्नुहोस् कि माया प्रकृति हो। महान् भगवान् मायन (मन्त्रिक) हुन्। तिनीहरू वाट निर्मित संसार र समग्र संसार सृष्टिकर्ता (उनका) अङ्गहरू र सम्पूर्ण शरीर हो। यसको भावार्थ हुन्छ माया (सिमुलेशन) प्रकृतिको उपज हो। ब्रह्माण्डमा सबै प्रकारका प्राकृतिक शक्तिहरू (शक्तिशाली ३३-कोटी भगवानहरू) मन्त्रिक (व्यवस्थित र व्यापक रूपमा लागू भएको सिद्धान्त, प्रणाली, विधि, प्रविधि र अभ्यास रुपी मन्त्र मार्ग) जादुगरको भूमिकामा रहेका छन्। तिनीहरूले सृजना गरेको सम्पूर्ण मायावी अवयवहरूको समग्र संसार (सिमुलेशन भएको दुनियाँ) वाट मायावी ब्रह्माण्ड रुपी विराट शरीर (समयको सीमितताको बन्धनमा रहेको








सिमुलेटेड अस्थायी शरीर) देखा परेको हो।

समग्रमा वेदले हामीलाई हाम्रो र संसारको अस्तित्व वारेको अत्यन्त फराकिलो दृष्टिकोण वारेको प्रस्ट अवधारणा प्रस्तुत गरेको छ। वेदमा प्रस्तुत भएका अवधारणाहरू लाई आफ्नो क्षमता र व्यावहारिकताको दायरामा परीक्षण गरी अनुभूति गरेर र विश्वस्त रहेर मात्र अँगाल्न सबै वैज्ञानिक, दार्शनिक र बौद्धिक समुदायलाई वेदले प्रोत्साहन गर्दछ। वेदका ऋचा तथा कथाहरूमा उल्लेख गरिएको प्रकृति, चेतना र सांसारिक वास्तविकताहरू हाम्रो इन्द्रिय मार्फत हामीले बारम्बार गर्ने अनुभूतिका तथ्यमा आधारित भएर पुष्टि भएर आएका विषय रहेको कुरा सबैमा अवगत रहेकै हो।









आधुनिक विज्ञानले समेत प्रकृति, चेतना र सांसारिक वास्तविकता सम्बन्धका दैनिक जस्तो उजागर गर्दै गरेको धेरै जटिल र रहस्यमय वास्तविकताहरू समेत वेदमा प्रस्तुत हाइपोथेसिसहरु संग लगभग समान रूपका देखिन थालेको वर्तमान परिवेशमा वेदमा उल्लेखित ऋचाहरू वैदिक कालिन विज्ञानका प्रमाणित हाइपोथेसिसका सङ्ग्रह रहेको पुष्टि गर्ने दिसा उन्मुख बनेको छ। जुन संसारकै लागि अत्यन्त चाख लादो र उत्साहवर्धक परिस्थिति हो।

## वेदमा भौतिक विज्ञान

बिजुली तथा ब्याट्रीका आविष्कारक ऋषि अगस्त्य






ऋषि अगस्त्य जसले प्रथम पटक बिजुली तथा ब्याट्री आविष्कार गरी प्रयोगमा ल्याएका थिए।

हाम्रा परम्परागत अन्य आविष्कार जस्तै यसको आविष्कारकको जस अरू कसैले आजको दिनसम्म पनि लिँदै छ।

## ऋषि अगस्त्यको बिजुलीको आविष्कार

**संस्थाप्य मृण्मये पात्रे ताम्रपत्रं सुसंस्कृतम्।**

**छादयेच्छि खिग्रीवेन चार्दाभि: काष्ठापांसुभि: ॥**

**दस्तालोष्टो निधात्वय: पारदाच्छादितस्तत:।**

**संयोगाज्जायते तेजो मित्रावरुणसंज्ञितम् ॥**











## (अगस्त्य संहिता)




शब्दार्थ (Loose Translation)

ताम्रपत्रं = Copper Sheet

मित्रा = Cathode

वरुण = Anode

शिखिग्रीवा = Coppersulfate











दस्तलोष्ट = Zinc

मित्रावरुणशक्ति = Electricity

आच्छादित दस्त लोष्ट= Mercury - amalgamated zinc sheet

**भावार्थ:** एउटा माटोको भाँडा लिनु । त्यसमा राम्रो सँग सफा गरिएको ताम्रपत्र (कपर–प्लेट) लिनु। माटोको भाँडामा राखिएको उक्त ताम्रपत्रलाई पहिला शिखिग्रीवा(अर्थात् कपर–सल्फेट) ले ढाक्नु। त्यो माथि चिसो काठको धुलोले ढाक्नु। पोलराइजेसन हुनबाट रोक्न उक्त धुलोमाथि आच्छादित दस्त लोस्ट अथवा मर्करी एमाल्गमेटेड जिंक सिट राख्नु। त्यसपछि जब उक्त दुई ताम्रपत्रलाई संयोगमार्फत मतलब तारद्वारा जब













जोडिन्छ, त्यसले मित्रावरुण शक्ति मतलब बिजुलीको उत्पादन हुन्छ ।

## ऋषि अगस्त्यको ब्याट्रीको आविष्कार

**अनेन जलभंगोस्ति प्राणो दानेषु वायुषु।**

**एवं शतानां कुंभानांसंयोगकार्यकृत्स्मृतः ।।**

**(अगस्त्य संहिता)**

भावार्थ: जब हामी १०० वटा (सौ) माटोको भाँडोको बिजुली (कुम्भों) को शक्ति पानीमा प्रयोग गर्छौं भने पानीले आफ्नो स्वरूप परिवर्तन गरी प्राणवायु (अक्सिजन) र उदान वायुमा (हाइड्रोजन) परिवर्तन गर्छ ।










**ऋषि अगस्त्यको आविष्कार: एयरोडायनामिक्स**

(कुनै वस्तु वरिपरि कसरी हावा बहन्छ वा जहाज कसरी उड्न सक्छ)

**वायुबन्धकवस्त्रेण निबद्धो यानमस्तके उदान स्वलघुत्वे**

**बिभर्त्याकाशयानकम् ।**

**(अगस्त्य संहिता शिल्प शास्त्र)**







**भावार्थः** यदि उदानवायु (हाइड्रोजन) लाई एयर टाइट (उच्च प्रेसरमा बन्द गर्नु) वस्त्र(कन्टेनर) भित्र कैद गरियो भने यसलाई विमान विद्या अथवा एयरो–डायनामिक्समा उपयोग गर्न सकिन्छ ।




**व्याख्याः** यो सूत्रले उच्च दबाबमा रहने ग्याससहरूलाई विमान विद्यामा उपयोग गर्न सकिने सूत्र दिएको छ । यो सूत्रले हाम्रा परम्परागत ज्ञानमा विमान सञ्चालनको प्रविधिको समावेश रहेको पुष्टि



गर्छ ।

## ऋषि अगस्त्यको आविष्कार: शुक्र नीति

(इलेक्ट्रोप्लेटिङको आविष्कार)

**कृत्रिमस्वर्णरजतलेपः सत्कृतिरुच्यते**

**(शुक्र नीति)**

**व्याख्या:** शुक्र नीति अनुसार आज हामीले इलेक्ट्रोप्लेटिङ भनिने शब्दलाई संस्कृतमा कृत्रिमस्वर्णरजतलेपः भनिएको छ ।

**यवक्षारमयोधानौ सुशक्तजलसन्निधो।।**

**आच्छादयति तत्ताम्रं स्वर्णेन रजतेन वा।**

**सुवर्णलिप्तं तत्ताम्रं शातकुंभमिति स्मृतम्।।**











**(अगस्त्यसंहिता)**

**भावार्थ:** फलामको भाँडामा रहेको कडा एसिडको घोलको (सुशक्त जल) भित्र राखिएको तामाको सान्निध्य राखिएको सुन वा चाँदीको नाइट्रेट (यवक्षार ताम्र) ले स्वर्ण (सुनौला) वा रजत (चाँदी) युक्त जलप (आच्छादित) गरिदिन्छ ।




आजभन्दा ४००० देखि ५००० वर्ष पहिले वैदिक वैज्ञानिकका रूपमा ऋषि अगस्त्य जस्तै थुप्रै हाम्रा ऋषिले विज्ञानको क्षेत्रका आविष्कारका विविध









सिद्धान्त तथा उपलब्धि वेदका श्रुतिहरूमा भेटिन्छन्।

## ऋषि कणादको गति र गुरुत्वाकर्षणको सिद्धान्त

सर–आइज्याक न्युटन अत्यन्त प्रसिद्ध नाम हो । संसारमा यो नाम नसुन्ने निकै कम होलान् । आधुनिक विज्ञानको भौतिकशास्त्रको गतिका प्रमुख तीन नियम र गुरुत्वाकर्षणको प्राकृतिक सिद्धान्तको प्रतिपादन गर्ने व्यक्तिका नाममा न्युटनले प्रसिद्धि पाएका हुन् ।

प्राचीन वैदिक विज्ञानलाई ओझेलमा पारेर हेर्दा यी कुरा सत्य देखिन्छन् । तर, जब तपाईं वैदिक









ज्ञानका पुराना संग्रहहरू खोतल्नुहुन्छ र तिनीहरूबारे गहन अध्ययन गर्नुहुन्छ, तपाईंलाई फरक तथ्य हात लाग्नेछ।

वैदिक परम्परागत विज्ञानबारे संग्रह गरिएका विभिन्न श्रुति वेद र उपनिषद्का रूपमा हालसम्म समेत संगृहीत छन्। जस अन्तर्गत ऋषि कणादको केही प्राचीन सिद्धान्त उल्लेख छ । ती सिद्धान्तबारे जब तपाईं पढ्नु हुनेछ, तपाईंलाई नयाँ वास्तविकता र यथार्थले चकित पार्ने निश्चित छ । यहाँ त्यही कुराहरूबारे चर्चा गरिने छ ।

आजको सूचनाको युगमा पुग्दै गर्दा गतिको सिद्धान्तको प्रतिपादकका रूपमा महान् वैदिक वैज्ञानिक कणाद र भौतिक विज्ञानका वैज्ञानिक सर–आइजक न्युटन (१६४३ –१७२७) बारे सर्वत्र






चर्च व्यापक भइरहेको छ।

विज्ञानको प्रभाव सर्वत्र व्यापक भएको हालको अवस्थामा न्युटनका ल अफ मोसनका रूपमा प्रतिपादित सिद्धान्त उनको फिलोसोफी उनीद्वारा ५ जुलाई १६८७ मा प्रकाशित नेचुरालिस प्रिन्सिपिया मैथेमेटिकामा अभिलेख गर्दै संसार सामु प्रेषित गरिए।

पुरातन वैदिक विचारधारा मध्ये एक वैज्ञानिक विचारधारा वैशेषिक दर्शन हो । जुन ऋषि कणादले प्रतिपादन गरेका थिए। वैदिक कालका वैज्ञानिक सिद्धान्तको अन्वेषण र खोजी गर्ने क्रममा न्युटनभन्दा २५०० वर्षपहिले ईपू ६०० मा वैदिक वैज्ञानिक तथा दार्शनिक कणादको वैशेषिक सूत्रमा बल र गति बीचको सम्बन्ध बारे वर्णन गर्दा उक्त











कुराहरू उल्लेख भएको देखियो। यथार्थमा कणादको वैशेषिक सूत्रहरूमा आणविक सिद्धान्त, गतिको सिद्धान्त, गुरुत्वाकर्षणको सिद्धान्त जस्ता सिद्धान्त सबै अटाएको देख्न पाइन्छ । उक्त कुराहरू प्रस्टसँग बुझ्नका लागि ऋषि कणादको वैशेषिक सूत्रको अध्ययन र व्याख्याको जरुरी हुन्छ ।

**गतिको सिद्धान्त (Law of Motion) बारे**

**कणादको वैशेषिक सूत्र**

कणादद्वारा रचित वैशेषिक सूत्रहरू अत्यन्त जटिल छन्। विषयको क्रममा समेत नियमितता नरहेको र प्रस्तुति संक्षेपमा भएकाले त्यसको प्रस्ट विषयगत व्याख्याको जरुरत महसुस गरी प्रशस्तपादले प्रस्ट व्याख्या सहित वैशेषिक सूत्रहरूको क्रमगत व्याख्या









सहित 'पदार्थ धर्मसंग्रह' नामक ग्रन्थ तयार गरे ।

प्रशस्तपादलाई वैशेषिक दर्शनको प्रवक्ताको उपाधि दिंदै उनले तयार गरेको पदार्थ धर्मसंग्रहलाई वैशेषिक दर्शनको मूल पाठका रूपमा मान्यता दिइयो ।

पदार्थ धर्मसंग्रहमा महर्षि प्रशस्तपादले वैशेषिक दर्शनको उल्लेख गर्दै लेख्छन्:

**वेगो पञ्चसु द्रव्येषु निमित्त–विशेषापेक्षात्कर्मणो जायते**

**नियतदिक्क्रिया प्रबंध हेतुः स्पर्शवद्द्रव्यसंयोग विशेष**

**विरोधी क्वचित्कारण गुण पूर्ण क्रमेणोत्पद्यते ।**

**भावार्थ**: ठोस, तरल वा ग्यास अवस्थामा रहेको









पञ्चतत्वको वेग अथवा मोसन त्यस माथि पर्ने निमित्त वा विशेष बलको कारणले उत्पन्न हुने गर्छ। उक्त बल पदार्थको वेगको प्रतिकूल (संयोग विशेष) दिशामा वा अनुकूल दिशामा हुने कारणबाट नष्ट हुने वा उत्पन्न हुने गर्छ।

[This means that action on objects generates motion. The external action being direction causes the motion to be directional. An equal and opposite action can neutralize the motion.]

कणादद्वारा प्रतिपादित वैशेषिक सूत्रहरू क्रमगत वैशेषिक दर्शनका रूपमा प्रशस्तपादले संयोजन गरेकोमाथिको भाष्य वा व्याख्यालाई तलको तीन










भागमा विभक्त गरी हेर्दा समान अर्थ र भाव लाग्ने गरी न्युटनको गति सम्बन्धका चर्चित तीन नियमसँगै हुबहु मिल्ने देखिन्छ ।

**। । वेगः निमित्तविशेषात कर्मणो जायते ।**

**वेगः निमित्तापेक्षात कर्मणो जायते नियतदिक क्रियाप्रबन्धहेतु ।**

**वेगः संयोगविशेषविरोधी ।।**

**वैशेषिक दर्शनः प्रथम सूत्र**

।। वेगः निमित्तविशेषात कर्मणो जायते ।

[Vegah Nimitta Visheshat Karmano Jayate].













**अर्थः** कुनै पनि वस्तुको गतिको परिवर्तनका कारण त्यसलाई प्रभावित पार्ने शक्तिको हुने गर्छ ।

[Change of motion is due to impressed force.]

**भावार्थः** अन्य प्रभावशाली शक्तिको उपस्थिति नहुँदासम्म स्थिर रहेको वस्तु स्थिर र कुनै दिशामा गतिशील रहेको वस्तु त्यही दिशामा गतिशील नै रहन्छ ।

**वैशेषिक दर्शनः द्वितीय सूत्र**

।। वेगः नियतदिक क्रियाप्रबन्धहेतु ।

[Niyatdik Kriya Prabandha Hetu].







अर्थः प्रभावशाली शक्तिको अनुपातमा प्रभावी शक्तिकै दिशा उन्मुख हुने गरी कुनै पनि वस्तुको गतिमा परिवर्तन आउँछ।

[Change of motion is proportional to the impressed force and is in the direction of the force.]

**भावार्थः** कुनै पनि वस्तुको गतिशीलता त्यसमा पर्न गएको बाहिरी शक्तिको हदले निश्चय गर्छ। जुन दिशामा बाहिरी शक्तिको प्रभाव पर्ने गर्छ, सोही दिशामा उक्त वस्तु गतिशील बन्ने गर्छ।

**वैशेषिक दर्शनः तृतीय सूत्र**

।। वेगः संयोगविशेषविरोधी।

[Vegah Sanyog Vishesh Virodhi].







वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



अर्थः क्रिया तथा प्रतिक्रिया सदैव बराबर तर विपरीत दिशामा हुने गर्छ ।

[Action and reaction are equal and opposite.]

**भावार्थः** हरेक क्रियाले उक्त क्रिया बराबर कै तर विपरीत दिशामा प्रतिक्रिया पैदा गर्छ।

The Vaiśeṣika Sutras:
वेगः निमित्तविशेषात कर्मणो जायते।
वेगः निमित्तापेक्षात कर्मणो जायते
नियतदिक क्रियाप्रबन्धहेतु।
वेगः संयोगविशेषविरोधी॥
Respective Meaning:
Action on objects generates motion.
The external action being direction causes the motion to be directional.
An equal and opposite action can neutralize the motion.
कणादको प्रथम परमाणु सिद्धांत
First Atomic Theory by Kanad
6th to 2nd century BCE
वैशेषिक सूत्र
Also Known as Kanada Sutra.
आचार्य कणाद
Perception (प्रत्यक्ष)
Inference (अनुमान)
Knowledge (ज्ञान)
Vaisheshika

## कणादको : गुरुत्वाकर्षणको नियम

## (Law of Gravity)





॥ श्री गणेशाय नमः ॥





वैदिक वैज्ञानिक तथा दार्शनिक कणादको वैशेषिक सूत्र दुई भाग (अहिकास) सहित १० अध्यायमा विभाजन गरिएको छ । वैशेषिक सूत्रमा ३७३ श्लोक छन्। जसमध्ये पाँचौं अध्यायको ५.१.७ श्लोकले गुरुत्वाकर्षणका लागि संस्कृत शब्द गुरुत्वाबारे बोल्छ।

संयोग नै मान्नुपर्छ, न्युटनको गुरुत्वाकर्षणको भनी दाबी गरिने नियम, जसले बयान गर्छ कि ब्रह्माण्डमा रहेको पदार्थको कुनै पनि कणले अरूलाई आकर्षण गर्छ । उक्त आकर्षणको हद पदार्थको पिण्डसँग प्रत्यक्ष र बीचको दूरीको वर्ग सँग व्युत्क्रम (इन्भर्स) को सम्बन्धमा हुने गर्छ । उक्त नियमहरू समेत कणादको वैशेषिक सूत्रमा नै वर्णन गरिएको भेटिन्छ।









**वैशेषिक दर्शन: सूत्र ५.१.७**

**।। संयोगाभावे गुरुत्वात् पतनम्॥**

saṃyogābhāve gurutvāt patanam || 5 . 1.7 ||

गुरुत्वात् = गुरुत्वाकर्षणद्वारा

पतनम् = खस्ने गर्छ

**भावार्थ:** कुनै पनि वस्तुलाई समातेर राख्ने अवरोधक शक्तिको अभावमा गुरुत्वाकर्षणको बलद्वारा त्यो वस्तु खस्ने गर्छ।

[In theabsence of conjunction, falling (results) from gravity.]

**व्याख्या:** यस सूत्रमा प्रयोग भएको संयोजन शब्दले








हरेक प्रकारको बाधा अड्चनतर्फ संकेत गर्छ। अवरोधहरूको अभावमा उत्पन्न हुने गैरसंयोजनात्मक परिस्थितिमा गुरुत्वाकर्षणको प्रभावले हरेक भौतिक पदार्थ तल झर्ने गर्छ। जस्तै: रुखमा टाँसिएर रहेको फलमा गुरुत्वाकर्षणको साथसाथै बाधाको समेत संयोजन रहन्छ । चरा आदि उड्ने क्रममा पखेटाले पैदा गर्ने हावाको माथि तर्फको चापको कारण पैदा हुने प्रतिक्रिया पतनका लागि काम गर्ने गुरुत्वाकर्षणको बाधाका रूपमा उपस्थित रहन्छ । उडान सम्भव हुन्छ।

**वैशेषिक दर्शन: सूत्र ५.२.३**

**।। अपां संयोगाभावे गुरुत्वात् पतनम्। ।**

apāṃ saṃyogābhāve gurutvāt










patanam || 5 . 2.3 ||

**शब्दार्थ**

अपां (अपाम)= पानी (बर्सातको पानीको अर्थमा)

संयोगाभावे (संयोग अभावे) = संयोजनको अभावमा

गुरुत्वात् = गुरुत्वाकर्षणद्वारा

पतनम् = खस्ने गर्छ

**भावार्थ:** समातेर राख्ने अवरोधक शक्तिको अभावमा गुरुत्वाकर्षणको बलद्वारा बर्सातको पानी खस्ने गर्छ।

[The falling of waters, in the absence of conjunction, is due to gravity.]









**व्याख्या:** यस सूत्रमा आकाशमा जरुरत अनुरूपको अवरोधक शक्तिको अभावले पैदा गर्ने गैर संयोजनात्मक परिस्थिति बीच गुरुत्वाकर्षणको प्रभावले पानी बर्सातको पानीका रूपमा तल झर्ने गर्छ भनिएको छ।

ऋषि कणादको वैशेषिक दर्शन अन्तर्गत वेगको सूत्र वैदिक गणितिज्ञ आर्यभट्टले प्रतिपादन गरेको शून्य तथा अर्का वैदिक गणितिज्ञ भास्कराचाइले प्रतिपादन गरेको असंख्य वा इन्फिनिटी भन्दा पनि पहिलेको समयमा भएको देखिन्छ ।

त्यसको फरक पृष्ठ भूमिमा सर–आइज्याक न्युटनको समय तुलनात्मक रूपमा धेरै आधुनिक बनिसकेको र प्रतिपादित सूत्रहरूलाई गणितको फर्मुलामा व्याख्या वैदिक गणितिज्ञहरूले ऋषि कणादको









जीवन काल पछि प्रतिपादित गरिदिएका नम्बर र नम्बरबारेका शून्य र असंख्य (इन्फिनिटी) जस्ता विशिष्ट तथा अचुक मान्यताहरू उपलब्ध थियो।

जसले गर्दा न्युटनका लागि ती कुराहरू संयोजन गरी गणितको सूत्रमा समेत लिपिबद्ध गरी प्रस्तुति गर्ने अवसर प्राप्त भएको सहजै अनुमान गर्न सकिन्छ ।

# कणादको वैशेषिक सूत्रमा आणविक सिद्धान्त

परमाणु बम भनेर सबैलाई अवगत भएको आणविक बमका आविष्कारक जे रोबर्ट ओपेन हाइमर हुन। वैज्ञानिक जे रोबर्टको नेतृत्वमा धेरै वैज्ञानिकले १९३९ देखि १९४५ सम्म काम गरे । सन् १६ जुलाई १९४५ एटम बमको पहिलो सफल






परीक्षण गरियो । यद्यपि जोन डाल्टन (६ सेप्टेम्बर १७६६ – २७ जुलाई १८४४) लाई आधुनिक विज्ञानले परमाणु सिद्धान्त र हतियारको पिता मान्ने गर्छ । तर, वैदिक विज्ञानको ज्ञाताहरू सबैलाई उनीभन्दा करिब ९१३ वर्षपहिले नै अगाडि ऋषि कणादको वेदमा लेखिएका सूत्रको आधारमा परमाणु सिद्धान्तको प्रतिपादन गरेको कुरामा कुनै सन्देह देखिँदैन ।

ईसापूर्वक दोस्रो शताब्दीमा कणको अर्थ सम्भव भएसम्मको सबै भन्दा सानो सूक्ष्म कण र कणादको शाब्दिक अर्थमा कणबारे विज्ञ। त्यसैले उक्त समयमा सूक्ष्म कणका ज्ञाता 'याटम–इटर' भनेर चिनिन्थे ऋषि कणाद। आज वैदिक विज्ञानका ज्ञाताले कणादलाई आणविक सिद्धान्तको पिता मान्ने











गर्छन् ।

कणादको वैशेषिक सूत्रहरूले परमाणुहरूको सूक्ष्म रूपलाई समेट्ने काम मात्र नगरेर भौतिक ब्रह्माण्डमा रहेका सबै वस्तु परमाणुको सूक्ष्म कणहरू निर्मित रहेको यथार्थतासमेत व्याख्या गर्छ। उनका अनुसार ब्रह्माण्डमा रहेका सबै वस्तु अन्ततः परमाणुको सूक्ष्म कणमा सीमित रहने गर्छ। जुन आधुनिक विज्ञानको आजको निचोड सँगै मिल्छ।

बहुलवादी यथार्थ स्विकार्ने वैशककषिक मान्यतामा हरेक वस्तुको भित्री वास्तविक यथार्थ बाहिरी रूपमा देखिने यथार्थभन्दा फरक रहने गर्छ। वैशेषिक विचारधारामा आध्यात्मिक पदार्थ आत्मा, ईश्वर (परमात्मा), कर्मको फल आदिलाई स्वीकार गरिन्छ।











प्राकृतिक दर्शनमा परमाणुवाद भनेको यो सिद्धान्त हो कि ब्रह्माण्डमा भएका सबै वस्तु अत्यन्त साना, अदृश्य, अविनाशी निर्माणका सूक्ष्म कण निर्मित परमाणु र परमाणु निर्मित अणुहरू मिलेर बनेको हुन्छ।

परमाणु शब्द पुरानो ग्रीक शब्द एटोमसबाट आएको हो। जसको अर्थ त्यो टुक्रा जसलाई त्योभन्दा सानो टुक्रा गर्न सकिन्न भन्ने लाग्छ। आजको दिनसम्म विकसित विचारधारामा त्यसको अर्थ सबैभन्दा सूक्ष्म कण क्वान्टम पार्टिकल (कणादि) भन्ने नै लाग्छ ।

वैशककषिका वैशेषिक दर्शन अन्तर्गतको परमाणुवाद (कणादि सिद्धान्त) तसर्थ केवल भौतिकवाद नभई आध्यात्मिकता र भौतिकवादलाई













सहअस्तित्वमा राख्ने गरी जोड्ने सेतुबारे यथार्थको जानकारी गराउने ज्ञान हो।

जस अनुसार एकातर्फ सबैभन्दा सूक्ष्म कण क्वान्टम पार्टिकलको (कणादि) संयोजनमार्फत भौतिक निर्माण सम्भव बन्छ । अर्कातर्फ तिनै क्वान्टम पार्टिकलको गुण, चरित्र, खुबी र संयोजन तथा विखण्डन प्रणालीले समग्रमा आध्यात्मिकताको पाटोको परिपूर्णता गर्ने भूमिका खेल्छ ।

सबै भौतिक चिजहरू जो अस्तित्वमा छन् र अनुभूतिसमेत गर्न सकिन्छ तिनीहरूलाई पदार्थको नाम दिइयो। पदार्थ शब्दको अर्थ अनुभवका वस्तु भन्ने हुन्छ। सजिलोका लागि अनुभवका वस्तुहरूलाई कणादले द्रव्य (पदार्थ), गुन (गुण), कर्म (गतिविधि), सामान्य (सामान्य), विशेष











(विशिष्ट) र समवाय (अन्तर्निहित वा जन्मजात) गरी छ रूपमा वर्गीकृत गरे। त्यसमा श्रीधर, उदयण र शिवदित्यले पछिल्लो समयमा अभाव (अनुपस्थिति) रूप थपी सात रूपमा वर्गीकरण गरे।

कणादले पहिलो तीन रूप द्रव्य (पदार्थ), गुन (गुण), कर्म (गतिविधि) जसको निश्चित उद्देश्य रहने गर्छ साथै महसुससमेत गर्न सकिने प्रकृतिको छ तिनीहरूलाई अर्थ अन्तर्गतका विषयवस्तुका रूपमा परिभाषित गरे। अन्तिम तीन सामान्य (सामान्य), विशेष (विशिष्ट) र समवाय (अन्तर्निहित वा जन्मजात) रूप जुन बौद्धिक विभेदको कारक रहने गर्छन्, तिनीहरू तार्किक अन्तर्गतका विषयवस्तुका रूपमा परिभाषित भयो।

द्रव्य अथवा पदार्थ अन्तर्गत पृथ्वी (धर्ती), अप













(पानी), तेज (आगो), वायु (हावा), आकाश (ईथर), काल (समय), स्पेस (अन्तरिक्ष वा स्थान), आत्मा (स्वयम् वा म) र मानस (मन) गरी नौ चिज समावेश गरे । इन्द्रियहरूले महसुस गर्न सकिने गरी आफ्नो केही विशिष्ट गुण प्रदान गर्ने पहिलो पञ्चतत्व पृथ्वी, जल, तेज, वायु र आकाशलाई भूत भनियो। समग्रमा पाँच महाभूत नामकरण भयो। समय, स्थान, आत्मा र मनलाई पाँच इन्द्रिय (कान, आँखा, छाला, जिब्रो र नाक) भन्दा फरक रूपमा अनुभूति वा महसुस गर्न सकिने पदार्थ अन्तर्गत राखियो।

गुण अन्तर्गत कणादले १७ गुण समावेश गरे। कणादले उल्लेख गरेका १७ गुण अन्तर्गत (१) रूप (colour) (२) रस (taste) (३) गन्ध (smell) (४) स्पर्श (touch), (५) सङ्ख्या (number)











(६) परिमाण - इकाई (size / dimension / quantity) (७) पृथकत्व (seprateness or individuality) (८) संयोग (conjunction / accompaniments) (९) विभाग (disconjunction) (१०) परत्व (priority / largeness) (११) अपरत्व (posteriority smallness) (१२) बुद्धि (cognition / knowledge) (१३) सुख (pleasure) (१४) दु:ख (pain) (१५) इच्छा (desire) (१६) द्वेष (aversion) (१७)प्रयत्न (efforts / voliation) पर्दछ ।

पछि प्रशस्तपादले अरू ७ गुण थपेर जम्मा २४ गुणहरू बनाए।

जस अन्तरगत (१८) गुरुत्व (gravity /













heaviness) (१९) द्रवत्व (cohesion / fludity) (२०) स्नेहत्व (adhesion / viscosity) (२१) धर्म (merit / cosmic order) (२२) अधर्म (demerit / cosmic degeneracy / entropy) (२३) शब्द वृत्ति (sound / wave aspect) (२४) संस्कार (faculty) - [यान्त्रिक (mechanical), स्थिति स्थापक (elastic), एवं वेगात्मक (emotional) शक्ति (force)] पर्दछ।

पदार्थको आफ्नै छुट्टै स्वतन्त्र अस्तित्व रहन सक्ने तर पदार्थ विना गुणको आफ्नै स्वतन्त्र अस्तित्व रहन नसक्ने परिभाषा गरियो । कर्मको समेत पदार्थविना आफ्नो छुट्टै अस्तित्व रहन नसक्ने यकिन बन्यो।

कर्म (activities / motion) अन्तर्गत (१)









उत्क्षेपण ( motion against gravity), (२) अव क्षेपण ( motion along with gravity), (३) आकुञ्चन ( motion causing shear stress), (४) प्रसारण (motion causing tensile stress), (५) गमन (linear motion) राखियो ।

आकाश, समय, स्पेस, आत्मा भने पदार्थ रहे तापनि कर्मविहीन पृथक पदार्थ रहेको परिभाषित गरियो। सामान्य (generality) अन्तर्गत (१) पर सामान्य (universal set), (२) परापर सामान्य (subset), (३) अपर सामान्य (element) परे। जब एकै चिजहरू धेरै पदार्थमा रहेको फेला पर्छ तब त्यसलाई सामान्य भनिन्छ । सामान्य पदार्थहरू प्रायः बहुलताको गुणयुक्त हुने भएकोले तिनीहरूको










पदार्थसँग व्यापक अन्तरसम्बन्ध कायम रहने गर्छ ।

विशेष (particualarity) अन्तर्गत (१) परमाणु (quantum; finite) (२) विभु (continuum, intinite) उपश्रेणी बन्यो । विशेषको माध्यम एक पदार्थलाई अर्का पदार्थभन्दा फरक महसुस गर्न सकिन्छ। हरेक पदार्थको अन्तिम रूप क्वान्टम कणयुक्त असंख्य परमाणु रहने गर्छन्। जुन पदार्थको आफ्नै विशेषता हो।

एक पदार्थको एक वा सोभन्दा धेरै अन्य पदार्थसँग अन्तरघुलित जटिल सम्बन्धलाई समवायको (inherence/concomitance) रूपमा चिनिन्छ । कणादले परिभाषित गरे अनुरूप समवाय कारण र उक्त कारणले पैदा गरेको प्रभाव बीचको अन्तरसम्बन्ध हो । प्रशस्तपादले यसलाई एक











निश्चित दायरामा एकअर्काको सामीप्यमा रहेर अविभाज्य रूपमा रहने पदार्थबीचको अन्तरसम्बन्धका रूपमा परिभाषित गरेका छन्। पदार्थबीचको समवाय सम्बन्ध प्रत्यक्ष अनुभूति गर्न नसकिने भए पनि उनीहरूबीचको अविभाज्य संयोजन वा लगावका आधारमा अनुमान गर्न सम्भव बन्छ ।

चाख लाग्दो कथा अनुसार एक दिन कणाद आफ्नो हातमा खाना लिएर हिँड्दै थिए । अनायास उनले आफ्नो हातमा भएको खानामा माडमुड पारेर ससाना कणमा विभक्त गर्न पुगे । जब उनले त्यसलाई झन् सूक्ष्म कणमा विभक्त गर्न खोजे निश्चित आकारभन्दा सानो हुने गरी उनले त्यसलाई विभाजित गर्न सकेनन्। यसरी पदार्थलाई कुनै













निश्चित कणको आकारभन्दा सानो हुने गरी विभाजित गर्न नसकिने हुनुपर्छ भन्ने विचारले उनको दिमागमा डेरा जमायो ।

उनले गहन चिन्तन मनमार्फत उक्त अविभाज्य पदार्थ सूक्ष्म कण क्वान्टम पार्टिकलको (कणादि) मार्फत परमाणु, परमाणुमार्फत अणु र अणुमार्फत पदार्थ बनेको राज सम्म पुग्न सफल बने। त्यही समयमा उनले यो पनि भेउ पाए कि कणादिहरू दुई गुणयुक्त हुन्छन्। एउटा पूर्ण आरामको स्थिर अवस्था र अर्को गतिशील अवस्था । साथै उनले तिनै स्थिर र गतिशील कणादिका कारण भौतिक शरीर र आध्यात्मिक अस्तित्वमा रहेकोसमेत निचोड निकाले।

कणाद आफूले सिद्धान्त प्रतिपादन गर्ने क्रममा







उदाहरणहरू मार्फत त्यसको औचित्य प्रमाणित गर्ने गर्दथे। जस्तै: उदाहरणका लागि कणादका प्राचीन वैशेषिक ग्रन्थहरूमा पञ्च महाभूत अन्तर्गतका चार भूत पृथ्वी, जल, तेज र वायु अविभाज्य कणादि बाट बनेका छन् भनेर प्रमाणित गर्न पाठ्यक्रममा निम्न सन्दर्भहरू उल्लेख / प्रस्तुत गरिएको छ ।

मान्नुहोस् कि यो ढुंगा अविभाज्य कणादि निर्मित छैन र यो निरन्तर चलिरहेको छ । अब यो ढुंगा लिनुहोस्। कसैले यसलाई सीमित रूपमा तर धेरै टुक्रामा विभाजन गर्न सक्छ। किनकि यसमा पदार्थहरू निरन्तर रहेको हुन्छ। अब हेर्नुहोस् हिमालयका पहाड र श्रृंखलाहरूमा पनि धेरै यस्तै ढुंगाका सीमित टुक्रा छन्। तसर्थ एक जनाले सीमित ढुंगाका यस्तै टुक्राहरू एक टुक्रालाई अर्को











टुक्रामा जोडेर अर्को हिमालयको पहाडको श्रृंखला बनाउन सम्भव हुन्छ। टुक्राको संख्या अधिक रहे तापनि निश्चित संख्याको हुनेछ ।

उक्त पहाडको जत्रै पहरा निर्माण कार्य एउटा सानो ढुंगाबाट सुरु हुँदै विशाल हिमालयको पहराका रूपमा परिवर्तन भएर समाप्त हुन्छ । जुन एउटा व्यावहारिक रूपमा आफैंमा विरोधाभास व्याख्या जस्तो देखिने तर आफैंमा राम्रोसँग स्थापित सत्य हो। यसले ढुंगा, टुक्रा आफैंमा समेत सीमित संख्याको अविभाज्य कणादि निर्मित हुनुपर्छ भन्ने तर्क सही रहेको पुष्टि गर्छ।

प्राचीन वैशककषिका दर्शन अनुसार सानो झ्यालको प्वालबाट आउँदै गरेको घामको किरणका सूक्ष्म कणहरू देख्न सकिन्छ । त्यो सबैभन्दा सानो अनुभूत







गर्न सकिने कण (महत) हो । उक्त कण आफैँमा तीन गुणयुक्त (तम, रज र सत गुणको – पोजेटिभ, नेगेटिभ र चार्जविहीन कणादि) सूक्ष्म कणबाट बनेका छ । हरेक त्र्यणुक (Trayanuk) दुई गुण युक्त कणादि गुणहरू संकल्पित डायाड (म्याटर Matters र एन्टिम्याटर्स Antimatters कणादि गुणहरू) निर्मित छ ।

यहाँ त्र्यणुक (त्रि-अणु) शब्दले त्रिगुण निर्मित त्रिगुणात्मक संरचना वा तीनवटा महत्वपूर्ण तत्वगुणहरू लाइ जनाउने गर्दछ ।त्रिगुण तीन दिव्य अलौकिक दैविक शक्तिको संयोजन मार्फत निर्माण हुने गर्दछ। अव्यक्त प्रकृतिको अभिव्यक्त हुन चाहने इच्छा शक्तिका कारण अर्थात् सर्वशक्तिमान ईश्वरको रचनात्मक इच्छाको कारण कणादिमा पहिलो पटक







गति उत्पन्न हुन्छ।

दुई कणादिको संयोजनबाट डायाडको (द्व्यणुकाय) सिर्जना हुन्छ । तीन डायाडको संयोजनको परिणामस्वरूप ट्रायडको (त्र्यणुक) गठन हुन्छ । कणादिहरू अविभाज्य र अनन्त हुन्छन। प्रत्येक कणादिसँग आफ्नै विशिष्ट चरित्र हुन्छ । ती न त सिर्जना गर्न सकिन्छ न त नष्ट नै गर्न सकिन्छ ।

अनुभूत गर्न नसकिने सबैभन्दा सानो कणरूपी कणादिबाट नै समग्रमा अनुभूत गर्न सकिने सबैभन्दा सानो कण (महत) परमाणु निर्मित हुने गर्छ। वैदिक अवधारणामा महत वा मह तत्त्व (Mahatattva) ब्रह्माण्डीय बौद्धिकता हो।







ब्रह्माण्ड चेतना वा समग्र चेतनाको प्राकृतिक भण्डार हो। जसलाई सिद्धान्त वा सृष्टिको आधार मानिन्छ। ब्रह्माण्ड चेतना वा समग्र चेतनाले नै प्राकृतिक नियमको सिद्धान्तको तय गर्दछ। सम्पूर्ण रूपको शक्ति र कणको निर्माण समेत यसै वाट भएको छ।

भाव (Feelings) अर्थात् भावनात्मक चेत व्यक्तिको अनुभवहरू हुन्। चेतना (Conciousness, Self-awareness, चित्त) ले सामान्यतया व्यक्तिको त्यस्तो एक मानसिक अवस्था लाई जनाउने गर्दछ जसमा व्यक्ति आफ्ना आन्तरिक अनुभवहरू प्रति सचेत हुन्छ। आफ्नो विचार, भावना र क्रियाकलापहरूको पहिचान गर्दछ। आत्म चेतना भने त्यो चेतना जुन व्यक्तिगत













भावना र विचार भन्दा अलि पृथक आत्म-चेतन (Awarness of the Self – Aatma Gyan, आत्मज्ञान) को अवस्था हो।

# गणितको जग वेद रहेको प्रमाणित

५०० बिसीई भन्दा अगाडिको समय लाई प्राचीन समय भनिन्छ। ५०० बिसीई देखि ५०० सीईको समय शास्त्रीय समय (क्लासिकल पिरियड) को रूपमा चिनिन्छ। शास्त्रीय समयमा वैदिक सभ्यताको मात्र नभएर संसारको इतिहासमै सबैभन्दा पुरानो ज्यामितीय ग्रन्थको रूपमा चिनिने











शुल्बसूत्र रचित भएको थियो। वैदिक/शास्त्रीय समय त्यही समय हो जुन समयमा पाणिनीको अष्टाध्याई पद्धतिको व्यापक प्रभाव थियो। पिङ्गलको छन्द सूत्र (सी.३०० ईसा पूर्व), बाइनरी साहचर्य अथवा बाइनरी नम्बरको कोडको संयोजनको विकास, बौद्ध र जैन ग्रन्थहरूमा गणितीयबिचारहरूको प्रस्तुति, शून्यलाइ अङ्क को रूपमा पहिचान, शून्य र दशमलव प्रणालीको अवधारणाको विकास, स्थान अनुरूप शून्य र दशमलव प्रणालीको प्रस्तुतिको गणितीय मूल्यको पहिचान आदि भएको थियो।

आर्य-भट्टको (४७६-५५० एडि) गणित, बीज-गणित, खगोल विज्ञान, ज्यामिति र त्रिकोण-मितिका मानक, गणना तथा निर्णय लिने













प्रक्रियाहरू स्थापित गरिएको यथार्थ हाल आएर विभिन्न खोज तथा अनुसन्धानहरू वाट सिद्ध हुन पुगेका छन् ।वैज्ञानिक खोजले प्रमाणित गरेको यो यथार्थ सुन्दा कतिलाई आश्चर्य लाग्न सक्छ।

ग्रीकका गणीतज्ञ पाइथागोरसले प्रतिपादन गरेको भनिएको ज्यामितिको पाइथागोरस सिद्धान्त पाइथागोरसको जन्म हुनु भन्दा शताब्दी भन्दा पनि अगाडी अस्तित्वमा रहेको वैदिक ग्रन्थ शान्ति-पाठ ब्राह्मण र ईपू १२०० देखि ८०० (बिसीइ) को बिचमा सिर्जित बौधायनको ग्रन्थ शुल्ब-सूत्र / शुल्बसूत्रमा उल्लेख भएको पाइन्छ।

बौधायनले आफ्नो शुल्ब-सूत्रको एक सूत्रमा विकर्णको वर्गको नियम उल्लेख गर्दै बताएका छन्:





**दीर्घस्याक्षणया रज्जुः पार्श्वमानी तिर्यकं मानी च।**

**यत्पृथग्भूते कुरुतस्तदुभयांकरोति ।।**

**भावार्थ:** एउटा आयतको विकर्णले (डायगोनलले) त्यसको लम्बाई र चौडाइको वर्गले फरक फरक रूपमा बनाउने क्षेत्रफलको जोड बराबरको क्षेत्रफल बनाउने गर्दछ।

(नोट: क्षेत्रफल = लम्बाई X चौडाइ; त्यसको मतलब लम्बाईको वर्ग तथा चौडाइको वर्गको जोड। जुन यथार्थमा पाइथागोरसको ज्यामितिको




सिद्धान्त भनेर आज पनि हामीलाई पढाइन्छ।





निकै दिक्क लाग्दो लामो समयको वैज्ञानिक खोजी पश्चात् हाल प्रचलनमा रहेको अङ्क, शून्य र अनन्तको प्रतिपादक वैदिक गणितज्ञहरु रहेको तर त्यसको व्यवहारिक प्रयोजन विभिन्न समयमा विभिन्न स्थानमा भएको हाल आएर पूर्ण रूपमै पुष्टि भएको छ।

आजको मिति सम्ममा वैदिक गणितज्ञहरु १ देखि ९ को अङ्क, शून्य र अनन्तको प्रतिपादन गरी तिनैको गठ-जोड वाट गणित र ज्योतिष वारेको उन्नत ज्ञान विकास गर्न सफल हुनुको पछाडिको मूल कारण समेत स्पष्ट हुन गएको छ।

सो बारेमा भएका अध्ययन वाट लामो समय सम्म



अभ्यास गरिएको वैदिक दार्शनिक परम्परा र संस्कृति बाट प्रेरित रहेर ती गणितीय अङ्कका अवधारणा विशेषतः शून्य र अनन्त (इन्फिनिटी) समेत समावेश गरी विकास गर्न वैदिक गणितज्ञहरु सफल भएको देखिन्छ।

बखशाली पाण्डुलिपिमा प्रयोग भएका अंकहरु।




वैदिक दार्शनिक परम्परामा भने गणितको अङ्क शून्यको गर्भ-धारण ब्राह्मण-अथर्ववेद १४.१.१ ले र अनन्तको (इन्फिनिटी) अङ्कको गर्भ-धारण ईसा-उपनिषद यजुर्वेद १६.५४ ले गराएको हाल आएर प्रस्ट बनेको छ।










**ॐ पूर्णमदः पूर्णमिदं पूर्णात्पुर्णमुदच्यते**

**पूर्णश्य पूर्णमादाय पूर्णमेवावशिष्यते ॥**

**ॐ शान्तिः शान्तिः शान्तिः ॥**

**भावार्थः** त्यो बाहिरी संसार अनन्तः ईश्वरीय चेतनाले पूर्ण छ। यो भित्री संसार पनि ईश्वरीय चेतनाले पूर्ण छ। पूर्ण बाट पूर्ण नै प्रकट हुन्छ। पूर्ण बाट पूर्ण प्राप्त गर्दा पनि वास्तवमा पूर्ण नै बाँकी रहन्छ।

व्याख्याः ईश्वरीय चेतनाको पूर्णता बाट ब्रह्माण्डको प्रकट हुन्छ। किनकि ईश्वरीय चेतना अद्वैत (Non-dual i.e. at the Middle point of

Negative & Positive i.e. Zero) र अनन्त: (Infinite) छ।

तेस्रो/दोस्रो शताब्दीका एक प्राचीन वैदिक गणितज्ञ आचार्य पिङ्लाले उनको ग्रन्थ चन्दास्त्र (जसलाई पिंगला-सूत्र पनि भनिन्छ) संस्कृत शब्द शून्यको स्पष्ट रूपमा उल्लेख गरेको भेटिन्छ।

आर्य-भट्टले (४७६-५५० एडि) आफ्नो अमूल्य कृति आर्यभटियामा शून्यमा आधारित रहेर दशमलव अङ्कको नियमबारे वर्णन गरेका छन्। उनी लेख्छन् एक स्थान अर्को स्थान अघिल्लो भन्दा दस गुनाले धेरै हुन्छ। उदाहरणको लागी सङ्ख्या प्रणालीमा परिमाणको सङ्केत १०, १००, १००० आदि वाट दिन सकिन्छ।





ब्रह्मगुप्तको (५९८–६६८ एडि) ब्रह्मस्फुट सिद्धान्तमा (६२८ एडि) शून्यलाई सङ्ख्याको रूपमा चर्चा गर्ने र शून्यको अवधारणा बनाउने र उपयोग गर्ने पहिलो ग्रन्थ हो। ब्रह्मस्फुट सिद्धान्तमा शून्य सङ्ख्याको रूपमा आएता पनि शून्यमा आधारित दशमलव अङ्कको रूपमा प्रयोग गर्ने नियम वारे उल्लेख छैन।

आर्य-भट्टले (४७६-५५० एडि) आफ्नो जीवनमा गणित र खगोल विज्ञान सँग सम्बन्धित धेरै उल्लेखनीय कामहरू गरे। उनका अनुसार अङ्क केवल एक अमूर्त सङ्केत मात्र हैन। अङ्क पनि संस्कृत लिपिको एक अक्षर नै हो। अङ्कहरूले संस्कृत लिपिको निश्चित अक्षरको सङ्केतको प्रतिनिधित्व गर्दछ ।

आर्य-भट्टले उल्लेखनीय योगदान पुऱ्याएका मुख्य







कामहरू लाई छ खण्डहरूमा विभाजित गरेर हेर्न सकिन्छ। ती हुन् गीतिकपाद, गणितपाद, कालक्रियापाद, गोलपाद र आर्य-सिद्धांत। उनको गणितपादका ३३ पदहरूमा शून्यमा आधारित रहेर दशमलव अङ्कको नियम, स्क्वायर र क्युबिङ्ग, स्क्वायर रुट निकाल्ने, क्युब रुट निकाल्ने, त्रिकोणको क्षेत्रफल निकाल्ने, समभुजीय टेट्राहेड्रोनको भोलुम निकाल्ने, गोलाकारको क्षेत्रफल निकाल्ने, ट्रेपीजियमको क्षेत्रफल निकाल्ने, दुई बिन्दु जोड्ने परिधि (सार्कमफेरेंस) पत्ता लगाउने, π को अनुमानित परिणाम (३.१४१६) पत्ता लगाउने काम गरे।

गणितको इतिहासमा कहिल्यै नबनेको पहिलो साइन (Sinθ) टेबल आर्य-भट्टले विकास गरे।













उनी आफैले श्लोकको रूपमा इन्कोड गरेको संस्कृत श्लोकहरू डिकोड गरिएका साइन (Sinθ) टेबलका भेलुहरु हाल तालिकामा सूचीबद्ध रूपमा उपलब्ध छ। शंकुक (gnomons) या नोमनको छाया निकाल्ने, इन्टर सेप्टेड आर्कको एरो निकाल्ने, स्क्वायर र क्युबको योग निकाल्ने, सवा ब्याज निकाल्ने, कर्ण (hypotenuse) को वर्ग दुवै पक्षको वर्गको योग हुने सिधान्त, प्रपोर्सनको आधारमा नतिजा निकालिने रुल अफ थ्री, अङ्क गणितको फ्र्याक्सन, इन्भर्स प्रोसेस, एउटा अँन-नन रहेको लिनियर एक्योइसन समाधान गर्ने, दुइटा भागको संयोजन बिन्दु पट्ट लगाउने, लिनियर इनडिटरमिनेट एक्कोईसन समाधान गर्ने आदि तरिकाहरू आर्य-भट्ट वाट प्रतिपादित छन्।









आज हामी हाम्रै वैदिक ज्ञानले सम्भव बनाएका आर्य भट्ट द्वारा प्रतिपादित गणितका आधारभूत सिद्धान्त तथा कायदाहरूलाई आधुनिक विज्ञानको देन भन्दै हाम्रै स्कुलहरूमा पढाइ रहेका छौ। अन्यत्र समेत पढाइएको छ। आर्य भट्टको अत्यन्त अग्रगामी सृजनाहरू जस्तै अनिश्चित समीकरण (Kuṭṭaka), साइन (Sine) टेबल आदि आज पनि खगोल शास्त्री हरुको अत्यन्त चासोको विषय रहेको छ।

१८८१ मा पेसावर नजिकैको बखशाली गाउँमा भोज-पत्र वा बृच (सन्टि) रुखको बोक्रामा लेखिएको ब्रह्मगुप्तको ब्रह्मस्फुट सिद्धान्त भेटिएको थियो। उक्त बखशाली पाण्डुलिपिमा प्रयोग भएका अङ्कहरूमा एउटा बिन्दुलाई शून्यको रूपमा प्रयोग









गरिएको भेटिन्छ। जुन आज सम्म भेटिएको सबै भन्दा पुरानो शून्य अङ्क अङ्कित भएको पाण्डुलिपि हो।

२०१७ मा विभिन्न स्थानमा भेटिएका तीन वटा नमुना पाण्डुलिपिहरूको रेडियो कार्बन डेटिङ गर्न सम्भव बन्यो। तिनीहरू तीन अलग अलग शताब्दीहरू २२४-३८३, ६८०-७७९ र ८८५-९९३ एडिमा लेखिएको प्रमाणित तथ्य बाहिर आयो। यसरी ब्रह्मगुप्तको ब्रह्मस्फुट सिद्धान्त संसारको सबैभन्दा पुरानो शून्य प्रयोग गर्ने ग्रन्थ रहेको रेकर्ड कायम भयो।

ब्रह्मगुप्तले घन (क्युब) र घन-मूल (क्युब रुट) कसरि






पत्ता लगाउन सकिन्छ भनि प्रयोग गरि वर्ग र वर्ग रुटको निकाल्ने गणितको नियमको सुत्रपात गरे।

उनले संयोजनमा रहेका पाँच प्रकारका भिन्न (फ्र्याक्सन) हरुको समाधान गर्ने नियम प्रतिपादन गरे।




उनले बनाएको नियम अनुसार पहिलो n वटा प्राकृतिक संख्याको वर्गको योग [n (n+1) (2n+1)] / 6 हुने र n वटा पहिलो n प्राकृतिक संख्याको घनको (क्यूब) योग [n (n +1)/2] हुने सिद्दान्त दिएका थिए।











ब्रह्मगुप्तको सिद्धान्त अनुसार जब शून्यलाई एक सङ्ख्यामा जोडिन्छ वा एक सङ्ख्या बाट घटाइन्छ, उक्त सङ्ख्या अपरिवर्तित रहन्छ। शून्य सँग गुणा गरिएको सङ्ख्या भने शून्य हुन्छ। नकारात्मक सङ्ख्या (नेगेटिभ) लाई ऋण र सकारात्मक सङ्ख्या लाई भाग्य वा धन भनिन्छ। एक ऋणमा शून्य घटाउँदा एक ऋण नै बाँकी रहने र एक भाग्य वा धनमा शून्य घटाउँदा एक भाग्य वा धन नै बाँकी रहने गर्छ।

शून्य वाट शून्य घटाउँदा शून्य नै रहन्छ। शून्य बाट ऋण घटाउँदा भाग्य वा धन हुन्छ। शून्य बाट घटाएको भाग्य एउटा ऋण हो। ऋण होस् वा धन त्यस लाई शून्यले गुणन गर्दा दुवै शून्य हुन्छ। शून्य लाई शून्यले गुणन गर्दा शून्य नै रहन्छ।







दुई ऋण लाई गुणन गर्दा वा एकले अर्का लाई भाग गर्दा दुवैको फल भाग्य वा धन हुन्छ। दुई भाग्यको गुणन वा भाग फल समेत भाग्य वा धनात्मक नै हुन्छ।

ब्रह्मगुप्तको पहिचान १+०=१, १-०=१ र १x०=० आदिले गणितको मूल आधार तैयार गऱ्यो। जुन आधारभूत गणितीय नियमहरूको रूपमा आजसम्म स्थापित छ। यद्यपि शून्यले विभाजन गर्ने ब्रह्मगुप्तको बुझाईमा भने अपूर्णता रहेछ। उनले कुनै पनि अङ्क लाई शून्यले भाग गर्दा शून्य रहने अवधारणा लिए। जस अनुसार १÷०=० हुनु पर्दथ्यो।

लगभग ५०० वर्ष पछि ११ औँ शताब्दीमा आएर वैदिक गणितज्ञ भास्कर द्वितीयले उक्त अवधारणामा











रहेको त्रुटि सच्चाए। भास्कर द्वितीयका अनुसार कुनै पनि अङ्क लाई शून्यले भाग गर्दा शून्य होइन अनन्त हुन्छ। उनले सारेको व्यवहारिक आधार के थियो भने १ लाई शून्यको अनन्त टुक्राहरूमा विभक्त गर्न सकिन्छ।

यसरी शताब्दीयौँ देखिको मान्यतालाई वैदिक गणितज्ञ भास्कर द्वितीयले (जन्म १११४ एडि) सच्चाउन सफल बने। जुन मान्यता आज सम्म कायम छ।

व्यवहारिक यथार्थहरू जे भएता पनि वैज्ञानिक तर्कहरू आज पनि यो व्याख्या हुन सकेको छैन कि किन २÷०, ३÷० अथवा ९÷०, आदि शून्य हुन सक्दैन र त्यसलाई अनन्त मानिनु पर्छ? उक्त विषयमा आज सम्मको आधुनिक गणित र







विज्ञानको कुनै उत्तर छैन।

त्यसैले एउटा दृष्टिकोण बनाइएको छ। जस अनुसार कुनै पनि सङ्ख्या वास्तवमा कति वटा शून्यमा विभाजित गर्न सकिन्छ भन्ने विषय आज सम्म अ-परिभाषित छ अर्थात् यसले कुनै अर्थ राख्न सक्दैन। त्यसैले हाल सम्म गणितज्ञ भास्कर द्वितीयको अवधारणा लाई स्विकार्दै आइएको छ। यसको उत्तर हाल मात्र वैदिक विज्ञान सँग सुरक्षित भेटिन्छ।

ब्रह्मगुप्तको समय भन्दा पहिले ३-४ को नतिजालाई कुनै जवाफ नभएको प्रश्न ठानिन्थ्यो। त्यस्तो प्राय सबै अवस्थामा उत्तर '०' वा शून्य हुने मानिन्थ्यो। जब ब्रह्मगुप्तले शून्य तथा ऋण तथा भाग्य वा धनको अवधारणा ल्याउन सके त्यहाँ ऋणात्मक सङ्ख्याहरू अस्तित्वमा देखिन सम्भव बन्यो। यसले











कसरि उधारोलाई घटाउने विधिलाई गणितीय रूपमा अभिलेख गर्ने भन्ने समस्याको समाधान निकाल्यो।

यस बाहेक ब्रह्मगुप्तले क्वाडारटिक भनिने द्विघातिय समीकरणहरू जस्तै X +२ = ११ मा समेत नकारात्मक अङ्कहरू रहदा समेत नतिजा हिसाब गरी निकाल्न सकिने उपाय औंल्याए। जसको लागि उनले X = +३ हुँदा र X=-३ हुँदा त्यसको X (३X३) अथवा (-३X-३) दुवैको उत्तर +९ हुने काइदा सुझाए। सामान्य रैखिक समीकरण र द्विघात समीकरणको अलावा ब्रह्मगुप्तले दुई अज्ञात भेरिएवल भएका द्विघातिय समीकरणहरूको समेत समाधान गरेर अगाडि बढेको देखिन्छ।

ब्रह्मगुप्तले महत्त्वपूर्ण समय ज्यामिति र त्रिकोण







सम्बन्धका गणितमा समेत खर्च गरे उनले √१० (३.१६२२७७) लाई π (३.१४१५९३) को व्यवहारिक सन्निकटको सङ्ख्याको रूपमा स्थापित गरी एक चक्रको क्षेत्रफल निकाल्ने चक्रीय चतुर्भुज दिए जसलाई ब्रह्मगुप्तको सूत्र भनिन्छ।

यसबाट उनले चक्रीय चतुर्भुजको विकर्ण (डायगोनल) को एक प्रसिद्ध प्रमेय (थेउरम) दिन सक्षम बने जसलाई ब्रह्मगुप्तको प्रमेयको रूपमा उल्लेख गरिन्छ।














भास्कर द्वितीय तत्कालीन समयका चर्चित वैदिक गणितज्ञ र खगोल शास्त्री थिए। गणितमा उनको मुख्य देनको रूपमा उनले प्रतिपादन गरेको अन्तर विश्लेषणको गणित हो। जसलाई आज कन्सेप्ट अफ डिफरेनसियलको नाममा पढाइ हुन्छ।

उनले रचना गरेको ग्रन्थको नाम सिद्धान्त शिरोमणि हो। जसका मुख्य चार भाग छन्। १) लीलावती (गणित र खगोल शास्त्रको ग्रन्थ) २) बीज-गणित (अलजेब्रा) ३) गणित-अध्याय ४) गोल-अध्याय (खगोल शास्त्र / एस्ट्रोनोमि)। जसमा ब्रह्माण्डमा रहेका पृथ्वी लगायतका ग्रहहरू निश्चित केन्द्र-बिन्दु लाई आधार मानी आफ्नो कक्षमा नियमित घुम्ने सिद्धान्त बारे चर्चा गरिएको छ।

भास्कर द्वितीय तत्कालीन समयका चर्चित वैदिक





गणितज्ञ र खगोल शास्त्री थिए। गणितमा उनको मुख्य देनको रूपमा उनले प्रतिपादन गरेको अन्तर विश्लेषणको गणित हो। जसलाई आज कन्सेप्ट अफ डिफरेनसियलको नाममा पढाइ हुन्छ।

उनले रचना गरेको ग्रन्थको नाम सिद्धान्त शिरोमणि हो। जसका मुख्य चार भाग छन्। १) लीलावती (गणित र खगोल शास्त्रको ग्रन्थ) २) बीज-गणित (अलजेब्रा) ३) गणित-अध्याय ४) गोल-अध्याय (खगोल शास्त्र/एस्ट्रोनोमि)। जसमा ब्रह्माण्डमा रहेका पृथ्वी लगायतका ग्रहहरू निश्चित केन्द्र-बिन्दु लाई आधार मानी आफ्नो कक्षमा नियमित घुम्ने सिद्धान्त बारे चर्चा गरिएको छ। [जन्म: भास्कर प्रथम (६२९ एडी) - भास्कर द्वितीय (१११४ एडि)]





अन्त्यपदस्य वर्गं कृत्वा द्विगुणं तदेव चान्त्यपदम्।
शेषपदैराहन्यात् उत्सार्योत्सार्य वर्गविधौ॥

In the process for calculating the square, the square of the last digit is found (and placed over it). The rest of the digits are multiplied by twice the last digit (and the results placed over them). Then (omitting the last digit), moving the rest by one place each, the process is repeated again and again.

An Example: To calculate $125^2$ — Bhāskara I, 629 AD

| | | | | | |
|---|---|---|---|---|---|
| 1 | 5 | 6 | 2 | 5 | |
| | | | | 25 | $5^2 = 25$ |
| | | 4 | 20 | | $2^2 = 4$, $5.2.2 = 20$ |
| 1 | 4 | 10 | | | $1^2 = 1$, $2.2.1 = 4$, $5.2.1 = 10$ |
| 1 | 2 | 5 | | | |

सारांशमा आधुनिक भनिएको आजको विज्ञान वैदिक ज्ञान र वैदिक ज्ञानले समाजमा दिएको अवधारणा तथा जीवनको यथार्थताको वारेको समझ बिना लगभग अपूर्ण रहेको यथार्थ सबै तह र तप्काले महसुस गर्ने पर्ने स्थितिको विकास भएको छ। गणितको क्षेत्रमा त झन् लगभग असम्भव प्राय: छ।

जसलाई तलको केही उदाहरणहरू वाट प्रस्ट पार्न सकिन्छ। उक्त कुरा बारे स्पष्ट हुन आज तपाई हाम्रा समाजमा गणितज्ञ र विज्ञानका विज्ञ भनी दाबी गर्ने







र हाम्रा परम्परागत वैदिक ज्ञानलाई निन्दा गर्दै हिंड्ने भुईंफुट्टा विद्वान गनिएकाहरूले महसुस नगरेको एउटा यथार्थ बारे चर्चा गरिनु जरुरी छ।

त्यो यथार्थ जुन हाम्रा वैदिक विज्ञानका ज्ञाता तथा आयुर्वेदमा विज्ञता हासिल गरेका ज्ञानी समुदायहरूले समाजलाई बताउन कष्ट गरेनन त्यो खोतल्नु जरुरी हुने छ।

जब तपाई विज्ञानले भनेको सूत्र लगाएर हिसाब गर्न बस्नु हुन्छ तर वैदिक मूल्य र मान्यता लाई भुल्नु हुन्छ तब त्यहाँ जे पनि सम्भव भएको प्रमाणित गर्न सक्नु हुन्छ। जुन धरातलीय यथार्थ होइन।

आजको यथार्थ के हो भने विज्ञानले आज सम्म कति हुन्छ र किन भन्ने पत्ता लगाउन सकेको छैन।













त्यसैले उ आज पनि वैदिक मान्यता को आधारमा आफ्ना सम्पूर्ण हिसाब गर्दै आएको छ। आधुनिक विज्ञानको सौभाग्य, जब ऊ आफैले यसको उत्तर नभेट्दा सम्म वैदिक मान्यता लाई पछ्याउँदा उसको सबै हिसाब किताब ठिक ठाक चलेको छ।

जस्तै:

यो सत्य हो कि,

$9 \times 0 = 0$

$777 \times 0 = 0$

i.e.

$9 \times 0 = 777 \times 0$

i.e.

$9 = 777 \times \frac{0}{0}$

i.e. As, $\frac{0}{0} = 1$ ✖

9 = 777 (How?)

Maths Rules Says

If $n = 1, 3, 3, \ldots n_n$

$\frac{n}{n} = 1$

Let assume,

$n_n = 0$ and $\infty$ separately, then ✖

$\frac{0}{0} = 1$; $\frac{\infty}{\infty} = 1$ ✖

यो सत्य पनि हो कि,

$\infty \times 22 = \infty$

$\infty \times 99 = \infty$

As, $\infty = \infty$

$\infty \times 22 = \infty \times 99$

i.e.

$22 = \frac{\infty}{\infty} \times 99$ AS, $\frac{\infty}{\infty} = 1$ ✖

22 = 99 (How?)

वेद र वैदिक ज्ञान भित्रका गणितज्ञ र विज्ञान बारे मेसो नपाएको क्षणिक लाभको पछि लागिरहेको हाम्रो समाज असली हिरा छोडेर डुङ्गाको पछि दगुरी राखेको छ।







पूर्ण बाट पूर्ण नै प्रकट हुन्छ। पूर्ण बाट पूर्ण प्राप्त गर्दा पनि वास्तवमा पूर्ण नै बाँकी रहन्छ। त्यसको अर्थ हो पूर्ण अर्थात अनन्त लाई पूर्ण अर्थात अनन्त भाग लगाउँदा पनि अनन्त नै रहन्छ।

कुनै पनि अङ्क लाई शून्यले भाग गर्दा शून्य होइन अनन्त हुन्छ। जस्तै अङ्क १ लाई शून्यको अनन्त टुक्राहरूमा विभक्त गर्न सकिन्छ। त्यसरीनै शून्य लाई समेत अनन्त शून्यमा विभक्त गर्न सकिन्छ। तसर्थ शून्य लाई समेत शून्यले भाग गर्दा अनन्त नै हुन्छ।

सांसारिक यथार्थमा आफैमा केटा वा केटी के हो भनी नछुट्टिने तेस्रो लिङ्गी (नेगेटिभ र पोजेटिभ शक्ति निर्मलीकरण भएको न्युट्रल अथवा शून्य) आदिम मानवको (शिव-शक्ति) आत्म बलिदान










मार्फत नर वा छोरो मानिसको गुण अधिक भएको (जीवन्त शक्ति बीज युक्त) र नारी वा छोरी मान्छेको अधिक गुण भएको (ग्रहण र उत्पादन शील डिम्ब शक्ति युक्त) मानवको विकास भएको छ। शून्यता आफैमा सिर्जनाको प्रतीक हो। सृजनशीलताको कुनै बन्धन हुँदैन।

त्यो अनन्त: हुन्छ। यो मात्र दार्शनिक विषय हैन। व्यवहारिक विषय समेत हो। गणित समेत व्यवहारिक विषयको अज्ञानता ज्ञानमा परिवर्तन गर्ने एक उपाय हो। यथार्थको नजिक नरहेको गणितले व्यवहारिक विषयको खोजी गर्न सक्थेन। त्यो व्यवहारिक ज्ञान वैदिक ज्ञानले विज्ञानलाई उपलब्ध गराई दिएको छ।

गणितमा शून्यको गर्भधारण ब्राह्मण-अथर्ववेद











१४.१.१ ले र अनन्तको (इन्फिनिटी) गर्भधारण ईसा-उपनिषद यजुर्वेद १६.५४ ले गराएको छ।

यो बैदिक बिज्ञानको यथार्थ आधुनिक गणितले समेत व्यवहारमा उपयोग गरि आएको छ। सम्पूर्ण उपलब्ध तथ्यहरूले गणितको जग वेद रहेको प्रमाणित गरिदिएको छ।

## वेदमा बायोटेक्नोलोजी

सहज कृमि शब्द साना तथा सूक्ष्म जीवलाई जनाउन वेदमा प्रयोग भएको देखिन्छ । जस अनुसार भाइरस, ब्याक्टेरिया, कीटक (लामखुट्टे, बिच्छी, उडुस जस्ता विषालु किरा) तथा पतंग (रातिको बेला सक्रिय हुने उड्ने उपियाँ, मोथ जस्ता













साना हानिकारक किरा फट्यांग्रा), परजीवी आदि सबैलाई कृमिको साथमा व्याख्या गरिएको भेटिन्छ। वेदमा कृमिलाई दुई प्रकारमा विभाजन गरिएको छ। आँखाले देख्न सकिने म्याक्रोसकोपिक कृमि जसलाई दृश्य कृमि (द्रिष्ट) र आँखाले देख्न सकिने अथवा माइक्रोसकोपिक कृमिलाई अदृश्य कृमि (अद्रिष्ट) भनिएको छ। सामान्य रूपमा वेदको अवधारणाले अदृश्य तथा दृश्य सबै कीटाणु, जीवाणुहरूलाईकृमि अन्तर्गत समाहित गर्ने र रोगजनक कृमिहरूबारे उपचार पद्धतिमा समावेश गरेको बुझिन्छ।

जीवाणु, कृमि, कीट, पतंग आदि सबै स्थूल सूक्ष्म प्राणीलाई कृमि शब्द दिइएको वेदमा उत्पत्ति र स्थितिका आधारमा शरीरमा वा शरीरभित्र रहने











प्रणाश्रयी र शरीरबाहिर विभिन्न स्थानमा रहने अन्य स्थानाश्रयीका रूपमा समेत विभाजन गरेको छ । कृमिको संक्रमणका कारण मानिसले शारीरिक, मानसिक, आध्यात्मिक र भौतिक व्याधि भोग्नुपर्ने भेटिएको उल्लेख गर्ने वेदमा मानिसमा रोग व्याधि उत्पन्न गर्ने कृमिलाई उपद्रोजन्य कृमिको नामकरण गरिएको छ । मानिसका लागि हानिकारक र पोषणतत्वनाशक उपद्रोजन्य कृमिको उपचार पद्धतिलाई कृमि चिकित्सा भनिएको छ । कृमि चिकित्साका लागि सबैभन्दा उपयोगी अनन्त स्रोतका रूपमा सूर्य, अग्निहोत्र (यज्ञ, हवन), मनोबल (मन्त्र, फुकफाक), ज्ञान बल, शरीर बल, औषधीय वनस्पति आदि उपाय सुझाइएको छ ।

वेदमा विस्तृत रूपमा दैवी शक्ति (सूर्य, अग्नि, इन्द्र,













मेघ, मरुत, सोम, जल चिकित्सा), वानस्पतिक द्रव्य, खनिज द्रव्य, मणिबन्धादि, धूपनादि, मन्त्र चिकित्सा, प्राकृतिक चिकित्सा, खानपान आदिको कृमि चिकित्सामा हुने प्रयोगबारे लेखिएको छ । उक्त उपायबारे यथेष्ट प्रमाणित वैज्ञानिक आधारसमेत हाल उपलब्ध छन् । विभिन्न प्रकारका कृमि तथा तिनका कारणबाट हुने रोग वा विकृतिको उपचार विधिको सम्बन्धमा वेदमा गरिएको चर्चा परिचर्चाका लागि ऋषि कण्वको मुख्य भूमिका देखिएकाले वैदिक माइक्रोबायोलोजीको पिताका रूपमा ऋषि कण्वलाई लिनु उपयुक्त देखिन्छ ।

वैदिक विज्ञानको बुझाइमा प्रकृतिको तीन गुण हुन्छ। सत गुण, रज गुण र तम गुण । जब विज्ञानले परमाणुलाई तीन भागमा विभाजन गर्न











सक्यो त्यतिबेला उसले इलेक्ट्रोन, प्रोटोन र न्युट्रोन गरी तीन गुणयुक्त तत्व फेला पा¥यो, जसमा यी तिनै सत गुण, रज गुण र तम गुण भेटियो । यी तीन गुणविना परमाणुको अस्तित्व सम्भव नहुने र परमाणुविना जीवन वा कुनै भौतिक पदार्थसमेत सम्भव नहुने यकिन ग¥यो ।

तम भनेको इनार्सिया वा अवरोधको मतलब स्थिरताको तत्व हो । आफू स्थिर रहन हरेक तत्वलाई स्थिरताको जरुरत पर्छ । जस्तैः पृथ्वीमा रहँदा हामीलाई आफूतिर तान्ने पृथ्वीको ग्र्याभिटी एक अवरोधक तत्व छ, जसले हामीलाई रोक्न वा स्थिर रहन सहयोग गर्छ । शक्ति गतिशीलताको तागत हो। जसलाई रज गुण भनिन्छ । गतिशीलता र स्थिरताबीचको सन्तुलन कायम गर्ने गुण हो सत













गुण अथवा यथार्थता । दुवैको संयोजनबाट जे बन्छ, त्यो हरेक वस्तुको यथार्थ गुणका रूपमा हामीले अनुभूति गर्छौं ।

जब गतिशील शक्ति पनि छ, त्यसलाई रोक्ने शक्ति पनि छ तर ती दुईबीच सन्तुलन कायम गर्ने शक्ति छैन भने त्यहाँ सन्तुलन सम्भव बन्दैन । गतिशील गुण र स्थिर गुणबीच सन्तुलन कायम राख्ने गुणको उपस्थितिमा सन्तुलन कायम हुन नसक्दासम्म उक्त शक्तिद्वारा निर्मित हुने पदार्थको वास्तविक गुण मतलब स्थिरतामा देखिने यथार्थ गुणबारे यकिन हुन सक्दैन । एउटा कार जसमा चल्नका लागि इन्धन पनि छ, गति नियन्त्रण गर्न ब्रेक पनि छ तर दुबैलाई सन्तुलन गर्ने खुबी रहेको चालक छैन भने त्यसबाट सोचिएको यात्रा सम्भव रहँदैन । कारको यात्रा











सम्भव तुल्याउन गतिशीलता दिने शक्ति पेट्रोल वा डिजेल, रोक्ने वा गति नियन्त्रण गर्ने ब्रेक तथा गतिशीलता र स्थिरताबीच सन्तुलन कायम गर्ने चालकको जरुरत हुन्छ ।

हाम्रो जीवनको यात्रामा समेत तीनै पक्षको निकै ठूलो भूमिका रहन्छ । कार चल्न निश्चित बाटो चाहिन्छ भने हाम्रो जीवनका लागि समेत निश्चित ज्ञान मार्गको जरुरत छ । कारचालकमा चलाउने ज्ञान र अनुभवको जरुरत रहे जस्तै हाम्रो जीवन पनि ज्ञान र अनुभवबाट प्राप्त बुद्धि र विवेकको सहारामा अघि बढ्ने गर्छ ।

वैदिक ज्ञानलाई विज्ञानका रूपमा सोच्ने व्यक्तिले बताउने रज गुण, तम गुण र सत गुणलाई आधुनिक विज्ञानमा इलेक्ट्रोन, प्रोट्रोन र न्युट्रोनको नामकरण













गरियो । त्यही ज्ञानलाई काव्यात्मक रूपमा अर्थात् विषयवस्तुलाई कुनै उपमा दिएर कुरा प्रस्ट गर्न चाहने काव्यका पारखीहरूले ब्रह्मा, विष्णु र महेश्वरको नाम दिए । जहाँ ब्रह्मा सर्जक शक्ति अथवा निर्माणकर्ता हो । विष्णु परम्परा कायम गर्ने वा नियमितता प्रदान गर्ने सुरक्षादाता शक्ति हो भने महेश्वर (वा शिव) एक विनाश गर्ने शक्तिका रूपमा चर्चा गरिएको भेटिन्छ ।

विज्ञान मार्फत चर्चामा रहेको इलेक्ट्रोन एक नेगेटिभ (नकारात्मक) चार्जयुक्त पदार्थ हो । इलेक्ट्रोनले परमाणु बिगार्ने वा भत्काउने कार्य गर्छ जसलाई महेश्वरको उपमा लिइयो । प्रोट्रोन पोजेटिभ (सकारात्मक) चार्जयुक्त हुन्छ । जब इलेक्ट्रोन आफ्नो चार्ज गुमाएर परमाणुलाई ध्वस्त पार्ने







प्रक्रियामा लाग्छ, प्रोट्रोनले जरुरतको अन्य नेगेटिभ चार्जलाई आफूतर्फ खिचेर परमाणुलाई नियमितता प्रदान गर्ने काम गर्छ । जसलाई विष्णुको उपमा दिइयो ।

परमाणुको केन्द्र भाग अथवा न्युक्लियसमा सकारात्मक वा पोजेटिभ चार्जमा रहेका प्रोटोन एकअर्कासँग हुने नियमित विकर्षण हुने क्रममा भत्कनबाट जोगाउन न त नेगेटिभ न त पोजेटिभ अथवा चार्जविहीन स्वतन्त्र न्युट्रनहरूले न्युक्लियसमा रहेका पोजेटिभ चार्जयुक्त प्रोटोनलाई एकापसमा जोडेर राख्न मद्दत गर्छ । न्युट्रनका कारण संयुक्त पोजेटिभ चार्जमा रहन सम्भव बनेको तिनै प्रोटोनले आफू सन्तुलित हुन खिचेर लिने नेगेटिभ चार्जका कारण अन्ततः पूरै परमाणु सन्तुलित बन्न










सफल रहेर स्वतन्त्र अस्तित्वमा रहन सम्भव बनेको हुन्छ । यसरी परमाणुको केन्द्र भागमा रहेको न त नेगेटिभ न त पोजेटिभ स्वतन्त्र वा न्युट्रल न्युट्रोनलाई परमाणुको असली निर्माणकर्ता शक्तिको उपमा दिएर ब्रह्मालाई सर्जक शक्ति भनियो ।

इलेक्ट्रोन हमेसा आफैं नियमित कम्पनमा कुनै गतिमा सवार रहन्छ । प्रोटोन र न्युट्रोनलाइ जब सानो भागमा टुक्राइन्छ, तिनीहरू ससाना सबएटमिक पार्टिकलहरू जस्तैः मुवोन, न्युट्रिनो, क्वाक्र्स आदि निर्मित रहेको भेटिन्छ । मुवोन, न्युट्रिनो, क्वाक्र्स जस्ता सबएटमिक पार्टिकलसमेत इलेक्ट्रोन जस्तै कम्पनको अवस्थामा रहने यथार्थता वैज्ञानिक रूपमै प्रमाणित बनेको छ । नियमित कम्पनमा रहने उक्त सबै क्वान्टम पार्टिकलको गुण











नियमित कम्पनमा घुमेर गतिशील रहनुहुन्छ ।

नियमित कम्पनमा रहेर लिइने गतिशीलताको गुण अथवा दुवै पोजेटिभ र नेगेटिभ शक्तिबीचको द्वन्द्वात्मक सम्बन्धलाई सन्तुलित पारि अस्तित्वमा रहन सम्भव बनेको डान्सिङ पार्टिकलको गुणलाई उपमा दिन काव्यका पारखीले शिवशक्ति भन्ने शब्द चयन गरे । क्वान्टम मेकानिक्सले भने त्यसलाई युनिफाइड फिल्ड भन्ने नामकरण गर्‍यो ।

ब्रह्मा, विष्णु र महेश्वरको समेत अन्तिम असली रूप शिवशक्ति रहेको र पदार्थको अस्तित्वको वास्तविक संयोजनको विन्दु एकै रहेको भनी स्विकारिएको वैज्ञानिक पुष्टि बनेको सन्तुलित विन्दुलाई विज्ञानले आफ्नै पाराको क्वान्टम युनिफाइड फिल्ड भन्ने नाम दियो । जब तपाईं क्वान्टम पार्टिकललाई त्यो भन्दा













पनि सानोमा टुक्राउन खोज्नुहुन्छ, तपाईंलाई केही पनि हाता पर्दैन । यसको अर्थ हो सारा अस्तित्व अन्ततः शून्यबाट आएको छ । शून्यमै गएर सकिन्छ । हरेक अस्तित्वको सबैभन्दा सूक्ष्म रूप हो शिवशक्ति यानेकि कम्पन । कम्पन शून्यताबाट आएको हुन्छ । अन्ततः शून्यतामै विलीन हुन्छ ।

वैदिक कालका अवधारणा मानव स्वस्थ रहनका लागि तम गुण, रज गुण र सत गुणको सन्तुलित संयोजनको आवश्यकताको अनिवार्यता महसुस गरी अथवा तीन गुणप्रदायक शक्तिहरूको सन्तुलनको आवश्यकता रहने विचारधारामा आधारित रहेर विकसित भएको भेटिन्छ । वैदिक कालका अधिकांश ग्रन्थ जस्तै वेद, पुराण, चरक तथा सुश्रुतसंहिता आदिमा रोगव्याधिबारे चर्चा भएको





भेटिन्छ । रोगव्याधिबारे रोगजनक कृमिहरूको भूमिका समेतमा तम, रज र सत गुणप्रदायक शक्तिहरूको सन्तुलनमा खलल पु¥याएर नै अन्ततः शरीरमा रोगव्याधि पैदा हुने निचोडमा आवश्यक उपचार पद्धतिको विकास गरिएको अनुभूति हुन्छ ।

वैदिक कालका ग्रन्थहरूमा विभिन्न रोग विभिन्न नामबाट उल्लिखित गरिएको पाइन्छ । वेदमा कृमिको वर्णन विभिन्न स्थानमा गरेको भेटिन्छ । दृश्य तथा अदृश्य जीवबारे अथर्व वेदमा क्रिमि र कृमि गरी दुई प्रस्ट शब्दको प्रयोग भएको भेटिन्छ । कृमि शब्दले किरा र क्रिमि शब्द जुका, परजीवी (Worms) र रोगाणु (Germs) को सन्दर्भमा व्याख्या गर्दा प्रायः प्रयोग भएको भेटिन्छ (अथर्व वेद २३.३, ६)।





प्राचीन वेदको आयुर्वेदिक टेक्स्टहरूमा आजभन्दा हजारौँहजार वर्षअगाडि नै कृमिको नाममा सूक्ष्म जीवबारे वर्णन गरिनु र उपचार पद्धतिबारे उल्लेख गरिनु अत्यन्त चाखलाग्दो विषय हो। भाइरस, ब्याक्टेरिया जस्ता सूक्ष्म जीव देख्ने सुविधायुक्त माइक्रोस्कोपहरू विना वैदिक कालका ग्रन्थहरूमा सूक्ष्म जीवहरूको केही हदसम्म विस्तृत वर्णन भेटिन्छ। हामीले खाने खाना (जस्तै दुध, नौनी र अन्य), भाँडाकुँडा, पानी, माटो र शरीरमा पाइने आँखाले देखिने दृश्य र अदृश्य सबै जीवाणुलाई त्यहाँ कृमि भनिएको छ।

सङ्क्रमित चरा तथा जनावर असंख्य सूक्ष्म जीवहरू मतलब कृमिहरूको बासस्थान हुने उल्लेख गरिएको छ । पर्याप्त सरसफाइ हुन नसक्दा त्यस स्थानलाई







हानिकारक ब्याक्टेरिया अथवा कृमिहरूले आफ्नो बासस्थानका रूपमा उपयोग गरी फैलने अवधारणा हजारौँ वर्षअगाडिका वैदिक ग्रन्थहरूमा उल्लेख गरिएको छ । कृमिबारे वैदिक ग्रन्थहरूको सबैभन्दा पुरानो ग्रन्थ ऋग्वेद लेख्छ कृमि रोगजनक र गैररोगजनक प्रकृतिको हुने गर्छ । ऋग्वेदले सुझाए अनुसार केही कृमि (भाइरस, ब्याक्टेरिया, सूक्ष्म जीव) सङ्क्रामक प्रकृतिको हुने गर्छन् । अरू कृमि भने गैरहानिकारक प्रकृतिका रहन्छन्।

आयुर्वेद्को प्रमुख ग्रन्थ मानिने चरकसंहिता ऋग्वेदभन्दा अझै १५०० वर्षपछि लेखिएको मानिने आयुर्वेदिक संहिता हो। चरक संहितामा समेत कृमिहरूको रोगजनक र गैररोगजनक गुणहरूको वर्णन गरिएको छ । यो निश्चित हो कि













चरकसंहितामा आज हामीले आधुनिक विज्ञानमा प्रोबियोटिकहरूबारे बताउने गरिए जस्तो गरी कृमिहरू (ब्याक्टेरियाहरू) सम्भावित रूपमा लाभदायक हुने गर्छन् भनेर प्रस्ट उल्लेख भएको भेटिँदैन। यसको सट्टामा ग्रन्थहरूमा गैरहानिकारक वा गैररोगजनक कृमिलाई समेत रहन्छन् भनी यकिन हुनु निकै चाखलाग्दो विषय रहेको छ ।

हुन त विज्ञानले राम्रो र नराम्रो भनी ब्याक्टेरियाको वर्गीकरण गर्दै गर्दा तथाकथित राम्रो भनिएको ब्याक्टेरियाले एक व्यक्तिका लागि राम्रो गर्दैगर्दा अर्को व्यक्तिका लागि राम्रो गर्ने निश्चित रहँदैन । कतिपय स्थितिमा हानिकारक ब्याक्टेरियाको भूमिकासमेत खेलिदिन सक्छ । हाल राम्रो गनिएको ब्याक्टेरियाहरू भविष्यमा अनुभवबाट









विषाक्त गनिने पनि सम्भावना देखिन्छ । त्यो तर्कबाट हेर्दा कृमिहरूबारेको वैदिक ग्रन्थको अवधारणालाई पूर्ण सत्य नरहेकोसमेत भन्न सकिने स्थिति छैन । किनकि आज पनि एक संस्कृतिका मानिसमा राम्रो गरिरहेको प्रोबियटिक्स अर्को फुड हेबिटको समुदायमा विषाक्त बनेका धेरै अनुभव हामीसँग छ ।

वैदिक ऋचाहरूमा कृमिहरूबारे उल्लेख गरेको भेटिन्छ । जबकि आयुर्वेदिक ग्रन्थहरूमा भने कृमि रोग अन्तर्गत सूक्ष्म जीव कृमिहरूका (भाइरस, ब्याक्टेरिया र अन्य) कारण हुने गरेका बिमारहरू र तिनको उपचारहरूबारे जोड दिने गरेको देखिन्छ। बाहिरी छालामा हुने कृमिहरूलाई वक्भा, पाचन प्रणालीको कृमिहरूलाई अभ्यंतरा, दाँतको










कृमिहरूलाई दन्त र अन्य भागमा भेटिने कृमिहरूलाई अन्यस्थानाश्रयी आदि भनेको भेटिन्छ ।

यजुर्वेदमा रोगाणुलाई विभिन्न उपमा तथा समानार्थी शब्दसमेत दिइएर उल्लेख गरिएका छन्। जस्तै सबैभन्दा खतरनाक रूप रुद्रको उपमा दिएरसमेत रोगाणु नियन्त्रणको वर्णन गरिएको छ । जस्तै: मानव शरीरमा गम्भीर संक्रमण गराउन जिम्मेवार रोगाणु नियन्त्रणक रुद्रका कारण मानिसलाई अत्यन्त धेरै रुवाउने गर्छ (यजुर्वेद १६/५४) चर्चा भेटिन्छ। जसरी ड्रेसिङ गर्दा घाउ दुख्छ त्यस्तै विषाणु र रोगाणुको प्रभाव क्षेत्र वाट तिनीहरूलाई हटाउने प्राकृतिक रोक प्रतिरोधी शक्ति रुद्र शक्ति सक्रिय रहँदा पिडा बोध हुने गर्दछ। आफ्नै शरीरका काम











नलाग्ने भागहरू निकालेर फाल्ने क्रममा समेत कहिलेकाहीँ इन्फ्ल्यामेसन लगायतका पीडाहरू हुने गर्दछ ।रुद्र शक्ति लाई वरुण र मरुत शक्तिले आफ्नो कर्म गर्न नियमित अविचलित सहयोग गर्ने गरेको सन्देश र व्याख्या वेदमा भेटिन्छ ।

एकापसमा सम्बन्धित तर विभिन्न प्रकारका हानिकारक रोगाणु नियन्त्रण भूमिकामा रहने गरि मरुतलाई खतरनाक रोग निम्ताउने रोगाणुको प्रतिरोधी शक्तिको उपमा दिएर अदृश्य प्रकृतिका विभिन्न संक्रामक रोगाणुहरू बारे वर्णन गरिएको छ । यजुर्वेदमा विभिन्न सन्दर्भमा, विविध सांकेतिक उपमा सहित मरुत, वरुण र रुद्र शब्दको पटकपटक प्रयोग प्रयोग गरी वैदिककालमा माइक्रोबायोलीजी र बायोटेक्नोलोजीबारे प्रचुर ज्ञान













रहेको तथ्य पुष्टि भएको छ।

माइक्रोबायोलोजिस्ट हरुले भर्खरै मात्रै महसुस गर्दै गरेको केही निश्चित रोगहरू जुन शरीरको बाहिरी, भित्री र दाँतमा रहने कृमिहरूको गतिविधिसँग सम्बन्धित रहने गर्छन्, तीबारे आयुर्वेदमा प्रस्ट उल्लेख भएको छ। वास्तवमा पूरै मानव शरीर एक सेलयुक्त कृमिको उत्पत्तिबाट विकसित भएर बनेको विज्ञानको हालको मान्यता समेत वैदिक टेकस्टहरूमा यकिनका साथ प्रस्ट लेखिएको भेटिनु सबैका लागि आश्चर्यलाग्दो अवस्था हो । यथार्थमा वेद र आयुर्वेदिक ग्रन्थमा उल्लिखित कृमि तथा कृमि रोगबारे विस्तृत वर्णनहरूले जीव विज्ञान र चिकित्सा विज्ञानको क्षेत्रमा उल्लेखनीय योगदान गरेको कुरा चिकित्सा विज्ञानको इतिहासले स्पष्ट











पार्छ ।

कृमि तथा कृमिजन्य रोगको ज्ञानका अतिरिक्त आन्तरिक जडीबुटी र खनिज पदार्थयुक्त उपचार पद्धतिका ग्रन्थहरूले प्रतिपादन गरेका वैदिक तीन मौलिक सिद्धान्त आयुर्वेदिक तथा आधुनिक चिकित्सा विज्ञानले फड्को मार्ने गरी प्रगति गर्नका लागि अहम् कोसेढुंगा बनेको यथार्थसँग आज कुनै विवाद रहेको छैन।

चिकित्सा विज्ञानको राडारमा एक मनमोहक अन्तर्दृष्टिका रूपमा स्थापित मौलिक तीन वैदिक सिद्धान्त छन्: १) कृमि अपकर्सना मतलबः कृमिहरूलाई भौतिक रूपमै हटाउने । २) निदान परिभरजना मतलब कृमिहरूको संक्रमणलाई सम्भव तुल्याउने कारकको नै उन्मूलन गर्ने । ३) प्रकृति













विघटन मतलब प्रकृति र शरीरको प्रकारमै परिवर्तन गर्ने ताकि कृमिजन्य संक्रमण र रोगको सम्भावना मुक्त परिस्थितिको पैदा होस् ।

जस अन्तर्गत एकातर्फ कृमिहरूको (परजीवी र जीवाणु) बासस्थान तिनीहरूलाई प्रतिकूल हुने गरी बासस्थानको प्रकृतिमा नै परिवर्तन गरिदिने उपाय अपनाउने गरिन्छ। जस्तै: जडीबुटी र खनिज पदार्थयुक्त औषध उपचार विधिको उपयोग गरेर। त्यसका साथै होस्टका रूपमा रहेको मानव पाचन प्रणालीको प्रकृति र प्रकारमा नै परिमार्जन गरिदिने विधि प्रयोगमा ल्याइन्छ। जस्तै: आयुर्वेदिक र हिलिङ खानपान तथा जीवन पद्धतिबाट।

आज विज्ञान वा आयुर्विज्ञानले ड्रग र कठोर जडिबुटीको प्रयोगबाट पहिलो त कृमिहरूलाई





मार्नको सट्टा भौतिक रूपमै तिनीहरूलाई शरीरको संक्रमण रहेको भागबाट हटाउने उपाय लिइन्छ। दोस्रोमा संक्रमणका कारणहरू पत्ता लगाएर लक्षणको भन्दा मूल कारकको उपचार खोजिन्छ। ताकि कारणकै निवारण सम्भव बनोस् । जस्तैः कृमिनाशकको उपयोग, सूर्यको किरण, वातावरण सरसफाइ, मनोवैज्ञानिक सबलताका विधि, होम, मन्त्र आदि । तेस्रोमा कृमिहरूको प्रकृति अनुरूपको आवश्यकता पूर्ति हुने वातावरण हटाउने र प्रतिकुल परिस्थितिको सिर्जना हुने गरी अनुकूल प्रकृतिको विगठन गरिदिने नीति अपनाइन्छ। जस अन्तर्गत संक्रमित भागमा जडीबुटी र खनिज पदार्थयुक्त औषध उपचार प्रयोग, पाचन प्रणालीमा आयुर्वेदिक र हिलिङ खानपानको उपलब्धता तथा योग,





मेडिटेसन आदि जस्ता उपाय अपनाउन सकिन्छ । जस अन्तर्गत मानव प्रतिरक्षा क्षमताको अभिवृद्धि गर्ने आयुर्वेदिक काइदाहरू संसारकै प्रिय उपायका रूपमा विश्वभर चर्चित बनेको छ।



# वेदमा सूक्ष्म कण

## ऋग्वेद र शुक्ल यजुर्वेदः

## सूक्ष्म जीव / कण विज्ञान

नेपाली परम्पराको रैथाने ज्ञान तथा प्रविधिको चुरो ज्ञान संकलित वेद र विज्ञानबारे संसारभर खुलेर चर्चा मात्र हुँदैन प्रशंसा समेत हुने गर्छ । इनोभेसन र नयाँ आविष्कारमा लागेकाको एउटा रिफरेन्स गाइड बनेको छ नेपाली परम्पराको रैथाने ज्ञान तथा प्रविधि । त्यही रैथाने वेद र विज्ञानका गहन ज्ञानबाट भने बत्तीमुनिको अँधेरो बनेर नेपाली समाज फाइदा प्राप्त गर्न र व्यावहारिक इनोभेसनमार्फत आफ्नो आध्यात्मिक मात्र हैन, कर्मिक जीवनसमेत सहज








बनाउनबाट वञ्चित छ । पश्चिमा धर्म प्रचारकको विभिन्न ज्ञात अज्ञात शीर्षकमा चन्दा र सहयोग प्राप्त सामाजिक अभियन्ता, सामाजिक विकासका अगुवा, दातृ निकाय, पत्रकारिता र राजनीतिक गतिविधिको संयुक्त प्रयासको ग्रान्ड डिजाइन बत्तीमुनिको अँधेरो पैदा गर्ने प्रमुख कारक बनेकै छ ।

त्यसमाथि नेपाली परम्पराको रैथाने ज्ञान तथा प्रविधिको चुरो ज्ञान समाजमा लैजाने नाममा मात्र आफूलाई देवत्व गराउन सक्रिय कतिपय समूह हलुवामा बालुवा भएर समाजको हरेक तप्कामा सक्रिय देखिन्छ । आजको युग कर्म युग हो । त्यो भनेको सबै कुरा व्यापारीकरण भएको समय मात्र हैन, मानिसले आफूलाई फाइदा हुने हरेक कुरा जसरी पनि प्राप्त गरी छाड्ने युग हो । जसरी एक










मुर्दामा परेका किराहरू मुर्दाको रस सकिएपछि मुर्दा सहित आफू पनि अस्तित्वहीन हुन्छन् र माटोमा मिल्छ त्यस्तै अप्राकृतिक कुरालाई आफ्नो क्षणिक लाभमा लैजाने शक्ति पनि त्यो असत्यको पर्दा उत्रनासाथ विलीन हुने युग हो यो । जसमा हाल निकै नाम चलेका मान्यगन्य र चुनिएका निकै प्रख्यात बनिरहेका व्यक्ति र तिनका प्रवृत्तिसमेत पर्छ। खैर त्यो कुरा समयलाई छाडिदिएर भावनात्मक कुरातर्फ लागौं जुन यथार्थपरक रहने गर्छ।

एकछिनलाई सोचौं, यदि हाम्रा समाजका अलिकति संस्कृत भट्याउन जान्ने वर्गमा समाजबाटै संस्कृत लोप हुँदै गएको समयमा संस्कृत भाषा जानेको भरमै वेदका गहिरा वैज्ञानिक यथार्थ सम्पूर्ण रूपमै













जान्छु बुझ्छु भन्ने अहम् हाम्रा संस्कृत बुझेका अगुवामा नभएर सम्बन्धित विषयमा विज्ञता हासिल गरी वेदको भावार्थ समाजमा ल्याउने कष्ट गरेको भए आज हामी वेदको सार पढ्दै गर्दा सायद तल गरी जस्तो भावार्थ प्राप्त गरी रहेको हुन्थे म होला । इनोभेसन र समृद्धि नेताको मलद्वारलाई स्वर्गद्वार देख्ने न त आजको राजनीतिसँग आबद्ध विज्ञ न त हाम्रा विश्वविद्यालय जस्ता विभाजनकारी संस्थामा कार्यरत प्राज्ञको पहुँचको विषय हो भन्ने वेदका कुरा कक्षा ५ मै सिकिन्थ्यो होला ।

आजका जस्ता नेपाली बापका अंग्रेजी औलाद हुने पश्चिमा संस्कार देखाउन पाउँदा आफू सहरिया बन्ने भुइँफुट्टा वादले हाम्रा भर्खरभर्खर कलेज पढ्दै गरेका बच्चाहरूको दिमाग प्रदूषित बन्थेन होला ।







आज हाम्रो विशिष्ट ज्ञान उद्यमशीलतामा परिवर्तित बनिसकेको अवस्था हुन्थ्यो होला । जे होस् त्यसैलाई ध्यानमा राखी सूक्ष्म जीव विज्ञानको वैज्ञानिक भावार्थमा ऋग्वेद र शुक्ल यजुर्वेदको अक्षर अक्षरले के भन्छ भन्ने अनुत्पादक परम्परागत प्रयासविपरीत भावार्थ वा चुरो कुरो के भन्न खोजिरहेछ त्योबारे चर्चा गरौँ ।

## मुण्डकोपनिषद: अद्वैत

संस्कृतमा प्रणवको अर्थ "ब्रह्माण्डीय ध्वनि" ॐ हुन्छ। ब्रह्माण्डीय ध्वनिको कम्पन पैदा गर्ने ॐकार जप गरी गरिने गहिरो ध्यानले व्यक्तिलाई उसको चेतनाको अधिकतम उपयोग गरी आफू र संसारलाई जान्ने, आफू संसारमा अस्तित्वमा रहनुको






कारण पहिल्याउने जस्ता आत्मा ज्ञान प्राप्त गर्न सहयोग पुग्दछ।

विज्ञान वा अविद्याको सहायताले संसारको हरेक रहस्य जान्न सक्ने विद्याको खोजमा प्रणव जप सहयोगी बन्दछ । व्यक्तिमा भएको आत्मा आफैमा परमात्मा वा प्रकृति चेतनाको अंश हो।

आत्माको स्वरूपमा ढालिएको परमात्मा वा प्रकृति चेतनाको अंश व्यक्तिको शरीर संग सहकार्यमा रहेका कारण व्यक्तिमा चेतनाको निर्माण हुने गर्दछ । जसरी पानी भित्र छिरेको प्रकाशको किरणको प्रभावले शुद्ध पानीलाई पारदर्शी पार्न सहयोग गर्दछ त्यसै गरी भौतिक शरीर सँग हुने आत्माको मिलनको प्रभावले शुद्ध मनोविज्ञान भएको ज्ञानी व्यक्तिमा प्रभावशाली चेतनाको निर्माण गर्ने गर्दछ । जसलाई







आत्मा शुद्धि भनिन्छ।

आत्मा शुद्धि व्यक्तिले आफ्नो मुक्तिको मार्गको तय गर्न जरुरी पर्दछ । मुण्डकोपनिषद को २.४.४ मा धनुष बाणको उदाहरण दिएर व्यक्तिले आफ्नो मुक्तिको मार्गको कसरी तय गर्न सम्भव रहन्छ भन्ने चर्चा भएको छ।

**प्रणवो धनुः शारो ह्यात्मा ब्रह्म तल्लक्ष्यमुच्यते।**

**अप्रमत्तेन वेद्धव्यं शरवत्तन्मयो भवेत् ।।**

**।। मुण्डकोपनिषद् २.४.४।।**

**भावार्थः** ॐ धनुष हो । आत्मा धनुषको बाण हो । ब्राह्मण आत्माको वास्तविक लक्ष्य वा तिर–विन्दु हो । जुन हरेक जीवित व्यक्तिको मुक्तिको अटल उद्देश्य हो। जसरी एउटा तीरले अचुक रूपमा









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



आफ्नो निशानामा गएर मिल्दछ त्यसरी नै आत्मा ब्राह्मणमा लीन भएर मुक्ति प्राप्त गर्दछ ।

**व्याख्याः** मुण्डकोपनिषदको श्लोक २.२.४ अनुसार प्रणव जप र एकाग्रता रुपी ध्यानको माध्यम वाट आफ्नो मनलाई परम यथार्थ ब्रह्ममा केन्द्रित गरी त्यसैमा विलीन हुने गरी अद्वैत अवस्थामा पुग्नु नै आत्माको मुक्तिको अवस्था हो । जहाँ प्रणव जप र एकाग्रताले व्यक्तिमा गहिरो अनुभूति र आत्मा ज्ञान उपलब्ध गराउने गर्दछ ।

वेदान्तमा आध्यात्मिकताको सम्पूर्ण उद्देश्य आत्मा र ब्रह्मको एकता स्थापना गर्नुमा रहेको छ । जसको लागि व्यक्तिलाई आत्मा र अहङ्कार बिचको भिन्नता पहिल्याउन सहयोग गरिन्छ । शरीर भित्र रहेको आत्मा लाई अहङ्कारको केन्द्रको जालोले घेरेर आत्मा





॥ श्री गणेशाय नमः ॥





जीवात्मा बन्ने गर्दछ ।

जसरी डाक्टरले मोती बिन्दु भएको आँखाको बाहिरी पर्दा अप्रेसन गरेर हटाए पछि मोतीबिन्दुको रोगीले फेरी आँखा देख्न सुरु गर्दछ त्यस्तै अविद्या र विद्याको सहारा लिएर गरिने आत्मा ज्ञान रुपी मनोवैज्ञानिक शल्यक्रियाको मध्यम वाट जीवात्मामा रहेको अहङ्कारको जालो हटाएर जीवात्मा बाट आत्मालाई मुक्त गर्न प्रणव जप र एकाग्र ध्यानले सम्भव गरिदिन्छ । वेदान्तको आध्यात्मिकताको शिक्षाको अनुभूतिले आत्मा र ब्रह्म एकै चिज रहेको अनुभूतिको ज्ञान मार्फत आफ्नो चेतनालाई अद्वैत आत्माको मुक्तिको अवस्थामा पु¥याउने गर्दछ ।

मुण्डकोपनिषद् श्लोक २.२.५ यसरी लेख्छः









**यस्मिन्द्यौः पृथिवी चान्तरिक्षमोतं मनः सह प्राणैश्च सर्वैः ।**

**तमेवैकं जानथ आत्मानमन्या वाचो विमुञ्चथामृतस्यैष सेतुः ।।**

**।। मुण्डकोपनिषद् २.२.५।।**

**भावार्थः** आकाश, पृथ्वी, र अन्तरिक्ष सबै एउटै तत्वले बुनिएर सन्तुलित अस्तित्वमा एकबद्ध भएर रहेका छन्, जसमा मन र सबै प्राणहरू समेत समाहित छन्। सम्पूर्ण जगत लाई एकतामा लिने त्यो एक मात्र परमात्मालाई चिन्नुहोस्। अन्य सबै शब्दहरू वा खोजहरू (वा कामहरू) त्याग्नुहोस्। सांसारिक ज्ञानको व्याकुलतालाई पार गर्दै अमरत्व प्राप्त गर्ने पुल भनेकै आत्माको अनुभूतिमा मात्र








केन्द्रित रहने कर्म हो।

व्याख्या: मुण्डकोपनिषद् श्लोक २.२.५ ले उपनिषद्हरूमा 'ब्रह्म' वा 'आत्मा' भनिने सर्वोच्च सत्य प्राप्त गर्ने उपायको बारेमा ज्ञान दिन्छ। श्लोकको प्रत्येक भागको भावार्थ यसरी बुझ्न सकिन्छः

"यस्मिन्द्यौः पृथिवी चान्तरिक्षमोतं" यसको अर्थ हो, आकाश (द्यौः), पृथ्वी (पृथिवी), र अन्तरिक्ष (अन्तरिक्ष) सबै एउटै सर्वोच्च सत्यद्वारा पूर्ण रूपमा बुनेका छन् र सम्पूर्ण ब्रह्माण्डमा समाहित भएका छन्।

"मनः सह प्राणैश्च सर्वैः" यसको अर्थ हो, मन (मनः) र सबै जीवन शक्तिहरू (प्राण) पनि सर्वोच्च









सत्यबाट उत्पन्न भएका छन् र तिनैमा समाहित छन्।

"तमेवैकं जानथ आत्मानमः" यसको अर्थ हो, त्यसैले एक मात्र सर्वोच्च सत्यलाई, अर्थात् आत्मालाई, चिन्न र बुझ्न प्रयास गर्नुहोस्। अन्तिम सत्य केवल एक (अद्वैत) छ।

"अन्या वाचो विमुञ्चथः" यसको अर्थ हो, भौतिक संसारका अन्य कुराहरूबाट आफ्नो ध्यान हटाई केवल आत्म–ज्ञानमा केन्द्रित हुनुहोस्।

"अमृतस्यैष सेतुः" यसको अर्थ हो, आत्म–ज्ञान नै "अमरत्वको पुल" हो, जसले जन्म र मृत्युको चक्रबाट व्यक्तिलाई मुक्त गराउँछ ।

सारांशमा मुण्डकोपनिषद् श्लोक २.२.५ ले




साधकहरूलाई मुख्य रूपमा यो उपदेश दिन्छ कि सम्पूर्ण सृष्टि, मन र जीवन शक्तिहरू सबै सर्वोच्च आत्माबाट उत्पन्न भएका हुन् र तिनैमा समाहित भएर सदैव रहन्छन्। तसर्थ, एक मात्र अन्तिम सत्य रूपी आत्मालाई चिन्दै जीवनमा भ्रम उत्पन्न गर्ने र ध्यान अन्यत्र मोड्न भूमिका खेल्ने मायावी संसारसँगको मोह पूर्ण रूपमा त्यागेर मात्र अमरत्व प्राप्ति (मुक्ति वा मोक्ष) सम्भव हुन्छ।

## वैज्ञानिक भावार्थमा ऋग्वेद

### मरुत

वेदमा नयाँ निर्माणको लागि ध्वंस गर्ने नियतमा वा भएकै अवस्थामा सुधारात्मक वा नियन्त्रणात्मक हस्तक्षेप मार्फत समग्र सकारात्मकता तर्फ लैजान





प्रकृतिले व्यवस्थित गर्ने सकारात्मक प्राकृतिक शक्तिलाई मरुत भन्ने गरिन्छ । वैदिक पौराणिक कथामा उल्लेख हुने सप्तगण मरुत शब्दले सात समूहका मरुतहरूलाई जनाउँछ । मरुतहरू आँधी, हावा, चट्याङ, भूकम्प आदि सँग सम्बन्धित शक्तिशाली देवताहरू मानिन्छ।

तिनीहरूलाई प्रायः शक्तिशाली, उग्र र विचलित गराउने खुबीको हुने गर्दछ । वैदिक इन्द्र देवता मैत्री शक्तिको रूपमा चिनिने मरुतहरू शक्तिशाली परिवर्तनका बाहक हुन्। जस्तै सामान्य खाना पकाउने, पाचन गर्ने, सारतत्व निकाल्ने शक्ति अग्नि हुने गर्दछ । सामान्य आगो पनि अग्नि नै मानिन्छ। जब आगोले डँडेलो लाग्दछ, मानिस, घर जलाउने, विनाश गर्ने अग्नि भने वरुण रूपको वा रौद्र रूपको



मानिन्छ।

सप्तगण मरुतका अर्थ “सात समूह“ वा “सात वर्ग“ समूहमा विभाजित शक्ति हो । प्रत्येक समूहमा विभिन्न सङ्ख्याका देवताहरू (शक्तिको श्रोतहरू) समावेश हुन्छ। शास्त्रहरूमा रथमा चढेर आँधी वर्षा आदि ल्याउने तथा इन्द्रलाई राक्षसहरू (असुरहरू) विरुद्धको युद्धमा सहयोग गर्ने किसिमका भनी प्रायः दुई प्रकारका मरुतहरुको चर्चा हुने गर्दछ।

नियमित प्रकृतिको ऊर्जा जुन बादल बनाउने, पानी पर्ने, गड्याङगुडुङ हुने, बर्साद गर्ने, सामान्य हावा, हुरी, आँधी हुने, उमेर अनुरूपको सामान्य रोग, जीर्ण रोग आदि जस्ता कार्यमा संलग्न हुन मरुत लाई रथमा चढेर वितण्डा ल्याउने प्रकृतिको मरुत मानिन्छ।











कहिले काहीँ मात्र देखिने महामारी, जीवन नै जोखिममा पार्ने रोग, भूकम्प, सुनामी, ठुलो आँधी बेरी, ठुला ठुला घटना आदि लाई इन्द्रलाई राक्षसहरू (असुरहरू) विरुद्धको युद्धमा सहयोग गर्ने मरुतहरू भनेर चिनिन्छ। वैदिक अवधारणामा हरेक प्राकृतिक घटनाको कुनै निश्चित कारण हुने गर्दछ। त्यसको कारण मूलतः नयाँ निर्माणको लागि ध्वंस गर्ने नियतको वा भएकै अवस्थामा सुधारात्मक वा नियन्त्रणात्मक हस्तक्षेप जरुरी देखिएकोले घटेको ठानिन्छ ।

वैदिक पौराणिक कथाहरू अनुसार मरुतहरू रुद्र (शिव वा नयाँ निर्माणको लागि ध्वंस गर्ने शक्तिको उग्र रूप; पृष्णिका (गाई वा पृथ्वी अर्थात् उर्वरा शक्तिको प्रतीक) छोराहरू हुन् । प्राकृतिक न्याय





॥ श्री गणेशाय नमः ॥





स्थापनाको लागि सक्रिय रहने मरुतहरू विशेष गरी आँधी र हावा सँग सम्बन्धित रहेको प्रकृतिका उग्र र विनाशकारी पक्षहरूको प्रतीक हुन्। इन्द्र सँग (मन–मनोविज्ञान, मस्तिष्क–बुद्धि र चित्त–अहङ्कार) विशेष सम्बन्धमा रहने मरुतहरू इन्द्र वा बुद्धिमता सँग अधिक सम्बन्धित रहने अर्थमा ऋग्वेदका धेरै स्तोत्रहरूमा प्रकृतिको गहन ज्ञान मार्फत प्रकृति मैत्री उपाय वाट त्यसको सदुपयोग गर्ने उपाय निर्देशित गर्न समर्पित रहेको देखिन्छ।

समाजमा मानवताको स्थापना गर्नका खातिर सामना गर्नु पर्ने चुनौती र अवरोधहरू लाई वैदिक शब्दावलीले सर्प वृत्रासुर वा वृत्रासुर भन्ने गर्दछ । मृत्यु र विकार माथि विजय गरेर सन्तुलित स्वस्थ जीवन र दैनिकी व्यवस्थापन गर्न सहयोगी









शक्तिलाई वेदले इन्द्र वा आत्मबल भन्ने गर्दछ ।

सर्प वृत्रासुर जसले जीवको शरीर र पृथ्वी वा प्रकृतिमा सुख्खा र अराजकता ल्याउन प्रमुख भूमिका खेल्दछ त्यसको विरुद्ध लड्नको लागि इन्द्र लाई सघाउने शक्ति मरुत हो । इन्द्र र मरुतको संयुक्त गतिविधि सदैव सुख्खा पन विरुद्ध वर्षा वा चिस्यान ल्याउने, वायुमा आधारित समस्याको समाधान गर्ने तथा मनोवैज्ञानिक र ब्रह्माण्ड सन्तुलन कायम राख्न अधिक सक्रिय हुने गर्दछ ।

प्रकृतिका मौलिक तर अनियन्त्रित शक्तिहरूको प्रतीकको रूपमा सक्रिय रहने मरुतहरू आक्रामक सक्रिय ऊर्जा युक्त चलायमान तरल तथा वायु तत्त्वहरूको रूपमा रहने ठानिन्छ ।








संक्षेपमा आँधी, हुरी, विनाशसँग सम्बन्धित रुद्र; आत्मबल वा मन, बुद्धि र अहङ्कार संग सम्बन्धित इन्द्र; तथा हावा संग सम्बन्धित पवन मैत्री रहेर सात समूहमा काम गर्ने मरुतहरू लाई सप्तगण मरुत भनेर चिनिन्छ । सप्तगण मरुत सप्त मातृका अर्थात् संसारलाई दुष्ट शक्तिहरूबाट जोगाउने रक्षक देवीहरूका रूपमा रहने सात दिव्य शक्तिको ऊर्जा संग इन्द्रको निकट सम्बन्ध विकास गरी शरीर र ब्रह्माण्डको सन्तुलन कायम राख्न नियमित सक्रिय रहने गर्दछन् ।

## यज्ञ, अनुष्ठान

मानवीय रूपमा प्राकृतिक नियमको पालन गर्नु लाई वेदले वैदिक धर्म मान्दछ। वेदमा प्राकृतिक









नियमको पालन कसरी हुन्छ भन्ने बारेका सन्देशहरु छन्। त्यसलाई अनुसरण गर्नु वैदिक धर्म कर्म मानिन्छ। अनुसरण नगर्नु अधर्म हुने गर्दछ। अविद्या र विद्यामार्फत वेदको ज्ञान लिने, अनुभूति गर्ने र व्यवहारमा अपनाउने कार्य आध्यात्मिक ज्ञान र अभ्यास भित्र पर्दछ। आध्यात्मिक ज्ञान र अभ्यासको केन्द्रीय तत्वको रूपमा वेदमा यज्ञलाई पवित्र अनुष्ठान तथा बलिको प्रतीक ठानिन्छ। बलिको अर्थ यज्ञमा होम गर्नु र व्यवहारमा कर्म अन्तर्गतको गतिविधि सम्पन्न गर्नु हो। व्यक्तिले आफ्नो जिम्मेवारी पूर्ति गर्न गरेको हरेक उसको व्यवहारिक जीवनको यज्ञ हो। अनुष्ठान आदिमा हुने यज्ञमा घिउ (शुद्ध घ्यू), अन्न, र सोम (एक पवित्र पेय) जस्ता विभिन्न सामग्रीहरू लाई पवित्र आगोमा




समर्पित गरिन्छ। त्यस क्रममा वैदिक मन्त्रहरूको उच्चारण गरिन्छ।

यज्ञको उद्देश्य बहुपक्षीय हुने गर्दछ। अनुष्ठान बलि अन्तर्गत मुख्य रूपमा देवताहरूप्रति श्रद्धा र धन्य भाव अर्पण गरिन्छ । देवताहरूको कृपा र आशीर्वाद प्राप्त गर्न खोजिन्छ । यज्ञ, अनुष्ठानले ब्रह्माण्डीय व्यवस्था (ऋत) कायम राख्ने र व्यक्तिको साथै समुदायको कल्याण सुनिश्चित गर्ने विश्वासमा गरिन्छ। आध्यात्मिक शुद्धीकरणको उपाय र दिव्य ज्ञान प्राप्तिको उद्देश्यले यज्ञमा विविध आध्यात्मिक अभ्यासहरू गरिन्छ । साधकहरूले आफूलाई ब्रह्माण्डीय सिद्धान्तहरू मैत्री राख्ने र उच्च आध्यात्मिक अवस्थाहरू प्राप्त गर्ने लक्ष्य राख्छन् । सामाजिक र नैतिक व्यवस्था कायम राख्नको लागि





समाजमा सामाजिक र नैतिक कर्तव्य बारे (धर्म) चेतना जगाउने यज्ञको उपयोग गरिन्छ। पुरोहितहरू, संरक्षकहरू र समुदायको सबै पक्षको व्यापक सहभागिता जुटाउने, सामाजिक धर्म, नैतिक कर्तव्य, व्यवहारिक ज्ञान र आध्यात्मिक ज्ञानका कुराकानीहरू गर्ने गतिविधिहरू यज्ञको नियमित उद्देश्य भित्र पर्दछ। यज्ञ मार्फत सामाजिक कल्याणको लागि दान र निस्वार्थ सेवा भाव जगाउने कार्य हुन्छ । समर्पण भावको विकास गर्ने,अहङ्कार, इच्छा र भौतिक आशक्तिहरूको त्याग गर्ने र उच्च आध्यात्मिक लक्ष्यहरू प्राप्त गर्न आफूलाई तैयारी राख्न यज्ञको सदुपयोग गरिन्छ ।

वेदमा विभिन्न प्रकारका यज्ञहरूको वर्णन गरिएको छ, जसको आफ्नै विशिष्ट उद्देश्यहरू हुने गर्दछ ।



अग्निहोत्र यज्ञ अन्तर्गत दैनिक अनुष्ठान गरिन्छ जसमा दूध, अन्न, र घिउलाई सूर्योदय र सूर्यास्तमा आगोमा अर्पण गरिन्छ । अश्वमेध यज्ञ सार्वभौमिकताको अनुभूति गर्नका लागि हुने राजसी बलि हो । सोम यज्ञ अमरत्व र दिव्य आध्यात्मिक अनुभूति लिने सोम रस समर्पण गरिने अनुष्ठान हो। समग्रमा यज्ञ तिनै प्रकारका वैदिक अनुष्ठानहरूको एक महत्व पूर्ण पक्ष हो जसले बलिदान, भक्ति र ब्रह्माण्डीय समन्वय आदिको अवधारणा सांसारिक जीवनमा अत्यन्त महत्त्वपूर्ण रहेको अनुभूति दिने कार्यलाई मूर्त रूप दिन उपयोग गरिन्छ।

अग्निहोत्र एउटा वैदिक अनुष्ठान हो जसमा सूर्योदय र सूर्यास्तमा घिउ, अन्न, र अन्य प्राकृतिक पदार्थहरू पवित्र आगोमा अर्पण गरिन्छ । अग्निहोत्र अनुष्ठानले







वातावरण शुद्ध गर्ने र शारीरिक तथा मानसिक स्वास्थ्यलाई प्रवर्द्धन गर्ने गर्दछ। अग्निहोत्रका क्रममा उत्पन्न हुने औषधीय धूवाँ र वासना ब्याक्टेरिया र भाइरसको विरोधी गुण युक्त हुने हुँदा तिनीहरूले वातावरणलाई सफा गर्ने, श्वासप्रश्वासको स्वास्थ्यमा सुधार गर्न मद्दत पु¥याउँछ। वरपरको वातावरणमा प्राण (जीवन शक्ति) बढाउने, मनोवैज्ञानिक सबलता बढाउने, एन्टीएलर्जी क्षमता बढाउने काम समेत अग्निहोत्र यज्ञले गर्दछ। जसले व्यक्तिको समग्र मानसिक, शारीरिक, मनोवैज्ञानिक र आध्यात्मिक स्वास्थ्य सबल गर्न र उसलाई ऊर्जाशील राख्ने कार्य गर्दछ। पर्यावरणीय स्वच्छताको दृष्टिकोणमा अग्निहोत्रको हावा शुद्ध गर्ने, प्रदूषकहरू लाई निस्तेज गरिदिने आदि क्रिया







मार्फत वातावरणीय स्वच्छता बढाउने भूमिका महत्त्वपूर्ण छ। घिउ र जडीबुटी जस्ता जैविक पदार्थहरू जलाउँदा उत्पन्न हुने लाभदायक धूवाँले हानिकारक प्रदूषकहरूलाई प्रतिरोध गर्न र वातावरणमा विषाक्त पदार्थहरूको उपस्थिति घटाउन सहयोगी हुन्छ। अग्निहोत्रको अभ्यासले स्वस्थ वातावरण निर्माणमा योगदान दिने, पर्यावरणीय सन्तुलन प्रवर्द्धन गर्ने र लाभकारी जीवहरूको कल्याण गर्ने गर्दछ ।

परम्परागत रूपमा शासक वा राजाहरूले आफ्नो सार्वभौमिकताको प्रमाणित गर्नका सम्पन्न गर्ने अश्वमेध यज्ञमा अनुष्ठानको मूल उद्देश्य सम्पूर्ण राज्यको शान्ति र समृद्धिमा केन्द्रित हुने भएकाले यसले जनताको सुरक्षाको अनुभूति दिन र













मनोवैज्ञानिक स्वास्थ्यमा पनि सकारात्मक प्रभाव दिने गर्दछ । अश्वमेधमा प्रयोग हुने घिउ, अन्न, र जडीबुटी जस्ता पदार्थहरूलाई औषधीय गुण भएका मानिन्छ, जसले अनुष्ठानमा सहभागी हुने र त्यस वरपर हुनेहरूको स्वास्थ्य सुधार्न मद्दत पु¥याउँछ। पर्यावरणीय स्वच्छताको दृष्टिकोण अश्वमेध यज्ञ ठुलो स्तरमा हुने हुँदा ठुलो जमघट र प्राकृतिक स्रोतहरूको प्रयोग गर्दै गर्दा यसले ठुलो भूभागको पर्यावरणीय स्वच्छता कायम गर्ने गर्दछ। यज्ञका क्रममा अर्पण गरिने जैविक र प्राकृतिक पदार्थहरूल माटोलाई मलिलो बनाउने, हावा शुद्ध गर्ने र पर्यावरणीय सन्तुलन प्रवर्द्धन गर्ने गर्दछ। साथै यज्ञले वातावरणप्रति जिम्मेवारीको दिगो अभ्यासलाई प्रवर्द्धन गर्छ ।











सोम यज्ञमा पवित्र औषधीय वनस्पति तिनको सारतत्व, रसको अर्पण गरिन्छ। वैदिक र आयुर्वेदिक परम्परामा उच्च महत्त्व पाउने त्यस्ता सारतत्व र रसहरू दीर्घायु गुणका, तागत प्रवर्धन गर्ने, मानसिक स्पष्टता विकास गर्ने, तन्देरी पन कायम गर्ने, कायाकल्प गर्ने, यौन शक्ति वृद्धि गर्ने, हिलिङ्ग, औषधीय र आध्यात्मिक सबलता दिने आदि गुण हुन्छ। सोमको अनुष्ठानिक सेवनले शरीर र मनलाई छरितो राख्ने, प्रतिरक्षा प्रणाली बलिष्ठ गर्ने समग्र स्वास्थ्यलाई प्रवर्द्धन र सन्तुलित गर्ने गर्दछ।

सोम यज्ञले शरीरका दोषहरू (जैविक ऊर्जा) सन्तुलनमा राख्न पनि मद्दत गर्छ, जसले शारीरिक, मानसिक, मनोवैज्ञानिक र आध्यात्मिक स्वास्थ्यमा सुधार गर्छ। पर्यावरणीय स्वच्छताको दृष्टिकोणमा













सोम यज्ञको पर्यावरणीय स्वच्छतामा योगदान दिने, सोम वनस्पति र अन्य प्राकृतिक स्रोतहरूको संरक्षण र दिगो प्रयोगलाई प्रोत्साहन गर्ने, अनुष्ठानले प्रकृतिको पवित्रता र जैव विविधताको संरक्षणको महत्त्वलाई जोड दिने गर्दछ।

यज्ञमा प्रयोग हुने प्राकृतिक, जैविक पदार्थहरूले पारिस्थितिक सन्तुलन कायम गर्न र औषधीय वनस्पतिहरूको संरक्षणलाई टेवा पु¥याउने गर्दछ। सोम अनुष्ठानले मानव र वातावरण बिचको सह–जीवी सम्बन्ध बारे समाजलाई सचेत गर्न र आपसी लाभदायक अभ्यास कायम गर्न प्रोत्साहन दिन्छ ।

**ऋग्वेद मन्त्र १.१९.१**

**परति तयं चारुमध्वरं गोपीथाय पर हूयसे |**







## मरुद्भिरग्न आ गहि ||

**भावार्थः** विशिष्ट सुन्दर यज्ञ स्थल वा कार्यस्थलको रूपमा प्राप्त पृथ्वी रूपी वासस्थानको प्रकृति मैत्री संरक्षणको लागि, जीवहरूको रक्षाको लागि अग्नि (ताप, प्रकाश, परिवर्तनशील ऊर्जा, किरण तथा गति) र मरुत (वायु र जलको उच्च दबाब शक्ति तथा सूक्ष्म जीवको निर्माण, ध्वंस र प्रतिस्थापनका विशिष्ट तागत) जस्ता प्रकृतिमा उपलब्ध प्राकृतिक शक्ति र ऊर्जाको व्यवहारिक उपयोगको तरिका (मन्त्र) अत्यन्त प्रभावशाली हुने छ ।

सामान्य अर्थः परति (parati) - प्रतीत (Towards, in honor of); तयं (tayaṁ): त्यो (That); चारुमध्वरं (chaarumadhvaraṁ): सुन्दर यज्ञ स्थल






(Assigned beautiful sacrificial ground or activities or duty workplace) कार्य स्थलका गतिविधिहरु; गोपीथाय (gopiithaaya): पृथ्वी (गाई शब्द पृथ्वी जनाउन समेत प्रयोग हुन्छ) रुपी वासस्थानको प्रकृति मैत्री संरक्षणको लागि (For the protection of jiva); पर (para): आह्वान (Invocation or calling upon); हूयसे (huuyase): गरिन्छ कि (Are being invoked); मरुद्भिः (marudbhih): मरुतहरूको साथ (Along with the Maruts – the storm gods); अग्ने (agne): हे अग्नि (Fire Energy) ।

**व्याख्याः** जीव तथा भौतिक ऊर्जा क्षेत्रको पण्डित,

सन्त जस्ता विषय विज्ञको अनुसन्धान तथा खोज कार्य अनुभव अनुरूप जैविक तथा अजैविक भौतिक पदार्थको पदार्थ प्राकृतिक मैत्री प्राकृतिक दहनको (अग्नि) क्रममा हुने विखण्डन जस्तैः प्राकृतिक प्रोकोपको कारण जल्दा, ज्वालामुखी फुट्दा आउने अग्नि, राप, ताप र विविध प्राकृतिक ऊर्जा, जीवको मृत्यु हुँदा एक रूपबाट अर्को रूपमा परिवर्तन हुने क्रममा पैदा हुने शक्ति, भौतिक परिवर्तनको क्रममा पैदा हुने वायु (हावा, बाफ) आदि वाट प्राप्त हुने ऊर्जा आदि (मरुत, वरुण) दिगो पर्यावरणीय ऊर्जाको स्रोत हुने गर्दछ।

**ऋग्वेद मन्त्र १.१९.२**

**नहि देवो न मर्त्यो महस्तव करतुं परः|**





**मरुद्भिरग्न आ गहि ||**

**भावार्थः** न कुनै त्यस्तो प्रकृति शक्ति भनिने अर्को देवता नै अस्तित्वमा छ, न कुनै नश्वर (जन्मे पछि मर्ने पर्ने सर्तमा जीवित रहेका व्यक्ति वा अवतार) व्यक्ति र शक्ति नै अस्तित्वमा छ, जसले अग्निले सम्पन्न गर्न सक्ने अद्भुत र अतुलनीय कार्य सम्पन्न गर्न सक्दछ। अग्नि समान चमत्कारिक कार्य अरू कुनै शक्तिले गर्न सक्दैन। संयुक्त समूहमा रहेर कार्य गर्ने मरुतहरूको (जस्तै: वायु र जलको उच्च दबाब शक्ति, क्रायोजेनिक ग्यास, तरल पदार्थ, सूक्ष्म जीव र क्वान्टम कणको निर्माण, ध्वंस र प्रतिस्थापनको विशिष्ट तागत) तागत पहिचान गरि जसले अग्नि ऊर्जा मैत्री शक्तिको सदुपयोग गर्ने तरिका सिक्दछ (ध्यान वा विज्ञान मार्फत मन्त्र प्राप्त

गर्दछ) उसले प्रकृति मैत्री अजेय महान् उपायहरू पहिचान गर्न र उपयोग गर्न सक्ने छ।

सामान्य अर्थः नहि (nahi): छैन (There is not); देवः (Devaḥ): प्रकृति शक्ति देवता (God or deity); न (na): न (Nor); मर्त्यः (Martyaḥ): नश्वर व्यक्ति (Mortal Human); महः (mahaḥ): ठुलो ( Great or mighty); तव (Tava): तिम्रो (Your); कर्तुं (Kartum): गर्न (To do); परः (Parah): अरू (Another or beyond); मरुद्भिः (marudbhih), संयुक्त समूहमा रहेर मरुतहरूले गर्ने कार्यको साथ (With the Maruts storm gods); अग्ने (agne): हे अग्नि (Fire god); आ (aa): आऊ (Come);





गहि (gahi): आफ्नो भूमिकामा प्रवेश गर (Enter or come in)।

**ऋग्वेद मन्त्र १.१९.३**

**ये महो रजसो विदुर्विश्वे देवासो अद्रुहः |**

**मरुद्भिरग्न आ गहि ||**

**भावार्थः** नैतिकता, शुद्धता र विषय बस्तु वारेको विशेष ज्ञानको जीवनमा ठुलो महत्त्व छ। नैतिकता र उच्च आदर्शयुक्त विषय विज्ञ र ऋषिहरूले छल, दुष्टता र पक्षपात बिना उपलब्ध समग्र शक्ति र ऊर्जाको समय अनुकूल एकीकृत प्राकृतिक मैत्री उपयोग गर्ने नीतिले मात्र मरुतहरूको (जस्तै वायु र जलको उच्च दबाब शक्ति, क्रायोजेनिक ग्यास, तरल पदार्थ, सूक्ष्म जीव र क्वान्टम कणको निर्माण, ध्वंस





र प्रतिस्थापनको विशिष्ट तागत) साथ लिएर अग्निको शक्ति र शुद्धतालाई (ताप, प्रकाश, परिवर्तनशील ऊर्जा, किरण तथा गति) जीव तथा ब्रह्माण्ड कल्याणमा उपयोग गर्न र अकल्पनीय अभूतपूर्व लाभ र समृद्धि स्थापना गर्न सम्भव हुने छ।

सामान्य अर्थः यो ऋचा (मन्त्र) भित्रका शब्दहरूले गहिरो दार्शनिक अर्थ र सन्देश छ ।

ये (Ye – Those) ले तिनलाई जनाउँछ जो कुनै विशेष मार्गमा छन्, विशेष उद्देश्यका साथ। महो (maho – Great, mighty, power, light) शब्दले दिव्य प्राकृतिक घटनाको शक्तिशाली, विशाल, फैलावट र भव्यतालाई जनाउँछ। सम्झाउँछ कि प्रकृति शक्ति र प्रकाशले









हामीलाई मार्गदर्शन गर्न सक्छ। रजस (rajasah– Expanse, impurity, activity, dust) ले आकाश र पृथ्वीको बिचको वायुमण्डललाई जनाउँछ, जहाँ एक साथ विस्तार, धूलो, रजो गुण (चञ्चलता, उत्साह) र क्लेश अनुभव गर्न सकिन्छ। यसले बताउँछ कि हामी संसारको मलिनता र अस्थिरताबाट मुक्त हुनुपर्छ। विदु (vidu– Knower) शब्दले तिनलाई जनाउँछ जसले कुनै विशेष क्षेत्र वा विषयमा गहिरो ज्ञान, बुद्धि, र विशेषज्ञता राख्छन्। विश्वे (vishve – All gods, inclusiveness) शब्दले सबै देवता वा विश्वेदेवाहरू समग्रतामा प्रभाव देखाउने हुँदा सबै शक्ति र ऊर्जाको समय अनुकूल संयुक्त उपयोगको महत्त्व हुने कुरा बुझाउँछ। देवास (devaasah –




Divine powers) शब्दले सम्बन्धित कार्यको लागि उपलब्ध शक्तिहरू वा देवताहरू भन्ने जनाउँदछ।

हरेक उद्देश्यमा निश्चित दिव्य शक्ति अर्थात् विषय विज्ञताको विशेष सहयोग आवश्यक हुने प्रस्ट गर्दछ। अद्रुह (adruhaḥ – Without deceit, purity) शब्दले शुद्धता, सत्यता र नैतिकता विषय विज्ञ र ऋषिहरू बन्ने अनिवार्य पूर्वाधार हो भन्ने जनाउँछ। कुनै छल र दुष्टता बिना मात्र विषय विज्ञ र ऋषिहरूले जीवनको सत्य मार्ग देखाउन सक्ने प्रस्ट गर्दछ। जसले जीवनमा नैतिकता र सत्यताको महत्त्व बारे प्रस्ट गर्दछ। मरुद्भिः (marudbhih – With the Maruts) ले शक्ति र पराक्रमका प्रतीक मरुतहरूको साथलाई





लिनुपर्ने दृढता व्यक्त गर्दछ। अग्ने (agne – Fire god), आ (aa – Come), गहि (Gahi – Enter) शब्दहरूले समग्रमा अग्नि शक्ति र शुद्धताको जरुरत बारे बोल्दछ। जसले कर्म क्षेत्रमा अनिवार्य रूपमा प्रवेश पाउँदा मात्र जीवन सही मार्गमा अगाडि बढ्न सम्भव रहने प्रस्ट पार्दछ।

**ऋग्वेद मन्त्र १.१९.४**

**य उग्रा अर्कमानृचुरनाधृष्टास ओजसा |**

**मरुद्भिरग्न आ गहि ||**

**भावार्थः** जो (ये) तीव्र वेगको (उग्राः) बाहिर वातावरणले नियन्त्रणमा लिन नसक्ने गुण निर्वाण गरिएको (अनाधृष्टासः) तरल वा ग्यासलाई (ओजसा) जस्तैः क्रायोजेनिक टेक्नोलोजीहरू प्रयोग

गरी वा समय अनुकूलको माइक्रोबायोलोजिकल प्रविधिको प्रयोग गरी उच्च दबाबमा राख्न सकिने विधि आदि जस्ता प्राकृतिक तरिकाको संयुक्त विधि (अर्कम) को प्रयोग मार्फत विद्युतीय तथा (अग्ने) दहन (जलाउने अग्नि तत्व) ऊर्जा उत्पादन (आनृचुः) सम्भव हुने छ । असीमित राप, ताप र प्रकाश प्रदान गर्न सक्ने क्षमताको स्रोतका रूपमा (मरुद्धिः) रहेका यस्ता सूक्ष्म कणको शक्तिमा पहुँच अभिवृद्धि मार्फत प्रकृति मैत्री उपभोग तर्फ प्रयास सुचारु राख्न जरुरी छ (आ गहि)।

नोटः यहाँ निर के कुरा मनन गर्न जरुरी छ भने मरुतहरूको गुणलाई हाम्रो शरीरमा रहेका लाभदायक सूक्ष्म जीवहरूसँग समेत तुलना गर्न सकिन्छ। हाम्रो शरीरको आफूले आफूलाई उपचार





गर्ने हिलिङ्ग गर्ने खुबीको व्याख्या गर्ने क्रममा शरीर र वातावरणको लाभदायक माइक्रोबायोमहरुलाई समेत मरुत अन्तर्गत राखिएर वेदका सिद्धान्त रुपी ऋचाहरू निर्मित भएको छ। हानिकारक रोगाणु जस्तै प्याथोजन र विषाक्त कणहरूलाई तिनीहरूले शरीरको विभिन्न भागमा दिने जोखिम अनुरूप भूत, प्रेत, पिचास, दानव, राक्षस, दैत्य, अप्सरा, डङ्कन, छौँडा आदि शब्द अन्तर्गत समेटिएको भेटिन्छ।

संस्कृतमा शक्तिशाली र प्रबल गुण जनाउन "उग्रा" शब्द प्रयोग हुन्छ। मरुतहरूलाई शक्तिशाली र प्रबल रूपमा वर्णन गरिएको छ। जुन हाम्रो शरीरमा रहेका लाभदायक सूक्ष्म जीवहरूले हानिकारक जीवाणुहरूको विरुद्ध रक्षा गर्न खेल्ने





महत्त्वपूर्ण भूमिकासँग मिल्दछ। सूक्ष्म जीवहरूले हाम्रो शरीरको रोग प्रतिरोधात्मक क्षमतालाई मजबुत बनाउने काम गर्छन्। वेदहरूमा मरुतहरू शक्तिशाली रक्षकको रूपमा रहने वर्णन भएको छ।

अजेय (कहिल्यै हिक्मत नहार्ने वा असफल भएमा समेत पटक पटक बौरिएर लड्ने र जित्ने) र अपराजेय (कहिल्यै पराजित नहुने वा नहार्ने) जस्ता गुण लाई संस्कृतमा "अनाधृष्टास" भनिन्छ। मरुतहरू लाई वेदले अजेय र अपराजेय गुणको हुने भन्दछ। लाभदायक सूक्ष्म जीवहरू हाम्रो जीवितता कायम राख्नको लागि तिनीहरूको अजेय र अपराजेय गुणका कारण अत्यावश्यक भएका हुन्। ती सूक्ष्म जीवहरूले हानिकारक जीवाणुहरूको प्रवेशलाई रोक्ने, सुरक्षा पर्खालको रूपमा काम गर्ने









र शरीरको सन्तुलनलाई कायम गरी शरीरको रक्षा गर्ने गर्दछन्।

सहयोगी र सामञ्जस्यपूर्ण भूमिकालाई संस्कृतमा "मरुद्भिरग्न आ गहि" भन्ने गरिन्छ। मरुतहरू अन्य देवताहरू (शक्तिको श्रोत) त्यसमा पनि विशेष गरी अग्नि सँग मिलेर काम गर्ने गर्दछन् भनिएको छ। वेदले ¥याल, हर्मोन, एञ्जाइम, एसिड, बेस जस्ता पाचन रस आदि सबै अग्नि कै विभिन्न रूप मान्दछ। लाभदायक सूक्ष्म जीवहरू समेत विभिन्न शारीरिक कार्यहरू जस्तै पाचन, भिटामिन उत्पादन र रोग प्रतिरोधात्मक प्रतिक्रियाहरूको लागि अग्नि सँगै सहयोगी समुदायको रूपमा काम गर्छन्।

मरुतहरू वायु देवता भएकाले, प्राकृतिक र शारीरिक सन्तुलन कायम गर्न अत्यावश्यक हुने




गर्दछ। लाभदायक सूक्ष्म जीवहरू समेत शरीरको आन्तरिक वातावरणको (माइक्रोबायोम) सन्तुलन कायम गर्न अत्यावश्यक छन्। बाहिरी वातावरण सन्तुलनमा, बादल लाग्न, पानी पार्न, उर्वरता निर्माण गर्न, विषाक्तता निस्तेज गर्न आदि धेरै काममा सूक्ष्म जीवी हरुको ठुलो भूमिका छ। शरीरमा सन्तुलनमा विघटन भएमा रोगहरू उत्पन्न हुन्छन् भने प्रकृतिको सन्तुलनमा गडबडी हुँदा अराजकता फैलिन्छ।

यस्ता प्रकारका विविध पारस्परिक सम्बन्धले मरुतहरू भनेर शास्त्रले सूक्ष्म जीवहरू समेतलाई समावेश गरेको पुष्टि हुन्छ। मरुतहरू वैदिक ब्रह्माण्ड शास्त्र अनुसार महत्त्वपूर्ण तरल र वायु शक्तिहरू मात्र होइनन् लाभदायक सूक्ष्म जीवहरू समेत हुन्।





शरीरको स्वास्थ्य, भित्र र बाहिरको समग्र सन्तुलन कायम राख्न, शरीर र वातावरणको रक्षा गर्न मरुत महत्वपूर्ण भूमिका खेल्ने प्रभावकारी र आक्रामक शक्ति रहेको वैदिक मान्यता रहेको बुझ्नु अत्यन्त जरुरी छ।

**ऋग्वेद मन्त्र १.१९.५**

**ये शुभ्रा घोरवर्पसः सुक्षत्रासो रिशादसः |**

**मरुद्भिरग्न आ गहि ||**

**भावार्थः** सूक्ष्म जीवहरू (सूक्ष्म जीव र सूक्ष्म कणहरू) जरुरत फरक फरक अनुभूति अर्थात् आकार वा आकृति (जस्तैः पार्टिकल, न्यानो पार्टिकल, क्वान्टम पार्टिकल र वेब–फङ्गसन रूप) र रङ धारण गर्ने क्षमता राख्छन् । सूक्ष्म जीव र सूक्ष्म







कणहरूको रोगहरू नष्ट गर्ने (रोगाणु र कीटाणु नाशक) शक्ति, एक रूपको शक्तिलाई अर्को रूपमा परिवर्तन गर्ने शक्ति, नियमित प्रक्रियाहरू बाट शरीर, अन्तरिक्ष, वायुमण्डल आदि लाई शुद्ध र स्वच्छ गर्ने शक्ति आदि हुने गर्दछ । सूक्ष्म जीव र सूक्ष्म कणहरू मार्फत सम्भव हुने शुद्ध र स्वच्छ वातावरण भित्र जीवन र पर्यावरण मैत्री भौतिक परिवर्तन वा विखण्डन जस्ता प्रक्रियाहरू सृजित गर्न अग्नि र मरुत जस्ता ऊर्जाको उपयोगमा सोच विचार र अक्कल पु¥याउनु मानव कर्तव्य हो।

**भूमिकाः** संस्कृत शब्द ये शुभ्रा (Ye Shubhra) को अर्थ जुन शुभ्र वा उज्यालो गुण युक्त (those who are bright or luminous) रहेको भन्ने हुन्छ । घोरवर्पस (Ghoravarpasah) को अर्थ













जुन घोर वा भयानक रूपमा क्रोधित र आक्रामक हुने (with fierce forms) गुण बोकेको हुन्छ । जस संग सुक्षत्रासो (Sukshatraaso) अर्थात् उत्कृष्ट क्षत्र वा शक्ति (possessing excellent power) रहन्छ। जसको रिशादसः (Rishaadasah) मतलब दुष्ट र अधर्मी रोगाणु र जीवाणु जस्ता शक्ति मुक्त (free from harm or evil) गर्ने क्षमता हुन्छ। मरुद्भिरग्न आ गहि (Marudbhir Agni Aa Gahi) त्यस्तो शक्ति युक्त अग्नि र मरुतको सहयोगी र सामञ्जस्यपूर्ण भूमिकालाई सदुपयोग गर्ने तर्फ सोच विचार पु¥याउनु भन्ने भावको सन्देश ऋचाले दिन्छ ।

थप व्याख्याः वैदिक दर्शनमा ब्रह्माण्डमा ऊर्जाको एक रूप वाट अर्को रूपमा परिवर्तन गर्ने कारकको











भूमिका अग्निले खेल्ने हुँदा मानव र दैवी शक्ति बिचको मध्यस्थताको भूमिकामा अग्निको प्रयोग हुन्छ । समाजमा त्यही यथार्थ गहिरो गरी महसुस होस् भन्नको लागि होम, यज्ञ र अनुष्ठानहरू अग्नि विना सम्भव नहुने मान्यता स्थापित गरिएको छ ।

आयुर्वेदमा समेत खानालाई एक रूप वाट अर्को रूपमा लैजाने पाचन रस, इन्जाइम आदि, शारीरिक गतिविधि सञ्चालन गर्न सन्देशहरू लाई एक रूप वाट अर्को रूपमा सम्प्रेषण गर्ने सूचनाहरू जस्तै इन्सुलिन, हर्मोन आदि तथा शरीर सुद्ध करणका रोग प्रतिरोधी कण तथा विषादी आदि निर्मलीकरण गर्ने शक्ति सबैलाई अग्नि भनिन्छ जुन समग्र स्वास्थ्य र कल्याणमा केन्द्रित हुने गर्दछ । स्वास्थ्य र कल्याणमा केन्द्रित उच्च प्रेसरको तरल वा ग्यास









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



शक्तिलाई मरुत भन्ने गरिन्छ ।

यसरी अग्निले शरीर भित्र र वातावरणको सन्दर्भमा समेत ऊर्जा, मध्यस्थ कर्ता, शुद्धि कारक र रक्षकको भूमिका खेल्दछ। भौतिक र आध्यात्मिक पक्ष, भौतिक तत्त्व र आध्यात्मिक अभौतिकता बिचको सम्बन्ध जोड्न चाहिने परा लाई अपरा अस्तित्व र विपरीत अस्तित्व कायम गर्ने भूमिकामा समेत अग्नि र मरुतको भूमिका रहन्छ।

देवताहरूको लागि चढाएको हरेक प्रसाद देवताहरूको लागि स्वीकार्य सुद्ध रूपमा अग्निले परिवर्तन गर्ने मान्यता लिइन्छ । जीवन र बालीहरूमा आवश्यक चिस्यान तथा ऊर्जा निर्भरता पूर्ति गर्ने, वृद्धि र पालनपोषणको लागि अनिवार्य हुने ताप र प्रकाशको श्रोतको नियन्त्रकको रूपमा





॥ श्री गणेशाय नमः ॥



वैदिक अनुष्ठानहरूको अपरिहार्य तत्वको रूपमा अग्नि र मरुतलाइ लिने गरिन्छ ।

**ऋग्वेद मन्त्र १.१९.६**

**ये नाकस्याधि रोचने दिवि देवास आसते|**

**मरुद्भिरग्न आ गहि ||**

**भावार्थः** सौर्य ऊर्जा अर्थात् सौर्यको प्रकाश, तापमान, चमक तथा किरण (जस्तै भर्गो ज्योति) ब्रह्माण्डको समस्त ऊर्जाको स्रोत रहेकोले सूर्यको तापमान ऊर्जा, किरण (रेडिएसन), गति तथा प्रकाश रुपी शक्तिलाई माइक्रोबायोलोजीको तागत सँग (मरुतहरु अर्थात् सूक्ष्म जीव तथा क्वान्टम कणहरू) संयोजन गरी अथाह लाभकारी परिस्थिति निर्माण सहज गर्न सकिने छ।







भूमिकाः जो (ये ye) स्वर्ग वा आकाश (नाकस्य naakasya – above the sky) माथि (अधि adhi) चम्किने (रोचने rochane) चम्किलो चिज (दिवि divi) समस्त ऊर्जाको (देवास devaasa – देवताहरू) श्रोत हो (आसते aasate)। मरुतहरूको साथ (मरुद्भिः marudbhih) अग्नि (अग्ने agne) समेत (आ aa) उपयोग (गहि gahi) गर्नु।

व्याख्याः जो स्वर्ग वा आकाशमाथि चम्किने चम्किलो चिज (रोशनी) छ, त्यो समस्त ऊर्जाको स्रोत हो । समस्त ऊर्जाको स्रोत लाई देवताहरूको शक्ति भनिन्छ। मरुतहरूको साथसाथै अग्निको समेत ऊर्जाको स्रोतको रूपमा उचित उपयोग गर्नुहोस् ।







थप व्याख्या: वैदिक अवधारणा अन्तर्गत मारुतहरूले सूक्ष्म जीवहरूको समेत प्रतिनिधित्व गर्दछन् । किनकि उनीहरूको अदृश्य तर शक्तिशाली उपस्थिति हुन्छ । उनीहरू एक गतिशील परिवर्तनको एजेन्टको रूपमा भूमिका खेलिरहेको हुन्छन् । मुख्य कुरा के भने सूक्ष्म जीवहरू जस्तै मरुतहरु सामूहिक रूपमा निर्माण र विनाशको दुई ध्रुवीय प्रकृतिको चरित्र युक्त हुन्छन्। यी गुणहरूले वैदिक विज्ञानमा उल्लेख भएका मरुतहरु मात्र चलायमान तरल र वायु शक्ति मात्र होइन सूक्ष्म जीवहरू समेतको भूमिकामा भएको पुष्टि हुन्छ ।

वैदिक अवधारणामा सबै चिजमा सूचना हुने हुँदा सबै कुरा जीवित हुने मानिन्छ। तिनीहरूले जीवमा,













पृथ्वीमा र ब्रह्माण्डमा जीवन निर्माण गर्ने र पारिस्थितिक सन्तुलन कायम राख्न भूमिका खेल्ने गर्दछन। त्यसैले वेदमा सूक्ष्म जीव भनेर (जीव, कण, रोगाणु र विषाणु) सबै पर्दछ । जुन जीव आफूमा सूचना रहेको ज्ञान राख्दछ त्यसलाई चेतनशील जीव र जसले आफूमा चेतना रहेको अनुभूति राख्दैन त्यसलाई अचेतन जीव भनिन्छ। जुन हाल सामान्य रूपमा बुझिने सजीव र निर्जीवको अवधारणा भन्दा केही फरक अवस्थाको छ ।

**ऋग्वेद मत्र १.१९.७**

**य ईङ्खयन्ति पर्वतान तिरः समुद्रमर्णवम |**

**मरुद्भिरग्न आ गहि ||**

**भावार्थः** प्राकृतिक तत्वहरू जस्तै पहाडहरू,











समुद्रहरू, तरङ्गहरू, मरुत (हावा, वाष्प, तरल तत्त्व) र अग्नि (राप, ताप र प्रकाश) सबै एक ब्रह्माण्डीय चक्रमा आपसमा जडित छन् । जसले ब्रह्माण्डका सबै तत्वहरूको एकता र आपसी निर्भरताको सुनिश्चितता गर्दछ । महासागरमा रहेका पानीलाई वाष्पका रूपमा बादलसम्म पु¥याउन, बादललाई विद्युतीय र अग्नि ऊर्जासँग विच्छेद गरी उच्च शिखरहरूमा बर्सात गराएर तिनलाई पुनः जलले भरिपूर्ण गर्न सूक्ष्म जीवहरू तथा तापक्रमको प्रमुख भूमिका हुन्छ ।

साधारण अर्थः य (ya) who (जो); ईङ्खयन्ति (īṅkhayanti): move or shake (हल्लाउँछन्, कम्पन गर्छन्, हलचल ल्याउँछ); पर्वतान (parvatān): mountains













(पहाडहरू); तिरः (tiraḥ): across (माथि वा पर), End or Limit (अन्त्य या सीमा); समुद्रम् (samudram): ocean (समुद्र); अर्णवम् (arṇavam): Cloud (मेघ), Wave (तरङ्ग), Flood (बाढी); मरुद्भिः (marudbhiḥ): with winds (हवाहरूले); अग्न (agna): fire (अग्नि); आ (aa): towards, come (तर्फ, आ); गहि (gahi): approach or come (आउनुहोस) ।

**ऋग्वेद मन्त्र १.१९. ८**

**आ ये तन्वन्ति रश्मिभिस्तिरः समुद्रमोजसा |**









## मरुद्भिरग्न आ गहि ||

**भावार्थ:** प्रकाशका किरणहरू सूक्ष्म वेभ फङ्गनको लहर रूपी शक्तिहरूबाट निर्मित छन्। तिनमा निहित सूक्ष्म शक्ति यति शक्तिशाली हुन्छ कि तिनकासामर्थ्यको उपयोग मार्फत विशाल सागर र त्यससँग जोडिएका सम्पूर्ण अद्भुत संरचनाहरूआफ्ना दिव्य हितकारी गुणहरू उपलब्ध गराउन सम्भव बनेको छ। त्यसको सदुपयोगको लागिमरुत र अग्निको संयुक्त शक्तिको पहिचान र उपयोग गर्न सिक।

सामान्य अर्थ: आ (ā): towards, come(तर्फ), From (बाट); ये (ye): who (जो); तन्वन्ति (tanvanti): extend, spread, stretch (फैलाउँछन्, फैलाउँछन्,









तन्काउँछन्), Propagate (प्रसार गर्छन्), Develop (विकसित गर्छन्); Unfold (खोल्छन्); रश्मिभिः (raśmibhiḥ): with rays, with beams (किरणहरू द्वारा, प्रकाशले), Streams or Currents (वेब फङ्गसनको लहर), तिरः (tiraḥ): across,beyond (माथि वा पर); समुद्रम् (samudram): ocean (समुद्र); ओजसा (ojasā): withstrength, with vigor (शक्तिले, बलका साथ); मरुद्भिः (marudbhiḥ): with winds (वायु र जलको छालको लहरको दबाब); अग्न (agna): fire (अग्नि); आ (ā): towards (तर्फ), Again (फेरि); गहि (gahi): approachor








come (आउनुहोस्, सदुपयोग गर्नुहोस्)।

**ऋग्वेद मन्त्र १.१९. ९**

**अभि तवा पूर्वपीतये सर्जामि सोम्यं मधु |**

**मरुद्भिरग्न आ गहि ||**

**भावार्थ**: सूक्ष्म जीव (मरुत) र सौर्य ऊर्जा (अग्नि)को संयुक्त प्रभावले आनन्द प्राप्तिका लागि आवश्यक हुने सबै प्रकारका मधुर तत्त्वज्ञान, पोषण तथा औषधीय पदार्थहरू, र सत्कर्म ऊर्जा प्राप्त गर्नअवसर जुटाउन सकिन्छ। सम्पूर्ण जगतको कल्याण, प्रगति, र समृद्धि मार्फत आनन्दप्राप्तिका लागि दूरदर्शी ऋषि, मुनि, तथा ज्ञानीहरू (विज्ञ) सूक्ष्म जीव र प्रकाशकाकिरणहरूबाट मधुर तत्त्व ज्ञान, पोषण तथा औषधीय पदार्थहरू, र सत्कर्म ऊर्जा









प्राप्त गर्नेअवसरहरूको बारेमा गहिरो खोज र अनुसन्धानमा संलग्न हुनु आवश्यक छ।

सामान्य अर्थ: अभि (abhi): towards, for (तर्फ, को लागि) ; तवा (tavā): for you (तिम्रो लागि) ; पूर्वपीतये (pūrvapītaye): For prior consumption (पहिलेको पिउनका लागि, आनन्द प्राप्ति पहिलेको माहौल निर्माणको लागि); For ancient ritualistic use (प्राचीन अनुष्ठानका लागि), For previous offering (चढाउने रप्रसादको रूपमा सेवन गर्ने उद्देश्यले); सर्जामि (sarjāmi): I prepare (म बनाउँछु), Initiate or Begin (आरम्भ गर्छु, सुरु गर्छु), ispatch or Send Forth (पठाउँछु); सोम्यं








(somyam): Soma, the divine drink and knowledge (सोम, दिव्य रस, पेय तथा ज्ञान), Gentle or Pleasant (कोमल, मनमोहक), Healing or Nourishing (औषधीय, पोषक); मधु (madhu): sweet, nectar (मधुर, अमृत), Pleasure or Delight (आनन्द), Love or Affection (प्रेम), Spring Season (वसन्त ऋतु); मरुद्भिः (marudbhiḥ): with winds (हावा र तरलाको झोक्का) , अग्न (agna): fire (अग्नि); आ (ā): towards (तर्फ); गहि (gahi): approach or come (आउनुहोस् वासदुपयोग गर्नुहोस्, अपनाउनु होस्)।









# वेदमा सूक्ष्म जीव विज्ञान – १

**सूक्ष्म जीव : कृमि**

अथर्ववेदमा ऋषि कण्व र उनका अनुयायीका वंशजहरूले सूक्ष्म जीवविज्ञानको सन्दर्भमा तीन सूक्त रचना गरेका छन्। क्रिमिजम्भनम् (२.३१), क्रिमिनाशनम (२.३२) र क्रिमिघ्नम (५.२३)। यी सूक्तहरूले सूक्ष्म जीवहरूबारे मौलिक जानकारी उपलब्ध गराउँछ। यी सबै शब्द क्रिमिजम्भनम्, क्रिमिनाशनम र क्रिमिघ्नमको अर्थ माइक्रोबि-स्टाटिक (Microbiostatic) / माइक्रो-बिसिडल (Microbicidal) भन्ने लाग्छ। माइक्रोबि-स्टाटिकको अर्थ सूक्ष्म जीवहरूले खासै प्रभावमा लिन नसक्ने र माइक्रोबिसिडलको अर्थ




सूक्ष्म जीवहरूलाई नष्ट गरिदिने भन्ने हो ।

ऋषि कण्वका उल्लिखित सूक्तहरू मुख्य रूपमा सूक्ष्म जीवहरूको उन्मूलन सँग सम्बन्धित छन्। सूक्ष्म जीवहरू भनेर यहाँ रोगजनक तथा हानिकारक सूक्ष्म जीवहरू (रोगाणु) भन्न खोजिएको हो । वेद र आयुर्वेदमा सूक्ष्म जीवहरूबारे उल्लेख गर्न कृमि शब्दको प्रयोग भएको छ । वेद र आयुर्वेदमा अत्यधिक प्रयोग भएको कृमि शब्द एक जेनेरिक अर्थात् सामान्यीकृत शब्दका रूपमा कीराहरू तथा जुका, चुर्ना आदि जस्ता परजीवीका लागि समेत व्यापक रूपमा प्रयोग भएको छ ।

Unbelievably, a minimum of six-thousand-year-old Vedic texts called VEDA have mentioned the





role of microorganisms in our bodies. It explains the relationship between the gut-body brain and nature. Same time has specified the role of micro-organisms, both good (micro-biomes) and bad micro-biomes (The pathogens).

कम्तीमा छ हजार वर्ष पुरानो वैदिक ग्रन्थहरूमा पत्याउन नसकिने गरी हाम्रो शरीरमा सूक्ष्म जीवहरूको भूमिका उल्लेख गरिएको छ । यसले पेट–शरीर–मस्तिष्क र प्रकृतिबीचको सम्बन्धको व्याख्या गरेको छ । साथै यसमा किरा, जुका, चुर्ना जस्ता परजीवी, प्रकृति र हामीलाई लाभदायक रहेका जीवाणु (माइक्रोबायोम) र खराब रोगाणु







(प्याथोजेन्स) दुवै सूक्ष्म जीवहरूको पहिचान मात्र हैन, तिनको भूमिकासमेत निर्दिष्ट गरेको भेटिन्छ।

According to VEDA, the fundamental micro-ingredients needed to construct the human body are two types.

वेदका अनुसार मानव शरीर निर्माण हुन आवश्यक पर्ने आधारभूत सूक्ष्म तत्व दुई प्रकारका हुन्छन्।

The first type has life. The life or vital part of the body is called Aatma. Aatma is considered the extract of all-natural forces. The ultimate construction material of













such natural force ingredients is a fundamental element derived from the sunlight.

पहिलो शरीरमा रहेको जीवन अर्थात् जीवित तत्व हो। त्यसलाई हामी प्राण वा शरीरको महत्वपूर्ण अंग आत्मा भन्ने गर्छौं । आत्मालाई ब्रह्माण्डमा रहेका सम्पूर्ण जीवित, अर्धजीवित तथा निर्जीव प्राकृतिक तत्वहरूको प्राकृतिक सारशक्ति मानिन्छ। सबै प्राकृतिक शक्तिहरूको निर्माणको स्रोत र ध्वंसपछिको रूप अन्ततः सूर्यको किरणका रूपमा हुने गर्छ । तसर्थ आत्मा सूर्यको किरणको सार हो। अर्थात् अन्ततोगत्वा सूर्यको किरणका सामग्रीबाट नै निर्मित तत्व हो।

The time-space and revolving







movements of a fundamental particle of each bodily cell generate vibrational forces localized towards a particular point to maintain cell vitality in a web function. Together with all cells, the shared web functions stand alone as a living creature.

समय–स्थान र गतिमा आधारित रहेर सन्तुलित अस्तित्वमा रहने क्वान्टम कणहरूको सामूहिक कम्पनको संयोजन मार्फत शरीरका हरेक कोषिकाका संरचनाहरू निर्माण भएका हुन्छन्। कोषिकाका ती संरचनाको सामूहिक वेब फंगसन एक निश्चित विन्दुमा केन्द्रित रहेर समग्र संरचना











सन्तुलित अस्तित्वमा रहने गरी मिलेर बसेको हुन्छ। जसले गर्दा हरेक कोषिकाहरूको ऊर्जा रूपी संरचनाले हरेक कोषिकालाई एक जीवित संरचनाका रूपमा स्थापना गर्न सम्भव तुल्याउने गर्छन्।

कोषिका रूपी जीवित संरचनाहरू एकापसमा मिलेर तन्तुरूपी संरचनाहरू निर्माण गर्छन्। तन्तु–तन्तुहरूको त्यस माथि आफ्नै एक सामूहिक जीवन शक्तिको निश्चित क्लस्टर सिर्जना हुन पुग्छ। शरीरका भिन्न भागमा रहेका फरकफरक जीवित क्लस्टर फरक फरक विन्दुलाई आधार केन्द्र बनाउने गरी शक्तिका सामूहिक वेब फंगसन अर्थात् कक्षहरू वा इनर्जीका हबका विन्दुहरू निर्माण गर्छन् ।

सबै क्लस्टरका फरक फरक इनर्जीका हबका











विन्दुहरू आपसमा सहकार्य संयुक्त वेब प्रकार्य गर्दै निर्माण गर्दै विभिन्न चक्रीय बिन्दु रूपी एक जीवित प्राणीको रूपको संरचना खडा हुन पुग्छ। उक्त संरचना प्रकृतिको संयुक्त प्राकृतिक वेब प्रकार्यहरू सँगै मैत्री आसन अर्थात् हार्मोनीमा पुग्न सक्दा एक चलायमान जीवन्त संरचनाको निर्माण सम्भव गराएको हुन्छ ।

The second type has no life. The non-vital part is called bhuta. The five non-vital or non-living constituents are called Panchha-mahaa-Bhuta .

दोस्रो प्रकारको सूक्ष्म तत्वको समूह जीवन नहुने तत्वको समूह हो। जीवन नरहेको भागलाई भूत भन्ने













गरिन्छ। जस्तै बितेको समय जो अब आउँदैन वा जीवन्त हुने योजनामा छैन, त्यसलाई भूतकाल अर्थात् मृत समय भनिन्छ । शरीर मूलतः पाँच निर्जीव सूक्ष्म तत्वहरू मिलेर बनेको हुन्छ ।जसलाई पञ्च–महाभूत भनिन्छ ।हरेक निर्जीव तत्व आफैँमा विभिन्न निर्जीव तत्वको मिश्रण रहेकाले महाभूत भनिएको हो ।

हरेक तत्व क्वान्टम कणहरू निर्मित हुन्छन् ।क्वान्टम कणहरू नियमित गतिमा रहेर याटम र मलिकुलका रूपमा बनेको भए तापनि अन्ततः तिनीहरू शून्यमा अर्थात् आकाशमा बनेको शक्ति वा इनर्जीको पोकोहरूको चलायमान आकृति युक्त संरचना नै हुने गर्छ।

ती चलायमान आकृतिबाट चित्रमा देखिए जस्तै





पाँच महाभूत तयार हुन्छ । तिनै महाभूतहरूको संयोजनबाट पञ्च (पाँच) महाभूतको निर्माण हुने हुँदा हामी हाम्रो शरीरलाई पञ्च–महाभूतले बनेको शरीर भन्ने गर्छौं ।

इनर्जीको पोकोको सबैभन्दा हालसम्म बुझिएको सूक्ष्म रूप अर्थात् सबैभन्दा सानो थैली क्वान्टम हो। जसलाई मोनोक्रोमेटिक प्रकाशको फोटोन भनिन्छ। फोटोनको मुख्य स्रोत सूर्य हो। सूर्य भनेर सामान्य प्रकाशको सन्दर्भमा सूर्य वा सूर्य जस्तै प्रकाश दिने सम्पूर्ण तारालाई बुझिन्छ। तसर्थ यो ब्रह्माण्डको जीवित भन्नुस् वा निर्जीव चिज ती सबै अन्ततः इनर्जीको पोकोबाटै वनेको छ।

हामीलाई थाहै छ विज्ञानले बिजुलीको अफ अर्थात् जिरो र अन अर्थात् एक गरी मात्र दुई अंकबाट कोड





बनाएर सम्पूर्ण कम्प्युटर चलाउन सकिने बनेको छ। त्यस्तै इनर्जीको पोको रहेको (परा–चार तत्व) र नरहेको (अपरा–आकाश) संरचनाको संयोजनबाट जीवित सूक्ष्म तत्वहरू र निर्जीव सूक्ष्म तत्वहरू निर्मित छ ।

When the empty space of nature receives vibrational force like sound (SHABDA) or alphabet (AKSHARA), it tries to stabilize and hence assumes a vibrational posture.

जब प्रकृतिको खाली स्थान अर्थात् अपरा आकाशले ध्वनि (शब्द) वा शब्दका कम्पन (अर्थात् शब्द वा आवाजरूपी शक्ति) प्राप्त गर्छ, त्यसले आफूले





सूर्यको किरणमा हुने मन्द निलो प्रकाशको किरणको शक्तिको उपयोग गरी टी–कोषिकाहरू छिटो गतिमा चलमल गर्न सक्ने बन्छन्।

As T cells speed, they quickly reach the infection and orchestrate (arranging natural elements and the situation to produce the desired impacts) to kill or inactivate the foreign invaders. It is evident that morning sunlight directly activates the critical immune cells by increasing their movement.

ऊर्जाशील बनेका टी–कोषिकाहरू निकै छिटो संक्रमण भएका स्थानमा पुग्न र संक्रमण गर्ने









तत्वतथा रोगाणुलाई निष्क्रिय पार्न वा मार्न अर्केस्ट्रेट अर्थात् (उक्त क्षेत्रमारहेका प्राकृतिक तत्व र परिस्थितिको समय अनुकूल तालमेल मिलाई प्रभावकारी रोगप्रतिरोधात्मक कार्यहरूको तजबिज मिलाएर) भूमिका खेल्न प्रभावकारी बन्छन्। बिहान–बेलुकीको मन्द सूर्यको प्रकाशमा हुने निला किरणले प्रत्यक्ष रूपमाप्रतिरक्षा कोषिकाहरूलाई सक्रिय पारेर मानव स्वास्थ्य सबल पार्न महत्वपूर्ण भूमिका खेल्ने गर्छन्।

One group of photosynthetic bacteria causes sunlight to generate oxygen and sugar. Another group of non-photosynthetic bacteria eats and degrades toxic waste. Scientists






have learned that a particular type of ultraviolet light emitted by the Sun can effectively kill germs, even up to 99%. Thus, nowadays, manufacturers have built unique ultraviolet lamps for use in specific industries where it's essential to kill nearly all germs. Such sectors include sewage treatment plants and hospitals.

वातावरणमा रहेका एक थरी फोटोसिन्थेटिक ब्याक्टेरियाको एक समूहले अक्सिजन र चिनी उत्पादन गर्न सूर्यको किरणको प्रयोग गर्छन्। अर्को थरी गैर-फोटोसिन्थेटिक ब्याक्टेरियाको समूहले








विषाक्त फोहोर खान्छ र त्यसको निर्मलीकरण गरी प्रदूषण घटाउँछ। यसैबाट सिकेर वैज्ञानिकहरूले सूर्यबाट उत्सर्जित हुने विशेष प्रकारको पराबैजनी किरणबाट ९९ प्रतिशत सम्म हानिकारक कीटाणुलाई मार्न प्रभावकारी हुने पराबैजनी बत्तीहरू बनाउन सफल भएका छन्। आजकल त विशेष प्रकारका उद्योगहरूमा प्रयोग गर्ने प्रयोजनका लागि अद्वितीय पराबैजनी बत्तीहरू निर्माण भइसकेको छ। जसले लगभग सबै रोगका कीटाणुलाई मार्न सक्षम हुन्छ। ढल प्रशोधन केन्द्र र अस्पतालमा तिनीहरूको व्यापक प्रयोग भइरहेको छ।

Commercial UV germicidal light effectively eliminates many types of bacteria and viruses. Simple to










complex drug-resistant bacteria and superbugs. The viruses are of many types of flu strains, including beta coronaviruses, MERS, SARS, and the SARS-CoV-2 virus, which causes COVID-19. Thus, sunlight can destroy the pathogen of dirt and plays a vital role in environmental sanitisation.

व्यावसायिक कीटाणु नाशक यूभीका प्रकाश निकाल्ने उपकरणहरूको प्रयोग मार्फत हाल धेरै प्रकारका ब्याक्टेरिया र भाइरसलाई प्रभावकारी रूपमा नियन्त्रण गर्न सम्भव बनाएको छ। सामान्य देखि जटिल प्रकृतिका औषधी प्रतिरोधी ब्याक्टेरिया











र सुपर बगहरू नियन्त्रण गर्न प्रयोगमा आएका छन्। भाइरसमा समेत धेरै प्रकारका फ्लु स्ट्रेनहरू, बिटा कोरोना भाइरसहरू मर्स (MERS), सार्स (SARS), रसार्स–कोभ–टु (SARS–CoV–2) जस्ता भाइरस हरू जसले कोभिड–१९ COVID–19 निम्त्याए तिनीहरूको समेत नियन्त्रण सफल बनेको छ। यसरी समग्रमा हेर्दा सूर्यको किरणले फोहोरको रोग जनक रोगाणुलाई नियन्त्रण तथा नष्ट गर्ने र वातावरणीय सरसफाइमा महत्वपूर्ण भूमिका खेल्ने यो सूक्तले दिएको सिद्धान्तको पुष्टि गर्छ।

## सूक्त – कृमिनाशनम् ४.३७.१०–१२

Mantra 4.37.10 (मन्त्र ४.३७.१०):

अवकादानंभिशोचानप्सु ज्योंतयमामुकान्।







**पिशाचान्त्सर्वानोषधे प्र मृणीहि सहस्व च ॥१० ॥**

अवकाऽअदान् । अभिऽशोचान् । अप्ऽसु । ज्योतय। मामकान् । पिशाचान् । सर्वान् । ओषधे। प्र । मृणीहि । सहस्व । च ॥ ३७.१० ॥

Translation: Many herbal extracts neutralise or destroy toxic substances (carcinogens, radicalised oxygen, and other troublesome chemicals). The ability of body fluids to inactivate and kill pathogens is a root cause of their ability to be included in medicine.

देवनागरीमा भावार्थ: धेरै हर्बलका अर्क लगायतका











सार तत्वहरूले विषाक्त पदार्थ (कार्सिनोजेन, अतृप्त अक्सिजन र उद्दण्ड रसायनहरू) लाई निष्क्रिय तथा नष्ट गर्छ। शरीरको आधारभूत तरल पदार्थमा सक्रिय रहेर रोगको चुरो कारक बन्ने रोगाणुलाई निष्क्रिय तथा नष्ट गर्नसक्ने तिनीहरूको क्षमता तिनीहरू औषधीय मूल्यको पदार्थका रूपमा मान्यता पाउनुको मुख्य कारण हो।

Microbiological Explanation(वैज्ञानिक व्याख्या): Different herbal extracts contain molecules of medicinal value. These molecules also neutralise radicals as scavengers (anti-oxidants) and help protect against vital organ damage due to







cellular oxidative chain reactions. Most medicinal ingredients from herbs also exhibit antimicrobial properties against pathogenicity. Therefore, these materials are significant in synthesising herbal medicine to exploit their antimicrobial, antiviral, and antioxidant potential with lower side effects.

विभिन्न हर्बल अर्क वा सारतत्वहरूमा औषधीय मूल्यका अणुहरू भेटिन्छ। यी अणुहरूले खानालाई शक्तिमा परिवर्तन गर्ने क्रममा रेडिकलाइज वा संक्रामक अणु बन्न पुगेका अक्सिजनका सह-








उत्पादनलाई निर्मलीकरण अर्थात् स्क्याभेन्जर (एन्टिअक्सिडेन्ट) गरी कोषिकाको तहमा हुने सेलुलर अक्सिडेटिभ प्रतिक्रियाको कारणले निम्त्याउने महत्वपूर्ण अंगको क्षति हुने दुर्भाग्यबाट जोगाउन मद्दत गर्छ।

जडीबुटीका सारतत्वका अधिकांश औषधीय सामग्री विभिन्न रोग निम्त्याउने रोगाणु विरुद्ध एन्टिमाइक्रोबियल गुणहरू प्रदर्शन गर्छन्। जडीबुटीका सारतत्वहरू तिनै कारणबाट हर्बल औषधीका मुख्य औषधीय तत्व संश्लेषण गर्ने महत्वपूर्ण चिज बन्ने गरेको कुरा विज्ञानले प्रमाणित गरेको छ । तसर्थ तिनीहरूको एन्टिमाइक्रोबियल, एन्टिभाइरल र एन्टिअक्सिडेन्ट क्षमतालाई कम साइड इफेक्ट दिने ओखतीको औषधीय तत्व










निर्माण गर्ने आयुर्वेदिक काइदा लाई हाल आएर आधुनिक औषधी विज्ञानले समेत उपयोगमा ल्याउन थालेको छ।

Mantra 4.37.11 (मन्त्र ४.३७.११):

**श्वेवैकं:कुपिरिवैकं: कुमारः संर्वकेशकः।**

**प्रियो दृश इंव भूत्वा गन्धर्वःसंचते स्त्रियस्तामितो**

**नांशयामसि ब्रह्मंणावीर्या वता ॥११॥**

श्वाऽइव । एक: । कपि:ऽइव ।एक: । कुमारः । सर्वऽकेशक: । प्रिय: । दृशेऽइव । भूत्वा । गन्धर्व: । सचते । स्त्रिय: । तम् । इत: । नाशयामसि । ब्रह्मणा ।वीर्यवता ॥३७.११॥













TRANSLATION: On several occasions, very nasty microbial germs trigger mental and psychological (adversely impacting the foundation of the nervous system and human intellect, i.e., the Brahman) dis-harmony. They have diverse physical structures and appearances. Some look dim, some bright, some completely decked with hair, and others look lovely and deceiving. The powerful herb Brahmi (Bacopa monnieri) and its derivatives are promising candidates









for effective mental, psychological, and mental strength - related remedies.

देवनागरीमा भावार्थ: मानसिक सन्तुलन खलबलिने धेरै घटनामा घातक सूक्ष्मजीवी रोगाणुहरूबाट मानिसमा मानसिक र मनोवैज्ञानिक (स्नायु प्रणालीको सन्तुलन खलल गरी मानव संवेग र बुद्धिमत्तामा अर्थात् ब्राह्मणमा प्रतिकूल असरपार्ने) असंगति पैदा गर्न उत्प्रेरित गर्ने भूमिका धेरै जिम्मेवार हुने गरेको छ। त्यस्ता रोगाणुहरू फरक फरक भौतिक संरचनामा भेटिने गर्छन्।

जस्तै तिनीहरू कुनै धमिला देखिन्छन्, कुनै उज्यालो चम्किलो हुन्छन्, कुनै शरीर भर रौँ अर्थात् झुसे कपाल जस्ता संरचनाले पूर्ण रूपमा सजिएका









हुन्छन्। कतिपय हेर्दा अत्यन्त मनमोहक लाग्ने र अन्यलाई आकर्षित गरी आफ्नो जालमा पार्ने प्रकृतिका हुन्छन्।

शक्तिशाली जडीबुटी ब्राह्मी (बाकोपा मोनिरी) र कतिपय अवस्थामा त्यसका सारतत्व मिश्रित जडीबुटीको मिश्रण मानिसमा मानसिक तनाव दिने र मनोवैज्ञानिक रोग उत्पादन गर्न रोगाणुको नियन्त्रण गर्न र त्यसले विकास गरेको विकृतिको उपचार गर्न निकै आशालाग्दो प्रभावकारी विकल्प हो।

MICROBIOLOGICAL EXPLANATION: Brain biology and the status of the nervous system are more likely the root causes of most








mental diseases. The critical issue is the genes and family history, stress or a history of childhood abuse, imbalances in the brain chemicals, traumatic brain injury, and exposure to viruses or toxic chemicals while pregnant. Multiple infectious diseases are playing a role in the development of neuropsychiatric disorders.

Microglia are the vital infrastructure of the central nervous system. They play critical roles in brain development and physiology









during life and ageing. They help young neurons grow to ensure the connections are correct. They develop anti - inflammatory mediators now of inflammatory firing to restore brain homeostasis.

Even though microglia have multiple biological activities, their primary function is to monitor infections and generate a controlled immune response. Thus, complex signalling activates the microglia following illness with viral, bacterial, fungal, and protozoan








agents. Microglial activation is the cause of many psychiatric disorders, including schizophrenia, bipolar disorder, and autism.

Moreover, numerous studies have indicated that the gastrointestinal tract and the brain interact with each other through gut-brain networks. Individuals with higher immune-based gastrointestinal disorders, such as inflammatory bowel diseases, are getting a higher rate of psychiatric symptoms.

Toxoplasma gondii is a spherical









protozoan that often infects the brain and retina and can cause neurologic damage and even death of the fetus when acquired during pregnancy.

A fury around Epstein Barr virus increases the risk of schizophrenia due to the altered immune response of enveloped viral double-stranded DNA proteins. The genetic and environmental factors that shape the microbiome in early life include exposure to microbial agents through breastfeeding and






household contact. Exposure to viruses and other gastrointestinal tract infections, allergens, and poor diet cause psychiatric disorders, including schizophrenia, psychosis, bipolar disorder, and autism.

Gut microbiota comprises three enterotypes:Prevotella, Bacteroides, and Ruminococcus. Rod shapes dark Prevotella's Protective role by training the immune system, deterring invaders, and producing critical fatty acids. They are found in the rumen of cattle and sheep.








Bacteroides are filamentous rod shape intestinal, oral, and vaginal flora. Ruminococcus are spherical, non-flagellated gut bacteria that break cellulose and ferment glucose and xylose.

Brahmi (Bacopa monnieri) is a rejuvenating and nervine tonic that quiets the nerve excitement akin to its sedative property. Research suggests that Brahmi helps reduce stress and anxiety by elevating your mood and lowering cortisol levels, a hormone linked to stress








enhancements. It is an adaptogenic herb that increases the body's resistance to stress.

The presence of medicinal constituents like saponins and bacosides A and B Brahmi is a rejuvenating and nervine tonic to improve bipolar disorder. The antioxidant properties of Bacopa extract in the brain potentially lead to its positive effect on schizophrenia.

Ayurvedic formulations like Mahakalyanaka Ghritam, Saraswat









Arishtam, Brahmi Ghritam, Brahmi Vati, and Rudraksha Churanam are good candidates for manasika rogas (psychological and mental problems). Brahmi works very well in a child with ADHD and autism by nourishing the brain's tissues and supporting the myelin sheath. Brahmi has confirmed it helps fix attention among children and improves communication.

MANTRANO 4.37.12

जाया इद्वों अप्सरसो गन्धर्वा:पतंयो यूयम् ।










अपं धावतामर्त्या मर्त्यान्मासंचध्वम् ॥१२ ॥

जाया: । इत् । व: । अप्सरस: । गन्धर्वा: । पतय: । यूयम् ।अप । धावत ।अमर्त्या: । मर्त्यान् । मा । सचध्वम् ॥१२ ॥

TRANSLATION: The extract of Gandharvas herbs isvery efficient in combating psychic disorders. The vector-borne pathogenic - microbes infecting body fluids by triggering mental conditions are more female vector-friendly. Control of female pathogenic vectors is more critical in controlling such pathogenicity.













देवनागरीमा भावार्थ: शरीरको जलीय भागमा संक्रमण गरी मानसिक रोग उत्पन्न गर्न दुष्सहन गर्ने रोगाणु प्रतिरोधीक्षमताको गन्धर्व समूह अन्तर्गत सूचीबद्ध जडीबुटीका सारतत्व निर्मित हर्बल औषधीहरू मानसिक समस्याको समाधानमा प्रभावकारी हुन्छ। रोगाणुहरू एक ठाउँबाट अर्को ठाउँमापु¥याउने र विस्तार गर्न प्रमुख भूमिकाखेल्ने रोगाणुका भेक्टरहरूमा पोथी भेक्टर (Female mosquitoes) अधिक सक्रिय देखिएकाले मानसिक रोगको नियन्त्रणमा सम्बन्धित रोगाणु तथा रोगाणुका पोथी भेक्टरको नियन्त्रणमा विशेष पहल कदमीको जरुरत देखिन्छ ।

Scientific Explanation: The









ayurvedic healing and rejuvenating formulations capable of building body strength are called the tonic. Those tonics that can rehabilitate and sustain mental well-being are named Soma. Those herbs whose extract has soma, anti-pathogenic, and healing power effectiveness are known as Gandharva. Several pathogenic hosts of water-borne diseases (Apsara), such as the mosquito, can be male and female. The female hosts are more pathogenic than males as they are









more potent in infecting the body fluid. As we know, malaria is transmitted to humans by female mosquitoes of the genus Anopheles. Female mosquitoes take blood meals for egg production, the link between humans and mosquito hosts in the parasite life cycle.

The aromatic characteristics of Gandharva herbs add their anti-pathogenic attributes to their constituents, which promote the body's health, mental well-being, and healing. The combined effects




of all characteristics are very efficient in achieving a feeling of mental peace.

# वेदमा सूक्ष्म जीव विज्ञान - ३

## वैदिक माइक्रोबायोलजी

ऋषिका तथा ऋषिहरू प्राचीनयुगका वैज्ञानिक थिए। उनीहरू महान् चिन्तक र लेखक थिए । उक्त समयमा हाल भनिने प्रकृतिको नियमलाई ईश्वरको नियम भनिन्थ्यो। ईश्वरको नियम मान्नेलाई आस्तिक र नमान्नेलाई नास्तिक भनिन्थ्यो। त्यसबेला प्रकृतिको नियमलाईबुझेर त्यसै अनुरूप आफ्ना गतिविधि सञ्चालन गर्नुलाई धर्म मानिन्थ्यो। त्यस्तो





नियम जसको सदैव सत्य रहने अथवा समय, परिस्थिति वा स्थान अनुरूप फेरिनेविशेषता वा स्वभाव रहँदैन, त्यसलाई प्रकृतिको नियम मानिन्थ्यो। मानवता नै सम्पूर्ण मानिसको धर्म थियो।

ऋषिका तथा ऋषिहरू कुनै धर्मका प्रचारक थिएनन्। उनीहरू ज्ञानको खोजीमा देखिने आस्तिकलाई आफूले जानेको बुझेको कुराहरू तथा दर्शनका ज्ञान बाँड्ने गर्दथे। आफूले बुझेको र चिन्तनद्वारा यथार्थ रहेको यकिनमा पुगेको ज्ञान सुनेर बहसमा उत्रन चाहने नास्तिकसँग समेत प्रेमपूर्वक बहस गर्न, उनीहरूको तर्क तथा जिज्ञासा सुन्न रत्यसमा आफ्ना विचार राख्न उनीहरू प्रायः लालायित रहन्थे। यथार्थमा त्यस्ता बहसहरू



उनीहरूलाई आफूलाई प्राप्त ज्ञानबारे झन् गहिरिएर चिन्तन गर्ने र संसारबारे आफूमा अपूर्ण रहेको ज्ञान प्राप्त गर्ने नयाँ नयाँ अवसर प्राप्त भएको अनुभूति लिने गर्दथे । उनीहरूको कुटीमा निषेध गरिने भन्ने खासै अवस्था रहन्थेन ।

वैदिक सभ्यताका बौद्धिक दिग्गज ऋषि / ऋषिका तथा आयुर्वेदाचार्यहरूले श्रुति चार वेद रस्मृतिहरू जस्तै आयुर्वेद पूराण, महाभारत, अन्यग्रन्थ आदिमा गद्य र श्लोकका रूपमा कोडेड गरी सूक्ष्मजीवबारे आफ्नो अभिलेखहरू रेकर्ड गरेका थिए। लेख्ने वा रिकर्ड गर्ने प्रविधि नरहेका बेला विशाल महासागर जस्तो गहिरो वैदिक ऋषिका तथा आयुर्वेदाचार्यको आदिवासी ज्ञान एक पुस्ताबाट अर्को पुस्तामा लैजाने काम गुरु र शिष्य मार्फत मात्र सम्भव थियो।











तसर्थ ज्ञान एक व्यक्ति (गुरु) को माध्यमबाट अर्को व्यक्ति (शिष्य) मा ज्ञान हस्तान्तरण गर्ने प्रक्रियामा गुरुले इच्छुक शिष्यलाई स्वतन्त्र रूपमा छनोट गरेर विभिन्न ज्ञान जस्तै सूक्ष्म जीवहरूको विज्ञान सम्बन्धको वैदिक माइक्रोबायोलजीका ज्ञान समेत एक पुस्ताबाट अर्को पुस्तामा सारिएको देखिन्छ। उक्त प्रयोजनका लागिऋषि / ऋषिका तथा आयुर्वेदाचार्यले आफूले प्राप्त गरेका ज्ञानलाई कोडका रूपमा लिपिबद्ध गरी ऋचा / श्लोक / मन्त्र बनाएर सहज पारिएको बुझिन्छ।

प्राचीन अन्वेषकहरूले प्राचीन समयमा नै सूक्ष्म जीवहरू सर्वत्र भेटिने, तिनीहरू बोटबिरुवा, जनावर र मानिसलाई फाइदाजनक र हानिकारक प्रभाव प्रकृतिको रहने यकिन गरी तिनीहरूबाट लिन सकिने







फाइदा र उनीहरूको हानिबाट बच्ने उपायबारे समेत उपाय पहिचान गरी व्यवहारमा लागू गर्न सम्भव बनाए।

वैदिक ऋषिहरूले यौगिक शक्ति अथवा आत्मामा आधारित असीम अन्तर-ध्यान वा चिन्तनको माध्यमबाट सूक्ष्म जीव विज्ञान अर्थात् वैदिक जीव विज्ञान अन्तर्गत जैविक माइक्रोबायोलजीका ज्ञानहरू जनसमक्ष ल्याउन सफल बनाए।

वेदमा उल्लेख भएको शिवशक्ति क्वान्टम युनिफाइड फिल्ड अथवा नेगेटिभ, पोजेटिभ र न्युट्रल पदार्थको शक्ति निर्मित कम्पन ॐ हो भने देवताहरू क्वान्टम सब-एटमिक पार्टिकलहरू हुन् जस बाट दुवै परा तथा अपरा विषयवस्तुको निर्माण भएको छ। ऋषि तथा ऋषिकाहरू महादेव तथा देव अर्थात् देवताको








मौलिक चरित्रका कारण निर्मित भएका प्राकृतिक नियमहरू अध्ययन गर्ने, बुझ्ने, तिनैका आधारमा विकसित विषय वस्तु, गतिविधि, बृहत  घटना, शक्तिको संयोजन, सञ्चालनर विखण्डन आदि बारेका यथार्थ हामी सामु राख्न सहयोग गर्ने वैज्ञानिक, विचारक, प्रस्तुतकर्ता, सम्पादनकर्ताका रूपमा अस्तित्वमा रहेको वर्ग देखाउँछ। जसका कारण वैदिक कालमा वेदको निर्माण हुन सम्भव बनेको हो।

अथर्व वेदमा विभिन्न चरणका चिकित्सा पद्धति र उच्च रूपमा विकसित थेरापीका चरणहरू सम्बन्धका जानकारी समावेश गरिएको छ । अधिक संख्यामा खतरनाक तथा सामान्य प्रकृतिका रोगहरूको उल्लेख गरिएको अथर्व वेदलाई भेस–अजय वेद










पनि भन्ने गरिन्छ। अथर्वनको वेद भनेर चिनिने अथर्व वेदमा श्लोकका रूपमा रहेका विभिन्न ऋचाले मूलतः चिकित्सा पद्धतिबारे उल्लेख गर्ने गर्छन्। वैदिककालको आयुर्वेद भनेर चिनिने अथर्ववेदका ऋचाहरू औषधीका लागि समर्पित रहेकाले यसलाई भेस – अजय भनिएको हो। जहाँ भेस – अजयको लगभग समान अर्थदिने शब्द औषधी हुने गर्छ।

वैदिक माइक्रोबायोलजीमा आधारित आयुर्वेदिक चिकित्साबारे पूर्ण ज्ञान लिनका लागि वेदमा उल्लिखित वैदिक माइक्रोबायोलजी सँग सरोकार राख्ने तीन पक्षबारे जानकारी राख्न जरुरी देखिन्छ। अथर्व वेदमा परजीवी जुका, सुल सुले जस्ता वर्म, किरा वर्गका इन्सेक्ट तथा दृश्य तथा अदृश्य













परजीवी वा जर्म्सबारे उल्लेख पाइन्छ। ब्याक्टेरिया, भाइरस जस्ता सूक्ष्म जीवबारे विस्तृत चर्चा भने यजुर्वेद भेटिन्छ । सूक्ष्म जीवहरू सम्बन्धको वैदिक ज्ञानबारे बोलिएको यजुर्वेदका वर्णनहरू आधुनिक माइक्रोबायोलोजीका ब्याक्टेरिया, भाइरस जस्ता जीवाणु तथा तिनीहरूले मानव जीवनमा पु¥याउने फाइदा तथा बेफाइदाबारे वर्णन भेटिन्छ।

दृश्य तथा अदृश्य जीवबारे अथर्ववेदमा क्रिमि र कृमि गरी दुई प्रस्ट शब्दको प्रयोग भएको भेटिन्छ। कतिपय अवस्थामा कृमि र क्रिमिलाई एकै अर्थमा लिइने भए ता पनि यसको गहिरो अध्ययन गर्ने क्रममा कृमि शब्दले किरा र क्रिमि शब्द वर्म र रोगाणु (Germs) कोसन्दर्भमा व्याख्या गर्दा प्रायः प्रयोग भएको भेटिन्छ (अथर्व वेद २३.३, ६)।











यो सन्दर्भमा चर्चा गर्न अथर्ववेदमा उल्लिखित आँखाले देख्न सकिने तथा नसकिने सूक्ष्म जीवको उपस्थितिबारे बोलिएका केहीसूक्त बारे विमर्श गरौँ।

## अथर्ववेद– काण्ड–५–२३ कृमिघ्न सूक्त

[ऋषि- कण्व। देवता - इन्द्र। छन्द - अनुष्टुप् १३ विराट अनुष्टुप्।]

**यो अक्ष्यौ परिसर्पति यो नासे परिसर्पति |**

**दतां मध्यं गच्छति तं क्रिमिं जम्भयामसि ||३||**

भावार्थ: आँखामा, नाकमा, दाँतहरूको बीचमा पर्ने जुका (वर्म्स) तथा सूक्ष्म जीवहरू (माइक्रोबहरू) लाई नियन्त्रण र नष्टगर्न सकिन्छ।













अथर्ववेद–काण्ड–२ सूक्त –३१ कृमिजम्भन सूक्त

[ऋषि- कण्व। देवता - चन्द्रमा । छन्द - १ उपरिष्टात् विराट बृहती ]

**अन्वान्त्र्यं शीर्षण्य१मथो पाष्टेयं क्रिमीन्।**

**अवस्कवंव्यध्वरं क्रिमीन् वचसा जम्भयासमि।।४।।**

भावार्थ: पाचनप्रणाली (आन्द्रामा), टाउको र आँखी–भौहरूमा जुका (वर्म्स) तथारोगाणु सूक्ष्म जीवहरू (माइक्रोबहरू) विभिन्न तरिकाबाट प्रवेश गर्ने गर्छन्। जसलाई मन्त्रको (ध्वनि वा संक्रमणको स्थानमा कम्पन पैदा गर्न ओखती) सहायताले नियन्त्रण र नष्ट गर्न सकिन्छ।

**अथर्ववेद – काण्ड – २ सूक्त – ३२**







# कृमिजम्भन सूक्त

**ये क्रिमयःपर्वतेषु वनेष्वोषधीषु पशुष्वप्स्१न्तः।**

**ये अस्माकं तन्वमाविविशु सर्वं तद्धन्मि जानिम क्रिमीणाम्।। ५।।**

भावार्थः आँखाले देख्न सकिने र नसकिने सूक्ष्मजीवहरू पहाड, जंगल, बोटबिरुवा, जनावर, पानीजस्तै हाम्रो शरीरभित्र बाहिर सबैतिर अर्थात् सर्वत्र अस्तित्वमा भेटिन्छन्।

माथिका सूक्तहरूले मानिसको शरीरभित्र र बाहिर अन्यत्र जस्तै आँखाले देख्न सकिने र नसकिनेसूक्ष्म जीवहरू रहने गर्छन् भन्ने यथार्थ स्पष्ट पारेको छ । जुन आधुनिक विज्ञानलेभर्खरभर्खर मात्र प्रमाणित गरी अनुभूति गरेको विषय रहेको छ।











'क्रिमिवा कृमि' शब्द 'क्रम' शब्दबाट बनेको ठानिन्छ। विभिन्न चरण रहेको विविध प्रक्रियाको नियमित सुचारूपनको अनुक्रम लाई 'क्रम' भन्ने गरिन्छ। क्रिमि शब्द प्रकृतिको नियमित सञ्चालनका लागि भूमिका खेल्ने जीव, सूक्ष्मजीवी जीवाणु तथा रोगाणु आदिलाई जनाउन प्रयोग भएको देखिन्छ । अष्टांग हृदय २/३१/५ अनुसार सम्पूर्ण जैविक क्षेत्रको उपस्थितिमा रहेको स्थानमा क्रिमि भेटिन्छ। चरकसंहिता अनुसार शरीरमा हुने क्लेद मतलब रुझान, ओसिलोपना तथा मोइस्चर वा पानीको मात्रा क्रिमिको उत्पत्ति, वृद्धितथा संक्रमणको प्रमुख कारक रहने गर्छ।

ऋग्वेदमा प्रयोग भएको नभेटिने क्रिमी कृमि शब्द अथर्ववेदमा उल्लेख भएको देखिन्छ । क्रिमी /











कृमिले मानव शरीरमा प्रवेश गरेर धेरै प्रकारका रोगको उत्पादन गर्छ। (अथर्ववेद २/३२/६) क्रिमी/ कृमि मानव जीवनका लागि हानि गर्ने र नगर्ने दुवै प्रकारको हुने गर्छ। मानव जीवनमा असर गर्ने दृश्य जीव तथा अदृश्य रोगाणु सूक्ष्म जीवहरूको वर्गीकरण, रोगको लक्षण र उपचारको पद्धतिबारे आयुर्वेदमा अत्यन्त प्रभावकारी रूपमा उल्लेख गरिएको छ। संक्रमणकारी रोगाणुहरूबारे भुतभिषंगजा, संक्रामक र अप्सराज जस्ता संहिताहरू छन्।

प्राकृतिकनियम र सिद्धान्तमा आधारित रहेर वेदमा सूक्ष्म जीवविज्ञानको विशिष्ट सिद्धान्त तथातिनका वैदिककालीन समग्र अभ्यासबारे स्पष्ट रूपमा व्यक्त













गरिएका भेटिन्छन्। अगस्त्यः ऋषिको कन्कोटन सूक्त (ऋग्वेद १.१९१); ऋषिकाण्वः र उनका वंशजहरूले तयार गरेका क्रिमिजम्भानम सूक्त (अथर्ववेद २.३२), कृमिनाशन सूक्त (अथर्ववेद २.३२), कृमिजम्भन सूक्त (अथर्ववेद ५.२३); ऋषि चातनको रक्षोघ्न सूक्त (अथर्ववेद५.२९) आदि वैदिक माइक्रोबायोलोजीको क्षेत्रको तत्कालीन ज्ञानको अभिलेख हो।

यसका अतिरिक्त चरक संहिता, सुश्रुतसंहिता, माधवनिदान, अस्तंगाहृदय, काश्यपसंहिता, वृक्ष आयुर्वेद (रुख बिरुवाहरूको विज्ञान), अर्क प्रकाशलगायत अन्य धेरै वैदिकग्रन्थमा वैदिक सूक्ष्म जीव विज्ञानबारे विस्तृत वर्णन गरिएको छ ।

यसका अतिरिक्त जस्तैः चरकसंहिता, सुश्रुतसंहिता,









माधव निदान, अस्तंगाहृदय, काश्यपसंहिता, वृक्ष आयुर्वेद (रुख बिरुवाहरूको विज्ञान), अर्क प्रकाश लगायत अन्य धेरै वैदिकग्रन्थमा वैदिक सूक्ष्म जीव विज्ञानबारे विस्तृत वर्णन गरिएको छ। जसले मानिसका कतिपय रोग शरीरमा अत्यन्तै सानो सूक्ष्म जीव द्वारा हुने आक्रमणका कारण विकास हुनेगर्छन् भन्ने चिकित्सकीय रोगाणु अर्थात् जर्म थ्यौरी (Germ Theory) को सिद्धान्त बारे वैदिक माइक्रोबायोलोजीको यथेष्ट जानकारी रहेको पुष्टि गर्छ।

वेदमा वस्तुको संरचनाको डिजाइनको इन्जिनियरिङमा हुने खराबीले जन्माउने समस्याको मूलकारकलाई निर्मूल पार्ने निश्चित प्रकारको प्राकृतिक विधि जरुरत हुने र त्यो विधिमाआँधी









अर्थात् वायुशक्तिको क्षमताको उपयोग हुने मान्यता राख्छ । समस्याको मूल कारक निर्मूल पार्ने वायु शक्तिलाई वेदमा रुद्रदेव अर्थात् रुद्रशक्ति भनिएको छ।

नियमित गतिशीलतामा रहेका कणहरूलाई सामूहिक रूपमा एक अर्को बीच तुलनात्मक सन्तुलनमा ल्याउने क्वान्टम विज्ञानको युनिभर्सल क्वान्टम फिल्ड अर्थात् कम्पनको अवधारणालाई वेदले नृत्यको मुद्रामा रहेका शिव वा नटराजको प्रवृत्तिको संज्ञा दिएको छ।

ऊर्जाको सन्तुलन मार्फत नटराज प्रवृत्ति अर्थात् क्वान्टम कम्पनलाई सन्तुलित र नियमित हर्मोनीमा राख्ने कार्य (इलेक्ट्रो म्याग्नेटिक फिल्ड तथा इनट्यांगलमेन्टको अवस्था) गर्ने काम रुद्र शक्तिले










गर्ने वेदको मान्यता छ।

शिवकी पत्नी पार्वतीको निश्चित प्रकृतिको प्रवृत्तिलाई वेदमा रुद्रा तथा प्रिसनी भनी उल्लेख गरिएको छ। संसार (मातृभूमि) र जीवहरूको माताको अस्तित्व कायम गर्न आधारभूतसंरचनाको भूमिका प्रस्ट गर्न वेदमा प्रिसनी प्रवृत्तिको सहारा लिइएको छ।

पृथ्वी वा शरीरको संरचनाको आधारभूत पाँच कणमा (पञ्च–महाभूत) आकाश, वायु, अग्नि, जलर पृथ्वी तत्व पर्ने गर्छन्। संरचनागत रूपमै प्रकृतिको नियमको सिद्धान्त (एकीकृत क्वान्टम फिल्डको नियम) लाई स्वीकारी भाइब्रेसनल मोड (कम्पन) मा कायम रहने रकम्पन कै अवस्थामा रहेर पनि एक अर्को बीच आकर्षण र विकर्षण (प्रेम र घृणा) को द्वन्द्वात्मक सम्बन्धमा रहेर एक स्थिर ब्रह्माण्ड वा













शरीरको संरचना निर्माण गर्नेकार्य (धर्म) पञ्च–महाभूत कणहरूको हो।

पञ्च–महाभूत कणहरूले आफूमा निहित रूद्रा अर्थात् प्रिसनी शक्तिको प्रवृत्तिको सदुपयोग गरी ब्रह्माण्ड वा शरीरलाई एक स्थिर संरचनाका रूपमा नियमित रूपमा सञ्चालन गर्दै आउनसफल भएको ठानिन्छ। रुद्र शक्तिको चलायमान पन र प्रिसनी शक्तिको समग्र संयोजन ले संसारमा जीव तथा अन्य सम्पूर्ण पदार्थको अस्तित्व सम्भव रहेको देखिन्छ। रुद्र र प्रिसनीको संयुक्त भूमिका लाई वेदले प्राकृतिक शक्तिको जोडी वा लोग्ने–स्वास्नीका रूपमा प्रस्तुत गर्ने गरेको छ।

मरुतलाई वेदमा रुद्र र प्रिसनीका छोरा छोरीहरूका रूपमा प्रस्तुत भएको छ। मारुतको भूमिका मूल







रूपमा रुद्र र प्रिसनीको संयुक्त भूमिकामा सञ्चालित ब्रह्माण्ड होस् वा तपाईं हाम्रो शरीर त्यसमा आउने सबै प्रकारको विचलन, रोग विरुद्ध सक्रिय रहेर जीव र निर्जीवहरूको अस्तित्व नियमित रूपमा कायम गर्ने रहेको देखिन्छ। यथार्थमा तिनीहरू लाई प्राकृतिक नियमको सिद्धान्तको लागु गर्न सक्रिय रहने वायु र बाष्प ऊर्जाको रूपमा वेदले व्याख्या गर्ने गरेको भेटिन्छ।

शरीर सञ्चालनमा आउने हरेक प्रकारको असहजता र असामञ्जस्यताको समाधान गर्ने, तिनीहरूलाई संरचनागत रूपमा र कार्यगतरूपमा समेत समग्र स्थिरतामा ल्याउने काम सुम्पिएको देखिन्छ।

वैदिक अवधारणा भित्र भेटिने निर्माण (Generator), सञ्चालन (Operator) र











विगठन (Destroyer) को चक्रीय कार्यविधि सञ्चालनको रुद्र र प्रिसनी (GOD) सिद्धान्तमा रहेर शरीर निर्माण हुने सबै भन्दा सानो शक्तिको थैली रुपको उर्जा सम्पूर्ण ब्रह्माण्डमा सर्बत्र रहेकाले शरीरको अत्यन्त सूक्ष्म भाग देखि सम्पूर्ण शरीरको संरचना नियमित गर्ने भूमिकामा मरुतको उपस्थिति रहने भनी वेदमा सङ्केत गरिएको छ।

एक व्यक्तिको स्वास्थ्यको सन्दर्भमा उसले जन्मँदै प्राप्त गरेको शरीरको संरचनाको प्रकृति कायम गरी उसलाई जीवित राख्ने काम मरुत शक्ति ले गर्ने गर्छ। कुनै रोग – व्याधि, संक्रमण वा चोटपटक आदिबाट व्यक्तिको शरीरमा पुग्न गएको शारीरिक र मानसिक क्षतिलाई सम्भव भए सम्म पहिले कै प्राकृतिक अवस्थामा फर्काउने र सम्भव नहुँदा जे छ त्यसै लाई







प्राकृतिक नियमको सिद्धान्त अनुरूप चल्न सहज गराएर एक नयाँ स्थायित्वको भर्पाई गर्नु मरुतको भूमिका रहेको बुझिन्छ।

मरुत मुख्यतः शरीरका विभिन्न अंग प्रत्यंगको आफ्नै भित्री आन्तरिक र एकापसको तथा तिनीहरूको बाहिरी वातावरण सँगको सम्बन्ध सुदृढ गर्नु सँग सम्बन्धित हुने गर्छ। एकीकृत क्वान्टम क्षेत्र भित्र गडबडी हुन नदिन, शारीरिक संरचनागत सहकार्यको सन्तुलित संयोजन गर्न, मानसिक र आध्यात्मिक सबलता कायम राख्न मरुतको भूमिका देखिन्छ।

आकस्मिक घटना र चोटपटक तथा नियमित











वृद्धिका क्रममा जरुरत हुने निर्माण, ध्वंस, त्याग र पुनर्निर्माण जस्ता गतिविधिमा समेत मरुतको भूमिका हुने गर्छ । शरीरका निर्मित अंगहरू को सुव्यवस्था र सञ्चालनका कार्यविधि र संयन्त्रको सञ्चालनमा तसर्थ मरुत शक्तिको अहम् भूमिका देखिन्छ।

वैदिक ग्रन्थहरूमा लाभदायी सूक्ष्म जीवहरू (जीवाणु), लाभ दायी न्युरो केमिकलहरू, इन्जाइम, हार्मोन, शरीरलाई लाभ दिने केमिकलहरू, भिटामिन र मिनिरल्सहरु, लवणहरू, इन्डो – क्याना – बिनोइड्सहरू आदि प्रकारका अग्नि र रुद्र शक्ति मरुतले सहकार्य गर्ने मित्रको रूपमा उल्लेख भएको देखिन्छ।

प्रायः जीवाणु र रोगाणुहरू जीवित प्रकृतिको हुन्छ।











भाइरस न त मृत न जिउँदो नै रहने गर्छ। भिटामिन, मिनिरल, पेप्टाइइड्स लगायत विभिन्न बडी–केमिकल, न्युट्रासिटिकल्स भने निर्जीव मानिन्छ। वेदमा जीवाणु र विषाणु लाइ रोगाणुको अर्थमा लिने गरिएको छ।

रोगाणु नियन्त्रणको प्राकृतिक शक्ति जसले व्यक्तिको रोग प्रतिरोधी शक्तिको निर्माण गर्दछ त्यो रुद्र आदि बाहेक कम्तीमा १८० प्रकारको मरुतको समुहमा ऊर्जाको रुपमा अस्तित्वमा रहने संकेत गरिएको छ (ऋग्वेद ८.९६.८)। नौ मरुतको समूहमा कार्यरत रहने हरेक मरुतको समूह निर्माण गर्ने क्रममा प्रकृतिले नव दुर्गा रुपी नौ फरक फरक शक्तिको सामर्थ्यको फरक फरक मात्रामा संयोजन रहेर गठन सम्पन्न गर्ने गर्दछ।













शरीरको लागि लाभदायक र हानिकारक सूक्ष्मजीव र सूक्ष्म अणुहरू भित्र कैद हुने परा ऊर्जाहरू र प्रवृतिहरु लाई जनाउन वेदमा धेरै शब्दहरू प्रयोग भएको छ। जसमा मरुत, कृमि, क्रिमी, अदृश्य, जन्तुवान्, सुद्र जन्तु, पिशाच, दुर्नाम, सुनाम इत्यादि प्रमुख हुन।

वेदको माधव निदानमा रोगाणुहरूबारे धेरै अप्रत्यक्ष सन्दर्भ भेटिन्छ। जसमा वात, पित्त र कफ लगायतका रोगको सिर्जना गर्न मूलतः सूक्ष्म जन्तुहरू नै जिम्मेवार हुने उल्लेख छ। निश्चित प्रकारका रोगाणुहरू गर्भयन्त्रमा संक्रमण गरी गर्भनाश गर्ने प्रकृतिको हुन्छ (ऋग्वेद ८/८/२०/२)।

योनिमा हुने संक्रमण बिस्तारै सम्पूर्ण महिला प्रजनन







प्रणालीमै फैलन गई महिलामा बच्चा तुहिने, बाँझोपन विकास हुने जस्ता जटिलता निम्तिने गर्छ।

रोगाणुहरूका कारण टाउको दुख्ने, पेट दुख्ने (यजुर्वेद १३/७) रोगहरू निम्तिने गर्छ। खाना खाइसकेपछि राम्रोसँग सफा हुन नसकेका भाँडा कुँडामा रहेका रोगाणुहरू मानिसमा रोगको विकास गर्न सक्षम बन्छ (यजुर्वेद १६/६२१)। रोगाणुहरू लाई विभिन्न उपमा तथा समानार्थी शब्द समेत दिएर उल्लेख गरिएको छ। जस्तै सबैभन्दा खतरनाक रोगाणुको नियन्त्रण गर्ने रुप रुद्रको उपमा दिएर समेत रोगाणुको वर्णन गरिएको छ। जस्तै: मानव शरीरमा गम्भीर संक्रमण गराउन जिम्मेवार रोगाणुको नियन्त्रण रुद्र रोगाणुको नियन्त्रण कर्म असफल हुँदा व्यक्ति मर्न सक्दछ (यजुर्वेद १६/५४)।











जसरी एउटा गलत नियतले हतियार लिएको अपराधी लाई नियन्त्रणमा लिएर शान्ति स्थापना गर्न समाजको सुरक्षा गर्ने असल नियत लिएको प्रहरीको हातमा हतियारको आवश्यकता पर्दछ त्यसरी नै गलत नियतको रोगाणुको नियन्त्रणमा रोगाणु नियन्त्रण रुद्र शक्ति सक्रिय रहने बुझिन्छ। जहाँ रुद्र पुलिसको भूमिकामा हुन्छ भने मरुत हतियारको भूमिकामा।

यजुर्वेदमा मरुत शब्दको पटकपटक प्रयोग प्रयोग गरी विभिन्न सन्दर्भमा, विविध सांकेतिक उपमा सहित वैदिक कालमा ज्ञात रहेको माइक्रोबायोलीजी र बायोटेक्नोलोजी बारेका ज्ञानहरूको वर्णन भएको पाइन्छ। वैदिक मान्यतामा हावा, हुन्डरी, बतास, ज्वालामुखीको वाष्प जस्तो प्रकृतिको कम्पन वा










शिवको प्रलयकारी एक रूप मानिने रुद्रलाई कुनै पनि गम्भीर समस्या लाई त्यसको जरै बाट निमिट्यान्न पारी निवारण गर्ने सबैभन्दा शक्तिशाली देव अथवा वायु शक्तिका रूपमा परिभाषित गरिन्छ।

रुद्रसँग जोडेर हेरिने मरुत वायु शक्ति रुद्र तथा प्रजनन शक्तिकी जननी जल देवी वृश्निको सह-संयोजन बाट उत्पादित शक्ति हो।

मरुतशक्ति सूक्ष्म जीव र परा कण रूपी मरुतहरू संसारको हितका लागि सक्रिय हुने गर्छन्। सूक्ष्म जीव र परा कणरूपी मरुतहरूले महासागरमा रहेका प्रदूषक पदार्थहरू लाई साना साना टुक्रामा विभाजन गरी पानीको स्रोतलाई सफा र शुद्ध पार्छन्। मरुतहरू न्युनतम २७ देखि ६० को तीन












गुणा (१८०) प्रकारको समुहमा भेटिने ऋग्वेदको भनाइ छ (ऋग्वेद ८.९६.८)।

मरुतलाई वायु अथवा प्राण देवता सम्बन्धको शक्तिका रूपमा लिइन्छ। एकापसमा सम्बन्धित तर विभिन्न प्रकारका हानिकारक रोगाणु जनाउने गरी मरुतलाई खतरनाक रोगहरू निम्ताउने रोगाणु निवारक रुद्र सेनाको उपमा दिएर अदृश्य प्रकृतिका विभिन्न संक्रामक रोगाणु बारे वेदमा बर्णन गरिएको छ।

वेदमा मरुतको अवधारणा संयोजन गरी मनोवैज्ञानिक तथा सूक्ष्म प्रकृतिको रोग तथा तिनका उपचारमा सहयोगी होस् भन्ने अवधारणामा यजुर्वेदमा विभिन्न विषय वस्तु तथा सन्दर्भको निकै गहन सन्देश सम्प्रेषण भएको यथार्थ आज आएर









महसुस भइ रहेको छ ।

कुनै पनि सन्देश जति खँदिलो हुन्छ त्यसलाई बुझ्न त्यति नै विलक्षण प्रतिभाको जरुरत पर्छ। यजुर्वेदमा समेत समाजका बौद्धिक वर्गले बुझ्ने गरी सूक्ष्म रोगाणु शक्तिको गम्भीरता बारे समाजलाई सचेत गराउन रुद्र तथा मरुत जस्ता शक्ति केन्द्रहरूको सन्दर्भ चयन गरी निकै थोरै शब्दमा अत्यन्त गहन कुरा बोलिएका छन्।

अत्यन्त जटिल प्रकृतिका रोगका कारण र शरीरले दिने सूचनाका आधारमा रोगको निर्क्योल गर्नु पर्ने तथा फरक फरक परिस्थिति जन्य संवेदनशील निर्णयहरूमा पुग्नु पर्ने अवस्था लाई मनन गरी आयुर्वेदिक चिकित्सकहरू लाई सहज पारिदिने गरी रोगको पहिचान र निदानलाई सहज बनाउन शक्ति









केन्द्रहरूको सन्दर्भ मार्फत सूचना सम्प्रेषण गर्ने वैदिक काइदा अत्यन्त व्यावहारिक समेत देखिन्छ।

समग्र मानव शरीर यसका विविध निर्माण सामग्रीको कम्पनहरूको संयोजन मार्फत प्राप्त समग्र कम्पनको उपज रहेकाले अन्ततः समग्र कम्पनलाई ध्यानमा दिएर गरिएको उपचारले मात्र समग्र स्वास्थ्यको समस्या लाई सम्बोधन गर्न सकिने चुरो यथार्थतर्फ वेदको पहिलो जोड देखिन्छ।

आयुर्वेदले वकालत गर्ने भौतिक, मानसिक र आध्यात्मिक स्वास्थ्य सहितको समग्र स्वास्थ्यको वैदिक उपचार पद्धतिको अवधारणाको कखरा यही सिद्धान्तमा आधारित भएर विकास भएको छ।

विभिन्न सामग्रीको प्राकृतिक मिश्रणबाट तिनीहरूले




दिने कम्पनको प्रकृति बुझ्न आयुर्वेदमा पञ्चतत्वको अवधारणा अघि सारिएको छ।

मानवको इन्द्रियहरूले अनुभूति गर्न नसक्ने प्रकृतिको दैवी मतलब प्राकृतिक शक्तिका कारण आकाश अथवा शून्यता (डार्क–स्पेस) बाट अ, ऊ र म जस्तो सुनिने ध्वनिका कम्पनबाट ॐ-ध्वनि बन्छ । प्रकृतिमा अस्तित्वमा रहेको ज्ञात अज्ञात अ , ऊ, र म को प्रवृत्ति गत र आवृत्ति गत गुण संयोजन मार्फत तम, रज र सत गुणको कम्पनहरूको समग्र मिलावटको कम्पन रुपी ॐ प्रकृतिको कम्पन फुर्ने गरेको अत्यन्त आधारभूत सिद्धान्तको प्रतिपादन भएको छ।

प्रकृतिको विभिन्न आवाजका कम्पनको अत्यधिक संकुचन बाट वायु वा हावा तत्वको निर्माण हुन्छ।





वायु हाम्रो स्पर्शबाट अनुभूति हुन्छ। वायुको घर्षण बाट उत्पन्न ताप र आकाशको संयोजन बाट अग्नि वा इनर्जी तत्व निर्मित हुन्छ। जुन हामी आँखाले देखेर अनुभूति गर्छौं। आकाश, वायु र अग्निको संयोजन बाट जल तत्व वा तरल वा पानीको निर्माण हुन्छ। जुन हामीले स्वादबाट अनुभूति गर्न सक्छौं। आकाश, वायु, अग्निर जल तत्वबाट पृथ्वी तत्व बन्दछ। जुन हामीले गन्धबाट अनुभूति गर्न सक्छौं। परा प्रकृतिको आकाश, वायु, अग्नि, जल र पृथ्वी तत्व गुणलाइ पञ्चतत्व भनिएको छ।

समग्रमा पञ्चतत्व आफैं आकाश, वायु, अग्नि , जल र पृथ्वी तत्व गुण विभिन्न प्रकृति र मात्रामा मिसिएका निश्चित प्राकृतिक कम्पनहरूको प्राकृतिक क्रम बद्ध निर्माण हो। यसरी निर्माण भएका






पञ्चतत्व पुनः एकापसमा सन्तुलनमा आउने क्रममा 'आकाश र वायु तत्व' मार्फत बात दोष; 'अग्नि र जल तत्व 'बाट पित्त दोष तथा 'जल र पृथ्वी तत्व 'बाट कफ दोष प्रकृतिहरु निर्माण हुने गर्दछ।

मानिस जन्मँदा जुन प्रकृतिको बात, पित्त र कफ दोषको संयोजन युक्त रहेर जन्मिएको हुन्छ उक्त प्रकृति नै उसको प्राकृतिक रूपमा बात, पित्त र कफ दोषको सन्तुलित अवस्था हो। अपवाद बाहेक उसलाई जीवनभर आफू जस्तो प्रकृतिको सन्तुलित कम्पनको समग्र रूपमा जन्मिएको हो त्यही रूपमा उसलाई राख्न प्रयास गरिन्छ। जीवन जिउने क्रममा मानिसको खानपान, वातावरण, जीवनपद्धति आदिका कारण उसको जन्मजात सन्तुलित दोषमध्ये जुन वा जुन जुन दोषको अधिकता हुन्छ












त्यसैको निवारणका लागि उपचार खोजिन्छ।

वास्तवमा दोषको निवारणका लागि उपचार भनेको मानिसको संरचनागत निर्माणको कम्पन प्रक्रियाको समग्रतामा आएको परिवर्तनलाई प्राकृतिक रूपकै पहिले कै अवस्थामा फर्काउनु हो। जसका लागि प्रकृतिको उपाय नै धरै प्रभावकारी हुने हुँदा उपलब्ध प्राकृतिक उपायको सकेसम्म धेरै उपयोग गरिन्छ।

औषधीय वा उपचारात्मक पक्षबाट मूल्यांकन गर्दा शरीरको प्राकृतिक गठजोडको सन्तुलन बिग्रने अवस्थामा मानिस विमार पर्दछ। सन्तुलन बिग्रने अवस्थामा पुग्दै गर्दा कफ (¥याल तथा इन्जाइम), पित्त (बाइल तथा पाचन क्रिया) र बात (वायु) सम्बन्धका दोषहरूको नियन्त्रण खोजिन्छ। कफ,









पित्त र बातको असन्तुलन शरीरमा भौतिक संरचनाको नियन्त्रण नहुनु संग जिम्मेवार हुने गर्दछ। तसर्थ शरीरमा रोगाणुहरूको संक्रमण समेतले जन्मने कफ, पित्त र बातको असन्तुलन सन्तुलन झन् बढी बिग्रन सहयोगी बन्ने हुँदा वैदिक उपचार पद्धतिमा रोगाणु जन्य स्वस्थ समस्यामा समेत समग्र स्वस्थ र शरीरको समग्र कम्पनको (Quantum Unified Field of Quantum Mechanics) प्राकृतिक सन्तुलन पुनर्स्थापना गर्न गर्न ध्यान दिइन्छ। समग्र – कम्पन (Quantum UnifiedField) प्राकृतिक अवस्थामा पुनर्स्थापना खानपान, ओखतीमुलो र जीवन पद्धतिमा सुधार गरेर मात्र सम्भव हुन्छ। जसका लागि समग्र वेदको चुरो उपचारात्मक तथा








रोग प्रतिरोधात्मक ज्ञानको सहारा लिइएको हुन्छ। किनकि आजको औषधी विज्ञान पुग्न सकेको विन्दुभन्दा अधिक अग्रणी ज्ञानहरूले वेद भरपुर छ। जसको अगाडि विज्ञान आफैं नतमस्तक छ। जुन हाम्रो गौरवपूर्ण रैथाने ज्ञान हो।

# वेदमा सूक्ष्म जीव विज्ञान – ४

ऋग्वेद मन्त्र १.३७.१

**करीळं वः शर्धो मारुतमनर्वाणं रथेशुभम |**

**कण्वा अभि पर गायत ||**

भावार्थ: हरदम गतिशील रहँदै समूहमा काम गर्ने सशक्त सूक्ष्म जीव र परा कणरूपी प्राकृतिक शक्ति










(वायु देवता) मरुत, ब्रह्माण्डमा सम्पूर्ण गतिविधिहरूलाई प्रकृति नियम मैत्री रूपमा कायम राख्न सदैव उत्साहित र सक्रिय रहने अपराजित शक्तिहरू हुन्। रुद्र, अग्नि र मरुतहरूको अविरल, अविचलित र क्रमिक शक्ति शाली सहकार्यले जसरी सुन्दर रथहरू क्रमबद्ध रूपमा नियमित चलायमान रहन्छन्, त्यसरी नै शरीरभित्र अनुशासित निर्माण, नियमित सञ्चालन र विखण्डनको कार्य स्वतन्त्र तर नियमबद्ध रूपमा सम्पन्न गर्ने गर्छन्।

शब्द अर्थ: करीळं (karīḷaṁ) – हरदम गतिसिल रहेर समुहमा कामगर्ने; वः (vaḥ) – तिमीहरूको; शर्धः (śardhaḥ) सशक्त समूह, मारुतम् (mārutam) - सूक्ष्म जीव र परा कणरूपी प्राकृतिक शक्ति (वायु देवता); अनर्वाणं





॥ श्री गणेशाय नमः ॥







(anarvāṇaṁ) - सम्पूर्ण गतिविधि हरूलाई (कर्म) प्रकृति नियम मैत्री रूपमा कायम गर्न सदैव उत्साहित रहेर सक्रिय रहने अपराजित शक्ति; रथेशुभम (ratheśubham)- चलायमान सुन्दर रथहरू जस्तै क्रमिक अनुशासित क्रममा रहेर; कण्वाः (kaṇvāḥ) – कण्वहरू (रुद्र / इन्द्र, अग्नि र मरुतहरूको सहकार्य); अभि (abhi) - तर्फ, सम्मुख; पर (para)- जोडले, खुल्ला; गायत (gāyata) - सामुहिक कार्य सम्पन्न गर्ने (जस्तै: भजन गाउने कर्म)

नोट: वैदिक ऋषि वा सन्तको नाम कण्वलाई वैदिक साहित्यमा चलायमान सुन्दर रथहरू गुड्ने प्रक्रियाको रूपमा प्रयोग गरिन्छ, जसले विभिन्न देवताहरूको कार्यलाई जनाउँछ। यसमा मुख्यत:





॥ श्री गणेशाय नमः ॥





रुद्र (आत्मबलका देवता), अग्नि (निर्माणका लागि आवश्यक शक्तिको स्रोत, जस्तै: पाचन क्रिया मार्फत शक्ति उत्पादन गर्नु, ठूलो अणुहरूलाई साना अणुहरूमा तोड्ने प्रक्रिया अर्थात् क्याटाबोलिजम, साना अणुहरूबाट ठूलो अणुहरू निर्माण गर्ने प्रक्रिया अर्थात् एनाबोलिजम, प्रतिरक्षा प्रणाली निर्माण आदि), र मरुतहरू (विनाशको शक्ति, जस्तै: म्याक्रोफेज र न्युट्रोफिल्स जस्ता प्रतिरक्षा कोषहरू मार्फत अवाञ्छित कणहरू, ब्याक्टेरिया, मरेका वा क्षतिग्रस्त कोषहरू, र अन्य बाहिरी अनावश्यक पदार्थहरूलाई घेरेर बाहिर फाल्ने फागोसाइटोसिस प्रक्रिया; आफ्नै क्षतिग्रस्त वा अनावश्यक घटकहरूलाई विघटन गरी पुन: उपयोग गर्ने ऑटोफ्याजी प्रक्रिया; क्यान्सर बन्न सक्ने क्षतिग्रस्त










वा खतरनाक कोषहरूलाई हटाउन कोषहरूले आफैँलाई नष्ट गर्ने एक व्यवस्थित र नियन्त्रित एपोप्टोसिस प्रक्रिया; कोषहरूले अनावश्यक सामग्री वा फोहोर उत्पादनहरूलाई कोषको झिल्ली बाहिर निकाल्ने एक्सोसाइटोसिस प्रक्रिया आदि) को क्रमबद्ध सामूहिक कार्यलाई जनाउँछ।

व्याख्या: प्राकृतिक शक्तिहरू, विशेष गरी मरुतहरू (वायु देवता) सूक्ष्म जीव र परा कण शक्ति हुन्। तिनीहरू ब्रह्माण्डको सबै गतिविधिहरूलाई प्रकृतिको नियमअनुसार व्यवस्थित गर्न उत्साहित र सक्रिय रहन्छन्।

मरुतहरू, रुद्र / इन्द्र, र अग्निको सहकार्यलाई सुन्दर रथहरू चलाउने प्रक्रियासँग तुलना गर्न सकिन्छ जहाँ यी देवताहरूले अनुशासित र नियमित रूपमा





कार्य गर्छन्।

रुद्र / इन्द्र लाई आत्मबलका देवता मानिन्छ, जो मानसिक र शारीरिक शक्तिका प्रतीक हुन्। अग्नि निर्माणका लागि आवश्यक शक्तिको स्रोत मानिन्छ। उदाहरणका लागि, पाचन प्रक्रियामा अग्निले खाना पचाएर ऊर्जा उत्पादन गर्छ। यस्तै, क्याटाबोलिजम (ठूलो अणुहरूलाई साना अणुहरूमा तोड्ने प्रक्रिया) र एनाबोलिजम (साना अणुहरूबाट ठूलो अणुहरू निर्माण गर्ने प्रक्रिया) अग्निका रूपहरू हुन्। मरुतहरूलाई विनाशको शक्ति मानिन्छ, जसले फागोसाइटोसिस (अवाञ्छित कणहरू र मरेका कोषहरूलाई घेरेर बाहिर फाल्ने प्रक्रिया), ऑटोफ्याजी (आफ्नै क्षतिग्रस्त घटकहरूलाई विघटन गरी पुनः उपयोग गर्ने प्रक्रिया), एपोप्टोसिस





(क्यान्सर बन्न सक्ने खतरनाक कोषहरूलाई नष्ट गर्ने प्रक्रिया) र एक्सोसाइटोसिस (अनावश्यक सामग्रीलाई कोष बाहिर निकाल्ने प्रक्रिया) जस्ता प्रक्रियाहरूमार्फत शरीरलाई स्वस्थ राख्न मद्दत गर्छ। यो सबै कार्य एकसाथ भएर शरीरभित्र अनुशासित निर्माण, नियमित सञ्चालन, र विखण्डनको कार्य स्वतन्त्र तर नियमबद्ध रूपमा सम्पन्न हुन्छ। यसरी वैदिक साहित्यमा कण्वलाई यी देवताहरूको संयुक्त कार्यको प्रतीक मानिएको छ, जसले ब्रह्माण्ड र शरीरमा संतुलन कायम राख्न महत्त्वपूर्ण भूमिका खेल्छ।

ऋग्वेद मन्त्र १.३७.२

**ये पर्षतीभिर्ऋष्टिभिः साकं वाशीभिरञ्जिभिः |**







**अजायन्त सवभानवः ||**

भावार्थ: आफैंमा शुद्धता, प्रकाश, र दिव्य गुणहरू भएका स्वयं प्रभाशाली प्राणी मरुतहरू शक्तिशाली, गतिशील ईश्वरीय योद्धाहरू हुन्। प्रकृतिको प्रजनन र असीमित उत्पादकत्वको शक्ति निर्माण गर्ने जिम्मेवारी लिएका मरुतहरू प्रकृतिको नियम विरुद्धका गतिविधिलाई सच्याउन उपयुक्त दैविक हतियार र ऊर्जाले सुसज्जित योद्धाको रूपमा उत्पत्ति भएका सूक्ष्म जीव र पराशक्ति हुन्। प्रकृति र जीवका संवेदनशील विषयवस्तु र स्थानलाई सुरक्षित गर्ने सुरक्षा कवचले सुसज्जित रहने मरुतहरू सधैं समूहमा सक्रिय र स्वतन्त्र रहेर ब्रह्माण्ड र त्यस भित्रका प्राकृतिक नियमसँग अनुरूप गतिविधिहरूलाई नियमन र सञ्चालन गर्छन्।













ईश्वरीय ऊर्जाका स्रोत मरुतहरूकै कारण ब्रह्माण्डमा नियमित सन्तुलन कायम हुन्छ, जसले जीवन र प्रकृतिको स्थिर नियमितता कायम राख्न मद्दत पुऱ्याउँछ।

शब्द अर्थ: ये (ye) – ती (मरुतहरूका बारेमा भनिएको) जो; पर्षतीभिः (parṣatībhiḥ) - प्रजनन र प्रचुर उत्पादकत्वसँग सम्बन्धित ईश्वरीय शक्तिको वर्षा (अर्थात् उपलब्धता) गराउने तत्वका कारक; ऋष्टिभिः (ṛṣṭibhih) - प्रकृतिको नियम विरुद्धको गतिविधिलाई सच्याउन आवश्यक ईश्वरीय हस्तक्षेपको सन्दर्भमा प्रयोग हुने सबै प्रकारका हतियारले सुसज्जित योद्धाका रूपमा गतिशील ईश्वरीय जीव तथा निर्जीव शक्तिहरू; साकं (sākaṁ) – सँगै; वाशीभिः (vāśībhiḥ) -







हस्तक्षेपकारी भूमिका निर्वाह गर्नका लागि सन्दर्भ विशेषमा उपयुक्त हुने ईश्वरीय शक्ति र हतियारले सुसज्जित योद्धाहरू तथा आवश्यक सर-सामान; अञ्जिभिः (añjibhiḥ) - अत्यन्त संवेदनशील विषयवस्तु, स्थान, र महत्त्वपूर्ण प्रक्रियालाई प्रभावकारी रूपमा सुरक्षित गर्न आवश्यक ईश्वरीय सुरक्षा कवच, गर-गहना, र रक्षा संयन्त्र; अजायन्त (ajayanta) - जसको साथमा उत्पत्ति भएका अत्यन्त महत्त्वपूर्ण ईश्वरीय ऊर्जा शक्ति हुन्; सवभानवः (svabhānavaḥ) - आफैमा अन्तर्निहित कर्म शुद्धता, प्रकाश (भर्गो ज्योति), चमक, र दिव्यता जस्ता गुणयुक्त, स्वतन्त्र र निर्भीक भएर आफ्नो निर्धारित कर्म गर्ने दिव्य स्वयंप्रभाशाली प्राणी तथा शक्तिहरू हुन्।











व्याख्याः मरुतहरूको यो गुण विशेष रूपमा वैज्ञानिक दृष्टिकोणबाट महत्वपूर्ण छ। विशेष गरी पञ्चतत्व (क्वान्टम पार्टिकल तथा क्वान्टम मेकानिक्स), ध्वनि (भाषा), र कम्पन (क्वान्टम इनर्जी) जस्ता विषयमा विशेष दक्खल राख्ने अनुसन्धानकर्ता, विषयविज्ञ, र प्राविधिज्ञहरूको लागि। यस्ता टोलीले सूक्ष्म जीवहरूबाट उत्पादन र उत्सर्जन हुने किरण अर्थात् लुमिनोसिटी तथा औराको उपयोगको विविध पक्षबारे अध्ययन गर्न सक्ने सम्भावना देखाएको छ।

प्रकाशको संश्लेषण गर्ने (फोटोसेन्थेटिकल्ली सक्रिय) विकिरणलाई क्वान्टम विकिरण भनिन्छ, जुन सूर्यको विकिरणको व्यापक स्पेक्ट्रमको एक अंश हो। सूर्यको देख्न सकिने प्रकाशलाई बिरुवाले











फोटोसेन्थेसिस प्रक्रियामा प्रयोग गर्छन्, जसबाट सम्पूर्ण जीवहरूले सूर्यबाट प्रत्यक्ष वा अप्रत्यक्ष रूपमा प्राप्त प्रकाशलाई संश्लेषण गरी त्यसमा रहेको इलेक्ट्रोम्याग्नेटिक ऊर्जालाई रासायनिक ऊर्जामा रूपान्तरण गर्छन्। यस प्रक्रियामा उनीहरूको शरीरबाट किरण अर्थात् लुमिनोसिटी तथा औरा उत्पन्न हुन्छ।

जीवित जीवबाट उत्पादन र उत्सर्जन हुने प्रकाशलाई बायोल्युमिनेसन्स भनिन्छ। सामान्य ब्याक्टेरियादेखि सार्क, जूनकीरी देखि मानिस सम्मले विभिन्न प्रकारका बायोल्युमिनेसन्स निकाल्छन्। कतिपय जीवहरूको शरीरबाट निस्कने प्रकाश शक्तिशाली र स्पष्ट देखिने हुन्छ भने, मानिसको औरा भने त्यति प्रस्ट देखिँदैन।













यस प्रकार, मरुतहरूको दैवीय शक्ति र आधुनिक वैज्ञानिक अध्ययनहरूबीच एक गहिरो सम्बन्ध छ, जहाँ प्राकृतिक प्रक्रियाहरू र दैवीय हस्तक्षेपहरूको अध्ययन एकअर्कालाई पूरक बनाउँछन्, जसले जीवन र ब्रह्माण्डको गहिरो रहस्यलाई उद्घाटन गर्न मद्दत पुऱ्याउँछ।

ऋग्वेदमन्त्र १.३७.३

**इ॒हेवं॑ शृण्व एषां॒ कशा॒ हस्ते॑षु॒ यद्वदा॑न् ।**

**नि यामं॑श्चि॒त्रमृं॑ञ्जते ॥**

भावार्थः मरुतहरू सदैव सत्यको पक्षमा रहन्छन्। उनीहरूले पूरा गर्नुपर्ने जिम्मेवारी, प्राकृतिक नियम अनुसार सञ्चालन हुनुपर्ने कर्महरू, अनुशासित रूपमा निर्धारित नियम अनुसार सञ्चालन नभएको







अवस्थामा ती कार्यहरूलाई नियन्त्रणमा राख्नु र नियम अनुसार सञ्चालन गर्न आवश्यक अनुशासन लागू गर्नु हो। जसका लागि उनीहरू आफ्नो समूहको सम्पूर्ण शक्ति र सम्भावना (जस्तै ऊर्जा र उपकरणको) प्रयोग गर्छन्। प्राकृतिक नियमको सिद्धान्त लागू गर्न आवश्यक पर्ने प्रकृतिको वास्तविक आदेश पालन गर्न, संसारमा हुने गतिविधिहरूलाई मरुतहरूले सदैव आफ्नो समूहको नियन्त्रणमा राख्छन्। जे हुनु पर्ने हो, त्यसलाई तलमाथि हुन नदिन नियमित रूपमा गतिशील घोडाको जस्तो अनौठो भूमिकामा, मरुतहरू समूहमा सहकार्य मार्फत सक्रिय र क्रियाशील रहन्छन्।

शब्द अर्थ: इहेव (ihaiva) - यो सदैव सत्य रहने








गर्दछ; श्रृण्व (śṛṇva) – आफूले गर्नुपर्ने जिम्मेवारी मात्र सुन्छन्; एषां (eṣām̐) – यिनीहरू (मरुतहरूको समूहको बारेमा भनिएको); कशा (kaśā) - प्राकृतिक नियम अनुसार सञ्चालन हुनुपर्ने कर्महरू अनुशासित रूपमा निर्धारित नियमअनुसार सञ्चालन नभएको अवस्थामा ती कार्यहरूलाई नियन्त्रणमा राख्न र नियम अनुसार सञ्चालन गर्न आवश्यक अनुशासन लागू गर्न सम्पूर्ण शक्ति र सम्भावनाको (ऊर्जा र उपकरणको) प्रयोग गर्दछन्; हस्तेषु (hasteṣu) – त्यसलाई सदैव आफ्नो समूहको नियन्त्रणमा राख्छन्; यद्वदन् (yad-vadān)- प्रकृतिको वास्तविक आदेश (प्राकृतिक नियमको सिद्धान्त); नि (ni) - तल माथि हुन नदिने गरी; यामं (yāmam) - नियमित




रूपमा गतिशील तुल्याउने वाहन (घोडा); चित्रम् (citram) - जस्तो अनौठो भूमिकामा; ऋञ्जते (ṛñjate) - सक्रिय रहन्छन् र क्रियाशील रहन्छन्।

ऋग्वेद मन्त्र १.३७.४

**प्र वः शर्धाय घृष्वये त्वेषद्युम्नाय शुष्मिणे ।**

**देवत्तं ब्रह्म गायत ॥**

पद पाठ : प्र । वः । शर्धाय । घृष्वये । त्वेषऽद्युम्नाय। शुष्मिणे । देवत्तम् । ब्रह्म । गायत ॥

भावार्थ: प्राकृतिक नियमको सिद्धान्तको नियमित पालन गराउने र लागु गर्ने उद्देश्य प्राप्तिको लक्ष पुरा









गर्न विशेष समूहमा मरुत ऊर्जा गठित छ। जस्तो सुकै कठिन परिस्थितिमा पनि निराश र हताश नहुने, विचलित नभई अडिग र स्थिर रहेर दृढता पूर्वक आफ्नो लक्ष्य प्राप्ति गर्ने सङ्कल्प लिएर सङ्घर्षशील रहने अद्वितीय तेज र सामर्थ्यको स्वामी मरुत, आफ्नो पराक्रम, साहस र वीरताको बलमा आफ्नो तीव्र र उग्र स्वभावमा समेत प्रकट हुने क्षमता र सामर्थ्य राख्दछ। यस्तो दिव्य गुणको सूक्ष्म र गूढ प्रकृतिको दैविक क्षमता युक्त तत्त्वगुण सृष्टिको सृजनात्मक शक्तिको मूल ऊर्जाको कारक रहेको छ। उक्त परा ऊर्जाको अस्तित्व र महत्वको महसुस गरी आफ्नो कर्म र भूमिका लाई उक्त ऊर्जा मैत्री गर्ने कोसिस गर्नुहोस्।

शब्दार्थ:







प्र व<u>ः</u>: प्रकृति नियमको सिद्धान्त नियमित लागु गर्ने उद्देश्य प्राप्तिको लक्ष पुरा गर्न गठित विशेष समूह (मरुतको सन्दर्भमा कुरा भएको)।

शर्धा॑य: जस्तो सुकै कठिन परिस्थितिमा पनि निराश र हताश नहुने ।

घृष्वं॑ये: कुनै पनि परिस्थितिमा विचलित नभई अडिग र स्थिर रहेर दृढतापूर्वक आफ्नो लक्ष्य प्राप्ति गर्ने संकल्प लिएर सङ्घर्षशीलता प्रकट गर्न ।

त्वे॒षद्यु॑म्नाय: अद्वितीय तेज र सामर्थ्यको स्वामी, पराक्रम, साहस, र वीरताको धनी व्यक्तित्व वा देवता।

शु॒ष्मिणे॑: सूक्ष्म र गूढ शक्तिको स्वामी जुन तीव्र र उग्र स्वभावमा समेत प्रकट हुने क्षमता र सामर्थ्य






राख्दछ।

दे॒वत्तं॑: दिव्य गुण, तत्त्व, वा शक्ति (प्रकृतिको दैविक क्षमता)।

ब्रह्मं॑: ब्रह्म अर्थात् सृष्टिको कसमिक सृजनात्मक शक्ति (प्राकृतिक नियमको सिद्धान्त लागु गर्ने) मूल ऊर्जाको कारक।

गायत: को अस्तित्व र महत्वको महसुस गरी (त्यसको आह्वान गरेर स्तुति वा पूजा गर्ने) धन्य हुने र त्यसलाई अनुसरण गर्ने।

ऋग्वेद मन्त्र १.३७.५

**प्र शंसा॒ गोष्वघ्न्यं॑ क्री॒ळं यच्छर्धो॒ मारु॑तम् ।**

**जम्भे॒ रसं॑स्य वावृधे ॥**



पद पाठः  प्र । शंस । गोषु । अघ्न्यंम् । क्रीळम् । यत् । शर्धः । मारुतम् । जम्भे । रसस्य । ववृधे ॥

भावार्थः पृथ्वी तथा प्रकृतिको वातावरण र पर्यावरण मैत्री व्यवहारमार्फत समग्र अवयव लाई प्रकृति मैत्री गतिविधि अनुसरण गराउन, र त्यसै अनुरुप आफ्नो कर्म र कर्म पद्धतिको विकास गर्न, नियन्त्रित अनुशासन युक्त सुधार कार्यमा उनीहरूलाई संलग्न गराई प्रकृतिको नियति विकास गर्न समूहका रूपमा नियमित कार्यरत रहने प्रकृतिको सेनाको झुण्ड रूपी मरुत शक्तिले प्रकृति-विरोधी गतिविधिहरूलाई जबरजस्ती कब्जा गरेर स्थिति नियन्त्रणमा लिन सक्षम ऊर्जा (ज्योतिहरू) हतियार रूपी महत्त्वपूर्ण, पवित्र र दिव्य बलका रूपमा सर्वत्र फैलिएर, विस्तार






भएर फस्टाउँदै वातावरणलाई समृद्ध बनाएको छ। यस यथार्थको पहिचान गरी, त्यसलाई मानव र पर्यावरणको कल्याणमा लगाउन समर्पित बन।

शब्दार्थः

प्र (pra) = सामुन्नेमा नै

शंसा (śaṁsā) = प्रशंसा गर वा त्यसको अनुसरण गर

गोष्वघ्न्यं (goṣv-aghnyaṁ) = गोः ले पृथ्वी तथा त्यसमा प्राकृतिक रूपमा रहेका वातावरण मैत्री पर्यावरण लाई बताउने गर्दछ। अघ्न्यं शब्दले त्यसलाई हानि हुन नदिनु भन्ने अर्थ दिन्छ। यसको समग्र अर्थ प्रकृति मैत्री अवयव माथि अ-हिंसात्मक अर्थात् मैत्री गतिविधि सम्पन्न गर्नु पर्ने तर्क अघि



सार्दछ ।

क्रीळं (krīḷaṁ) = चालचलन मैत्री अर्थात् पर्यावरण मैत्री व्यवहार

यच्छ (yaccha) = यम् (yam) शब्द वाट बनेको यच्छ शब्दले नियन्त्रित अर्थात् अनुशासित सुधार कार्यमा समर्पण हुन भन्ने अर्थ दिन्छ ।

शर्धो (śardha) = समूहको रूपमा नियमित कार्यरत रहने सेना झुण्ड

मारुतम् (mārutam) = मरुतहरूको

जम्भे (jambhe) = जबरजस्ती कब्जा गरेर स्थिति लाई नियन्त्रणमा लिन सक्षम ऊर्जा रुपी (ज्योतिहरू) हतियार






रसंस्य (rasasya) =रसको अर्थ सार भन्ने हुन्छ । यहाँ रसंस्य शब्द सत्त्व अर्थात् एक महत्त्वपूर्ण पवित्र र दिव्य बलको मुख्य अंशको अर्थमा उपयोग भएको छ ।

वावृधे (vāvṛdhe) = सर्वत्र फैलिएर, विस्तार भएर फस्टाई वातावरण लाई समृद्ध बनाएको छ भन्ने अर्थमा वावृधे शब्दको उपयोग भएको छ ।

सन्दर्भ चर्चा: एउटा चरनमा चर्दै गरेको गाइले चर्नेक्रममा घाँसलाई थोरै चपाई आंशिक रूपमा पचाएर पछि उग्राएर पुनः चपाउने प्रयोजनका लागि पहिलो पेटमा राख्ने र त्यसपछि पूर्ण रूपमा चपाएर मात्र पाचन प्रक्रियामा लैजाने प्रक्रिया किन गरिरहेछ भनी बुझ्न गरिने अनुसन्धान मरुत शक्तिको उचित सदुपयोग केन्द्रित अनुसन्धानको प्रथम कडी हुन





सक्छ। गाइले दाना वा घाँस खाने क्रममा कसरी उसको मुखमाहुने ¥याल आदि मार्फत माइक्रोबायोम तथा अग्नि आदि सँग घाँसलाई मिसाउने र त्यस वाट सार तत्त्व निकालेर शरीर निर्माणको ऊर्जा तथा दूधमा परिवर्तन गर्छ, त्यो विधिको रहस्य बुझ्न सक्दा मरुत शक्ति लाई मानव र पर्यावरण कल्याणमा लगाउन सकिने छ।

(नोटः एउटा गाईले उग्राउने क्रममा वर्षमा झन्डै १०० किलो मिथेन ग्यास डकारेर वातावरणमा फ्याल्ने गर्छ। केही मात्रा पादका रूपमा समेत वातावरणमा फाल्ने गर्छ। यसरी जनावर बाट निस्कने मिथेन एक्लै झन्डै १० प्रतिशत ग्लोबल ग्रिन हाउस ग्यासको हिस्सारहेको ठानिन्छ। मिथेन उच्च प्रेसरमा राख्न सकिने इनर्ड क्रयोजेनिक ग्यासको









वर्गमा पर्छ। वातावरण परिवर्तनमा कार्बनडाइअक्साइड भन्दा २५ गुणा ज्यादा सक्रिय मानिने मिथेन ग्यासलाई आजको विज्ञानले ग्लोबल वार्मिङ गराउने ठूलो समस्याका रूपमा लिने गरिएको हो। गाई वा जनवारको आन्द्रामा हुने माइक्रोबायोमले गाईको पेटमा मिथेन ग्यास उत्पादन गर्छ। जुन मरुत शक्तिको कारण सम्भव भएको हो। जसले गाइको दानामा रहेको पचाउन कठिन हुने फाइबर र सेलुलोज पचाएर पौष्टिक तत्वमा (शरीर र दूध आदि) परिवर्तन गर्ने गर्छ। माइक्रो बायोमले उत्पादन गर्ने मिथेन जस्ता ग्यासलाई माइक्रोबायोमले नै पाचन जस्तै अन्य सदुपयोगको काममा उपयोगमा ल्याएर वातावरण ग्लोबल वार्मिङको समस्याबाट हटाउन निश्चित






सक्नेछ। यस प्रविधिको अन्य फाइदा समेत पक्कै छ। हाल गाईको मुख वा गुदद्वारबाट निस्कने मिथेन कम गरी ग्लोबल वार्मिङ घटाउन दानामा समुद्री रातो लेउ झ्याउलाई (तेल र सेन्थेटिक केमिकल सहित मिसाएर) खुवाउने र गाईको शरीर बन्ने प्रक्रिया र दूध आदि बन्ने प्रक्रियामा र स्वादमा कुनै असर नपर्ने गरी मिथेन निष्कासन ८२ प्रतिशतसम्म घटाउन सम्भव तुल्याएको अवस्था छ। त्यो पनि मरुत शक्तिको उचित सदुपयोग हो।)

ऋग्वेद मन्त्र १.३७.६

**को वो वर्षिष्ठ आ नरो दिवश्च ग्मश्च धूतयः।**

**यत्सीमन्तं न धूनुथ॥**

पद पाठ : कः । वः । वर्षिष्ठः । आ । नरः ।








दिवः । च । ग्मः । च । धूतयः । यत् । सीम् । अन्तम् । न । धूनुथ ॥

भावार्थः मरुतगणहरू सर्वव्यापी भई, प्रकृतिको नियमको संरक्षण गर्ने वीर योद्धाको रूपमा आकाश, प्रकाश, पृथ्वी, भूमि, र जगतमा हरेक समय उपस्थित रहन्छन्। कुनै सिमाना, किनारा, सुरुवात, वा अन्त्य जस्ता समय र भूगोलको परिधिमा सिमित नरही, तिनीहरूलाई हल्लाउने, चलायमान गर्ने, अशान्त पार्ने आदि तरिकाहरूबाट नियमित र गतिशील राख्छन्। यसलाई गतिशील बनाउन, तिनीहरूको हेरचाह गर्ने, नष्ट गर्ने, र स्थानान्तरण गर्ने जस्ता श्रेष्ठ र उत्कृष्ट भूमिकाहरू निभाउँदै प्रमुख दैवी भूमिका खेल्दछन्।

शब्दार्थः






को (ko) : त्यो के हो, को हो र कस्तो छ

वो (vo) : तिनीहरू

वर्षिष्ठ (varṣiṣṭha) : श्रेष्ठ र उत्कृष्ट रूपमा प्रमुख उच्चतम भूमिका खेल्दछन्

आ (ā) : सबै कुराको सान्निध्य सदैव रहेर, आएर

नंरो (naro): प्रकृतिको वीजको (पुरुष अर्थात् प्रकृतिको सिद्धान्तको) संरक्षणको वीर योद्धाको

दिवश्च (divaśca): आकाश, प्रकाश र सर्वत्र, पुरा दिन (दिन र रात)

ग्मश्चं (gmaśca): पृथ्वी, भूमि र जगतको सम्पूर्ण स्थान

धूतयः (dhūtayaḥ): हल्लाउने, चलायमान गर्ने,











अशान्त गर्ने र नियमित गतिशील राख्ने

यत्सीमन्तं (yatsīmantam): कुनै सिमाना, किनारा, सीमा र अन्त्यको परिधि

न (na) : मा सीमित नरहेर विना रोकावट, निषेध

धूंनुथ (dhūnutha): गतिशील गर्ने, हेरचाह गर्ने, नष्ट गर्ने र स्थानान्तरण गर्ने

चर्चा: मरुत गणहरु पृथ्वी मात्र नभई सम्पूर्ण ब्रह्माण्ड नै उथलपुथल गर्ने क्षमता राख्छ। तसर्थ जगत् र जीवहरूका लागि उपयोगी र कल्याणकारी सेवा प्रदान गर्ने माइक्रोबहरू (मरुत गणहरु) खुविको पहिचान गरी उपयोग गर्नुहोस्।

ऋग्वेद मन्त्र १.३७.७







**नि वो॒ यामा॑य॒ मानु॑षो द॒ध्र उ॒ग्राय॑ म॒न्यवे॑ ।**

**जिही॑त॒ पर्व॑तो गि॒रिः ॥**

पद पाठ: नि । व॒: । यामा॑य । मानु॑षः । द॒ध्रे । उ॒ग्राय॑ । म॒न्यवे॑ । जिही॑त । पर्व॑तः । गि॒रिः ॥

भावार्थ: मरुगणहरू सम्पूर्ण जगतको आन्तरिक रूपमा सन्तुलन गर्न नियन्त्रक, शासक, रक्षक, र कानुन अनुरूपको अनुशासन (यम) कायम गर्ने भूमिकामा रहेका छन्। तिनीहरू व्यक्ति, व्यक्तित्व, प्राणी र प्रजापति सबैको भित्र रहेका उग्र, शक्तिशाली, कठोर तथा डर लाग्दा क्रोध, रोष, घमन्ड, विरोध, र युद्ध भावना आदि समेतलाई जितेर, नियन्त्रणमा लिएर, पक्रेर, रोकेर, तथा पूर्ण











रूपमा अधीनमा राखी, पर्वतको उचाइमा रहेको चुलीको डुङ्गाजस्तै कडा बनेको अहङ्कार समेत नष्ट गर्न वा गिराउन सक्रिय रूपमा कार्यरत देखिन्छन्।

शब्दार्थ:

नि (ni) : सम्पूर्ण जगतको आन्तरिक रूपमा सन्तुलन गर्न (तल, भित्र, अन्तर्गत, खस्न नदिने आदि)

वो (vo) : तिनीहरू (मरुत गणहरूले)

यामा॑य॒ (yāmāya): नियन्त्रक, शासक, रक्षक र कानुन अनुरूपको अनुशासन ((यम) कायम गर्ने कार्य गर्दछ





मानुंषः(mānuṣaḥ): व्यक्ति, व्यक्तित्व, प्राणी र प्रजापति सबै भित्र समेत भेटिने

दुध्र (dadhra): अवस्थित, धारित र स्थापित रहने

उग्रायं (ugrāya): उग्र, शक्तिशाली, बलवान् , कठोर तथा डर लाग्दो देखिने

मन्यवें (manyave): क्रोध, रोष, घमन्ड, विरोध र युद्ध भावना आदिलाई समेत

जिहींत (jihīta): लाई जितेर , नियन्त्रणमा लिएर, पक्रेर, रोकेर, सम्पूर्ण अधीनमा लिएर

पर्वतो (parvato): पर्वतको उचाइमा रहेको

गिरिः(giriḥ): चुलीको ढुङ्गा जस्तो कडा बनेर





जमेको अहङ्कार समेत नष्ट गर्न वा गिराउन।

चर्चा: मरुगणहरू अहङ्कार नष्ट गर्न वा गिराउन समेत सक्रिय रूपमा कार्यरत देखिन्छन्।

ऋग्वेद मन्त्र १.३७.८

**येषामज्मेषु पृथिवी जुंजुर्वां इंव विश्पतिः ।**

**भिया यामेंषु रेजंते ॥**

पद पाठः येषांम् । अज्मेषु । पृथिवी । जुजुर्वान्ऽइंव । विश्पतिः । भिया । यामेंषु । रेजंते ॥

भावार्थ: पृथ्वीको एक प्रभावशाली सत्ताको स्वामी







रहे जस्तै गरी मरुत गणहरूको प्रभाव र आदेशमा पृथ्वी नै डर, त्रास र भयले हल्लिएको, काँपेको र कम्पन युक्त बनेको हो कि जस्तो अनुभूति दिन्छ।

शब्दार्थ

येषाम् (Yeshām): तिनी (मरुत गण) हरुको प्रभावमा

अज्मेषु (Ajmeṣhu): समग्र दिशाहरू र स्थानमा

पृथिवी (Pṛthivī): पृथ्वी

जुंजुर्वाँ (Jujurvāṃ): हल्लने, कम्पन हुने र काँप्ने

इव (Iva): रूप













विश्पतिः (Viśpatiḥ): जिम्मेवार तागत वा जगतको स्वामी जस्तो लाग्ने गरी

भिया (Bhiya): डर, भय र त्रासको

यामेषु (Yāmeṣhu): समय र अवस्थामा

रेजते (Rejate): कम्पन हुने, हल्लने र डगमगाउने गरेको जस्तो लाग्छ।

व्याख्या: पृथ्वीको हल्लिएको, काँपेको र कम्पन अवस्था भनेको प्राकृतिक नियमको पालन गर्न पृथ्वीमा मरुतहरु सक्रिय रहेर त्यहाँ आफ्नो अधीनता कायम गर्न सङ्घर्षरत रही रहेको अवस्थाको प्रतीक हो।











चर्चा: प्राकृतिक नियम विरुद्धका अप्राकृतिक गतिविधि नियमित रूपमा सञ्चालन गरिने तथा चरम वातावरण विनाशका दोहन कार्यहरूले पृथ्वीमा महाप्रलय सिर्जना हुने गर्दछ।

ऋग्वेद मन्त्र १.३७.९

**स्थिरं हि जानमेषां वयो मातुर्निरेतवे ।**

**यत्सीमनु द्विता शवः ॥**

पद पाठः स्थिरम् । हि । जानम् । एषाम् । वयः। मातुः। निःऽएतवे । यत् । सीम् । अनु । द्विता । शवः ॥

भावार्थ: आफूलाई जन्म दिने र पालन गर्ने आमाको कोखमा समय अनुरूप जीवनले उचित परिपक्कता ग्रहण गरे पछि दुई फरक फरक जीवनको सीमा,













कक्ष र परिधिको अधीनमा रहेर दर्द पूर्ण जस्तो देखिने प्रक्रियाहरू पुरा गरी मरुत गणका समूहहरूले जन्म, जीवन र उत्पत्तिको स्थान वाट नयाँ जीवनलाई आमाको कोख वाट छुटकारा दिलाएर मुक्त गरी जीवनको नियमितता स्थायित्व कायम गर्ने अभिभारा सहित त्यसको लागि जरुरी हुने बल, शक्ति सामर्थ्य र सत्ताको आधिकारिकता ग्रहण गरेको हुन्छन्।

शब्दार्थ:

स्थिरं (Sthiraṁ): नियमितता र स्थायित्व

हि (Hi) : को निश्चय गर्छ वा स्वामित्व प्राप्त छ

जानम् (Jānam) : जन्म, जीवन र उत्पत्तिको











स्थान

एषां (Eṣhām) : यी मरुत गणका समूहहरूको

वयों (Vayo) : समय अनुरूप जीवनले उचित परिपक्वता ग्रहण गरे पछि

मातुः (Mātuh): जन्म दिने र पालन गर्ने आमाको

निरेतवे (Niretave): कोख वाट हटाउन, छुटकारा दिलाएर मुक्त गर्न

यत् (Yat): दर्द पूर्ण जस्तो देखिने प्रक्रिया पुरा गरी

सीमनु (Sīmanu) : त्यसको सीमा, कक्ष र परिधिको अधीनमा रहेर

द्विता (Dvitā): फरक फरक दुई रूपको (द्वैध)









वेदमा विज्ञान अथर्ववेदाचार्य नारायण घिमिरे



अस्तित्वमा

शवः (Śhavaḥ): छुट्टाउने बल, शक्ति सामर्थ्य र सत्ताको आधिकारिकता

चर्चा: मरुत गणहरू समूहमा प्राकृतिक नियमको सिद्धान्तको कायम गरी उत्पादकत्व निर्माण गर्दै सृष्टि सुचारु राख्ने गतिविधिमा नियमित क्रियाशील रहने गर्दछन्।

ऋग्वेदमन्त्र १.३७.१०

**उद उ तये सूनवो गिरः काष्ठा अज्मेष्व अत्नत |**

**वाश्रा अभिज्ञु यातवे ||**

पद पाठ: उत् । ऊँ इति । त्ये । सूनवः । गिरः । काष्ठाः । अज्मेषु । अत्नत । वाश्राः । अभिऽज्ञु ।





॥ श्री गणेशाय नमः ॥



यातंवे ॥

भावार्थ: त्यसले (मरुत गणहरूले) व्यक्ति भित्रै रहेर मनोवैज्ञानिक जागरण उत्पन्न गरी त्यसले थपी दिने उत्तम मिजास एवं वैयक्तिक उत्कृष्टता निर्माण गरी जीवनको सुलभ गन्तव्यको दिशा तथा यात्राको मार्ग निर्देशन गर्ने ऊर्जा दिने कार्य गर्दछ।

शब्दार्थ:

उद (Ud): जागरणको प्रतीक

उ (U) : र थप

तये (Taye): त्यसले (जागरणले) दिने

सूनवः (Sūnavaḥ): थप प्रतिफलहरू

गिरः (Giraḥ) : उत्तम मिजास (वाणी र स्वर)







काष्ठा (Kāṣṭhā): गन्तव्य को

अज्मेषु (Ajmeṣu): दिशा र यात्रा मार्गमा

अत्नत (Atnata): निर्देशित तथा समन्वय गर्ने

वाश्रा (Vāśrā): उत्पादनशील क्षमताको निर्माण गर्ने

अभिज्ञु (Abhijñu): सान्निध्य वा सामीप्यमा आफै संग रहेर

यातवे (Yātave): जीवनको यात्राको लागि मार्गदर्शन गरी अघि बढ्न

चर्चा: व्यक्तिको वृति विकासमा मुख्य भूमिका खेल्ने मनोवैज्ञानिक जागरण निर्माणमा समेत मरुत गण हरुको अहम् भूमिका रहन्छ।






ऋग्वेदमन्त्र १.३७.११

**तयं चिद घा दीर्घम पर्थुम मिहो नपातम अम्ध्रम |**

**पर चयावयन्ति यामभिः ||**

पद पाठः त्यम् । चित् । घ । दीर्घम् । पृथुम् । मिहः । नपांतम् । अमृंध्रम् । प्र । च्यवयन्ति । यामंऽभिः ॥

भावार्थः व्यापक रूपमा फैलिएको लामो र फराकिलो बादलका बाफ हरूलाई आपसमा जोडी थोपा थोपामा परिवर्तन गरेर तिनीहरूको गति परिवर्तन गरी वर्षाको सुनिश्चित गरिदिने भूमिकामा मरुतहरु सक्रिय रहन्छन्।

शब्दार्थः











तयं (Tayam): त्यसलाई

चिद् (Cid): निश्चय को

घा (Gha) : सुनिश्चित गरिदिने

दीर्घम् (Dīrgham): निकै लामो भएर लम्बिएको

पर्थुम (Pṛthum): व्यापक फैलिएको

मिहः (Mihaḥ): जलको वृष्टि गर्ने बादल

नपातम् (Napātam): वाट वर्षा गराउन

अम्ध्रम (Amṛdhram): बाफ लाई संयोजन गरी जोड्न

पर (Para): त्यसको

चयावयन्ति (Cyāvayanti): दिशा परिवर्तन गरी









यामभिः (Yāmabhiḥ): गतिको मार्गहरूको

चर्चा: ससाना न्यानो–पार्टिकलहरू (सूक्ष्मकण वा सूक्ष्मजीवी) को प्रभावबाट वर्षा नगर्ने बादललाई समेत वर्षा गराउने बादलका रूपमापरिवर्तन गराएर वर्षा गराउन सम्भव पार्न सकिन्छ।

(नोट:सूक्ष्म जीवहरू इनोकुलेसन गरी बादलको सानो घेरा पैदा गरी पहिला वर्षा नगर्ने बादल उत्पन्न गर्ने र त्यसलाई प्राकृतिक रूपमावर्षा गराउने बादलका रूपमा विकास हुन दिई कृत्रिम वर्षा गराउने प्रविधिबारे यहाँ प्रस्ट उल्लेख भएको देखिन्छ । यो अत्यन्त चाखलाग्दो मन्त्र हो। किनकि हाल सालै अनुसन्धानकर्ताले प्रभावकारी क्लाउड सिडिङ प्रविधिबारे सफलता प्राप्त गरेका छन्। जस अन्तर्गत बादलमा साना कणहरू इन्जेक्सन गरिन्छ










जसले पानीको थोपालाई ती कणहरू वरिपरि स्थिर रहेर बस्न सहयोग वा प्रोत्साहित गर्छ। जब वातावरण सकारात्मक बन्छ तब ती संरचनाहरू पर्याप्त मात्रामा यति ठूलो बन्छन् कि बादलबाट हिउँका रूपमा पृथ्वीतर्फ खस्न र प्रभावकारी बर्सात गराउन प्राकृतिक रूपमै सम्भव बन्छ।)

ऋग्वेदमन्त्र १.३७.१२

**मरुतो यद ध वो बलं जनां अचुच्यवीतन |**

**गिरींर अचुच्यवीतन ||**

पद पाठः मरुतः । यत् । ह । वः । बलम् । जनान्। अचुच्यवीतन । गिरीन् । अचुच्यवीतन ॥

भावार्थ: मरुतहरूको सक्रिय र बलशाली हुन्छन्। तिनीहरूको प्रभावले मानिसहरू लाई मात्र नभएर











विशाल पहाडहरू लाई पनि सार्न, हल्लाउन र कम्पन मार्फत तिनीहरूको ऊर्जा अन्यत्र हस्तान्तरण गर्न सक्ने शक्ति युक्त छन् ।

शब्दार्थ:

मरुतः (Marutāḥ): मरुत गणहरू

यद (Yad) : जति बेला

ध (Dha) : सचमुच मै

वः (Vah): व्यक्तिहरू मात्र होइन

बलं (Balaṁ) : सामर्थ्य र ऊर्जाको बलिष्ठता

जनां (Janān) : प्राणी र लोक दुवैको

अचुच्यवीतन (Acucyavītana) : शक्तिको स्थानान्तरण गर्न













गिरीन् (Girīn): पहाड र हिमालय पर्वतहरू

अचुच्यवीतन (Acucyavītana): हल्लाउनु र कम्पायमान गरिदिन

चर्चा: सूक्ष्म जीवहरूको शक्ति पृथ्वीमा रहेका मानव लगायतका जीवहरूको मात्र हैन कि पृथ्वीको विशाल संरचनाका रूपमा अस्तित्वमा रहेका पहाडहरूको समेत रूप वा प्रकृति परिवर्तनको कारक बन्नेगर्छ । जसले पूरा पृथ्वी नै हल्लाउने र प्रकृतिको जरुरत अनुरुपको परिवर्तन गर्न सक्षम हुन्छ ।

ऋग्वेदमन्त्र १.३७.१३

**यद ध यान्ति मरुतः सं ह बरुवते ऽधवन्न आ |**

**शर्णोति कश चिद एषाम ||**





पद पाठः यत् । ह । यान्तिं । मरुतः । सम् । ह । ब्रुवते । अध्वंन् । आ । श्रृणोतिं । कः । चित् । एषाम् ॥

भावार्थ: जब जरुरत पर्दछ तब आपसी सहकार्यको लागि आन्तरिक सञ्चारमा रहेर मरुत गणहरू एक लस्कररूपी समूहमा लाम बद्ध बनी सक्रिय रहेर सामूहिक योजना बनाएर सहकार्य सञ्चालनको उपायको निश्चय गर्दछन्। यसरी निर्धारित कार्यविधि लाइ हु-बहु पच्छाएर अनिश्चित बनेका र अस्पष्ट रहेका विषय वस्तु र सञ्चालन प्रक्रियाहरू जुन वस्तु वा चिज जहाँ हुनु पर्ने हो र समूहमा जसरी परिचालित रहेर कार्य सम्पन्न गर्नु पर्ने थियो त्यो त्यही तरिका वाट पुनः सुचारु गराउन प्राकृतिक नियम र सिद्धान्त मैत्री प्रक्रिया सुचारु गर्न समर्पित





हुने गर्दछन्।

शब्दार्थ:

यद् (Yad): जब जरुरत देखिन्छ

ध (dha): – धारा

यान्ति (Yaanti): जान्छन् (Go)

मरुतः (Marutah): मरुत गणको

सं (Sam): आपसमा

ह (Ha): सम्पर्कमा रहेर मिलेर

बरुवते (Bruvate): योजना बनाएर सहकार्य गर्न

अध्वन् (Adhvan): आफ्नो गतिविधि सञ्चालनको उपायको निश्चय गर्दछन्

आ (Aa): आपसमा मिलेर कार्यको सुरुवात गर्दछन्

शर्णोति (Shrṇoti): निर्धारित कार्यविधि लाइ हु-बहु पच्छाएर

कश्चित् (Kashchit): अनिश्चित बनेका र अस्पष्ट रहेका विषय वस्तु र सञ्चालन प्रक्रियाहरू

एषाम् (Esham): जुन वस्तु वा चिज जहाँ हुनु पर्ने हो र समूहमा जसरी परिचालित रहेर कार्य सम्पन्न गर्नु पर्ने थियो त्यो त्यही तरिका वाट पुनः सुचारु गराउनु।

चर्चा: मरुतहरु हरेक समस्याको समाधानमा योजना बद्ध रूपमा सम्बन्धित विषय वस्तुको विशेष सुधारात्मक कार्य विधि बनाएर त्यस





लाई प्राकृतिक नियमको सिद्धान्त मैत्री रूपमा हुने गरी पुन सुचारु गर्न समर्पित हुने गर्दछन्।

ऋग्वेदमन्त्र १.३७.१४

**पर यात शीभम आशुभिः सन्ति कण्वेषु वो दुवः |**

**तत्रो षु मादयाध्वै ||**

पद पाठः प्र । या॒त॒ । शीभ॑म् । आ॒शुभिः॑ । स॒न्ति॒ । कण्वे॑षु । वः॒ । दुवः॑ । तत्रो॒ इति॑ । सु । मा॒द॒या॒ध्वै॒ ॥

भावार्थ: आफूमा विद्या (ज्ञान, शिक्षण) र अविद्या (आध्यात्मिक ज्ञान र अनुशासन) ग्रहण गर्ने आचरण शीघ्र ग्रहण गरेर यथार्थ बोधको सुरक्षित, शुभ यात्रामा लगेर व्यक्तिले आफूलाई आफ्नो दुःख, दर्द र कठिनाइको पोखरी बाट मुक्त गरी आनन्द







मार्ग प्राप्त गर्न सक्दछ। त्यसको लागि व्यक्तिले आफ्नो दूर दृष्टि र चिन्तनको सदुपयोग गर्न जरुरी पर्ने छ।

शब्दार्थ:

पर (Para): दूर दृष्टि

यात (Yaata): लामो चिन्तनको यात्रा

शीभम् (Shībham): यथार्थ बोधको सुरक्षित र शुभ यात्रा

आशुभिः (Āśubhih): जति सकिन्छ त्यति शीघ्र

सन्ति (Santi): मा पुग वा आफूलाई समर्पण गर

कण्वेषु (Kaṇveṣu): कण्व गुण भित्र

वो (Vo): जसले तिम्रो













दुवः (Duvah): दुःख , दर्द र कठिनाइ को

तत्र (Tatra): तिमि रहेको पोखरी बाट

उ (U): निश्चय नै

षु (ṣu): परिधि वाट मुक्त गरी

मादयाध्वै (Mādayādhvai): आनन्द मार्गमा पुर्‍याउने छ। सन्तोष प्राप्ति हुने छ।

नोट: यहाँ कण्व शब्द - विद्या (ज्ञान, शिक्षण) र अविद्या (आध्यात्मिक ज्ञान र अनुशासन) ग्रहण गर्ने आचरण ग्रहण गर्नु भन्ने अर्थमा आएको छ।

ऋग्वेदमन्त्र १.३७.१५

**अस्ति हि षमा मदाय वः समसि षमा वयम एषाम|**











## विश्वं चिद आयुर जीवसे ||

पद पाठः अस्तिं । हि । स्म । मदांय । वः । स्मसिं । स्म । वयम् । एषाम् । विश्वंम् । चित् । आयुः । जीवसें ॥

भावार्थः ब्रह्माण्डमा रहेका हरेक जीवले आफ्नो अस्तित्व बोध गर्न पाउने अवस्थाको निरन्तरता लाई कालान्तर सम्म टिकाउ गर्न ब्रह्माण्ड चेतनाको सदुपयोग गर्दै मरुतहरु समूहमा सक्रिय रहन्छन्। व्यक्तिमा इन्द्रिय नियन्त्रण, धैर्यता र सहनशीलता प्राप्ति, संयम र क्षमा भावको विकाश गरी भावनात्मक र मानसिक सन्तुलन कायम गर्दै ब्रह्माण्ड रक्षामा तिनीहरूले सामूहिक स्वामित्व र कार्य एकता भाव जरुरत रहेको चेतना विकास गर्न उनीहरू लाई सामूहिक उद्देश्य प्राप्तिले दिने शान्ति













तथा धैर्यता र त्यसले दिने चीर कालिन आनन्द प्राप्ति लाई प्राकृतिक पुरस्कारको रूपमा व्यवस्था भएको छ।

शब्दार्थः

अस्ति (Asti): अस्तित्व बोध

हि (Hi): वास्तवमै वा पक्के

षमा (Ṣama): शान्ति तथा धैर्यता

मदाय (Madāya): आनन्द प्राप्तिको लागि

वः (Vah): सामूहिक उद्देश्य प्राप्ति गरे बापतको फाइदा रूपको पुरस्कार

समसि (Samas): नियमित भावनात्मक र मानसिक सन्तुलन प्राप्ति







षमा (Ṣama): इन्द्रिय नियन्त्रण, धैर्यता र सहनशीलता प्राप्ति, संयम र क्षमा भावको विकाशले दिने शान्ति

वयम् (Vayam): सामूहिक कार्य एकता

एषाम् (Eṣām): तिनीहरूको स्वामित्व ग्रहण

विश्वं (Viśvam): सम्पूर्ण ब्रह्माण्ड

चिद् (Cid): चेतना (ब्रह्माण्ड चेतनाको अर्थमा)

आयुः (Āyuh): दीर्घ आयु वा कालान्तर सम्म टिकाउ गर्न

जीवसे (Jīvase): निरन्तरता कायम गरी बचाएर राख्ने सम्भव रहने ।

नोटः मरुत गण लाई ब्रह्माण्ड चेतना अनुरूप








ब्रह्माण्डमा निजी स्वभाव जन्य चित्तको प्रभावमा सञ्चालित नितान्त व्यक्तिगत चैतन्यका कारण प्रकृति नियम विरुद्ध सञ्चालित हुन गाएका गतिविधिहरू लाई सुधार गरी प्रकृति मैत्री, न्यायोचित र नैतिक गर्ने जिम्मेवारी बोकेको रुद्र सेनाको रूपमा वेदमा चित्रण गरिएको छ। यो ऋचा मरुत बारे बोलिएको हो। तर ऋचामा मरुत शब्द भने परेको छैन।

ऋग्वेद मन्त्र १.३८.११

**मरुतो वीळुपाणिभिश चित्रा रोधस्वतीर अनु |**

**यातेम अखिद्रयामभिः||**

पद पाठः मरुतः । वीळुपाणिऽभिः । चित्राः । रोधस्वतीः । अनु । यात । ईम् । अखिद्रयामऽभिः ॥








भावार्थ: प्राकृतिक सन्तुलन कायम गर्न जरुरत अनुसार प्राप्त आदेशको (ब्रह्माण्ड चेतना मार्फत) अनुसरण गर्ने नियतमा प्राकृतिक सन्तुलनको संरक्षण गर्ने, त्यो विरुद्धका गतिविधि रोक्ने वा प्रतिकार गर्ने जस्ता असीमित सामर्थ्य सहित सक्रिय रहने मरुत गणहरू प्रकृतिका असाधारण चालबाजी, नियन्त्रण क्षमतामा निपुण रहेका कुशल सीपयुक्त चमत्कारी (कूटनैतिक वक्र) हातहरू हुन्। तिनीहरू योजना बद्ध रूपमा सङ्गठित प्रकृतिको विशिष्ट अवरोधक चरित्रका उच्च चेतना मार्फत अनुभव गर्न सकिने परा ऊर्जा को रूपमा अस्तित्वमा रहेका छन्।









शब्दार्थ:

मरुतो - मरुत गणहरू

वीळुपाणिभिः - असाधारण चालबाजी र नियन्त्रण क्षमतामा निपुण रहेका कुशल सीपयुक्त प्रकृतिका चमत्कारी (कूटनैतिक वक्र) हातहरू

चित्रा - विशिष्ट तथा अनौठो अद्भुत तर सुन्दर योजना बद्ध रूपमा सङ्गठित

रोधस्वतीर - प्राकृतिक सन्तुलन कायम गर्ने नियतमा संरक्षण गर्ने, रोक्ने वा प्रतिकार गर्ने जस्ता अवरोधक शक्ति

अनु - जरुरत अनुसार प्राप्त आदेशको अनुसरण गर्ने

यातेम - नियमित यात्रामा अघि बढ्ने








अखिद्रयामभिः - उच्च चेतना मार्फत अनुभव गर्न सकिने असीमित सामर्थ्य सहित सक्रिय रहने परा ऊर्जा

ऋग्वेद मन्त्र १.३८.१२

**स्थिरा वः सन्तु नेमयो रथा अश्वास एषाम् ।**
**सुसंस्कृता अभीशवः ॥**

पद पाठः स्थिराः । वः । सन्तु । नेमयः । रथाः । अश्वासः । एषाम् । सुऽसंस्कृताः । अभीशवः ॥

भावार्थः गतिशील जीवनको भौतिक, मानसिक, भावनात्मक र आध्यात्मिक पक्ष बिच संयोजन गरी तिनीहरू बिच आपसी सन्तुलन कायम गरी सञ्चालन गर्ने संयन्त्रका प्रकृति नियन्त्रित औजारहरू वा यन्त्रको रूपमा मरुतहरूले कार्य गर्दछन्।









शब्दार्थः

स्थिरा (sthirā): सन्तुलन कायम गरी

वः (vah): तपाईँहरूलाई

सन्तु (santu): राख्दछ

नेमयः (nemayah) : गतिशील अङ्ग तथा तन्तुहरू लाई आपसमा जोड्ने (जस्तै रथको पाङ्ग्राहरू जोड्ने हब र एक्सलहरु)

रथाः (rathāḥ): जीवन यात्रामा रहने शरीर (रथहरू)

अश्वास (aśvās): जीवित रहेर चलायमान हुने शक्तिहरू (जस्तै रथका घोडाहरू)

एषाम् (eṣām): तिनीहरूले समग्रमा निर्माण गर्ने




सामूहिक गुण वा अवस्था (यिनीहरू)

सुसंस्कृता (susaṁskṛtā): सद्गुण, ज्ञान र शारीरिक पूर्णताको उन्नत अवस्थाको निर्माण गरी शुद्ध तथा चम्किलो (आकर्षक) गरिएको आदर्श रूपमा विकसित सुसंस्कृत व्यक्तित्व

अभीशवः (abhīśavaḥ): निश्चित लगाम (बुद्धिमत्ता) को सहायताले सञ्चालन र प्रयोग गर्न सजावट युक्त उपकरण तथा उपकरणको प्राकृतिक नियन्त्रित संयन्त्र लाई परिचालन गर्ने औजारहरूको रूपको (मरुतहरुले भन्न खोजिएको) यन्त्र।

व्याख्या: मरुतहरू जीवनको भौतिक, मानसिक, भावनात्मक र आध्यात्मिक पक्ष बिच अत्यन्त व्यवस्थित सङ्गठित प्रणाली निर्माण गर्ने ब्रह्माण्ड





चेतना अनुरूप सक्रिय रहने प्रकृति नियन्त्रित औजारहरूको रूपमा रहेर आफ्नो गतिविधिहरू नियमित रूपमा सञ्चालन गर्छन्।

ऋग्वेद मन्त्र १.३८.१३

**अछा वदा तना गिरा जरायै बरह्मणस पतिम |**

**अग्निम मित्रं न दर्शतम ||**

पद पाठः अच्छं । वद । तनां । गिरा । जरायैं । ब्रह्मंणः । पतिंम् । अग्निम् । मित्रम् । न । दर्शतम् ॥

भावार्थः जुन विषयमा ज्ञान लिन खोजिएको हो त्यसको सान्निध्य रहेर त्यसको गुणको अवलोकन र






अनुभूति गरेर त्यसमा अन्तर्निहित गुण दोषहरू बिचको सम्बन्धहरू बारे विचरण गरी त्यसो हुनुको चुरो कारण र मूल आधार बुझेर अनुभूति भएको ज्ञानको प्रस्तुतिले वेदको (अविद्या र विद्याको सन्तुलित ज्ञान) निर्माण गर्दछ। त्यो ज्ञानको स्वामित्व लिएर, त्यसको पालक बनी रक्षा गरेर संसारको कल्याणको लागि सबैलाई उपलब्ध गराउन लायक ज्ञानको भर्गो ज्योतिको निर्माण हुन्छ।

शब्दार्थ:

अछा (Achā): विषय बस्तुको प्रत्यक्ष सामुन्नेमा रहेर

वदा (Vadā): त्यसलाई सम्झ र आफ्नो अनुभूति











व्यक्त गर

ताना (Tanā): त्यहाँ रहेको एक पक्ष र अर्को पक्ष बिचको अन्तरसम्बन्धको धागोले आपसमा जोडेर बृस्तृत रूपको शुद्ध अर्थ निकालेर

गिरा (Girā): गरिएको प्रस्तुतिको

जरायै (Jarāyai) : चुरो सार जसमा त्यसको चुरो कारण र त्यसले विकसित गरेको अन्तिम अवस्था सम्मको वास्तविकता हुने गर्दछ

बरह्मणस (Brahmaṇas) : त्यसबाट प्राप्त ब्राह्मण (ज्ञान र त्यसको आध्यात्मिक पक्ष वा वेदको) प्राप्ति हुन्छ

पतिम (Patim): यसरी निस्किएको निष्कर्षको स्वामित्व लिएर त्यसको रक्षक र पालक बनेर







अग्निम (Agnim): यज्ञको देवता (कर्मको नियमको प्रतिपादन गर्ने) ऊर्जाको स्रोत (अग्नि / आगो) को प्राप्ति हुन्छ

मित्रं (Mitraṁ) : एक शुभचिन्तक (सूर्य देवता) को मित्र (भर्गो ज्योति वा ज्ञानको किरण)

न (Na): जस्तै समान प्रकृतिको

दर्शतम (Darśatam): सुन्दर, मनमोहक, आकर्षक, प्रिय विचार र ज्ञानको (प्रकट) हुने गर्दछ।

व्याख्या: हरेक विषयको चित्त वृत्तिको अवलोकन, विचरण, मूल्याङ्कन र अनुभूति मार्फत प्राप्त वैदिक ज्ञान संसारको उपयोगी सिद्ध कल्याणकारी ज्ञान वा भर्गो ज्योति हुने गर्दछ।






ऋग्वेद मन्त्र १.३८.१४

**मिमीहि शलोकम आस्यपर्जन्य इव ततनः|**

**गाय गायत्रम उक्थ्यम ||**

पद पाठः मिमीहि । श्लोकंम् । आस्यें । पर्जन्यःऽइव । ततनः । गायं । गायत्रम् । उक्थ्यंम् ॥

भावार्थः वेदको ज्ञान निर्माण गरिने यो मन्त्र लाई गायत्री मन्त्र जतिकै महत्त्व दिएर सबैले सुन्ने र प्रस्ट बुझ्ने भाषामा व्यापक प्रचार प्रसार गरी सर्वत्र पुऱ्याउनु होस्।

शब्दार्थः

मिमीहि (Mimīhi): यो सन्देशलाई पटक पटक दोहोऱ्याएर सर्वत्र विस्तार गर







शलोकम् (Ślokam) : पवित्र श्लोक / मन्त्र वाणी लाई

आस्य (Āsya): आफ्नो स्वरले उच्चारण गरी

पर्जन्य (Parjanya): बादल वाट बर्षाद गराउने जल देवता मेघ आवाज जस्तो सबैले प्रस्ट बुझ्ने भाषा

इव (Iva) : जस्तै समान रूपले

ततनः (Tatanah): सर्वत्र विस्तार गर्नु, वितरण गरी पुऱ्याउनु

गाय (Gāya) : प्रशंसा गरी यसको स्तुति गाउनुहोस्

गायत्रम् (Gāyatram): वेदको पवित्र स्तुति













गायत्री मन्त्र

उक्थ्यम् (Ukthyam): जतिकै प्रशंसायोग्य उपयुक्त स्तुतिको रूपमा यसलाई आदर गर्नु

चर्चा: आकाशमा देखिने बादलहरू जस्तै गहिरो सोच र अनुभूति पश्चात् विकसित अवधारणा तथा ज्ञानहरू स्वतन्त्र रूपमा फैलन र विस्तार हुन दिनु आवश्यक हुन्छ। जसले गर्दा सम्बन्धित विषय वस्तु बारे झन् धेरै बुझ्न र ज्ञान प्राप्ति गर्नका लागि सहयोग पुग्छ।

(नोट: यो मन्त्रको आशयले ज्ञान जति बाँडिन्छ त्यति नै बढ्ने छ भन्ने यथार्थको चरितार्थ गर्दछ।)

ऋग्वेदमन्त्र १.३८.१५

**वन्दस्व मारुतं गणं तवेषम पनस्युम अर्किणम |**











## अस्मे वर्द्धा असन्न इह ||

पद पाठः वन्दंस्व । मारुंतम् । गुणम् । त्वेषम् । पुनस्युम् । अर्किणंम् । अस्मे इतिं । वृद्धाः । असन् । इह ॥

भावार्थः तिम्रो जीवन र जगतको पालनकर्ता र सञ्चालन कर्ता मरुत गणको समूह तिमीलाई तिम्रो जीवन, वृद्धि र सम्पन्नता दिन तिमि भित्रने उपस्थित रहेकाले उनीहरूको सम्मानका खातिर धन्य रहेर स्तुति गर्न प्रकृति पूजक बन्नु।

शब्दार्थ:

वन्दस्व (Vandasva): अत्यन्त आदरका साथ सम्मान र प्रशंसाको लायक छ (धन्य बन)

मारुतं (Mārutam) : पवन वायु देवता रुपी मरुत











गण

गणं (Gaṇam): को समूह रुपी सैनिक दल

तवेषम (Taveṣam) : तेजस्वी, शक्तिशाली र प्रभावशाली

पनस्युम (Panasyum): प्राकृतिक संरक्षणकर्ता, पालनकर्ता र रक्षकको भूमिकामा रहने

अर्किणम (Arkiṇam) : प्रशंसा योग्य रहेकोले धन्य रहेर स्तुति गर्न (प्रकृति पूजक रहन)

अस्मे (Asme): हामी कल्याणको लागि हामीभित्र

वर्द्धा (Varddhā): वृद्धि बढाउन, वृति विकास गर्न र सम्पन्नता ल्याउन

असन् (Asan): उपस्थित छ र प्राप्त पनि हुन





सक्दछ

इह (Iha) : अहिले कै यही संसारको यसै जीवनमा अहिले नै

व्याख्या निचोड: व्यक्तिको चेतना प्रकृति चेतनाको एक अंश हो। चेतना लाई रूपान्तरण गरी आध्यात्मिक र मनोवैज्ञानिक अपरा तत्त्व तथा अपरा प्रकृतिको भौतिक क्वान्टम कणको समेतको फरक फरक विधि र प्रक्रिया मार्फत निर्माण गर्ने शक्ति रूपको मध्यस्थता गर्ने रचनात्मक आधारशिलाको (a middle negotiating constructive substratum) रूपमा मरुत गण रूपी अपरा शक्तिहरू अस्तित्वमा रहेको देखिन्छ।

तिनै मरुत शक्तिहरूले ब्रह्माण्ड चेतना सँग संसर्गमा





रहेर, व्यक्तिगत चेतनाले अनुभूतिको आधारमा विकास गर्ने कर्म तथा अन्य अचेतन विषय वस्तुको आवृत्ति निर्देशित गतिनिधिहरूले पैदा गर्ने प्रकृति नियमको विरुद्धको गतिविधिहरू लाई, ब्रह्माण्ड चेतनाको सूचना अनुरूप हस्तक्षेप गरी प्रकृति मैत्री बनाएर सच्याउने गर्दछ। अपरा शक्तिको यस प्रकारको दिव्य भूमिकाले हाम्रो जीवन, चैतन्य र जगतको सहज नियमितता सम्भव बनाएको छ।

यो यथार्थलाई मनन गर्दै आचरण गर्न सकियो र प्रकृति पूजक बनियो भने भने व्यक्तिको जीवन केवल आनन्दमय मात्र रहँदैन, प्रकृति मैत्री र सम्पूर्ण जगतको कल्याणमा समर्पित जीवन शैलीमा समेत परिवर्तन हुनेछ।



# वेदमा सूक्ष्म जीव विज्ञान - ५

ऋग्वेद मन्त्र १.३९.१

**प्र यदि॒त्था प॑रा॒वतः॑ शो॒चिर्न मान॒मस्य॑थ ।**

**कस्य॒ क्रत्वा॑ मरुतः॒ कस्य॒ वर्प॑सा॒ कं या॑थ॒ कं ह॑ धूतयः ॥**

पद पाठः प्र । यत् । इ॒त्था । प॒रा॒ऽवतः॑ । शो॒चिः । न । मान॑म् । अस्य॑थ । कस्य॑ । क्रत्वा॑ । मरु॑तः । कस्य॑ । वर्प॑सा । कम् । या॒थ । कम् । ह॒ । धू॒त॒यः॒ ॥

भावार्थः ब्रह्माण्ड चेतनाको उद्देश्य पूर्ति गर्न जुन ठाउँमा जे कुराको जुन रूपमा जरुरत रहेको हुन्छ त्यो कुरा मरुत गणहरू मार्फत पूर्ति हुन्छ। त्यो











समयमा प्रकाशको चमक, हलचल, कम्पन आदि जस्ता चलायमान गतिविधिहरूको अनुभूति हुने गर्दछ।

शब्दार्थः

प्र (Pra): कार्य प्रारम्भ गर्ने अगुवा

यत् (Yat): जसले

इ॒त्था (Itthā): यस्तो तरिकाले प्रहर गर्छ

प॒रा॒ऽवतः॑ (Parāvataḥ): पृथक् रहेर निकै टाढा वाट उच्च स्थानमा

सो॒चिः (Śociḥ) : आगोको ज्योति जस्तो चम्किलो प्रकाशको चमक

न (Na): यो जस्तो न कोही छ न केही छ जसले







मानंम् (Mānam): मापन तथा मूल्याङ्कन मार्फत सम्मान, प्रतिष्ठा दिन न्याय गर्न

अस्यंथ (Asyatha): पुगिरहेको हुन्छ

कस्यं (Kasya): जसले

क्रत्वां (Kratvā): उद्देश्य प्राप्तिको कर्म योजनाको आकाङ्क्षा प्राप्ति गर्छ

मरुतः (Marutaḥ): मरुत गणहरु

कस्यं (Kasya) : जसको लागि हरेक

वर्पंसा (Varpasā): आकार, बल र तेज

कम् (Kam): जुन कुरा, जुन बस्तु मा जे चिज चाहिएको छ

याथ (Yātha): उपलब्ध गर्दछ











कम् (Kam): जे कुरा, जे चीज, जुन वस्तु को जरुरत पर्छ

ह (Ha): अवश्य नै

धूतयः (Dhūtayaḥ): हलचल, कम्पन र चलायमान आदि मार्फत पूर्ति गर्दछ

सूक्ष्म मरुत गणहरू (प्राकृतिक नियममा आधारित क्वान्टम पार्टिकल, न्यानो–टेक्नोलोजी तथा अन्य सूक्ष्म कण तथा जीव समाविष्ट प्रविधि र पद्धतिहरू) प्रयोग गरी अत्यन्त टाढाबाट विघटन र विनाश लक्षित कार्यहरू सम्पन्न गर्न सकिन्छ । सूक्ष्म शक्तिहरूलाई कसरी र कुन तरिकाले छनोट र उपयोग गरी अत्यन्त टाढा रहेरै लक्षित विघटन र विनाश कार्यहरू सम्भव बनाउन निर्देशित गर्न









सकिन्छ, संसार भर हलचल ल्याउने हदको प्रभावकारिता दिन सकिन्छ भन्ने बारे गहिरो अन्वेषण तथा अनुसन्धान हरू बाट यकिन गर्न सकिनेछ।

(नोट: यो मन्त्रले आजको विज्ञानको एटम बम, रकेट, मिसाइल जस्ता प्रविधिले दिने ध्वंस तथा एन्थ्रेक्स, इन्फ्लुएन्जा, कोरोना आदि जस्ता संक्रमण समेत अप्राकृतिक रूपमा प्रकृति निर्मित संसार भर हलचल ल्याउने गरी सम्पन्न गर्न सम्भव हुने छ, उपयोग वा दुरुपयोगमा ल्याउन सकिने छ भन्ने बारे संकेत गरेको छ।)

ऋग्वेद मन्त्र १.३९.२

**स्थिरा वः सन्त्वायुधा पराणुदे वीळू उत प्रतिष्कभे।**

**युष्माकमस्तु तविषी पनीयसी मा मर्त्यस्य**










**मायिनः॥**

पद पाठ : स्थिरा । वः । सन्तु । आयुधा । पराऽनुदे। वीळु । उत । प्रतिऽस्कभे । युष्माकम् । अस्तु । तविषी । पनीयसी । मा । मर्त्यस्य । मायिनः॥

भावार्थ: नाशवान मायावी जीवनमा हुने भ्रम, छल र धोका आदि निर्माण गर्ने समस्याको निराकरण मार्फत जीवनलाई अविचलित राख्न तिनीहरूको आक्रमणको लागि अवरोध पुऱ्याउने सुरक्षा कवचको रूपमा उपस्थित रहेर मरुत गणहरूले जीवनदायी अमृत र प्राकृतिक प्रतिरक्षा कवचको कार्य गर्ने गर्दछन्।

शब्दार्थ:







स्थि॒रा (Sthirā) : अविचलित, स्थायी र टिकाउ

वः॒ (Vah): तिम्रो लागि

स॒न्तु (Santu): स्थितिको उपस्थित रहन

आयु॑धा (Āyudhā): सुरक्षाको साधन (जस्तै:हतियार, उपकरण)

प॒रा॒ऽनुदे॑ (Parā'nude): सङ्क्रमणको स्थान वाट टाढा धकेल्ने, हटाउने र निराकरण गर्ने क्षमता युक्त

वी॒ळु (Vīḷu): समूहमा जमघट वा मण्डली वा गोलाकार बनेर कार्य गर्ने कुशलता युक्त

उ॒त (Uta): त्यसको साथ साथै

प्र॒ती॒ऽस्कभे॑ (Prati'skabhe): अवरोध पुऱ्याएर










रोक्ने,प्रतिकार गर्ने खुबीको

यु॒ष्माक॑म् (Yuṣmākam): ती स्थानहरुको लागि जरुरतको कार्य

अ॒स्तु॒ (Astu): साकार गर्ने खुबी युक्त

तवि॑षी (Taviṣī): परा प्रकृतिको तीव्रता युक्त बल

पनी॑यसी (Panīyasī): जसको पिउने पानीको जस्तै पवित्र तथा शुद्ध जीवनदायी गुण रहन्छ

मा (Mā): समस्याको निराकरण गर्दछ

मर्त्य॑स्य (Martyasya): नाश वान अस्थायी जीवन

मा॒यिनः॑ (Māyinaḥ): मायावी भ्रम, छल र धोका आदि हुने अवस्था







व्याख्या: मरुत गणहरू सँग सूक्ष्म रोगाणुहरू र बिषाणुहरू विरुद्ध अवरोध सिर्जना गर्ने, नियन्त्रणमा लिने तथा तिनीहरुबाट हुने संक्रमण तथा रोग समेतलाई आश्चर्यजनक रूपमा नष्ट गर्ने र समस्याको निराकरण गर्ने अद्भुत बहुमुखी क्षमता हुने गर्दछ।

ऋग्वेद मन्त्र १.३९.३

**परां ह यत्स्थिरं हथ नरों वर्तयंथा गुरु।**

**वि यांथन वनिनः पृथिव्या व्याशाः पर्वतानाम्॥**

पद पाठ: परां । ह । यत् । स्थिरम् । हथ । नरः। वर्तयंथ । गुरु । वि । याथन । वनिनः । पृथिव्याः। वि । आशाः । पर्वतानाम्॥










भावार्थ: कडा पर्वत र हिम शिखरहरू लाई विखण्डन गरी तिनीहरूको सार तत्वले सम्पूर्ण पर्यावरण लाई सिञ्चित गरी कल्याण गर्ने कार्यमा मरुत हरुको भूमिका रहन्छ।

शब्दार्थ:

परां (Parā) : छुटाएर हटाएर बाहिर ल्याउनु

ह (Ha): कार्य निश्चय गर्ने

यत् (Yat): जसले (मरुत गण भनिएको)

स्थिरं (Sthiram): अचल र दृढ रहेर जमेको चिज

हथ (Hath): हलचल गराएर त्यहाँ वाट फुल्काउने

नरों (Naro): साहसी योद्धाको भूमिका







वर्तयंथा (Vartayatha): खेल्दछ

गुरु (Guru) : भारी गुरुत्व विरुद्ध

वि (Vi) : टुक्रा गरी विभाजन गरेर बाहिर वितरण गरी

यांथन (Yāthana): उत्पादकत्वको सिञ्चित गर्दछ

वनिनः (Vaninaḥ): जसले गर्दा वन जङ्गल तथा त्यहाका प्राणी र चराचरहरू

पृथिव्या (Pṛthivyā): धरती, भूमि र संसार समेतको

व्याशाः (Vyāśāḥ): कल्याण हुने

पर्वतानाम् (Parvatānām): पर्वतहरूको सार











तत्वले उपलब्ध गराउने गर्दछ।

ऋग्वेद मन्त्र १.३९.४

**नहि वः शत्रुर्विविदे अधि द्यवि न भूम्यां रिशादसः।**
**युष्माकमस्तु तविषी तना युजा रुद्रासो नू चिदाधृषे॥**

पद पाठः नहि । वः । शत्रुः । विविदे । अधि । द्यवि । न । भूम्याम् । रिशादसः । युष्माकम् । अस्तु । तविषी । तना । युजा । रुद्रासः । नु । चित् । आऽधृषे ॥

भावार्थः रुद्र देवताको जीव र जगतको रक्षा कवच रुपी रुद्र सेना मरुत सर्वत्र सक्रिय रहेर जति वेला जरुरत पर्छ त्यति नै वेला ब्रह्माण्ड चेतनाले निर्धारण गरेको प्राकृतिक नियमको सिद्धान्तको प्रतिकूलका











गतिविधि हरूलाई बलपूर्वक सच्याउन सक्रिय रहन्छन्। मरुत गणहरूको यो कार्य कहिल्यै पनि समग्र मानवता विरोधी वा प्रकृति विरोधी हुने गर्दैन। दुवै मैत्री रहन्छ।

शब्दार्थ:

नहि (Nahi): हुँदै होइन

वः (Vah): तिमीहरूको (जीव र जगतको) मित्र (मरुत शक्तिलाई सङ्केत गरेर भनिएको)

शत्रुः (Śatruḥ): शत्रु, बैरी प्रतिस्पर्धी वा विरोधी तत्त्व

विविदे (Vivide): बिलकुल फरक चरित्रमा प्रकट हुने













अधिं (Adhi): सामुन्नेमा र वरपर रहने

द्यविं (Dyavi): आकाश र वातावरणको उचाइ सम्म रहने

न (Na): शान्तिको प्रतीकको रूपमा

भूम्यांम् (Bhūmyām): जगमा, भूमिमा समेत सर्वत्र रहने

रिशादसः (Riṣādasaḥ): पाप, दोष, त्रुटि, विकृति र अपराध विरुद्ध सक्रिय

युष्माकंम् (Yuṣmākam): तिमीहरूको पक्षमा

अस्तु (Astu): उपस्थित रहने

तविंषी (Taviṣī): बलशाली तीव्र स्फूर्ति रूपको तागत











तनां (Tanā): सम्पूर्ण शरीरको अङ्ग / अङ्गहरूमा समेत विस्तार भएर रहने

युजा (Yujā): आपसी एकताको सम्बन्धमा बाँधिएर जोडिएर कार्य गर्ने

रुद्रांसः (Rudrāsaḥ): रुद्र देवताको रक्षा कवच रुपी

नु (Nu): जति वेला जरुरत पर्छ त्यति नै वेला तत्काल

चित् (Cit) : ब्रह्माण्ड चेतनाको स्मरण अनुरूप

आऽधृषे (Ā'dhṛṣe): निडर र साहसिक रूपमा आइपर्ने चुनौतीको सामना गर्ने

चर्चा: पृथ्वी बाहिरका स्थानहरू पहिलेदेखि नै













रोगाणु रहित शुद्ध रहेकाले जीवाणुहरूको बुद्धिमत्ता युक्त प्रयोगले पृथ्वीका हानिकारक रोगाणु तथा बिखालु तत्वहरू नष्ट गर्न सम्भव हुनेछ।

(नोट: पृथ्वीको समुद्र सतहबाट १०० किलोमिटरमाथि पुगेपछि अन्तरिक्ष वा बाहिरी तह सुरु भएको ठानिन्छ। पृथ्वीको उक्त बाहिरी तहमा पृथ्वीबाट लगिएका केही ब्याक्टेरिया लामो समय सम्म बाँच्न सकेको देखिन्छ। भाइरसहरू लामो समयसम्म बाँच्न जीवित होस्ट नभएका कारण सकेको देखिँदैन। बाह्य अन्तरिक्षको अति चिसो, विकिरणले भरिएको वातावरणीय प्रतिकूलताको अवस्थामा रोगजनक रोगाणु तथा अन्य प्रकारको जीवनका लागि उपयुक्त देखिँदैन।)









ऋग्वेद मन्त्र १.३९.५

**प्र वेपयन्ति पर्वतान्वि विञ्चन्ति वनस्पतीन् ।**

**प्रो आरत मरुतो दुर्मदाइव देवासः सर्वया विशा ॥**

पद पाठः प्र । वेपयन्ति । पर्वतान् । वि । विञ्चन्ति । वनस्पतीन् । प्रो इति । आरत । मरुतः । दुर्मदाःऽइव । देवासः । सर्वया । विशा ॥

भावार्थः मरुतहरुले जरुरत अनुसार अन्यायमा परेका प्राणी वा क्षेत्र विशेषका चराचर वा भूभाग विशेषको रक्षाको खातिर आफ्नो रुद्र रूप प्रदर्शन गर्दै न्याय दिन दैवी गुणको सदुपयोग गर्ने गर्दछन् ।

शब्दार्थः









प्र (Pra): विस्तारित रूपमा आफैले कार्य प्रारम्भ गरी पुरा गर्दछन्

वेपयन्ति (Vepayanti) : भयानक कम्पन तथा हल्लाई आदि मार्फत

पर्वतान् (Parvatān): उच्च स्थानमा रहने पर्वत र पहाडी श्रृङ्खलाका स्थिर वस्तुहरू

वि (Vi) : अलग गरी टुक्रा गर्ने र वितरण गर्ने गरी

विञ्चन्ति (Viñcanti): विभाजन गरी निकाल्दछन्

वनस्पतीन् (Vanaspatīn) : वनस्पतिहरू र बन जन्य प्राणीहरू










प्रो इतिं (Pro Iti): निस्सन्देह रूपमा जरुरत अनुसार

आरत (Ārata): हलचल गराएर समेत

मरुतः (Marutaḥ): मरुत गणहरूले

दुर्मदाःऽइव (Durmadāḥ'Iva): अहङ्कार र उन्मादले पागल बने जस्तै रुद्र रूप धारण गरी रक्षा गर्दछन्

देवांसः (Devāsaḥ): ईश्वरीय दैवी शक्तिहरू

सर्वया (Sarvayā): को पूर्ण रूपले उपयोग गरी

विशा (Viśā) : निश्चित प्राणीको, समुदाय, क्षेत्र वा भूभाग विशेषको

ऋग्वेद मन्त्र १.३९.६













**उपो रथेषु पृषतीरयुग्ध्वं प्रष्टिर्वहति रोहितः ।**

**आ वो यामाय पृथिवी चिदश्रोदबीभयन्त मानुषाः ॥**

पद पाठः उपो इति । रथेषु । पृषतीः । अयुग्ध्वम् । प्रष्टिः । वहति । रोहितः । आ । वः । यामाय । पृथिवी । चित् । अश्रोत् । अबीभयन्त । मानुषाः ॥

भावार्थः रातो सूर्यको प्रकाशको किरणले स्वतन्त्र अस्तित्वमा रहेका शुद्ध लाभकारी गणको (मरुत गणलाई सङ्केत गरिएको) ऊर्जाहरू लाई तपाई सम्म पुऱ्याउने रथको भूमिका खेल्दछन् । जसले ब्रह्माण्ड चेतनामा अवस्थित सूचना अनुरूप शरीरको सम्पूर्ण भागहरूमा सञ्चालित प्रकृति विरोधी अवरोध (रोग, व्याध वा असहजता) विरुद्ध निर्भय रहेर त्यसलाई









सच्याउने गर्दछ। जसका कारण जीवात्मा र प्राणीको जीवित अस्तित्वको सुचारु गर्ने कार्यमा सहजता थपिने गर्दछ।

शब्दार्थ:

वैज्ञानिक व्याख्या:बिहान र साँझ पृथ्वीको वातावरणमा प्रकाश छरिएर फैलिने राईले स्क्याटरिङ (Rayleigh Scattering) प्रक्रियाका कारण छोटो तरङ्ग हुने नीलो र बैंजनी रङ्गको प्रकाश धेरै फराकिलो गरी छरिने तर लामो तरङ्गको रातो र सुन्तला रङ्गको प्रकाश (600-700 nm) कम फराकिलो गरी छरिने हुनाले पृथ्वी संग रातो र सुन्तला रङ्गको प्रकाश आइपुग्न जाँदा सूर्य सुन्तला रङ्ग मिश्रित रातो रङ्गमा देखा पर्दछ। सामान्य तय सफा र कम धूलाका कणहरू रहने









बिहानको को हावाका कारण सूर्य चम्किलो समेत देखिन्छ। साँझमा भने वातावरणमा थप कणहरू थपिने सूर्य किरण बिहान भन्दा अधिक तीव्र देखिन्छ।

आधुनिक औषधि विज्ञानले पहिचान गरे अनुरूप रातो (630-700 nm) र सुन्तला (590-630 nm) रङ्गको सूर्यको प्रकाशको चिकित्सा, उपचार र हानिकारक रोगाणु नाशक गुण हुन्छ। छालाको भित्री तह सम्म रातो र सुन्तला रङ्गको प्रकाश प्रवेश गरी कोलाजेन (Collagen) उत्पादनलाई प्रेरित गर्छ (Stimulates Collagen production), कोषीय ऊर्जाको (ATP) उत्पादन बढाउँछ। घाउको उपचारमा मद्दत पुर्‍याउने (Wound Healing and Scar










Reduction) गर्छ। उक्त प्रकाशले बाथ रोग र मांसपेशीको दुखाइ काम गर्ने गर्दछ। फोटोडायनामिक थेरापीको रूपमा यसको प्रयोगले जीवाणु र भाइरसको वृद्धि रोक्न तथा नष्ट गर्न सहयोग गर्दछ।

रातो प्रकाशले सर्केडियन रिदम सन्तुलन, तनाव घटाउने र राम्रो निद्रामा मद्दत गर्छ। निलो प्रकाशको किरणको मेलाटोनिन उत्पादनमा बाधा पुऱ्याउने बैगुन साँझको प्रकाशमा हुँदैन। रक्तसञ्चार दर बढाउन, मांसपेशी पुनःउत्थान गर्न, टेस्टोरोन लेभल बढाएर हर्मोन सन्तुलनमा महत्त्वपूर्ण भूमिका खेल्छ।

रातो र सुन्तला रङ्गका प्रकाश किरणहरू उपचारात्मक गुण विकास गर्न यिनीहरू कोषको













माइटोकन्ड्रियाको साइटोक्रोम सी अक्सिडेज (Cytochrome C. Oxidase) इन्जाइम सँग रियाक्सन गर्ने गर्दछन्। जसको कारण अक्सिजनको खपत बढाएर कोषीय ऊर्जा एटिपी (ATP) उत्पादन वृद्धि गर्ने गर्छ। रगतमा नाइट्रिक अक्साइड (NO) उपलब्ध गराएर रक्त नलीहरूलाई फुलाएर रक्तसञ्चारमा व्यापक सुधार ल्याउने गर्दछ। यसरी समग्रमा, रातो र सुन्तला प्रकाश सँगको नियमित सम्पर्कले शारीरिक, मानसिक, कोषीय स्वास्थ्यलाई मजबुत बनाउने चिकित्सकीय लाभ मिल्दछ।

चर्चा: वेदमा जीव र निर्जीव दुबैलाई सूक्ष्म जीव भनिन्छ। तिनीहरूको सूक्ष्मतम ऊर्जाको रूप चैतन्य परा कण वृत्ति भन्दा बाक्लो र क्वान्टम अपरा कण







वृति भन्दा पातलो बादल रुपी हुन्छ। त्यसलाई मरुत गण रुपी पारा ऊर्जा गुण वृति मानिन्छ। अनुशासित र संगठित रहेर समूहमा बहु आयामिक कार्य सम्पन्न गर्ने सूक्ष्म जीवहरू विभिन्न रूप, रङ भएका बहुरंगी समूहका रूपमा रहन्छन्। जमिन भित्रको पृथ्वीको कम्पन वा ध्वनिले सूक्ष्म जीव हरूलाई अत्यन्त संवेदनशील बनाउँछ। जमिनको भित्री कम्पनका कारण सूक्ष्म जीवहरूले भूमिगत रूपमा समूहमा निकाल्ने आवाजले मानिसलाई डरलाग्दो अनुभूति गराउँछ ।

(नोटः पृथ्वीको सतहभित्र ५० मिटर देखि ३.२ किलोमिटरसम्म आश्चर्यजनक रूपमा विविध माइक्रोबियल समुदायहरूको प्रचुर उपस्थिति देखिन्छ। मुख्यतः ब्याक्टेरिया र सिंगलसेल








आर्कियल प्रजातिहरू अधिकतम देखिने उक्त सूक्ष्म जीवहरूको समुदायहरूले आफूलाई जरुरी ऊर्जा फलाम, सल्फर म्याग्नेज जस्ता अकार्बनिक सब्सट्रेटहरूको आक्सीकरण गरी प्राप्त गर्छन्। अक्सिडेसन पश्चात धातुका अक्सिडाइजर माइक्रोबहरू सक्रिय रहने भूभाग भन्दा पनि तल जान सम्भव हुन्छ।

अत्यन्त प्रतिकूल वातावरणमा रहेका अत्यन्त कम पानी रहेको अधिक तातो (१२२ डिग्री सेल्सियस) वातावरणमा रहेको पानीबाट अनौठो र दुर्लभ हाइड्रोजन ऊर्जाका रूपमा निकाली प्रयोगगर्दै खनिजहरू टाँसिएर तिनै अणुको गतिसँगै चलेर बाँचेको भेटिन्छ। अक्सिजन विना बाँच्ने अन्य ब्याक्टेरियाले तेलका भण्डारहरू अर्गानिक






पदार्थबाट समेत शक्ति निकाल्ने गर्छन् । केही मेथानोट्रोप्सहरूले कार्बन र ऊर्जाको स्रोतका रूपमा मिथेन मेटाबोलिज गरेर समेत ऊर्जा प्राप्त गर्ने गर्छन्। आफ्नो गतिविधि सञ्चालन गर्नेक्रममा सूक्ष्म जीवहरूले पृथ्वीको भित्री तहमा विषाक्तताको निर्मलीकरण गर्ने र शुद्ध पार्ने काम गर्छन्।

कम गहिरो प्रकृतिको भूकम्पको समयमा उच्च फ्रिक्वेन्सीको श्रव्य आवाजहरू लगातार उत्पन्न हुने गर्छ। पृथ्वीको सतहमा तरंगहरू उत्पन्न गर्ने उक्त आवाजका लागि पृथ्वीको भित्री सतहको सूक्ष्म जीवहरूको गतिविधि समेत जिम्मेवार ठानिन्छ । किनकि निकै गहिरो भूकम्पका बेला त्यस्तो प्रकृतिको आवाज सुनिने गर्दैन।)

ऋग्वेद मन्त्र १.३९.७










**आ वो॑ मु॒क्षू तना॑य॒ कं रु॒द्रा अवो॑ वृणीमहे ।**

**गन्ता॑ नू॒नं नोऽवं॑सा॒ यथा॑ पु॒रेत्था कण्वा॑य बि॒भ्युषे॑ ॥**

पद पाठः आ । वः॒ । मु॒क्षु । तना॑य । कम् । रुद्राः॑ । अवः॑ । वृ॒णी॒म॒हे॒ । गन्त॑ । नू॒नम् । नः॒ । अवं॑स् यथा॑ । पु॒रा । इ॒त्था । कण्वा॑य । बि॒भ्युषे॑ ॥

भावार्थः अव्यक्त आत्माको अंशको व्यक्त हुने चाहना पुरा गर्न बुद्धि तथा विवेक (Intellect) लाई शरीरको हरेक अंशहरू लाई डर र भय भाव (मन, बुद्धि, चित्त र अहङ्कार जन्य) मुक्त रूपमा कर्मशील हुने गरी यान्त्रिक बनाएर समग्र ब्रह्माण्डको दूरदर्शी संरक्षक केन्द्रित नियतगत गुण वृतिले परिपूर्ण गर्न र त्यस लाई जीव वृतिको रूपमा (चित्त)







अस्थायी आत्म संयोजन दिन पुरातन रुद्र वृतिले पैदा गर्ने वातावरणले (Quantum Universal Field or Dancing SIVA effects अर्थात् प्राकृतिक सूक्ष्म परा गुण सूक्ष्म अपरा गुणसँग संयोजन गर्ने रुद्र भूमिकाले) पुरा गर्दछ।

शब्दार्थ:

आ (ā): जसको उपस्थितिले

वः (vaḥ): चराचरहरूको (आत्म - संयोजनको अर्थ लुकेको)

मक्षु (makṣu): जरुरतको वेलामा तत्काल

तनाय (tanāya): शरीर र शरीरको अङ्ग प्रत्यङ्ग सबैको








कम् (kam): बुद्धि तथा विवेक (जल) तथा कर्म गुण

रुद्राः (rudrāḥ): मनमोहक (भयावह) रुद्र रूप (पारा अव्यक्त गुण पारा व्यक्त गुणमा परिवर्तन हुने क्वान्टम युनिभर्सल फिल्डको कर्म जनाउने डानसिङ्ग शिव रूप)

अवः (avaḥ): रक्षाको लागि सहारा दिने वृति

वृणीमहे (vṛṇīmahe): तत्कालीन जरुरतको तत्काल आपूर्तिको चाहनाको याचना अनुरूप

गन्त (ganta): पुरा गरी उद्देश्य पुरा गर्ने वा गन्तव्यमा पुऱ्याउने

नूनम् (nūnam): सुनिश्चितता गर्ने








नः (naḥ): चराचरहरूको मित्र शक्ति

अवस् (avas): को रूपमा सहयोग र संरक्षण दिने

यथा (yathā): भूमिका खेल्ने र

पुरा (purā): परम्परागत रूपको (प्रकृति नियम अनुरूपको अर्थमा)

इत्था (itthā): उपाय अपनाएर

कण्वाय (kaṇvāya): यहाँ कण्व शब्द बुद्धिमान, करुणामय, दृढ र दूरदर्शी संरक्षक कर्मको नेतृत्वकर्ताको गुण निर्माण गर्ने विषय जनाउन उपयोग गरिएको छ।

बिभ्युषे (bibhyuṣe): तथा डर र भय भाव (बीच सो वाट मुक्त रहेरको सन्दर्भमा)










ऋग्वेद मन्त्र १.३९.८

**युष्मेषितो मरुतो मर्त्येषित आ यो नो अभ्व ईषते।**

**वि तं युयोत शवसा व्योजसा वि युष्माकाभिरूतिभिः॥**

पद पाठः युष्माऽइषितः । मरुतः । मर्त्यऽइषितः । आ। यः । नः । अभ्वः । ईषते । वि । तम् । युयोत। शवसा । वि । ओजसा । वि । युष्माकाभिः। ऊतिऽभिः॥

भावार्थः मरुत गणहरूको भूमिका व्यक्तिले आफ्नो दैनिकीमा नियमित ग्रहण गर्ने ऊर्जा (प्रकाश, हावा, पानी, खाना र सोच) को सारतत्व रुपी ओजस लाई मानवीयता र नैतिक मूल्य मैत्री नियत प्रवर्धन गरी बलिष्ठ आत्मा बल र आत्मा विश्वासको विकास









गरी रोग, आत्मबलको क्षति तथा आध्यात्मिक क्षतिमा सक्रिय रहने परिवृत्त विरोधी क्षमता विकास गर्दछ। जुन समस्त प्राण रक्षा र मानवीयताको रक्षाको मुख्य कडीको जगको आधार बन्दछ।

शब्दार्थ:

युष्माऽइंषिंतः (yuṣmā-iṣitaḥ): व्यक्तिको आत्मा विश्वास र नैतिक बल अनुरूप

मरुतः (marutāḥ) : मरुत गणहरू

मर्त्यऽइषितः (martyaiṣitaḥ) : मानवीयताको रक्षा गर्ने प्रेरणा तर्फ

आ (ā) : तर्फ आकर्षित हुने

यः (yaḥ): तिनीहरू जो









नः (naḥ): हामीलाई

अभ्वः (abhvaḥ): दरिलो नैतिक बल दिने

ईषंते (īṣate) : शक्ति युक्त हुने गर्दछ

वि (vi): त्यसको विपरीतको विनाशक कर्म (आत्मबल प्रतिरोधी, रोग नियन्त्रण प्रतिरोधी क्षमता)

तम् (tam) : लाई समस्तमा

युयोत (yuyota) : पराजय गर्ने

शवंसा (śavasā): आत्मबल र आत्मा विश्वासको बलद्वारा

वि (vi): विनाशक प्रवृत्तिलाई नियन्त्रणमा लिने (त्यस विरुद्ध)






ओजंसा (ojasā) : समस्त प्राण रक्षा शक्ति (प्रकाश, हावा, पानी, खाना आदि निर्मित सारतत्व)

वि (vi) : विशिष्टता (प्रभुता, प्रचुरता र समृद्धि) दायक (आत्मबल र आत्मा विश्वास खलल गर्ने शक्तिको विपरीत कार्य गर्दै भन्ने अर्थमा)

युष्माकांभिः(yuṣmākābhiḥ):व्यक्तिको विश्वास लाई

ऊतिऽभिः(ūti-bhiḥ): सहायताद्वारा, प्रोत्साहन द्वारा सुरक्षा प्रदान गरी रक्षा गर्ने विधि लिने गर्दछ।

ऋग्वेद मन्त्र १.३९.९

**असांमि हि प्रंयज्यवः कण्वं दद प्रंचेतसः।**










**असांमिभिर्मरुत आ नं ऊतिभिर्गन्तां वृष्टिं न विद्युतः॥**

पद पाठः असांमि । हि । प्रऽयज्यवः । कण्वंम् । दद । प्रऽचेतसः । असांमिऽभिः । मरुतः । आ। नः। ऊतिऽभिः । गन्तं । वृष्टिम् । न । विऽद्युतः॥

भावार्थः असुर वृत्तिहरूले पैदा गरेको असहजता र भद्रगोलको अवस्थालाई मरुत गणहरूको सीप, क्षमता र कौशलताको उपयोग गरी जरुरतको स्थानमा जरुरतको समयमा सुरक्षा सहायता जुटाएर काबुमा लिने कार्य सम्पन्न हुने गर्दछ। तत्कालीन समयको तत्कालीन अवस्थाको जरुरत पूर्ति गर्नेको लागि व्यवहारिक ज्ञान रुपी भर्गो ज्योति (ब्रह्माण्ड चेतना) तथा आध्यात्मिक, मनोवैज्ञानिक एवं भौतिक सोम रस गुणको सारको उपयोग हुने











गर्दछ।

शब्दार्थ:

असा॑मि (asāmi): असुरहरूको सामना गर्न

हि (hi): निश्चय / वास्तवमा

प्रऽयज्यवः (pra-yajyavaḥ): योजना बद्ध नीति (पूजा योग्य) र कार्यनीति (यज्ञ वा कर्म) बनाउन

कण्वम् (kaṇvam): बुद्धिमत्ता युक्त दृढ रचनात्मक तथा करुणा युक्त सकारात्मक रूपान्तरणको मार्गदर्शन अनुरूप समर्पित (जुन प्राय: ब्रह्माण्ड चेतना वाट प्राप्त हुन्छ)

द॒द (dad) : प्राप्त गरेर वा उपलब्ध गराएर

प्रऽचे॒त॒सः॒(pra-cetasaḥ):ज्ञानवान् र













चिन्तनशील व्यक्तिले

असा॑मिऽभिः (asāmibhiḥ): असुर वृत्तिहरूले पैदा गरेको असहजता र भद्रगोलको अवस्था

म॒रु॒तः॒ (marutaḥ): मरुत गणहरू

आ (ā): को सीप, क्षमता र कौशलताको उपयोग गरी

नः (naḥ) : जरुरतको स्थानमा जरुरतको समयमा

ऊ॒तिऽभिः॑ (ūti-bhiḥ) : सुरक्षा सहायता जुटाएर

गन्त॑ (ganta): कार्य सम्पन्न गर्नको लागि तैयारी हुनु

वृ॒ष्टिम् (vṛṣṭim): सोम रस गुण (मनोवैज्ञानिक







आशीर्वाद, पोषण र समृद्धि युक्त ओज) प्राप्ति

न (na): मात्र होइन (को अर्थमा न)

विऽद्युतः (vi-dyutaḥ): भर्गो ज्योति (स्थानीय जरुरतको वारेको अनुभूतिले दिने व्यवहारिक ज्ञान) समेतको उपयोग गर्ने

नोट: व्यवहारिक वैदिक परम्परा अनुसार असुरहरू शक्ति शाली तर प्रायः नकारात्मक वृति बोकेको दुष्ट शक्तिहरू हुन्। उनीहरू अक्सर सुरहरू जस्तै भगवान् गण (अन्न, अक्सिजन, पानी जस्ता पोषण तत्त्व वाट सार तत्त्व निकाल्ने प्रक्रिया विरुद्ध) तथा सोमरस वृति (पोषण तत्त्व लाई ओजमा परिवर्तन गर्ने प्रकाशको किरण, इन्जाइम, हर्मोन र रोग प्रतिरोधी कण आदि) सँग द्वन्द्वात्मक सम्बन्ध र











सङ्घर्षमा रहने गर्छन्। जसले व्यक्तिमा भौतिक सामर्थ्य निर्माण हुन नदिने र निर्माण भएको सामर्थलाइ नष्ट गर्न सदैव उद्धत रहन्छ।

असुरहरू देवताहरू अर्थात् देव गणको (न्युरो केमिकल्स, न्युरल संयन्त्र, इन्डोक्यानाविनोइड सिस्टम तथा लिम्चनोड आदिको सहज परिचालन) समेतको शत्रुको रूपमा कार्यरत रहन्छन्। जुन मूलतः व्यक्तिको आत्मा बल, मनोबल र आध्यात्मिक ज्ञान र विज्ञानमा जरुरत हुने मनोवैज्ञानिक सबलता लाई सिद्ध्याउने वृत्तिले सक्रिय रहन्छ।

युद्ध (रोग तथा विषाक्तता) र ब्रह्माण्डीय घटनाहरू (आत्मबल, सद्बुद्धि, पर्यावरण सुरक्षा, माइक्रोबायोम आदि) को सन्दर्भमा असुरहरू प्राकृतिक नियम







विरोधी गतिविधिमा संलग्न रहन्छन् जसको विरुद्ध चेतना र क्वान्टम शक्ति बिचको अस्तित्वमा देखिने मरुत शक्तिको नियमित सक्रियताको जरुरत पर्दछ। असुरहरू सँग लड्ने प्रमुख देवगणहरूमा इन्द्र (वज्रधारी देवता र देवगणका राजा - मस्तिष्क), अग्नि (अग्नि देवता), वरुण (जलका देवता), सूर्य (सूर्य देवता), विष्णु (रोग र विषाक्तता प्रतिरोधी क्षमता रहेको रक्षक), शिव (नयाँ निर्माणको नियतमा हुने विनाशक शक्ति), मरुत (वायु तथा वाष्पको रुद्र रुप) हुन्। असुरहरूले अक्सर अग्नि (अग्निदेव), मरुतहरू (तुफान देवता) र वायु (हावा देवता) प्रति आक्रामक हुने गर्दछन्। जीवनलाई जीवित राख्ने दिशामा गतिशील हुने वृत्ति, प्राकृतिक मैत्री शक्तिहरू र प्रकृतिमा अशान्त मच्चाउन सक्रिय











तत्वहरू विरुद्धको सङ्घर्षहरू असुर विरुद्धको गतिविधि हुने गर्दछ।

असुरहरूले कहिलेकाहीँ विश्वामित्र (धैर्यता, आत्मसंयम, र लक्ष्यप्रति समर्पण भाव), वशिष्ठ (समझदारी पूर्वक निर्णय लिने, शान्तिपूर्वक व्यवहार गर्ने, आध्यात्मिक रूपले सन्तुलित धैर्य, सहनशील, ज्ञान र आन्तरिक शान्ति गुणको) र कण्व (सकारात्मक रूपान्तरण तर्फ प्रेरित गर्ने मार्ग दर्शन, धैर्यता, बुद्धिमत्ता, रचनात्मकता, सहयोगी ममता भाव र करुणा) जस्ता गुण र वृति प्राप्तिको तपस्या वा कर्महरु (यज्ञ) लाई समेत अवरोध गर्दछन्।

शरीरले आफ्नो ओज निर्माण गरी आफूलाई बलिष्ठ गर्ने स्वस्थ खाना, हावा, पानी प्राप्त गर्ने आपूर्तिको





श्रोत तथा विज्ञान र आध्यात्मिक ज्ञानको श्रोत नै दूषित वा खण्डित गर्ने नियतमा समेत सक्रिय रहन्छन्। ता कि सुरगणहरू लाई कमजोर गर्न सकियोस्। विशेष गरी भगवान्, देवता र जीवको प्रत्यक्ष क्षमता रासको साथ साथै पर्यावरण र ब्रह्माण्ड नै तिनीहरू अमैत्री बनाएर समग्र सन्तुलनको व्यवस्था बिगारेर आफ्नो हैकम कायम गर्न सम्भव रहोस्।

ऋग्वेद मन्त्र १.३९.१०

**असाम्योजौं बिभृथा सुदानवोऽसांमि धूतयः शवः।**

**ऋषिद्विषें मरुतः परिमन्यव इषुं न सृंजत द्विषंम्॥**

पद पाठः असामि। ओजः । बिभृथ । सुऽदानवः।





असांमि । धूतयः। शवः । ऋषिऽद्विषें । मरुतः । परिऽमन्यवें । इषुंम्। न । सृजत । द्विषंम्॥

भावार्थः समय वा विषय बस्तु विशेष संग कुनै आशक्तिले नबाँधिएको रक्षा व्यवस्थापनको स्वामित्व धारण गर्ने मरुत गणहरूले आफ्नो कम्पन युक्त स्फूर्तिको बललाई ज्ञान प्राप्तिको लागी हुने तपस्या र अनुभूतिको लागि हुने यज्ञ कार्यमा अवरोध गर्ने असुर वृतिले पैदा गर्ने असामान्य अवरोधलाई सम्पूर्ण रूपमा निस्तेज गरी रक्षा व्यवस्थापन कार्य सुदृढ गर्दै पुनः सन्तुलन कायम गरेर जीवन दान दिने उत्कृष्ट कर्ममा लीन हुने गर्दछ।

शब्दार्थः







असाम्योजः (अ + साम्योजः): समय वा विषय बस्तु विशेष संग कुनै आशक्तिले नबाँधिएको

बिभृथा (बिभृ + था) : रक्षा व्यवस्थापनको स्वामित्व धारण गर्ने

सुदानवः (सु + दानवः): उत्कृष्ट जीवन दान दिने

असामि (अ + सामि): असामान्य अवरोधक

धूतयः (धू + त + यः): कम्पन युक्त

शवः (शव): स्फूर्तिको वल

ऋषिद्विषे (ऋषि + द्विषे) : ऋषिहरूको (ज्ञान प्राप्तिको लागी हुने तपस्या र अनुभूतिको लागि हुने यज्ञ) कार्यमा अवरोध गर्ने असुर वृति

मरुतः मरुत गणहरूले













परिमन्यवः (परि + मन्यवः): चारैतिर वाट घेरेर तुरुन्तको उग्र आक्रमण (तुरुन्त सच्चाएर) सन्तुलन कायम गर्ने

इषुम् (इषु) : अस्त्रहरू

न (न) : जस्तै

सृजत (सृज् + त): प्रक्षेपण भूमिकामा रहेर

द्विषम् (द्विष्) : प्रत्याक्रमण र सन्तुलनको पुनः कायम गर्ने कार्य पुरा गर्दछन्।

ऋग्वेद मन्त्र १.६४.१

**वर्ष्णे शर्धाय सुमखाय वेधसे नोधः सुव्रिक्तिं पर भरा मरुद्भ्यः|**

**अपो न धीरो मनसा सुहस्त्यो गिरः समञ्जे**





## विदथेष्वाभुवः||

पद पाठः वृष्णे । शर्धाय । सुऽमखाय । वेधसे । नोधः । सुऽवृक्तिम् । प्र । भर । मरुत्ऽभ्यः । अपः । न । धीरः । मनसा । सुऽहस्त्यः । गिरः । सम् । अञ्जे । विदथेषु । आऽभुवः ॥

भावार्थः उत्तम उद्देश्यले शक्तिशाली समूहमा कार्य गर्ने, वीर र बलशाली मरुगणहरू ब्रह्माण्ड चेतनाको व्यवहारिक कार्यान्वयनको ज्ञान बोक्ने कुशलता बुद्धिमत्ता युक्त जीवन दायी अमृत शक्ति रुपी कम्पन आवृत्तिको श्रृङ्खलाहरू हुन्। जहाँ जति वेला जे कुराको जरुरत हुन्छ त्यही त्यति नै वेला प्रकृति मैत्री विधिको कार्यान्वयनमा उत्प्रेरित हुने साहसी मरुतहरू मन र विचारमा सकारात्मकता ल्याउन सक्रिय भूमिकामा रहने गर्दछन्।





शब्दार्थः

वृष्णे (vṛṣṇe) - शक्तिशाली र वीर

शर्धाय (śardhāya) - बलशाली समूहमा कार्य गर्ने

सुमखाय (sumakhāya) - उत्तम उद्देश्य लिएको

वेधसे (vedhase) - ब्रह्माण्ड चेतनाको व्यवहारिक कार्यान्वयनको ज्ञान रहेको

नोधः (nodhaḥ) - प्रकृति मैत्री विधिको कार्यान्वयनमा प्रेरित हुने

सुवृक्तिम् (suvṛktim) - सही नतिजा प्राप्ति निश्चय गरिदिने







प्र(pra)- जहाँ जति वेला जरुरत हुन्छ त्यही त्यति नै वेला

भर (bhara) - सम्पन्न गरिदिने

मरुत्भ्यः (marutbhyaḥ) - मरुगणहरू लाई

अपः (apaḥ)- जीवन दाहिनी शक्ति अमृत (पानी, जल)

न (na) - मात्र होइन

धीरः (dhīraḥ) - धैर्य र साहसी

मनसा (manasā) - मन र विचार

सुऽहस्त्यः (su-hastyaḥ) - सकारात्मकता तर्फ लैजाने गुण बोकेको

गिरः (giraḥ) - कम्पन युक्त आवृत्तिको













शृङ्खलाहरू

सम् (sam) - को अवस्थामा

अञ्जे (añje) - सक्रिय रहेको

विदथेषु (vidatheṣu) - बुद्धिमत्ता र कुशलता

आऽभुवः (ābhuvaḥ) - भूमिका खेल्न आइपुग्ने गर्दछन्

ऋग्वेद मन्त्र १.६४.२

**ते जंज्ञिरे दिव ऋष्वासं उक्षणों रुद्रस्य मर्या असुंरा अरेपसः ।**







**पा॒व॒कासः॒ शुच॑यः॒ सूर्या॑इव॒ सत्वा॑नो॒ न द्र॒प्सिनौ॑ घो॒रव॑र्पसः ॥**

भावार्थ: ब्रह्माण्ड चेतनाको गहिरो ज्ञान राख्ने र मरुतहरु लाई त्यो ज्ञान र प्रकाश सिञ्चित गर्ने जल, समुद्र र आकाशका देवता रूपको कम्पन ऊर्जाको तरङ्गको क्षेत्र वरुण सूर्यको प्रकाश निर्मित छन् । रोग र विकृतिहरूको उपचार र रक्षा गर्न प्राकृतिक नियम अनुसार बल पूर्वक कार्य गर्ने गराउने र अहङ्कार तथा मोह जस्ता दुर्भाग्यपूर्ण अनुचित लगाव ध्वस्त गर्न भर्गो ज्योतिको सहयोग वाट अत्यन्त आक्रामक रूपमा उत्पन्न विकृति आदिलाई नियन्त्रणमा लिएर उपचारात्मक सच्चाउने कार्यमा वरुण ऊर्जाको तरङ्गको क्षेत्रको (क्वान्टम युनिभर्सल फिल्ड) उपयोग हुने गर्दछ ।






शब्दार्थ:

ते (te) - तिनीहरू (यहाँ वरुण ऊर्जा र मरुत दुवैको कुरा भएको छ)

जज्ञिरे (jajñire) - उत्पन्न भएको

दिव (diva) - प्रकाश वाट उत्पन्न दिव्य शक्ति

ऋष्वास (ṛṣvās) - ब्रह्माण्ड चेतनाको गहिरो ज्ञान राख्ने

उक्षणः (ukṣaṇaḥ) - ज्ञानी र प्रकाशको सिञ्चित गर्ने

रुद्रस्य (rudrasya) - कम्पन ऊर्जाको तरङ्ग रूपको शक्ति (जल, समुद्र, र आकाशका देवता, पापबाट मुक्त गर्ने र मुक्तिदाता)



मर्या (marya) - तन्देरी अवस्थाको वीर योद्धाहरू जस्ती

असुरा (asurāḥ) - शक्तिशालीहरू असुरहरू (रोग र विकृतिका रोगको उपचार र रक्षा गर्ने)

अरेपसः (arepasaḥ) - निष्पाप र पवित्र उद्देश्य लिएर भिड्ने

पावकासः (pāvakāsaḥ) - त्यसबाट मुक्त गरी पवित्र गर्ने (अग्नि ऊर्जाहरू सँग सम्बन्धित)

शुचयः (śucayaḥ) - पवित्र र निर्मल

सूर्याय (sūryāya) - सूर्यको ज्योति (भर्गो ज्योति)

इव (iva) - जस्तै भूमिकामा

सत्वानः (satvānāḥ) - सत्त्व प्रेमी (प्राकृतिक






नियमको अनुसार बल पूर्वक कार्य गर्ने गराउने)

न (na) - मात्र होइन

द्रप्सिनः (drapsinaḥ) - अहङ्कार र मोह (अनुचित लगाव) ग्रस्त दुर्भाग्यपूर्ण स्थिति

घोरवर्पसः (ghoravarpasaḥ) - अत्यन्त आक्रामक रूपमा नियन्त्रणमा लिएर सच्चाउने (उपचारात्मकको अर्थमा) तागत

नोटः रुद्रको सम्बन्ध वायु र अग्निसँग छ भने वरुणको सम्बन्ध जल र आकाशसँग छ। नटराज क्रोध, उग्रता, र कम्पन शक्तिको रूपमा नर्तकीको रूपमा देखिन्छन् भने वरुण देवता त्यो नाच सम्पन्न हुने फिल्डको रूपमा देखिन्छन्। जुन आधुनिक वैज्ञानिक युनिभर्सल क्वान्टम फिल्ड



समान भूमिकामा हो जसले रुद्र सेना मरुतहरुको सहयोगमा प्रकृतिको नियम विरुद्ध (ईश्वरको कृपा विपरीत हुँदै गरेको काम) भए गरेको कामलाई सच्चाउने र नियम मैत्री बनाउने भूमिका खेल्दछ। वेदहरूमा उल्लेख गरी अनुरूप वरुण एक महत्त्वपूर्ण देवता हुन् जसले ऋत (सामान्य नियम) र समग्र ब्रह्माण्डको विशाल र सर्वव्यापी प्रकृति जस्तै जल, महासागर र आकाशको शासकको रूपमा नैतिक र प्राकृतिक नियमहरूको पालन गराउने सर्वव्यापी रहेर सतर्क काम गर्ने गर्दछ। क्वान्टम फिल्ड थ्योरी अनुसार इलेक्ट्रोन, फोटोन र अन्य कणहरू क्वान्टम युनिभर्सल फिल्डको कम्पनहरू लाई आधारभूत उत्तेजनाको तहको रूपमा उपयोग गर्ने गर्दछन्। वरुणको सृष्टिको सन्तुलन कायम राख्ने भूमिका






आधुनिक क्वान्टम फिल्डको अवधारणा सँग मिल्दछ। जहाँ फिल्ड नै सम्पूर्ण पदार्थ र ऊर्जा उत्पन्न गराउन जिम्मेवार छ। वरुणको प्रभाव सम्पूर्ण ब्रह्माण्डभरि फैलिएको छ र वस्तुहरूलाई बन्धनमा राख्छ।

क्वान्टम भौतिक विज्ञानको नन-लोकालिटी अवधारणा (जहाँ कणहरू लामो दूरीमा पनि बिचमा विना कुनै माध्यम आपसमा सम्बन्धित रहेर जोडिएर सूचना अडान प्रदान गर्ने गुण) सँग वरुणको प्रभाव र मरुतहरुको परिचालन क्रिया संग मिल्दछ। वरुणको भूमिका आधुनिक विज्ञानको युनिभर्सल रूलिङ फिल्डको भूमिका संग मिल्दछ। वैदिक सन्दर्भमा वरुण भौतिक, नैतिक र आध्यात्मिक आयामहरू समेट्ने समग्र र एकीकृत अवधारणा हो







भने क्वान्टम युनिभर्सल फिल्ड एक विशिष्ट र वैज्ञानिक रूपमा परिभाषित इकाई हो।

थप चर्चा: मुख्यतया जल, समुद्र र आकाशका सर्वव्यापी, सत्यको रक्षक र नैतिकता र न्यायको पालनकर्ता एवं ऋत (सार्वभौमिक नियम) को अनुसरण गराउने, प्राकृतिक र नैतिक नियमहरूको पालन गराउने र दोषीहरूलाई दण्डित गर्ने देवताको भूमिकामा हेरिएको वरुण शक्ति मानव प्रिबायोटिक र प्रोबायोटिकको भूमिका संग समेत मिल्दछ। प्रिबायोटिकहरू जस्ता लाभदायक पदार्थ र प्रोबायोटिकहरू जस्ता लाभकारी सूक्ष्म जीवहरू वामाइक्रोबायोमहरूको उत्पत्तिको स्रोत प्रकाश हो। प्रकाशको किरणमार्फत शुद्धीकरणकोप्रक्रियाबाट गुज्रिएर आएका हुनाले तिनीहरू प्रायः पीडायुक्त













रोगप्रदायक वा रोगजनकचरित्रहरू निर्माण गर्ने प्रवृत्तिबाट मुक्त भेटिन्छन्। प्रोबायोटिक माइक्रोबायोम हरूले सूर्यको किरणबाट वातावरण शुद्ध पार्ने स्वभाव तथा बर्सातकोपानीको माध्यमबाट पृथ्वीमा रहेका जीवहरूको जीवनमा सकारात्मक तत्व र ऊर्जा निर्माणगर्ने भूमिका खेल्ने कर्मिक लक्षणहरू देखाउने चरित्र ग्रहण गरेका हुन्छन्।

(नोट: प्रोबायोटिक्स भनेको मूलतः जिउँदो ब्याक्टेरिया वा मोर्चाको (इष्ट) समूह हो, जसलेहाम्रो शरीरमा गुणकारी भूमिकाहरू खेलेर शरीरको स्वस्थ कायम तथा सुधार गर्न र पाचन प्रक्रिया सुदृढ पार्न मद्दत पु¥याउने गर्छ। शरीरको रोग प्रतिरोधात्मक शक्ति बढाउन र मनोवैज्ञानिक







स्वस्थ कायम गर्न प्रोबायोटिक वा गट माइक्रोबायोमहरूको अत्यन्त प्रभावकारी भूमिका रहने प्रमाणित भएको छ। उदाहरणका रूपमा ब्याक्टेरियाहरू बारे चर्चा गरौँ ।

संसारमा अस्तित्वमा रहेका अत्यन्त धेरै संख्याका ब्याक्टेरिया खराब प्रकृतिको हुँदैन। मानव शरीरमा अनुमानित १०० ट्रिलियन 'राम्रो' ब्याक्टेरियाहरू भेटिन्छन् जसमध्ये धेरै संख्या हाम्रो आन्द्रामा बस्छन्। खानाबाट उनीहरूलाई हानिकारक हुने पदार्थ आन्द्रामा पुगेका बेला प्रतिकूल परिस्थिति बाट बच्न एपेन्डिक्समा आश्रय लिएर लुक्छन् र आन्द्राको वातावरण अलि सहजबनेपछि पुनः आन्द्रामा फर्कन्छन्।

ब्याक्टेरियाहरू हाम्रा लागि केवल लाभदायक मात्र











हैन, हामी उक्त ब्याक्टेरियाहरू सँग मिलेर बाँचिरहेका छौँ। हाम्रो शरीरको विभिन्न आन्तरिक गतिविधि उनीहरूको सहयोग रसहजीकरण विना सम्भव छैन । यथार्थमा तिनीहरू विना हामी जीवित समेत रहन नसक्ने हुन्छत्यसैले हाम्रो अस्तित्वका लागि तिनीहरू अत्यन्त आवश्यक हुन्छन्।

त्यसो भन्दै गर्दा यो पनि नबिर्सौं कि हामीलाई लाग्ने धेरै रोगहरूको पछाडि कतिपय ब्याक्टेरियाकै कारण रहन्छ। जस्तै निमोनिया स्ट्रेप्टोकोकस ब्याक्टेरियाका कारण निमोनिया हुने गर्छ । मेनिन्जाइटिस हेमोफिलस ब्याक्टेरियाको कारण इन्फ्लुएन्जा, घाँटी दुख्ने गला चिलचिलाउने रोग समूह 'ए' को स्ट्रेप्टोकोकस ब्याक्टेरियाको कारण हुन्छ। खानालाई विषाक्त गर्ने काम एस्चेरिया कोली र साल्मोनेला





जस्ता ब्याक्टेरियाहरूले गरिदिन्छ । अन्य धेरै प्रकारका गम्भीर रोगहरूको पछाडि ब्याक्टेरिया संक्रमण कारकहुने गरेको छ। यति हुँदाहुँदै पनि संसारमा अस्तित्वमा रहेका ब्याक्टेरियाहरूको प्रकारको तुलनामा तिनीहरूको संख्या नगण्य नै हुने देखिन्छ ।

प्रोबायोटिकहरूमा लोकप्रिय वनस्पतीय प्राकृतिक स्रोतका रूपमा फर्मेन्टेसन गरिएको अन्न जस्तै तुम्बा, जाँड, अमिलोडो, पाउरोटीको डो, फर्मेन्टेसन गरिएको फलफूल जस्तै भिनेगर, अमिलिएको फलफूल आदि वा फर्मेन्टेसन गरिएको सागपात तरकारी जस्तै गुन्द्रुक, किम्ची, गाडेको अचार आदिबाट आउने लेक्टोबेसिलस ब्याक्टेरियाका स्ट्रेनहरू (एल. ल्याक्टिस, एल. राम्नोसस,









एल.प्लान्टारम, एल. सेसी, एल.एसिडोफिलस, एल. रिउटेरी, आदि)र बिफिडोबक्टेरियाका स्ट्रेनहरू (बी. लंगगम, बी.ब्रेभी, बी. ल्याक्टिस आदि) लाई चिनिने गर्छ।

औषधी पसलहरूमा उपलब्ध प्रोबायोटिक पूरक खानाहरूमा मानव आन्द्राका कोषहरू वा बेगौती दूध वा फर्मेन्टेसन गरिएको दही, चिज, मोही आदिबाट निकालिएका प्राकृतिक ल्याक्टोबेसिली, बिफिडोबक्टेरिया, स्ट्रेप्टोकोकी र स्याक्रोमाइसेसिस जस्ता ब्याक्टेरियाका विभिन्न प्रकारका प्रजातिसमेत समावेश हुने गर्छ ।

प्रिबायोटिकहरू भने आन्द्रामा सजिलै नपच्ने खानाका अवशेष हुन् जुन प्रोबायोटिक सूक्ष्म जीवहरूको खाना हुने गर्छ। तिनीहरूको शारीरिक











विकास र नियमित गतिविधि सञ्चालनमा सहयोग पु¥याउँछ।

प्राणीको शरीरमा वा अन्यत्र फर्मेन्टेसनमा संलग्न हुने जीवमा हुने जीवन्त शक्तिको स्रोत सूर्यको किरण रहेको मान्यतामा उक्त प्रक्रियामा पैदा हुने प्रिबायोटिक वा प्रोबायोटिकको मूल स्रोत सूर्यको प्रकाशलाई मानिएको हो। आन्द्रामा पाचनका क्रममा प्रिबायोटिकहरूले र नियन्त्रित फर्मेन्टेसनको क्रममा पैदा हुँदै गर्दा प्रोबायोटिक्सहरूले जीवको जीवनमा सकारात्मक तत्व र ऊर्जा निर्माण गर्ने चरित्र ग्रहण गर्ने वैदिक मान्यता छ।

सामान्य रूपमा बताउँदा वैज्ञानिक परीक्षणहरू बाट हानिकारक सूक्ष्म जीवहरू लाभदायक सूक्ष्म जीवहरूभन्दा तातो र प्रकाशको अल्ट्राभोइलेट













किरणसँग बढी संवेदनशील रहने तिनीहरूको प्रभावमा छिट्टै निष्क्रिय हुने (अपवाद बाहेक) भेटिन्छ। लाभदायक सूक्ष्म जीवहरू तातो अवधि पछि समूहमा झन् धेरै सक्रिय रहेर फोहोरलाई आदिलाई प्रभावकारी रूपमा विखण्डन र निर्मलीकरण गरी कम्पोस्टमा परिवर्तन गरेको देखिन्छ।)

ऋग्वेद मन्त्र १.६४.३

**युवा॑नो रु॒द्रा अ॒जरा॑ अभो॒ग्घनो॑ ववु॒क्षुरध्रि॑गावः॒**

**पर्व॑ताइव।**

**दृ॒ळ्हा चि॒द्विश्वा॒ भुव॑नानि॒ पार्थि॑वा॒ प्र च्या॑वयन्ति**

**दि॒व्यानि॑ म॒ज्मना॑॥**







पद पाठः युवानः । रुद्राः । अजराः । अभोक्ऽहनः । ववक्षुः । अध्रिऽगावः । पर्वताःऽइव । दृळ्हा । चित् । विश्वा । भुवनानि । पार्थिवा । प्र । च्यावयन्ति । दिव्यानि । मज्मना ॥

भावार्थः रोगहरूको नाश गर्ने र उपचार गर्ने उग्र प्रकृतिका शक्तिशाली रुद्र देवता (कम्पन शक्ति) भौतिक अस्तित्वमा रहेको चन्द्र र सूर्यको भर्गो ज्योति निर्मित सारतत्व आदि मार्फत अटुट र अविचलित रूपमा प्रकृति र जीवनको कायाकल्प र जीवन्त ऊर्जा उपलब्ध गर्न र ताजगी र उत्साह सिञ्चित गर्न नियमित अग्रसर र सक्रिय रहने गर्दछ।

शब्दार्थः







युवानः (yuvānaḥ) - ताजगी र उत्साहले भरिएको जवान अवस्था कायम गर्न

रुद्राः (rudrāḥ) - रोगहरूको नाश गर्ने र उपचार गर्ने उग्र प्रकृतिका शक्तिशाली रुद्र देवता

अजराः (ajarāḥ) - बुढ्यौली लाग्न ढिलो गर्ने कायाकल्प र सन्तुलन निर्माणमा भूमिका खेल्ने प्राकृतिक जीवन्त ऊर्जा

अभोऽखनः (abho-khanāḥ) - कहिल्यै नथाक्ने, असन्तोषी, निरन्तर कर्म गर्ने इच्छा शक्ति भएको

ववक्षुः (vavakṣuḥ) - ब्रह्माण्ड चेतनाको आकाङ्क्षा अनुरूप त्यसलाई नियमित पुरा हुने क्रम भङ्ग गर्न उत्साहित शक्ति प्रतिको आपत्ति भाव



अध्रिगावः (adhri-gāvaḥ) - स्वतन्त्र पर्वतको सृष्टि गर्ने, पर्वतमै रमाउने कठोर प्रकृतिका चट्टानको सार तत्त्व (भिटामिन, मिनिरल्स आदि)

पर्वताःऽइव (parvatāḥ-iva) - पर्वतहरू जस्तै अचल, स्थिर र शक्तिशाली अवरोध वा चुनौती खडा गरिदिने

दृढाः (dṛḍhāḥ) - अटुट र अविचलित रूपमा दृढ संकल्पित

चित् (cit) - ध्यान र सतर्कता सहित लिन

विश्वा (viśvā) - सम्पूर्ण ब्रह्माण्डका सबै वस्तुहरू

भुवनानि (bhuvanāni) - अन्य लोक र ब्रह्माण्डहरू समेतको








पार्थिवा (pārthivā) - सम्पूर्ण भूगोलको भौतिक अस्तित्व

प्र (pra) - नियमित सुचारु गर्न अग्रसर र सक्रिय रहने उत्कृष्ट ऊर्जा

च्यावयन्ति (cyāvayanti) - हल्लाउने, विस्थापित गर्ने र स्थानान्तरण गर्ने जस्ता विधिहरू वाट गति दिने, चलाउने

दिव्यानि (divyāni) - आकासीय दिव्य वस्तु प्रकाश (चन्द्र र सूर्यको भर्गो ज्योति) मिश्रित र निर्मित सारतत्व

मज्मना (majmanā) - को शक्तिको बल र प्रभावले

नोटः हरेक सूक्ष्म कण तथा जीवहरू हर समय ताजा










जोसका साथ सक्रिय रहेर आफ्ना कार्यहरू सम्पन्न गरिरहेकाहुन्छन्। प्रतिकूल वातावरण बाहेक बुढेसकाल लाग्ने जस्ता कारणले निष्क्रिय वा ढिलो गतिमा कार्य गर्ने वा कम सक्रिय रहने उनीहरूको चरित्र हुँदैन। अत्यन्त उदार मनोवृत्ति र शक्तिशाली क्षमतामा रहने अधिक संख्याका सूक्ष्म जीवहरू अवरोध, दुःखकष्ट र रोग निम्त्याउने नकारात्मक शक्तिहरूलाई छिन्नभिन्न पारी विखण्डन गर्ने क्षमता राख्छन्।













ऋग्वेद मन्त्र १.६४.४

**चि॒त्रैर॒ञ्जिभि॒र्वपु॑षे॒ व्य॑ञ्जते॒ वक्षः॑सु रु॒क्माँ अधि॑ येतिरे शु॒भे।**

**अंसे॑ष्वेषा॒ नि मि॑मृक्षुर्ऋ॒ष्टयः॑ सा॒कं ज॑ज्ञिरे स्व॒धया॑ दि॒वो नरः॑ ॥**

पद पाठः चि॒त्रैः। अ॒ञ्जिऽभिः॑। वपु॑षे। वि। अ॒ञ्ज॒ते॒। वक्षः॑ऽसु। रु॒क्मान्। अधि॑। ये॒ति॒रे॒। शु॒भे। अंसे॑षु। ए॒षा॒म्। नि। मि॒मृ॒क्षुः॒। ऋ॒ष्टयः॑। सा॒क॒म्। ज॒ज्ञि॒रे॒। स्व॒धया॑। दि॒वः। नरः॑ ॥

भावार्थः शरीरको सुन्दर रूप निर्माण गर्ने हरेक तन्तुहरूमा तिनीहरूको कार्य सञ्चालनमा सहयोग गर्ने मरुत गणको रूपमा माइक्रो बायोमको विशाल उपस्थिति रहन्छ। स्वधर्मको आत्मबलले









तन्तुहरूको निर्धारित कार्यहरू पुरा गर्न सहयोगी भूमिकामा सक्रिय रहने यी दिव्य शक्तिहरू प्राकृतिक रूपमा नै हरेक तन्तु तन्तुहरुको बाहिरी आवरणको लेपनको रूपमा व्यवस्थित हुने गर्दछ।

शब्दार्थ:

चित्रैः (Chitraiḥ) : सुन्दर शरीरको

अञ्जिऽभिः(Añji-bhiḥ): स्पर्शहरू एवं लेपन हरूको मध्यमको रूपमा

वपुंषे (Vapuṣe): शरीरको हरेक रूपलाई

वि (Vi): छुट्टाउने, विभाजन तथा विस्तार गर्ने

अञ्जते (Añjate): लेपन गरी दुरुस्त राख्ने

वक्षःऽसु (Vakṣaḥ-su): केन्द्रमा वक्षस्थलको









रूपमा रहने

रुक्मान् (Rukmān) : सुनौला र चम्किला

अधि (Adhi) : बाहिरी तहको आवरणको रूपमा

येतीरे (Yetire) : स्वतन्त्र रूपमा चलायमान रहने र जताततै पुग्ने

शुभे (Śubhe): हितकारी सुन्दर कर्म गर्ने

अंसेषु (Aṃseṣu): अङ्गहरूका मुख्य कार्य आफ्नो जिम्मामा (काँधमा) लिने

एषाम् (Eṣām): तिनीहरूको वा यिनीहरूको (यहाँ माइक्रो-बायोमको रूपको चरित्र देखाउने मरुतहरु भन्न खोजिएको छ)






नि (Ni): तल अन्त सम्म

मिमृक्षुः (Mimṛkṣuḥ): पुगेर निरीक्षण अवलोकन गर्दै

ऋष्टयः(Ṛṣṭayaḥ): सम्पूर्ण निर्धारित कार्यहरू (जसलाई यज्ञहरू, धर्मका कार्यहरू भनिन्छ)

साकम् (Sākam): आपसमा मिलेर (आफ्नै मरुत गणको समूह) र साथमा (तन्तुहरूलाई उनीहरूको कार्य गर्न सहयोग गर्ने )

जज्ञिरे (Jajñire): प्राकृतिक रूपमा नै त्यहाँ व्यवस्थित गरिएका (जन्म जात उत्पन्न भएका)

स्वधया (Svadhayā): स्वधर्मको आत्मबलले सक्रिय रूपमा कार्यरत रहने







दिवः (Divaḥ): दिव्य शक्ति (आकाशको स्वर्ग बाट आएका ऊर्जा)

नरः (Naraḥ): मानवीयता युक्त वीर योद्धाहरू

चर्चा: जीवनमा सकारात्मकता निम्त्याउने तेजस्वी सूक्ष्म जीवहरू सुनौला गहना जस्ता देखिने हतियार र पदकले सजावट गरिएका शक्तिशाली क्षमतामा सिपाहीहरूका रूपमा सबै जीवनमा जन्मँदैमा सँग सँगै आएका हुन्छन्। स्वधर्मको आत्म-शक्ति द्वारा निर्देशित दिवः नरः (स्वर्गका योद्धाहरू) जसलाई मरुत भनेर चिनिन्छ त्यस्ता शक्तिशाली क्षमतामा सिपाहीहरू जुन जीवनमा जन्मँदैमा वातावरण वाट प्राप्ति हुन्छ। त्यसलाई विज्ञानमा लाभदायक



माइक्रोवायोम र बायोकेमिकलस आदि भन्ने गरेको देखिन्छ। त्यो बयोकेमिकल्स जुन शरीरले बनाउने गर्दछ त्यसलाई भने हार्मोन र एञ्जाइम आदि भन्ने गरेको देखिन्छ।

बच्चाले जीवको रूपमा माइक्रोबायोम पाए जस्तै वातावरण बाट प्राप्त गर्ने रसायनहरूमा श्वास र ऊर्जा उत्पादनका लागि आवश्यक पर्ने अक्सिजन, सूर्यको प्रकाश (जसले भिटामिन D उत्पादनमा मद्दत गर्दछ। हड्डीको स्वास्थ्य र रोग प्रतिरोधात्मक क्षमतामा निर्माणमा महत्त्वपूर्ण भूमिका खेल्दछ), बच्चा लाई पहिलो सास फेर्न उत्प्रेरित गर्न मद्दत गर्ने कार्बन डाइअक्साइड ($CO_2$), पहिलो स्तनपानको दूधबाट प्राप्त हुने इम्युनोग्लोबुलिनहरू (त्यसमा पनि विशेष गरी IgA, जस्ता सङ्क्रमण विरुद्ध सुरक्षा दिने








एन्टीबडी हरू) आदि लाई लिन सकिन्छ। माइक्रोबायोम जस्तै त्यस्ता तत्त्वहरू बच्चाले जन्मे पछि वातावरण वाट प्राप्त गर्दछ र त्यसले बच्चाको जीवनलाई सहयोग गर्छ। जसलाई वेदमा मरुत शक्तिको रूपमा लिइएको देखिन्छ।

नोट: बच्चाका लागि जन्मने दिन माइक्रोबायोम प्राप्तिको दृष्टिमा अत्यन्त ठूलो र महत्वपूर्ण दिन हो। किनकि गर्भ नली, जन्म दिँदै गरेको योनि आदि जीवाणुहरू वामाइक्रोबायोमले भरिएको हुन्छ । जन्मको क्रममा आमाबाट पहिलो माइक्रोबायोम पाउने नवजात शिशुहरू जन्मका क्रममा पूर्ण रूपमा ब्याक्टेरियाहरू द्वारा ढाकिएर शिशुको जीवनका लागि नयाँ माइक्रोबायोमको पूर्ति गरि रहेको हुन्छ।

जस्तै: मानिसले आफ्नो आमा बाबुबाट सबै मानव






डीएनए गर्भमै विरासतमा पाउने गर्छ । गर्भमै डीएनए जस्तै गरी विरासतमा भने माइक्रोबायोम पाइने गर्दैन। गर्भमा शिशुहरू रहँदादेखि जन्मिने समयसम्म शिशुले कुनै सूक्ष्म जीवाणुको वा माइक्रोबायोमको सामना गर्ने गर्दैनन्। धेरै बच्चाले आफ्नो जन्म हुँदै गर्दा माइक्रोबायोमको पहिलो ठूलो डोज प्राप्त गर्दछन्। गर्भको जन्म नलीमा यात्रा गर्दै गर्दा, त्यस पछि आमाले बुवाले लिएर खेलाउँदा, स्तनपान गर्दा अधिक माइक्रोबायोम बच्चाले पाउने गर्छ।

सूक्ष्म–जीवाणुहरू (मोर्चा, फंगस, ब्याक्टेरिया, भाइरस, लेउ, झ्याउ आदि) कोषहरूमा विभिन्न रङ्का पदार्थ निर्मित हुने हुँदा विभिन्न रङ्का देखिने गर्छन्। कतिपय अत्यन्त आकर्षक रङ्का समेत






भेटिन्छन् । उदाहरणका लागि ब्याक्टेरियाले हरियो बोट बिरुवाका क्लोरोफिल लगायत विभिन्न प्रकारका पिगमेन्टहरू प्रयोग गर्छन्। विभिन्न पिगमेन्टले फरक फरक रङ्का प्रकाशका किरणहरूलाई अवशोषित गर्ने हुँदा परावर्तित किरणका कारण तिनीहरू बैजनी, गुलाबी, हरियो, पहेँलो, सुन्तला, खैरो, सुनौलो आदि रङ्का देखिन्छन्।

अर्को तर्फ परमाणुभित्र रहने प्रोटोन रन्युट्रोनहरू बन्ने सूक्ष्म– क्वान्टम कण क्वार्क्सहरू (quarks) रातो, निलो र हरियो गरी तीन काल्पनिक रङ्का हुनेगर्छन्। उक्त रङ्का विपरीत, माइनस–रातो, माइनस–निलो र माइनस–हरियो रङ्का एन्टि-क्वार्क्स (antiquark) समेत क्वान्टम पार्टिकलका



रूपमा रहने ठानिन्छ । आफ्नै विभिन्न चार्ज र तौलको (मास) संयोजन र केही बुझ्न नसकिएको विशेष प्रकारका आन्तरिक गुणका कारण हरेक क्वार्क आफ्नै प्रकृतिको स्वादमा अस्तित्वमा रहने गर्छन्। उदाहरणका लागि क्वार्क्स (Quarks) मूलतः छ स्वाद (Flavours) मा आउँछन्। ती हुन् अप (माथि), डाउन (तल), टप(शीर्ष), बटम (पुछार), स्ट्रेन्ज(अनौठो) र चार्म (आकर्षक) । उक्त छ स्वादका क्वार्कहरू लाई माथि र तल, आकर्षण र अनौठो तथा शीर्ष र पुछार गरी तीन जोडीमा समूहकृत गर्ने गरिन्छ।

क्वान्टम पार्टिकलका रूपमा समूहमा रहने अर्को सब एटमिक कण लेप्टोन (Lepton) समेत छ स्वादमा भेटिन्छन्। इलेक्ट्रोन, मुओन, टाऊ, इलेक्ट्रोन–











न्युट्रिनो, मुओन–न्युट्रिनो र टाउ–न्युट्रिनो। आन्तरिक कमसल ऊर्जा शक्तिले सूक्ष्म कणहरूमा विकास गर्ने संवेदनशीलता तिनीहरूको स्वाद (प्रवृत्ति) फरक पार्न सफल हुने गर्छ।

जसले गर्दा म्युओन इलेक्ट्रोनमा त्यस्तै दुई डाउन क्वार्क र एक अप क्वार्क युक्त न्युट्रन दुई अप क्वार्क र एक डाउन क्वार्कबाट बनेको प्रोटोनमा परिवर्तन हुने आदि जस्ता परिवर्तन देखिन्छ ।

ऋग्वेद मन्त्र १.६४.५

**ईशानकृतो धुनयो रिशादसो**
**वातान्विद्युतस्तविषीभिरक्रत।**











**दुहन्त्यूधर्दिव्यानि धूतंयो भूमिं पिन्वन्ति पयंसा परिंज्रयः ॥**

पद पाठः ईशानऽकृतः । धुनंयः । रिशादंसः । वातान् । विऽद्युतः । तविंषीभिः । अक्रत । दुहन्तिं । ऊधः । दिव्यानिं । धूतंयः । भूमिंम् । पिन्वन्ति । पयंसा । परिंऽज्रयः ॥

भावार्थः सर्वत्र उपलब्ध हुने जल देव रूपको बादल वाट बर्साद (जल) गराउने तीव्र आवेगको ध्वनि निर्माण गर्ने दैवी शक्तिको भूमिकामा रहने तथा पृथ्वी वा शरीरमा रोग प्रतिरोधी रस (पानी, दूध र रगत) उत्पादन तथा सिञ्चित गर्ने वरुण शक्तिले पानीको श्रोत तथा रोग प्रतिरोधी रसको श्रोत लाइ आफ्नो शक्तिशाली आवेग रुपी बलले (Quantum wave functions) हल्लाएर





॥ श्री गणेशाय नमः ॥







हलचल गराएर तोडमोड गरी त्यसको सार तत्त्व लाई एक रूप वा अवस्था वाट अर्को रूप वा अवस्थामा सारिदिने प्रक्रिया अनुरूप पृथ्वी र शरीर लाई पोषण र प्राकृतिक रोग प्रतिरोधी क्षमता (प्रकृति विनाश विरुद्ध लड्ने क्षमता) वर्धक तत्त्व उत्पादन गरी सिञ्चित गर्ने गर्दछ ।

शब्दार्थः

ईशानऽकृतः : प्रकृतिले (ईश्वरले) बनाएको, दैवी शक्तिद्वारा उत्पन्न

धुनंयः : ध्वनि निर्माण गर्ने तीव्र आवेग (Sound Wave Power) रुपी शक्ति

रिशादंसः : आक्रामक त्रास पैदा गर्ने

वातान् : प्रवाहहरू (Waves)





॥ श्री गणेशाय नमः ॥







विऽद्युतः : बिजुली चम्कँदाको प्रकाशको किरण रुपी

तविंषीभिः : शक्तिशाली बल (आवेग)

अक्रत : उत्पन्न गरी

दुहन्तिं : उपलब्ध गराउने (दुहुन्छन् Milk out)

ऊधः : गर्भ वा शक्तिको श्रोत

दिव्यानिं : दिव्य (Divine)

धूतंयः : वस्तुहरू लाई हल्लाएर हलचल गराएर तोडमोड गरी एक रुप वा अबस्था वाट अर्को रुप वा अबस्थामा सारिदिने (Movers)

भूमिंम् : भूमि वा शरीर वा पृथ्वीलाई

पिन्वन्ति : पोषण र रोग प्रतिरोधी क्षमता बर्धक तत्व













पोषण गर्छ वा उद्धार गर्छ

पयंसा : जल देव रुपको बर्साद (जल) र रोग प्रतिरोधी रस (पानी, दूध र रगत) उत्पादन तथा सिञ्चित गर्ने

परिंऽज्रयः चारैतिर फैलिएको जलवाहक पात्रहरुको भूमिकामा (वरुण शक्तिको अर्थमा)

चर्चा: ज्ञानी तथा अनुभवी वैज्ञानिक एवं अन्वेषकहरू लाई रोग र भोकमरी विरुद्धको लडाइँको सफल नेतृत्व गर्न, मेघ उत्पन्न गरी बर्सात गराउन, प्राकृतिक उत्पादकत्व बढाउन तथा पर्यावरणको संरक्षण गर्न सूक्ष्म जीवहरूले सहयोग तथा सहजीकरण गर्ने छन् ।

ऋग्वेद मन्त्र १.६४.६











**पिन्व॑न्त्य॒पो म॒रुत॑: सु॒दान॑व॒: पयो॑**

**घृ॒तव॑द्वि॒दथे॑ष्वा॒भुव॑: ।**

**अत्यं॒ न मि॒हे वि न॑यन्ति वा॒जिन॒मुत्सं॑ दुहन्ति**

**स्त॒नय॑न्त॒मक्षि॑तम् ॥**

पद पाठः पिन्व॑न्ति । अ॒पः । म॒रुत॑: । सु॒ऽदान॑वः । पय॑: । घृ॒तऽव॑त् । वि॒दथे॑षु । आ॒ऽभुव॑: । अत्य॑म् । न । मि॒हे । वि । न॒य॒न्ति॒ । वा॒जिन॑म् । उत्स॑म् । दु॒ह॒न्ति॒ । स्त॒नय॑न्तम् । अक्षि॑तम् ॥

भावार्थ: सङ्क्रमणको समयमा शक्तिको स्रोतहरू वाट जरुरत अनुरूपको सारतत्व निकालेर सङ्क्रमण विरुद्ध लड्ने जीवन दिने रसहरू जस्तै दूध, पानी, एसेंसियल ओइल आदि जस्ता सारतत्व निकालेर प्रवाह गरी शरीर वा पृथ्वीको अभावको पूर्ति गरी













दिने जल देवता वरुणलाई अविनाशी तथा निरन्तर अस्तित्वमा रहने, तेज गतिमा कार्य सम्पन्न गर्ने, कम्पन युक्त गर्जन दिने गुणको; उदार, दानी शक्तिशाली प्राकृतिक वायुदेव मरुत गणको कर्म प्राप्ति सुनिश्चित गर्ने व्यापक विस्तारको वीरता युक्त तागत प्राकृतिक रूपमै जरुरतको बेला उपलब्ध हुने गर्दछ ।

शब्दार्थ:

पिन्व॑न्ति: परिपूर्ति गर्नु (पोषण गर्नु, प्रवाह गरी अभावको पूर्ति गर्नु)

अ॒पः जल वा तरल पदार्थ

म॒रुत॑: शक्तिशाली प्राकृतिक मरुत गण (वायुदेव) तत्त्व





सु॒ऽदानंवः उदार र दानी

पयः॑ जीवन दिने रस (जस्तै: दूध, पानी)

घृ॒तऽवंत्: घ्यूजस्तो समृद्धि दिने तेलीय पदार्थ (Essential Oils)

वि॒दथे॑षु: पवित्र कर्म हुने यज्ञहरूमा

आ॒ऽभुवः॑ दैवी शक्ति (जल देवता वरुण संग मिलेर काम गर्ने अर्थमा)

अत्यं॑म्: तेजसँग अगाडि बढ्ने क्षमताको गतिशील

नः मात्र होइन

मि॒हे: युद्ध र सङ्घर्षमा (सङ्क्रमणको समयमा)

वि: व्यापक विस्तारमा

न॒य॒न्ति॒: नेतृत्व लिएर नयाँ दिशा दिने





(leadership & Guide)

वा॒जिनं॑म्: वीरतापूर्वकको विजयको सुनिश्चित गर्ने श्रोत लाई (The victorious)

उत्सं॑म्: शक्तिको स्रोत वाट

दु॒ह॒न्ति॒: सारतत्व निकालेर (Extraction) दिने

स्त॒नयं॑न्तम्: कम्पन युक्त गर्जन रुपी शक्ति (Thunderous)

अक्षिं॑तम् : अविनाशी तथा निरन्तर अस्तित्वमा रहने

चर्चा: सूक्ष्मजीवहरू परोपकारी सकारात्मक परिवर्तनका संवाहकहरू हुन्। तिनीहरूको कारणबाट नै जीवनधान्ने पानी, मोटोपन कम गर्ने दूध, स्वास्थ्यवर्धक पौष्टिकतापूर्ण सारतत्व आदिको







उपलब्धता सम्भव बन्छ। परोपकारी कार्य पूरा गर्न नियमित बर्सात, खोला तथा नदीहरूको बहाव आदि सम्भवतुल्याउने कार्य गर्छन्। बादलको उत्पत्ति र आवागमन व्यवस्थापनमा समेत सूक्ष्मजीवहरूले भूमिका खेलिरहेका हुन्छन्।

दूध प्रोटिनको एक उत्कृष्ट स्रोत हो। हरेक धावक वा खेलाडीको आहारको चार्टको एक हिस्साका रूपमा दूधलाई समावेश गरिनुको मुख्य कारण यसले मांसपेशीको निर्माणमा सहयोगगर्ने, दूधको प्रोटिनले भोक कम गराउने र तृप्ति बढाउन मद्दत गर्दा पेटको बोसो समेत घटाउँछ।

चरनमा चरी घाँस खाने गाइको दूधमा राम्रो मात्रामा लिनोलिक एसिडका कन्जुगेटहरू, ओमेगा–३ जस्ता मोटोपना घटाउने, क्यान्सर, मधुमेह र हृदय रोग













जस्ता रोग प्रतिरोधी तत्वहरू रहने प्रमाणित भएको छ।

ऋग्वेद मन्त्र १.६४.७

**महिषासों मायिनश्चित्रभानवो गिरयो न स्वतवसो रघुष्यदः।**

**मृगाइव हस्तिनः खादथा वना यदारुणीषु तविषीरयुग्ध्वम्॥**

पद पाठः महिषासः। मायिनः। चित्रऽभानवः। गिरयः। न। स्वऽतवसः। रघुऽस्यदः। मृगाःऽइव। हस्तिनः। खादथ। वना। यत्। आरुणीषु। तविषीः। अयुग्ध्वम्॥







भावार्थः पानी र जमिनमा रहन सक्ने (उभयचर) रूप र गुणका मायावी सुन्दर अनौठो र चम्किलो देखिने वातावरण मैत्री सूक्ष्म जीवहरू जमिन र पानी दुबैमा रहेर आफू जुन ठाउँमा रहन्छ त्यही ठाउँमा व्यापक रङ्गिन कोलोनीको रूपमा रहन्छन्। जसले जङ्गल (जडीबुटी) र पत्थर आदिलाई टुक्राउने, तिनीहरूको अंशलाई एक रूप वाट अर्को रूपमा परिवर्तन गरी सार तत्व निकाल्ने गर्दछन्। संयुक्त रूपमा जुटेर निर्धारित स्व-धर्ममा नियमित लाग्ने सूक्ष्म जीवको समूहमा रहेर सहकार्य गर्ने गुणले तिनीहरू तीव्र गतिमा व्यापक तर प्रभावकारी क्षमतामा निर्धारित कार्य सम्पन्न गर्न सफल हुने गर्दछन्।

शब्दार्थः








महिषासः भैंसी जस्तै पानी र जमिनमा रमाउने वा रहन सक्ने उभयचर (amphibious) रुपी

मायिनः भ्रम दिन झुक्क्याउन पोख्त (Skilled in illusion) मायावी र धूर्त

चित्रऽभांनवः सुन्दर अनौठो प्रकाशको चमक युक्त

गिरयः उच्च स्थान जस्तै पहाडहरू र जमिन मा

नः मात्र होइन

स्वऽतंवसः आफ्नो आत्म शक्तिले वा स्व-धर्मले

रघुऽस्यदः तीव्र गतिमा चल्ने

मृगाःऽइंव : जनावरहरू (जस्तै मृगहरू) जस्तै क्षमता युक्त

हस्तिनः जनावरहरू (जस्तै हात्तीहरू) जस्तै विशाल










क्षमताको

खादथ : टुक्राउने र एक रूप वाट अर्को रूपमा परिवर्तन (चपाउने र खाने) गरी सार तत्व निकाल्ने

वनां: जङ्गलका वनस्पतिहरू

यत् : जहाँ जुन ठाउँमा रहन्छ त्यही ठाउँमा

आरुंणीषु: ताम्र (तामाको जस्तो) रातो रङ्गमा जम्मा भएर कोलोनीको रूपमा रहने (वातावरण मैत्री सूक्ष्म जीवको बारे भनिएको)

तविंषी: विशाल क्षेत्रमा फैलिएर बलवान शक्ति संयोजन गर्न

अयुंग्ध्वम् : संयुक्त रूपमा जुटेर आफ्नो कार्य सम्पन्न













गर्ने गर्दछन्।

चर्चा: आगोको ज्वाला जस्तो देखिने रातो पहेँलो ताम्र रङका वातावरणीय सूक्ष्म जीवहरू अत्यन्त धेरै सक्रिय रहेर बृहत् लाभकारी गतिविधिमा संलग्न हुने सूक्ष्म जीवहरू हुन्।

नोट: सूक्ष्म जीवहरू प्राकृतिक रूपमा हुने पिगमेन्टहरूको सबैभन्दा व्यापक समूह रहेकाले क्यारोटिनोइडको पूर्ति गर्ने स्रोतका रूपमा व्यापक रूपमा प्रयोग हुने गर्छन्। संरचनात्मक रूपमा हालसम्म ७५० भन्दा धेरै प्रकारका रातो पहेँलो वर्गमा पर्ने पहेँलो, सुन्तला र रातो रङका युकरीयोट र प्रोकारियोट प्रकृतिका सूक्ष्म जीवहरू भेटिएका छन्।











क्यारोटिनोइडहरूले सूक्ष्मजीवहरूको कोषिकालाई प्रकाशको किरणबाट हुने फोटोअक्सिडेटिब ड्यामेज वा क्षति हुनबाट जोगाउँछ। तिनीहरूको त्यही गुण पर्यावरण संरक्षण, खाना र पोषण, रोग नियन्त्रण, शक्तिशाली एन्टिमाइक्रोबियल एजेन्टहरूका रूपमा प्रयोग गर्न उपयोगमा आउने हुँदा यो अत्यन्त महत्वपूर्ण वा उपयोगी हुन गएको हो।

ऋग्वेदमन्त्र १.६४.८

**सिंहाइंव नानदति प्रचैंतसः पिशाइंव सुपिशौं**
**विश्ववैंदसः।**

**क्षपो जिन्वंन्तः पृषंतीभिर्ऋष्टिभिः समित्सबाधः**













**शवसाहिंमन्यवः ॥**

पद पाठः सिंहाःऽइंव। नानदति। प्रऽचैंतसः। पिशाःऽइंव। सुऽपिशः। विश्वऽवैंदसः। क्षपः। जिन्वंन्तः। पृषंतीभिः। ऋष्टिऽभिः। सम्। इत्। सऽबाधः। शवंसा। अहिंऽमन्यवः ॥

भावार्थः छाला र तन्तुहरूमा सङ्क्रमण गर्ने हानिकारक कीटाणुहरूको विरुद्ध ब्रह्म-चेतनाको निर्देशनमा चल्ने आत्मबल नियन्त्रित सचेत तथा जागरूक रोग प्रतिरोधी सूक्ष्म कण वरुण सम्पूर्ण रूपमा प्राकृतिक ज्ञानको नियन्त्रण विधि र तालिमले सुसज्जित रहेको तथा उपयुक्त हतियार (रोग प्रतिरोधात्मक कणहरू) आदिले समेत सु-सज्जित रहने गर्दछन्। विविध (रोग प्रतिरोधात्मक कणहरूको आपसी सहकार्यले दिने आत्मा बल









निर्देशित प्रचुर बलिष्ठताको उपयोगले वरुण शक्तिले शरीर भर जल मार्फत विस्तारित क्षेत्रमा फैलिएको रोग र समस्याहरू विरुद्ध संयुक्त शत्रु नाशक क्षमता (आत्मबल) को प्रयोगले विजय प्राप्त गरी जीवन्तताको कायम गर्ने गर्दछ।

शब्दार्थ:

सिंहाःऽइंव : सिंहहरूजस्तै बलवान र चलायमान जीवहरू (जनावर जस्तै तर सुक्ष्म) जस्तै लाग्ने रोग प्रतिरोधी कणहरू

नानदति : गर्जने र हर्षित आवाज दिने

प्रऽचेंतसः: आत्मबल नियन्त्रित सचेत तथा जागरूक

पिशाःऽइंवः मासुको तन्तुहरू खाएर छिया-छिया










पार्ने (मांसाहारीहरू जस्तै) शत्रु गुण (हानिकारक कीटाणु बारे कुरा गरिएको) विरुद्धको

सुऽपिशः :साहसी श्रेष्ठ बलशाली योद्धाहरू

विश्वऽवेंदसः: ब्रह्म-चेतनाको निर्देशनमा चल्ने (सर्वज्ञानी, सम्पूर्ण विषयको ज्ञाता)

क्षपः: रातको अन्धकारमा समेत

जिन्वंन्तः: जीवित रहेर कर्म गर्ने र विजय प्राप्त गर्ने

पृषंतीभिः: उपयुक्त धनुष बाण जस्ता तीक्ष्ण हतियारहरूले सज्जित (वरुण वा जल देवताको कुरा गरिएको)

ऋष्टिऽभिः: विधी, प्रक्रिया र उपायको ज्ञान रहेको











(यज्ञ मार्ग द्वारा सुसज्जित) धर्म मार्गको अनुसरण गर्ने

सम् : र त्यसको साथमा संयुक्त रूपमा

इत्:सहकार्य गर्ने (वास्तवमा समूहमानै सक्रिय रहेर)

सु॒ऽबाध॒: : त्यहाँ रहेको रोग र समस्याहरू सँग

शव॑सा: आफ्नो संयुक्त शत्रु नाशक क्षमताको बलले

अहिंऽमन्यव:: जेलिएर क्रोधित सर्प जस्तै लामो र विस्तारित क्षेत्रमा फैलिएको शत्रुहरूको क्रोध।

क्रिटिकल नोट: रक्तमा पाइने रोग प्रतिरोधात्मक













कणहरू (immune particles) अर्थात् प्रतिरक्षा कणहरू (immune particles) धेरै प्रकारका छन्। जस्तै एन्टिबडीहरू (Antibodies) प्रतिरक्षा प्रणालीले उत्पादन गर्ने प्रोटिनहरू हुन्, जसले शरीरलाई हानिकारक जीवाणु, भाइरस, र अन्य परजीवीहरूबाट सुरक्षा गर्छन्। मुख्य एन्टिबडीहरूमा IgA, IgG, IgM, IgE, IgD आदि पर्छन्। त्यसतै श्वेत रक्त कोषहरू (White Blood Cells or Leukocytes) रक्तमा पाइने अर्को खाले प्रतिरक्षा कणहरू हुन्, जसले शरीरलाई सङ्क्रमणबाट बचाउँछन्। श्वेत रक्त कोषहरू पनि विभिन्न प्रकारका छन्। जस्तै न्युट्रोफिल (Neutrophils) कणहरूले ब्याक्टेरिया लाई नष्ट गर्छन्। लिम्फोसाइट











(Lymphocytes) दुई प्रकारको हुन्छ। B-कोष (B-cells) जसले एन्टिबडी उत्पादन गर्छ। T-कोष (T-cells) जसले सङ्क्रमित क्षेत्रमा आक्रमण गर्छ। मोनोसाइट (Monocytes) हरू सङ्क्रमणसँग लड्ने ठुलो श्वेत रक्त कण हुन्। ईओसिनोफिल (Eosinophils) परजीवी र एलर्जी प्रतिक्रिया नियन्त्रणमा सक्रिय हुन्छ। बेसोफिल (Basophils) ले एलर्जी प्रतिक्रिया र दुख्ने सुन्निनेमा मद्दत गर्छ। साइटोकाइन (Cytokines) प्रतिरक्षा प्रणालीले उत्पादन गर्ने सन्देशवाहक अणुहरू हुन् जसले प्रतिरक्षा प्रतिक्रिया हरू बिच समन्वय गर्दछ। मैक्रोफेज (Macrophages) कणहरूले जीवाणु र मृत कक्षहरूलाई नष्ट गर्छन् र शरीरलाई सफा राख्छन्।













डेंड्राइटिक कोष (Dendritic Cells) रुपी कणहरूले रोग लगाउने जीवाणु कीटाणु र विषाणु हरू लाई समय मै चिन्न मद्दत गर्छन् र प्रतिरक्षा प्रणाली लाई सक्रिय गर्दछ। यसरी प्रतिरक्षा कणहरू (Immune particles) शरीरको प्रतिरक्षा प्रणालीको महत्त्वपूर्ण भागको रूपमा रहेर विभिन्न सङ्क्रमणहरूबाट शरीरलाई सुरक्षा दिन्छ।यस ऋचामा यिनै प्रकृतिका हेर्दा जीवित जस्तो देखिने तर ब्रह्माण्ड चेतना निर्देशित रहेर काम गर्ने यस्तै मरुत गण जस्तै गुणको प्रतिरक्षा कणको शरीरको जल पदार्थमा हुने गुण बारे चर्चा गर्दछ। जसलाई वरुण वा जल देवता भनिएको छ।

चर्चा: आगोको जस्तो अथवा रातो पहेंलो रङ्का सूक्ष्म जीवहरू वातावरणमा रहेका विषाक्त जैविक











पदार्थ हरूको विखण्डन गरी निर्मलीकरण गर्ने क्षमता राख्छन्। तिनीहरूको सक्रियताले वातावरणमा अत्यन्त प्रभावकारी जैविक सुरक्षाको स्थिति पैदा हुने गर्छ । जीव हरूमा जीवन सञ्चालनका नियमित क्रियाहरूमा अवरोध पैदा हुँदै गर्दा फोहोर जम्मा हुन जाने र त्यसै बाट संक्रामक रोगको विकास गर्ने मूल कारकका रूपमा रहेको अवरोधलाई तीर लगाइ दिएर रातो पहेंलो रङका सूक्ष्म जीवहरूले बिरामीलाई निको पार्ने क्षमता प्रदर्शन गर्छन्।

ऋग्वेद मन्त्र १.६४.९

**रोदंसी आ वंदता गणश्रियो नृषांचः शूराः**
**शवसाहिंमन्यवः।**













**आ वन्धुरेंष्वमतिर्न दंर्शता विद्युन्न तंस्थौ मरुतो रथेंषु**
**वः ॥**

पद पाठः रोदंसी इतिं। आ। वदत। गणऽश्रियः। नृऽसांचः। शूराः। शवंसा। अहिंऽमन्यवः। आ। वन्धुरेंषु। अमतिः। न। दर्शता। विद्युत्। न। तस्थौ। मरुतः। रथेंषु। वः ॥

भावार्थः मनोवैज्ञानिक र भौतिक संरचना बिचको आपसी प्राकृतिक सम्बन्ध कायम गर्न मरुत गण (वायुदेवका दूतहरू) आपसी असहयोग तथा प्रतिरोधको सामना गर्दै मनोवैज्ञानिक संरचनामा देखिने जडता लाई (न्युरो प्लास्टिसिटि स्थापित गर्न आइलाग्ने प्रत्यक्ष त अप्रत्यक्ष अवरोधहरू हटाउन)





रोक्न तिनीहरू बिचको प्राकृतिक सम्बन्ध कायम गर्न जरुरी हुने सूचना ब्रह्माण्ड चेतना मार्फत नियमित उपलब्धता गराइरहने गर्दछन्। जसबाट जीवन र गतिशीलताको नियमितताको सुनिश्चित हुने गर्दछ।

शब्दार्थ:

रोदसी इतिः आकाशीय (मनोवैज्ञानिक) र भौतिक (पार्थिव शरीर) दुई संरचना / संसार

आ : बिचको आपसी प्राकृतिक सम्बन्ध कायम गर्न

वदत : प्रस्ट संसर्ग र सहकार्यको निश्चय गर्न (घोषणा गर्न Declare)











गणऽश्रियः गण प्रमुखहरू

नृऽसाचः वीर नायक योद्धाहरूको

शूराः साहसी र बलशाली (बहादुर)

शवसा : शक्ति केन्द्र रूपमा

अहिंऽमन्यवः सर्प जस्ता क्रोधी शत्रुहरूको (न्युरल नेटवर्क स्थापना गर्न भन्ने सन्दर्भ मा)

आ : सम्मुख सामना गर्न भिड्न (न्युरो प्लास्टिसिटि स्थापित गर्न र त्यसको अवरोध हटाउन भन्ने सन्दर्भ को)

वन्धुरेषु : कठिन परिस्थितिहरूमा संरक्षण लिएर लुक्ने सुरक्षित स्थानहरूमा (संरचनागत जडताको अबस्था)





अमतिः बेवास्ता तथा असहयोग जस्ता जडता

न : मात्र होइन

दर्शता : प्रस्ट देखिने

विद्युत् : उज्याला चम्किला

न : नरहेका

तस्थौ : स्थिर र रोकिएका (जडता)

मरुतः मरुत गण (वायुदेवका दूतहरू)

रथेषु : रथ रुपी सवारीहरूमा रहने (सूचना ब्रह्माण्ड चेतना मार्फत नियमित उपलब्धता गराइ रहने) गर्दछन्

वः जीवको रक्षाको खातिर

क्रिटिकल नोटः न्यूरोप्लास्टिसिटीको समयमा









न्युरोनहरू विशेष तरिकाले जोडिने र छुट्टिने जस्ता जडान र पुनर्संरचना मार्फत गुज्रने गर्दछन्। त्यसो हुँदा त्यहाँ नयाँ सिनाप्सहरू (कनेक्सनहरू) बन्ने र विद्यमान कनेक्सनहरू झन् बलियो भएर सुदृढ हुन्छ। यसो हुँदा न्युरोनहरू सिनाप्समा जोडिन पुग्दछ जसले एक न्युरोनको एक्सन अर्को न्युरोनको डेनड्राइटसँग जोडिन पाउँछ। यसरी न्यूरोप्लास्टिसिटीको क्रममा सिनाप्टिक शक्ति बढ्न वा घट्न सक्छ। त्यो भनेको त्यसले नयाँ सिकाइ र स्मरण शक्ति विकासमा मद्दत पुऱ्याउँछ। यसरी नयाँ सिनाप्सहरूको सिर्जना (सिनाप्टोजेनेसिस) हुँदा न्युरोनहरू बिच अधिक सञ्चार गर्ने अवसर मिल्दछ। त्यसबाट न्युरोनहरू एकसाथ सक्रिय हुन सक्दा तिनीहरू बिचको जडान झन् बलियो हुन्छ। यसरी











हुन पुगेको डेनड्राइटहरूको वृद्धि र एक्सनल स्प्राउटिंगले नयाँ कनेक्सनहरू सिर्जना गर्न सक्दछ। विशेष गरी चोट पटक लागेको तन्तुको सुधारमा होस् वा नयाँ सिकाइका क्रममा यस्तो कार्यात्मक न्यूरोप्लास्टिसिटी अधिक महत्त्वपूर्ण हुन्छ। किनकि यसो हुन पाउँदा मस्तिष्कका सम्पूर्ण नेटवर्कहरू पुनः संरचित हुन पाउने गर्दछ जसले व्यक्तिको सिकाइ, स्मरण शक्ति र आफ्नो अनुकूल हुने गरी मस्तिष्कको क्षमतालाई बलियो बनाउन सहयोग पुग्दछ।

मानसिक शरीर (Mental Body) र भौतिक शरीर (Physical Body) बिचको सञ्चार मस्तिष्क र स्नायु प्रणालीद्वारा हुन्छ। मानसिक













शरीरले विचार, भावना र चेतनाको स्तरमा काम गर्छ। त्यसले मस्तिष्कमा रासायनिक र विद्युत् सङ्केतहरू उत्पन्न गर्छ। यी सङ्केतहरू स्नायु प्रणालीको माध्यमबाट शरीरका विभिन्न अङ्गहरूमा सञ्चार हुन्छन्। जसले भौतिक प्रतिक्रियाहरू जस्तै हार्मोनको स्राव, मुटुको गति वा मांसपेशीहरूको गतिविधि नियन्त्रण गर्छ। यसरी, मानसिक र भौतिक शरीरले एक अर्कासँग निरन्तर संवाद गर्छन्। जसले मानसिक अवस्थाहरूले शारीरिक स्वास्थ्यमा असर पार्न सक्छ र शारीरिक अवस्थाहरूले मानसिक प्रतिक्रियाहरूलाई प्रभावित गर्न सक्छ। यसरी मानसिक शरीर (Mental Body) र भौतिक शरीर (Physical Body) बिचको सञ्चार मा प्रष्टता थप्न मस्तिष्क र स्नायु











प्रणाली सञ्चालनमा प्राकृतिक नियमको पालनको अधिक जरुरत हुने गर्दछ। सो हुन नसक्दा कफ, पित्त र वात असन्तुलन कायम हुने गर्दछ। त्यसको सन्तुलनको लागि जरुरी हुने सूचना ब्रह्माण्ड स्मरण (चेतना) संग सुरक्षित रहन्छ। जसको आपूर्ति गर्ने काम मूलतः मरुत हरुको हुने गर्दछ।

आयुर्वेदमा, कफ, पित्त र वात शरीरका तीन प्रमुख दोषहरू हुन्। मानसिक र शारीरिक शरीरको सन्तुलनमा तीन प्रमुख दोषहरूको सन्तुलनको महत्त्वपूर्ण भूमिका रहन्छ। जब यी दोषहरूको असन्तुलन हुन्छ, मानसिक र शारीरिक शरीर बिचको सञ्चार प्रभावित हुन्छ। जस्तै वात दोषको असन्तुलनले अत्यधिक चिन्ता, तनाव र विचारहरूमा अस्थिरता उत्पन्न गर्छ। जसले स्नायु













प्रणालीलाई प्रभावित गर्छ र शरीरमा थकान, अनिद्रा, वा जोर्नी दुखाइ जस्ता समस्या ल्याउँछ। पित्त दोषको असन्तुलनले क्रोध, अधीरता र अत्यधिक प्रतिस्पर्धात्मक भावना पैदा गर्छ। जसले पाचन, छाला र रगतमा समस्या निम्त्याउँछ। कफ दोषको असन्तुलनले आलस्य, मानसिक थकान र भावनात्मक जडता ल्याउँछ। जसले शारीरिक रूपमा मोटोपन, श्लेषमा (Thick Mucus, Less liquid) अधिक बन्ने र आलस्य पैदा गर्न सक्छ। शरीरका तीन प्रमुख दोषहरूको असन्तुलनले यसरी मानसिक र शारीरिक शरीरको समन्वयमा अवरोध ल्याएर समस्या उत्पन्न गर्छ। यसको समाधानको लागि ब्रह्माण्ड चेतना मार्फत वरुण (जल देवता) र मरुत (वायु देवता) मार्फत





ब्रह्माण्ड चेतनाको सूचना हाम्रो चेतनाले प्राप्त गर्दछ। जुन आत्मबल मार्फत मस्तिष्कले प्राप्त गर्दछ। जसले गर्दा शरीरले आफूले आफ्नै स्व-उपचार गर्ने हिलिङ्ग विधि नियमित सुचारु रहने गर्दछ।

चर्चा: अधिक संख्याको समुहगत सहकार्यको शक्ति, निरन्तरको सक्रिय क्रियाशीलता, लाभ दायक प्रकृति मैत्री कार्य उन्मुख गतिविधि आदिका कारण सकारात्मक सूक्ष्म जीवहरू तथा कणहरु पूरा ब्रह्माण्डमा आधिपत्य जमाउन सफल रहेर सम्पूर्ण ब्रह्माण्ड, त्यसको गतिशीलता र जीवितता सुचारु रहने क्रमको सुनिश्चितता हुन पुगेको छ।





ऋग्वेद मन्त्र १.६४.१०

**वि॒श्ववे॑दसो र॒यिभिः॒ समो॑कसः॒**

**संमि॑श्लासु॒स्तवि॑षीभिर्वि॑र॒प्शिनः॑।**

**अस्ता॑र॒ इषुं॑ दधिरे॒ गभ॑स्त्योरन॒न्तशु॑ष्मा॒ वृष॑खादयो॒ नरः॑ ॥**

पद पाठः वि॒श्वऽवे॑दसः। र॒यिऽभिः॑। सम्ऽओ॑कसः। सम्ऽमि॑श्लासः। तवि॑षीभिः। वि॒ऽर॒प्शिनः॑। अस्ता॑रः। इषु॑म्। द॒धि॒रे॒। गभ॑स्त्योः। अ॒न॒न्तऽशु॑ष्माः। वृष॑ऽखादयः। नरः॑॥

भावार्थ: मरुत गणले सूर्यका किरणहरूमा सङ्कलित ब्रह्माण्ड चेतनाका कोडको डिकोड गरी (ब्रह्माण्ड चेतना सँगको आफ्नो पहुँच मार्फत) नियमित







रूपमा आफूले सच्चाउन जरुरत रहेको लक्ष सच्याउन जरुरी हुने विधि, प्रक्रिया र उपायको प्रस्ट सूचना प्राप्त गर्दछ। जसले तिनीहरू लाई समान आवासहरूमा एकीकृत रहेर विभिन्न समूहमा सर्वत्र छरिएर प्रकृति नियम सङ्गत कार्य गराउने नियामक भूमिका खेल्ने असीम शक्ति र अनन्त बल युक्त धार्मिक प्रतीक रुपी नायक र वीर योद्धाको रूपमा स्थापित गराएको छ।

शब्दार्थ:

वि॒श्वऽवेदसः सम्पूर्ण विश्व ज्ञान जान्ने (ब्रह्माण्ड चेतनामा पहुँच भएको सम्पर्क सूत्र)

र॒यिऽभिः उत्तम सम्पत्तिहरू (ज्ञान) को धनी

सम्ऽओकसः समान आवासहरूमा एकीकृत रहेर













समूहमा रहने

सम्ऽमिश्लासः आपसमा मिलेर रहने र सहकार्य गर्ने

तविषीभिः शक्तिशाली र बलवान समूहहरूमा

वि॒ऽर॒प्शिनः विभक्त रहेर सर्वत्र उपलब्ध भएर छरिने

अस्तारः सर्वत्र विस्तार भई फैलिएको

इषुम् : जरुरतको तारोमा प्रस्ट लक्ष गरी त्यसलाई सच्चाउने खुबी युक्त बाण अस्त्र

द॒धि॒रे : धारण गरी स्थापित बनेको

गभस्त्योः सूर्यका किरणहरूमा सङ्कलित ब्रह्माण्ड चेतनाको कोडको डिकोड गरी कार्य गर्ने चेतना









बोकेको

अनन्तऽशुंष्माः असीम शक्ति र अनन्त बल ग्रहण गर्ने क्षमता युक्त

वृषंऽखादयः बलवान शक्तिको धार्मिक प्रतीक रुपी नायक (यहाँ वृषभ शब्द बलिष्ठ साँढे भन्दा अलि फरक प्रसङ्गमा आएको छ)

नरः वीर योद्धाहरू (प्रकृति नियम सङ्गत कार्य गराउने नियामक भूमिकाका मरुत गणको अर्थमा)

चर्चाः बृहत् कनसोर्टियम बनाएर समूहमा कार्यरत रहने सूक्ष्म जीवहरू समूहमा रहेर एकै लयमा ध्वनी भूत भई लयाबद्ध मिलेको आवाज जस्तै गतिविधि सञ्चालन गर्ने गर्दछन।

नियमित रूपमा सक्रिय र जोसिलो रहेर जीवनमा











प्रकृति मैत्री सकारात्मकता ल्याउने, सुरक्षा प्रदान गर्ने यी सूक्ष्म कण रुपी मरुतहरु समृद्ध समाजका कुशल स्वास्थ्य र न्याय प्रदायक एजेन्टको भूमिकामा रहेका छन्।

ऋग्वेदमन्त्र १.६४.११

**हिरण्ययेभिः पुविभिः पयोवृध उज्जिघ्नन्त**
**आपथ्यो३’ न पर्वतान्।**
**मखा अयासः स्वसृतो ध्रुवच्युतो दुध्रकृतो मरुतो**
**भ्राजंदृष्टयः॥**

पद पाठः हिरण्ययेभिः। पुविऽभिः। पयःऽवृधः। उत्। जिघ्नन्ते। आऽपथ्यः। न। पर्वतान्। मखाः। अयासः। स्वऽसृतः। ध्रुवऽच्युतः। दुध्रऽकृतः।





मरुतः । भ्राजंत्ऽऋष्टयः ॥

भावार्थः अशुद्धता शुद्ध गरी पवित्र गर्ने वा अपूर्णता लाई पूर्ण गरी लयमा ल्याउने कार्य सम्पन्न गर्ने; विपरीत वा अनुपयुक्त बाटोले निर्माण गरेका ठुला र विषम बाधा अड्चन तथा रोग व्याधहरू आफ्नो स्वधर्म कर्म मानी आफ्नै तरिकाले र स्वेच्छाले अत्यन्त सहज रूपमा नाश वा समाप्त गरी पूर्ण लयमा ल्याउने कार्य नियमित गर्ने मरुतगण अत्यन्त सम्भ्रान्त र मूल्यवान् दृष्टि युक्त ज्ञानले परिपूर्ण रहेर अटल र अविचल रूपमा आफ्नो कर्म पुरा गर्न दृढ सङ्कल्परत रहने गर्दछन् ।

शब्दार्थः

हिरण्ययेभिः अत्यन्त सम्भ्रान्त र मूल्यवान् (सुन





जस्तो बहुमूल्य Vlue Added)

पुविऽभिः अशुद्धता शुद्ध गरी पवित्र गर्ने वा अपूर्णताको पूर्ण गरी लयमा ल्याउने कार्य

पयःऽवृधः संवृद्ध गर्ने वा त्यसको पोषण गर्ने (दूध जस्तै)

उत् : त्यसको साथ साथै

जीघ्नन्तेः नाश वा समाप्त गर्ने

आऽपुथ्यः विपरीत वा अनुपयुक्त बाटोको

न : मात्र होइन

पर्वतान् : ठुला र विषम बाधाहरू (समस्याका पहाडहरू) हटाउने

मुखाः मूल कार्य / कर्म गर्ने (यज्ञकर्ता)



अ॒यासः॑ अत्यन्त सहज रूपमा

स्व॒ऽसृतः॑ आफ्नो नियमित कार्यको रूपमा आफ्नै तरिकाले स्वेच्छाले (स्वधर्म अनुरूप)

ध्रु॒व॒ऽच्युतः॑ अविचल रहेर सम्पन्न गर्ने

दु॒ध्र॒ऽकृतः॑ दृढ सङ्कल्प रुपी अटल निर्णय लिएर रहने

म॒रुतः॑ मरुतगण रुपी वायु देवताहरूको समूह

भ्राज॑त्ऽऋष्टयः अत्यन्त प्रकाशमय, तेजपूर्ण र चम्किला दृष्टियुक्त (ज्ञानले भरिपूर्ण) छन्।

चर्चाः सूक्ष्म कणहरूको अगाध प्रकृति मैत्री पर्यावरणिय र वातावरणीय प्रेम, विश्वास, सिर्जनशीलता एवं दृढ कर्मनिष्ठताको स्वर्णिम रथ








युक्त क्रियाशीलता प्रकृति मैत्री परिस्थितिको निर्माणका लागि सहजीकरण गर्न प्रभावकारी हुने गर्दछ।

नोटः पछिल्लो समयमा वातावरणमा उच्च स्थानमा बस्ने जीवाणुहरू बर्सात गराउनका लागि जिम्मेवार रहने वैज्ञानिक प्रमाण भेटिएको छ । वैज्ञानिकहरूको अनुसन्धानमा ब्याक्टेरियाले उनीहरूको वरिपरि बरफको गठनलाई बढावा दिन्छन् र वायुमण्डलमा उच्च आकारको बादल उत्पन्न गर्छ। उच्च स्थानमा विकसित हुँदै गरेको अत्यधिक चार्ज बाट ब्याक्टेरियामा आन्तरिक अस्त व्यस्तता पैदा हुन पुग्दा ब्याक्टेरियाका प्रोटिनहरू चार्ज हुन गई सक्रिय बन्छ। जसरी डर लाग्दा मानिसको छालामा काँडाहरू उठ्ने गर्छ, त्यस्तै उक्त










गतिविधिले ब्याक्टेरियामा समेत त्यसको प्रोटिन उत्प्रेरित भई काँडा जस्तो झुसका रूपमा बाहिर निस्कन्छ। उक्त झुसे प्रोटिनहरू सन्तुलित हुन आफ्ना वरिपरि रहेको पानीको बाफ सँग टाँसिने र साझेदार प्रोटिनहरूमा फ्युज हुने वा मिल्ने कार्य नियमित दोहरिन पुग्दछ। उक्त क्रममा पानीको मलिकुल बीच विकसित हुने अन्तक्रिरया उनीहरू एकापसमा घुलनशील भएर पानीको ठूलो थोपा र बरफका रूपमा विकसित हुँदै बादल बन्ने हदसम्मको परिस्थितिको विकास हुने वैज्ञानिक अनुसन्धानको निचोड भेटिन्छ।

ऋग्वेदमन्त्र १.६४.१२

**घृषुँ पावकं वनिनं विचंर्षणिं रुद्रस्यं सूनुं हवसां**

**गृणीमसि।**













**रजस्तुरँ तवसं मारुंतं गणमृंजीषिणं वृषंणं सश्चत**

**श्रिये॥**

पद पाठः घृषुंम्। पावकम्। वनिनंम्। विऽचंर्षणिम्। रुद्रस्यं। सूनुम्। हवसां। गृणीमसि। रजःऽतुरंम्। तवसंम्। मारुंतम्। गणम्। ऋजीषिणंम्। वृषंणम्। सश्चत। श्रिये॥

भावार्थः तीव्र गतिको धर्षणले रगड्ने, अग्नि ऊर्जाको ध्वंस र भर्गो ज्योतिको ज्ञानले शुद्ध पार्ने, जडीबुटी र मिनिरल्सको सार तत्व मार्फत जीवन्त शक्ति थपी जीवनको नियमितता थप्ने जस्ता हरेक कर्म गर्न जरुरी हुने कार्य कुशलतामा आवश्यक पर्ने बुद्धिमत्ताको सर्वत्र सर्वव्यापी उपलब्धता रहने अवस्थाको मरुत गणले सुनिश्चित गर्दछ। शिवको रुद्र रूपको सदैव सच्चा धर्म मार्गमा हिंड्ने







सन्तानहरूको रूपमा रहेका मरुतगण सदैव समृद्ध कोलोनीको बलवान, वीर्यमान तथा शक्तिशाली कर्म जीवी समूह हरूमा सङ्गठित रहेर सर्वत्र हर दम सक्रिय रहने गर्दछन्। प्राकृतिक नियम विरुद्ध चलेका गतिविधिलाई प्रकृतिको नियम सङ्गत गर्ने (पाप मुक्त गर्ने र न्याय मार्ग प्रशस्त गर्ने) र ब्रह्माण्डका गतिविधिहरू सम्पन्न हुने क्रममा प्राकृतिक नियम पालन रहे नरहेको मूल्याङ्कन गरी नियमन गर्ने उत्तराधिकारीको रूपमा यिनीहरू हरेक क्षण क्रियाशील रहने गर्दछन्।

शब्दार्थ:

घृषुंम् : तीव्र गतिमा चल्दा हुने धर्षणका कारण रगडिने











पावकम् : अग्नि (ऊर्जा) र ज्वलन्त उज्यालो प्रकाशले (भर्गो ज्योति वा ज्ञान) शुद्ध पार्ने

वनिनंम् : वनमा रहने जीव तथा वनस्पति (वन देवता) वाट प्राप्त हुने सार तत्व

विऽचंर्षणिम् : हरेक कार्य कुशलताको लागि जरुरी हुने बुद्धिमत्ताको सर्वत्र सर्वव्यापी उपलब्धताको सुनिश्चित गर्ने

रुद्रस्यं : शिवको रुद्र रूपका सन्तानहरू

सूनुम् : उत्तराधिकारी (प्राकृतिक नियम पालन रहे नरहेको मूल्याङ्कन गरी नियमन गर्ने)

हवसां : जब जरुरत पर्दछ त्यही समय र स्थानमा (हवन आह्वान गर्ने, आहुति दिने समय)







गृणीमसी : सहज उपलब्ध हुने (स्तुति, प्रशंसा गर्ने र खुसीले गाउने)

रजःऽतुरम् : प्राकृतिक नियम विरुद्ध चलेका गतिविधिलाई प्रकृतिको नियम सङ्गत गर्ने (पाप मुक्त गर्ने र न्याय मार्ग प्रशस्त गर्ने)

तवसम् : शक्तिशाली, बलवान कर्म जीवी

मारुतम् : मरुतगण (वायुका देवता)

गणम् : समूहहरूको समुदायमा रहेर

ऋजीषिणम् : सिधा, सच्चा मार्गमा हिंड्ने

वृषणम् : बलवान, वीर्यमान तथा शक्तिशाली

सश्चत : सङ्गठित र समृद्ध कोलोनीको विशाल समूह










श्रिये : समृद्धिका र न्यायको उपलब्धताको लागि लगनशील हुन्छन्।

चर्चा: रोगका मूल सूक्ष्म कारकहरू विनाश गर्ने र खुसी ल्याउने संस्कार बोकेका प्रकृतिमा अस्तित्वमा रहेका हरेक जीवनको रक्षा कवच बनिरहेका सूक्ष्म जीवहरू ती जीवन सँगै संगीत र प्रार्थना जस्तै समानार्थी सह-अस्तित्वमा छन्।

नोट: कलाका विभिन्न रूपमा संगीतलाई सबैभन्दा अमूर्त र अल्पकालीन कलाको रूप मानिन्छ। संगीतलाईहामी देख्न सक्दैनौँ। आफ्नो हातले छुन वा समात्न पनि सक्दैनौँ। तर पनि यसले हामीलाई हामी भित्र र संसारभरि काम गरिरहेको महसुस दिलाउँछ। एक ईश्वरीय उपस्थिति यदि संसारमा छ भने त्यस्तै रूपमा रहेको हुनुपर्छ। त्यसैले त पूजाको





समयको आराधना वा योगको समयको संगीत एक शब्द हीन प्रार्थनाका रूपमा हाम्रा कल्पनाहरू लाई जीवनको ईश्वरीय शक्तिको स्रोत सँग जोड्न सहयोग गरिरहेको हुन्छ। हाम्रो परम्पराले संगीतलाई प्रार्थनाको एक रूप ठान्छ। पूजा (वा योग) र प्रार्थना (वा आराधना) हाम्रा आध्यात्मिक सिंहासन सँग सँगै जोडिएर रहने दुई खुट्टाका रूपमा हमेसा अस्तित्वमा रहे। एकले अर्कालाई परस्परमा सहयोग गर्दै संगीत र प्रार्थना यथार्थमा समानार्थी एउटै विषयरहेको अनुभूति दिलाउन सफल बने।

माइक्रोबायोमहरू जस्तै हमेसा बृहत् कनसोर्टियम बनाएर समूहमा कार्यरत रहने संसारमा अस्तित्वमा रहेका मरुत गणहरूको गतिविधिलाई लिपिबद्ध गरी जोडेर हेर्दा संगीतको विभिन्न ध्वनि मिलेर एक





मनमोहक मेलोडीको निर्माण गरे जस्तै क्वान्टम वेब फङ्सन रुपी ऊर्जाको रूपमा हुने मरुत गणले समेत आफ्नो गणको कम्पन ऊर्जा फरक फरक गणको कम्पन ऊर्जा संग शक्तिशाली हार्मोनी बन्ने गरी बलिष्ठ मेलोडी निर्माण गरी आफ्नो कर्म सम्पन्न गर्ने गरेको देखिन्छ।

हालै वैज्ञानिकहरू मानव माइक्रोबायोमहरू जम्मा गरी त्यसलाई एक मेलोडीका रूपमा संगीतबद्ध गराएर प्रस्तुत गर्न सफल बनेपछि भविष्यमा हाम्रो शरीरबाट आउने माइक्रोबायोम हरूको आवाजमध्ये हामीलाई लाभकारी हुने माइक्रोबायोमको मेलोडीबाट हानि गर्ने माइक्रोबायोमको मेलोडी छुट्याएर शरीरको आवाज मात्र सुनेका भरमा कुन रोगाणुको संक्रमण भएको हो भनी छुट्याउन सकिने







हुन सक्छ कि भनेर वैज्ञानिकहरू उत्साह पूर्वक अन्वेषण र परीक्षणमा लागिरहेका छन्। अर्को कुरा, विज्ञानले नै मिठास युक्त सांगीतिक वातावरणमा सूक्ष्म जीवहरूको वृद्धि र सक्रियता अत्यन्त प्रभावकारी रहने समेत प्रमाणित गरि सकेको छ।

ऋग्वेदमन्त्र १.६४.१३

**प्र नू स मर्तः शवसा जनाँ अति तस्थौ व ऊती मरुतो यमावत।**

**अर्वद्भिर्वाजं भरते धना नृभिरापृच्छ्यं क्रतुमा क्षेति पुष्यति॥**

पद पाठ : प्र। नु। सः। मर्तः। शवसा। जनान्। अति। तस्थौ। वः। ऊती। मरुतः। यम्। आवत। अर्वत्ऽभिः। वाजम्। भरते। धना। नृऽभिः।





॥ श्री गणेशाय नमः ॥







आऽपृच्छ्यम्। क्रतुम्। आ। क्षेति। पुष्यति॥

भावार्थः पृथ्वी लोकका मरणशील प्राणीहरूको रक्षात्मक सहायताको लागि जरुरत पर्ने ब्रह्माण्ड चेतनाको सूचना, दैवी तागत (पोषण) र दैवी शक्तिको उपलब्धता गर्न मरुत गणको (वायु देवता) गतिशील र प्रभावकारी भूमिका हुन्छ। जसले प्राकृतिक नियमको सिद्धान्त अनुरूप त्यसको रक्षा नियन्त्रण र रक्षा नियमनको अभिभारा लिने गर्दछ। सर्वत्र सङ्गठित र लयबद्ध रूपमा आफ्नो स्वधर्म अनुरूप सक्रिय अस्तित्वमा रहेर काम गर्ने सूचना, उपाय र शक्तिले सुसज्जित मरुत गण प्राकृतिक सन्तुलनको पुनर्स्थापनाको लागि जति वेला जुन कर्म सम्पन्न हुन जरुरत पर्दछ त्यति नै





॥ श्री गणेशाय नमः ॥





वेला त्यहाँ सो को परिपूर्ति गर्न तीव्र सुधार गर्ने दैवी कारक शक्तिको रूपमा उपलब्ध हुने गर्दछ।

शब्दार्थ:

प्र (pra): पूर्ण रूपमा अग्रसर हुने

नु (nu): जब जरुरत हुन्छ तव तत्काल

सः (saḥ):त्यो चिज

मर्तः (martaḥ): पृथ्वीमा बाँच्ने मरणशील प्राणी

शवसा (śavasā):प्रभावकारी वायु शक्ति

जनान् (janān): गतिशील जीव वा कणहरू

अति (ati): सबै सीमाहरूलाई पार गरी अगाडि बढ्ने क्षमता बोकेको










तस्थौ (tasthau): सर्वत्र नियमित नियमन कर्ताको रूपमा (प्राकृतिक नियममा बाँधिएर) उपस्थित रहिरहने

वः (vaḥ): पृथ्वीमा रहेका मरणशील प्राणीहरूको

ऊती (ūtī): संरक्षण, समर्थन र सहायता गर्ने दैवी वा प्राकृतिक रक्षात्मक कार्य

मरुतः (marutaḥ): मरुत गण (वायु देवता)

यम् (yam): प्राकृतिक नियम अनुरूप नियन्त्रण गर्ने र वशमा पार्ने अभिभारा लिने

आवत (āvat): सदैव उपलब्ध हुने

अर्वत् (arvat):प्राकृतिक सन्तुलन पुनर्स्थापना गर्नको लागि घोडा जस्तो तीव्र गतिको सुधारको









कारक

भिः (bhiḥ): सङ्गठित रूपमा लयबद्ध रूपमा आफ्नो स्वधर्म अनुरूप काम गर्ने

वाजम् (vājam): जरुरत अनुसार कार्य सम्पन्न गर्न जरुरत हुने तागत (पोषण) र शक्ति (यहाँ शक्ति भनेर ब्रह्माण्ड चेतनाको सूचना लाई अधिक महत्त्व दिएको छ)।

भरते (bharate):: परिपूर्ति गर्दछ

धना (dhanā): बहुमूल्य श्रोत र साधनले सुसज्जित (सूचना, उपाय र शक्ति)

नृभिः (nṛbhiḥ): कार्यान्वयन गर्ने कुराहरूको नेतृत्व लिने









आपृच्छ्यम् (āpṛcchyam): सूचनाको उपलब्धता (परामर्श गर्ने) गराउने तथा कार्य सञ्चालनमा सहजीकरण गर्ने

क्रतु (kratu): योजना बनाउन र योजना कार्यान्वयन गर्ने दृढ सङ्कल्प र क्षमता बोकेको

आ (ā): लक्ष प्राप्ति गर्न दिशामा

क्षेति (kṣeti): सङ्कल्प कृत रहन्छ

पुष्यति (puṣyati): त्यसलाई सुदृढ गर्न र स्थायित्व गर्न भूमिका खेल्दछ।

चर्चा: पृथ्वी लोकका मरणशील प्राणीहरूको समयोचित सुरक्षा र अस्तित्वको नियमितता कायम गर्न दैवी शक्तिको भूमिका हुने गर्दछ।










ऋग्वेदमन्त्र १.६४.१४

**चर्कृत्यं मरुतः पृत्सु दुष्टरं द्युमन्तं शुष्मं मघवत्सु धत्तन।**

**धनस्पृतमुक्थ्यं विश्वचर्षणिं तोकं पुष्येम तनयं शतं हिमाः॥**

पद पाठः चर्कृत्यम्। मरुतः। पृत्ऽसु। दुस्तरम्। द्युऽमन्तम्। शुष्मम्। मघवत्ऽसु। धत्तन। धनऽस्पृतम्। उक्थ्यम्। विश्वऽचर्षणिम्। तोकम्। पुष्येम। तनयम्। शतम्। हिमाः॥

भावार्थः अव्यक्त को व्यक्त हुने आत्मा चाहत पूर्ति गर्ने भूमिकामा रहेका मरुत गण सो क्रममा देखिने प्रकृति मैत्री र अमैत्री गतिविधि बिचको प्रतिद्वन्द्व













(दुबिधा) लाई अपराजेय रूपमा पार लगाउने क्वान्टम वेब फङ्गसन रुपी सूक्ष्म वायु ऊर्जाको बलशाली दैवी ज्ञान (भर्गो ज्योति) तागतको समेत प्रतिनिधिको भूमिकामा रहने गर्दछन्। ब्रह्माण्ड चेतनाको उत्तराधिकारी, उदार र दानशील आनन्द प्रदायक गुणका अविरल अस्तित्वमा रहने प्रकृति पुत्र मरुत गणहरू हिउँले ढाकिएको विशाल रूपको अस्तित्व जस्तै गरी ब्रह्माण्डको गर्भमा लुकेको अस्तित्व रूपको व्यक्तताको पालन पोषण र संवृद्धि प्रदायक रूपमा समेत रहेर अत्यन्त प्रशंसा र स्तुति योग्य बनेका छन्।

शब्दार्थः

चर्कृत्यम् (charkṛtyam): अव्यक्त को व्यक्त हुने चाहना (आत्मा चाहत बल)





मरुतः (marutaḥ): मरुत गण (वायु देवता)

पृत्सु (pṛtsu): प्रकृति मैत्री र अमैत्री गतिविधि बिचको प्रतिद्वन्द्वीहरू बिचको लडाई (दुबिधा)

दुस्तरम् (dustaram): अपराजेय (पार लगाउन गाह्रो, कठिन कार्य)

द्युमन्तम् (dyumantam): पार लगाउने दैवी ज्ञान (भर्गो ज्योति)

शुष्मम् (śuṣmam): क्वान्टम वेब फङ्सन रुपी सूक्ष्म वायु ऊर्जाको बलशाली तागतको

मघवत्सु (maghavatsu): दानशील र उदार श्रोत

धत्तन (dhattana): प्रदान गर्ने क्षमताको





धनऽस्पृतम् (dhanaspṛtam): आनन्द प्रदायक गुणको धनी

उक्थ्यम् (ukthyam): अत्यन्त प्रशंसा र स्तुति योग्य

विश्वऽचर्षणिम् (viśva-carṣaṇim): विश्व विजयी तागतको (ब्रह्माण्ड चेतनाको)

तोकम् (tokam): उत्तराधिकारी रूपको प्रतिनिधि

पुष्येम (puṣyema): पालनपोषण र संवृद्धि प्रदायक

तनयम् (tanayam): प्रकृति पुत्र

शतम् (śatam): अविरल अस्तित्वमा रहने



(चिरञ्जीवी)

हिमाः (himāḥ): हिउँले ढाकिएको विशाल रूपको अस्तित्व जस्तै लुकेको वा ब्रह्माण्डको गर्भमा रहेको अस्तित्व रूपको

चर्चा: मरुत गण रुपी सूक्ष्म कणहरूको भूमिकाको समयोचित सदुपयोग गर्न सफल मानिसहरू जीवनका हरेक पक्षका लडाइँमा अजेय बन्छन्। वैभव, समृद्धिका साथै दीर्घायु प्राप्त गर्न सक्ने छन्।

ऋग्वेदमन्त्र १.६४.१५

**नू ष्ठिरं मरुतो वीरवन्तमृतीषाहं रयिमस्मासु धत्त।**

**सहस्रिणं शतिनं शूशुवांसं प्रातर्मक्षू**











**धियावसुर्जगम्यात्॥**

पद पाठः नु। स्थिरम्। मरुतः। वीरऽवन्तम्। ऋतिऽसहम्। रयिम्। अस्मासु। धत्त। सहस्रिणम्। शतिनम्। शूशुऽवांसम्। प्रातः। मक्षु। धियाऽवसुः। जगम्यात्॥

भावार्थः जीवको सुरक्षा र अस्तित्व रक्षाको लागि प्रकृति मैत्री ज्ञान र उपायको सदुपयोग गरी जहाँ जब जे कुराको जरुरत हुन्छ त्यहाँ त्यही समयमा उक्त कुराको अभाव पूर्ति गरी प्राकृतिक नियम अनुसार चलेर समस्याको सामना गर्ने वीर, साहसी, बलशाली र सामर्थ्यवान् दीर्घजीवी प्राकृतिक सम्पत्ति (ज्ञान र शक्तिको श्रोत) को रूपमा मरुत गण (वायु देवता) को अनगिन्ती र विशाल सङ्ख्यामा निरन्तर सक्रिय रहने गर्दछ। नियमित गतिशील





कर्म यात्रामा रहने प्रशंसा र सम्मान योग्य गुणका मरुत गणहरू ब्रह्माण्ड चेतना वाट ज्ञान र उपाय प्राप्त गर्ने र जरुरत अनुरूप सुधारात्मक कर्मको प्रारम्भ गर्ने र त्यसलाई प्रभावकारी रूपमा तत्काल सम्पन्न गर्ने गर्दछन्।

शब्दार्थ:

नु (nu): जहाँ जब जे कुराको जरुरत हुन्छ त्यहाँ त्यही समयमा उक्त कुराको अभाव पूर्ति गरी

स्थिरम् (sthiram): दृढ, अडिग अस्तित्वमा भेटिने

मरुतः (marutaḥ): मरुत गण (वायु देवता)

वीरऽवन्तम् (vīra-vantam): वीर, साहसी, बलशाली र सामर्थ्यवान्









ऋतिऽसहम् (ṛti-saham): प्राकृतिक नियम अनुसार चलेर समस्याको सामना गर्ने

रयिम् (rayim): प्राकृतिक सम्पत्ति (ज्ञान र शक्तिको श्रोत)

अस्मासु (asmāsu): जीवको सुरक्षा र अस्तित्व रक्षाको लागि

धत्त (dhatta): नियमित उपलब्ध रहन्छ

सहस्रिणम् (sahasriṇam): अनगिन्ती र विशाल गणको सङ्ख्यामा

शतिनम् (śatinam): दीर्घजीवी र निरन्तर सक्रिय

शूशुऽवांसम् (śūśu-vānsam): तिर्सना बोकेको प्रशंसा र सम्मान योग्य





प्रातः (prātaḥ): कर्मको प्रारम्भ गर्ने

मक्षु (makṣu): प्रभावकारी रूपमा तत्काल सम्पन्न गर्ने

धियाऽवसुः (dhiyā-vasuḥ): ब्रह्माण्ड चेतना वाट ज्ञान र उपाय प्राप्त गर्ने

जगम्यात् (jagamyāt): नियमित गतिशील कर्म यात्रामा रहने गुणका हुन्छन्।

चर्चा: टिकाउ प्रकृतिको साधन र स्रोतले भरपुर पर्यावरण तथा मानव संसाधनलाई अति प्रशंसा गर्न योग्य, बुद्धि, विद्या र पुरुषार्थ युक्त वैभवशाली र संवृद्धताको कारक मरुत गण हरूको महत्व, तागत र व्यावहारिक उपयोगिता बारे समझको प्राप्ति मानवीय कल्याणमा अत्यन्त प्रभावकारी रहने छ।





# वेदमा पर्यावरणीय सूक्ष्म जीव विज्ञान

परीक्षण बाट प्राप्त गरेको नतिजाका आधारमा विज्ञानमा वैज्ञानिकहरूले सिद्धान्त प्रतिपादन गर्दछन। विज्ञानमा जुन कुराहरू प्राकृतिक नियमको सिद्धान्त भनिएको छ वेदमा त्यसलाई धर्म भनी व्याख्या भएको भेटिन्छ।

जब तपाईं गहिरो सोचमा पुगेर विषयवस्तुको गहिरो अनुभूतिमार्फत कुनै सिद्धान्तको प्रतिपादन गर्नुहुन्छ, त्यसलाई संख्या तथा सैद्धान्तिक रूपमा सत्य रहेको प्रमाणित गर्नुहुन्छ, तब त्यो तपाईंको हाइपोथेसिस वा परिकल्पना बन्छ। जब उक्त हाइपोथेसिस







परीक्षणबाट प्रमाणित गर्नुहुन्छ तब त्यो प्रमाणित वैज्ञानिक तथ्यका रूपमा स्विकारिन्छ ।समयक्रममा जब उक्त हाइपोथेसिस आंशिक सत्य रहेको अनुभूति हुन्छ पुन नयाँ सिद्धान्त बन्छ । पुनः प्रमाणित गरिन्छ। सत्य भनिएको पुरानो कुरालाई नयाँ सत्यले प्रतिस्थापन गर्छ । मतलब हामी सत्य होइन, आंशिक सत्यको पहिचान गर्दै पूर्ण सत्यको बाटोमा विज्ञानमार्फत अत्यन्त धीमा गतिमा अघि बढिरहेका हुन्छौ।

वैदिक ज्ञानको सन्दर्भमा गहिरो अनुभूतिमार्फत गहिरो सोचमा पुगेर प्राप्त गरिएको ज्ञानका आधारमा बनेको विषयवस्तुको परिकल्पनालाई प्राकृतिक नियमको सिद्धान्तसँग तौलिएर प्रतिपादित भएका ज्ञानलाई श्रुति भनिन्छ । श्रुतिहरू वास्तविक













यथार्थको निचोड रहेको सन्दर्भको कसीमा सत्य साबित भएका सिद्धान्तका संग्रह हुन्। आजको विज्ञानको भाषामा भन्दा वेदका हरेक श्रुति परम्परागत रूपमा पुष्टि भएर संग्रह गरिएका प्राकृतिक सिद्धान्तका संग्रह हुन् । मानिसको परम्परागत क्षमता, उपलब्ध स्रोतसाधन र ज्ञान प्रवाहको तरिका आधुनिक वैज्ञानिक समयको काइदासँग नितान्त फरक रहेकाले आज परम्परागत विषय विज्ञताका प्राकृतिक सिद्धान्तका वैज्ञानिक संग्रहहरू पुनः व्याख्या वा उत्थाको जरुरत बनेको छ। जसका लागि वेदमा भनिए जस्तै सम्बन्धित क्षेत्रका विषयविज्ञ तथा अनुभवी, बहुआयामिक समग्रतामा बुझ्ने क्षमतावान् व्यक्तिहरूले अनुसन्धान, प्रयोगात्मक परीक्षण र यकिनको जरुरत











पर्छ ।

कुनै पनि समाज त्यतिबेला छिन्नभिन्न र अस्तव्यस्त हुने गर्छ जब त्यहाँका रैथाने ज्ञान, विधि, प्रविधि, साधन र स्रोतको उपयोगको सम्भावनालाई निमिट्यान्न पार्न सकिन्छ। जसका लागि एकातर्फ मुलुकको संस्कृतिलाई समाजमा सम्भव नहुने आकर्षक नारा सहितको राजनीतिक मुद्दा लैजाने क्रममा ध्वस्त गर्ने र मिडियाबाजी मार्फत आयातित संस्कृति तर्फ जनआकर्षण बढाउन भूमिका खेल्ने तरिका अँगालिन्छ । जुन नेपालको हालको मौजुदा अवस्था हो ।

आज हाम्रो समाज दुवैतर्फ धारिलो धार रहेको खुकुरीको चपेटामा परेका छ। आफ्नै परम्परा र रैथाने ज्ञान प्रविधिको सामान्य सुझबुझ र अध्ययन













विना आफ्नै परम्परा र रैथाने ज्ञान प्रविधिको नाममा हाम्रा युवामा पुगेको सन्देशले युवामा चरम घृणा पैदा गरिदिने अबस्था विकाश गरिदिएको छ।

अर्को तर्फ राज्य शक्ति द्वारा अप्रत्यक्ष रूपमा पालित पोषित सङ्गठित भूमिगत गिरोह वेद र विज्ञानका यथार्थ विद्या समाजको शिक्षित वर्गसम्म समेत जानबाट रोक्न परिचालित देखिन्छ ।

यस्तो परिस्थितिमा देशभक्त र मुलुकको हितका लागि आफ्नो समय खर्चनु आफ्नो कर्तव्य ठान्ने वर्गहरू संगठित बनी वेदमा विज्ञानका जस्ता अवधारणा समाजको हरेक कित्तामा पु¥याउन निकै ढिलो भएको छ।

त्यसै सन्दर्भमा वेदमा विज्ञान नेपाली समुदायका





हरेक व्यक्तित्व सम्म पुगोस् भनी यसको लेखन कार्य गरिएको हो।

शुक्ल यजुर्वेद मन्त्र १७.१

**अश्मन्नूर्जं पर्वते**
**शिश्रियाणामद्भ्यऽओषधीभ्योवनस्पतिभ्योऽअधि**
**सम्भृतं पयः।**

**तां नऽइषमूर्जं धत्त मरुतः सꣳरराणाऽअश्मꣳस्ते क्षुन्**
**मयि तऽऊर्ग्यं द्विष्मस्तं ते शुगृच्छतु ॥१ ॥**

पदपाठः अश्मन्। ऊर्जम् ।पर्वते। शिश्रियाणाम्। अद्भ्य इत्यत्ऽभ्यः। ओषधीभ्यः। वनस्पतिभ्य इतिवनस्पतिऽभ्यः अधि। सम्भृतमिति सम्ऽभृतम्। पयः। ताम्। नः। इषम्। ऊर्जम् ।धत्त। मरुतः।





सꣳरराणा इतिसम्ऽरराणाः। अश्मन्। ते। क्षुत्। मयि। ते। ऊर्क्। यम्। द्विष्मः। तम्। ते ।शुक्। ऋच्छतु ॥१ ॥

भावार्थः जमिन र पत्थरमा रहेको सूक्ष्म ऊर्जा (क्वान्टमइनर्जी) सूचना र चेतनाको रूपमा पानीमा सुरक्षित भएर वनस्पति तथा सूक्ष्म तत्वमा (जस्तैः मिनिरल्स, फाईटो केमिकल्स, फ्लेभोनोइड आदि) औषधीय गुणको (प्रकृति र शरीरका चलायमान भागहरूलाई प्रकृति मैत्री गरेर आपसी सहज सन्तुलन कायम गर्ने गुण) रूपमा सुरक्षित हुने गर्दछ। वनस्पतिमा यसरी सङ्कलित सूचना र ऊर्जा त्यसको रस, दूध, गन्ध वा अन्य अंश रूपको सार तत्त्व मार्फत आत्मबलरुपी ऊर्जा निर्माणमा भूमिका







खेल्दछ। मरुत अर्थात् वायु, हावा, जल, वाष्प बादल आदि जस्ता प्राकृतिकदिव्य शक्तिले जमिन र पत्थरमा रहेको सूक्ष्म ऊर्जालाई भोक निवारण, रोग निवारण र शारीरिक तागत निर्माणको आवश्यकता पूर्ति गर्ने औषधीय र पोषण गुण (सुचना र इन्टेलीजेन्स) पानी, श्वास, बिरुवा आदि मार्फत खानाको रूपमा सञ्चय गर्न मद्दत गर्दछ। यसरी निर्मित आत्म बल (जुन रोग प्रतिरोधी क्षमता संग समेत सम्बन्धित छ), श्वास र पोषण ऊर्जाजव हाम्रो शरीरमा पुग्दछ, त्यसको सार तत्त्व बाट शरीर निर्माण र सञ्चालन हुन्छ।हावा, पानी र खाना प्रशोधनको क्रममा उपयोग हुन नसकेको र शरीरको लागि अनुपयोगी तत्त्व (मल, मूत्र, पसिना, हावा, मिनिरल्स, केमिकल आदिको रूपमा) शरीरले त्याग













गर्दछ।

सामान्य शब्द अर्थ : अश्मन् (ashman) - stone, rock | पत्थर ; ऊर्जम् (ūrjam) - energy, strength | ऊर्जा; पर्वते (parvate)- in the mountains | पर्वतमा; शिश्रियाणाम (śiśriyāṇām) - protecting, sheltering | सुरक्षा गर्ने; अद्भ्यः (adbhyah)- from waters| पानीबाट; ओषधीभ्यः (oṣadhibhyah) - from herbs| औषधिबाट; वनस्पतिभ्यः (vanaspatibhyah) - from trees, plants| वनस्पतिबाट; अधि (adhi) - above, over | माथि; सम्भृतम् (sambhṛtam) - collected, gathered | सङ्कलित; पयः











(payaḥ) - milk, essence | दूध, सार (सार तत्त्व); ताम् (tām) - that | त्यो; नः (naḥ) - to us, for us | हामीलाई; इषम् (iṣam) - desire, wish| इच्छा; ऊर्जम् (ūrjam) - energy, strength| ऊर्जा; धत्त (dhatta) - give, grant | दिनुहोस्; मरुतः (marutah)- winds, Maruts (Vedic gods of wind)| मरुतहरू (हावा / जल वाष्प); संरराणाः (saṃrarāṇāḥ) - aiding, assisting| मद्दत गर्ने; अश्मंन् (ashman) - stone, rock | पत्थर; ते (te) - your | तिम्रो; क्षुन् (kṣun) - hunger | भोक; मयि (mayi)- in me,for me | म मा; ऊर्ग्यम् (ūrgyam) - great strength | ठुलो शक्ति; द्विष्मः (dviṣmaḥ) -













to hate, we hate | हामी घृणा गर्छौं; तं (tam) - that | त्यो | ते (te) - your| तिम्रो; शुगृच्छतु (śugṛcchatu) - may heaccept| स्वीकार गरुन् |

थप व्याख्या: मरुतहरू हावाका कणको गुणरूपी (क्वान्टम वेब फङ्क्शनरूपी वेब र कण दुवैको चित्रित देखाउने सूक्ष्म जीव तथा परा कण) जलिरहेको धूपकोसुगन्धजस्तै सर्वत्र व्यापक रूपमा फैलन सक्षम, गुणयुक्त सूक्ष्म कण र सूक्ष्मजीव रूपी शक्ति हुन्। परोपकारी (इनर्जीको थैली - Energy Quanta) मरुतहरूबाटहामीलाई पहरा जस्ता कठोर लाग्ने चट्टान, पहाड, र जमिनहरू समेत नियमित गतिमाचलायमान विद्युतीय ऊर्जा र चुम्बकीय ऊर्जा निर्मित कम्पन शक्तिको स्रोतको







रूपकासंरचना बन्न सकेका हुन्। तिनीहरूले जम्मा गरेको प्राकृतिक चेतना (इन्टेलिजेन्स) कम्पन मार्फत सूचनाको रूपमा हामीलाई उपलब्ध हुन्छ। तिनै पहाडहरूलाई विखण्डन गरी निस्किएका खनिज लगायत विविध जैविक सार तत्व युक्त तरल पदार्थ माटोमा उपलब्ध गराउनेकार्य पनि समूहमा निरन्तर कार्यरत रहने मरुतले गर्ने गर्दछ।

चट्टानहरूमा अन्तर्निहित प्राकृतिक चेतना (इन्टेलिजेन्स) दैवी मरुत शक्तिको कारण जैविक यौगिकहरूको रूपमा माटो र पानीमा चुहिन सम्भव भएकोले माटो र पानीमा रहेको प्राकृतिक (इन्टेलिजेन्स) चेतनाले उर्वरशक्ति निर्माण गर्न सम्भव तुल्याउँछ। माटो र पानीको उक्त उर्वर शक्तिको उपयोग बाट वनस्पति पोषण तथा








औषधीय गुण तत्वले समृद्ध द्रव्यहरू (खाद्य तथा औषधी) निर्माण रसञ्चय गर्न सक्षम बन्दछन्। प्राकृतिक चेतना (इन्टेलिजेन्स) र सूचना हाम्रो शरीरमा सहज उपलब्ध हुने अवस्थामा पोषण तत्त्व र औषधीय गुणले समृद्ध जल तथा खाना बन्ने गर्छन्। बोट बिरुवाले प्रकाश, हावा, पानी, र जमिनको सारतत्वको संयोजन गरी निर्माण गरी, आफू र सम्पूर्ण चराचरहरूको लागि निर्माण गरिदिएको उक्त हिलिङ्ग खाद्यको सार तत्त्व खाना, जनावरको दूध, अण्डा, मासु आदिको पोषण द्रव्य (खाद्य तथा औषधी) बन्छन्। यसरी सम्भव बनेका द्रव्यहरू (खाद्य तथा औषधी) बाट प्राणीका शरीरले उपयोगी सारतत्व लिने र अनुपयोगी पदार्थहरू मलका रूपमा फोहोरमा छुट्टाएर शरीर बाहिर त्याग










गर्ने गर्छन्। यो चक्र वातावरण मैत्री बन्न सक्दा समग्रब्रह्माण्डको लागि पनि मैत्री चक्रको रूपमा स्थापित हुन सक्छ।

शुक्ल यजुर्वेद मन्त्र १७.२

**इमा मेंऽअग्नऽइष्टका धेनवः सन्त्वेका च दश च दश च शतं च शतं च सहस्रं च सहस्रं चायुतंचायुतं च नियुतं च नियुतं च प्रयुतं चार्बुदं च न्यर्बुदं चसमुद्रश्च मध्यं चान्तश्च परार्द्धश्चैता मेंऽअग्नऽइष्टका धेनवः सन्त्वमुत्रामुष्मिँल्लोके ॥२ ॥**

पदपाठः इमाः। मे। अग्ने।इष्टकाः। धेनवः। सन्तु। एका। च। दश। च। दश। च। शतम्। च। शतम्। च।सहस्रम्। च। सहस्रम्। च। अयुतम्। च। अयुतम्। च। नियुतमितिंनिऽयुतम्। च। नियुतमिति













निऽयुतम्। च। प्रयुतमिति प्रऽयुतम्। च। अर्बुदम्।च। न्यर्बुदमिति निऽअर्बुदम्। च। समुद्रः। च। मध्यम्। च। अन्तः। च।परार्द्धः। च। एताः। मे। अग्ने। इष्टकाः। धेनवः। सन्तु। अमुत्र।अमुष्मिन्। लोके ॥२ ॥

भावार्थः जसरी पृथ्वीमा (धेनवः) अन्तर्निहित प्राकृतिक चेतना समृद्ध द्रव्यहरू (खाद्य तथा औषधी) को रूपमा परिवर्तन हुन्छ त्यस्तै तिनै प्राकृतिक चेतनशक्ति अग्निको (प्रकाश, किरण, ताप, इलेक्ट्रो म्याग्नेटिक गुण, क्वान्टम वेब फङ्सन आदि) शक्तिलाई एक रूप वाट अर्को रूपमा परिवर्तन गर्ने खुबीका कारण चिसो, तातो, वर्षा र हावा आदिवाट मानिसको जीवको रक्षा गर्न सक्षम परिस्थिति युक्त लोकको निर्माण भएको छ।











त्यसकोलागि भू-लोकमा गन्न नै नसकिने असङ्ख्यसूक्ष्म कण निर्मित सञ्जाल (क्वान्टम वेब फङ्सन) सक्रिय रहेको छ।

सामान्य अर्थ: इमा (imaa):These यी; मे (me): My मेरा; अग्ने (agne): O Agni (fire god) हे अग्नि; इष्टका (ishtikaa):Desired, cherished प्रिय, चाहेको; धेनवः (dhenavah):Cows गाईहरू, Earth (पृथ्वी), Wealth धन,Nourishment or sustenance पोषण वा खाद्य पदार्थ; सन्तु (santu):May they be हुन् ; एका (eka): One एक; च (cha): And र; दश (dasha):Ten दस; दश (dasha):Ten दस; च (cha): And र; शतम्













(shatam): Hundred सय; च (cha): And र; सहस्रम् (sahasram):Thousand हजार; च (cha): And र; अयुतम् (ayutam): Ten thousand दस हजार; च (cha): And र; नियुतम् (niyutam): Hundred thousand एक लाख; च (cha): And र; प्रयुतम् (prayutam): Million दस लाख, च (cha): And र; अर्बुदम् (arbudam): Ten million एक करोड; च (cha): And र; न्यर्बुदम् (nyarbudam): Hundred million दस करोड; च (cha): And र; समुद्र (samudra): Ocean समुद्र; च (cha): And र; मध्य (madhya): Middle बीचमा; च (cha): And र; अन्तः (antah): End अन्त; च











(cha): And र; परार्ध (paraardha): Beyond half आधाभन्दा पर; च (cha): And र, एता (etaa): These यी; मे (me): My मेरा; अग्ने (agne): O Agni हे अग्नि; इष्टका (ishtikaa):Desired, cherished प्रिय, चाहेको; धे॒नवः (dhenavah):Cows गाईहरू; सन्तु (santu):May they be हुन्; अमत्र (amutra):There, in that world; त्यहाँ, त्यो लोकमा ; अमुष्मिन (amushmin): In that त्यसमा; लोके (loke): World लोकमा ।

व्यख्या: सूक्ष्म कणहरूमा अन्तर्निहित अग्नि ऊर्जाकाकारण (Quantum Mechanical Energy) सूक्ष्म कणहरू सक्रिय रहने गर्छन् ।













सूक्ष्म कणहरूजीवन मैत्री वातावरण निर्माणकाआधारभूत इश्तक अर्थात् इँटहरू (QuantumParticles) हुन् । एकविशाल समुद्रमा हुने पानीको थोपाको संख्या जस्तै सूक्ष्म कणहरू चायुतम (चायुतमगुणा चायुतमै) गुणा नियुतम (नियुतम गुणा नियुतमै) गुणा प्रयुतम (प्रयुतम गुणाअर्भुधमै) गुणा अर्भुधम (अर्भुधम गुणा अर्भुधमै) अर्थात् असंख्य संख्यामा रहन्छन् ।यी सूक्ष्म कणहरूले समग्र देखिने अदृश्य ब्रह्माण्ड तथा जीवको रक्षा गर्ने (Energy to Sustain) सक्षम लोकको रुपमा (धे॒नवः) परिवर्तन गरिदिएका छन्। जसरि गाईको दूधले (धे॒नवः) हामीलाई स्व-हिलिङ्गको तागत दिने गर्दछ त्यसरी नै सम्पूर्ण ब्रह्माण्ड लाइप्राकृतिक नियमको





सिधान्त अनुरुप परिचालन गर्ने ब्रहमाण्डिय आत्मा बल अर्थात् आधार शक्ति (Universal Quantum FieldEnergy) तिनै सदैव सक्रिय तरंगको रुपमा चलायमान रहने सूक्ष्म कणहरूले उपलब्ध गराइरहेका छन्।

(Vedic Calculation: Ten tens ieshatams=100. Shatam shatams to sahasram makes a sahasra 100 times hundred ie10000. 10000 times 10000 is called an Ayutam equals 100000000 i.e.108. Ayutam times Ayutams became 1016 called Niyutam. Niyutam timesNiyutam becomes Prayutam 1032 . Then









Arbudam is 1064 .Then Nyarbudam is 10128 . Then Nyarbudam times Nyarbudam becomesSamudrashch i.e. 10256. Vedic rishi is counting up to 256 zeros after unity to suggest the infinite, which is the enormity of numbers of micro-energy and organisms involved.)

शुक्ल यजुर्वेद मन्त्र १७.३

**ऋतवं स्थऽऋतावृधंऽऋतुष्ठा स्थंऽऋतावृधः।**

**घृतश्च्युतो मधुश्च्युतो विराजो**
**नामंकामदुघाऽअक्षीयमाणाः ॥३ ॥**

पदपाठः ऋतवः। स्थ ।ऋतावृधः। ऋतवृध











इत्यृंत॒ऽवृधः॑। ऋ॒तु॒ष्ठाः। ऋ॒तु॒स्था इत्यृंतु॒ऽस्थाः।स्थ। ऋ॒ता॒वृधः॑। ऋ॒त॒वृ॒ध इत्यृंत॒ऽवृधः॑। घृ॒त॒श्चु॒त इतिं घृ॒त॒ऽश्चुतः॑।म॒धु॒श्चु॒त इतिं मधु॒ऽश्चुतः॑। वि॒रा॒ज॒ इतिं वि॒ऽराजः॑। नाम॑। का॒म॒दु॒घा॒इतिं का॒म॒दुघा॑। अक्षीं॑यमाणाः ॥३ ॥

भावार्थः (वरुण र अग्निको समग्र भूमिका बारे प्रस्ट गर्ने क्रममा ऋचा भन्दछ) प्राकृतिक वा ब्रह्माण्डीय क्रम व्यवस्थाको अवधिहरू, ऋतुहरू, चक्रहरूलाई निश्चित रूपमा स्थिर तथा अटल कायम राख्दै प्राकृतिक गुण मैत्री ऋतु चक्रहरू स्थापित गर्न तथा वर्तमानको स्थापित अवस्थाको व्यवस्थापन र प्रवर्द्धक गर्न थोपा थोपामा चुहिरहेको घ्यु जस्तै शुद्ध, उज्वल अनि चुहिरहेको महले बनाउने जस्तो वेब फङ्गसन रुपी दिव्य किरणको नियमितको चलाय













मान डोरो युक्त सदैव नियमित गतिमा रहने परा कणहरूले अविचलरूपमा सदैव प्रकट र उर्वर अस्तित्वमा रहन चाहने प्रकृतिको निरन्तरको इच्छा पूरा गर्नेगर्दछ।

सामान्य अर्थः ऋ॒तवं - Seasons, Cycles, Periods of Order प्राकृतिक वा ब्रह्माण्डीय व्यवस्था वा क्रमको अवधिहरू, चक्रहरू, ऋतुहरू ; स्थ – Situated, Stable, Fixed, Standing, स्थित, स्थिर, अटल, उभिएको; ऋ॒ता॒वृध॑ - ऋतु वृद्धि, व्यवस्था Enhances or Increase the order of seasons; ऋ॒तु॒ष्ठा - प्राकृतिक क्रमसँग मिल्दो जुल्दो चक्रहरूमा स्थापित ऋतु Establishedseasons cycles











aligning with natural order; स्थं – वर्तमानको अबस्थामा – Present Standing; ऋतावृधः व्यवस्थाको प्रवर्द्धक Promoter of the order of seasons; घृतश्चुतौं - बगेर थोपा थोपामा चुहिरहेको घिउजस्तै Alike a flowing and dripping ghee drops; मधुश्चुतौं - चुहिरहेको महले थोपा जस्तो वेब फङ्सन रुपी A web functions structure like a flowing ofdripping honey; विराजो–दिप्तिमान, शुद्ध र उज्वल Radiant, Pure and Brilliant; नामं - नाम Named; कामदुघा -इच्छा पूरा गर्ने Fulfilling desires;अक्षींयमाणाः - क्षीण नहुने Never diminishing.













व्याख्या: मरुत वा सूक्ष्म जीवहरू कार्बोहाइड्रेट, चिल्लो आदि जस्ता पोषण तत्व लगायतका अन्य सारतत्व प्राकृतिक रूपमा प्रचुर मात्रामा उपलब्ध गराउने संस्थागत दिगो स्रोतका रूपमा रहेका हुन्छन्। मौसम अनुरूप केही परिवर्तन हुने गरी नियमित तथा स्थायी रूपमा विभिन्न वनस्पति तथा जडीबुटीको सारतत्वयुक्त पदार्थ वाजैविक अवयवहरू उपलब्ध गराउने संस्थागत स्रोतका रूपमा मरुत शक्तिको उपस्थिति रहन्छ।

संज्ञानात्मक रूपमा बताउँदा एक कामधेनु नामक ईश्वरीय गुणको प्रतीकका रूपमा लिइने गाई जसले आफ्नो नित्य जीविकाका लागि जरुरत पर्ने विषयवस्तु फलका रूपमा प्राप्तगर्न जब कर्म मार्फत प्रार्थना गरिन्छ तब पूरा गरिदिन्छ। उदाहरणको











लागि प्रकृति अर्थात कामधेनु गाई (वेदमा प्रकृति लाई काम धेनु गाई भनिएको छ। मृत्यु लोकमा कामधेनु गाईको भूमिका पृथ्वीले खेल्ने वेदको मान्यता छ।) जस्तै सम्पूर्ण जीव र निर्जीव अस्तित्व (ब्रह्माण्डको, पृथ्वीको र सम्पूर्ण जीवहरूको) नित्य अस्तित्व कायम गर्न र जीविकाका लागि जरुरत पर्ने समग्र उर्जाको चेतन शक्ति लाई परा शक्तिमा परिवर्तन गर्दै आपूर्ति गर्ने स्थिर र संस्थागत स्रोतका रूपमा मरुत र सूक्ष्म जीवहरू अस्तित्वमा रहेर सक्रिय रहनेगर्दछन। उक्त अव्यक्त पराशक्ति व्यक्त अपरा शक्तिमा परिवर्तन हुन समेत अग्नि र मरुतको संयुक्त भूमिका हुने गर्दछ।

शुक्ल यजुर्वेद मन्त्र १७.४

**समुद्रस्य त्वावंकयाग्ने परिंव्ययामसि।**













**पावकोऽअस्मभ्यंः शिवो भंव ॥४॥**

पदपाठः समुद्रस्यं। त्वा। अवंकया। अग्नें। परिं।व्ययामसि। पावकः। अस्मभ्यंम्। शिवः। भव ॥४॥

भावार्थः अत्यन्त विशाल र गहिरो जल तथा वाष्पभागमा समेत निवास गर्ने कल्याणकारी शिवको सेना रुपी तपाईँ सूक्ष्म जीव तथा परा कणरुपी मरुतगण तथा कोमल चमक वा उज्यालो भएको (भर्गो ज्योति युक्त) तेजस्वी प्रकाशको किरण उत्पन्न गर्ने अग्निको सहकार्य मार्फत हामी वरपर हामीलाई अँगालेर राखेको हाम्रो समग्र पर्यावरण र वासस्थानको संवर्द्धन र सुरक्षा सम्भव भएको छ।











शब्द अर्थ: समुद्रस्य (samudrasya) - of theocean समुद्रको, Of the vast expanse with deep depth अत्यन्त विशाल र गहिरो जल र वाष्प भाग; त्वा (tvā) –you तपाइँ; अवकय (avakaya) – kindling अर्पण, Guarding or Shelter वासस्थान र सुरक्षा; अग्ने (agne) - O Agni (Fire God) हे अग्नि; परिव्ययामसि (parivyayāmasi) – Encircle to us हामी वरपर, Surround (orembrace) us हामीलाई अँगालेर; पावकः (pāvakaḥ) Fire आगो as the purifier पवित्र गर्ने, Radiant तेजस्वी प्रकाशकोकिरण उत्पन्न गर्ने, Lustrous कोमल चमक वा उज्यालो भएको, Bright चम्किरहेको; अस्मभ्यं













(asmabhyam) - On Behalf of to us, तर्फ वाट हामीलाई; शिवः (śivaḥ) कल्याणकारी शिवको (अर्थ - तपाइँ सूक्ष्म जीव तथा परा कण रुपी मरुतगण तर्फ संकेत भएको); भव (bhava) - be हुनु हुन्छ।

व्याख्या: सूक्ष्मजीव र परा कणरूपी मरुतहरू संसारको हितका लागि सक्रिय हुने गर्छन् । यी सूक्ष्म जीव मरुतहरूले महासागरमा रहेका प्रदूषक पदार्थहरूलाई साना साना टुक्रामा विभाजन गरी पानीको स्रोतलाई सफा र शुद्ध पार्छन्। ब्रह्माण्डको शुद्धताका लागि, यी मरुतहरूको कामले प्रदूषक पदार्थहरू लाई सफा गर्ने र शुद्ध पानीलाई बादलमा परिवर्तन गर्ने कार्य गर्छ, जसले जमिन र पानीमा बस्ने सम्पूर्ण जीवनलाई सहज बनाउँछ।









महासागरको दबाबका कारण खनिजमा परिवर्तन भएका मुगाजस्ता जीवबाट बनेका कोरल कार्बोनेटले हाम्रो भोजनमा एन्टिअक्सिडेन्ट, पोषण, र खनिज पूरकको निर्माणमा सहयोग गर्छन्। खाना र औषधीय सारतत्त्वयुक्त भूमिगत जीव र वनस्पतिहरूले खाना रऔषधिको स्रोतलाई सारतत्त्वमा परिवर्तन गर्दा पर्यावरणीय व्यवस्थापनमा समेत योगदान पुऱ्याउँछन्।

शुक्लयजुर्वेद मन्त्र १७.५

**हिमस्यंत्वा जरायुणाग्ने परिंव्ययामसि।**

**पावकोऽअस्मभ्यंः शिवो भंव ॥५॥**

पदपाठः हिमस्यं। त्वा। जरायुंणा। अग्ने। परिं। व्ययामसि। पावकः। अस्मभ्यंम्।शिवः। भव ॥५॥










भावार्थः हिमालयको बरफ, हिउँको शीत, बरफको चिसो ऑस आदिमा निवास गर्ने कल्याणकारी शिवको सेना रुपी तपाईं सूक्ष्म जीव तथा परा कण रुपी मरुतगण तथा कोमल चमक वा उज्यालो भएको (भर्गो ज्योतियुक्त) तेजस्वी प्रकाशको किरण उत्पन्न गर्ने अग्निको सहकार्य मार्फत हामी वरपर हामीलाई अँगालेर राखेको हाम्रो समग्र पर्यावरण र वासस्थानको (पृथ्वीको रक्षा गर्न) सम्पूर्ण पर्यावरणको गर्भको आवरण वा झिल्लीको भूमिका खेल्ने गर्दछन्। जसले उक्त पर्यावरणीय गर्भ विकासमा आवश्यक हुने ऊर्जाको पोषण र सुरक्षा गर्दै वातावरणको स्वास्थ्य तथादीर्घकालीन संरक्षणमा महत्त्वपूर्ण भूमिका खेल्दछन्।

शब्द अर्थः हिमस्य (himasya) – हिमालयको











हिउँको शीत बरफ को चिसो ऑोस Cold dew and frost from the snow; त्वा (tvā)you तपाइँ; जरायुणा (jarāyuṇā) – गर्भपात्र (गर्भको रक्षा गर्ने आवरणवा झिल्ली, जसले गर्भको विकासको लागि आवश्यक पोषण र सुरक्षा दिन्छ।) by the membrane (placenta-like covering); अग्ने (agne) - O Agni(Fire God) हे अग्नि; परिव्ययामसि (parivyayāmasi) – Encircle to us हामी वरपर, Surround (orembrace) us हामीलाई अँगालेर; पावकः (pāvakaḥ) Fire आगो as the purifier पवित्र गर्ने, Radiant तेजस्वी प्रकाशको किरण उत्पन्न गर्ने, Lustrous कोमल चमक वाउज्यालो भएको,













Bright चम्किरहेको; अस्मभ्यं (asmabhyam) - On Behalf of to us, तर्फ वाट हामीलाई; शिवः (śivaḥ) कल्याणकारी शिवको (अर्थ - तपाइँ सूक्ष्मजीव तथा परा कण रुपी मरुतगण तर्फ संकेत भएको); भव (bhava) - be हुनु हुन्छ।

व्याख्या: हिमालयको बरफले पृथ्वीको वरिपरिको वातावरणलाई नियमित गर्न, पारिस्थितिकी तन्त्रलाईसमर्थन गर्न, ताजा पानीको स्रोत प्रदान गर्न, र प्राकृतिक प्रकोपहरूको न्यूनीकरण गर्न महत्त्वपूर्ण भूमिका खेल्छ। यी सबै कार्यहरू पृथ्वीको पारिस्थितिक सन्तुलन कायम राख्न र वातावरणको संरक्षण गर्न अत्यावश्यक छन्। हिमालयका हिमनदीहरू र हिउँको पग्लिएको पानीले पृथ्वीका सबैभन्दा महत्त्वपूर्ण नदी










प्रणालीहरू लाई पोषण दिन्छ, जसले करोडौं मानिसहरूको जीवन यापन, कृषि र उद्योगलाई समर्थन गर्छ। यसले प्रदूषित पानीको सफाई, माटोको उर्वरता कायम राख्न, र जैविक विविधताको संरक्षणमा सहयोग पुऱ्याउँछ। हिमालयको बरफ र हिम नदीहरूले खनिज र पोषक तत्वहरू पनि प्रदान गर्छन्, जसले कृषि भूमि र प्राकृतिक वनस्पतिलाई पोषण दिन्छ। यी पोषक तत्वहरू माटोको स्वास्थ्य र उत्पादन क्षमतालाई कायम राख्न अत्यावश्यक छन्।

यसकारण, हिमालयको बरफ र हिमनदीहरू पृथ्वीको रक्षा गर्ने सम्पूर्ण पर्यावरणको गर्भको आवरण वा झिल्लीको भूमिकामा रहेका छन्, जसले उक्त पर्यावरणीय गर्भको विकासका लागि












आवश्यक पोषण र सुरक्षा दिन्छन् र वातावरणको स्वास्थ्य तथा दीर्घ कालीन संरक्षणका लागि महत्त्वपूर्ण भूमिका खेल्छन्। समग्र प्राणीको कल्याणका लागि सूक्ष्म जीव तथा परा कण रुपी मरुतगणहरूले फोहोर पदार्थलाई विखण्डन गर्ने, प्रदूषणमा रहने प्रदूषकहरू कायम रहन जरुरी हुने तत्वहरूको उपलब्धता निषेध गरी दूषितता हटाउन र लामो समयमा नष्ट गरिदिने गर्छन्। जस्तै: लामो समयमा हिउँ भित्र गहिरो गरी गाडिएर रहँदा विभिन्न बिखालु प्रदूषणको बिखालुपन निर्मलीकरण हुन र विषाक्तता नष्ट हुनसम्भव बन्छ।

शुक्ल यजुर्वेद मन्त्र १७. ६

**उपु ज्मन्नुपं वेतुसेऽवंतर नुदीष्वा।**





**अग्ने॑ पि॒त्तम॒पाम॑सि॒ मण्डू॑कि॒ ताभि॒रा ग॑हि॒ सेमं नो॑ य॒ज्ञं पा॑व॒कव॑र्णं शि॒वं कृ॑धि ॥६ ॥**

पदपाठः उप॑। ज्मन्। उप॑। वे॒त॒से। अव॑। त॒र॒। न॒दीषु॑। आ। अग्ने॑। पी॒त्तम्। अ॒पाम्। अ॒सी॒। मण्डू॑कि। ताभिः॑। आ। ग॒हि॒। सा। इ॒मम्। न॒ः। य॒ज्ञम्। पा॒व॒कव॑र्ण॒मिति॑ पाव॒कऽव॑र्णम्। शि॒वम्। कृ॒धि॒ ॥६ ॥

भावार्थः संसारको नियमित सञ्चालन प्रकृतिको दिव्य योजना मुताबिक हिमालहरू वाट जमिन र पानी हुँदै नदी र पानीको किनारमा फस्टाउने औषधीय र आध्यात्मिक क्षमताका वेतस बिरुवाहरू (जस्तै सोम, तुलसी, गाँजा लगायतका जडीबुटी)








मार्फत हामी सम्म प्रकृतिमैत्री मरुत जस्ता शक्तिशाली ऊर्जाहरू आइपुग्ने गर्दछ। भ्यागुता जस्तो जमिन र पानी दुबैमा रहन सक्ने यस्ता सूक्ष्म जीव तथा सूक्ष्म कण अग्नि ऊर्जाको समेत उपयोग मार्फत नियमित वर्षा गराउने, उर्वरता निर्माण गर्ने र प्रकृतिमा पर्यावरण रजीवन चक्रको सन्तुलन कायम गर्ने गर्दछन्। अत्यन्त दुरगामी महत्वको यस्ता प्राकृतिक तत्त्वहरू मार्फत पृथ्वी, वायु मण्डल, पानी र जीवको उर्वरता र नियमित अस्तित्व कायम राख्ने प्रकृतिको दिव्य योजना पुरा हुने गर्दछ। वास्तविक समयमा (On real time) प्रकृतिले यसरी आफ्नो सम्पूर्ण कर्तव्यहरू अविचल रहेर पूरा गर्ने गर्दछ। जुन अत्यन्त पवित्र र मङ्गलमय यज्ञहरू मार्फत सम्पन्न हुने गर्दछ। जसले गर्दा सबैको हित











र अस्तित्व सुरक्षाको सुनिश्चित गर्दै रूपान्तरणको पवित्र शक्तिबाट प्रकृतिले सबैको कल्याण गर्ने सुन्दर उद्देश्य पुरा गर्दछ।

शब्दअर्थ: उपुज्मन्नुपं वेतुसेऽवंतर नुदीष्वा उप (Upa)– आफ्नै नजिक सामुन्नेमा (हिमालको सार तत्वको रूपमा मरुतहरुको सन्दर्भ जोडेर कुरा हुँदै )

ज्मन्न (Jmann) – उत्पत्तिहुने, जन्मिने, उदाउने र निश्चित रूप लिने

उप (Upa)– र त्यसको साथमा

वेतसे (Vetase)– पानीको वरपर तथा नदी किनारमा सहज उम्रने औषधीय तथा आध्यात्मिकक्षमताको वेतस वृक्ष (सोम रस दिने विरुवा, तुलसी वृक्ष, अमृत विरुवा, गाँजा जस्ता













औषधीय आयुर्वेदिक विरुवा, लेउ, झ्याउआदि)

अवत (Avata) – त्योस्थानमा उपलब्ध हुने गर्दछ

नदीष्व (Nadeeshu)– नदीहरू भित्र (पानी भित्रको जमिन, पानी भित्र र पानीकोमाथि समेत सर्वत्र)

अग्नेंपीुत्तमुपामंसी

अग्ने (Agne)– अग्नि शक्ति

पित्तम (Pittam) – राप र ताप भएको अत्यन्त शक्तिशाली ऊर्जा शक्तिको गुण युक्त

अपाम (Apam) – पानीजस्तै तरल पदार्थको गुणको

असि (Asi) – अस्तित्वमारहेको भेटिने









मण्डूंकि॒ताभि॒रागंहि

मण्डूकि (Manduki)– वर्षा गराउने र पृथ्वीमा उर्वरता दिने भ्यागुताहरू जस्तै जमिन र पानीमादुबैमा रहने क्षमताको जलचर प्राणी

ताभि (Tabhi) – जसकोप्रयोग गरेर

रागहि (Ragahi) –प्रकृतिले यो काम सम्पन्न गर्ने आफ्नो योजना अघि बढाउने गर्दछ

सेमं नोंयु॒ज्ञं पांव॒कवंर्णः

सेमं (Semam) – वास्तविकसमयमा (On real time ) यही र यस्तै

नो (No) – हामीहरूको

यज्ञं (Yajnam) –प्रकृतिले आफूले पालन गर्नु









पर्ने धर्मको रित

पावकवर्णं (Pavaka-varnam)– सुन्दर, पवित्र तथा उत्तम रूपमा सम्पन्न गर्दछ

शि॒वंकृधि

शिवं (Shivam) –सबैको लागि हितकारी पवित्र धार्मिक सत्कर्म

कृधि (Kridhhi)– रूपान्तरणको विधि मार्फत सम्पन्न हुने गर्दछ

शुक्ल यजुर्वेद मन्त्र १७. ७

**अ॒पामि॒दं न्यय॑नः समु॒द्रस्य॑ नि॒वेश॑नम् ।**

**अ॒न्याँस्ते॑ऽअ॒स्मत्त॑पन्तु हे॒तयः॑ पाव॒कोऽअ॒स्मभ्य॑ः**

**शि॒वोभ॑व ॥७ ॥**










पदपाठः अपाम् । इदम् । न्ययंनमितिं निऽअयंनम् । समुद्रस्यं ।निवेशंनमितिं निऽवेशंनम् । अन्यान् । ते । अस्मत् । तपन्तु । हेतयः ।पावकः । अस्मभ्यंम् । शिवः । भव ॥७ ॥

भावार्थ: पहाडबाट समुद्रतर्फ जमिन मार्फत बग्ने क्रममा निर्माण हुनेछिप-छिपे पानी (Wetland) जस्ता क्षेत्रमा निवास गर्ने कल्याणकारी शिवको सेना समान तपाईँ सूक्ष्म जीव तथा परा कण रुपी मरुतगण, र कोमल चमक वा उज्यालो भएको (भर्गो ज्योति युक्त) तेजस्वी प्रकाशको किरण उत्पन्न गर्ने अग्निको सह-कार्यमा आगो हुरी मार्फत हुने आगजनी आदि कारणले हुने जलन र पोल्ने कार्य, तथा त्यहाँ रहेका रोगाणु र विषाणुहरू बाट हुने जैविक हानि, पीडा, र जलन जस्ता हानिकारक













गुणको निर्मलीकरण गरी, हामीलाई प्राकृतिक सुरक्षा कवच रूपी हतियारको रूपमा सक्रिय रहँदै सुरक्षाको प्रत्याभूति दिने कार्य गर्छन् ।

शब्द अर्थ: अपाम् (apām)- of waters पानीहरूको; इदं (idam) - this यो; न्ययनम् (nyayanam) - guidance, channel मार्गनिर्देशन, मार्ग (WetLand); समुद्रस्य (samudrasya) – toward the ocean समुद्रतर्फको; निवेशनम् (niveśanam) residence, dwelling, Wet Land बासस्थानरुपी छिप-छिपे पानी रुपी जमिन; अन्यान् (anyān)– others अरू; ते (te) – your तपाइँहरुको; अस्मत् (asmat)– to us हामी लाई; तपन्तु (tapantu) may









they burn, torment, inactivation from theirharmful properties पोल्ने, जलन गर्ने, जैविक हानी र पिडा आदि दिने जस्ता हानिकारक गुण निर्मलीकरण गरि सुरक्षाको प्रत्याभूति दिने; हेतयः (hetayaḥ) naturally build weapons and causes of protection प्राकृतिक सुरक्षा कवच रुपी हतियारहरू; पावकः (pāvakaḥ) Fire आगो as the purifier पवित्र गर्ने, Radiant तेजस्वी प्रकाशकोकिरण उत्पन्न गर्ने, Lustrous कोमल चमक वा उज्यालो भएको, Bright चम्किरहेको; अस्मभ्यं (asmabhyam) - On Behalf of to us, तर्फ वाट हामीलाई; शिवः (śivaḥ) कल्याणकारी शिवको(अर्थ - तपाइँ सूक्ष्म जीव तथा









परा कण रुपी मरुतगण तर्फ संकेत भएको); भव (bhava) - be हुनु हुन्छ।

व्याख्या: पहाडबाट समुद्रतर्फ जमिनको माध्यमबाट बग्ने क्रममा, विभिन्न छिप-छिपे पानी (जस्तै: दलदल, नदी किनाराका आद्रभूमि) निर्माण हुन्छन्। यी छिप-छिपे पानीमा रहने जीवहरू, जस्तै सूक्ष्म जीव र पराकण, मरुतगण (हावाका देवता) का प्रतिनिधि हुन्, जसले वातावरण लाई सफा र शुद्ध राख्न महत्त्वपूर्ण भूमिका खेल्छन्।

उदाहरणका लागि, जब पहाडको हिउँ पग्लेर तलतिर बग्छ, त्यो पानीले जमिनको विभिन्न तहमा पुगेर छिप-छिपे पानी क्षेत्र बनाउँछ। यस क्षेत्रमा, सूक्ष्म जीवहरू, जस्तै ब्याक्टेरिया र फङ्गस, पानीमा रहेका हानिकारक रासायनिक पदार्थहरूलाई






तोडफोड गरी वातावरणलाई शुद्ध राख्छन्।

यस्तै, पानी ज्वरो पैदा गर्ने जल, अर्थात् प्रदूषित पानीलाई पनि शुद्ध पार्न, पानीमा जीवन गुजारा गर्ने जलचर, जीव तथा वनस्पतिले नियमित रूपमा शुद्धीकरण गरिरहेका हुन्छन्। जब यो पानी ओसिलो जमिनको क्षेत्र (Wetland) छिचोलेर जमिन भित्र भित्र बग्न थाल्छ, तब त्यसमा जम्मा भएका वा घुलेका प्रदूषकहरू विभिन्न भौतिक, रासायनिक, र जैविक प्रक्रियाहरू जस्तै थिग्रने, अवशोषण हुने, नाइट्रिफिकेशन हुनुका साथै भिजेको ढाप जस्ता ओसिला जमिनमा उम्रने बोट बिरुवाले विषादी निर्मलीकरण गर्ने क्षमताद्वारा हटाएर शुद्ध पारिदिन्छन्।

अर्को उदाहरणका रूपमा, अग्निको सहकार्यमा हुने








प्राकृतिक प्रक्रिया, जस्तै आगो हुरी (fire whirl) मार्फतहुने आगलागी, वातावरणमा रहेका रोगाणु र विषाणुहरू लाई नष्ट गर्छ। यसरी, आगोले उत्पन्न गरेको तेजस्वी प्रकाशको किरण (जस्तो कि सूर्यको प्रकाशले पातको माथिल्लो सतहलाई सुकाएर कीटाणुहरू मर्दा) मार्फत, हानिकारक तत्वहरूको निर्मलीकरण (शुद्धीकरण) गर्छ।

त्यसरी, यी प्राकृतिक प्रक्रियाहरूले हाम्रो वातावरणलाई सफा र स्वस्थराख्छन्। ओसिला जमिनमा उम्रने सूक्ष्म वनस्पतिहरूले ठूला वनस्पतिका लागि उर्वर हुने वातावरण बनाउने काम पनि गर्छन्, जसले गर्दा बालीको उत्पादन बढ्न मद्दत गर्छ।

यस प्रक्रिया मार्फत, यी जीवहरू र तत्वहरू हाम्रो










प्राकृतिक सुरक्षा कवचको रूपमा कार्य गर्छन्। उदाहरणका लागि, सूक्ष्म जीवहरूले माटोमा विषाक्त तत्वहरूको मात्रा घटाउँछन्, जसले बालीको उत्पादन बढ्नमद्दत गर्छ। त्यस्तै, मरुत गणले हावामा भएका प्रदूषकलाई हटाउँछन्, जसले गर्दा हामी शुद्धहावा सास फेर्न सक्छौं।

यसरी, यी सूक्ष्म जीवहरू, वनस्पतिहरू, र प्राकृतिक तत्वहरू हामीलाई सुरक्षाको प्रत्याभूति दिन सक्रियरूपले काम गर्छन्, जस्तै कि कल्याणकारी शिवका सेना जसले पृथ्वीको सुरक्षा गर्छन्। वातावरणको संरक्षण र शुद्धता कायम राख्न यी सबै प्रक्रियाहरू अत्यन्त महत्वपूर्ण छन्।

वैदिक परम्परामा कम्तीमा १८० मरुत पहिचान क्वान्टम फिजिक्स र मेटा फिजिक्सको दृष्टि वाट













वेदमा भएको मरुत शक्ति निकै चाख लाग्दो देखिन्छ। सनातन ज्ञानको गहिराइ बारेको केही अन्दाज तपाईँलाई मरुत शक्ति को ज्ञानले दिने छ। हाम्रो शरीरको कुरा गर्दा शरीर र मस्तिष्कको सम्बन्ध बारे बुझ्नु पर्ने हुन्छ। शरीर एउटा मिसिनको भूमिकामा हुँदै गर्दा मस्तिष्क त्यसको इन्जिनको भूमिकामा हुने गर्दछ। इन्जिन ठिक भए मात्र तपाइको यत्र यानेकि मिसिन राम्रो चल्दछ। तर त्यो इन्जिन चल्नको लागि तपाईँलाई इन्धन चाहिन्छ।

न्युरो साइन्सको हिसाबमा त्यो इन्धन भनेको डोपामिन हो। तपाइको मनमा प्रेम जगाउने करुणा जगाउने केमिकल। जब तपाई कुनै कर्म गर्नु हुन्छ र त्यो कर्ममा तपाइको ध्यान पुरा लागिरहेको छ











भने तपाईँलाई विगतको बारे सोच्ने र चिन्तित हुने स्थिति (डिप्रेसन) पनि हुँदैन। भविष्यको असुरक्षाको चिन्ता (एनजाइटि) पानी आउँदैन। तपाईँको कर्म आनन्द संग चलेको हुन्छ। किनकि तपाइको दिमागले त्यति बेला त्यहाँ डोपामिन बनाइ रहेको हुन्छ। त्यो तपाइको कर्म बापतको पुरस्कारको रूपमा हुन्छ। तपाइको इन्जिन आनन्द नयाँ जस्तै चलेको अनुभूति हुन्छ।

जसरी इन्धन नभएर मिसिन चल्दैन त्यस्तै उचित डोपामिन बिना तपाई केही गर्न सक्नु हुन्न। काममा न त ध्यान हुन्छ। काम गर्न खोज्दा पनि तपाईँलाई बेचैनी आउँछ। तपाइको शरीरमा डोपामिन धरै भयो भने पनि तपाइले काममा फोकस भएर आफ्नो कर्म पुरा गर्न सक्नु हुन्न। काम सक्ने हतारो र













हतासो मनस्थितिले काम बिग्रन्छ। त्यो बेला तपाइको अधिक भएको डोपामिन लाई नियन्त्रण गर्नु पर्ने हुन्छ।

तपाइको दिमागमा अधिक डोपामिन लाई नियन्त्रण गर्ने काम अर्को केमिकल सेराटोनिनले गर्ने गर्दछ। सेराटोनिनले तपाइको मिसिन इन्जिनमा जरुरत अनुरूप इन्धन दिएर तपाइलाई नियन्त्रित कर्म गर्न सहयोग गर्छ। यदि तपाइमा सेराटोनिनको कमी भयो भने तपाई तपाइको मन जे मा गइरहेको छ त्यसैमा अत्यधिक लगाव विकास भएर त्यो बिना जिउनै नसक्ने जस्तो बेचैनी हुने र त्यसैको एडिक्सन विकास गरि दिन्छ। तपाई अत्यन्त भद्दा र जङ्गली बन्नु हुन्छ।











तपाई अत्यन्त बेचैनी हुने स्थिति आउँदा तपाइको त्यो बेचैनी गतिलाई इमर्जेन्सी ब्रेक लगाउने र रोक्ने काम तपाइको दिमागमा रहेको गाबा र अमिगडेला जस्ता मस्तिकका न्युरोनहरुले मिलेर तपाइमा तत्काल डर उत्पन्न गर्दछ। त्यसलाई प्यानिक अट्याक भन्ने गरिन्छ। जसले गर्दा तपाइको ध्यान अन्यत्र जान्छ।

त्यो बाहेक अक्सिटोसिन, कोर्टिसोल, र टेस्टोस्टेरोन हर्मोनहरूले हाम्रो शरीरका भावनात्मक, शारीरिक र प्रजनन स्वास्थ्यमा ठुलो भूमिका खेलेको भेटिन्छ।

हाइपोथालामससमा उत्पादन हुने हुन्छ र पिट्यूटरी ग्रन्थिबाट बाहिर निस्कने अक्सिटोसिनले सामाजिक सम्बन्ध, आपसी विश्वास जगाउने, सुत्केरी हुन् सहयोग गर्ने र स्तनपान लाई सहज पार्दछ। एड्रिनल













ग्रन्थिबाट उत्पादन तनावको वेला तनाव नियन्त्रण गर्न पैदा हुने कोर्टिसोलले शरीरको मेटाबोलिज्म, रगतमा चिनीको मात्रा, रोग प्रतिरोधात्मक क्षमता तथा जलनको नियन्त्रण गर्छ।

पुरुषको अण्डकोष र नारीको डिम्बाशयमा बन्ने टेस्टोस्टेरोन कामेच्छा लाई प्रोत्साहन गर्ने, मांसपेशीको वृद्धि गर्ने यौन तागत बढाउने काम गर्दछ। हाम्रो शरीरका हर्मोनहरूले शरीरमा गर्ने व्यवहारको लागि तिनीहरूलाई नियमित ऊर्जा चाहिन्छ।

हाम्रो शरीरमा जम्मा नौ वटा दुलाहरू हुन्छन्। ती दुलाहरू शरीरको प्रकृति संग फरक फरक सम्पर्क स्थापना गर्ने केन्द्रको रूपमा काम गर्दछ।











हामीले खाने खाना, लिने हावा, सोच्ने सोचले दिने आत्मा बल आदिले मात्र नभएर प्रकृति वाट तिनै नौ दुला केन्द्रित फरक फरक प्रकृतिको नव दुर्गा रुपी नौ शक्ति शरीरले नियमित प्राप्त गर्दछ। दुवै सूक्ष्म जीव र सूक्ष्म अणु निर्मित त्यो शक्ति नौको समूहमा एकत्रित भएको फरक फरक सेनाको रूपमा हुन्छ। जसलाई वेदमा मरुत गण भनिएको छ।

तिनै मरुत गण प्रकृतिको प्रतिनिधिको रूपमा शरीर लाई नियमित रूपमा जीवित राख्न सक्रिय हुने गर्दछ। यिनीहरू को काम शरीरको इन्जिन र इन्जिनको इन्धन तथा अन्य पाट पुर्जा रुपी इन्जाइम, हार्मोन र प्रतिरक्षा प्रणालीहरू अग्नि अर्थात् उपयुक्त ऊर्जाको साथमा स्वतन्त्र रहेर काम गर्दै गर्दा आउने













अवरोध लाई हटाउने र स्वतन्त्र काम गर्न दिने सेनाको भूमिका खेल्नु रहेको कुरा वेदमा उल्लेख छ।

जसको गहिरो ज्ञान राख्न सक्दा यसले स्नायु प्रणाली, मनोविज्ञान र आर्टिफिसियल इन्टेलीजेंसको क्षेत्रमा काम गर्न ठुलो सहयोग पुऱ्याउने छ।

वैदिक परम्पराका वैदिक ज्ञानमा कम्तीमा १८० मरुत पहिचान भएको छ। हरेक मरुत भनेको ९ फरक फरक देवी शक्ति फरक फरक रेसियोमा मिलेर बनेको एउटा गण रहेको वेदको भनाइ छ। त्यसको अर्थ हावा र बाष्प रूपको सवटल शक्ति। जुन हाम्रो शरीर लाई नियमित प्रकृति मैत्री गरेर चलाउन सक्रिय छ। शिवको रुद्र शक्तिको रुद्र सेनाको रूपमा तसर्थ कम्तीमा १८० X ९ पारा







सूक्ष्म शक्ति वाट हामी नियमित जीवित रहेको वेदको भनाइ छ।

मानिसलाई आनन्दमा लान नदिने कुरो हाम्रो मनको डर हो। भय हो। असुरक्षा हो। असुरक्षाको डर। खान नपाए मारिने डर। सान देखाउन नपाए साथी भाइको हेलत्वमा परिने डर। मरिएला भन्ने डर। समस्या पर्ला भन्ने डर। रोग, भोक, आवास र क्रीडा पाइन्न कि भन्ने डर। आफन्त मर्लान् भन्ने डर। आफन्तले नै मार्लान् भन्ने डर। सबै तिर डर। समग्रमा शरीरमा डरको नियन्त्रण गर्ने कोर सिद्धान्त वाट मस्तिष्कको फाउन्डेसनको ईनर इञ्जिनियरिङ्ग भएको कुरा वेदले मान्दछ। आधुनिक न्युरो साइन्सको पनि अव त्यही अवधारणा बनेको छ। मस्तिष्कलाई इन्द्र भनिँदै गर्दा, डरको नियन्त्रण पनि








गर्ने, उत्पादन पनि गर्ने शक्ति रुद्र-शिव भनेको छ।

प्राकृतिक नियम सङ्गत विरुद्ध काम गर्ने तागत लाई कारबाही गरेरै लाइनमा ल्याउने काम गर्ने शिवको भूमिका लाई रुद्र भनेको छ। रुद्रको सहयोगी मरुत गण हो भन्दछ शास्त्र। जुन परा subtle शक्ति हो भनिएको छ।

विज्ञान क्वान्टम सम्म पुगेको छ। क्वान्टम पार्टिकल बन्ने शक्ति मरुत जस्तो देखिन्छ। मरुत विचार भन्दा ठुलो तर क्वान्टम पार्टिकल भन्दा सवटल सानो इनर्जीको पोको वा वेब मानिएको छ। न्युरो साइन्सका कतिपय कुराहरू यता छिटै पुग्न सक्छ। वैदिक ज्ञानमा पहिचान भएको १८० मरुत गणको नाम यसप्रकार छ।










प्राण, वायु, पवन, अनिल, मारुत, समीर, सूत, वात, अनील, वातव्रज, वायुवेग, श्वास, वातप्रवाह, पवनानन्द, हव, गन्धवह, वातप्रीत, अह्नस, चञ्चल, अक्षीय, धारानिल, धुलिधूम, मृदुस्पर्श, वीणालय, श्वासवाहक, प्रचण्डवायु, दर्शनानन्द, जलवायु, हविन्त्र, वातगति, हविक, महापवन, आकाशवाहक, पवनराज, वायुवीर, पुष्पवाहक, वायुपुत्र, वातवीर, मारुतानन्द, वातराज, हर्षवायु, गजवायु, कायवाय, तरंगवह, वायुदास, शीतवायु, आशुकेतु, मुक्तवायु, क्लेशहारी, ध्वजवाहक, जलमीत, संध्यावायु, गगनवायु, महारुद्र, अमृतवाहक, वातविक्रम, विराटवायु, भ्रमणशील, सत्यवायु, उद्धारवायु, भुजंगवात, वातायन, वायुपालक, सत्यप्रकाश, आकाशवर्मा, तरलप्राण,













सुषमा, मुक्तसञ्चार, त्रिवेणीवायु, शब्दवाहक, उर्जावाय, ध्वनिप्रवाह, वातरण, महावाय, गौरववायु, अनिलानन्द, अश्वगति, अशोकवात, गजगामी, वीरमारुत, सौरवायु, अनुपमवायु, महासागरवायु, वातचेतन, मुक्तिदायक, वायुस्पर्श, जलमारुत, हवपुष्प, संध्यावात, महाधारक, तरलध्वनि, ब्रह्मवायु, निश्चलवायु, प्रकाशवाहक, वातपुरुष, सर्ववायु, वायुगति, महाकाश, वायुज्योति, हविधर, अमृतप्रवाह, प्रलयवायु, वातानन्द, गजप्रवाह, महासंचारी, तरलवायु, वीरमारुत, अग्निवात, वीरवाहक, अमृतवाहक, वायुगामी, गङ्गावायु, तरलवात, जलमारुत, वीरतरंग, वायुधारक, उदारवायु, वातदेव, अनुपमवात, शीतमारुत, मुक्तमारुत, सद्गति,











वीरवात, तरलगति, शीतपवन, वायुपाल, वायुसेन, मुक्तप्रवाह, जलवाय, वातविनाशक, अग्निप्रवाह, महातेजस, सूर्यवायु, वायुपुष्प, मुक्तवात, वीरचेतन, सप्तप्रवाह, तरलप्रवाह, महाशक्तिवात, धवलवायु, वातमुक्त, उत्तमवात, महाव्यक्त, अनिलमुक्ति, अशोकप्राण, गुह्यवायु, वातमूर्त, वायुधिर, महाश्वास, शीतप्रवाह, अतिवायु, वातचेतन, गुरुश्वास, सूर्यमारुत, अग्निमारुत, वातेश्वर, पवनवीर, अनिलेश, महाभुजंग, उत्तममारुत, शिखामारुत, जलपुष्प, वायुपुष्प, उत्तमारुत, मुक्तधारक, वीरभ्रमण, वायुधर, अनिलमुक्त, प्रचण्डवात, अनुपमप्रवाह, वाततुल्य, शीतवीर, वायुशक्ति, वायुप्राण, जलवीर, सत्यमारुत, महादेववायु, प्राणवाहक, उत्तमप्राण, महावातप्रवाह।













प्रकृतिको विविधतामा आध्यात्मिक शक्ति र ऊर्जा प्रवाहित गरिरहेका मरुतहरू प्राकृतिक शक्तिहरूसँग सम्बन्धित विभिन्न गुणहरूको प्रतिनिधित्व गर्छन्। वेदमा उल्लेख गरिए अनुसार वायुमण्डलका शक्तिशाली देवता रूपमा मरुतहरु प्रायः रुद्र र अग्नि सँग निकट रहेर वायु देवताको भूमिकामा रहन्छन्। फरक फरक सन्दर्भमा फरक फरक नाममा उल्लेखित भएको भेटिने गर्दछ।

१८० मरुतगणका नामहरू र तिनका नेपालीमा अर्थ यस प्रकारको भेटिन्छ।

प्राण - जीवनशक्ति

वायु - हावा

पवन - शुद्ध हावा











अनिल - शान्त हावा

मारुत - पवनका पुत्र

समीर - चञ्चल हावा

सूत - चराचरमा सञ्चार हुने हावा

वात - हावाको प्रवाह

अनील - बलियो हावा

वातव्रज - शक्तिशाली हावाको समूह

वायुवेग - वायुप्रवाहको गति

श्वास - श्वासप्रश्वास

वातप्रवाह - वायुप्रवाह

पवनानन्द - पवनबाट आनन्द प्राप्त गर्ने













हव - यज्ञमा चढाइएको वायु

गन्धवह - सुवासित वायु

वातप्रीत - वातको प्रेमी

अह्नस - दिनभर चल्ने वायु

चञ्चल - चञ्चल हावा

अक्षीय - अनन्त हावा

धारानिल - धैर्यशाली वायु

धुलिधूम - धूलो र धुवाँले भरिएको हावा

मृदुस्पर्श - कोमल हावाको स्पर्श

वीणालय - संगीतमा समाहित हावा

श्वासवाहक - श्वासको वहन गर्ने











प्रचण्डवायु - अत्यन्त तीव्र वायु

दर्शनानन्द - देख्दा नै आनन्द प्राप्त हुने वायु

जलवायु - पानीको वायु

हविन्त्र - यज्ञको वायु

वातगति - वायुको गति

हविक - यज्ञ गर्ने वायु

महापवन - महान हावा

आकाशवाहक - आकाशमा चल्ने वायु

पवनराज - पवनका राजा

वायुवीर - वायुमण्डलका वीर

पुष्पवाहक - फूलहरूको सुवास बोक्ने वायु













वायुपुत्र - वायुपुत्र हनुमान

वातवीर - वातको वीर योद्धा

मारुतानन्द - मारुतबाट आनन्द पाउने

वातराज - वायुप्रवाहका राजा

हर्षवायु - खुशी दिने हावा

गजवायु - हात्तीको चाल जस्तै हावा

कायवाय - शरीरमा सञ्चार हुने वायु

तरंगवह - तरङ्गलाई बोकेर ल्याउने वायु

वायुदास - वायुसँगको सेवक

शीतवायु - चिसो हावा

आशुकेतु - तीव्र गतिमा चल्ने







मुक्तवायु - स्वतन्त्र वायु

क्लेशहारी - पीडाबाट मुक्ति दिने हावा

ध्वजवाहक - ध्वज बोकेको वायु

जलमीत - जलसँग मित्रता गर्ने वायु

संध्यावायु - साँझको वायु

गगनवायु - आकाशमा बहने वायु

महारुद्र - महान रुद्र

अमृतवाहक - अमृत ल्याउने वायु

वातविक्रम - बलियो वायु

विराटवायु - विशाल वायु

भ्रमणशील - घुमिरहने वायु











सत्यवायु - सत्यको प्रतीक वायु

उद्धारवायु - मुक्ति दिने वायु

भुजंगवात - सर्पको चालजस्तो वायु

वातायन - वातको स्थान

वायुपालक - वायुको रक्षा गर्ने

सत्यप्रकाश - सत्यको प्रकाश दिने वायु

आकाशवर्मा - आकाशमा चल्ने वायु

तरलप्राण - तरल जीवनशक्ति

सुषमा - सजीवता दिने वायु

मुक्तसञ्चार - स्वतन्त्र चल्ने वायु

त्रिवेणीवायु - त्रिवेणीको संगममा चल्ने वायु











शब्दवाहक - ध्वनि बोक्ने वायु

उर्जावाय - ऊर्जा दिने वायु

ध्वनिप्रवाह - ध्वनिको प्रवाह गर्ने

वातारण - वातको स्रोत

महावाय - महान वायु

गौरववायु - गर्व दिनेम वायु

अनिलानन्द - आनन्द दिने वायु

अश्वगति - घोडाजस्तो तीव्र गतिमा चल्ने

अशोकवात - अशोकको प्रसन्नताले चल्ने वायु

गजगामी - हात्तीको चालजस्तो चल्ने वायु

वीरमारुत - वीरताका प्रतीक मरुत













सौरवायु - सूर्यको शक्ति बोक्ने वायु

अनुपमवायु - अनुपम, अतुलनीय वायु

महासागरवायु - महासागरको वायु

वातचेतन - वायुले सजग गराउने

मुक्तिदायक - मुक्ति दिने वायु

वायुस्पर्श - वायुको स्पर्श

जलमारुत - पानी र वायुमण्डलको मिलन

हवपुष्प - पुष्पजस्तो हावा

संध्यावात - साँझको वायुप्रवाह

महाधारक - महान धारण गर्ने वायु

तरलध्वनि - तरल ध्वनि ल्याउने वायु









ब्रह्मवायु - ब्रह्मसँग सम्बन्धित वायु

निश्चलवायु - स्थिर वायु

प्रकाशवाहक - प्रकाश बोक्ने वायु

वातपुरुष - वायुलाई मानवीय स्वरूप दिने

सर्ववायु - सम्पूर्ण वायुमण्डलको प्रतीक

वायुगति - वायुको गति

महाकाश - विशाल आकाशको वायु

वायुज्योति - वायुसँगको प्रकाश

हविधर - हवको धारक वायु

अमृतप्रवाह - अमृतको प्रवाह

प्रलयवायु - प्रलय ल्याउने वायु










वातानन्द - वातबाट प्राप्त आनन्द

गजप्रवाह - हात्तीको प्रवाह जस्तो वायु

महासंचारी - महान रूपले सञ्चार हुने वायु

तरलवायु - तरलता ल्याउने वायु

वीरमारुत - वीर मरुत

अग्निवात - आगो जस्तो तीव्र हावा

वीरवाहक - वीरलाई बोक्ने वायु

अमृतवाहक - अमृत बोक्ने वायु

वायुगामी - वायु जस्तो गति भएको

गङ्गावायु - गंगा नदीको वायु

तरलवात - तरल वायु







जलमारुत - जलमार्गमा बहने वायु

वीरतरंग - वीर तरंग बोक्ने वायु

वायुधारक - वायु बोक्ने

उदारवायु - उदारताले भरिएको वायु

वातदेव - वातका देवता

अनुपमवात - अनुपम वात

शीतमारुत - चिसो मरुत

मुक्तमारुत - स्वतन्त्र मरुत

सद्गति - सही मार्ग दिने वायु

वीरवात - वीर वायु

तरलगति - तरल गतिमा चल्ने वायु










शीतपवन - चिसो हावा

वायुपाल - वायुपालक

वायुसेन - वायुको सेना

मुक्तप्रवाह - स्वतन्त्र प्रवाह

जलवाय - पानीसँग मिलेको वायु

वातविनाशक - वातलाई नाश गर्ने

अग्निप्रवाह - आगोको प्रवाह गर्ने वायु

महातेजस - महान तेजको वायु

सूर्यवायु - सूर्यको शक्ति बोक्ने वायु

वायुपुष्प - वायुपुष्प

मुक्तवात - स्वतन्त्र वात







वीरचेतन - वीरता जागृत गर्ने वायु

सप्तप्रवाह - सात प्रवाह भएको वायु

तरलप्रवाह - तरल प्रवाह भएको वायु

महाशक्तिवात - महान शक्ति सम्पन्न वायु

धवलवायु - शुद्ध र उज्यालो वायु

वातमुक्त - वातबाट मुक्त भएको

उत्तमवात - उत्कृष्ट वायु

महाव्यक्त - महान रूपमा प्रकट वायु

अनिलमुक्ति - अनिलबाट प्राप्त मुक्ति

अशोकप्राण - अशोकको जीवन शक्ति

गुह्यवायु - गोप्य वायु











वातमूर्त - वातको रूप

वायुधिर - वायुको धारण गर्ने

महाश्वास - महान श्वास

शीतप्रवाह - चिसो प्रवाह

अतिवायु - अत्यधिक वायु

वातचेतन - वातबाट चेतना प्राप्त गर्ने

गुरुश्वास - गुरुजस्तो श्वासप्रश्वास

सूर्यमारुत - सूर्यबाट प्रेरित मरुत

अग्निमारुत - अग्निजस्तो मरुत

वातेश्वर - वातका ईश्वर

पवनवीर - पवनका वीर










अनिलेश - अनिलका अधिपति

महाभुजंग - विशाल सर्पको चालमा चल्ने वायु

उत्तममारुत - उत्कृष्ट मरुत

शिखामारुत - शिखरमा चल्ने मरुत

जलपुष्प - जलसँग फुलेको पुष्प

वायुपुष्प - वायुको पुष्प

उत्तमारुत - उत्कृष्ट मरुत

मुक्तधारक - स्वतन्त्र धारण गर्ने वायु

वीरभ्रमण - वीरताका साथ घुम्ने वायु

वायुधर - वायुलाई धारण गर्ने

अनिलमुक्त - अनिलबाट मुक्त












प्रचण्डवात - अत्यन्त शक्तिशाली वात

अनुपमप्रवाह - अनुपम प्रवाह भएको

वाततुल्य - वातजस्तै

शीतवीर - चिसो हावाका वीर

वायुशक्ति - वायुको शक्ति

वायुप्राण - वायुबाट प्राप्त प्राणशक्ति

जलवीर - पानीका वीर

सत्यमारुत - सत्यको मरुत

महादेववायु - महादेवसँग सम्बन्धित वायु

प्राणवाहक - प्राण बोक्ने वायु

उत्तमप्राण - उत्कृष्ट प्राणशक्ति









महावातप्रवाह - महान वायुप्रवाह

प्राचीन वैदिक दर्शनमा महत्वपूर्ण स्थान राख्ने यी सबै नामहरूले हावा, वायुप्रवाह र जीवनशक्तिका विभिन्न पक्षहरूको वर्णन गर्छन्। वेदमा आधारित कथा लेख्ने क्रममा तुलसीदासले सुन्दरकाण्डमा बनमा बस्ने वानर प्रजातिका मानव हनुमानलाई वायुदेवले आफ्नो कम्तिमा १८० मरुत गणमध्ये ४९ मरुतहरूको गणसहितको अद्भुत शक्ति प्रदान गरेका कारण हनुमान वायुपुत्र भनेर चिनिने कुरा प्रष्ट गरे। सुन्दरकाण्डमा तुलसीदासले लेखेका छन्:

**हरि प्रेरित तेहि अवसर चले मरुत उनचास।।**

**अट्टहास करि गर्जा कपि बढ़ि लाग**









**अकाश।।२५।।**

त्यतिखेर हरि भगवानको प्रेरणाले उनन-पचास तिष्ण वायु सक्रिय वने।

हनुमानजी ! हाँ सो र गर्जन सहित आकाशमा विचरण गरे (उडे)। जब हनुमानको पुच्छरमा आगो लगाइयो, भगवान विष्णु (पवित्र आत्मा हरि) बाट उपयुक्त समयमा उपयुक्त अवसरको उत्तम उपयोग गर्न प्राप्त प्रेरणालाई शिरोधार्य गर्दै ४९ गण मरुतहरू एकाएक सक्रिय भए। त्यही क्षण हनुमानले ठूलो आवाजमा गर्जिंदै आकाशमा सल्बलाउन थाले। त्यसपछि, लंकाको हरेक घरको छानामा उफ्रिँदै आगो लगाउँदै, सारा सहर सकेपछि पानीमा छिरेर पुच्छरको आगो निभाए। रावणको तेल, रावणको कपडाको झुम्रोले रावणकै सहर जलाए । रावणकै






नदीले पुच्छरको आगो निभाएर सकुशल सीता माताको हालचाल बुझेर, सीता मातालाई सन्देश दिएर, रावणलाई युद्धको मिठो सुपारी दिएर सकुशल रामको पास फर्किएको कथा छ।

वास्तवमा वायु धेरै प्रकारका हुन्छन्। वेदको प्रमुख ७ शाखामा कम्तिमा १८० मरुत गणको विस्तृत वर्णन छ। जल (पानी र तरल वस्तु) भित्रको हावाको फरक नाम, आकाशको हावाको फरक नाम र तिनीहरूको छुट्टै महत्व रहेको उल्लेख छ। यसरी अन्तरिक्ष (आकाश), जमिनको सतह, पानी र पाताल आदि स्थानमा रहेको हावाको गुण र व्यवहार फरक फरक रहेको व्याख्या छ। हनुमानलाई आफ्नै शारीरिक क्षमताका प्रवह (बग्ने वा प्रवाह गर्ने), आवह (पक्डेर साथमा ल्याउने),











उद्वह (माथि उठाउने), संवह (एउटा स्थानमा संकलन गर्ने), विवह (विभाजित गर्ने), परिवह (फन्को लगाएर घुमाउने, फैलाउने) र परावह (टाढा लगेर फाल्ने) गरी मुख्य ७ प्रकारका वायु शक्ति मरुतहरू प्राप्त भएका थिए।

समय र परिस्थिति अनुसार विशेष शक्तिको प्रयोग गर्न उनलाई ब्रह्मलोक, इन्द्रलोक, अन्तरिक्ष, भूलोकको पूर्व, पश्चिम, उत्तर र दक्षिण दिशामा स्थानअनुसारको अनन्त तागत विकास गर्न सक्षम ७ थरिका वायु शक्ति मरुत गणको व्यवस्था रहेको कुरा गरिएको छ। ती सबै सक्रिय हुँदा ७ गुणा ७ बराबर ४९ वायु शक्तिले हनुमान सुसज्जित रहेको

कुरा सुन्दर काण्डमा उल्लेख गरिएको छ। सुन्दर काण्डमा ४९ मरुत शक्ति सहितका हनुमानको चर्चा











गरिएको देखिन्छ, जसले गर्दा धेरै मानिसहरूमा मरुत देवता मात्र ४९ छन् भन्ने भ्रम पूर्ण विश्वास विकास भएको देखिन्छ।





॥ श्री गणेशाय नमः ॥

# वेदमा विज्ञान
## वैज्ञानिक समालोचना







नारायण घिमिरे